# अथ पञ्चपञ्चाशत्तमोऽध्यायः

## प्रद्युम्नको जन्म

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**कामस्तु वासुदेवांशो दग्धः प्राग् रुद्रमन्युना ।**
**देहोपपत्तये भूयस्तमेव प्रत्यपद्यत ॥ १ ॥**

**पदार्थ–**
**रुद्रमन्युना** = भगवान् रुद्रको क्रोधरूपी आगोद्वारा
**प्राक्** = पहिले
**दग्धः** = डढेका
**वासुदेवांशः** = भगवान् वासुदेवका अंश
**कामः तु** = कामदेवले त
**भूयः** = फेरि
**देहोपपत्तये** = शरीर प्राप्तिका लागि
**तम् एव** = वासुदेवकै अंश (प्रद्युम्न)मा नै
**प्रत्यपद्यत** = प्रवेश गरे

**वाक्यार्थ–** पहिले भगवान् रुद्रको क्रोधरूपी आगोद्वारा डढेर भस्म भएका कामदेव, जो भगवान् वासुदेवका अंश हुन्, उनले फेरि पनि शरीर प्राप्त गर्नका लागि भगवान् वासुदेवकै अंश प्रद्युम्नमा प्रवेश गरे।

**विवरण–** यस श्लोकमा भगवान् शङ्करको क्रोधरूपी आगोबाट पहिले डढेका कामदेव भगवान् श्रीकृष्णका पुत्र प्रद्युम्नको रूपमा जन्मिएको कुरा बताइएको छ।

दक्षप्रजापतिले आयोजना गरेको यज्ञमा सतीदेवीले यज्ञकुण्डमा हामफाली प्राणत्याग गरेपछि शिवका दूत वीरभद्र र भद्रकालीले दक्षको यज्ञ विध्वंश गरे। सतीदेवीको अवस्था देखेर भगवान् शङ्कर शोकविह्वल हुनुभयो र उहाँ सतीदेवीको मृत शरीर काँधमा राखी संसार भ्रमण गर्न थाल्नुभयो। सतीदेवीको शरीरका सबै अङ्ग पतन भएर समाप्त भएपछि भगवान् शङ्कर तपस्या गर्न बस्नुभयो। त्यस समयमा दैत्य तारकासुरले इन्द्र आदि देवताहरूलाई स्वर्गबाट लखेटी स्वर्गमा आफूले राज्य गर्न थाल्यो। तारकासुरले भगवान् ब्रह्माजीबाट पाँच वर्ष नाघेका कुनै पनि व्यक्तिले मार्न नसक्ने वरदान पाएको थियो। इन्द्र एवं अन्य देवताहरूले भगवान् शङ्कर र पार्वतीबाट जन्मिएका पुत्रले तारकासुरको वध गरी स्वर्गको राज्य फिर्ता गराइदेलान् भन्ने सल्लाह गरी भगवान् शङ्करलाई तपस्याबाट विरत गरी कामभावमा प्रवृत्त गराउनका लागि कामदेवलाई शङ्करसामु पठाए। जब कामदेवले भगवान् शङ्करको तपस्या भङ्ग गर्न भनी कामबाण उहाँलाई प्रहार गर्न लागेका थिए तब भगवान् शङ्करका तीनै नेत्रबाट आगोको ज्वाला निस्क्यो र कामदेव भस्म भए। कामदेव भस्म भएको देखी कामदेवकी पत्नी रतिले अनेक बिलौना र भगवान् शङ्करको स्तुति गरेपछि उहाँ प्रसन्न हुनुभयो र द्वापर युगको अन्त्यमा भगवान् श्रीकृष्णको पुत्र प्रद्युम्नको रूपमा यी कामदेव जन्मनेछन् र त्यही समयमा तिमी दुई स्त्रीपुरुषको भेट हुनेछ भनी रतिलाई भगवान् शङ्करले भन्नुभयो।

प्रद्युम्नको यो जन्म इन्द्र आदि देवताहरूले अनेक गोपहरूको रूपमा जन्म लिनु जस्तै भगवान्‌को रूप थियो। कामदेव भगवान्‌कै अंश या विभूतिरूप हुन्। भगवान्‌ले **प्रजनश्चास्मि कन्दर्पः** (श्रीमद्भगवद्‌गीता १०।२८) अर्थात् प्रजनन गर्नेहरूमध्ये म काम हुँ भन्नुभएको छ। सृष्टिचक्रको प्रवर्तन गर्नका लागि कामको अनिवार्य आवश्यकता पर्दछ। मनोविकारहरूमध्ये क्रोध, लोभ, मोह आदि कुनैलाई पनि देवताको रूपमा मानिँदैन तर कामलाई देवता मानिन्छ। यसबाट पनि कामको आवश्यकता एवं महत्त्व स्पष्ट हुन्छ। गीता (७।११)मा भगवान् भन्नुहुन्छ— **धर्माविरुद्धो भूतेषु कामोऽस्मि भरतर्षभ** अर्थात् धर्मसँग विरोध नहुने काम म हुँ। यसबाट धर्मानुकूल काम चाहिँ भगवान्‌कै विभूतिरूप हो भन्ने कुरा थाहा हुन्छ। धर्मानुकूल काम भनेको पति-पत्नीमा शास्त्रीय रीतिले सन्तान उत्पन्न गर्नका लागि हुने काम हो।

**स एव जातो वैदर्भ्यां कृष्णवीर्यसमुद्भवः।**
**प्रद्युम्न इति विख्यातः सर्वतोऽनवमः पितुः॥ २॥**

**पदार्थ—**
**सः एव** = ती कामदेव नै
**कृष्णवीर्यसमुद्भवः** = श्रीकृष्णको वीर्यबाट उत्पन्न भएर
**वैदर्भ्यां** = विदर्भपुत्री रुक्मिणीको गर्भबाट
**जातः** = जन्मिएका
**सर्वतः** = सबै दृष्टि (सौन्दर्य, बोलीचाली आदि)ले
**पितुः** = पिता श्रीकृष्णभन्दा
**अनवमः** = अन्यून (कम नभएका) भई
**प्रद्युम्नः इति** = प्रद्युम्नको नामले
**विख्यातः** = प्रसिद्ध भए

**वाक्यार्थ—** तिनै कामदेव भगवान् श्रीकृष्णको वीर्यद्वारा विदर्भपुत्री रुक्मिणीको गर्भबाट दोस्रो जन्म प्राप्त गरेर लोकमा प्रद्युम्नको नामले प्रसिद्ध भए। उनी सौन्दर्य, बोलीचाली आदि हरेक कुरामा आफ्ना पिता श्रीकृष्णभन्दा कम थिएनन्।

**तं शम्बरः कामरूपी हृत्वा तोकमनिर्दशम्।**
**स विदित्वात्मनः शत्रुं प्रास्योदन्वत्यगाद् गृहम्॥ ३॥**

**पदार्थ—**
**कामरूपी** = इच्छा अनुसार भेष बदल्न सक्ने
**सः** = त्यो
**शम्बरः** = शम्बरासुरले
**अनिर्दशम्** = दश दिन पनि नपुगेका
**तोकम्** = शिशु
**तं** = ती प्रद्युम्नलाई
**आत्मनः** = आफ्नो
**शत्रुं** = शत्रु
**विदित्वा** = ठानी
**हृत्वा** = हरण गरेर
**उदन्वति** = समुद्रमा
**प्रास्य** = फ्याँकेर
**गृहम्** = घर
**अगात्** = फर्कियो

**वाक्यार्थ—** इच्छा अनुसार भेष बदल्न सक्ने त्यस शम्बरासुरले दश दिन पनि नपुगेका ती प्रद्युम्नलाई आफ्नो शत्रु ठानेर सूतिकागृहबाटै अपहरण गऱ्यो र समुद्रमा लगेर फ्याँकिदियो र ऊ घर फर्कियो।

**तं निर्जगार बलवान् मीनः सोऽप्यपरैः सह ।**
**वृतो जालेन महता गृहीतो मत्स्यजीविभिः ॥ ४ ॥**

**पदार्थ—**
**बलवान्** = बलशाली
**मीनः** = माछाले
**तं** = ती (समुद्रमा फ्याँकिएका शिशु) प्रद्युम्नलाई
**निर्जगार** = निल्यो (त्यसपछि)
**मत्स्यजीविभिः** = माछा मारेर जीविका चलाउने माझीहरूद्वारा
**अपरैः सह** = अरू माछाहरू सँगै
**महता** = ठुलो
**जालेन** = जालद्वारा
**वृतः** = फसाइएको
**सः अपि** = त्यो माछो पनि
**गृहीतः** = समातियो

**वाक्यार्थ—** समुद्रमा फ्याँकिएका शिशु प्रद्युम्नलाई कुनै एउटा बलशाली माछाले निल्यो। माझीहरूले समुद्रमा माछा मार्न ठुलो जाल फ्याँक्दा त्यस जालमा अरू माछाहरूसहित त्यो माछो पनि फस्यो र माझीहरूद्वारा समातियो।

**तं शम्बराय कैवर्ता उपाजह्रुरुपायनम् ।**
**सूदा महानसं नीत्वावद्यन् स्वधितिनाद्भुतम् ॥ ५ ॥**

**पदार्थ—**
**कैवर्ताः** = माझीहरूले
**तं** = त्यो माछो
**शम्बराय** = शम्बरासुरलाई
**उपायनं** = उपहारको रूपमा
**उपाजह्रुः** = समर्पण गरे
**सूदाः** = भान्छेहरूले
**अद्भुतं** = त्यो अद्भुत माछोलाई
**महानसं** = भान्छा घरमा
**नीत्वा** = लगेर
**स्वधितिना** = बन्चरोले
**अवद्यन्** = काटे

**वाक्यार्थ—** माझीहरूले त्यो माछो उपहारको रूपमा शम्बरासुरलाई चढाए। त्यसपछि शम्बरासुरका भान्छेहरूले त्यो अद्भुत माछोलाई भान्छा घरमा लगेर बन्चरोले काटे।

**दृष्ट्वा तदुदरे बालं मायावत्यै न्यवेदयन् ।**
**नारदोऽकथयत् सर्वं तस्याः शङ्कितचेतसः ।**
**बालस्य तत्त्वमुत्पत्तिं मत्स्योदरनिवेशनम् ॥ ६ ॥**

**पदार्थ—**
**तदुदरे** = त्यो माछोको पेटमा
**बालं** = बालकलाई
**दृष्ट्वा** = देखेर (त्यो बालकलाई)
**मायावत्यै** = शम्बरासुरकी दासी मायावतीलाई
**न्यवेदयन्** = समर्पण गरे
**नारदः** = देवर्षि नारदजीले
**शङ्कितचेतसः** = बालकको विषयमा सशङ्कित भएकी
**तस्याः** = ती मायावतीलाई
**बालस्य** = बालकको
**तत्त्वं** = वास्तविकता (कामदेवस्वरूप भएको)
**उत्पत्तिं** = जन्म (श्रीकृष्ण र रुक्मिणीको पुत्ररूपमा जन्म भएको र शम्बरासुरले हरण गरी

समुद्रमा फ्याँकेको) **मत्स्योदरनिवेशनं** = माछोको पेटमा प्राप्त भएको **सर्वं** = सबै कुरा **अकथयत्** = बताउनुभयो

**वाक्यार्थ–** माछोको पेटमा अद्भुत बालकलाई देखेर चकित भएका भान्छेहरूले त्यो बालकलाई लगेर शम्बरासुरकी दासी मायावतीलाई दिए। त्यो बालक को हो ? इत्यादि बालकको विषयमा सशङ्कित भएकी मायावतीलाई नारदजीले आएर बालक कामदेव भएको, श्रीकृष्णको पुत्ररूपमा रुक्मिणीको गर्भबाट जन्मिएको, शम्बरासुरले हरण गरी समुद्रमा फ्याँकेपछि माछोको पेटमा प्राप्त भएको आदि सबै कुरा बताउनुभयो।

**सा च कामस्य वै पत्नी रतिर्नाम यशस्विनी।**
**पत्युर्निर्दग्धदेहस्य देहोत्पत्तिं प्रतीक्षती॥ ७॥**

**पदार्थ–**
**सा च** = ती मायावती
**वै** = निश्चय नै
**निर्दग्धदेहस्य** = शरीर पूरै डढेर भस्म भएका
**पत्युः** = पति
**कामस्य** = कामदेवको
**देहोत्पत्तिं** = अर्को शरीरको उत्पत्तिलाई
**प्रतीक्षती** = प्रतीक्षा गरिरहेकी
**रतिः नाम** = रति नामकी
**यशस्विनी** = कीर्तिमती
**पत्नी** = पत्नी (थिइन्)

**वाक्यार्थ–** ती मायावती शरीर पूरै डढेर भस्म भएका आफ्ना पति कामदेवको शरीर पुनः कहिले उत्पन्न होला भनेर प्रतीक्षा गरिरहेकी कीर्तिमती पत्नी रति थिइन्।

**विवरण–** यस श्लोकमा रतिले मायावतीको रूपमा शम्बरासुरको भवनमा रही पतिको पुनर्जन्मको प्रतीक्षा गरेको बताइएको छ। यस प्रसङ्गमा मत्स्यपुराण, विष्णुपुराण र हरिवंशपुराणको कथा उल्लेखनीय छ। ती पुराणहरूमा आएको कथा अनुसार कामदेव भस्म भएपछि उनकी पत्नी रतिले आफ्ना पतिलाई पुनः पाउनका लागि भगवान् शङ्करको तपस्या गरिन् अनि रति पतिविहीन भएर एक्लै भएको थाहा पाई शम्बरासुरले पनि रतिलाई पाउनका लागि भगवान् शङ्करकै तपस्या गर्‍यो। रतिलाई वर दिँदा उहाँले श्रीकृष्णको पुत्रको रूपमा तिमीले पतिलाई पाउनेछौ भनी वर दिनुभयो। पछि भगवान् शङ्करले शम्बरासुरलाई रतिलाई आफ्नो नजिक पाउने वर दिनुभयो। भगवान् शङ्करले शम्बरासुरलाई यस्तो वर दिनुभएको थाहा पाई यसको रहस्य रतिले भगवान्सँगबाट जान्न चाहिन् र शम्बरासुरकहाँ रहँदा आफ्नो धर्म नष्ट हुने बिन्ती गरिन्। भगवान्ले उनलाई अनेक माया विद्याहरू सिकाउनुभयो र सबै मायालाई नष्ट गर्ने महाविद्याको पनि उपदेश गर्नुभयो। तिमीले अनेक मायाहरूले शम्बरासुरलाई मोहित गर्नू अनि त्यसबाट मोहित भएको त्यसले तिमीलाई पत्नी बनाउनेछैन, अरू कुनै सेवामा लगाउनेछ भनी भगवान्बाट आज्ञा भयो। अनि त्यही शम्बरासुरकहाँ रहँदा नै तिमीले आफ्ना पतिलाई प्रद्युम्नको रूपमा पाउनेछौ भनी बताउनुभयो। यसपछि रति शम्बरासुरकहाँ पुगेर उसलाई मायाले मोहित गराई भान्साको काममा नियुक्त भइन्। उता शम्बरासुरले चाहिँ कामदेव प्रद्युम्नको रूपमा जन्मिको थाहा पाई प्रद्युम्नलाई मारी रतिलाई सधैँका लागि आफ्नो बनाउन दश दिनका बालक प्रद्युम्नको अपहरण गर्‍यो र

उनलाई समुद्रमा फ्याँकिदियो। यसपछि माछाको पेटमा रही आफूकहाँ आइपुगेका प्रद्युम्नको पोषण गरी मायावती बनेकी रतिले पछि प्रद्युम्नलाई भगवान् शङ्करबाट प्राप्त महाविद्याको उपदेश पनि गरिन्। यसरी प्रद्युम्न र रतिको भेट भएको कथा पुराणहरूमा पाइन्छ।

**निरूपिता शम्बरेण सा सूपौदनसाधने।**
**कामदेवं शिशुं बुद्ध्वा चक्रे स्नेहं तदार्भके॥ ८॥**

**पदार्थ–**
**शम्बरेण** = शम्बरासुरद्वारा
**सूपौदनसाधने** = दालभात पकाउन
**निरूपिता** = नियुक्त गरिएकी
**सा** = ती रतिले
**शिशुं** = त्यो बालकलाई (नारदजीबाट)
**कामदेवं** = आफ्नो पति कामदेव भएको
**बुद्ध्वा** = जानेर
**तदा** = त्यति वेला
**अर्भके** = बालकमा
**स्नेहं** = अत्यन्त प्रेम
**चक्रे** = गर्न थालिन्

**वाक्यार्थ–** रतिलाई शम्बरासुरले आफ्नो लागि भान्सेको काममा नियुक्त गरेको थियो। जब रतिले देवर्षि नारदजीबाट त्यो बालक आफ्नै पति कामदेव भएको थाहा पाइन् तब त्यस बालकलाई उनले अत्यन्त प्रेम गर्न थालिन्।

**नातिदीर्घेण कालेन स कार्ष्णी रूढयौवनः।**
**जनयामास नारीणां वीक्षन्तीनां च विभ्रमम्॥ ९॥**

**पदार्थ–**
**नातिदीर्घेण** = थोरै
**कालेन** = समयमा नै
**रूढयौवनः** = यौवन अवस्थामा पुगेका
**कार्ष्णिः** = श्रीकृष्णका पुत्र
**सः** = ती प्रद्युम्नले
**वीक्षन्तीनां** = आफूलाई हेर्ने
**नारीणां** = स्त्रीहरूलाई
**विभ्रमं च** = मोह
**जनयामास** = उत्पन्न गराइदिए

**वाक्यार्थ–** थोरै समयमा नै युवा बनेका श्रीकृष्णपुत्र प्रद्युम्नले आफ्नो सौन्दर्य आदि गुणका कारण आफूलाई हेर्ने स्त्रीहरूको हृदय मोहित बनाइदिए।

**सा तं पतिं पद्मदलायतेक्षणं प्रलम्बबाहुं नरलोकसुन्दरम्।**
**सव्रीडहासोत्तभितभ्रुवेक्षती प्रीत्योपतस्थे रतिरङ्ग सौरतैः॥ १०॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
**पद्मदलायतेक्षणं** = कमलको फूलको पत्र जस्ता विशाल आँखा भएका
**प्रलम्बबाहुं** = लामा भुजा भएका
**नरलोकसुन्दरं** = मनुष्यलोकमै ज्यादै सुन्दर
**तं** = ती
**पतिं** = आफ्ना पति प्रद्युम्नलाई
**सव्रीडहासोत्तभितभ्रुवा** = लाजले सहित भएको मन्द हास्यका कारण टेढा आँखीभौँले युक्त आँखाद्वारा
**ईक्षती** = हेर्ने
**सा** = ती
**रतिः** = रतिले
**प्रीत्या** = प्रेमपूर्वक

**सौरतैः** = प्रणयभावद्वारा | **उपतस्थे** = सेवा गर्न लागिन्

**वाक्यार्थ–** हे प्रिय परीक्षित् ! लाजले मन्द हाँसिरहेकी र टेढा आँखीभौँद्वारा सुशोभित नेत्रद्वारा प्रेमपूर्वक हेरिरहेकी रति कमलदल झैँ विशाल आँखा भएका, लामा भुजा भएका एवं मनुष्यलोकभरि नै सबैभन्दा सुन्दर आफ्ना पति प्रद्युम्नको सेवा गर्न थालिन्।

**तामाह भगवान् कार्ष्णिर्मातस्ते मतिरन्यथा।**

**मातृभावमतिक्रम्य वर्तसे कामिनी यथा॥ ११॥**

**पदार्थ–**
**भगवान्** = भगवान्
**कार्ष्णिः** = कृष्णकुमार प्रद्युम्नले
**तां** = ती मायावतीलाई
**आह** = भने
**मातः** = हे माता
**ते** = तपाईंको
**मतिः** = बुद्धि
**अन्यथा** = विपरीत (देखिन्छ)
**मातृभावं** = माताको भावलाई
**अतिक्रम्य** = अतिक्रमण गरेर
**कामिनी यथा** = पत्नी जस्तो
**वर्तसे** = हुनुभएको छ

**वाक्यार्थ–** श्रीकृष्णकुमार भगवान् प्रद्युम्नले मायावतीको भावनात्मक परिवर्तन देखेर भने– हे माता ! तपाईंको बुद्धि किन फरक भएको ? तपाईंले माताको भावलाई त्यागेर पत्नीको जस्तो व्यवहार गर्न लाग्नुभएको छ।

**रतिरुवाच** (रतिले भनिन्)

**भवान् नारायणसुतः शम्बरेणाहृतो गृहात्।**

**अहं तेऽधिकृता पत्नी रतिः कामो भवान् प्रभो॥ १२॥**

**पदार्थ–**
**नारायणसुतः** = भगवान् श्रीकृष्णका पुत्र
**भवान्** = हजुर
**शम्बरेण** = शम्बरासुरद्वारा
**गृहात्** = प्रसूतिगृहबाट
**आहृतः** = अपहृत हुनुभयो
**प्रभो** = हे स्वामी
**अहं** = म
**ते** = हजुरको
**अधिकृता** = अधिकार प्राप्त
**पत्नी** = पत्नी
**रतिः** = रति हुँ
**भवान्** = हजुर चाहिँ
**कामः** = कामदेव हुनुहुन्छ

**वाक्यार्थ–** हे स्वामी ! हजुर भगवान् श्रीकृष्णका पुत्र हुनुहुन्छ। हजुरलाई शम्बरासुरले प्रसूतिगृहबाटै अपहरण गरेको थियो। म वास्तवमा हजुरकी अधिकारप्राप्त पत्नी रति हुँ र हजुर चाहिँ मेरा पति कामदेव हुनुहुन्छ।

**एष त्वानिर्दशं सिन्धावक्षिपच्छम्बरोऽसुरः।**

**मत्स्योऽग्रसीत् तदुदरादिह प्राप्तो भवान् प्रभो॥ १३॥**

**पदार्थ–**
**प्रभो** = हे प्रभु
**एषः** = यो

**शम्बरः** = शम्बर नामको
**असुरः** = असुरले
**अनिर्दशं** = दश दिनको पनि नभएको
**त्वा** = हजुरलाई (हरण गरी)
**सिन्धौ** = समुद्रमा
**अक्षिपत्** = फ्याँकिदियो (त्यहाँ हजुरलाई)
**मत्स्यः** = माछाले
**अग्रसीत्** = निल्यो
**तदुदरात्** = त्यो माछाको पेटबाट
**भवान्** = हजुर
**इह** = यहाँ
**प्राप्तः** = आइपुग्नुभयो

**वाक्यार्थ–** हे प्रभु ! हजुर जन्मेको दश दिन पनि नबित्दै यो शम्बरासुरले अपहरण गरी हजुरलाई समुद्रमा फ्याँकिदियो। त्यहाँ एउटा माछाले हजुरलाई निल्यो। त्यसपछि त्यो माछाको पेटबाट निस्किएर हजुर यहाँ मकहाँ आइपुग्नुभयो।

**तमिमं जहि दुर्धर्षं दुर्जयं शत्रुमात्मनः।**
**मायाशतविदं त्वं च मायाभिर्मोहनादिभिः॥ १४॥**

**पदार्थ–**
**त्वं** = हजुरले
**दुर्धर्षं** = दमन गर्न नसकिने
**दुर्जयं** = जित्न नसकिने
**मायाशतविदं च** = सयौँ प्रकारको माया जान्ने
**तं इमं** = त्यस्तो यो
**आत्मनः** = आफ्नो
**शत्रुं** = शत्रुलाई
**मोहनादिभिः** = मोहन आदि
**मायाभिः** = मायाहरूद्वारा (मोहित बनाएर)
**जहि** = मार्नुहोस्

**वाक्यार्थ–** सयौँ प्रकारको माया जानेको दुर्दमनीय र दुर्जेय शम्बरासुर हजुरको शत्रु हो। अतः यसलाई मोहन आदि मायाशक्तिद्वारा मोहित बनाएर हजुरले मार्नुहोस्।

**परिशोचति ते माता कुररीव गतप्रजा।**
**पुत्रस्नेहाकुला दीना विवत्सा गौरिवातुरा॥ १५॥**

**पदार्थ–**
**दीना** = अत्यन्त दुःखित
**पुत्रस्नेहाकुला** = छोराको स्नेहले आकुल भएकी
**ते** = हजुरकी
**माता** = आमा
**गतप्रजा** = सन्तान हराएकी
**कुररी इव** = न्याउली चरी झैँ
**विवत्सा** = बाच्छो हराएकी
**गौः इव** = गाई झैँ
**आतुरा** = व्याकुल भएर
**परिशोचति** = चिन्ता गरिरहनुभएको छ

**वाक्यार्थ–** हे स्वामी ! हजुरकी आमा सन्तान हराएकी न्याउली चरी र बाच्छो हराएकी गाई झैँ पुत्रस्नेहले आकुल व्याकुल हुनुभएको छ र चिन्ता गरिरहनुभएको छ।

**प्रभाष्यैवं ददौ विद्यां प्रद्युम्नाय महात्मने।**
**मायावती महामायां सर्वमायाविनाशिनीम्॥ १६॥**

**पदार्थ–**

**मायावती** = मायावतीले
**एवं** = यस्तो कुरा
**प्रभाष्य** = बताएर
**महात्मने** = परमप्रतापी
**प्रद्युम्नाय** = प्रद्युम्नलाई
**सर्वमायाविनाशिनीम्** = सम्पूर्ण मायाहरूलाई नष्ट गर्ने
**महामायां** = महामाया नामक
**विद्यां** = विद्या
**ददौ** = प्रदान गरिन्

**वाक्यार्थ–** मायावतीले उक्त सम्पूर्ण कुराहरू बताएर परमप्रतापी प्रद्युम्नलाई सम्पूर्ण मायाशक्तिलाई सजिलै नष्ट गर्ने महामाया नामको विद्या प्रदान गरिन्।

**स च शम्बरमभ्येत्य संयुगाय समाह्वयत्।**
**अविषह्यैस्तमाक्षेपैः क्षिपन् सञ्जनयन् कलिम्॥ १७॥**

**पदार्थ–**

**सः च** = ती प्रद्युम्नले पनि
**तं** = त्यो
**शम्बरं** = शम्बरासुरको
**अभ्येत्य** = नजिक गएर
**अविषह्यैः** = सहन गर्न नसकिने
**आक्षेपैः** = गालीहरूद्वारा
**क्षिपन्** = तिरस्कार गर्दै
**कलिं** = झगडा
**सञ्जनयन्** = प्रकट गरी
**संयुगाय** = युद्धका लागि
**समाह्वयत्** = आह्वान गरे

**वाक्यार्थ–** त्यसपछि प्रद्युम्न आफ्नो शत्रु शम्बरासुर भएको ठाउँमा गए र उसलाई असह्य गालीहरूद्वारा तिरस्कृत गर्न थाले। यसरी झगडा गरी उनले शम्बरासुरलाई युद्धका लागि आह्वान गरे।

**सोऽधिक्षिप्तो दुर्वचोभिः पदाहत इवोरगः।**
**निश्चक्राम गदापाणिरमर्षात् ताम्रलोचनः॥ १८॥**

**पदार्थ–**

**दुर्वचोभिः** = रुखा वचनहरूद्वारा
**अधिक्षिप्तः** = तिरस्कृत भएको
**सः** = त्यो शम्बरासुर
**अमर्षात्** = रिसका कारण
**ताम्रलोचनः** = राता-राता आँखा बनाउँदै
**पदाहतः** = खुट्टाको प्रहारले घाइते भएको
**उरगः इव** = साँप झैं
**गदापाणिः** = हातमा गदा लिएर
**निश्चक्राम** = युद्धका लागि निस्कियो

**वाक्यार्थ–** प्रद्युम्नको रुखो वचनद्वारा तिरस्कृत भएको शम्बरासुर खुट्टाको प्रहारले घाइते भएको साँप झैं रिसले राता-राता आँखा बनाउँदै हातमा गदा लिएर प्रद्युम्नसँग युद्ध गर्न निस्कियो।

**गदामाविध्य तरसा प्रद्युम्नाय महात्मने।**
**प्रक्षिप्य व्यनदन्नादं वज्रनिष्पेषनिष्ठुरम्॥ १९॥**

**पदार्थ–**

**महात्मने** = शक्तिशाली
**प्रद्युम्नाय** = प्रद्युम्नलाई (ताकेर)
**तरसा** = वेगपूर्वक
**गदां** = गदा
**आविध्य** = घुमाएर

**प्रक्षिप्य** = फ्याँकेर
**वज्रनिष्पेषनिष्ठुरं** = वज्र एक-आपसमा ठोकिँदा उत्पन्न हुने आवाज जस्तो कर्कश
**नादं** = ध्वनिमा
**व्यनदत्** = गर्जियो

**वाक्यार्थ–** शम्बरासुरले शक्तिशाली प्रद्युम्नलाई ताक्दै आफ्नो गदालाई वेगपूर्वक घुमाएर फ्याँक्यो। त्यस समयमा वज्र एक-आपसमा ठोकिएर रगडिँदा उत्पन्न हुने आवाज जस्तै कठोर शब्द निकालेर उसले गर्जना पनि गर्‍यो।

**तामापतन्तीं भगवान् प्रद्युम्नो गदया गदाम्।**
**अपास्य शत्रवे क्रुद्धः प्राहिणोत् स्वगदां नृप॥ २०॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**भगवान्** = भगवान्
**प्रद्युम्नः** = प्रद्युम्नले पनि
**आपतन्तीं** = आफूतिर आउँदै गरेको
**तां** = शम्बरासुरले फ्याँकेको त्यो
**गदां** = गदालाई
**गदया** = आफ्नो गदाद्वारा
**अपास्य** = हटाएर
**क्रुद्धः** = क्रुद्ध भई
**शत्रवे** = शत्रु शम्बरासुरमाथि
**स्वगदां** = आफ्नो गदा
**प्राहिणोत्** = प्रहार गरे

**वाक्यार्थ–** हे राजा परीक्षित्! शम्बरासुरले आफूलाई ताकेर हानेको गदालाई भगवान् प्रद्युम्नले आफ्नो गदाद्वारा हटाइदिए। उनलाई पनि शम्बरासुरदेखि असाध्यै रिस उठ्यो र त्यसमाथि आफ्नो गदा प्रहार गरे।

**स च मायां समाश्रित्य दैतेयीं मयदर्शिताम्।**
**मुमुचेऽस्त्रमयं वर्षं कार्ष्णौ वैहायसोऽसुरः॥ २१॥**

**पदार्थ–**
**सः** = त्यो
**असुरः च** = शम्बरासुरले पनि
**दैतेयीं** = आसुरी
**मयदर्शिताम्** = मय दानवद्वारा उपदिष्ट
**मायां** = माया शक्तिलाई
**समाश्रित्य** = आश्रय लिएर
**वैहायसः** = आकाशमा लुकेर
**कार्ष्णौ** = कृष्ण पुत्र प्रद्युम्नमाथि
**अस्त्रमयं** = अस्त्रै-अस्त्रहरूको
**वर्षं** = वृष्टि
**मुमुचे** = गर्न थाल्यो

**वाक्यार्थ–** मय दानवद्वारा प्रदान गरिएको माया शक्तिको आश्रय लिई आकाशमा लुकेर शम्बरासुरले प्रद्युम्नमाथि अनेक अस्त्रहरूको वृष्टि गर्न थाल्यो।

**बाध्यमानोऽस्त्रवर्षेण रौक्मिणेयो महारथः।**
**सत्त्वात्मिकां महाविद्यां सर्वमायोपमर्दिनीम्॥ २२॥**

**पदार्थ–**
**महारथः** = महारथी
**रौक्मिणेयः** = रुक्मिणीका छोरा प्रद्युम्नले
**अस्त्रवर्षेण** = अस्त्रहरूको वृष्टिद्वारा

**बाध्यमानः** = ताडित भई
**सर्वमायोपमर्दिनीम्** = सम्पूर्ण आसुरी मायालाई नष्ट गर्ने
**सत्त्वात्मिकां** = सत्त्वमयी
**महाविद्याम्** = महाविद्यालाई (प्रयोग गरे)

**वाक्यार्थ–** शम्बरासुरले यसरी रुक्मिणीपुत्र महारथी प्रद्युम्नमाथि अस्त्रवर्षा गरेर प्रताडित गर्न थालेपछि प्रद्युम्नले पनि सम्पूर्ण आसुरी मायाशक्तिलाई नष्ट गर्ने सत्त्वमयी महाविद्याको प्रयोग गरे।

**ततो गौह्यकगान्धर्वपैशाचोरगराक्षसीः।**
**प्रायुङ्क्त शतशो दैत्यः कार्ष्णिर्व्यधमयत् स ताः॥ २३॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**दैत्यः** = दैत्य शम्बरासुरले
**गौह्यकगान्धर्वपैशाचोरग-राक्षसीः** = गुह्यक, गन्धर्व, पिशाच, नाग र राक्षस सम्बन्धी
**शतशः** = सयौँ (मायाशक्ति)
**प्रायुङ्क्त** = प्रयोग गर्‍यो
**सः** = ती
**कार्ष्णिः** = श्रीकृष्णपुत्र प्रद्युम्नले
**ताः** = ती सम्पूर्ण मायालाई
**व्यधमयत्** = नाश गरिदिए

**वाक्यार्थ–** त्यसपछि शम्बरासुरले गुह्यक, गन्धर्व, पिशाच, नाग र राक्षस सम्बन्धी सयौँ मायाशक्तिको प्रयोग गर्‍यो, तर ती सबै मायालाई श्रीकृष्णपुत्र प्रद्युम्नले नष्ट गरिदिए।

**निशातमसिमुद्यम्य सकिरीटं सकुण्डलम्।**
**शम्बरस्य शिरः कायात् ताम्रश्मश्र्वोजसाहरत्॥ २४॥**

**पदार्थ–**
**निशातं** = अत्यन्त धारिलो
**असिं** = तरबार
**उद्यम्य** = उठाएर
**ताम्रश्मश्रु** = राता-राता दाह्रीजुँगा भएको
**सकिरीटं** = मुकुटले युक्त
**सकुण्डलं** = कुण्डलले सहित
**शम्बरस्य** = शम्बरासुरको
**शिरः** = टाउको
**कायात्** = शरीरबाट
**ओजसा** = बलपूर्वक
**आहरत्** = काटिदिए

**वाक्यार्थ–** प्रद्युम्नले अत्यन्त धारिलो तरबार उठाएर बलपूर्वक प्रहार गरी राता-राता दाह्रीजुँगा भएको, मुकुट र कुण्डलले युक्त शम्बरासुरको टाउको काटेर शरीरबाट अलग गरिदिए।

**आकीर्यमाणो दिविजैः स्तुवद्भिः कुसुमोत्करैः।**
**भार्ययाम्बरचारिण्या पुरं नीतो विहायसा॥ २५॥**

**पदार्थ–**
**स्तुवद्भिः** = स्तुति गरिरहेका
**दिविजैः** = देवताहरूद्वारा
**कुसुमोत्करैः** = पुष्पाञ्जलिद्वारा
**आकीर्यमाणः** = ढाकिएका प्रद्युम्न
**अम्बरचारिण्या** = आकाशमा हिँड्न र हिँडाउन सक्ने
**भार्यया** = पत्नी मायावतीद्वारा
**विहायसा** = आकाशमार्गबाट
**पुरं** = द्वारका नगरमा
**नीतः** = प्राप्त भए

**वाक्यार्थ–** शम्बरासुरलाई मारेपछि आकाशमा रहेका देवताहरूले प्रद्युम्नको स्तुति गर्दै पुष्पवृष्टि

गरेर उनलाई फूलै फूलले ढाकिदिए अनि आकाशमा आफू स्वयं विचरण गर्न र अरूलाई पनि विचरण गराउन सक्ने उनकी पत्नी मायावतीले आकाशमार्गबाट उनलाई द्वारिका नगरी पुऱ्याइन्।

**अन्तःपुरवरं राजन् ललनाशतसङ्कुलम्।**
**विवेश पत्न्या गगनाद् विद्युतेव बलाहकः॥ २६॥**

**पदार्थ—**
**राजन्** = हे महाराज परीक्षित्
**विद्युता** = बिजुलीसँग
**बलाहकः इव** = मेघ झैं
**गगनात्** = आकाशमार्गबाट
**पत्न्या** = पत्नी मायावतीसँग
**ललनाशतसङ्कुलः** = सयौं उत्तम स्त्रीहरूले व्याप्त भएको
**अन्तःपुरवरं** = अन्तःपुरमा श्रेष्ठ रुक्मिणीको निवासमा
**विवेश** = (प्रद्युम्न) प्रवेश गरे

**वाक्यार्थ—** हे महाराज परीक्षित्! बिजुलीले सहित भएको मेघ झैं पत्नी मायावतीले सहित भएका प्रद्युम्न पनि आकाशमार्गबाट सयौं श्रेष्ठ स्त्रीहरूले व्याप्त भएको उत्तम अन्तःपुर (रुक्मिणीको निवास)मा प्रवेश गरे।

**तं दृष्ट्वा जलदश्यामं पीतकौशेयवाससम्।**
**प्रलम्बबाहुं ताम्राक्षं सुस्मितं रुचिराननम्॥ २७॥**
**स्वलङ्कृतमुखाम्भोजं नीलवक्रालकालिभिः।**
**कृष्णं मत्वा स्त्रियो ह्रीता निलिल्युस्तत्र तत्र ह॥ २८॥**

**पदार्थ—**
**जलदश्यामं** = मेघ झैं श्यामवर्ण भएका
**पीतकौशेयवाससं** = पहेँलो रेशमी वस्त्र धारण गरेका
**प्रलम्बबाहुं** = लामा हात भएका
**ताम्राक्षं** = राता आँखा भएका
**सुस्मितं** = मन्दहास्ययुक्त
**रुचिराननं** = अति सुन्दर मुखमण्डल भएका
**नीलवक्रालकालिभिः** = घुँघरिएको निलो कपालरूपी भँवराका पङ्क्तिद्वारा
**स्वलङ्कृतमुखाम्भोजं** = अलङ्कृत मुखकमल भएका
**तं** = ती प्रद्युम्नलाई
**दृष्ट्वा** = देखेर
**कृष्णं** = श्रीकृष्ण
**मत्वा** = ठानेर
**ह** = निश्चय नै
**ह्रीताः** = लज्जित भएका
**स्त्रियः** = स्त्रीहरू
**तत्र तत्र** = अन्तःपुरको यत्र तत्र
**निलिल्युः** = लुके

**वाक्यार्थ—** वर्षाकालको मेघ झैं श्यामवर्ण भएका प्रद्युम्नले पहेँलो रेशमी वस्त्र धारण गरेका थिए। लामा-लामा हात, राता-राता आँखा र मन्द हाँसो सहितको आकर्षक मुखाकृतिले उनको सौन्दर्य अझै बढेको थियो। घुँघरिएको नीलो कपालरूपी भँवराहरूद्वारा उनको मुखकमल अलङ्कृत देखिन्थ्यो। यस्ता परमसुन्दर प्रद्युम्नलाई देखेर अन्तःपुरका स्त्रीहरू श्रीकृष्ण ठानेर लाज मान्दै अन्तःपुरको यताउता गई लुक्न लागे।

**अवधार्य शनैरीषद्वैलक्षण्येन योषितः।**
**उपजग्मुः प्रमुदिताः सस्त्रीरत्नं सुविस्मिताः॥ २९॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **अवधार्य** = (यी कृष्ण होइनन् भन्ने) निश्चय गरेर | **सस्त्रीरत्नं** = स्त्रीश्रेष्ठ रतिले सहित भएका प्रद्युम्नको सामुन्ने |
| **योषितः** = अन्तःपुरका स्त्रीहरूले | **प्रमुदिताः** = प्रसन्न र | **उपजग्मुः** = गए |
| **शनैः** = बिस्तारै | **सुविस्मिताः** = आश्चर्यचकित भई | |
| **ईषद्वैलक्षण्येन** = केही भिन्न लक्षणका कारण | | |

**वाक्यार्थ–** अन्तःपुरका ती स्त्रीहरूले केही भिन्न लक्षणका आधारमा ती सुन्दर पुरुष श्रीकृष्ण होइनन् भन्ने बिस्तारै थाहा पाए। त्यसपछि उनीहरू आनन्दित र आश्चर्यचकित हुँदै स्त्रीश्रेष्ठ रतिले सहित भएका प्रद्युम्नका सामु आए।

**अथ तत्रासितापाङ्गी वैदर्भी वल्गुभाषिणी।**
**अस्मरत् स्वसुतं नष्टं स्नेहस्नुतपयोधरा॥ ३०॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **वल्गुभाषिणी** = मिठो बोल्ने | **नष्टं** = हराएको |
| **अथ** = त्यसपछि | **स्नेहस्नुतपयोधरा** = वात्सल्य प्रेमका कारण दुध चुहिँदै गरेको स्तन भएकी | **स्वसुतं** = आफ्नो छोरोलाई |
| **तत्र** = त्यहाँ (अन्तःपुरमा) | **वैदर्भी** = विदर्भपुत्री रुक्मिणीले | **अस्मरत्** = सम्झिन् |
| **असितापाङ्गी** = आँखाका कुना काला भएकी | | |

**वाक्यार्थ–** त्यसपछि त्यही अन्तःपुरमा विदर्भपुत्री रुक्मिणी आइपुगिन्। उनका आँखाका कुनाहरू काला थिए भने वाणी अत्यन्त मधुर थियो। प्रद्युम्नलाई देख्नासाथ उनलाई आफ्नो हराएको छोराको सम्झना भयो। त्यसवेला पुत्रप्रेमका कारण उनको स्तनबाट दुध चुहिन थाल्यो।

**को न्वयं नरवैदूर्यः कस्य वा कमलेक्षणः।**
**धृतः कया वा जठरे केयं लब्धा त्वनेन वा॥ ३१॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **कः नु** = को होलान् | **धृतः** = धारण गरिए |
| **अयं** = यी | **कस्य वा** = कसका चाहिँ छोरा होलान् | **अनेन तु** = यीद्वारा |
| **कमलेक्षणः** = कमल जस्तो आँखा भएका | **कया वा** = कुन चाहिँ स्त्रीद्वारा | **लब्धा** = प्राप्त गरिएकी |
| **नरवैदूर्यः** = श्रेष्ठ पुरुष | **जठरे** = पेटमा | **इयं वा** = यी साथैमा रहेकी स्त्री |
| | | **का** = को होलिन् |

**वाक्यार्थ–** (रुक्मिणीले मनमनै विचार गर्न थालिन्) कमल जस्तो आँखा भएका यी श्रेष्ठ मनुष्य को होलान्? कसका छोरा होलान्? यिनलाई कुन भाग्यशाली स्त्रीले गर्भमा धारण गरिहोलिन्?

यिनका साथमा रहेकी यी स्त्री को होलिन् र यी स्त्रीले यिनलाई कसरी प्राप्त गरिन् होला ?

**मम चाप्यात्मजो नष्टो नीतो यः सूतिकागृहात्।**
**एतत्तुल्यवयोरूपो यदि जीवति कुत्रचित्॥ ३२॥**

**पदार्थ–**
**मम च अपि** = मेरो पनि त
**यः** = जुन
**आत्मजः** = छोरो
**सूतिकागृहात्** = प्रसूतिगृहबाट
**नीतः** = हरण गरियो (त्यसैले)
**नष्टः** = हरायो
**यदि** = यदि
**कुत्रचित्** = कतै
**जीवति** = जिउँदै छ भने
**एतत्तुल्यवयोरूपः** = यही पुरुषकै जस्तो उमेर र रूप भएको हुनुपर्दछ

**वाक्यार्थ–** मेरो पनि त छोरो कसैले अपहरण गर्नाले हरायो। यदि ऊ कहीँ संसारमा जिउँदै छ भने पक्कै पनि यही सुन्दर पुरुषकै जस्तो उमेर र रूपले युक्त भएको होला।

**कथं त्वनेन सम्प्राप्तं सारूप्यं शार्ङ्गधन्वनः।**
**आकृत्यावयवैर्गत्या स्वरहासावलोकनैः॥ ३३॥**

**पदार्थ–**
**आकृत्या** = आकृतिद्वारा
**अवयवैः** = अङ्गहरूद्वारा
**गत्या** = हिँड्ने शैलीद्वारा
**स्वरहासावलोकनैः** = बोली, हाँसो, हेर्ने तरिका आदिद्वारा
**शार्ङ्गधन्वनः** = श्रीकृष्णको
**सारूप्यं** = समानरूपता
**अनेन तु** = यिनीद्वारा
**कथं** = कसरी
**सम्प्राप्तम्** = प्राप्त गरियो

**वाक्यार्थ–** श्रीकृष्णको समान आकृति एवं अङ्गसंरचना, हिँडाइको शैली, बोली, हाँसो, हेर्ने तरिका आदि यिनलाई कसरी प्राप्त भयो ?

**स एव वा भवेन्नूनं यो मे गर्भे धृतोऽर्भकः।**
**अमुष्मिन् प्रीतिरधिका वामः स्फुरति मे भुजः॥ ३४॥**

**पदार्थ–**
**यः** = जुन
**अर्भकः** = शिशु
**मे** = मद्वारा
**गर्भे** = गर्भमा
**धृतः** = धारण गरियो
**नूनं** = निश्चय नै
**सः एव** = त्यही शिशु नै यो पुरुष
**भवेत्** = होला (किनभने)
**अमुष्मिन्** = यसमा
**प्रीतिः** = मेरो प्रेम
**अधिका** = ज्यादै नै भएको छ
**मे** = मेरो
**वामः** = देब्रे
**भुजः** = हात पनि
**स्फुरति** = फर्फराइहेको छ

**वाक्यार्थ–** मैले जुन शिशुलाई गर्भमा धारण गरेको थिएँ त्यो शिशु यही पुरुष नै हुनुपर्दछ, किनभने यसलाई देख्नासाथ मेरो प्रेम अधिक बढेर आएको छ र मेरो देब्रे हात पनि फर्फराइरहेको छ।

**एवं मीमांसमानायां वैदर्भ्यां देवकीसुतः ।**

**देवक्यानकदुन्दुभ्यामुत्तमःश्लोक आगमत् ॥ ३५ ॥**

**पदार्थ–**
**वैदर्भ्यां** = रुक्मिणीले
**एवं** = यसरी
**मीमांसमानायां** = तर्कना (विचार) गरिरहेको वेला
**देवक्यानकदुन्दुभ्यां** = देवकी र वसुदेवका साथ
**उत्तमःश्लोकः** = पवित्र कीर्ति भएका
**देवकीसुतः** = देवकीनन्दन श्रीकृष्ण
**आगमत्** = आउनुभयो

**वाक्यार्थ–** यसरी रुक्मिणीले मनमनै विचार गरिरहेकै समयमा माता देवकी र पिता वसुदेवको साथमा देवकीनन्दन पवित्रकीर्ति श्रीकृष्ण त्यहीँ आइपुग्नुभयो।

**विज्ञातार्थोऽपि भगवांस्तूष्णीमास जनार्दनः ।**

**नारदोऽकथयत् सर्वं शम्बराहरणादिकम् ॥ ३६ ॥**

**पदार्थ–**
**विज्ञातार्थः अपि** = प्रद्युम्नको हरण आदि घटना जानेर पनि
**भगवान्** = भगवान्
**जनार्दनः** = श्रीकृष्ण
**तूष्णीम्** = मौन
**आस** = रहनुभयो
**नारदः** = (त्यही वेला आइपुग्नुभएका) देवर्षि नारदले
**शम्बराहरणादिकं** = शम्बरासुरले प्रद्युम्नलाई हरण गरेको आदि
**सर्वं** = सम्पूर्ण घटना
**अकथयत्** = बताउनुभयो

**वाक्यार्थ–** प्रद्युम्नहरणको विषयमा भगवान् श्रीकृष्णले सबै कुरा जान्नुहुन्थ्यो, तर उहाँ त्यस वेला मौन भएर बस्नुभयो। त्यही वेला त्यहाँ नारदजी आउनुभयो र उहाँले शम्बरासुरले प्रद्युम्नको हरण गरेको लगायतका सम्पूर्ण घटना बताउनुभयो।

**तच्छ्रुत्वा महदाश्चर्यं कृष्णान्तःपुरयोषितः ।**

**अभ्यनन्दन् बहूनब्दान् नष्टं मृतमिवागतम् ॥ ३७ ॥**

**पदार्थ–**
**तत्** = (नारदजीले बताएको) त्यो
**महद्** = ज्यादै नै
**आश्चर्यं** = आश्चर्ययुक्त कुरा
**श्रुत्वा** = सुनेर
**कृष्णान्तःपुरयोषितः** = श्रीकृष्णका अन्तःपुरका स्त्रीहरूले
**बहून्** = धेरै
**अब्दान्** = वर्षसम्म
**नष्टं** = हराएका
**मृतं** = मरेर पनि
**आगतम् इव** = आएको जैँ गरी (प्रद्युम्नलाई)
**अभ्यनन्दन्** = अभिनन्दन गरे

**वाक्यार्थ–** नारदजीले बताएको ज्यादै नै आश्चर्ययुक्त कुरा सुनेर भगवान् श्रीकृष्णका अन्तःपुरमा बस्ने नारीहरू चकित भए। यति धेरै वर्षसम्म हराएर फर्किएका प्रद्युम्नलाई उनीहरूले मरेको मान्छे नै फर्किएर आएको जैँ गरी खुसी भएर अभिनन्दन गरे।

**देवकी वसुदेवश्च कृष्णरामौ तथा स्त्रियः।**

**दम्पती तौ परिष्वज्य रुक्मिणी च ययुर्मुदम्॥ ३८॥**

**पदार्थ–**
**देवकी** = देवकी
**वसुदेवः** = वसुदेव
**कृष्णरामौ च** = श्रीकृष्ण र बलराम
**रुक्मिणी च** = रुक्मिणी र
**तथा** = त्यस्तै अरू
**स्त्रियः** = स्त्रीहरूले
**तौ** = ती
**दम्पती** = दम्पतिलाई
**परिष्वज्य** = आलिङ्गन गरी
**मुदं** = हर्ष
**ययुः** = प्राप्त गरे

**वाक्यार्थ–** देवकी, वसुदेव, श्रीकृष्ण, बलराम, रुक्मिणी तथा अन्तःपुरका अन्य स्त्रीहरू प्रद्युम्न र मायावतीको नवदम्पतिलाई आलिङ्गन गरी अत्यन्त हर्षित भए।

**नष्टं प्रद्युम्नमायातमाकर्ण्य द्वारकौकसः।**

**अहो मृत इवायातो बालो दिष्ट्येति हाब्रुवन्॥ ३९॥**

**पदार्थ–**
**द्वारकौकसः** = द्वारकावासीहरू
**नष्टं** = हराएका
**प्रद्युम्नं** = प्रद्युम्न
**आयातं** = आएका (छन् भन्ने)
**आकर्ण्य** = सुनेर
**अहो** = आश्चर्य छ
**बालः** = यी बालक
**दिष्ट्या** = सौभाग्यवश
**मृतः इव** = मरेको मान्छे फर्किएर आएझैं
**ह** = निश्चय नै
**आयातः** = आएका छन्
**इति** = यसरी
**अब्रुवन्** = भन्न थाले

**वाक्यार्थ–** हराएका प्रद्युम्न सकुशल फर्किएर आएका छन् भन्ने कुरा सुनेर द्वारकावासीहरू कुरा गर्न थाले– अहो ! आश्चर्य छ, यी बालक प्रद्युम्न सौभाग्यवश कुनै मरेको मान्छे फर्किएर आएझैं फर्किएर आएका छन्।

**यं वै मुहुः पितृसरूपनिजेशभावा-**

**स्तन्मातरो यदभजन् रहरूढभावाः।**

**चित्रं न तत् खलु रमास्पदबिम्बबिम्बे**

**कामे स्मरेऽक्षिविषये किमुतान्यनार्यः॥ ४०॥**

**पदार्थ–**
**यं** = जसलाई
**वै** = निश्चय नै
**मुहुः** = बारम्बार (देखेर)
**पितृसरूपनिजेशभावाः** = पिता श्रीकृष्णको समान सौन्दर्यका कारण आफ्ना पति भगवान् श्रीकृष्णको भावना भएका
**रहरूढभावाः** = एकान्तमा प्रेमभाव उपन्न भएर बसेका
**तन्मातरः** = ती प्रद्युम्नका रुक्मिणी आदि आमाहरूले
**यत्** = जुन
**अभजन्** = (अश्रुपात, आलिङ्गन आदिद्वारा) सेवा गरे

**तत्** = त्यो कार्य (आमाहरूको लागि)
**खलु** = निश्चय नै
**न चित्रं** = आश्चर्य होइन
**रमास्पदबिम्बबिम्बे** = श्रीकृष्णको शरीरको प्रतिबिम्ब भएका
**स्मरे** = सम्झँदै चित्तमा क्षोभ उत्पन्न हुने
**कामे** = कामावतार प्रद्युम्न
**अक्षिविषये** = आँखाकै सामुन्ने रहँदा
**अन्यनार्यः** = अरू नारीहरूको
**किमुत** = के कुरा

**वाक्यार्थ–** प्रद्युम्नको शरीर र सौन्दर्य पिता श्रीकृष्णकै समान थियो। अतः रुक्मिणी आदि प्रद्युम्नका माताहरू प्रद्युम्नलाई देखेर आफ्नै पतिदेव श्रीकृष्ण ठानी एकान्तमा समेत प्रेमभावनामा तल्लीन हुन्थे भने प्रेमपूर्ण वात्सल्यका कारण अश्रुपात, आलिङ्गन आदिद्वारा प्रद्युम्नको सेवा गरिरहन्थे। आमाहरूमा भएको त्यो भावना आश्चर्यको विषय होइन। श्रीकृष्णको शरीरकै प्रतिबिम्ब कामावतार प्रद्युम्नलाई सम्झँदा उनकै आमाहरूको मनमा त क्षोभ उत्पन्न हुन्छ भने उनलाई देख्दा अन्य नारीहरूको मनमा किन क्षोभ उत्पन्न नहोस् ?

**इति श्रीमद्‌भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे प्रद्युम्नोत्पत्तिनिरूपणं नाम पञ्चपञ्चाशत्तमोऽध्यायः ॥ ५५ ॥**

# अथ षट्पञ्चाशत्तमोऽध्यायः

## भगवान् श्रीकृष्णको जाम्बवती र सत्यभामासित विवाह

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**सत्राजितः स्वतनयां कृष्णाय कृतकिल्बिषः ।**

**स्यमन्तकेन मणिना स्वयमुद्यम्य दत्तवान् ॥ १ ॥**

**पदार्थ–**
**कृतकिल्बिषः** = अपराध गरेका
**सत्राजितः** = सत्राजित्ले
**स्यमन्तकेन** = स्यमन्तक नामक
**मणिना** = मणिसहित
**स्वतनयां** = आफ्नी छोरी (सत्यभामा)
**स्वयं** = आफैँले
**उद्यम्य** = उद्यम (प्रयास) गरी
**कृष्णाय** = श्रीकृष्णलाई
**दत्तवान्** = दिए

**वाक्यार्थ–** सत्राजित्ले भगवान् श्रीकृष्णलाई झुटो अभियोग लगाएर गल्ती गरेका थिए। त्यसैले उनले गल्ती मेटाउन आफ्नै प्रयासमा स्यमन्तक मणिसहित आफ्नी कन्या सत्यभामा श्रीकृष्णलाई प्रदान गरे।

**टिप्पणी–** यो श्लोकमा र दोस्रो श्लोकमा पनि सत्राजित शब्द अकारान्त प्रयोग गरिएको छ तर तेस्रो, नवौँ, दशौँ, पन्ध्रौँ आदिमा सत्राजित् यस्तो तकारान्त (हलन्त) प्रयोग गरिएकाले अनुवाद गर्दा नाममा एकरूपताका लागि सत्राजित् लेखिएको छ।

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**सत्राजितः किमकरोद् ब्रह्मन् कृष्णस्य किल्बिषम् ।**

**स्यमन्तकः कुतस्तस्य कस्माद् दत्ता सुता हरेः ॥ २ ॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्रह्मज्ञानी शुकदेव
**सत्राजितः** = सत्राजित्ले
**कृष्णस्य** = श्रीकृष्णको
**किं** = के
**किल्बिषम्** = अपराध
**अकरोत्** = गरे
**तस्य** = ती सत्राजित्लाई
**स्यमन्तकः** = स्यमन्तक मणि
**कुतः** = कहाँबाट प्राप्त भयो ?
**कस्मात्** = के कारणले
**सुता** = छोरी सत्यभामा
**हरेः** = श्रीकृष्णलाई
**दत्ता** = दिए

**वाक्यार्थ–** हे ब्रह्मज्ञानी शुकदेव ! सत्राजित्ले भगवान् श्रीकृष्णको के अपराध गरेका थिए ? उनलाई स्यमन्तक मणि कहाँबाट प्राप्त भएको थियो ? र उनले किन आफ्नी छोरी सत्यभामा श्रीकृष्णलाई प्रदान गरे ?

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**आसीत् सत्राजितः सूर्यो भक्तस्य परमः सखा।**

**प्रीतस्तस्मै मणिं प्रादात् सूर्यस्तुष्टः स्यमन्तकम्॥ ३॥**

**पदार्थ–**
**सूर्यः** = भगवान् श्रीसूर्य
**भक्तस्य** = आफ्ना भक्त
**सत्राजितः** = सत्राजित्को
**परमः** = अत्यन्त पूज्य स्वामी भएर पनि
**प्रीतः** = प्रसन्न भएकाले
**सखा** = मित्र जैँ
**आसीत्** = हुनुभएको थियो
**तुष्टः** = सत्राजित्सँग प्रसन्न
**सूर्यः** = सूर्यदेवले
**तस्मै** = ती सत्राजित्लाई
**स्यमन्तकं** = स्यमन्तक
**मणिं** = मणि
**प्रादात्** = दिनुभयो

**वाक्यार्थ–** सत्राजित् भगवान् सूर्यका भक्त थिए तर पनि सूर्यदेव सत्राजित्का मित्र जस्तै हुनुभएको थियो। त्यसैले प्रसन्न भएर एक दिन सूर्यदेवले सत्राजित्लाई स्यमन्तक मणि दिनुभयो।

**स तं बिभ्रन् मणिं कण्ठे भ्राजमानो यथा रविः।**

**प्रविष्टो द्वारकां राजंस्तेजसा नोपलक्षितः॥ ४॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**सः** = ती सत्राजित्ले
**तं** = त्यो (सूर्यले दिएको)
**मणिं** = स्यमन्तक मणिलाई
**कण्ठे** = घाँटीमा
**बिभ्रन्** = धारण गर्दै
**तेजसा** = मणिको प्रकाशका कारणले
**रविः यथा** = सूर्य जैँ
**भ्राजमानः** = प्रकाशमान भएर
**द्वारकां** = द्वारका नगरीमा
**प्रविष्टः** = प्रवेश गरेका (उनी)
**न उपलक्षितः** = चिनिएनन्

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्यो स्यमन्तक मणिलाई सत्राजित्ले आफ्नो घाँटीमा धारण गरे। मणिको प्रकाशले उनी सूर्य जैँ प्रकाशमान भई द्वारकामा प्रवेश गरे। मणिको अत्यधिक प्रकाशका कारण द्वारकावासीले उनलाई सत्राजित् भनेर चिन्न सकेनन्।

**तं विलोक्य जना दूरात् तेजसा मुष्टदृष्टयः।**

**दीव्यतेऽक्षैर्भगवते शशंसुः सूर्यशङ्किताः॥ ५॥**

**पदार्थ–**
**तं** = ती सत्राजित्लाई
**दूरात्** = टाढैबाट
**विलोक्य** = देखेर
**तेजसा** = उनको तेजद्वारा
**मुष्टदृष्टयः** = आँखा तिर्मिराएका
**सूर्यशङ्किताः** = सूर्य हुन् कि भनेर शङ्का गरिरहेका
**जनाः** = पुरवासी मानिसहरूले
**अक्षैः** = जुवाद्वारा
**दीव्यते** = खेलिरहनुभएका
**भगवते** = भगवान् श्रीकृष्णलाई
**शशंसुः** = सुनाए

**वाक्यार्थ–** द्वारकामा प्रवेश गरेका सत्राजित्लाई द्वारकावासीले टाढैबाट देखे। उनको तेजले

द्वारकावासीको आँखा तिर्मिराए। उनीहरूलाई साक्षात् सूर्यदेव आएको आशङ्का भयो। यसैले उनीहरूले त्यो कुरा जुवा खेलिरहनुभएका भगवान् श्रीकृष्णलाई सुनाए।

**नारायण नमस्तेऽस्तु शङ्खचक्रगदाधर।**
**दामोदरारविन्दाक्ष गोविन्द यदुनन्दन॥ ६॥**

**पदार्थ–**
**नारायण** = हे नारायण
**शङ्खचक्रगदाधर** = हे शङ्ख, चक्र र गदा धारण गर्ने
**दामोदर** = हे दामोदर
**अरविन्दाक्ष** = हे कमलनयन
**गोविन्द** = हे गोविन्द
**यदुनन्दन** = हे यदुनन्दन
**ते** = हजुरलाई
**नमः** = नमस्कार
**अस्तु** = छ

**वाक्यार्थ–** शङ्ख, चक्र र गदा धारण गर्नुभएका हे नारायण! हे कमलनयन दामोदर! हे यदुनन्दन गोविन्द! हजुरलाई हाम्रो नमस्कार छ।

**एष आयाति सविता त्वां दिदृक्षुर्जगत्पते।**
**मुष्णन् गभस्तिचक्रेण नृणां चक्षूंषि तिग्मगुः॥ ७॥**

**पदार्थ–**
**जगत्पते** = हे जगत्का पति
**गभस्तिचक्रेण** = प्रकाशपुञ्जद्वारा
**नृणां** = मनुष्यहरूको
**चक्षूंषि** = आँखाहरूलाई
**मुष्णन्** = तिर्मिर-तिर्मिर पार्दै
**तिग्मगुः** = ज्यादै चम्किलो प्रकाश भएका
**एषः** = यी
**सविता** = सूर्य
**त्वां** = हजुरलाई
**दिदृक्षुः** = दर्शन गर्ने इच्छा गरी
**आयाति** = आउँदै हुनुहुन्छ

**वाक्यार्थ–** हे जगत्पति! ज्यादै चम्किलो प्रकाश भएका श्रीसूर्य आफ्ना प्रकाशपुञ्जद्वारा मनुष्यहरूको आँखालाई तिर्मिर-तिर्मिर बनाउँदै हजुरको दर्शन गर्न आउँदै हुनुहुन्छ।

**नन्वन्विच्छन्ति ते मार्गं त्रिलोक्यां विबुधर्षभाः।**
**ज्ञात्वाद्य गूढं यदुषु द्रष्टुं त्वां यात्यजः प्रभो॥ ८॥**

**पदार्थ–**
**ननु** = निश्चय नै
**विबुधर्षभाः** = श्रेष्ठ देवताहरू
**त्रिलोक्यां** = तीनै लोकमा
**ते** = हजुरको
**मार्गं** = प्राप्तिस्थान
**अन्विच्छन्ति** = खोजी गर्दछन्
**अद्य** = आज
**यदुषु** = यदुकुलमा
**गूढं** = आफ्नो वास्तविक स्वरूपलाई लुकाएर बस्नुभएको
**ज्ञात्वा** = थाहा पाएर
**प्रभो** = हे प्रभु
**अजः** = (जन्मरहित) सूर्य
**त्वां** = हजुरलाई
**द्रष्टुं** = हेर्न
**याति** = आउँदै हुनुहुन्छ

**वाक्यार्थ–** हे भगवान्! ब्रह्मा आदि श्रेष्ठ देवताहरू पनि तीनै लोकमा हजुरलाई प्राप्त गर्ने

मार्गको खोजीमा रहन्छन्। हजुरले आफ्नो वास्तविक स्वरूपलाई लुकाएर यदुवंशीहरूको वेष धारण गरी यहाँ बस्नुभएको थाहा पाएर आज भगवान् सूर्य हजुरको दर्शन गर्न आउँदै हुनुहुन्छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**निशम्य बालवचनं प्रहस्याम्बुजलोचनः।**

**प्राह नासौ रविर्देवः सत्राजिन्मणिना ज्वलन्॥ ९॥**

**पदार्थ–**
**बालवचनं** = बालक झैँ वास्तविकता नबुझेका द्वारकावासीको कुरा
**निशम्य** = सुनेर
**अम्बुजलोचनः** = कमलनयन
श्रीकृष्णले
**प्रहस्य** = हाँसेर
**प्राह** = भन्नुभयो
**असौ** = ती आइरहेका
**देवः** = प्रकाशमान् भगवान्
**रविः** = सूर्य
**न** = होइनन्
**मणिना** = स्यमन्तक मणिद्वारा
**ज्वलन्** = प्रकाशित भएका
**सत्राजित्** = सत्राजित् हुन्

**वाक्यार्थ–** वास्तविकता नबुझेका द्वारकावासीको बालकको जस्तो कुरा सुनेर भगवान् श्रीकृष्णले हाँस्दै भन्नुभयो– ती आउँदै गरेका प्रकाशमान पुरुष भगवान् सूर्य होइनन्, घाँटीमा लगाएको स्यमन्तक मणिद्वारा प्रकाशमान भएका सत्राजित् हुन्।

**सत्राजित् स्वगृहं श्रीमत्कृतकौतुकमङ्गलम्।**

**प्रविश्य देवसदने मणिं विप्रैर्न्यवेशयत्॥ १०॥**

**पदार्थ–**
**सत्राजित्** = सत्राजित्ले
**कृतकौतुकमङ्गलं** = कुतूहलतापूर्वक मङ्गलोत्सव गरिएको
**श्रीमत्** = ऐश्वर्यसम्पन्न
**स्वगृहं** = आफ्नो घरमा
**प्रविश्य** = प्रवेश गरेर
**विप्रैः** = ब्राह्मणहरूद्वारा
**देवसदने** = आफ्नो इष्टदेव सूर्यको मन्दिरमा
**मणिं** = मणिलाई
**न्यवेशयत्** = स्थापित गरे

**वाक्यार्थ–** सत्राजित् सिधै आएर आफ्नो ऐश्वर्यशाली घरमा प्रवेश गरे। त्यस वेला उनको घरमा भव्य मङ्गलोत्सव गरिएको थियो। त्यसपछि उनले ब्राह्मणहरूलाई अह्राएर त्यो स्यमन्तक मणिलाई लगेर आफ्नो इष्टदेव सूर्यको मन्दिरमा स्थापित गरे।

**दिने दिने स्वर्णभारानष्टौ स सृजति प्रभो।**

**दुर्भिक्षमार्यरिष्टानि सर्पाधिव्याधयोऽशुभाः।**

**न सन्ति मायिनस्तत्र यत्रास्तेऽभ्यर्चितो मणिः॥ ११॥**

**पदार्थ–**
**प्रभो** = हे समर्थ राजा परीक्षित्
**सः** = त्यो मणिले

**दिने दिने** = प्रतिदिन
**अष्टौ** = आठ
**स्वर्णभारान्** = सुनको भार (२० तुलाको १ भार हुन्छ, आठ भारमा लगभग ९.७ किलोग्राम हुन्छ)
**सृजति** = उत्पन्न गर्दथ्यो
**अभ्यर्चितः** = पूजित
**मणिः** = त्यो मणि
**यत्र** = जुन ठाउँमा
**आस्ते** = रहन्थ्यो
**तत्र** = त्यो ठाउँमा
**दुर्भिक्षमार्यरिष्टानि** = अनिकाल, अकालमृत्यु, ग्रहपीडा
**सर्पाधिव्याधयः** = सर्पभय, मानसिक सन्ताप, शारीरिक रोग
**अशुभाः** = अन्य दुःखका कारण चोर आदि
**मायिनः** = मायावी दैत्य आदिबाट हुने भय
**न सन्ति** = हुँदैनन्

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्यो स्यमन्तक मणिले प्रत्येक दिन आठ भार (लगभग ९.७ किलोग्राम) सुन प्रदान गर्दथ्यो। त्यति मात्र नभएर जुन ठाउँमा त्यो मणिलाई पूजा गरेर राखिन्थ्यो, त्यस ठाउँमा अनावृष्टिद्वारा हुने दुर्भिक्ष, अकालमृत्यु, ग्रहबाट हुने पीडा, सर्पभय, मानसिक ताप, शारीरिक रोग, दुःखका अन्य हेतु चोरभय, मायावी दैत्यहरूको भय आदि केही पनि हुँदैनथ्यो।

**स याचितो मणिं क्वापि यदुराजाय शौरिणा।**
**नैवार्थकामुकः प्रादाद् याच्ञाभङ्गमतर्कयन्॥ १२॥**

**पदार्थ–**
**क्व अपि** = कुनै दिन
**शौरिणा** = भगवान् श्रीकृष्णद्वारा
**यदुराजाय** = यदुराज उग्रसेनका लागि
**मणिं** = मणि
**याचितः** = मागिएका (तर)
**अर्थकामुकः** = धनको लोभी
**सः** = ती सत्राजित्ले
**याच्ञाभङ्गं** = भगवान्‌को आज्ञाको उल्लङ्घन गर्दा हुने अनर्थलाई
**अतर्कयन्** = विचार नगरी
**न एव प्रादात्** = दिएनन्

**वाक्यार्थ–** एक दिन भगवान् श्रीकृष्णले त्यस्तो प्रभावशाली मणि यदुराज उग्रसेनलाई दिनुहोस् भनी सत्राजित्सँग अनुरोध गर्नुभयो, तर सत्राजित् अत्यन्त लोभी थिए। त्यसैले भगवान्‌को आज्ञा नमान्दा अनर्थ हुन्छ भन्ने उनले विचारै गरेनन्। अतः भगवान्‌को आज्ञा नमानी उनले मणि दिएनन्।

**तमेकदा मणिं कण्ठे प्रतिमुच्य महाप्रभम्।**
**प्रसेनो हयमारुह्य मृगयां व्यचरद् वने॥ १३॥**

**पदार्थ–**
**एकदा** = एक दिन
**प्रसेनः** = सत्राजित्का भाइ प्रसेनले
**महाप्रभं** = अत्यन्त चम्किलो
**तं** = त्यो
**मणिं** = मणिलाई
**कण्ठे** = घाँटीमा
**प्रतिमुच्य** = झुन्ड्याएर
**हयं** = घोडामा
**आरुह्य** = चढेर
**मृगयां** = शिकार खेल्न
**वने** = वनमा
**व्यचरत्** = घुम्न थाले

**वाक्यार्थ–** एक दिन सत्राजित्का भाइ प्रसेन अत्यन्त चम्किलो त्यस मणिलाई आफ्नो घाँटीमा

भिरेर शिकार खेल्नका लागि घोडामा चढी वनमा विचरण गर्न थाले।

**प्रसेनं सहयं हत्वा मणिमाच्छिद्य केशरी।**

**गिरिं विशन् जाम्बवता निहतो मणिमिच्छता॥ १४॥**

**पदार्थ–**
**केशरी** = कुनै सिंहले
**सहयं** = घोडासहित
**प्रसेनं** = प्रसेनलाई
**हत्वा** = मारेर
**मणिं** = मणि
**आच्छिद्य** = खोसेर
**गिरिं** = पहाडी गुफामा
**विशन्** = प्रवेश गर्दागर्दै (त्यो सिंह पनि)
**मणिं** = मणि
**इच्छता** = चाहने
**जाम्बवता** = जाम्बवान्द्वारा
**निहतः** = मारियो

**वाक्यार्थ–** कुनै सिंहले वनमा पुगेका प्रसेन र उनको घोडालाई मार्‍यो र मणि लिएर पहाडी गुफामा पस्न लाग्दै थियो, त्यही वेलामा मणि आफूले प्राप्त गर्नका लागि जाम्बवान्ले त्यस सिंहलाई पनि मारिदिए।

**सोऽपि चक्रे कुमारस्य मणिं क्रीडनकं बिले।**

**अपश्यन् भ्रातरं भ्राता सत्राजित् पर्यतप्यत॥ १५॥**

**पदार्थ–**
**सः अपि** = ती जाम्बवान्ले पनि
**बिले** = आफू बस्ने गुफामा
**मणिं** = मणिलाई
**कुमारस्य** = आफ्नो बच्चाका लागि
**क्रीडनकं** = खेल्ने साधन
**चक्रे** = बनाए
**भ्राता** = दाइ
**सत्राजित्** = सत्राजित्
**भ्रातरं** = भाइ प्रसेनलाई
**अपश्यन्** = नदेखेर
**पर्यतप्यत** = अत्यन्त चिन्तित भए

**वाक्यार्थ–** जाम्बवान्ले आफ्नो गुफामा गई आफ्ना बच्चाहरूका लागि त्यो मणि खेल्न दिए। यता दाइ सत्राजित् भाइ प्रसेनलाई कहीँ पनि नदेखेर अत्यन्त चिन्तित भए।

**प्रायः कृष्णेन निहतो मणिग्रीवो वनं गतः।**

**भ्राता ममेति तच्छ्रुत्वा कर्णे कर्णेऽजपन् जनाः॥ १६॥**

**पदार्थ–**
**मणिग्रीवः** = घाँटीमा मणि बाँधेर
**वनं** = वन
**गतः** = गएको
**मम** = मेरो
**भ्राता** = भाइ प्रसेन
**प्रायः** = निश्चय नै
**कृष्णेन** = कृष्णद्वारा
**निहतः** = मारियो
**इति** = यस्तो
**तत्** = सत्राजित्को त्यो कुरो
**श्रुत्वा** = सुनेर
**जनाः** = मान्छेहरू
**कर्णे कर्णे** = कान कानमा
**अजपन्** = खासखुस गर्न थाले

**वाक्यार्थ–** (सत्राजित्ले भन्न थाले–) घाँटीमा मणि बाँधेर वन गएको मेरो भाइलाई कृष्णले नै मारेको हुनुपर्दछ। सत्राजित्को यस्तो कुरा सुनेर द्वारकावासी मान्छेहरू कानेखुसी गर्न थाले।

**भगवांस्तदुपश्रुत्य दुर्यशो लिप्तमात्मनि।**

**मार्ष्टुं प्रसेनपदवीमन्वपद्यत नागरैः॥ १७॥**

**पदार्थ–**
**भगवान्** = भगवान् श्रीकृष्णले
**तत्** = त्यो सत्राजित्को कुरा
**उपश्रुत्य** = सुनेर
**आत्मनि** = आफूमा
**लिप्तं** = लागेको
**दुर्यशः** = दुष्कीर्ति
**मार्ष्टुं** = हटाउन
**नागरैः** = नगरवासीका साथ
**प्रसेनपदवीम्** = प्रसेन गएको ठाउँ वनमा
**अन्वपद्यत** = खोज्न थाल्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले पनि सत्राजित्ले आफूलाई लगाएको आरोप सुन्नुभयो। आफूमा लागेको त्यो दुष्कीर्तिरूप कलङ्कलाई मेट्न भगवान्ले केही नगरवासीहरूलाई साथमा लिएर प्रसेन गएको वनमा गई प्रसेनलाई खोज्न थाल्नुभयो।

**हतं प्रसेनमश्वं च वीक्ष्य केशरिणा वने।**

**तं चाद्रिपृष्ठे निहतमृक्षेण ददृशुर्जनाः॥ १८॥**

**पदार्थ–**
**वने** = वनमा
**केशरिणा** = सिंहद्वारा
**हतं** = मारिएको
**प्रसेनं** = प्रसेन र
**अश्वं च** = घोडालाई पनि
**वीक्ष्य** = देखेर
**तं च** = त्यो सिंहलाई पनि
**अद्रिपृष्ठे** = ऋक्षवान् नामक पर्वतको माथितिर
**ऋक्षेण** = ऋक्षराज जाम्बवान्द्वारा
**निहतं** = मारिएको
**जनाः** = मान्छेहरूले
**ददृशुः** = देखे

**वाक्यार्थ–** जङ्गलमा खोज्दै जाँदा सिंहद्वारा मारिएका प्रसेन र उनको घोडालाई त्यहाँ आएका मान्छेहरूले देखे। त्यो सिंहलाई पनि खोज्दै ऋक्षवान् पर्वतको माथितिर जाँदा त्यसलाई उनीहरूले ऋक्षराज जाम्बवान्द्वारा मारिएको देखे।

**ऋक्षराजबिलं भीममन्धेन तमसावृतम्।**

**एको विवेश भगवानवस्थाप्य बहिः प्रजाः॥ १९॥**

**पदार्थ–**
**बहिः** = गुफाको बाहिर
**प्रजाः** = साथमा आएका मान्छेहरूलाई
**अवस्थाप्य** = राखेर
**भगवान्** = भगवान् श्रीकृष्ण
**एकः** = एक्लै
**अन्धेन** = घना
**तमसा** = अन्धकारद्वारा
**आवृतं** = ढाकिएको
**भीमं** = भयङ्कर
**ऋक्षराजबिलं** = ऋक्षराज जाम्बवान्को गुफामा
**विवेश** = पस्नुभयो

**वाक्यार्थ–** आफूसँग आएका मान्छेहरूलाई बाहिरै राखेर भगवान् श्रीकृष्ण एक्लै ऋक्षराज जाम्बवान्को गुफामा पस्नुभयो। त्यो गुफा घना अन्धकारले व्याप्त भएको कारण अत्यन्त डरलाग्दो थियो।

**तत्र दृष्ट्वा मणिश्रेष्ठं बालक्रीडनकं कृतम्।**
**हर्तुं कृतमतिस्तस्मिन्नवतस्थेऽर्भकान्तिके॥ २०॥**

**पदार्थ–**
**तत्र** = त्यो गुफाभित्र
**बालक्रीडनकं** = बच्चाको खेलौना
**कृतं** = बनाइएको
**मणिश्रेष्ठं** = स्यमन्तक जस्तो उत्तम मणिलाई
**दृष्ट्वा** = देखेर
**हर्तुं** = त्यसलाई हरण गर्न
**कृतमतिः** = निश्चय गर्नुभएका भगवान्
**तस्मिन्** = त्यो गुफाभित्र
**अर्भकान्तिके** = बच्चाको समीपमा
**अवतस्थे** = गएर उभिनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले गुफाभित्र त्यो उत्तम मणि स्यमन्तकलाई बच्चाको खेलौना बनाइएको देख्नुभयो, अनि त्यसलाई हरण गर्ने विचार गरी उहाँ मणि खेलाइरहेका बच्चाहरूको नजिकमा गएर उभिनुभयो।

**तमपूर्वं नरं दृष्ट्वा धात्री चुक्रोश भीतवत्।**
**तच्छ्रुत्वाभ्यद्रवत् क्रुद्धो जाम्बवान् बलिनां वरः॥ २१॥**

**पदार्थ–**
**तं** = ती
**अपूर्वं** = पहिले कहिल्यै नदेखिएको
**नरं** = मान्छे श्रीकृष्णलाई
**दृष्ट्वा** = देखेर
**भीतवत्** = भयभीत भए झैं गरी
**धात्री** = बच्चाहरूकी धाई आमा
**चुक्रोश** = कराइन्
**तत्** = धाईको त्यो चित्कार
**श्रुत्वा** = सुनेर
**क्रुद्धः** = क्रोधित भएका
**बलिनां** = बलशालीहरूमा
**वरः** = श्रेष्ठ
**जाम्बवान्** = जाम्बवान्
**अभ्यद्रवत्** = दौडिएर आए

**वाक्यार्थ–** पहिले कहिल्यै पनि नदेखेको मान्छे भगवान् श्रीकृष्णलाई एक्कासी आफ्नो अगाडि देखेर बच्चाहरूकी धाई आमा भयभीत भएर कराइन्। धाईको त्यो चिच्याहट सुनेर क्रोधित भएका महाबली जाम्बवान् दौडँदै त्यहीँ आइपुगे।

**स वै भगवता तेन युयुधे स्वामिनात्मनः।**
**पुरुषं प्राकृतं मत्वा कुपितो नानुभाववित्॥ २२॥**

**पदार्थ–**
**न अनुभाववित्** = भगवान्को प्रभावलाई नजानेका
**कुपितः** = रिसाएका
**सः वै** = ती जाम्बवान्
**प्राकृतं** = सामान्य लौकिक
**पुरुषं** = पुरुष
**मत्वा** = ठानेर

**आत्मनः** = आफ्नो
**स्वामिना** = स्वामी
**तेन** = ती
**भगवता** = भगवान् श्रीकृष्णसँग
**युयुधे** = युद्ध गर्न थाले

**वाक्यार्थ–** तत्काल अत्यन्त क्रुद्ध भएका कारण जाम्बवान्ले भगवान्को प्रभावलाई बुझ्न सकेनन्। उनले भगवान्लाई सामान्य लौकिक पुरुष ठानेका थिए, त्यसैले उनी आफ्ना स्वामी भगवान् श्रीकृष्णसँग युद्ध गर्न थाले।

**विवरण–** यस श्लोकमा भगवान् श्रीकृष्णसँग जाम्बवान्ले युद्ध गरेको बताइएको छ। भगवान्को स्वरूप अत्यन्त मधुर एवं आह्लादक हुन्छ, भक्तहरूले त्यस स्वरूपलाई देख्नेबित्तिकै आफ्ना प्रभु भनी चिनिहाल्छन्, तर जाम्बवान् भगवान्का परम भक्त हुँदाहुँदै पनि उनले उहाँलाई किन चिनेनन् भन्ने शङ्का हुन्छ। यसको उत्तरमा वल्लभाचार्य लेख्नुहुन्छ– भगवान्ले आफ्नो मायाशक्तिद्वारा आफ्नो माधुर्य र भगवत्तालाई ढाकिदिनुभएको थियो। भक्तको दृष्टि सात्त्विक एवं निर्मल भएको भए त शुद्ध भक्तिले युक्त हृदयमा मायाको प्रभाव नपर्नुपर्ने हो, तर धाई आत्तिएको सुनेपछि शत्रुको आगमन भएको ठानी रिसाएका जाम्बवान्को दृष्टि पनि निर्मल थिएन। त्यसैले उनमा मायाको प्रभाव पऱ्यो र उनले आफ्ना परम आराध्य प्रभुलाई पनि चिन्न सकेनन्। जाम्बवान् भगवान्का भक्त र अद्वितीय वीर थिए। वामन अवतारको क्रममा त्रिविक्रम भगवान्को यश गाउँदै उनले एकै उफ्राइमा समस्त पृथिवीलाई २१ पटक परिक्रमा गरेका थिए भनी पुराणहरूमा बताइएको छ। राम अवतारमा त उनले भगवान् रामलाई ठुलो सहयोग गरेका थिए। यस्ता परमवीर भक्तको दृष्टि पनि झुक्किनुमा भक्तको अवस्था र भगवान्को इच्छा दुबै कारण हो।

राम अवतारको क्रममा जाम्बवान्को बलशक्तिको प्रयोग भएन। उनीसमानको बलशाली प्रतिद्वन्द्वी नभएकाले भगवान्ले उनलाई युद्धमा बाहुबलको प्रयोग नगरी बुद्धिशक्तिको मात्र प्रयोग गर्न भन्नुभएको थियो। रावणविजयपछि उनले आफूले राम्ररी युद्ध गर्न नपाएकाले युद्ध गर्ने इच्छा अपूरो रहेको बिन्ती गरे, भगवान्ले अर्को जन्ममा इच्छा पूरा हुने वर दिनुभयो। यता तृणावर्त, व्योमासुर, कंस आदि स-साना दैत्यहरूलाई मार्दा भगवान् श्रीकृष्णको पनि युद्ध गर्ने इच्छा पूरा भएन। त्यसैले आफ्नो इच्छा पनि पूरा गर्न उहाँले आफ्नै भक्त महाबली जाम्बवान्सँगै लड्ने विचार गर्नुभयो। यसबाट उनको युद्धइच्छा पनि पूरा हुन्थ्यो। यसरी मल्लयुद्ध गर्नका लागि नै भगवान्ले आफ्नो माधुर्य र ईश्वरीयतालाई मायाद्वारा ढाकिदिनुभयो। राम अवतारमा जाम्बवान्को ज्ञानशक्तिलाई भगवान्ले स्वीकार गर्नुभएको थियो भने अहिले कृष्णावतारमा उनको बलशक्तिलाई पनि भगवान्ले स्वीकार गर्नुभयो। यसरी उनका सबै वस्तु स्वीकार गरेर भगवान्ले उनलाई मुक्त गरिदिनुभयो।

**द्वन्द्वयुद्धं सुतुमुलमुभयोर्विजिगीषतोः।**
**आयुधाश्मद्रुमैर्दोर्भिः क्रव्यार्थे श्येनयोरिव॥ २३॥**
**आसीत् तदष्टाविंशाहमितरेतरमुष्टिभिः।**
**वज्रनिष्पेषपरुषैरविश्रममहर्निशम्॥ २४॥**

**पदार्थ–**
**विजिगीषतोः** = जित्न चाहने
**उभयोः** = कृष्ण र जाम्बवान्को
**आयुधाश्मद्रुमैः** = विभिन्न शस्त्र, ढुङ्गा, रुख आदिको प्रहारद्वारा
**दोर्भिः** = बाहुद्वारा
**वज्रनिष्पेषपरुषैः** = वज्रप्रहारसमान कठोर
**इतरेतरमुष्टिभिः** = परस्परमा मुक्का प्रहारद्वारा
**अविश्रमं** = विश्राम नगरी
**अहर्निशं** = दिनरात
**अष्टाविंशाहं** = अठ्ठाईस दिनसम्म
**क्रव्यार्थे** = मासुका लागि
**श्येनयोः इव** = दुई ओटा बाजको झैं
**सुतुमुलं** = घमासान
**द्वन्द्वयुद्धं** = द्वन्द्वयुद्ध
**आसीत्** = भयो

**वाक्यार्थ–** जसरी मासुका लागि दुई ओटा बाज लड्दछन्, त्यसै गरी मणिका लागि आ–आफ्नो विजय चाहने श्रीकृष्ण र जाम्बवान्का बिच विभिन्न शस्त्रास्त्र प्रहारद्वारा, ढुङ्गा हानेर, उखेलिएका रुख आदिद्वारा र परस्पर वज्रसमान आफ्ना कठोर मुक्काहरू प्रहार गर्दै अठ्ठाईस दिनसम्म घमासान द्वन्द्वयुद्ध भयो।

**कृष्णमुष्टिविनिष्पातनिष्पिष्टाङ्गोरुबन्धनः।**
**क्षीणसत्त्वः स्विन्नगात्रस्तमाहातीव विस्मितः॥ २५॥**

**पदार्थ–**
**कृष्णमुष्टिविनिष्पातनिष्पिष्टाङ्गोरुबन्धनः** = भगवान् श्रीकृष्णको मुक्काको आघातद्वारा ठुला–ठुला मांसपेशीहरू शिथिल भएका
**क्षीणसत्त्वः** = शक्ति नष्ट भएका
**स्विन्नगात्रः** = पसिनाले शरीर भिजेका
**अतीव विस्मितः** = (शक्ति क्षय भएका कारण) अत्यन्त चकित भएका जाम्बवान्ले
**तं** = ती श्रीकृष्णलाई
**आह** = भने

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले मुक्का हान्दा जाम्बवान्का ठुला–ठुला मांसपेशीहरू शिथिल भए। उनको धैर्यशक्ति हरायो। उनको शरीर पसिनाले लतपत भएर पूरै भिज्यो। यसरी शक्ति क्षीण भएकोमा आश्चर्यचकित भएर उनले श्रीकृष्णलाई भने।

**जाने त्वां सर्वभूतानां प्राण ओजः सहो बलम्।**
**विष्णुं पुराणपुरुषं प्रभविष्णुमधीश्वरम्॥ २६॥**

**पदार्थ–**
**सर्वभूतानां** = सम्पूर्ण प्राणीहरूको
**प्राणः** = प्राण (जीवनशक्ति)
**ओजः** = इन्द्रियशक्ति
**सहः** = अन्तःकरणशक्ति
**बलं** = शारीरिक बल तथा
**विष्णुं** = सर्वव्यापक
**पुराणपुरुषं** = पुराणपुरुष
**प्रभविष्णुं** = धेरै प्रभाव भएका
**अधीश्वरं** = सर्वनियन्ता, सर्वसंहर्ता
**त्वां** = हजुरलाई
**जाने** = चिनैं

**वाक्यार्थ–** हजुर नै सम्पूर्ण प्राणीहरूको प्राण (जीवन) शक्ति, इन्द्रियादिशक्ति, अन्तःकरणशक्ति र शारीरिक शक्ति हुनुहुन्छ। हजुर नै सर्वव्यापक, पुराणपुरुष सर्वस्रष्टा, धेरै प्रभाव भएका र

सर्वनियन्ता र सर्वसंहर्ता हुनुहुन्छ, हजुरलाई मैले चिनें।

**त्वं हि विश्वसृजां स्रष्टा सृज्यानामपि यच्च सत्।**
**कालः कलयतामीशः पर आत्मा तथात्मनाम्॥ २७॥**

**पदार्थ–**
**त्वं हि** = हजुर नै
**विश्वसृजां** = संसारको रचना गर्ने महत् आदि तत्त्वहरूको अथवा ब्रह्मा आदि देवताहरूको
**स्रष्टा** = स्रष्टा (हुनुहुन्छ)
**सृज्यानाम् अपि** = सृष्टि हुने पदार्थहरूको पनि
**यत् च** = जुन
**सत्** = परमार्थभूत उपादान सत् वस्तु छ (त्यो पनि हजुर नै हुनुहुन्छ)
**कलयताम्** = नाशकहरूको पनि
**ईशः** = नियन्त्रक
**कालः** = काल (हजुर नै हुनुहुन्छ)
**तथा** = त्यसै गरी
**आत्मनाम्** = जीवात्माहरूको पनि
**आत्मा** = परमात्मा हजुर
**परः** = असङ्ग हुनुहुन्छ

**वाक्यार्थ–** हजुर संसारको सृष्टि गर्ने महत् आदि तत्त्व अथवा ब्रह्मा आदि देवताहरूको पनि स्रष्टा हुनुहुन्छ। सृष्टि हुने पदार्थहरूमा रहने उपादान कारणरूप सत् वस्तु पनि हजुर नै हुनुहुन्छ। संहारकहरूलाई पनि नियमन गर्ने काल पनि हजुर नै हुनुहुन्छ। भिन्न-भिन्न रूपमा रहेका जीवात्माहरूमा रहने परमात्मा हजुर वस्तुतः असङ्ग हुनुहुन्छ।

**यस्येषदुत्कलितरोषकटाक्षमोक्षै-**
**र्वर्त्मादिशत् क्षुभितनक्रतिमिङ्गिलोऽब्धिः।**
**सेतुः कृतः स्वयश उज्ज्वलिता च लङ्का**
**रक्षःशिरांसि भुवि पेतुरिषुक्षतानि॥ २८॥**

**पदार्थ–**
**यस्य** = जुन हजुरको
**ईषदुत्कलितरोषकटाक्षमोक्षैः** = अलिकति प्रकट भएको क्रोधसहितको कटाक्षपूर्ण दृष्टिद्वारा
**क्षुभितनक्रतिमिङ्गिलः** = ठुला-ठुला जलजन्तु र महामत्स्यद्वारा उथलपुथल भएको
**अब्धिः** = समुद्रले (हजुरलाई)
**वर्त्म** = बाटो
**अदिशत्** = दिए (तापनि हजुरद्वारा)
**सेतुः** = समुद्रमा पुल
**कृतः** = बनाइयो
**स्वयशः** = आफ्नो कीर्ति राखियो
**लङ्का च** = लङ्का पनि
**उज्ज्वलिताः** = डढाइयो
**इषुक्षतानि** = बाणद्वारा काटिएका
**रक्षःशिरांसि** = राक्षसका शिरहरू
**भुवि** = पृथिवीमा
**पेतुः** = खसेका थिए (हजुर त्यही मेरो स्वामी श्रीराम हुनुहुन्छ)

**वाक्यार्थ–** भगवान्! हजुरले आफ्ना आँखामा अलिकति क्रोधको भावलाई प्रकट गरेर समुद्रतिर दृष्टि दिँदा समुद्रमा भएका महाकाय जलजन्तु र ठुला-ठुला माछाहरू छटपटाउन लागे अनि

भयभीत भई समुद्रले हजुरलाई बाटो दिएका थिए तापनि हजुरले आफ्नो यशलाई समुज्वल बनाउन समुद्रमा पुल बनाउनुभयो। लङ्कालाई डढाएर नष्ट गरिदिनुभयो। त्यसवेला हजुरको बाणद्वारा काटिएका राक्षसहरूका शिरहरू पृथिवीका यत्र तत्र खसेका थिए। (कृष्णको रूपमा आउनुभएको हजुर उनै मेरा स्वामी श्रीराम हुनुहुन्छ)।

**इति विज्ञातविज्ञानमृक्षराजानमच्युतः।**

**व्याजहार महाराज भगवान् देवकीसुतः॥ २९॥**

**अभिमृश्यारविन्दाक्षः पाणिना शङ्करेण तम्।**

**कृपया परया भक्तं मेघगम्भीरया गिरा॥ ३०॥**

**पदार्थ–**
**महाराज** = हे राजा परीक्षित्
**इति** = यसरी
**विज्ञातविज्ञानं** = सच्चिदानन्दरूप भगवान्लाई चिनेका
**तं** = ती
**भक्तं** = भक्त
**ऋक्षराजानं** = ऋक्षराज जाम्बवान्लाई
**अच्युतः** = अच्युत
**अरविन्दाक्षः** = कमलनयन
**भगवान्** = भगवान्
**देवकीसुतः** = देवकीपुत्र श्रीकृष्णले
**परया कृपया** = असीम कृपापूर्वक
**शङ्करेण** = सुखदायी
**पाणिना** = आफ्नो हातले
**अभिमृश्य** = मन्द स्पर्श गरेर
**मेघगम्भीरया** = मेघको आवाज जस्तो गम्भीर
**गिरा** = वाणीद्वारा
**व्याजहार** = भन्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! यसरी ऋक्षराज जाम्बवान्ले सच्चिदानन्दरूप भगवान्लाई चिनेपछि देवकीपुत्र कमलनयन अच्युत भगवान् श्रीकृष्णले आफ्ना कल्याणकारी शीतल करकमलले उनको शरीरमा मन्द स्पर्श गर्नुभयो, अनि असीम कृपापूर्वक प्रेमले मेघको आवाज जस्तो गम्भीर वाणीद्वारा आफ्ना भक्त जाम्बवान्लाई भन्नुभयो।

**मणिहेतोरिह प्राप्ता वयमृक्षपते बिलम्।**

**मिथ्याभिशापं प्रमृजन्नात्मनो मणिनामुना॥ ३१॥**

**पदार्थ–**
**ऋक्षपते** = हे ऋक्षराज
**वयं** = हामी
**मणिहेतोः** = मणिका कारण
**बिलं** = यो गुफामा
**प्राप्ताः** = आएका हौँ
**अमुना** = यो स्यमन्तक
**मणिना** = मणिद्वारा
**आत्मनः** = मेरो
**मिथ्याभिशापं** = झुटो गाल
**प्रमृजन्** = हटाउन
**इह** = यहाँ (आएको छु)

**वाक्यार्थ–** हे ऋक्षराज जाम्बवान्! हामीहरू मणि लिनका लागि भनेर यो गुफामा आएका हौँ। यही मणिका कारण मेरो जुन दुष्कीर्ति भएको छ त्यसलाई म यही मणिद्वारा हटाउन चाहन्छु, त्यसैले म यहाँ आएको छु।

**इत्युक्तः स्वां दुहितरं कन्यां जाम्बवतीं मुदा ।**
**अर्हणार्थं स मणिना कृष्णायोपजहार ह ॥ ३२ ॥**

**पदार्थ—**
**इति** = यसप्रकार
**उक्तः** = बताइएका
**सः** = ती जाम्बवान्ले
**अर्हणार्थं** = भगवान्को पूजा गर्नका लागि
**मणिना** = मणिसहित
**स्वां** = आफ्नी
**दुहितरं** = छोरी
**जाम्बवतीं** = जाम्बवती नाम गरेकी
**कन्यां** = कन्या
**मुदा** = हर्षपूर्वक
**कृष्णाय** = श्रीकृष्णलाई
**ह** = निश्चय नै
**उपजहार** = समर्पण गरे

**वाक्यार्थ—** भगवान् श्रीकृष्णले यसप्रकार सबै कुरा बताइसकेपछि जाम्बवान्ले उहाँको पूजाका लागि मणिसहित आफ्नी छोरी जाम्बवती नाम गरेकी कन्या पनि भगवान्लाई समर्पण गरे।

**अदृष्ट्वा निर्गमं शौरेः प्रविष्टस्य बिलं जनाः ।**
**प्रतीक्ष्य द्वादशाहानि दुःखिताः स्वपुरं ययुः ॥ ३३ ॥**

**पदार्थ—**
**जनाः** = (गुफाबाहिर बसेका) मान्छेहरू
**द्वादशाहानि** = बाह्र दिनसम्म
**प्रतीक्ष्य** = प्रतीक्षा गरेर पनि
**बिलं** = गुफामा
**प्रविष्टस्य** = प्रवेश गर्नुभएका
**शौरेः** = श्रीकृष्णको
**निर्गमं** = बाहिर आगमन
**अदृष्ट्वा** = नदेखेर
**दुःखिताः** = अत्यन्त दुःखी भई
**स्वपुरं** = आफ्नो नगर द्वारका
**ययुः** = फर्किए

**वाक्यार्थ—** गुफाबाहिर बसेका मान्छेहरूले बाह्र दिनसम्म भगवान्को प्रतीक्षा गरे तर भगवान् गुफाबाट बाहिर निस्कनुभएन। त्यसैले ती मान्छेहरू अत्यन्त दुःखी भएर आफ्नो नगर द्वारका फर्किए।

**निशम्य देवकी देवी रुक्मिण्यानकदुन्दुभिः ।**
**सुहृदो ज्ञातयोऽशोचन् बिलात् कृष्णमनिर्गतम् ॥ ३४ ॥**

**पदार्थ—**
**बिलात्** = गुफाबाट
**अनिर्गतं** = बाहिर ननिस्कनुभएका
**कृष्णं** = श्रीकृष्णलाई
**निशम्य** = सुनेर
**देवी** = देवी
**देवकी** = देवकी
**रुक्मिणी** = रुक्मिणी
**आनकदुन्दुभिः** = वसुदेव
**सुहृदः** = इष्टमित्र
**ज्ञातयः** = सम्बन्धी जनहरू
**अशोचन्** = शोक गर्न थाले

**वाक्यार्थ—** द्वारका आइपुगेका ती मान्छेहरूको मुखबाट 'श्रीकृष्ण गुफाबाहिर निस्कनुभएन' भन्ने सुनेर देवी देवकी, रुक्मिणी, वसुदेव, इष्टमित्र तथा अन्य सम्बन्धी जनहरूले पनि शोक गर्न थाले।

**सत्राजितं शपन्तस्ते दुःखिता द्वारकौकसः ।**

**उपतस्थुर्महामायां दुर्गां कृष्णोपलब्धये ॥ ३५ ॥**

**पदार्थ–**
**दुःखिताः** = दुःखी भएका
**ते** = ती
**द्वारकौकसः** = द्वारकावासी
जनहरू
**सत्राजितं** = सत्राजित्लाई
**शपन्तः** = गाली गर्दै
**कृष्णोपलब्धये** = श्रीकृष्णको
प्राप्तिका लागि
**महामायां दुर्गां** = महामाया
दुर्गादेवी भएको स्थानमा
**उपतस्थुः** = पुगे

**वाक्यार्थ–** दुःखी भएका ती द्वारकावासीहरूले सत्राजित्लाई गाली गर्न थाले। त्यसपछि श्रीकृष्णको प्राप्तिका लागि उनीहरू चन्द्रभागा नामकी महामाया दुर्गाको शरणमा पुगे।

**तेषां तु देव्युपस्थानात् प्रत्यादिष्टाशिषा स च ।**

**प्रादुर्बभूव सिद्धार्थः सदारो हर्षयन् हरिः ॥ ३६ ॥**

**पदार्थ–**
**तेषां तु** = ती द्वारकावासीहरूको
**देव्युपस्थानात्** = देवीको
उपासनाका कारण
**प्रत्यादिष्टाशिषा च** = भगवतीले
दिएको आशीर्वादद्वारा पनि
**सिद्धार्थः** = मणि प्राप्त
गर्नुभएका
**सदारः** = नववधूले सहित
**सः** = ती
**हरिः** = श्रीकृष्ण
**हर्षयन्** = सबैलाई प्रसन्न गराउँदै
**प्रादुर्बभूव** = प्रकट हुनुभयो

**वाक्यार्थ–** द्वारकावासीले गरेको उपासनाबाट प्रसन्न हुनुभएकी भगवती दुर्गाले दिएको आशीर्वादले गर्दा त्यही वेला मणि लिनुभएका सफलमनोरथ भगवान् श्रीकृष्ण नववधू जाम्बवतीका साथ प्रकट हुनुभयो र द्वारकावासीहरू अति प्रसन्न भए।

**उपलभ्य हृषीकेशं मृतं पुनरिवागतम् ।**

**सह पत्न्या मणिग्रीवं सर्वे जातमहोत्सवाः ॥ ३७ ॥**

**पदार्थ–**
**मृतं** = मरेको बन्धुजन
**पुनः** = फेरि
**आगतं इव** = आए झैँ
**पत्न्या सह** = पत्नी जाम्बवतीले
सहित आउनुभएका
**मणिग्रीवं** = घाँटीमा मणि धारण
गर्नुभएका
**हृषीकेशं** = श्रीकृष्णलाई
**उपलभ्य** = प्राप्त गरेर
**सर्वे** = सम्पूर्ण द्वारकावासीहरू
**जातमहोत्सवाः** = हर्षोत्सवले
आनन्दित भए

**वाक्यार्थ–** जसरी लोकमा मरेको बन्धुजन फर्केर आयो भने हर्षोत्सव हुन्छ, त्यसै गरी भगवान् श्रीकृष्ण घाँटीमा मणिधारण गरेर नयाँ दुलही जाम्बवतीका साथ आउनुभएको देखेर द्वारकावासीहरू हर्षविभोर भए।

**सत्राजितं समाहूय सभायां राजसन्निधौ ।**

**प्राप्तिं चाख्याय भगवान् मणिं तस्मै न्यवेदयत् ॥ ३८ ॥**

**पदार्थ–**
**भगवान्** = भगवान्ले
**सभायां** = सभामा
**राजसन्निधौ** = राजा उग्रसेन समक्ष
**सत्राजितं** = सत्राजित्लाई
**समाहूय** = बोलाएर
**प्राप्तिं च** = मणि प्राप्त भएका सबै कुराहरू पनि
**आख्याय** = बताएर
**तस्मै** = ती सत्राजित्लाई
**मणिं** = मणि
**न्यवेदयत्** = दिनुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्णले महाराज उग्रसेनको राजसभामा सत्राजित्लाई बोलाएर मणि कसरी प्राप्त भयो भन्ने विषयमा सम्पूर्ण वृत्तान्त बताउनुभयो र मणि तिनै सत्राजित्लाई प्रदान गर्नुभयो ।

**स चातिव्रीडितो रत्नं गृहीत्वावाङ्मुखस्ततः ।**

**अनुतप्यमानो भवनमगमत् स्वेन पाप्मना ॥ ३९ ॥**

**पदार्थ–**
**स्वेन** = आफ्नो
**पाप्मना** = (भगवान्को आज्ञाको उल्लङ्घन र मिथ्या अपवाद आदि) पापद्वारा
**अतिव्रीडितः** = अत्यन्त लज्जित भएका
**सः च** = ती सत्राजित्ले पनि
**अनुतप्यमानः** = पछुतो मान्दै
**अवाङ्मुखः** = उँधोमुन्टो लगाएर
**ततः** = त्यसपछि (राजसभाबाट)
**रत्नं** = स्यमन्तक मणि
**गृहीत्वा** = लिएर
**भवनं** = घर
**अगमत्** = गए

**वाक्यार्थ–** भगवान्को आज्ञाको उल्लङ्घन गरी उहाँको मिथ्या अपवाद फैलाएर सत्राजित्ले जुन पाप गरेका थिए, त्यही पापका कारण उनी पछुतो मान्दै उँधोमुन्टो लगाएर स्यमन्तक मणि लिएर राजसभाबाट घर गए ।

**सोऽनुध्यायंस्तदेवाघं बलवद्विग्रहाकुलः ।**

**कथं मृजाम्यात्मरजः प्रसीदेद् वाच्युतः कथम् ॥ ४० ॥**

**किं कृत्वा साधु मह्यं स्यान्न शपेद् वा जनो यथा ।**

**अदीर्घदर्शनं क्षुद्रं मूढं द्रविणलोलुपम् ॥ ४१ ॥**

**पदार्थ–**
**बलवद्विग्रहाकुलः** = बलवान् व्यक्तिसँग गरेको विरोधका कारण भयभीत भएका
**सः** = ती सत्राजित्
**तत् एव** = त्यही नै
**अघं** = आफूले गरेको अपराध
**अनुध्यायन्** = चिन्तन गर्दै (बस्न थाले)
**आत्मरजः** = आफ्नो अपराधलाई
**कथं** = कसरी

**मृजामि** = शोधन गरूँ
**कथं वा** = कसरी
**अच्युतः** = श्रीकृष्ण
**प्रसीदेत्** = प्रसन्न हुनुहोला
**किं** = के
**कृत्वा** = गरेर
**मह्यं** = मेरो
**साधु** = कल्याण
**स्यात्** = होला
**अदीर्घदर्शनं** = अदूरदर्शी
**क्षुद्रं** = क्षुद्र
**मूढं** = मूर्ख
**द्रविणलोलुपं** = धनमा लुब्ध मलाई
**जनः** = मान्छेहरूले
**यथा वा** = जसरी
**न शपेत्** = निन्दा नगरून् (त्यस्तो के काम गरूँ)

**वाक्यार्थ–** महाबली श्रीकृष्णसँग द्वेष गरेको हुनाले सत्राजित् भयभीत थिए। उनी सधैँ आफूले गरेको अपराध सम्झिएर बस्न थाले। म अब आफ्नो अपराधको प्रायश्चित्त कसरी गरूँ ? मैले के काम गर्दा श्रीकृष्ण मप्रति प्रसन्न हुनुहोला ? के गर्दा मेरो कल्याण होला ? म अदूरदर्शी रहेछु, म त्यस्तो के काम गरूँ, जसलाई देखेर द्वारकावासी सम्पूर्ण मान्छेहरूले मजस्तो नीच, मूर्ख र धनको लोभीलाई निन्दा नगरून् ?

**दास्ये दुहितरं तस्मै स्त्रीरत्नं रत्नमेव च।**
**उपायोऽयं समीचीनस्तस्य शान्तिर्न चान्यथा ॥ ४२ ॥**

**पदार्थ–**
**तस्मै** = ती श्रीकृष्णलाई
**स्त्रीरत्नं** = स्त्रीहरूमा श्रेष्ठ
**दुहितरं** = आफ्नी छोरी सत्यभामा र
**रत्नं च** = स्यमन्तक मणि पनि
**दास्ये** = दिनेछु
**अयं एव** = यही नै
**उपायः** = उपाय
**समीचीनः** = ठिक छ
**अन्यथा च** = यो दानविना
**तस्य** = त्यो अपराधको
**शान्तिः** = शोधन
**न** = हुन सक्दैन

**वाक्यार्थ–** म अब स्त्रीहरूमा उत्तम मेरी छोरी सत्यभामा र स्यमन्तक मणि दुबै श्रीकृष्णलाई नै समर्पण गर्दछु। मेरो अपराधको शोधन र श्रीकृष्णप्रतिको द्वेषलाई शान्त गर्ने यो नै उत्तम उपाय हो। यसका लागि अरू कुनै उपाय छैन।

**एवं व्यवसितो बुद्ध्या सत्राजित् स्वसुतां शुभाम्।**
**मणिं च स्वयमुद्यम्य कृष्णायोपजहार ह ॥ ४३ ॥**

**पदार्थ–**
**बुद्ध्या** = बुद्धिद्वारा
**एवं** = यसरी
**व्यवसितः** = निश्चय गरेका
**सत्राजित्** = सत्राजित्ले
**शुभां** = शुभलक्षणले सम्पन्न
**स्वसुतां** = आफ्नी छोरी सत्यभामा र
**मणिं च** = मणि पनि
**स्वयं** = आफैँले
**उद्यम्य** = उद्यम गरी
**कृष्णाय** = श्रीकृष्णलाई
**ह** = निश्चय नै
**उपजहार** = समर्पण गरे

**वाक्यार्थ–** आफ्नै बुद्धिद्वारा यसरी निश्चय गरेर सत्राजित्ले आफ्नी शुभलक्षणसम्पन्न सुशील कन्या सत्यभामा र स्यमन्तक मणि दुबै श्रीकृष्णलाई समर्पण गरे।

**तां सत्यभामां भगवानुपयेमे यथाविधि ।**
**बहुभिर्याचितां शीलरूपौदार्यगुणान्विताम् ॥ ४४ ॥**

**पदार्थ–**
**बहुभिः** = धेरै पुरुषहरूद्वारा
**याचितां** = विवाहका लागि अनुरोध गरिएकी
**शीलरूपौदार्यगुणान्वितां** = शील, रूप, उदारता र सद्गुणहरूले युक्त
**तां** = ती
**सत्यभामां** = सत्यभामालाई
**भगवान्** = भगवान् श्रीकृष्णले
**यथाविधि** = विधि अनुसार
**उपयेमे** = विवाह गर्नुभयो

**वाक्यार्थ–** धेरै पुरुषहरू (कृतवर्मा, शतधन्वा आदि)द्वारा विवाहका लागि अनुरोध गरिएकी अनि शील, रूप, उदारता र सद्गुणहरूले सम्पन्न सत्यभामालाई भगवान् श्रीकृष्णले विधिपूर्वक विवाह गर्नुभयो ।

**भगवानाह न मणिं प्रतीच्छामो वयं नृप ।**
**तवास्तां देवभक्तस्य वयं च फलभागिनः ॥ ४५ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**भगवान्** = भगवान्ले
**आह** = भन्नुभयो
**वयं** = हामी
**मणिं** = स्यमन्तक मणि
**न प्रतीच्छामः** = चाहदैनौँ
**देवभक्तस्य** = सूर्यका भक्त
**तव** = तपाईंकै
**आस्तां** = होस्
**वयं च** = हामीहरू त
**फलभागिनः** = मणिले दिने सुवर्णरूप फलका भागी हौँ

**वाक्यार्थ–** हे राजा परीक्षित् ! भगवान् श्रीकृष्णले सत्राजित्लाई भन्नुभयो– हामी स्यमन्तक मणि चाहदैनौँ। मणि सूर्यदेवको भक्त तपाईंसँगै रहोस्। हामी त्यो मणिले प्रदान गर्ने सुनको भागीदार चाहिँ अवश्य हौँ (किनभने त्यसको भोग गर्ने तपाईंका पुत्र छैनन्) ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**
**स्यमन्तकोपाख्याने षट्पञ्चाशत्तमोऽध्यायः ॥ ५६ ॥**

# अथ सप्तपञ्चाशत्तमोऽध्यायः

## स्यमन्तक हरण

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**विज्ञातार्थोऽपि गोविन्दो दग्धानाकर्ण्य पाण्डवान्।**

**कुन्तीं च कुल्यकरणे सहरामो ययौ कुरून्॥ १॥**

**पदार्थ–**
**पाण्डवान्** = पाँच पाण्डव
**कुन्तीं च** = कुन्ती पनि
**दग्धान्** = डढेको
**आकर्ण्य** = सुनेर
**विज्ञातार्थः अपि** = पाण्डवहरू मरेका छैनन् भन्ने जानेर पनि
**सहरामः** = बलरामले सहित
**गोविन्दः** = श्रीकृष्ण
**कुल्यकरणे** = कुलोचित व्यवहार गर्न
**कुरून्** = कुरु देशको राजधानी हस्तिनापुर
**ययौ** = जानुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णलाई पाण्डव र कुन्ती लाक्षागृहमा डढेर मरेका छैनन् भन्ने थाहा भए तापनि 'उनीहरू डढेर मरे' भन्ने सुनेर कुलोचित व्यवहार गर्न भनी उहाँ बलरामका साथमा कुरु देशको राजधानी हस्तिनापुर जानुभयो।

**भीष्मं कृपं सविदुरं गान्धारीं द्रोणमेव च।**

**तुल्यदुःखौ च सङ्गम्य हा कष्टमिति होचतुः॥ २॥**

**पदार्थ–**
**तुल्यदुःखौ** = भीष्मपितामह जस्तै दुःखित भएका श्रीकृष्ण र बलरामले
**भीष्मं** = भीष्मपितामह
**सविदुरं** = विदुरले सहित
**कृपं** = कृपाचार्य
**गान्धारीं** = गान्धारी
**द्रोणम् एव च** = द्रोणाचार्यका समक्ष पनि
**सङ्गम्य** = गएर
**हा कष्टं** = अत्यन्त दुःखको घटना घट्यो
**इति च** = यस्तो (समवेदना वचन पनि)
**ह** = निश्चय नै
**ऊचतुः** = बोल्नुभयो

**वाक्यार्थ–** त्यहाँ कुन्तीसहित पाण्डवको मृत्युको खबरले भीष्मपितामह आदिलाई जति दुःख भएको थियो, त्यति नै दुःखको अनुभव आफूले पनि गर्नुभएका श्रीकृष्ण र बलरामले भीष्मपितामह, कृपाचार्य, विदुर, गान्धारी र द्रोणाचार्यका सामु गएर समवेदना व्यक्त गर्दै अहो ! अत्यन्त दुःखदायी घटना घट्यो भनी भन्नुभयो।

**लब्ध्वैतदन्तरं राजन् शतधन्वानमूचतुः।**

**अक्रूरकृतवर्माणौ मणिः कस्मान्न गृह्यते॥ ३॥**

**पदार्थ—**
**राजन्** = हे राजा परीक्षित्
**एतदन्तरं** = श्रीकृष्ण र बलराम हस्तिनापुर गएको उचित अवसर
**लब्ध्वा** = पाएर
**अक्रूरकृतवर्माणौ** = अक्रूर र कृतवर्माले
**शतधन्वानं** = शतधन्वालाई
**ऊचतुः** = भने
**कस्मात्** = किन
**मणिः** = सत्राजित्बाट मणि
**न गृह्यते** = लिइँदैन

**वाक्यार्थ—** हे राजा परीक्षित् ! श्रीकृष्ण र बलराम हस्तिनापुर गएको हुनाले उचित अवसर पाएका अक्रूर र कृतवर्माले शतधन्वालाई भने— अहिले सत्राजित्बाट हामीले स्यमन्तक मणि किन हरण नगर्ने ?

**योऽस्मभ्यं सम्प्रतिश्रुत्य कन्यारत्नं विगर्ह्य नः।**
**कृष्णायादान्न सत्राजित् कस्माद् भ्रातरमन्वियात्॥ ४॥**

**पदार्थ—**
**यः** = जुन सत्राजित्ले
**अस्मभ्यं** = हामीलाई (दिने)
**सम्प्रतिश्रुत्य** = प्रतिज्ञा गरेर
**नः** = हामीलाई
**विगर्ह्य** = अनादर गरेर
**कन्यारत्नं** = आफ्नी उत्तम कन्या सत्यभामा
**कृष्णाय** = कृष्णलाई
**अदात्** = दियो
**सत्राजित्** = त्यो सत्राजित्ले
**कस्मात्** = किन
**भ्रातरं** = भाइ प्रसेनलाई
**न अन्वियात्** = नपछ्याओस्

**वाक्यार्थ—** सत्राजित्ले आफ्नी उत्तम कन्या सत्यभामा हामीलाई दिने प्रतिज्ञा गरेको थियो तर पछि हामीलाई अनादर गरी कृष्णलाई दियो। त्यसैले अब सत्राजित्ले पनि आफ्नै भाइ प्रसेनलाई किन नपछ्याओस् (किन मृत्यु वरण नगरोस्) ?

**एवं भिन्नमतिस्ताभ्यां सत्राजितमसत्तमः।**
**शयानमवधील्लोभात् स पापः क्षीणजीवितः॥ ५॥**

**पदार्थ—**
**एवं** = यसरी
**ताभ्यां** = ती अक्रूर र कृतवर्माद्वारा
**भिन्नमतिः** = धर्मपथबाट बुद्धि भ्रष्ट गराइएको
**असत्तमः** = दुष्ट
**क्षीणजीवितः** = जीवन अवधि नष्ट हुन लागेको
**पापः** = पापी
**सः** = त्यो शतधन्वाले
**लोभात्** = लोभका कारण
**शयानं** = सुतिरहेका
**सत्राजितं** = सत्राजित्लाई
**अवधीत्** = मार्‍यो

**वाक्यार्थ—** यसरी अक्रूर र कृतवर्माद्वारा धर्मपथबाट बुद्धि भ्रष्ट गराइएको दुष्ट एवं जीवनकाल समाप्त हुन लागेको शतधन्वाले लोभवश सुतिरहेका सत्राजित्को हत्या गर्‍यो।

**स्त्रीणां विक्रोशमानानां क्रन्दन्तीनामनाथवत्।**
**हत्वा पशून् सौनिकवन्मणिमादाय जग्मिवान्॥ ६॥**

**पदार्थ—**
**पशून्** = पशुहरूलाई
**सौनिकवत्** = कसाईले झैँ

**हत्वा** = मारेर
**स्त्रीणां** = स्त्रीहरू
**अनाथवत्** = अनाथ झैँ
**विक्रोशमानानां** = चिच्याई-चिच्याई
**क्रन्दन्तीनां** = रोइरहेको अवस्थामा
**मणिं** = मणि
**आदाय** = लिएर
**जग्मिवान्** = भाग्यो

**वाक्यार्थ–** कसाईले पशुलाई मारे झैँ निर्दयतापूर्वक शतधन्वाले सत्राजित्लाई माऱ्यो। त्यसवेला त्यहाँ रहेका सत्राजित्का स्त्रीहरू अनाथ झैँ चिच्याई चिच्याई रोइरहेको अवस्थामा शतधन्वा स्यमन्तक मणि लिएर भाग्यो।

**सत्यभामा च पितरं हतं वीक्ष्य शुचार्पिता।**
**व्यलपत् तात तातेति हा हतास्मीति मुह्यती॥ ७॥**

**पदार्थ–**
**पितरं** = पिता सत्राजित्
**हतं** = मारिएको
**वीक्ष्य** = देखेर
**शुचार्पिता** = शोकले व्याकुल भएकी
**सत्यभामा च** = सत्यभामा पनि
**मुह्यती** = बेहोस हुँदै
**तात तात इति** = हे पिताजी हे पिताजी
**हा हता अस्मि** = लौन म मारिएँ
**इति** = यसो भन्दै
**व्यलपत्** = विलाप गर्न थालिन्

**वाक्यार्थ–** आफ्ना पिताजी मारिएको देखेर सत्यभामा शोकाकुल बनिन् र शोकका कारण बिच-बिचमा बेहोस हुँदै 'हे पिताजी ! हे पिताजी ! म मारिएँ' भन्दै विलाप गर्न थालिन्।

**तैलद्रोण्यां मृतं प्रास्य जगाम गजसाह्वयम्।**
**कृष्णाय विदितार्थाय तप्ताचख्यौ पितुर्वधम्॥ ८॥**

**पदार्थ–**
**तप्ता** = दुःखित सत्यभामा
**मृतं** = मरेका पिताजीलाई
**तैलद्रोण्यां** = तेलले भरिएको कराहीमा
**प्रास्य** = राखेर
**गजसाह्वयं** = हस्तिनापुर
**जगाम** = गइन्
**विदितार्थाय** = यी सम्पूर्ण घटनाचक्र जान्नुभएका
**कृष्णाय** = भगवान् श्रीकृष्णलाई
**पितुः** = पिताजीको
**वधं** = मृत्यु
**आचख्यौ** = सुनाउनुभयो

**वाक्यार्थ–** पिता सत्राजित्को मृत्युले दुःखी भएकी सत्यभामाले पिताजीको शवलाई तेलले भरिएको ठुलो कराहीमा राखिन् अनि उनी हस्तिनापुर गइन्। त्यहाँ उनले श्रीकृष्णलाई पिताजीको मृत्यु भएको सम्पूर्ण कुरा बताइन्। सर्वज्ञ भगवान्लाई यी घटनाचक्रका विषयमा सबै कुरा पहिले नै थाहा थियो।

**तदाकर्ण्येश्वरौ राजन्ननुसृत्य नृलोकताम्।**
**अहो नः परमं कष्टमित्यस्राक्षौ विलेपतुः॥ ९॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**तत्** = त्यो (सत्राजित्को मृत्यु)
**आकर्ण्य** = सुनेर
**ईश्वरौ** = सर्वशक्तिमान् भएर पनि
**नृलोकतां** = सामान्य मानिसको व्यवहारलाई
**अनुसृत्य** = अनुकरण गरी
**अस्राक्षौ** = आँखाभरि आँसु बनाउनुभएका श्रीकृष्ण र बलरामले
**अहो** = अहो
**नः** = हामीहरूमाथि
**परमं** = ठुलो
**कष्टम्** = दुःख आइलाग्यो
**इति** = यसो भन्दै
**विलेपतुः** = विलाप गर्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! सत्राजित्को मृत्यु भएको कुरा सुनेर सर्वशक्तिमान् भगवान् श्रीकृष्ण र बलरामले सामान्य मनुष्यव्यवहारको अनुकरण गर्दै आँखाभरि आँसु बनाउनुभयो। अनि विलाप गर्दै भन्नुभयो– अहो ! हामीहरूमाथि फेरि यो महान् विपत्ति आइपऱ्यो।

**आगत्य भगवांस्तस्मात् सभार्यः साग्रजः पुरम् ।**
**शतधन्वानमारेभे हन्तुं हर्तुं मणिं ततः ॥ १० ॥**

**पदार्थ–**
**सभार्यः** = पत्नीसहित
**साग्रजः** = दाजुले सहित
**भगवान्** = भगवान् श्रीकृष्ण
**तस्मात्** = त्यो हस्तिनापुरबाट
**पुरं** = द्वारका नगरी
**आगत्य** = आएर
**ततः** = त्यसपछि
**मणिं** = मणि
**हर्तुं** = हरण गर्न
**शतधन्वानं** = शतधन्वालाई पनि
**हन्तुं** = मार्न
**आरेभे** = तयार हुनुभयो

**वाक्यार्थ–** त्यसपछि पत्नी सत्यभामा र दाजु बलरामसहित भगवान् श्रीकृष्ण हस्तिनापुरबाट आफ्नो द्वारका नगरीमा आउनुभयो। अनि उहाँले शतधन्वालाई मार्न र त्यसबाट स्यमन्तक मणि हरण गर्न आवश्यक काम सुरु गर्नुभयो।

**सोऽपि कृष्णोद्यमं ज्ञात्वा भीतः प्राणपरीप्सया ।**
**साहाय्ये कृतवर्माणमयाचत स चाब्रवीत् ॥ ११ ॥**

**पदार्थ–**
**सः अपि** = त्यो शतधन्वाले पनि
**कृष्णोद्यमं** = श्रीकृष्णको आफूलाई मार्ने तयारी
**ज्ञात्वा** = जानेर
**भीतः** = अत्यन्त डराएर
**प्राणपरीप्सया** = प्राणरक्षा गर्ने इच्छाले
**कृतवर्माणं** = कृतवर्मासँग
**साहाय्ये** = सहयोगका लागि
**अयाचत** = प्रार्थना गऱ्यो
**सः च** = त्यो कृतवर्माले पनि
**अब्रवीत्** = भन्यो

**वाक्यार्थ–** शतधन्वाले पनि श्रीकृष्णले मलाई मार्न तयारी गर्दैछन् भन्ने थाहा पायो र ऊ ज्यादै डरायो। आफ्नो प्राणको रक्षा गर्न उसले कृतवर्मासँग आवश्यक मद्दत माग्यो। जबाफमा कृतवर्माले भन्यो।

**नाहमीस्वरयोः कुर्यां हेलनं रामकृष्णयोः।**
**को नु क्षेमाय कल्पेत तयोर्वृजिनमाचरन्॥ १२॥**

**पदार्थ—**
**अहं** = म
**ईस्वरयोः** = सर्वशक्तिमान्
**रामकृष्णयोः** = बलराम र श्रीकृष्णको
**हेलनं** = तिरस्कार
**न कुर्यां** = गर्दिनँ
**तयोः** = उहाँहरूमाथि
**वृजिनं** = अपराध
**आचरन्** = गर्ने
**कः नु** = कसले
**क्षेमाय** = कल्याण
**कल्पेत** = प्राप्त गर्ला र ?

**वाक्यार्थ—** म सर्वशक्तिमान् भगवान् श्रीकृष्ण र बलरामको तिरस्कार हुने काम गर्न सक्दिनँ। उहाँहरूमाथि अपराध गर्ने त्यस्तो को होला जसको कल्याण भएको होस् ?

**कंसः सहानुगोऽपीतो यद्द्वेषात् त्याजितः श्रिया।**
**जरासन्धः सप्तदश संयुगान् विरथो गतः॥ १३॥**

**पदार्थ—**
**यद्द्वेषात्** = जुन श्रीकृष्णसँगको द्वेषका कारण
**सहानुगः** = भाइबन्धुले सहित
**कंसः** = कंस
**श्रिया** = राज्यलक्ष्मीद्वारा
**त्याजितः** = रहित भई
**अपीतः** = नष्ट भयो
**जरासन्धः** = जरासन्ध पनि
**सप्तदश** = सत्र पटक
**संयुगान्** = युद्धमा
**विरथः** = रथरहित भएर
**गतः** = पराजित भई फर्कियो

**वाक्यार्थ—** श्रीकृष्णसँग द्वेष गरेको हुनाले नै महापराक्रमी कंस आफ्नो राज्यलक्ष्मी गुमाई भाइबन्धुजन सहित मऱ्यो। त्यसै गरी महावीर जरासन्ध पनि सत्र पटकसम्म युद्ध गर्दा रथरहित भएर बल्लतल्ल ज्यान चाहिँ बचाएर आफ्नो राजधानी फर्कियो।

**प्रत्याख्यातः स चाक्रूरं पार्ष्णिग्राहमयाचत।**
**सोऽप्याह को विरुध्येत विद्वानीश्वरयोर्बलम्॥ १४॥**

**पदार्थ—**
**प्रत्याख्यातः** = ठाडो जवाफ पाएको
**सः च** = त्यो शतधन्वाले
**अक्रूरं** = अक्रूरसँग
**पार्ष्णिग्राहं** = सहयोग
**अयाचत** = माग्यो
**सः अपि** = ती अक्रूरले पनि
**आह** = भने
**ईश्वरयोः** = सर्वशक्तिमान् श्रीकृष्ण र बलरामको
**बलं** = शक्तिलाई
**विद्वान्** = जान्ने
**कः** = कसले
**विरुध्येत** = उहाँहरूसँग विरोध गर्ला

**वाक्यार्थ—** कृतवर्माबाट यसरी सहयोग गर्न नसक्ने ठाडो जवाफ पाएपछि शतधन्वाले अक्रूरसँग सहयोगको प्रार्थना गऱ्यो। जवाफमा अक्रूरले भने— श्रीकृष्ण र बलराम जस्ता सर्वशक्तिमान्

पुरुषको शक्तिलाई जान्दा जान्दै उहाँहरूसँग कसले शत्रुता गर्ला र ?

**य इदं लीलया विश्वं सृजत्यवति हन्ति च।**
**चेष्टां विश्वसृजो यस्य न विदुर्मोहिताजया॥ १५॥**

**पदार्थ—**
**यः** = जो भगवान् श्रीकृष्ण
**लीलया** = ख्यालख्यालमैं
**इदं** = यो दृश्यमान
**विश्वं** = विश्व ब्रह्माण्डलाई
**सृजति** = सृष्टि गर्नुहुन्छ
**अवति** = पालन गर्नुहुन्छ
**हन्ति च** = संहार पनि गर्नुहुन्छ
**यस्य** = जुन भगवान्को
**चेष्टां** = चेष्टालाई
**अजया** = भगवान्कै मायाद्वारा
**मोहिताः** = मोहित भएका
**विश्वसृजः** = विश्वको सृष्टि गर्ने ब्रह्मा आदि देवताहरूले
**न विदुः** = जान्न सकेनन्

**वाक्यार्थ—** भगवान् श्रीकृष्णले नै यो सारा विश्वब्रह्माण्डको सृष्टि, पालन र संहार गर्नुहुन्छ। उहाँको चेष्टालाई कसैले पनि जान्न सक्दैनन्, साक्षात् ब्रह्मा आदि देवताहरूले पनि भगवान्को चेष्टालाई जान्न सक्दैनन्, किनभने उनीहरू पनि भगवान्को मायाशक्तिद्वारा मोहित भएका छन्।

**यः सप्तहायनः शैलमुत्पाट्यैकेन पाणिना।**
**दधार लीलया बाल उच्छिलीन्ध्रमिवार्भकः॥ १६॥**

**पदार्थ—**
**सप्तहायनः** = सात वर्षका
**यः** = जुन भगवान्ले
**बाले** = बाल्यकालमा नै
**अर्भकः** = बच्चाले
**उच्छिलीन्ध्रं इव** = च्याउलाई उचाले झैं
**एकेन** = एउटै
**पाणिना** = हातद्वारा
**शैलं** = गोवर्धन पर्वत
**उत्पाट्य** = उठाएर
**लीलया** = ख्याल-ख्यालमै (सजिलै)
**दधार** = धारण गर्नुभयो

**वाक्यार्थ—** जुन भगवान् श्रीकृष्णले सात वर्षको बाल्यकालमा नै बच्चाले च्याउ उचाले झैं एउटै हातले गोवर्धन पर्वतलाई उठाएर सजिलै धारण गर्नुभयो।

**नमस्तस्मै भगवते कृष्णायाद्भुतकर्मणे।**
**अनन्तायादिभूताय कूटस्थायात्मने नमः॥ १७॥**

**पदार्थ—**
**अद्भुतकर्मणे** = अद्भुत कर्म गर्ने
**अनन्ताय** = अनन्त
**आदिभूताय** = आदिकारण
**कूटस्थाय** = सर्वसाक्षी
**आत्मने** = परमात्मा
**तस्मै** = त्यस्ता
**भगवते** = सर्वैश्वर्यसम्पन्न
**कृष्णाय** = भगवान् श्रीकृष्णलाई
**नमो नमः** = बारम्बार नमस्कार छ

**वाक्यार्थ—** अद्भुत कर्म गर्नुहुने, जगत्को आदिकारण, अनन्त र सर्वसाक्षी भएका त्यस्ता साक्षात् परमात्मा भगवान् श्रीकृष्णलाई म बारम्बार नमस्कार गर्दछु।

**प्रत्याख्यातः स तेनापि शतधन्वा महामणिम् ।**

**तस्मिन् न्यस्याश्वमारुह्य शतयोजनगं ययौ ॥ १८ ॥**

**पदार्थ—**
**तेन अपि** = ती अक्रूरद्वारा पनि
**प्रत्याख्यातः** = प्रतिकूल जवाफ पाएको
**सः** = त्यो
**शतधन्वा** = शतधन्वाले
**तस्मिन्** = त्यो अक्रूरसमक्ष
**महामणिं** = स्यमन्तक मणि
**न्यस्य** = राखेर
**शतयोजनगं** = सय योजन दगुर्ने
**अश्वं** = घोडा
**आरुह्य** = चढेर
**ययौ** = भाग्यो

**वाक्यार्थ—** अक्रूरबाट पनि प्रतिकूल जवाफ पाएको शतधन्वाले त्यो स्यमन्तक मणि अक्रूरलाई नै राख्न दियो र आफू चाहिँ निरन्तर सय योजन (चार सय कोस) दगुर्न सक्ने घोडामा चढेर भाग्यो।

**गरुडध्वजमारुह्य रथं रामजनार्दनौ ।**

**अन्वयातां महावेगैरश्वै राजन् गुरुद्रुहम् ॥ १९ ॥**

**पदार्थ—**
**राजन्** = हे राजा परीक्षित्
**रामजनार्दनौ** = बलराम र श्रीकृष्ण
**गरुडध्वजं** = ध्वजामा गरुड अङ्कित भएको
**रथं** = रथमा
**आरुह्य** = चढेर
**महावेगैः** = अत्यन्त वेगशाली
**अश्वैः** = घोडाहरूद्वारा
**गुरुद्रुहं** = मान्यजन (ससुरा)को हत्यारा शतधन्वालाई
**अन्वयाताम्** = पछ्याउनुभयो

**वाक्यार्थ—** हे राजा परीक्षित् ! यता श्रीकृष्ण र बलरामले चाहिँ ध्वजामा गरुड अङ्कित भएको तथा अत्यन्त वेगशाली घोडाहरू भएको रथमा चढेर आफ्नो ससुरा सत्राजित्को हत्यारा शतधन्वाको पिछा गर्नुभयो।

**मिथिलायामुपवने विसृज्य पतितं हयम् ।**

**पद्भ्यामधावत् सन्त्रस्तः कृष्णोऽप्यन्वद्रवद् रुषा ॥ २० ॥**

**पदार्थ—**
**मिथिलायां** = मिथिला नगरीको
**उपवने** = उपवनमा
**पतितं** = थाकेर लडेको
**हयं** = घोडालाई
**विसृज्य** = छाडेर
**सन्त्रस्तः** = डराएको शतधन्वा
**पद्भ्याम्** = पैदल
**अधावत्** = भाग्यो
**कृष्णः अपि** = श्रीकृष्णले पनि
**रुषा** = रिसले (त्यसलाई)
**अन्वद्रवत्** = पछ्याउनुभयो

**वाक्यार्थ—** शतधन्वाको घोडा मिथिला नगरीको उपवनमा पुगेर लड्यो। त्यसपछि अत्यन्त डराएको शतधन्वा त्यो घोडालाई त्यहीँ छोडेर पैदल भाग्न थाल्यो। रिसाउनुभएका भगवान् श्रीकृष्ण पनि त्यसलाई पछ्याउँदै जानुभयो।

**पदातेर्भगवांस्तस्य पदातिस्तिग्मनेमिना ।**
**चक्रेण शिर उत्कृत्य वाससोर्व्यचिनोन्मणिम् ॥ २१ ॥**

**पदार्थ—**
**पदातिः** = पैदल नै पछ्याउनुभएका
**भगवान्** = भगवान्ले
**पदातेः** = पैदल भागिरहेको
**तस्य** = त्यो शतधन्वाको
**शिरः** = शिर
**तिग्मनेमिना** = तिखो धार भएको
**चक्रेण** = सुदर्शन चक्रद्वारा
**उत्कृत्य** = काटेर
**वाससोः** = कपडामा
**मणिं** = स्यमन्तक मणि
**व्यचिनोत्** = खोज्नुभयो

**वाक्यार्थ—** पैदल भागिरहेको शतधन्वालाई भगवान् श्रीकृष्णले पनि पैदले नै पछ्याउनुभयो र तिखो धार भएको आफ्नो सुदर्शन चक्र प्रहार गरी त्यसको शिर काटिदिनुभयो अनि शतधन्वाले लगाएको कपडामा स्यमन्तक मणि खोज्न थाल्नुभयो।

**अलब्धमणिरागत्य कृष्ण आहाग्रजान्तिकम् ।**
**वृथा हतः शतधनुर्मणिस्तत्र न विद्यते ॥ २२ ॥**

**पदार्थ—**
**अलब्धमणिः** = मणि नपाउनुभएका
**कृष्णः** = श्रीकृष्णले
**अग्रजान्तिकं** = दाइ बलरामको नजिकमा
**आगत्य** = आएर
**आह** = भन्नुभयो
**शतधनुः** = शतधन्वा
**वृथा** = व्यर्थ
**हतः** = मारियो
**तत्र** = त्यो शतधन्वाको साथमा
**मणिः** = मणि
**न विद्यते** = छैन

**वाक्यार्थ—** त्यहाँ मणि नपाएपछि भगवान् श्रीकृष्णले दाइ बलरामको नजिकमा आएर भन्नुभयो— शतधन्वा व्यर्थै मारिएछ, त्योसँग स्यमन्तक मणि रहेनछ।

**तत आह बलो नूनं स मणिः शतधन्वना ।**
**कस्मिंश्चित् पुरुषे न्यस्तस्तमन्वेष पुरं व्रज ॥ २३ ॥**

**पदार्थ—**
**ततः** = त्यसपछि
**बलः** = बलरामले
**आह** = भन्नुभयो
**नूनं** = निश्चय नै
**शतधन्वना** = शतधन्वाद्वारा
**कस्मिंश्चित्** = कुनै
**पुरुषे** = मानिसको साथमा
**सः** = त्यो
**मणिः** = मणि
**न्यस्तः** = राखिएको हुनु पर्छ
**तं** = त्यो मणिलाई
**अन्वेष** = खोज
**पुरं** = द्वारका नगरी
**व्रज** = जाऊ

**वाक्यार्थ—** त्यसपछि बलरामले भन्नुभयो— हे कृष्ण ! त्यो मणिलाई निश्चय नै शतधन्वाले कुनै मान्छेलाई राख्न दिएको हुनुपर्दछ। त्यसकारण तिमी द्वारका जाऊ र मणि कहाँ छ खोज।

**अहं वैदेहमिच्छामि द्रष्टुं प्रियतमं मम ।**

**इत्युक्त्वा मिथिलां राजन् विवेश यदुनन्दनः ॥ २४ ॥**

**पदार्थ–**
**अहं** = म
**मम** = मेरा
**प्रियतमं** = अत्यन्त प्रिय
**वैदेहं** = विदेहराज जनकलाई
**द्रष्टुं** = हेर्न
**इच्छामि** = चाहन्छु
**राजन्** = हे राजा परीक्षित्
**इति उक्त्वा** = यस्तो भनेर
**यदुनन्दनः** = यदुश्रेष्ठ बलराम
**मिथिलां** = मिथिला नगरीमा
**विवेश** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! 'म चाहिँ मेरा परमप्रिय मित्र विदेहराज जनकको दर्शन गर्न चाहन्छु' श्रीकृष्णलाई यति भनेर यदुश्रेष्ठ बलराम मिथिला नगरीमा प्रवेश गर्नुभयो।

**तं दृष्ट्वा सहसोत्थाय मैथिलः प्रीतमानसः ।**

**अर्हयामास विधिवदर्हणीयं समर्हणैः ॥ २५ ॥**

**पदार्थ–**
**तं** = ती बलरामलाई
**दृष्ट्वा** = देखेर
**प्रीतमानसः** = मन प्रसन्न भएका
**मैथिलः** = मिथिलाका राजा जनकले
**सहसा** = झटपट
**उत्थाय** = उठेर
**अर्हणीयं** = पूजनीय बलरामलाई
**समर्हणैः** = पाद्य, अर्घ्य आदि पूजासामग्रीहरूद्वारा
**विधिवत्** = विधिपूर्वक
**अर्हयामास** = पूजा गरे

**वाक्यार्थ–** ती बलरामलाई देखेर अत्यन्त प्रसन्न भएका मिथिलापति महाराज जनक बलरामको स्वागतका लागि हतार-हतार सिंहासनबाट उठे र उनले पाद्य, अर्घ्य, फूल, चन्दन आदि पूजासामग्रीद्वारा उहाँको पूजा गरे।

**उवास तस्यां कतिचिन्मिथिलायां समा विभुः ।**

**मानितः प्रीतियुक्तेन जनकेन महात्मना ।**

**ततोऽशिक्षद् गदां काले धार्तराष्ट्रः सुयोधनः ॥ २६ ॥**

**पदार्थ–**
**विभुः** = स्वतन्त्र बलराम
**प्रीतियुक्तेन** = अत्यन्त प्रेमी
**महात्मना** = महात्मा
**जनकेन** = जनकद्वारा
**मानितः** = सम्मानित भई
**कतिचित्** = कतिपय
**समाः** = वर्ष
**तस्यां** = त्यही
**मिथिलायां** = मिथिला नगरीमा
**उवास** = बस्नुभयो
**ततः** = ती बलरामबाट
**धार्तराष्ट्रः** = धृतराष्ट्रको छोरो
**सुयोधनः** = दुर्योधन(सुयोधन)ले
**काले** = त्यही समयमा
**गदां** = गदायुद्ध
**अशिक्षत्** = सिक्यो

**वाक्यार्थ–** स्वतन्त्र बलराम आफ्ना अनन्यप्रेमी महात्मा जनकद्वारा सम्मानित भई थुप्रै वर्षसम्म

मिथिला नगरीमा नै बस्नुभयो। त्यही वेला उचित अवसर पाएर धृतराष्ट्रको छोरो दुर्योधनले बलरामबाट गदायुद्ध सिक्यो।

**केशवो द्वारकामेत्य निधनं शतधन्वनः।**
**अप्राप्तिं च मणेः प्राह प्रियायाः प्रियकृद् विभुः॥ २७॥**

**पदार्थ–**
**प्रियायाः** = प्रिय पत्नी सत्यभामाको
**प्रियकृत्** = प्रिय कार्य गर्नुहुने
**विभुः** = सर्वसमर्थ
**केशवः** = भगवान् श्रीकृष्ण
**द्वारकां** = द्वारकामा
**एत्य** = आएर
**शतधन्वनः** = शतधन्वाको
**निधनं** = मृत्यु
**मणेः** = मणिको
**अप्राप्तिं च** = अप्राप्ति पनि
**प्राह** = बताउनुभयो

**वाक्यार्थ–** यता प्रिय पत्नी सत्यभामाको प्रिय कर्म (शतधन्वाको वध) गरी सर्वसमर्थ भगवान् श्रीकृष्ण द्वारकामा आउनुभयो अनि उहाँले सत्यभामालाई शतधन्वाको वध भएको तर उसको साथमा मणि नभेटिएको कुरा पनि बताउनुभयो।

**ततः स कारयामास क्रिया बन्धोर्हतस्य वै।**
**साकं सुहृद्भिर्भगवान् या याः स्युः साम्परायिकाः॥ २८॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**सुहृद्भिः साकं** = बन्धुजनले सहित हुनुभएका
**सः भगवान्** = उहाँ भगवान् श्रीकृष्णले
**हतस्य** = मरेका
**बन्धोः** = ससुराको
**याः याः** = जुन-जुन
**साम्परायिकाः** = परलोकका लागि हितकारी
**क्रियाः** = और्ध्वदैहिक क्रियाहरू
**स्युः** = छन् (ती सबै क्रियाहरू)
**वै** = निश्चय नै
**कारयामास** = गराउनुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्णले आफन्त जनहरूका साथमा आफ्ना मरेका ससुरा सत्राजित्को और्ध्वदैहिक (अन्त्येष्टि) क्रिया गराउनुभयो, जुन क्रियाद्वारा मृत पुरुषलाई परलोकमा सद्गतिको प्राप्ति हुन्छ।

**अक्रूरः कृतवर्मा च श्रुत्वा शतधनोर्वधम्।**
**व्यूषतुर्भयवित्रस्तौ द्वारकायाः प्रयोजकौ॥ २९॥**

**पदार्थ–**
**प्रयोजकौ** = सत्राजित्को हत्या गर्न र मणि चोर्न उक्साउने
**अक्रूरः** = अक्रूर र
**कृतवर्मा च** = कृतवर्माले
**शतधनोः** = शतधन्वाको
**वधं** = मरण
**श्रुत्वा** = सुनेर
**भयवित्रस्तौ** = भयभीत भई
**द्वारकायाः** = द्वारकाबाट
**व्यूषतुः** = भागे

**वाक्यार्थ–** अक्रूर र कृतवर्माले सत्राजित्लाई मारेर मणिहरण गर्न शतधन्वालाई उक्साएका थिए। जब उनीहरूले भगवान् श्रीकृष्णले शतधन्वालाई मार्नुभएको खबर थाहा पाए, तब भयभीत भएर दुबै जना द्वारकाबाट भागे।

**अक्रूरे प्रोषितेऽरिष्टान्यासन् वै द्वारकौकसाम्।**
**शारीरा मानसास्तापा मुहुर्दैविकभौतिकाः॥ ३०॥**
**इत्यङ्गोपदिशन्त्येके विस्मृत्य प्रागुदाहृतम्।**
**मुनिवासनिवासे किं घटेतारिष्टदर्शनम्॥ ३१॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**अक्रूरे** = अक्रूर
**प्रोषिते** = अन्यत्र गएपछि
**द्वारकौकसां** = द्वारकावासीलाई
**अरिष्टानि** = अनेक अनर्थ (अशुभ)
**शारीराः** = शारीरिक
**मानसाः** = मानसिक
**दैविकभौतिकाः** = दैविक र भौतिक (देवताबाट हुने अनावृष्टि आदि विपत्ति र सर्प आदिबाट हुने)
**तापाः** = पीडाहरू
**मुहुः** = बारम्बार
**आसन्** = भए
**अङ्ग** = हे प्रिय परीक्षित्
**इति** = यस्तो कुरा
**प्रागुदाहृतं** = पहिले नै मैले बताएको श्रीकृष्णको महत्त्वलाई
**विस्मृत्य** = भुलेर
**एके** = केही मान्छेहरू (वैशम्पायन आदि)
**उपदिशन्ति** = बताउँछन्
**मुनिवासनिवासे** = मुनिहरूको निवास भएका श्रीकृष्णको निवास हुँदाहुँदै
**किं** = कसरी
**अरिष्टदर्शनं** = अपशकुन
**घटेत** = घट्न सक्ला

**वाक्यार्थ–** अक्रूर द्वारकाबाट भागेपछि द्वारकावासीहरूले शारीरिक, मानसिक ताप तथा देवताबाट हुने अनावृष्टि आदि विपत्ति र सर्प आदि हिंस्रक प्राणीबाट हुने अनेक कष्टहरू बारम्बार भोग्नुपर्‍यो भनेर एकथरी मान्छे (वैशम्पायन आदि) भन्दथे, तर हे प्रिय परीक्षित्! त्यसो भन्नेहरूले मैले पहिले नै तपाईंलाई श्रीकृष्णको जुन माहात्म्य बताएको थिएँ, त्यो माहात्म्यलाई भुलेका हुन्। किनभने एउटै मात्र मुनि बसेको ठाउँमा त कुनै अशुभ हुँदैन भने भगवान् श्रीकृष्णमा त सम्पूर्ण मुनिहरूले निवास गरेका छन्। त्यस्ता भगवान् नै द्वारकामा हुँदा त्यहाँ कसरी अनिष्ट हुन सक्छ? (अर्थात् अक्रूर भागेर द्वारकामा अनिष्ट भएको होइन)।

**देवेऽवर्षति काशीशः श्वफल्कायागताय वै।**
**स्वसुतां गान्दिनीं प्रादात् ततोऽवर्षत् स्म काशिषु॥ ३२॥**

**पदार्थ–**
**काशिषु** = काशि देशमा
**देवे** = पर्जन्य देवता (मेघ)
**अवर्षति** = नबर्सिएपछि
**काशीशः** = काशिका राजाले
**आगताय** = त्यहाँ आइपुगेका
**श्वफल्काय** = श्वफल्कलाई
**वै** = निश्चय नै
**स्वसुतां** = आफ्नी छोरी

**गान्दिनीं** = गान्दिनी
**प्रादात्** = दिएका थिए
**ततः** = त्यसपछि (कन्यादान गरेपछि त्यहाँ)
**अवर्षत् स्म** = वृष्टि भएको थियो

**वाक्यार्थ–** कुनै समयमा काशि देशमा वृष्टि नभएर सुखा बढ्न थालेपछि काशिनरेशले त्यहीं आइपुगेका श्वफल्क (अक्रूरका पिता)लाई गान्दिनी नाम गरेकी आफ्नी छोरी विवाह गरेर दिएका थिए। श्वफल्कलाई कन्यादान गरेपछि काशिमा जलवृष्टि भएको थियो।

**तत्सुतस्तत्प्रभावोऽसावक्रूरो यत्र यत्र ह।**
**देवोऽभिवर्षते तत्र नोपतापा न मारिकाः॥ ३३॥**

पदार्थ–
**तत्प्रभावः** = श्वफल्ककै जस्तो प्रभाव भएका
**तत्सुतः** = ती श्वफल्कका छोरा
**असौ** = यी (यहाँबाट भागेका)
**अक्रूरः** = अक्रूर
**ह** = निश्चय नै
**यत्र यत्र** = जहाँ–जहाँ बस्छन्
**तत्र** = त्यहाँ
**देवः** = वृष्टि
**अभिवर्षते** = बर्सिन्छ
**उपतापाः** = शारीरिक आदि ताप
**न** = हुँदैनन्
**मारिकाः** = अकाल मृत्युका कारण महामारी पनि
**न** = हुँदैनन्

**वाक्यार्थ–** यहाँबाट प्रवासिएका अक्रूर पनि श्वफल्ककै छोरा हुन् र आफ्नो पिताकै जस्तो प्रभाव उनमा विद्यमान छ। अतः अक्रूर जहाँ–जहाँ गएर बस्छन्, ती ती ठाउँमा वर्षा हुन्छ। त्यहाँ शारीरिक आदि कुनै पनि प्रकारको ताप हुँदैन अनि अकालमृत्युको कारण महामारी पनि हुँदैन।

**इति वृद्धवचः श्रुत्वा नैतावदिह कारणम्।**
**इति मत्वा समानाय्य प्राहाक्रूरं जनार्दनः॥ ३४॥**

पदार्थ–
**इति** = यस्तो
**वृद्धवचः** = बुढाहरूको भनाइ
**श्रुत्वा** = सुनेर
**इह** = यहाँ (उत्पात हुनुमा)
**एतावत्** = यी अक्रूरको पलायन
**कारणं** = कारण
**न** = होइन
**इति** = यस्तो
**मत्वा** = विचार गरेर
**जनार्दनः** = श्रीकृष्णले
**अक्रूरं** = अक्रूरलाई
**समानाय्य** = खोजेर ल्याएपछि
**प्राह** = अक्रूरलाई भन्नुभयो

**वाक्यार्थ–** नगरका बुढा भनिने मान्छेहरूको यस्तो कुरा सुनेपछि 'द्वारकामा उत्पात मच्चिनुमा अक्रूरको पलायन कारण होइन (मणि नहुनु कारण हो)' भन्ने बुझ्नुभएका भगवान् श्रीकृष्णले बुढाहरूकै आशय अनुसार (दूतहरूद्वारा) अक्रूरलाई खोजेर ल्याउनुभयो र त्यसपछि अक्रूरलाई भन्नुभयो।

**पूजयित्वाभिभाष्यैनं कथयित्वा प्रियाः कथाः।**
**विज्ञाताखिलचित्तज्ञः स्मयमान उवाच ह॥ ३५॥**

**पदार्थ—**
**विज्ञाताखिलचित्तज्ञः** = सबैको मनमा रहेको कुरा जान्ने भगवान् श्रीकृष्णले
**एनं** = मणिसहित आएका यी अक्रूरलाई
**पूजयित्वा** = सम्मान गरेर
**प्रियाः** = मिठा-मिठा
**कथाः** = कुराहरू
**कथयित्वा** = गरेर
**अभिभाष्य** = सम्बोधन गरेर
**ह** = निश्चय नै
**स्मयमानः** = मुस्कुराउँदै
**उवाच** = भन्नुभयो

**वाक्यार्थ—** सम्पूर्ण प्राणीहरूको मनमा रहेको कुरा जान्ने भगवान् श्रीकृष्णले अक्रूरको सत्कार गर्नुभयो अनि अन्य कतिपय मिठा-मिठा कुरा गर्दै अक्रूरलाई भन्नुभयो।

**ननु दानपते न्यस्तस्त्वय्यास्ते शतधन्वना।**
**स्यमन्तको मणिः श्रीमान् विदितः पूर्वमेव नः॥ ३६॥**

**पदार्थ—**
**दानपते** = हे श्रेष्ठदानी अक्रूरजी
**ननु** = निश्चय नै
**शतधन्वना** = शतधन्वाद्वारा
**न्यस्तः** = राखिएको
**श्रीमान्** = सुन उत्पादन गर्न सक्ने प्रभावशाली
**स्यमन्तकः** = स्यमन्तक
**मणिः** = मणि
**त्वयि** = तपाईंसँग
**आस्ते** = छ (भन्ने कुरा)
**नः** = हामीद्वारा
**पूर्वमेव** = पहिले नै
**विदितः** = जानिएको छ

**वाक्यार्थ—** हे अक्रूरजी ! तपाईं दानीहरूमा श्रेष्ठ हुनुहुन्छ। शतधन्वाले सुन उत्पादन गर्न सक्ने अति प्रभावशाली स्यमन्तक मणि तपाईंसँग छाडेर गएको थियो भन्ने कुरा हामीलाई पहिले नै थाहा थियो।

**सत्राजितोऽनपत्यत्वाद् गृह्णीयुर्दुहितुः सुताः।**
**दायं निनीयापः पिण्डान् विमुच्यर्णं च शेषितम्॥ ३७॥**

**पदार्थ—**
**अनपत्यत्वात्** = छोरा नभएको हुनाले
**सत्राजितः** = सत्राजित्की
**दुहितुः** = छोरी सत्यभामाका
**सुताः** = छोराहरूले
**अपः** = तिलाञ्जलि
**पिण्डान्** = पिण्ड
**निनीय** = दिएर
**ऋणं** = ऋण पनि
**विमुच्य** = तिरेर
**शेषितं** = बाँकी रहेको
**दायं च** = धन
**गृह्णीयुः** = लिऊन्

**वाक्यार्थ—** छोरा नभएको हुनाले सत्राजित्की छोरी सत्यभामाका छोरा (सत्राजित्का नाति)हरूले उनका लागि तिलाञ्जलि र पिण्डदान गरेर भएका सम्पूर्ण ऋण तिरून्, त्यति गरेर धन बाँकी रह्यो भने त्यो पनि तिनैले लिऊन्।

**तथापि दुर्धरस्त्वन्यैस्त्वय्यास्तां सुव्रते मणिः।**
**किन्तु मामग्रजः सम्यङ् न प्रत्येति मणिं प्रति॥ ३८॥**

**पदार्थ–**
**तथा अपि** = तैपनि (शास्त्रीय रूपले सत्यभामाका छोराले मणि पाउनुपर्ने भए पनि)
**अन्यैः** = अरू जोकोहीद्वारा
**दुर्धरः** = धारण गर्न कठिन भएको
**मणिः** = त्यो स्यमन्तक मणि
**सुव्रते** = नियमनिष्ठ
**त्वयि तु** = तपाईंसँगै
**आस्तां** = रहोस्
**किन्तु** = तर
**अग्रजः** = मेरा दाइ बलराम
**मणिं प्रति** = मणिको विषयमा
**मां** = मलाई
**सम्यक्** = राम्रोसँग
**न प्रत्येति** = विश्वास गर्नुहुन्न

**वाक्यार्थ–** हुन त शास्त्रीय मान्यता अनुसार त्यो मणि सत्यभामाका छोराहरूले नै पाउनुपर्छ, तापनि त्यो तपाईंसँगै रहोस्, किनभने तपाईं नियमनिष्ठ हुनुहुन्छ। जो कोहीले त्यो मणिलाई राख्न पनि सक्दैन, तर समस्या के छ भने मेरा दाइ बलरामले मणिको विषयमा मलाई राम्ररी विश्वास गर्नुहुन्न।

**दर्शयस्व महाभाग बन्धूनां शान्तिमावह ।**
**अव्युच्छिन्ना मखास्तेऽद्य वर्तन्ते रुक्मवेदयः ॥ ३९ ॥**

**पदार्थ–**
**महाभाग** = हे महाभाग्यवान् अक्रूरजी
**दर्शयस्व** = मणि देखाउनुहोस्
**बन्धूनां** = मेरा बन्धुजनहरूको
**शान्तिं** = शङ्काको समाधान
**आवह** = गर्नुहोस्
**रुक्मवेदयः** = सुवर्णनिर्मित वेदि भएका
**अव्युच्छिन्नाः** = अखण्डित
**मखाः** = यज्ञहरू
**ते** = तपाईंका
**अद्य** = आजभोलि
**वर्तन्ते** = सञ्चालित छन्

**वाक्यार्थ–** हे महाभाग्यवान् अक्रूर ! त्यसैले त्यो मणि देखाएर बलराम आदि मेरा बन्धुजनको मनमा रहेको आशङ्का हटाइदिनुहोस्। म जान्दछु कि, त्यही मणिका कारण तपाईं आजभोलि सुनले बनेका वेदिहरूले युक्त भएका यज्ञहरू निरन्तर गरिरहनुभएको छ।

**एवं सामभिरालब्धः श्वफल्कतनयो मणिम् ।**
**आदाय वाससाच्छन्नं ददौ सूर्यसमप्रभम् ॥ ४० ॥**

**पदार्थ–**
**एवं** = यसरी
**सामभिः** = शान्त वचनहरूद्वारा
**आलब्धः** = सम्झाइएका
**श्वफल्कतनयः** = श्वफल्कका छोरा अक्रूरले
**वाससा** = कपडाद्वारा
**आच्छन्नं** = ढाकिएको
**सूर्यसमप्रभं** = सूर्यको जस्तै कान्ति भएको
**मणिं** = मणि
**आदाय** = निकालेर
**ददौ** = दिए

**वाक्यार्थ–** यसरी भगवान् श्रीकृष्णले शान्तवचनद्वारा सम्झाएपछि श्वफल्कका छोरा अक्रूरले कपडाले बेरेर राखेको सूर्यसमान कान्ति भएको त्यो स्यमन्तक मणि निकालेर श्रीकृष्णलाई दिए।

**स्यमन्तकं दर्शयित्वा ज्ञातिभ्यो रज आत्मनः।**
**विमृज्य मणिना भूयस्तस्मै प्रत्यर्पयत् प्रभुः॥ ४१॥**

**पदार्थ–**
**प्रभुः** = सर्वसमर्थ श्रीकृष्णले
**ज्ञातिभ्यः** = बलराम आदि बन्धुजनलाई
**स्यमन्तकं** = स्यमन्तक मणि
**दर्शयित्वा** = देखाएर
**मणिना** = त्यो मणिद्वारा
**आत्मनः** = आफ्नो
**रजः** = मिथ्या अपवाद
**विमृज्य** = हटाएर
**भूयः** = फेरि
**तस्मै** = उनै अक्रूरलाई नै
**प्रत्यर्पयत्** = फिर्ता दिनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले त्यो स्यमन्तक मणि बलराम, सत्यभामा आदि सम्पूर्ण बन्धुहरूलाई देखाएर त्यही मणिद्वारा आफूमाथि लागेको मिथ्या अपवाद हटाउनुभयो अनि त्यो मणि अक्रूरलाई नै फिर्ता गरिदिनुभयो।

**यस्त्वेतद् भगवत ईश्वरस्य विष्णो–**
**र्वीर्याढ्यं वृजिनहरं सुमङ्गलं च।**
**आख्यानं पठति शृणोत्यनुस्मरेद् वा**
**दुष्कीर्तिं दुरितमपोह्य याति शान्तिम्॥ ४२॥**

**पदार्थ–**
**यः तु** = जुन व्यक्तिले
**ईश्वरस्य** = सर्वशक्तिमान्
**विष्णोः** = सर्वव्यापक
**भगवतः** = भगवान् श्रीकृष्णको
**वीर्याढ्यं** = पराक्रमले पूर्ण
**वृजिनहरं** = पापनाशक
**सुमङ्गलं च** = कल्याणकारी
**एतत्** = यो
**आख्यानं** = कथा (स्यमन्तकोपाख्यान)
**पठति** = पढ्दछ
**शृणोति** = सुन्दछ
**अनुस्मरेत् वा** = अथवा स्मरण गर्दछ भने (त्यो व्यक्तिले)
**दुष्कीर्तिं** = दुष्कीर्ति र
**दुरितं** = पापलाई
**अपोह्य** = हटाएर
**शान्तिं** = शान्ति
**याति** = प्राप्त गर्दछ

**वाक्यार्थ–** सर्वशक्तिमान् सर्वव्यापक भगवान् श्रीकृष्णको पराक्रमले परिपूर्ण भएको यो कथा (स्यमन्तकोपाख्यान) पापनाशक र अत्यन्त कल्याणकारी छ। अतः जुन व्यक्तिले यो कथा पढ्दछ, सुन्दछ वा दिनदिनै स्मरण गर्दछ भने त्यसका सम्पूर्ण दुष्कीर्ति र पापहरू नष्ट हुन्छन् र अन्तिममा उसले शान्ति पनि प्राप्त गर्दछ।

**प्रकरणसार–** अध्याय ५५ देखि ५७ सम्मका तीन अध्यायमा भगवान्मा काम, क्रोध र लोभको सम्बन्ध नभएको सूचित गरिएको छ। रुक्मिणी भगवान्की मायारूपा शक्ति हुन्। मायासँग सम्बन्धित भइसकेपछि भगवान्मा पनि विकारहरू आए कि भन्ने शङ्का हुँदा त्यसलाई हटाउन यी तीन अध्यायहरूमा अनेक चरित्रहरूको माध्यमले उहाँमा मायादोषसम्बन्ध नरहेको

स्पष्ट पारिएको छ। मायाका मुख्य कार्य काम, क्रोध र लोभ नै हुन्। श्रीमद्भगवद्गीता (१६।२१)मा भगवान्ले पनि **कामः क्रोधस्तथा लोभस्तस्मादेतत्त्रयं त्यजेत्** भनी काम, क्रोध र लोभ यी तीनलाई नै नरकका द्वार बताई यिनलाई त्याग्नुपर्ने बताउनुभएको छ। भगवान्मा कामको प्रभाव छैन भन्ने देखाउन काम पनि उहाँकै कार्य भएको र त्यसले सबैलाई प्रभावित गरे पनि भगवान्लाई प्रभावित गर्न नसक्ने देखाइएको छ। पुत्रस्वीकार गर्ने कामना पनि उहाँमा देखिएको छैन। सबै जान्दा जान्दै पनि नारदजीको उपदेशपछि मात्र उहाँले सामान्य भावले कुनै आतुरता विना प्रद्युम्नलाई स्विकार्नुभएको छ। अर्को अध्यायमा क्रोधसँग सम्बन्ध नभएको जनाउन जाम्बवतीविवाह आदि प्रसङ्ग आएको छ। आफ्नो निन्दा गर्दै हिँड्ने सत्यजित्सँग पनि उहाँ रिसाउनुभएको छैन र उल्टै उनैकी कन्या स्वीकार गर्ने सौहार्द उहाँले देखाउनुभएको छ। यो अध्यायमा चाहिँ स्यमन्तक मणिमाथि कत्ति पनि लोभ नभएको कुरा मणि अक्रूरलाई नै राख्न दिएबाट थाहा पाइन्छ। यसरी भगवान्मा मायाका दुर्गुणहरूको सम्बन्ध छैन भन्ने रहस्य तीन उपाख्यानहरूद्वारा स्पष्ट पारिएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे स्यमन्तकोपाख्याने सप्तपञ्चाशत्तमोऽध्यायः ॥ ५७ ॥**

# अथाष्टपञ्चाशत्तमोऽध्यायः

## भगवान् श्रीकृष्णको कालिन्दी, सत्या, भद्रा आदिसँग विवाह

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एकदा पाण्डवान् द्रष्टुं प्रतीतान् पुरुषोत्तमः।**

**इन्द्रप्रस्थं गतः श्रीमान् युयुधानादिभिर्वृतः॥ १॥**

**पदार्थ–**
**प्रतीतान्** = जीवित छन् भनेर जानिएका
**पाण्डवान्** = पाण्डवहरूलाई
**द्रष्टुं** = हेर्न
**युयुधानादिभिः** = युयुधान (सात्यकि) आदिद्वारा
**वृतः** = घेरिनुभएका
**श्रीमान्** = लक्ष्मीपति
**पुरुषोत्तमः** = श्रीकृष्ण
**एकदा** = एक दिन
**इन्द्रप्रस्थं** = इन्द्रप्रस्थ
**गतः** = जानुभयो

**वाक्यार्थ–** (लाक्षागृहमा मरे भनिए पनि) पाण्डवहरू जीवितै छन् भन्ने प्रसिद्धि भएपछि ती पाण्डवहरूलाई हेर्न लक्ष्मीपति श्रीकृष्ण एक दिन सात्यकि आदिका साथमा इन्द्रप्रस्थ जानुभयो।

**दृष्ट्वा तमागतं पार्था मुकुन्दमखिलेश्वरम्।**

**उत्तस्थुर्युगपद् वीराः प्राणा मुख्यमिवागतम्॥ २॥**

**पदार्थ–**
**वीराः** = वीर
**पार्थाः** = पाण्डवहरू
**अखिलेश्वरं** = सर्वेश्वर
**तं** = ती देवकीनन्दन
**मुकुन्दं** = श्रीकृष्णलाई
**आगतं** = आउँदै गर्नुभएको
**दृष्ट्वा** = देखेर
**मुख्यं** = मुख्य प्राण
**आगतं** = आएको देखेर
**प्राणाः इव** = इन्द्रियहरू झैँ
**युगपत्** = एकैचोटि
**उत्तस्थुः** = उठे

**वाक्यार्थ–** जसरी मुख्य प्राणको सञ्चार भएपछि इन्द्रियहरू एकसाथ जागृत हुन्छन्, त्यसै गरी सर्वेश्वर देवकीनन्दन श्रीकृष्णलाई आउँदै गर्नुभएको देखेर उहाँको स्वागतका लागि वीर पाण्डवहरू आ–आफ्नो आसनबाट एकैचोटि जुरुक्क उठे।

**परिष्वज्याच्युतं वीरा अङ्गसङ्गहतैनसः।**

**सानुरागस्मितं वक्त्रं वीक्ष्य तस्य मुदं ययुः॥ ३॥**

**पदार्थ–**
**अच्युतं** = श्रीकृष्णलाई
**परिष्वज्य** = अङ्कमाल गरेर
**अङ्गसङ्गहतैनसः** = भगवान्को अङ्गस्पर्शद्वारा सम्पूर्ण पापहरू नष्ट भएका

**वीराः** = वीर पाण्डवहरूले
**सानुरागस्मितं** = प्रेमसहितको मन्द मुस्कान भएको
**तस्य** = ती भगवान्‌को
**वक्त्रं** = मुख
**वीक्ष्य** = देखेर
**मुदं** = आनन्दमा
**ययुः** = प्राप्त भए

**वाक्यार्थ–** वीर पाण्डवहरूले भगवान् श्रीकृष्णलाई अङ्कमाल गरे। त्यस वेला भगवान्‌को अङ्गस्पर्शद्वारा सम्पूर्ण पापहरू नष्ट भएका पाण्डवहरू भगवान्‌को प्रेमसहितको मन्दमुस्कान भएको मुखारविन्द देखेर अत्यन्त आनन्दित भए।

**युधिष्ठिरस्य भीमस्य कृत्वा पादाभिवन्दनम्।**
**फाल्गुनं परिरभ्याथ यमाभ्यां चाभिवन्दितः॥ ४॥**

**पदार्थ–**
**युधिष्ठिरस्य** = युधिष्ठिरको
**भीमस्य** = भीमको
**पादाभिवन्दनं** = चरणमा अभिवादन
**कृत्वा** = गरेर
**फाल्गुनं** = अर्जुनलाई
**परिरभ्य** = अङ्कमाल गरेर
**अथ** = त्यसपछि
**यमाभ्यां च** = नकुल र सहदेवद्वारा
**अभिवन्दितः** = अभिवादन गरिनुभयो

**वाक्यार्थ–** श्रीकृष्णले युधिष्ठिर र भीमसेनको चरणमा अभिवादन गर्नुभयो, अर्जुनलाई अङ्कमाल गर्नुभयो, त्यसपछि नकुल र सहदेवले उहाँलाई अभिवादन गरे।

**परमासन आसीनं कृष्णा कृष्णमनिन्दिता।**
**नवोढा व्रीडिता किञ्चिच्छनैरेत्याभ्यवन्दत॥ ५॥**

**पदार्थ–**
**किञ्चित्** = केही
**व्रीडिता** = लजाएकी
**अनिन्दिता** = निन्दा नगरिएकी
**नवोढा** = नवविवाहित
**कृष्णा** = श्यामवर्णा द्रौपदीले
**शनैः** = बिस्तारै
**एत्य** = आएर
**परमासने** = उत्तम सिंहासनमा
**आसीनं** = बस्नुभएका
**कृष्णं** = श्रीकृष्णलाई
**अभ्यवन्दत** = अभिवादन गरिन्

**वाक्यार्थ–** अनिन्दिता नवविवाहिता श्यामवर्णा द्रौपदी केही लजाउँदै बिस्तारै उत्तम सिंहासनमा बस्नुभएका भगवान् श्रीकृष्णको नजिकमा आइन् र उनले श्रीकृष्णलाई अभिवादन गरिन्।

**तथैव सात्यकिः पार्थैः पूजितश्चाभिवन्दितः।**
**निषसादासनेऽन्ये च पूजिताः पर्युपासत॥ ६॥**

**पदार्थ–**
**तथा एव** = त्यसै गरी
**पार्थैः** = पृथापुत्र पाण्डवहरूद्वारा
**पूजितः** = सम्मान गरिएका
**अभिवन्दितः च** = अभिवादन समेत गरिएका
**सात्यकिः** = सात्यकि
**आसने** = आसनमा
**निषसाद** = बसे

**पूजिताः** = पूजित
**अन्ये च** = अन्य यदुवंशीहरू
पनि
**पर्युपासत** = श्रीकृष्णको वरिपरि
बसे

**वाक्यार्थ–** त्यसै गरी पाण्डवहरूले सात्यकिलाई पनि पूजासत्कार गरी अभिवादन गरे। सात्यकि आफ्नो आसनमा बसेपछि अन्य यदुवंशीहरूको पनि यथायोग्य सम्मान र वन्दना गरियो अनि सबै जना श्रीकृष्णको वरिपरि आ–आफ्नो आसनमा बसे।

**पृथां समागत्य कृताभिवादनस्तयातिहार्दार्द्रदृशाभिरम्भितः।**
**आपृष्टवांस्तां कुशलं सहस्नुषां पितृष्वसारं परिपृष्टबान्धवः॥ ७॥**

**पदार्थ–**
**पृथां** = कुन्तीका नजिक
**समागत्य** = आएर
**कृताभिवादनः** = नमस्कार गर्नुभएका
**अतिहार्दार्द्रदृशा** = अति स्नेहका कारण सजल आँखा भएकी
**तया** = ती कुन्तीद्वारा
**अभिरम्भितः** = आलिङ्गन गरिनुभएका
**परिपृष्टबान्धवः** = वसुदेव आदि आफ्ना बन्धुजनको विषयमा कुशल प्रश्न गरिनुभएका श्रीकृष्णले
**सहस्नुषां** = बुहारी द्रौपदीसहित
**पितृष्वसारं** = फुपू
**तां** = ती कुन्तीलाई
**कुशलं** = कुशलताका सम्बन्धमा
**आपृष्टवान्** = सोध्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले आफ्नी फुपू कुन्ती भएको ठाउँमा गएर उहाँलाई नमस्कार गर्नुभयो। अति स्नेहका कारण सजल आँखा भएकी कुन्तीले भगवान् श्रीकृष्णलाई आलिङ्गन गरिन्। अनि उनले भगवान्लाई वसुदेव आदि आफ्ना बन्धुजनहरूको सन्चो–बिसन्चोको बारेमा सोधिन्। त्यसपछि भगवान्ले पनि कुलवधू द्रौपदी सहित फुपू कुन्तीको कुशलमङ्गलका बारेमा सोध्नुभयो।

**तमाह प्रेमवैक्लव्यरुद्धकण्ठाश्रुलोचना।**
**स्मरन्ती तान् बहून् क्लेशान् क्लेशापायात्मदर्शनम्॥ ८॥**

**पदार्थ–**
**प्रेमवैक्लव्यरुद्धकण्ठा** = प्रेमको व्याकुलताका कारण गला अवरुद्ध भएकी
**अश्रुलोचना** = आँखाभरि आँसु भएकी कुन्तीले
**तान्** = ती पहिला भोगेका
**बहून्** = धेरै
**क्लेशान्** = दुःखहरू
**स्मरन्ती** = सम्झँदै
**क्लेशापायात्मदर्शनं** = दुःखहरूको विनाशका लागि आत्मदर्शन गराउनुहुने
**तं** = ती भगवान्लाई
**आह** = भनिन्

**वाक्यार्थ–** प्रेमको व्याकुलताले गला अवरुद्ध भएकी र आँखाभरि आँसु भरिएकी कुन्तीले भक्तहरूको दुःखविनाशका लागि आत्मदर्शन गराउनुहुने भगवान्ले कुशलताविषयक प्रश्न सोधेपछि आफूहरूले पहिला भोगेका दुःखहरू सम्झँदै भनिन्।

**तदैव कुशलं नोऽभूत् सनाथास्ते कृता वयम्।**

**ज्ञातीन् नः स्मरता कृष्ण भ्राता मे प्रेषितस्त्वया॥ ९॥**

**पदार्थ—**
**कृष्ण** = हे कृष्ण
**ज्ञातीन्** = आत्मीय बन्धुजन
**नः** = हामीलाई
**स्मरता** = स्मरण गर्नुहुने
**त्वया** = हजुरद्वारा
**मे** = मेरा
**भ्राता** = भाइ अक्रूर (हाम्रो खबर बुझ्न)
**प्रेषितः** = पठाइए
**तदा एव** = त्यही वेला नै
**नः** = हाम्रो
**कुशलं** = कल्याण
**अभूत्** = भयो
**ते** = हजुरद्वारा
**वयं** = हामीहरू
**सनाथाः** = सनाथ
**कृताः** = बनाइयौँ

**वाक्यार्थ—** हे कृष्ण! जुन समयमा हजुरले हामी आत्मीय बन्धुजनलाई स्मरण गरी हाम्रो हालखबर बुझ्न मेरा भाइ अक्रूरलाई यहाँ पठाउनुभयो, त्यही वेला नै हाम्रो कल्याण भयो। हामीहरू त्यही वेलादेखि नै सनाथ भयौँ।

**न तेऽस्ति स्वपरभ्रान्तिर्विश्वस्य सुहृदात्मनः।**

**तथापि स्मरतां शश्वत् क्लेशान् हंसि हृदि स्थितः॥ १०॥**

**पदार्थ—**
**विश्वस्य** = सम्पूर्ण जगत्को
**सुहृदात्मनः** = सहृदयी मित्र र आत्मा
**ते** = हजुरको
**स्वपरभ्रान्तिः** = आफ्नो र परको भन्ने भ्रम
**न अस्ति** = छैन
**तथा अपि** = तर पनि
**स्मरतां** = आफ्नो स्मरण गर्ने भक्तहरूको
**हृदि** = हृदयमा
**शश्वत्** = सधैँ
**स्थितः** = बसेर
**क्लेशान्** = दुःखहरूलाई
**हंसि** = विनाश गर्नुहुन्छ

**वाक्यार्थ—** हजुर सम्पूर्ण जगत्का अनन्य सहृदयी मित्र र साक्षात् आत्मा हुनुहुन्छ। यो मेरो र यो अर्काको भन्ने भ्रम हजुरमा छैन। तापनि जुन-जुन भक्तहरूले हजुरको स्मरण गर्दछन्, तिनीहरूको हृदयमा हजुर निरन्तर निवास गर्नुहुन्छ र ती भक्तहरूका सम्पूर्ण दुःख नष्ट गरिदिनुहुन्छ।

**युधिष्ठिर उवाच** (युधिष्ठिरले भने)

**किं न आचरितं श्रेयो न वेदाहमधीश्वर।**

**योगेश्वराणां दुर्दर्शो यन्नो दृष्टः कुमेधसाम्॥ ११॥**

**पदार्थ—**
**अधीश्वरः** = हे सर्वेश्वर
**नः** = हामीहरूबाट
**किं** = के
**श्रेयः** = पुण्य
**आचरितं** = गरियो
**अहं** = म
**न वेद** = जान्दिनँ
**यत्** = किनभने

| | | |
|---|---|---|
| **योगेश्वराणां** = ठुला-ठुला सिद्ध योगीश्वरहरूका लागि पनि | हजुर | **नः** = हाम्रा लागि |
| **दुर्दर्शः** = दर्शन गर्न कठिन हुने | **कुमेधसां** = विषयासक्त चित्त भएका | **दृष्टः** = दर्शनीय हुनुभयो |

**वाक्यार्थ–** हे सर्वेश्वर! हामीहरूले के पुण्यकर्म गरेका थियौँ त्यो मलाई थाहा छैन, जुन पुण्यकर्मका कारण ठुला-ठुला सिद्ध योगीश्वरहरूका लागि पनि दर्शन गर्न कठिन हुने हजुरले हामीजस्ता विषयासक्त चित्त भएकाहरूलाई पनि दर्शन दिइरहनुभएको छ।

**इति वै वार्षिकान् मासान् राज्ञा सोऽभ्यर्थितः सुखम्।**
**जनयन् नयनानन्दमिन्द्रप्रस्थौकसां विभुः॥ १२॥**

| पदार्थ– | | |
|---|---|---|
| **इति** = यसरी | **विभुः** = सर्वव्यापक | **जनयन्** = पैदा गर्दै |
| **राज्ञा** = महाराज युधिष्ठिरद्वारा | **सः** = ती श्रीकृष्ण | **वार्षिकान् मासान्** = वर्षाकालको चार महिनासम्म |
| **अभ्यर्थितः** = प्रार्थना गरिनुभएका | **इन्द्रप्रस्थौकसां** = इन्द्रप्रस्थवासीहरूको | **वै** = निश्चय नै |
| | **नयनानन्दं** = आँखामा आनन्द | **सुखम्** = सुखपूर्वक (बस्नुभयो) |

**वाक्यार्थ–** यसरी महाराज युधिष्ठिरद्वारा बस्नका लागि प्रार्थना गरिएपछि सर्वव्यापक भगवान् श्रीकृष्ण इन्द्रप्रस्थमा निवास गर्ने प्रजाहरूको आँखामा आनन्द पैदा गर्दै वर्षाकालका चार महिनासम्म त्यहीँ सुखपूर्वक बस्नुभयो।

**एकदा रथमारुह्य विजयो वानरध्वजम्।**
**गाण्डीवं धनुरादाय तूणौ चाक्षयसायकौ॥ १३॥**
**साकं कृष्णेन सन्नद्धो विहर्तुं विपिनं वनम्।**
**बहुव्यालमृगाकीर्णं प्राविशत् परवीरहा॥ १४॥**

| पदार्थ– | | |
|---|---|---|
| **एकदा** = एक दिन | **आरुह्य** = चढेर | **कृष्णेन साकं** = श्रीकृष्णका साथमा |
| **परवीरहा** = शत्रुपक्षीय वीरहरूलाई नाश गर्न समर्थ | **गाण्डीवं** = गाण्डीव नामक | **विहर्तुं** = वनविहार गर्न |
| **विजयः** = अर्जुन | **धनुः** = धनु | **बहुव्यालमृगाकीर्णं** = धेरै हिंस्रक पशु र मृगहरूले व्याप्त भएको |
| **वानरध्वजं** = ध्वजामा वानर (हनुमान्)को चिह्न अङ्कित भएको | **अक्षयसायकौ** = नाश नहुने बाण भएका | **विपिनं** = घना |
| **रथं** = रथमा | **तूणौ च** = दुई ओटा ठोक्रा | **वनम्** = वनमा |
| | **आदाय** = लिएर | **प्राविशत्** = प्रवेश गरे |
| | **सन्नद्धः** = कवचबद्ध भई | |

**वाक्यार्थ–** एकदिन शत्रुपक्षीय वीरहरूलाई नष्ट गर्न सक्षम अर्जुन गाण्डीव धनु र बाण कहिल्यै समाप्त नहुने दुई ओटा ठोक्रा लिएर छातीमा कवच लगाई वानर (हनुमान्)को चिह्नले अङ्कित

झण्डा भएको आफ्नो रथमा बसे। त्यसपछि श्रीकृष्णका साथमा उनी वनविहारका लागि धेरै हिंस्रक पशु र मृगहरूले व्याप्त भएको घना जङ्गलमा प्रवेश गरे।

**तत्राविध्यच्छरैर्व्याघ्रान् शूकरान् महिषान् रुरून्।**
**शरभान् गवयान् खड्गान् हरिणाञ्छशशल्लकान्॥ १५॥**

**पदार्थ–**
**तत्र** = त्यस वनमा
**शरैः** = बाणहरूद्वारा
**व्याघ्रान्** = बाघ
**शूकरान्** = बँदेल
**महिषान्** = अर्ना
**रुरून्** = कालो मृग
**शरभान्** = चौँरी
**गवयान्** = नीलगाई
**खड्गान्** = गैँडा
**हरिणान्** = हरिण
**शशशल्लकान्** = खरायो र दुम्सीलाई
**आविध्यत्** = प्रहार गरे

**वाक्यार्थ–** वनमा अर्जुनले बाघ, बँदेल, अर्ना, कालो मृग, चौँरी, नीलगाई, गैँडा, हरिण, खरायो र दुम्सी आदि वन्य पशुहरूलाई बाण प्रहार गरे।

**तान् निन्युः किङ्करा राज्ञे मेध्यान् पर्वण्युपागते।**
**तृट्परीतः परिश्रान्तो बीभत्सुर्यमुनामगात्॥ १६॥**

**पदार्थ–**
**पर्वणि** = कर्मविशेष
**उपागते** = प्राप्त भएपछि
**किङ्कराः** = सेवकहरूले
**मेध्यान्** = यज्ञ आदि कर्मका लागि उचित
**तान्** = ती मारिएका पशुहरूलाई
**राज्ञे** = राजा युधिष्ठिरको सामु
**निन्युः** = लगे
**तृट्परीतः** = तिर्खाले व्याकुल भएका
**परिश्रान्तः** = थाकेका
**बीभत्सुः** = आक्रमणकारी अर्जुन
**यमुनां** = यमुना नदीमा
**अगात्** = गए

**वाक्यार्थ–** ती वन्यपशुमध्ये यज्ञीय कर्मका लागि पवित्र वा उचित मानिने पशुहरूलाई कर्मविशेष आएको वेलामा सेवकहरूले महाराज युधिष्ठिरका सामु लगे। अर्जुन चाहिँ शिकार खेल्दा-खेल्दै तिर्खाले व्याकुल भएर अत्यन्तै थाकिसकेका थिए। त्यसैले उनी पानी पिउन र विश्राम गर्न भनेर यमुना नदीमा गए।

**तत्रोपस्पृश्य विशदं पीत्वा वारि महारथौ।**
**कृष्णौ ददृशतुः कन्यां चरन्तीं चारुदर्शनाम्॥ १७॥**

**पदार्थ–**
**महारथौ** = महारथी
**कृष्णौ** = श्रीकृष्ण र अर्जुनले
**तत्र** = त्यो यमुना नदीमा
**उपस्पृश्य** = आचमन आदि गरेर
**विशदं** = निर्मल
**वारि** = पानी
**पीत्वा** = पिएपछि
**चारुदर्शनां** = सुन्दर शरीर भएकी
**चरन्तीं** = यमुनाको किनारमा घुमिरहेकी
**कन्यां** = कन्यालाई
**ददृशतुः** = देख्नुभयो

**वाक्यार्थ–** श्रीकृष्ण र अर्जुनले यमुना नदीमा आचमन र स्नान गर्नुभयो अनि नदीको निर्मल जल पनि पिउनुभयो। त्यसै वेला दुबै महारथीहरूले यमुनाको किनारमा एक्लै घुमिरहेकी अति सुन्दर शरीर भएकी एउटी कन्यालाई देख्नुभयो।

**तामासाद्य वरारोहां सुद्विजां रुचिराननाम्।**

**पप्रच्छ प्रेषितः सख्या फाल्गुनः प्रमदोत्तमाम्॥ १८॥**

**पदार्थ–**
**सख्या** = मित्र श्रीकृष्णद्वारा
**प्रेषितः** = पठाइएका
**फाल्गुनः** = अर्जुनले
**वरारोहां** = सुन्दर शरीर भएकी
**सुद्विजां** = मिलेका सुन्दर दाँत भएकी
**रुचिराननां** = सुन्दर अनुहार भएकी
**प्रमदोत्तमां** = श्रेष्ठ कन्या
**तां** = ती सुन्दरीका सामु
**आसाद्य** = पुगेर
**पप्रच्छ** = सोधे

**वाक्यार्थ–** श्रीकृष्णले ती कन्याको विषयमा बुझ्न पठाएपछि शरीर, दाँत र अनुहार अत्यन्त सुन्दर देखिने परमसुन्दरी ती स्त्रीको नजिकमा पुगेर अर्जुनले सोधे।

**का त्वं कस्यासि सुश्रोणि कुतोऽसि किं चिकीर्षसि।**

**मन्ये त्वां पतिमिच्छन्तीं सर्वं कथय शोभने॥ १९॥**

**पदार्थ–**
**सुश्रोणि** = हे सुन्दरी
**त्वं** = तिमी
**का** = को हौ
**कुतः** = कहाँबाट (आएकी)
**असि** = हौ
**कस्य** = कसकी (छोरी)
**असि** = हौ
**किं** = के
**चिकीर्षसि** = गर्न चाहन्छ्यौ
**शोभने** = हे सुन्दरी
**त्वां** = तिमीलाई
**पतिं** = पति
**इच्छन्तीं** = चाहिरहेकी
**मन्ये** = ठान्दछु
**सर्वं** = सबै वास्तविकता
**कथय** = बताऊ

**वाक्यार्थ–** हे सुन्दरी ! तिमी को हौ ? कसरी छोरी हौ ? कहाँबाट आएकी हौ ? र यहाँ के गर्न चाहन्छ्यौ ? हे सुन्दरी ! मलाई लाग्दछ कि, तिमी पतिको इच्छा गरिरहेकी छ्यौ। त्यसैले तिमी आफ्नो विषयमा सबै कुरा बताऊ।

**कालिन्द्युवाच** (कालिन्दीले भनिन्)

**अहं देवस्य सवितुर्दुहिता पतिमिच्छती।**

**विष्णुं वरेण्यं वरदं तपः परममास्थिता॥ २०॥**

**पदार्थ–**
**अहं** = म
**देवस्य** = भगवान्
**सवितुः** = सूर्यकी
**दुहिता** = छोरी (हुँ)
**वरेण्यं** = वरणीय

**वरदं** = वरप्रदाता
**विष्णुं** = विष्णुलाई
**पतिं** = पतिको रूपमा
**इच्छती** = कामना गरी
**परमं तपः** = कठोर तपस्यामा
**आस्थिता** = रहेकी छु

**वाक्यार्थ–** म भगवान् सूर्यकी छोरी हुँ। वरदाता विष्णुलाई वरण गरी उहाँलाई पतिको रूपमा प्राप्त गर्ने इच्छा गरी म यहाँ कठोर तपस्या गरिरहेकी छु।

**नान्यं पतिं वृणे वीर तमृते श्रीनिकेतनम्।**
**तुष्यतां मे स भगवान् मुकुन्दोऽनाथसंश्रयः॥ २१॥**

**पदार्थ–**
**वीर** = हे वीर
**तं** = ती
**श्रीनिकेतनम् ऋते** = लक्ष्मीका परम आश्रय भगवान्‌लाई छाडेर
**अन्यं** = अरूलाई
**पतिं** = पतिको रूपमा
**न वृणे** = वरण गर्दिनँ
**अनाथसंश्रयः** = अनाथहरूको शरण भएका
**सः** = ती
**भगवान्** = भगवान्
**मुकुन्दः** = श्रीकृष्ण
**मे** = ममाथि
**तुष्यताम्** = प्रसन्न हुनुहोस्

**वाक्यार्थ–** हे वीर अर्जुन! स्वयं लक्ष्मीका परम आश्रय भगवान्‌लाई छाडेर म अरू कुनै पनि पुरुषलाई पतिको रूपमा वरण गर्दिनँ। अनाथहरूका एक मात्र शरण भएका भगवान् श्रीकृष्ण मसँग प्रसन्न हुनुहोस्।

**कालिन्दीति समाख्याता वसामि यमुनाजले।**
**निर्मिते भवने पित्रा यावदच्युतदर्शनम्॥ २२॥**

**पदार्थ–**
**कालिन्दी इति** = कालिन्दी यो नामले
**समाख्याता** = बोलाइएकी म
**यावदच्युतदर्शनं** = श्रीकृष्णको दर्शन नहुन्जेलसम्म
**यमुनाजले** = यमुनाको जलमा
**पित्रा** = पिता सूर्यद्वारा
**निर्मिते** = निर्माण गरिएको
**भवने** = घरमा
**वसामि** = बस्दछु

**वाक्यार्थ–** मलाई सबैले 'कालिन्दी' नामले बोलाउँछन्। जबसम्म भगवान् श्रीकृष्णको दर्शन पाउदिनँ तबसम्म म यमुनाको जलमा आफ्ना पिता सूर्यले बनाइदिनुभएको घरमा बसिरहन्छु।

**तथावदद् गुडाकेशो वासुदेवाय सोऽपि ताम्।**
**रथमारोप्य तद् विद्वान् धर्मराजमुपागमत्॥ २३॥**

**पदार्थ–**
**गुडाकेशः** = निद्रा जित्ने अर्जुनले (आएर)
**तथा** = कालिन्दीले बताएको सबै कुरा
**वासुदेवाय** = श्रीकृष्णलाई
**अवदत्** = बताए
**तत्** = त्यो मलाई नै पाउन कालिन्दीले तपस्या गरेको हो भन्ने
**विद्वान्** = जान्नुभएका
**सः अपि** = ती श्रीकृष्णले पनि

**तां** = ती कालिन्दीलाई
**रथं** = रथमा
**आरोप्य** = राखेर
**धर्मराजं** = धर्मराज युधिष्ठिरको सामु
**उपागमत्** = जानुभयो

**वाक्यार्थ–** निद्राजयी अर्जुनले आएर कालिन्दीले बताएको सबै कुरा श्रीकृष्णलाई सुनाए। मलाई नै पतिको रूपमा पाउन कालिन्दीले तपस्या गरेकी हुन् भन्ने कुरा पहिल्यै थाहा पाउनुभएका श्रीकृष्णले कालिन्दीलाई आफ्नो रथमा राख्नुभयो र उहाँ युधिष्ठिर भएको ठाउँ हस्तिनापुर जानुभयो।

**यदैव कृष्णः सन्दिष्टः पार्थानां परमाद्भुतम्।**
**कारयामास नगरं विचित्रं विश्वकर्मणा ॥ २४ ॥**

**पदार्थ–**
**यदा एव** = जुन वेला
**सन्दिष्टः** = अनुरोध गरिएका
**कृष्णः** = श्रीकृष्ण भगवान्ले
**विश्वकर्मणा** = विश्वकर्माद्वारा
**पार्थानां** = पृथापुत्र पाण्डवहरूको लागि
**परमाद्भुतं** = अत्यन्त अद्भुत
**विचित्रं** = विचित्र
**नगरं** = सहर
**कारयामास** = बनाइदिनुभयो

**वाक्यार्थ–** जब पाण्डवहरूले 'हामीसँग सहर नभएकाले बनाइदिनुहोस्' भनेर प्रार्थना गरे तब भगवान् श्रीकृष्णले विश्वकर्माद्वारा पाण्डवहरूको आवासको लागि एउटा अत्यन्त अद्भुत र विचित्रको सहर बनाइदिनुभयो।

**भगवांस्तत्र निवसन् स्वानां प्रियचिकीर्षया।**
**अग्नये खाण्डवं दातुमर्जुनस्यास सारथिः ॥ २५ ॥**

**पदार्थ–**
**भगवान्** = भगवान्ले
**स्वानां** = आफ्ना प्रिय भक्तहरूको
**प्रियचिकीर्षया** = हित गर्ने इच्छाले
**तत्र** = त्यो हस्तिनापुरमा
**निवसन्** = बसेर
**अग्नये** = अग्निलाई
**खाण्डवं** = खाण्डव नामको वन
**दातुं** = दिनका लागि
**अर्जुनस्य** = अर्जुनको
**सारथिः** = सारथि
**आस** = हुनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले आफ्ना प्रिय भक्त पाण्डवहरूको हित गर्ने इच्छा गरी हस्तिनापुरमा बस्नुभयो। यसै समयमा उहाँले अग्निदेवलाई 'खाण्डव' नाम गरेको देवराज इन्द्रको वन दिनका लागि अर्जुनको सारथि पनि बन्नुभयो।

**सोऽग्निस्तुष्टो धनुरदाद्धयाञ्छ्वेतान् रथं नृप।**
**अर्जुनायाक्षयौ तूणौ वर्म चाभेद्यमस्त्रिभिः ॥ २६ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**सः** = त्यो खाण्डव वनलाई

डढाएका
**अग्निः** = अग्निले
**तुष्टः** = खुसी भएर
**अर्जुनाय** = अर्जुनलाई
**धनुः** = गाण्डीव धनु
**श्वेतान्** = सेता
**हयान्** = चार ओटा घोडा भएको
**रथं** = रथ
**अक्षयौ** = कहिल्यै नष्ट नहुने बाणसहितका
**तूणौ** = दुई ओटा ठोक्रा
**अस्त्रिभिः** = अस्त्रधारी पुरुषहरूद्वारा
**अभेद्यं** = भेदन गर्न नसकिने
**वर्म च** = कवच पनि
**अदात्** = दिए

**वाक्यार्थ–** अर्जुनको सहयोगमा खाण्डव वन डढाउन (खान) पाएका अग्निदेव अत्यन्त प्रसन्न भए अनि उनले अर्जुनलाई गाण्डीव नाम गरेको धनु, सेतो वर्णका चार ओटा घोडा, कहिल्यै नष्ट नहुने बाणसहितका दुई ओटा ठोक्रा र कुनै पनि शस्त्रास्त्रधारीले भेदन गर्न नसक्ने कवच दिए।

**मयश्च मोचितो वह्नेः सभां सख्य उपाहरत्।**
**यस्मिन् दुर्योधनस्यासीज्जलस्थलदृशिभ्रमः॥ २७॥**

**पदार्थ–**
**मयः च** = मय (दैत्यहरूका शिल्पाचार्य) पनि
**वह्नेः** = (खाण्डव वनमा दन्केको) अग्निबाट
**मोचितः** = रक्षित भए (जसले)
**सख्ये** = मित्र अर्जुनका लागि
**सभां** = अद्भुत सभा (बनाएर)
**उपाहरत्** = उपहार दिए
**यस्मिन्** = जुन सभामा
**दुर्योधनस्य** = दुर्योधनलाई
**जलस्थलदृशिभ्रमः** = जल र स्थलमा आँखा तिरमिराउने भ्रम
**आसीत्** = भयो

**वाक्यार्थ–** दैत्यहरूका शिल्पाचार्य खाण्डववन निवासी मयलाई अर्जुनले वनमा दन्केको अग्निबाट बचाएका थिए र उसको अर्जुनसँग मित्रता भएको थियो। अतः मित्र अर्जुनका लागि मयले अत्यन्त अद्भुत सभागृह बनाएर उपहारस्वरूप दियो, जुन सभागृहमा पछि दुर्योधनलाई जलमा स्थलको र स्थलमा जलको भ्रम भयो।

**स तेन समनुज्ञातः सुहृद्भिश्चानुमोदितः।**
**आययौ द्वारकां भूयः सात्यकिप्रमुखैर्वृतः॥ २८॥**

**पदार्थ–**
**तेन** = ती अर्जुनद्वारा
**समनुज्ञातः** = आज्ञा पाउनुभएका
**सुहृद्भिः च** = युधिष्ठिर आदि अन्य बन्धुजनबाट पनि
**अनुमोदितः** = अनुमोदन प्राप्त गर्नुभएका
**सः** = ती भगवान् श्रीकृष्ण
**सात्यकिप्रमुखैः** = सात्यकि आदिद्वारा
**वृतः** = युक्त भई
**भूयः** = फेरि
**द्वारकां** = द्वारकामा
**आययौ** = फर्किनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण अर्जुनको अनुमति तथा युधिष्ठिर आदि अन्य बन्धुहरूको पनि स्वीकृति लिएर सात्यकि आदि यदुवंशीहरूले सहित भई द्वारकामा फर्किनुभयो।

**अथोपयेमे कालिन्दीं सुपुण्यर्त्वृक्ष ऊर्जिते ।**
**वितन्वन् परमानन्दं स्वानां परममङ्गलम् ॥ २९ ॥**

**पदार्थ–**
**अथ** = द्वारकामा आएपछि
**सुपुण्यर्त्वृक्षे** = विवाहयोग्य पवित्र समय र नक्षत्रमा
**ऊर्जिते** = शुभ मुहूर्त भएको वेलामा (भगवान्ले)
**स्वानां** = आफ्ना आत्मीयजनहरूमा
**परमानन्दं** = परमानन्द
**परममङ्गलं** = परम मङ्गल
**वितन्वन्** = फैलाउँदै
**कालिन्दीं** = सूर्यपुत्री कालिन्दीलाई
**उपयेमे** = विवाह गर्नुभयो

**वाक्यार्थ–** द्वारकामा आएपछि भगवान् श्रीकृष्णले विवाहयोग्य पवित्र समय, नक्षत्र र शुभ मुहूर्तमा आफ्ना आत्मीयजनहरूमा परमानन्द र परममङ्गल विस्तार गर्दै सूर्यपुत्री कालिन्दीलाई विवाह गर्नुभयो।

**विन्दानुविन्दावावन्त्यौ दुर्योधनवशानुगौ ।**
**स्वयंवरे स्वभगिनीं कृष्णे सक्तां न्यषेधताम् ॥ ३० ॥**

**पदार्थ–**
**दुर्योधनवशानुगौ** = दुर्योधनको इच्छा अनुसार व्यवहार गर्ने
**आवन्त्यौ** = अवन्तीदेशका राजा
**विन्दानुविन्दौ** = विन्द र अनुविन्दले
**स्वयंवरे** = स्वयंवरमा
**कृष्णे** = श्रीकृष्णमा
**सक्तां** = अनुरक्त भएकी
**स्वभगिनीं** = आफ्नी बहिनीलाई
**न्यषेधताम्** = (श्रीकृष्णसँग विवाह गर्न) निषेध गरेका थिए

**वाक्यार्थ–** दुर्योधनको इच्छा अनुसार काम गर्ने अवन्ती देशका राजा विन्द र अनुविन्दले श्रीकृष्णमा अनुरक्त भएकी आफ्नी बहिनी मित्रविन्दालाई श्रीकृष्णसित विवाह गर्न निषेध गरेका थिए।

**राजाधिदेव्यास्तनयां मित्रविन्दां पितृष्वसुः ।**
**प्रसह्य हृतवान् कृष्णो राजन् राज्ञां प्रपश्यताम् ॥ ३१ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**कृष्णः** = श्रीकृष्णले
**पितृष्वसुः** = फुपू
**राजाधिदेव्याः** = राजाधिदेवीकी
**तनयां** = छोरी
**मित्रविन्दां** = मित्रविन्दालाई
**राज्ञां** = राजाहरूले
**प्रपश्यतां** = हेर्दा-हेर्दै
**प्रसह्य** = बलपूर्वक
**हृतवान्** = हरण गर्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! मित्रविन्दा भगवान् श्रीकृष्णकी फुपू राजाधिदेवीकी छोरी थिइन्। श्रीकृष्णले स्वयंवरमा निमन्त्रित राजाहरूले भरिएकै सभाबाट तिनीहरूले हेर्दाहेर्दै बलपूर्वक मित्रविन्दालाई हरण गर्नुभयो।

**नग्नजिन्नाम कौशल्य आसीद् राजातिधार्मिकः।**
**तस्य सत्याभवत् कन्या देवी नाग्नजिती नृप॥ ३२॥**

**पदार्थ—**
**नृप** = हे राजा परीक्षित्
**नग्नजित् नाम** = नग्नजित् नाम गरेका
**अतिधार्मिकः** = अत्यन्त धार्मिक
**कौशल्यः राजा** = कोशल देशका राजा
**आसीत्** = थिए
**तस्य** = तिनका
**नाग्नजिती** = (पिताको नामबाट) नाग्नजिती नामले प्रसिद्ध भएकी
**सत्या** = सत्या नामकी
**देवी** = कान्तिमती
**कन्या** = कन्या
**अभवत्** = भइन्

**वाक्यार्थ—** हे राजा परीक्षित्! कोशल देशका राजा नग्नजित् अत्यन्त धार्मिक थिए। उनकी सत्या नाम गरेकी रूपमती छोरी थिइन्। नग्नजित्की छोरी भएकाले उनलाई नाग्नजिती पनि भनिन्थ्यो।

**न तां शेकुर्नृपा वोढुमजित्वा सप्त गोवृषान्।**
**तीक्ष्णशृङ्गान् सुदुर्धर्षान् वीर्यगन्धासहान् खलान्॥ ३३॥**

**पदार्थ—**
**नृपाः** = राजाहरूले
**तीक्ष्णशृङ्गान्** = तिखा सिङ भएका
**वीर्यगन्धासहान्** = वीरको गन्ध पनि सहन नसक्ने
**सुदुर्धर्षान्** = वशमा राख्नै नसकिने
**खलान्** = उद्दण्ड
**सप्तगोवृषान्** = सात ओटा साँढेहरूलाई
**अजित्वा** = नजितीकन
**तां** = ती सत्यालाई
**वोढुं** = विवाह गर्न
**न शेकुः** = सकेनन्

**वाक्यार्थ—** (राजा नग्नजित्को प्रतिज्ञा अनुसार) उनका सात ओटा उद्दण्ड साँढेलाई जित्न नसकेको हुनाले कुनै पनि राजाले सत्यासँग विवाह गर्न सकेका थिएनन्, किनभने साँढेहरूका सिङ अत्यन्त तिखा र लामा थिए। कुनै पनि उपायद्वारा वशमा राख्न नसकिने ती साँढेहरूले वीरपुरुषको गन्ध पनि सहन सक्दैनथे।

**तां श्रुत्वा वृषजिल्लभ्यां भगवान् सात्वतां पतिः।**
**जगाम कौशल्यपुरं सैन्येन महता वृतः॥ ३४॥**

**पदार्थ—**
**वृषजिल्लभ्यां** = साँढेहरूलाई जित्ने पुरुषद्वारा मात्र पाउन सकिने
**तां** = ती सत्यालाई
**श्रुत्वा** = सुनेर
**सात्वतां पतिः** = यदुवंशीहरूका मालिक
**भगवान्** = भगवान्
**महता** = विशाल
**सैन्येन** = सेनाद्वारा
**वृतः** = युक्त भएर
**कौशल्यपुरं** = कोशलदेशका राजा नग्नजित्को नगर अयोध्यामा
**जगाम** = जानुभयो

**वाक्यार्थ–** जब यदुवंशपालक भगवान् श्रीकृष्णले 'साँढेहरूलाई जित्ने पुरुषले मात्र सत्यालाई प्राप्त गर्दछ' भन्ने सुन्नुभयो तब उहाँ विशाल सेना लिएर कोसलनरेश नग्नजित्को नगरी अयोध्यामा जानुभयो।

**स कोशलपतिः प्रीतः प्रत्युत्थानासनादिभिः।**

**अर्हणेनापि गुरुणा पूजयन् प्रतिनन्दितः॥ ३५॥**

पदार्थ–
**कोशलपतिः** = कोशलनरेश
**सः** = ती नग्नजित्ले
**प्रीतः** = प्रसन्न भई
**प्रत्युत्थानासनादिभिः** = उठेर सम्मानपूर्वक आसन दिएर
**गुरुणा** = विशाल
**अर्हणेन अपि** = सामग्रीद्वारा पनि
**पूजयन्** = भगवान्को पूजा गरेर
**प्रतिनन्दितः** = भगवान्द्वारा पनि अभिनन्दित भए

**वाक्यार्थ–** भगवान् श्रीकृष्णलाई देखेर प्रसन्न भएका कोसलनरेश नग्नजित्ले उठेर अगाडि आई उहाँलाई सम्मानपूर्वक ल्याएर आसनमा बस्न दिए। त्यसपछि विशाल पूजासामग्रीद्वारा भगवान्को पूजा गरे। भगवान्ले पनि नग्नजित्को अभिनन्दन गर्नुभयो।

**वरं विलोक्याभिमतं समागतं नरेन्द्रकन्या चकमे रमापतिम्।**

**भूयादयं मे पतिराशिषोऽमलाः करोतु सत्या यदि मे धृतो व्रतैः॥ ३६॥**

पदार्थ–
**नरेन्द्रकन्या** = राजा नग्नजित्की छोरीले
**समागतं** = आउनुभएका
**रमापतिं** = लक्ष्मीपति श्रीकृष्णलाई
**अभिमतं** = आफ्नो चाहना अनुसारको
**वरं** = वर (पति)
**विलोक्य** = देखेर
**चकमे** = (पतिको रूपमा पाउने) इच्छा गरिन्
**यदि** = यदि
**मे** = मेरा
**व्रतैः** = नियमहरूद्वारा
**अयं** = यी भगवान्
**धृतः** = हृदयमा सधैँ चिन्तन गरिनुभएको छ भने
**मे** = मेरो
**पतिः** = पति
**भूयात्** = हुनुहोस्
**अमलाः** = पवित्र
**आशिषः** = मेरा चाहनाहरू
**सत्याः** = सत्य (सार्थक)
**करोतु** = गराउनुहोस्

**वाक्यार्थ–** आफ्नै राजसदनमा आउनुभएका लक्ष्मीपति साक्षात् श्रीकृष्णलाई देखेर राजा नग्नजित्की कन्या सत्याले आफ्नो चाहना अनुसारको वरका रूपमा श्रीकृष्णलाई पाउने इच्छा गरिन् र मनमनै भनिन्– 'यदि मैले भगवान् श्रीकृष्णलाई प्राप्त गर्न विभिन्न व्रतहरू गरेको छु र उहाँलाई नै हृदयले निरन्तर चिन्तन गरेकी छु भने उहाँ नै मेरो पति हुनुहोस् र मेरा पवित्र चाहनाहरूलाई पनि उहाँले नै सार्थक गराउनुहोस्।'

**यत्पादपङ्कजरजः शिरसा बिभर्ति**

**श्रीरब्जजः सगिरिशः सह लोकपालैः।**

**लीलातनुः स्वकृतसेतुपरीप्सयेशः**
**काले दधत् स भगवान् मम केन तुष्येत्॥ ३७॥**

**पदार्थ–**
**श्रीः** = लक्ष्मी
**सगिरिशः** = भगवान् शिवले सहित
**लोकपालैः सह** = इन्द्र आदि लोकपालहरूले सहित
**अब्जजः** = ब्रह्माजीले
**यत्पादपङ्कजरजः** = जुन भगवान्को चरणकमलको धुलो
**शिरसा** = शिरद्वारा
**बिभर्ति** = धारण गर्नुहुन्छ
**स्वकृतसेतुपरीप्सया** = आफूद्वारा बनाइएका धर्ममर्यादाको रक्षा गर्ने इच्छाले
**काले** = समयमा
**लीलातनुः** = लीला अवतार
**दधत्** = स्वीकार गर्ने
**ईशः** = सर्वसमर्थ
**सः** = ती
**भगवान्** = भगवान्
**मम** = मेरो
**केन** = कुन उपायद्वारा
**तुष्येत्** = प्रसन्न हुनुहोला

**वाक्यार्थ–** लक्ष्मी माता, भगवान् शिव, अन्य इन्द्र आदि लोकपालहरू र स्वयं ब्रह्माजीले पनि जुन भगवान् श्रीकृष्णको चरणकमलको धुलो आफ्नो शिरमा धारण गर्नुहुन्छ, जुन भगवान् आफैँले बनाएको धर्ममर्यादाको रक्षा गर्नका लागि उचित समयमा लीलावतार स्वीकार गर्नुहुन्छ, त्यस्ता सर्वसमर्थ भगवान् श्रीकृष्ण मेरो कुन व्रत आदि उपायद्वारा मसँग प्रसन्न हुनुहोला ?

**अर्चितं पुनरित्याह नारायण जगत्पते।**
**आत्मानन्देन पूर्णस्य करवाणि किमल्पकः॥ ३८॥**

**पदार्थ–**
**अर्चितं** = पूजा गरिनुभएका श्रीकृष्णलाई (राजाले)
**पुनः** = फेरि
**इति** = यसो
**आह** = भन्नुभयो
**नारायण** = हे नारायण
**जगत्पते** = हे जगदीश्वर
**आत्मानन्देन** = स्वरूपानन्दद्वारा नै
**पूर्णस्य** = पूर्ण हुनुभएका (हजुरको)
**अल्पकः** = क्षुद्र म
**किं** = के सेवा
**करवाणि** = गरूँ

**वाक्यार्थ–** राजा नग्नजित्ले यथाविधि पूजासत्कार गरिसकेपछि भगवान्लाई भने– हे जगदीश्वर नारायण ! आफ्नै स्वरूपभूत आनन्दले परिपूर्ण हुने हजुरको प्रसन्नताका लागि म एउटा क्षुद्र जीवले के सेवा गरूँ ?

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तमाह भगवान् हृष्टः कृतासनपरिग्रहः।**
**मेघगम्भीरया वाचा सस्मितं कुरुनन्दन॥ ३९॥**

**पदार्थ–**
**कुरुनन्दन** = हे कुरुवंशी परीक्षित्

**कृतासनपरिग्रहः** = आसन स्वीकार गर्नुभएका
**हृष्टः** = प्रसन्न हुनुभएका
**भगवान्** = समस्त ऐश्वर्यादिले परिपूर्ण श्रीकृष्णले
**मेघगम्भीरया** = मेघको आवाज जस्तै गम्भीर
**वाचा** = वाणीद्वारा
**सस्मितं** = मुस्कुराउँदै
**तं** = ती राजालाई
**आह** = भन्नुभयो

**वाक्यार्थ–** हे कुरुवंशी परीक्षित् ! राजा नग्नजित्ले दिएको आसन, पूजा, सत्कार आदिलाई स्वीकार गर्नुभएका समस्त ऐश्वर्यले परिपूर्ण भगवान् श्रीकृष्णले मुस्कुराउँदै मेघको आवाज जस्तै गम्भीर वाणीद्वारा राजा नग्नजित्लाई भन्नुभयो ।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**नरेन्द्र याच्ञा कविभिर्विगर्हिता राजन्यबन्धोर्निजधर्मवर्तिनः ।**

**तथापि याचे तव सौहृदेच्छया कन्यां त्वदीयां न हि शुल्कदा वयम् ॥ ४० ॥**

**पदार्थ–**
**नरेन्द्र** = हे राजा नग्नजित्
**निजधर्मवर्तिनः** = आफ्नो धर्ममा रहेको
**राजन्यबन्धोः** = निकृष्ट क्षत्रियको पनि
**याच्ञा** = याचना
**कविभिः** = विद्वान्हरूद्वारा
**विगर्हिता** = निन्दित छ
**तथा अपि** = तर पनि
**तव** = तपाईंको
**सौहृदेच्छया** = मित्रताको (आफन्त बनाउने) इच्छाले
**त्वदीयां** = तपाईंकी
**कन्यां** = छोरी सत्यालाई
**याचे** = माग्दछु
**वयं** = हामीहरू
**न हि शुल्कदाः** = कुनै द्रव्य आदि शुल्क दिनेवाला होइनौं

**वाक्यार्थ–** हे राजा नग्नजित् ! आफ्नो धर्ममा रहेका निकृष्ट क्षत्रियले पनि कसैसँग केही वस्तु माग्न हुँदैन किनभने विद्वान्हरूले क्षत्रियको याचनालाई निन्दित बताएका छन्, तापनि तपाईंसँग बन्धुत्व वा स्नेहको सम्बन्ध स्थापित गर्ने इच्छा गरेर म तपाईंकी कन्या सत्यालाई माग्दछु। यसको बदलामा हामी कुनै पनि द्रव्य आदि शुल्क दिनेछैनौं ।

**राजोवाच** (राजा नग्नजित्ले भने)

**कोऽन्यस्तेऽभ्यधिको नाथ कन्यावर इहेप्सितः ।**

**गुणैकधाम्नो यस्याङ्गे श्रीर्वसत्यनपायिनी ॥ ४१ ॥**

**पदार्थ–**
**नाथ** = हे प्रभु
**ते** = हजुरभन्दा
**अभ्यधिकः** = श्रेष्ठ
**ईप्सितः** = अभीष्ट
**कन्यावरः** = कन्याका लागि वर
**इह** = यस लोकमा
**अन्यः** = अरू
**कः** = को हुन सक्छ र ?
**गुणैकधाम्नः** = गुणहरूको एक मात्र आधार भएका
**यस्य** = जुन हजुरको
**अङ्गे** = छातीमा
**अनपायिनी** = कहिल्यै नछुट्ने गरी
**श्रीः** = भगवती लक्ष्मी
**वसति** = बस्नुहुन्छ

**वाक्यार्थ–** हे प्रभु ! हजुरलाई छोडेर मेरी कन्याका लागि अभीष्ट श्रेष्ठ वर को हुन सक्दछ ? किनभने हजुर सम्पूर्ण गुणहरूको एक मात्र आश्रय हुनुहुन्छ। हजुरको छातीमा भगवती लक्ष्मीले सधैँ वास गर्नुभएको छ।

**किन्त्वस्माभिः कृतः पूर्वं समयः सात्वतर्षभ ।**
**पुंसां वीर्यपरीक्षार्थं कन्यावरपरीप्सया ॥ ४२ ॥**

**पदार्थ–**
**सात्वतर्षभ** = हे यदुकुल-शिरोमणि
**किन्तु** = तापनि
**कन्यावरपरीप्सया** = कन्याका लागि योग्य वर प्राप्तिको इच्छाले
**पुंसां** = पुरुषहरूको
**वीर्यपरीक्षार्थं** = शक्तिको परीक्षा गर्नका लागि
**अस्माभिः** = हामीद्वारा
**पूर्वं** = पहिले नै
**समयः** = प्रतिज्ञा
**कृतः** = गरियो

**वाक्यार्थ–** तापनि हे यदुकूलशिरोमणि ! कन्याका लागि योग्य वर प्राप्त होस् भनेर वरको शक्ति परीक्षण गर्नका लागि हामीले पहिले नै एउटा प्रतिज्ञा गरेका थियौँ।

**सप्तैते गोवृषा वीर दुर्दान्ता दुरवग्रहाः ।**
**एतैर्भग्नाः सुबहवो भिन्नगात्रा नृपात्मजाः ॥ ४३ ॥**

**पदार्थ–**
**वीर** = हे वीरवर
**एते** = यी
**सप्त** = सात ओटा
**गोवृषाः** = साँढेहरू
**दुर्दान्ताः** = नियन्त्रण गर्न नसकिने र
**दुरवग्रहाः** = वशमा राख्न नसकिने छन्
**एतैः** = यी साँढेहरूद्वारा
**सुबहवः** = ज्यादै धेरै
**नृपात्मजाः** = राजकुमारहरू
**भग्नाः** = घाइते बनाइए
**भिन्नगात्राः** = अङ्गभङ्ग बनाइए

**वाक्यार्थ–** हे वीरवर ! यी सात ओटा साँढेहरू सजिलै वशमा राख्न वा नियन्त्रणमा लिन सकिँदैनन्। यिनीहरूले धेरै राजकुमारहरूलाई घाइते तथा अङ्गभङ्ग बनाइसके।

**यदीमे निगृहीताः स्युस्त्वयैव यदुनन्दन ।**
**वरो भवानभिमतो दुहितुर्मे श्रियःपते ॥ ४४ ॥**

**पदार्थ–**
**यदुनन्दन** = हे यदुनन्दन
**यदि** = यदि
**इमे** = यी साँढेहरू
**त्वया** = हजुरद्वारा
**निगृहीताः** = नियन्त्रित
**स्युः** = हुन्छन् भने
**श्रियःपते** = हे लक्ष्मीपति
**भवान् एव** = हजुर नै
**मे** = मेरी
**दुहितुः** = छोरी सत्याको
**अभिमतः** = अभीष्ट
**वरः** = वर हुनुहुनेछ

**वाक्यार्थ–** हे यदुनन्दन श्रीकृष्ण ! यदि हजुरले यी साँढेहरूलाई नियन्त्रण गर्न सक्नुभयो भने लक्ष्मीपति हजुर नै मेरी छोरी सत्याको अभीष्ट वर हुनुहुनेछ।

**एवं समयमाकर्ण्य बद्ध्वा परिकरं प्रभुः।**

**आत्मानं सप्तधा कृत्वा न्यगृह्णाल्लीलयैव तान्॥ ४५॥**

**पदार्थ–**
**एवं** = यस्तो
**समयं** = प्रतिज्ञा
**आकर्ण्य** = सुनेर
**परिकरं** = उत्तरीय वस्त्रहरू
**बद्ध्वा** = कम्मरमा बाँधेर
**प्रभुः** = प्रभु श्रीकृष्णले
**आत्मानं** = आफूलाई
**सप्तधा** = सात रूपमा
**कृत्वा** = बनाएर
**तान्** = ती साँढेहरूलाई
**लीलया एव** = सजिलैसँग
**न्यगृह्णात्** = वशमा लिनुभयो

**वाक्यार्थ–** नग्नजित्को यस्तो प्रतिज्ञा सुनेर श्रीकृष्णले आफ्नो कम्मरमा उत्तरीय वस्त्र बाँध्नुभयो र आफूलाई सात रूपमा प्रकट गरेर सात ओटा साँढेहरूलाई सजिलैसँग वशमा लिनुभयो।

**बद्ध्वा तान् दामभिः शौरिर्भग्नदर्पान् हतौजसः।**

**व्यकर्षल्लीलया बद्धान् बालो दारुमयान् यथा॥ ४६॥**

**पदार्थ–**
**शौरिः** = भगवान् श्रीकृष्णले
**हतौजसः** = बल क्षीण भएका
**भग्नदर्पान्** = अहङ्कार नष्ट भएका
**तान्** = ती साँढेहरूलाई
**दामभिः** = दाम्लाहरूले
**बद्ध्वा** = बाँधेर
**बालः** = बालकले
**दारुमयान् यथा** = काठको साँढेलाई झैँ
**बद्धान्** = बाँधिएका साँढेहरूलाई
**लीलया** = खेल–खेलमै
**व्यकर्षत्** = तान्नुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्णले वशमा लिएपछि शक्तिहीन भएका र अहङ्कार पनि नष्ट भएका ती साँढेहरूलाई दाम्लाले बाँधेर त्यसरी नै तान्नुभयो जसरी बालकहरूले खेल्ने समयमा काठको साँढेलाई तान्दछन्।

**ततः प्रीतः सुतां राजा ददौ कृष्णाय विस्मितः।**

**तां प्रत्यगृह्णाद् भगवान् विधिवत् सदृशीं प्रभुः॥ ४७॥**

**पदार्थ–**
**ततः** = त्यसपछि (साँढेलाई निग्रह गरेपछि)
**विस्मितः** = आश्चर्यचकित भएका
**प्रीतः** = प्रसन्न
**राजा** = राजा नग्नजित्ले
**सुतां** = आफ्नी छोरी सत्या
**कृष्णाय** = श्रीकृष्णलाई
**ददौ** = दिए
**प्रभुः** = सर्वेश्वर
**भगवान्** = भगवान् श्रीकृष्णले
**तां** = ती
**सदृशीं** = आफू अनुरूपकी सत्यालाई
**विधिवत्** = विधिपूर्वक
**प्रत्यगृह्णात्** = विवाह गर्नुभयो

**वाक्यार्थ–** साँढेहरूलाई नियन्त्रणमा लिएको देखेर राजा नग्नजित् आश्चर्यचकित भए। उनले प्रसन्न भएर आफ्नी कन्या सत्या श्रीकृष्णलाई दिए। भगवान् सर्वेश्वर श्रीकृष्णले पनि आफू अनुरूपकी योग्य कन्या सत्यालाई विधिपूर्वक विवाह गर्नुभयो।

**राजपत्न्यश्च दुहितुः कृष्णं लब्ध्वा प्रियं पतिम्।**
**लेभिरे परमानन्दं जातश्च परमोत्सवः॥ ४८॥**

**पदार्थ–**
**राजपत्न्यः च** = राजपत्नीहरूले पनि
**कृष्णं** = श्रीकृष्णलाई
**दुहितुः** = छोरी सत्याको
**प्रियं** = प्रिय
**पतिं** = पतिको रूपमा
**लब्ध्वा** = पाएर (पाएको देखेर)
**परमानन्दं** = अत्यन्त आनन्द
**लेभिरे** = प्राप्त गरे
**परमोत्सवः च** = परम उत्सव पनि
**जातः** = भयो

**वाक्यार्थ–** रानीहरू पनि छोरी सत्याले इच्छाएको श्रीकृष्णलाई नै प्रिय पतिको रूपमा प्राप्त गरेको देखेर अति आनन्दित भए र त्यहाँ महान् उत्सव मनाइयो।

**शङ्खभेर्यानका नेदुर्गीतवाद्यद्विजाशिषः।**
**नरा नार्यः प्रमुदिताः सुवासःस्रगलङ्कृताः॥ ४९॥**

**पदार्थ–**
**शङ्खभेर्यानकाः** = शङ्ख, ढोल र दमाहा आदि बाजाहरू
**नेदुः** = बजे
**गीतवाद्यद्विजाशिषः** = गीतसहितका बाजा र ब्राह्मणहरूद्वारा दिइएका आशीर्वचनहरू (भए)
**प्रमुदिताः** = हर्षित
**नराः** = पुरुषहरू
**नार्यः** = नारीहरू
**सुवासःस्रगलङ्कृताः** = सुन्दर वस्त्र र मालाद्वारा अलङ्कृत भए

**वाक्यार्थ–** नगरमा जताततै शङ्ख, ढोल र दमाहाहरू बज्न थाले। गीतसँगै बाजाहरू पनि घन्किन थाले। ब्राह्मणहरूले आशीर्वचन दिन थाले। प्रसन्न नरनारीहरू सुन्दर-सुन्दर वस्त्र र माला लगाएर सुशोभित भएका थिए।

**दशधेनुसहस्राणि पारिबर्हमदाद् विभुः।**
**युवतीनां त्रिसाहस्रं निष्कग्रीवसुवाससाम्॥ ५०॥**
**नवनागसहस्राणि नागाच्छतगुणान् रथान्।**
**रथाच्छतगुणानश्वानश्वाच्छतगुणान् नरान्॥ ५१॥**

**पदार्थ–**
**विभुः** = समर्थ नग्नजित् राजाले
**दशधेनुसहस्राणि** = दश हजार गाईहरू
**निष्कग्रीवसुवाससां** = घाँटीमा हार र राम्रा वस्त्रहरू लगाएका

**युवतीनां** = दासीहरूको
**त्रिसाहस्त्रं** = तीन हजार
**नवनागसहस्त्राणि** = नौ हजार हात्ती
**नागात्** = हात्तीको सङ्ख्याबाट
**शतगुणान्** = सयगुणित (९,००० × १०० = ९,००,०००) नौलाख
**रथान्** = रथ
**रथात्** = रथको सङ्ख्याबाट
**शतगुणान्** = सयगुणित (९,००,००० × १०० = ९,००,००,०००) नौ करोड
**अश्वान्** = घोडा
**अश्वात्** = घोडाको सङ्ख्याबाट
**शतगुणान्** = सयगुणित (९,००,००,००० × १०० = ९,००,००,००,०००) नौ अरब
**नरान्** = सेवकहरू
**पारिबर्हम्** = दाइजो
**अदात्** = दिए

**वाक्यार्थ–** राजा नग्नजित्ले छोरी सत्याको विवाहमा उनलाई दश हजार गाई, घाँटीमा हार र शरीरमा सुन्दर वस्त्रहरू लगाएका तीन हजार दासी, नौ हजार हात्ती, नौ लाख रथ, नौ करोड घोडा र नौ अरब सेवकहरू दाइजोको रूपमा दिए।

**दम्पती रथमारोप्य महत्या सेनया वृतौ।**
**स्नेहप्रक्लिन्नहृदयो यापयामास कोशलः॥ ५२॥**

**पदार्थ–**
**स्नेहप्रक्लिन्नहृदयः** = स्नेहले द्रवित हृदय भएका
**कोशलः** = कोशल देशका राजा नग्नजित्ले
**महत्या** = विशाल
**सेनया** = सेनाद्वारा
**वृतौ** = युक्त भएका
**दम्पती** = श्रीकृष्ण र सत्यालाई
**रथं** = रथमा
**आरोप्य** = राखेर
**यापयामास** = पठाए

**वाक्यार्थ–** छोरीको स्नेहले हृदय द्रवित भएका कोसलनरेश नग्नजित्ले विशाल सेनासहित छोरीजुवाइँ श्रीकृष्ण र सत्यालाई रथमा चढाएर पठाए।

**श्रुत्वैतद् रुरुधुर्भूपा नयन्तं पथि कन्यकाम्।**
**भग्नवीर्याः सुदुर्मर्षा यदुभिर्गोवृषैः पुरा॥ ५३॥**

**पदार्थ–**
**यदुभिः** = यदुवंशीहरूद्वारा
**गोवृषैः** = नग्नजित्का साँढेहरूद्वारा पनि
**पुरा** = पहिल्यै
**भग्नवीर्याः** = शक्तिहीन बनाइएका
**सुदुर्मर्षाः** = आफ्नो पराजयलाई सहन नसक्ने
**भूपाः** = राजाहरूले
**एतत्** = यो कुरा (सत्याको विवाह र गृहगमन)
**श्रुत्वा** = सुनेर
**कन्यकाम्** = कन्या सत्यालाई
**नयन्तं** = लैजाँदै गर्नुभएका श्रीकृष्णलाई
**पथि** = बाटोमा
**रुरुधुः** = रोके

**वाक्यार्थ–** यदुवंशीहरूले र राजा नग्नजित्का साँढेहरूले धेरै राजाहरूको शक्तिसामर्थ्यलाई पहिल्यै भङ्ग गरिदिएका थिए। पराजित ती राजाहरूलाई आफ्नो पराजय र राजकन्यालाई प्राप्त गर्न नसकेकोमा असह्य पीडा भएको थियो। जब उनीहरूले सत्याको विवाह भएर घर जाँदैछन् भन्ने सुने तब उनीहरूले सत्या सहित श्रीकृष्णलाई बाटोमैं रोके।

**तानस्यतः शरव्रातान् बन्धुप्रियकृदर्जुनः ।**
**गाण्डीवी कालयामास सिंहः क्षुद्रमृगानिव ॥ ५४ ॥**

**पदार्थ–**
**शरव्रातान्** = बाणका समूहहरू
**अस्यतः** = प्रहार गरिहेका
**तान्** = ती राजाहरूलाई
**बन्धुप्रियकृत्** = मित्र श्रीकृष्णको प्रिय गर्ने
**गाण्डीवी** = गाण्डीव धनु लिएका
**अर्जुनः** = अर्जुनले
**सिंहः** = सिंहले
**क्षुद्रमृगान् इव** = बलहीन पशुहरूलाई झैं
**कालयामास** = भगाए

**वाक्यार्थ–** ती राजाहरूले श्रीकृष्णलाई ताकेर बाणहरूको भीषण प्रहार गर्न थालेपछि आफ्ना परम मित्र श्रीकृष्णको कल्याण गर्ने अर्जुनले हातमा गाण्डीव धनु उठाएर तिनीहरूलाई त्यसरी नै भगाइदिए जसरी सिंहले बलहीन क्षुद्र पशुहरूलाई भगाइदिन्छ।

**पारिबर्हमुपागृह्य द्वारकामेत्य सत्यया ।**
**रेमे यदूनामृषभो भगवान् देवकीसुतः ॥ ५५ ॥**

**पदार्थ–**
**यदूनां** = यदुवंशीहरूमा
**ऋषभः** = श्रेष्ठ
**देवकीसुतः** = देवकीनन्दन
**भगवान्** = भगवान् श्रीकृष्ण
**पारिबर्हम्** = दाइजो
**उपागृह्य** = लिएर
**द्वारकां** = द्वारका
**एत्य** = आएर
**सत्यया** = सत्याका साथ
**रेमे** = रमण (विहार) गर्न थाल्नुभयो

**वाक्यार्थ–** यदुवंशभूषण देवकीनन्दन भगवान् श्रीकृष्ण ससुरा नग्नजित्ले दिएको दाइजोसहित सत्यालाई लिएर द्वारका आइपुग्नुभयो र उनका साथ विहार गर्न थाल्नुभयो।

**श्रुतकीर्तेः सुतां भद्रामुपयेमे पितृष्वसुः ।**
**कैकेयीं भ्रातृभिर्दत्तां कृष्णः सन्तर्दनादिभिः ॥ ५६ ॥**

**पदार्थ–**
**पितृष्वसुः** = फुपू
**श्रुतकीर्तेः** = श्रुतकीर्तिकी
**सुतां** = छोरी
**कैकेयीं** = केकय देशमा जन्मिएकी
**सन्तर्दनादिभिः** = सन्तर्दन आदि
**भ्रातृभिः** = दाइहरूद्वारा
**दत्तां** = दिइएकी
**भद्रां** = भद्रा नामकी कन्यालाई
**कृष्णः** = श्रीकृष्णले
**उपयेमे** = विवाह गर्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णकी फुपू श्रुतकीर्तिकी भद्रा नाम गरेकी कन्या थिइन् उनी केकय देशमा जन्मिएकी थिइन्। सन्तर्दन आदि दाइहरूद्वारा भगवान् श्रीकृष्णलाई दिइएकी भद्रालाई पनि भगवान्ले विवाह गर्नुभयो।

**सुतां च मद्राधिपतेर्लक्ष्मणां लक्षणैर्युताम्।**
**स्वयंवरे जहारैकः स सुपर्णः सुधामिव ॥ ५७ ॥**

**पदार्थ—**
**लक्षणैः** = शुभलक्षणहरूद्वारा
**युतां** = युक्त भएकी
**मद्राधिपतेः** = मद्रदेशका राजाकी
**सुतां** = छोरी
**लक्ष्मणां च** = लक्ष्मणालाई पनि
**स्वयंवरे** = स्वयंवरमा
**एकः** = एक्लै
**सः** = ती भगवान् श्रीकृष्णले
**सुपर्णः** = गरुडले
**सुधां इव** = अमृतलाई झैँ
**जहार** = हरण गर्नुभयो

**वाक्यार्थ—** मद्रनरेशकी छोरी लक्ष्मणा शुभलक्षणहरूले युक्त भएकी थिइन्। गरुडले स्वर्गको अमृत एक्लै हरण गरे झैँ भगवान् श्रीकृष्णले पनि स्वयंवरमा एक्लै गएर लक्ष्मणालाई हरण गर्नुभयो।

**अन्याश्चैवंविधा भार्याः कृष्णस्यासन् सहस्रशः।**
**भौमं हत्वा तन्निरोधादाहृताश्चारुदर्शनाः ॥ ५८ ॥**

**पदार्थ—**
**एवंविधाः** = यसप्रकारका
**चारुदर्शनाः** = सुन्दर शरीर भएका
**अन्याः च** = अरू पनि
**भौमं** = भौमासुरलाई
**हत्वा** = मारेर
**तन्निरोधात्** = भौमासुरको त्यस वन्दीगृहबाट
**आहृताः** = ल्याइएका
**कृष्णस्य** = भगवान् श्रीकृष्णका
**सहस्रशः** = हजारौँ
**भार्याः** = पत्नीहरू
**आसन्** = थिए

**वाक्यार्थ—** हे राजा परीक्षित्! यसै गरी भगवान् श्रीकृष्णका सुन्दर शरीर भएका अरू हजारौँ पत्नीहरू थिए। तिनीहरूलाई भगवान्ले भौमासुरको वध गरी त्यसैको बन्दीगृहबाट मुक्त गरेर ल्याउनुभएको थियो।

**अध्यायसार—** यस अध्यायमा भगवान्सँग थप पाँच ओटी कन्याको प्रणयसम्बन्ध गाँसिएको कुरा बताइएको छ। पूर्व अध्यायमा तीन रानीहरूको अनि यस अध्यायमा पाँच रानीहरूको गरी भगवान् श्रीकृष्णको आठ मुख्य पटरानीहरूसँग विवाह भएको वर्णन गरिएको छ। जाम्बवती, सत्यभामा आदिसँग विवाह भएको पूर्व अध्यायको प्रसङ्गले लाक्षणिक रूपमा भगवान्मा मायाका दुर्गुणहरू क्रोध, लोभ आदिको सम्बन्ध नभएको कुरा सूचित भएको थियो भने यस अध्यायमा पाँच विवाह हुनुको तात्पर्य चाहिँ विद्याका पाँचै स्वरूपहरूसँग श्रीकृष्णको सम्बन्ध भएको देखाउनु रहेको छ। अविद्यालाई पञ्चपर्वा मानिए झैँ विद्याका पनि पाँच भाग हुन्छन् र ती सबै भगवान्सँग नै नित्य सम्बन्ध राख्छन्। विद्याका नित्य आश्रय परमात्मा भएकाले उहाँमा मात्र यिनको नित्यसम्बन्ध हुन्छ, अरूमा हुँदैन। यस प्रसङ्गमा वर्णन गरिएका पाँच कन्याहरू विद्याका पाँच प्रकारका प्रतीक हुन्। यिनमध्ये कालिन्दी ज्ञानरूपा हुन् भने मित्रविन्दा तपस्यारूपा हुन्। नाग्नजिती भक्तिकी प्रतीक हुन् भने भद्रा र लक्ष्मणा क्रमशः साङ्ख्य र योगका प्रतीक हुन्। यी

पाँचै सँग भगवान्को सम्बन्ध भएको छ। यी विवाहका अनेक अर्थहरू छन्। सूर्यपुत्री कालिन्दी सूर्यवंशकी हुन् भने त्यसपछिकी मित्रविन्दा चन्द्रवंशकी। यसरी दुबै वंशका कन्यालाई स्वीकार गर्नाले भगवान् सूर्यमार्ग र चन्द्रमार्ग दुबैको एक मात्र आधार हुनुभएको कुरा स्पष्ट हुन्छ।

विवाहको प्रसङ्गमा कालिन्दी र नाग्नजितीको विवाहका लागि धेरै श्लोक र कथांशको प्रयोग भएको छ। यसबाट विद्याका भेदहरूमध्ये ज्ञान र भक्ति प्रमुख भएको देखाइएको छ। सबभन्दा पहिले ज्ञानरूपा कालिन्दीसँग विवाह गरेकाले ज्ञानको प्रमुखता स्पष्ट छ। कालिन्दीमा भगवत्तत्त्वको ज्ञान थियो, उनले भगवान्लाई पाउन तपस्या पनि गरेकी थिइन्, त्यसैले कालिन्दीको विवाह ज्ञानपूर्वक हो भने नाग्नजितीमा श्रीकृष्णप्रति प्रेम मात्र थियो, ईश्वरीयताको स्फुरण थिएन। कालिन्दीलाई स्विकार्न अर्जुनलाई साथ लिनुले ज्ञानमार्गमा परमात्मप्राप्ति गुरुको माध्यमले हुन्छ भन्ने कुराको सूचना हो। यसै गरी नाग्नजितीलाई चाहिँ आफैँ गई स्वीकार गर्नु भक्तिमार्गमा भगवान् अरू कुनै माध्यमद्वारा नभई उहाँकै कृपाद्वारा भेटिनुहुन्छ भन्ने सूचना हो। बाँकी तीन पत्नीहरूमध्ये मित्रविन्दा तपोरूपा हुन्, भद्रा साङ्ख्यरूपा हुन् भने लक्ष्मणा चाहिँ योगरूपिणी हुन्। यसरी ज्ञान, तपस्या, भक्ति, साङ्ख्य र योग गरी विद्याका पाँच स्वरूपहरूसँग श्रीकृष्णको सम्बन्ध रहेको र ती सबै श्रीकृष्णमा नै आश्रित रहेको तथ्य यहाँ सूचित गरिएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**

**अष्टमहिष्युद्वाहो नामाष्टपञ्चाशत्तमोऽध्यायः ॥ ५८ ॥**

# अथैकोनषष्टितमोऽध्यायः

## पारिजात हरण र भौमासुर वध

**राजोवाच** (राजा परीक्षित्‌ले भन्नुभयो)

**यथा हतो भगवता भौमो येन च ताः स्त्रियः।**

**निरुद्धा एतदाचक्ष्व विक्रमं शार्ङ्गधन्वनः॥ १॥**

**पदार्थ—**
**येन** = जुन भौमासुरद्वारा
**यथा** = जसरी
**ताः** = ती हजारौँ
**स्त्रियः** = स्त्रीहरू
**निरुद्धाः** = बन्दी बनाइए
**भगवता च** = भगवान्‌द्वारा के कारणले
**भौमः** = भौमासुर
**हतः** = मारियो
**एतत्** = यो
**शार्ङ्गधन्वनः** = श्रीकृष्णको
**विक्रमं** = चरित्र
**आचक्ष्व** = बताउनुहोस्

**वाक्यार्थ—** भौमासुरद्वारा कसरी ती हजारौँ स्त्रीहरू बन्दी बनाइए ? ती स्त्रीहरूलाई बन्दी बनाउने भौमासुरलाई भगवान् श्रीकृष्णले किन र कसरी मार्नुभयो ? कृपया मलाई शार्ङ्गधन्वा श्रीकृष्णको यो चरित्र बताउनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इन्द्रेण हृतछत्रेण हृतकुण्डलबन्धुना।**

**हृतामराद्रिस्थानेन ज्ञापितो भौमचेष्टितम्॥ २॥**

**सभार्यो गरुडारूढः प्राग्ज्योतिषपुरं ययौ।**

**गिरिदुर्गैः शस्त्रदुर्गैर्जलाग्न्यनिलदुर्गमम्॥**

**मुरपाशायुतैर्घोरैर्दृढैः सर्वत आवृतम्॥ ३॥**

**पदार्थ—**
**हृतछत्रेण** = (वरुणको) छत्रहरण गरिएका
**हृतकुण्डलबन्धुना** = (देवमाता अदितिको) कुण्डल हरण गरिएका
**हृतामराद्रिस्थानेन** = (देवताको मेरुपर्वतमा अवस्थित) मणिपर्वत नामक स्थान हरण गरिएका (त्यसकारण अपमानित भएका)
**इन्द्रेण** = देवराज इन्द्रद्वारा
**भौमचेष्टितं** = भौमासुरको दुष्चेष्टा
**ज्ञापितः** = बताइएका (श्रीकृष्ण)
**सभार्यः** = पत्नी सत्यभामाले सहित भएर
**गरुडारूढः** = गरुडमा चढेर
**सर्वतः** = चारैतिर रहेका
**गिरिदुर्गैः** = पहाडका किल्लाहरूद्वारा
**शस्त्रदुर्गैः** = शस्त्रास्त्रहरूका

किल्लाहरूद्वारा
**जलाग्न्यनिलदुर्गमं** = पानी, आगो र वायुका कारण दुर्गम भएको तथा
**घोरैः** = डरलाग्दा
**दृढैः** = भेदन गर्न नसकिने
**मुरपाशायुतैः** = मुर नामक दैत्यद्वारा बनाइएका दशौँ हजार पाशद्वारा
**आवृतं** = वरिपरिबाट घेरिएको
**प्राग्ज्योतिषपुरं** = भौमासुरको नगरी प्राग्ज्योतिषपुर
**ययौ** = जानुभयो

**वाक्यार्थ–** भौमासुरले वरुणको छत्र, देवमाता अदितिको कानको कुण्डल र देवताहरूको सुमेरुमा अवस्थित मणिपर्वत नामक स्थानको हरण गरेको थियो। यसबाट अपमानित भएका देवराज इन्द्रले भगवान् श्रीकृष्णलाई भौमासुरको कुकृत्यबारे जानकारी गराए। भगवान् श्रीकृष्ण पनि पत्नी सत्यभामालाई साथमा लिई गरुडमा चढेर भौमासुरको नगरी प्राग्ज्योतिषपुर जानुभयो। त्यस नगरको वरिपरि चारैतिर पहाडका किल्लाहरू थिए। त्यसको केही भित्र शस्त्रास्त्रहरू राखेर किल्ला बनाइएको थियो। त्यसपछि क्रमशः पानी, आगो र हावाका भीषण किल्लाहरू थिए। त्यसको पनि भित्रपट्टि मुर नामक दैत्यद्वारा बनाइएका भेदन गर्न नसकिने दशौँ हजार पाशद्वारा प्राग्ज्योतिषपुर घेरिएको थियो।

**गदया निर्बिभेदाद्रीन् शस्त्रदुर्गाणि सायकैः।**
**चक्रेणाग्निं जलं वायुं मुरपाशांस्तथासिना॥ ४॥**

**पदार्थ–**
**गदया** = गदाद्वारा
**अद्रीन्** = पहाडका किल्लाहरूलाई
**सायकैः** = बाणहरूद्वारा
**शस्त्रदुर्गाणि** = शस्त्रास्त्रहरूका किल्लाहरूलाई
**चक्रेण** = सुदर्शन चक्रद्वारा
**जलं** = पानी
**अग्निं** = आगो र
**वायुं** = हावाको किल्लालाई
**तथा** = त्यस्तै
**मुरपाशान्** = मुरपाशहरूलाई
**असिना** = तरबारले
**निर्बिभेद** = भेदन गर्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले गदाप्रहार गरेर पहाडी किल्लाहरूलाई ध्वस्त पार्नुभयो, बाण हानेर शस्त्रास्त्रहरूको किल्लालाई नष्ट गरिदिनुभयो, सुदर्शनचक्रद्वारा पानी, आगो र हावाको घेराबन्दीलाई ध्वस्त बनाउनुभयो, त्यसै गरी मुरपाशहरूलाई तरबारले काटेर छिन्नभिन्न गरिदिनुभयो।

**शङ्खनादेन यन्त्राणि हृदयानि मनस्विनाम्।**
**प्राकारं गदया गुर्व्या निर्बिभेद गदाधरः॥ ५॥**

**पदार्थ–**
**गदाधरः** = गदाधारी श्रीकृष्णले
**शङ्खनादेन** = पाञ्चजन्य शङ्खको आवाजद्वारा
**यन्त्राणि** = विभिन्न प्रकारका यन्त्रहरू (तथा)
**मनस्विनां** = शूर-वीरहरूको
**हृदयानि** = हृदयलाई
**गुर्व्या** = ठुलो
**गदया** = गदाद्वारा
**प्राकारं** = नगरको पर्खाललाई
**निर्बिभेद** = भेदन गर्नुभयो

**वाक्यार्थ–** शत्रुहरूलाई नगरमा प्रवेश गर्न रोक लगाउन विभिन्न स्थानमा राखिएका यन्त्र र त्यही प्रयोजनका लागि बसेका वीर योद्धाहरूको हृदयलाई भगवान् श्रीकृष्णले पाञ्चजन्य शङ्खको आवाजद्वारा भेदन गर्नुभयो भने नगरको पर्खाललाई ठुलो गदा प्रहार गरेर ध्वस्त गर्नुभयो।

**पाञ्चजन्यध्वनिं श्रुत्वा युगान्ताशनिभीषणम्।**
**मुरः शयान उत्तस्थौ दैत्यः पञ्चशिरा जलात्॥ ६॥**

**पदार्थ–**
**युगान्ताशनिभीषणम्** = प्रलयकालीन वज्रको आवाज झैँ भयङ्कर
**पाञ्चजन्यध्वनिं** = पाञ्चजन्य शङ्खको आवाजलाई
**श्रुत्वा** = सुनेर
**शयानः** = पानीभित्र सुतेको
**पञ्चशिराः** = पाँच ओटा टाउको भएको
**मुरः** = मुर नाम गरेको
**दैत्यः** = दैत्य
**जलात्** = पानीबाट
**उत्तस्थौ** = उठ्यो

**वाक्यार्थ–** प्रलयकालीन वज्रको आवाज जस्तो डर लाग्दो पाञ्चजन्य शङ्खको आवाज सुनेर पानीभित्र सुतिरहेको पाँच टाउके मुर दैत्य ब्युँझेर पानीबाट बाहिर निस्कियो।

**त्रिशूलमुद्यम्य सुदुर्निरीक्षणो युगान्तसूर्यानलरोचिरुल्बणः।**
**ग्रसंस्त्रिलोकीमिव पञ्चभिर्मुखैरभ्यद्रवत् ताक्ष्र्यसुतं यथोरगः॥ ७॥**

**पदार्थ–**
**युगान्तसूर्यानलरोचिः** = प्रलयकालीन सूर्य र अग्निको जस्तो कान्ति भएको
**उल्बणः** = भयङ्कर
**सुदुर्निरीक्षणः** = राम्ररी हेर्न पनि नसकिने मुर दैत्यले
**त्रिशूलं** = त्रिशूल
**उद्यम्य** = उठाएर
**पञ्चभिः** = पाँच ओटा
**मुखैः** = मुखद्वारा
**त्रिलोकीम्** = तीनै लोकलाई
**ग्रसन् इव** = निलुँला झैँ गर्दै
**उरगः** = सर्पले
**ताक्ष्र्यसुतं यथा** = गरुडलाई झैँ
**अभ्यद्रवत्** = जाइलाग्यो

**वाक्यार्थ–** प्रलयकालीन सूर्य र अग्नि झैँ तेजस्वी, अति भयङ्कर र राम्ररी हेर्न पनि नसकिने मुर दैत्यले जसरी सर्प गरुडमाथि जाइलाग्छ त्यसै गरी हातमा त्रिशूल लिएर आफ्ना पाँच ओटा मुखहरूले तीनै लोकलाई निलुँला झैँ गर्दै भगवान् श्रीकृष्णमाथि जाइलाग्यो।

**आविध्य शूलं तरसा गरुत्मते निरस्य वक्त्रैर्व्यनदत् स पञ्चभिः।**
**स रोदसी सर्वदिशोऽन्तरं महानापूरयन्नण्डकटाहमावृणोत्॥ ८॥**

**पदार्थ–**
**सः** = त्यो मुरले
**शूलं** = त्रिशूल
**आविध्य** = घुमाएर
**गरुत्मते** = गरुडमाथि
**तरसा** = वेगपूर्वक
**निरस्य** = फ्याँकेर
**पञ्चभिः** = पाँच ओटै
**वक्त्रैः** = मुखले

**व्यनदत्** = करायो
**महान्** = भीषण
**सः** = त्यो आवाजले
**रोदसी** = पृथिवी, अन्तरीक्ष
**सर्वदिशः** = सम्पूर्ण दिशाको
**अन्तरं** = बिच भागलाई
**आपूरयन्** = भर्दै
**अण्डकटाहं** = ब्रह्माण्डरूपी
कराई (भाँडो)लाई
**आवृणोत्** = ढाक्यो

**वाक्यार्थ–** मुरले आफ्नो त्रिशूललाई घुमाएर गरुडमाथि प्रहार गऱ्यो र आफ्नो पाँचै ओटा मुखबाट घोर गर्जना गऱ्यो। उसको त्यो गर्जना पृथिवी, अन्तरीक्ष, सम्पूर्ण दिशा र ती दिशाका बिचका भाग सबैतिर थर्काउँदै ब्रह्माण्डभरि फैलियो।

**तदापतद् वै त्रिशिखं गरुत्मते हरिः शराभ्यामभिनत् त्रिधौजसा।**
**मुखेषु तं चापि शरैरताडयत् तस्मै गदां सोऽपि रुषा व्यमुञ्चत॥ ९॥**

**पदार्थ–**
**तत्** = त्यो (मुरले प्रहार गरेको)
**त्रिशिखं** = त्रिशूललाई
**गरुत्मते** = गरुडतर्फ
**आपतत्** = आइरहँदा
**हरिः** = भगवान् श्रीकृष्णले
**ओजसा** = वेगपूर्वक (तुरुन्त)
**शराभ्यां** = दुई ओटा बाणद्वारा
**त्रिधा** = तीन भागमा
**अभिनत्** = टुक्रा पारिदिनुभयो
**वै** = निश्चय नै
**तं च अपि** = त्यो मुरलाई पनि
**शरैः** = बाणहरूद्वारा
**मुखेषु** = मुखै-मुखमा
**अताडयत्** = प्रहार गर्नुभयो
**सः अपि** = त्यो मुरले पनि
**रुषा** = रिसले
**तस्मै** = ती श्रीकृष्णलाई
**गदां** = गदा
**व्यमुञ्चत** = प्रहार गऱ्यो

**वाक्यार्थ–** मुर दैत्यले प्रहार गरेको त्रिशूल गरुडतिर आउँदै गरेको देखेर भगवान् श्रीकृष्णले तत्काल दुई ओटा बाण प्रहार गरी त्यो त्रिशूललाई तीन टुक्रा बनाइदिनुभयो अनि मुरका मुखहरूमा पनि थुप्रै बाणहरू हान्नुभयो। त्यसपछि रिसाएको मुर दैत्यले पनि भगवान्लाई ताकेर गदा प्रहार गऱ्यो।

**तामापतन्तीं गदया गदां मृधे गदाग्रजो निर्बिभिदे सहस्रधा।**
**उद्यम्य बाहूनभिधावतोऽजितः शिरांसि चक्रेण जहार लीलया॥ १०॥**

**पदार्थ–**
**गदाग्रजः** = गदका दाजु भगवान् श्रीकृष्णले
**मृधे** = युद्धमा
**आपतन्तीं** = आउँदै गरेको
**तां** = त्यो (मुरले प्रहार गरेको)
**गदां** = गदालाई
**गदया** = आफ्नो गदाद्वारा
**सहस्रधा** = हजारौँ खण्डमा
**निर्बिभिदे** = टुक्रा-टुक्रा पारिदिनुभयो
**बाहून्** = आफ्ना हातहरू
**उद्यम्य** = उठाउँदै
**अभिधावतः** = दौडँदै सम्मुख आएको मुरको
**शिरांसि** = पाँच ओटै शिरहरूलाई
**अजितः** = भगवान् श्रीकृष्णले
**चक्रेण** = सुदर्शन चक्रले
**लीलया** = सजिलै
**जहार** = काट्नुभयो

**वाक्यार्थ–** युद्धमा मुर दैत्यद्वारा प्रहार गरिएको र आफूतिर आउँदै गरेको गदालाई भगवान् श्रीकृष्णले आफ्नो गदाले हानेर हजारौँ टुक्रामा परिणत गरिदिनुभयो। त्यसपछि मुर दैत्य हात

उठाएर दौडँदै भगवान्तर्फ अगाडि बढ्दै थियो, त्यही वेला भगवान्ले सुदर्शन चक्र प्रहार गरी त्यसका पाँच ओटै शिरहरूलाई सजिलै काटिदिनुभयो।

**व्यसुः पपाताम्भसि कृत्तशीर्षो निकृत्तशृङ्गोऽद्रिरिवेन्द्रतेजसा।**
**तस्यात्मजाः सप्त पितुर्वधातुराः प्रतिक्रियामर्षजुषः समुद्यताः॥ ११॥**

**पदार्थ–**
**कृत्तशीर्षः** = शिर काटिएको मुर
**इन्द्रतेजसा** = इन्द्रको वज्रद्वारा
**निकृत्तशृङ्गः** = चुचुरो काटिएको
**अद्रिः इव** = पहाड झैं
**व्यसुः** = निष्प्राण भई
**अम्भसि** = पानीमा
**पपात** = लड्यो
**तस्य** = त्यो मुरका
**सप्त** = सात जना
**आत्मजाः** = छोराहरू
**पितुः** = पिताको
**वधातुराः** = वधद्वारा व्याकुल भई
**प्रतिक्रियामर्षजुषः** = प्रतिशोधका लागि क्रोधित भएर
**समुद्यताः** = (युद्ध गर्न) तयार भए

**वाक्यार्थ–** जसरी इन्द्रको वज्रद्वारा चुचुरो काटिएको पहाड ढलेको थियो, त्यसै गरी शिर काटिएको मुर दानव पनि निष्प्राण भएर पानीमा ढल्यो। मुरका सात जना छोराहरू पिताको मृत्युले शोकाकुल भए अनि पितृवधको प्रतिशोध लिन उनीहरू रिसाउँदै युद्धका लागि तयार भए।

**ताम्रोऽन्तरिक्षः श्रवणो विभावसुर्वसुर्नभस्वानरुणश्च सप्तमः।**
**पीठं पुरस्कृत्य चमूपतिं मृधे भौमप्रयुक्ता निरगन् धृतायुधाः॥ १२॥**

**पदार्थ–**
**ताम्रः** = ताम्र
**अन्तरिक्षः** = अन्तरिक्ष
**श्रवणः** = श्रवण
**विभावसुः** = विभावसु
**वसुः** = वसु
**नभस्वान्** = नभस्वान्
**सप्तमः** = सातौं
**अरुणः च** = अरुण पनि
**भौमप्रयुक्ताः** = भौमासुरद्वारा प्रेरित भएर
**धृतायुधाः** = शस्त्रास्त्रहरू धारण गरेका मुरका छोराहरूले
**मृधे** = युद्धका लागि
**चमूपतिं** = सेनापतिको रूपमा
**पीठं** = पीठनामक दैत्यलाई
**पुरस्कृत्य** = अगाडि लगाएर
**निरगन्** = निस्किए

**वाक्यार्थ–** ताम्र, अन्तरिक्ष, श्रवण, विभावसु, वसु, नभस्वान् र अरुण यी सात जना मुरका छोराहरू हातमा शस्त्रास्त्र लिएर सुसज्जित भए अनि पीठ नामको दैत्यलाई सेनापति बनाएर उनीहरू भौमासुरको आदेश अनुसार श्रीकृष्णसँग युद्ध गर्न निस्किए।

**प्रायुञ्जतासाद्य शरानसीन् गदाः शक्त्यृष्टिशूलान्यजिते रुषोल्बणाः।**
**तच्छस्त्रकूटं भगवान् स्वमार्गणैरमोघवीर्यस्तिलशश्चकर्त ह॥ १३॥**

**पदार्थ–**
**उल्बणाः** = भयङ्कर (ती ताम्र आदिहरूले)
**आसाद्य** = भगवान्को नजिक आएर
**रुषा** = रिसले
**अजिते** = श्रीकृष्णमाथि
**शरान्** = बाण
**असीन्** = तरबार

**गदाः** = गदा
**शक्त्यृष्टिशूलानि** = शक्ति, ऋष्टि र त्रिशूलहरू
**प्रायुञ्जत** = प्रहार गरे
**अमोघवीर्यः** = अमोघ सामर्थ्य भएका
**भगवान्** = भगवान् श्रीकृष्णले
**स्वमार्गणैः** = आफ्ना बाणहरूद्वारा
**तच्छस्त्रकूटं** = तिनीहरूले प्रहार गरेका शस्त्रास्त्रहरूलाई
**ह** = निश्चय नै
**तिलशः** = तिलजत्रै बनाएर
**चकर्त** = टुक्रा-टुक्रा पारिदिनुभयो

**वाक्यार्थ—** भयङ्कर स्वरूप भएका ती ताम्र आदि असुरहरूले नजिकमा आएर भगवान् श्रीकृष्णमाथि बाण, तरबार, शक्ति, ऋष्टि (खड्गविशेष) र त्रिशूलहरूको वर्षा गरे। अमोघ सामर्थ्य भएका भगवान्ले पनि बाणहरू प्रहार गरेर तिनीहरूले प्रहार गरेको शस्त्रास्त्रको समूहलाई तिलको गेडाजत्रो बनाएर टुक्रा-टुक्रा पारिदिनुभयो।

**तान् पीठमुख्याननयद् यमक्षयं निकृत्तशीर्षोरुभुजाङ्घ्रिवर्मणः।**
**स्वानीकपानच्युतचक्रसायकैस्तथा निरस्तान् नरको धरासुतः॥ १४॥**
**निरीक्ष्य दुर्मर्षण आस्रवन्मदैर्गजैः पयोधिप्रभवैर्निराक्रमत्।**
**दृष्ट्वा सभार्यं गरुडोपरि स्थितं सूर्योपरिष्टात् सतडिद्घनं यथा।**
**कृष्णं स तस्मै व्यसृजच्छतघ्नीं योधाश्च सर्वे युगपत् स्म विव्यधुः॥ १५॥**

**पदार्थ—**
**निकृत्तशीर्षोरुभुजाङ्घ्रिवर्मणः** = शिर, तिघ्रा, बाहु, खुट्टा र कवच काटिएका
**पीठमुख्यान्** = पीठ आदि
**तान्** = ती ताम्र आदि सम्पूर्ण दैत्यहरूलाई
**यमक्षयं** = यमलोक
**अनयत्** = पुऱ्याइदिनुभयो
**स्वानीकपान्** = आफ्ना सेनापतिहरूलाई
**अच्युतचक्रसायकैः** = श्रीकृष्णको चक्र र बाणद्वारा
**तथा** = त्यसरी
**निरस्तान्** = मारिएका
**निरीक्ष्य** = देखेर
**दुर्मर्षणः** = असह्य भएको
**धरासुतः** = पृथिवीको पुत्र
**नरकः** = नरकासुर पनि भनिने भौमासुरले
**आस्रवन्मदैः** = मद चुहिरहेका
**पयोधिप्रभवैः** = समुद्रको प्रभावबाट (ऐरावत कुलमा) उत्पन्न
**गजैः** = हात्तीहरूद्वारा
**निराक्रमत्** = युद्ध गर्न निस्कियो
**सः** = त्यो भौमासुरले
**सूर्योपरिष्टात्** = सूर्यमाथि
**सतडिद्घनं यथा** = बिजुलीले सहित भएको मेघ झैँ
**गरुडोपरि** = गरुडमाथि
**स्थितं** = बस्नुभएका
**सभार्यं** = पत्नी सत्यभामाले सहित हुनुभएका
**कृष्णं** = श्रीकृष्णलाई
**दृष्ट्वा** = देखेर
**तस्मै** = ती भगवान्लाई
**शतघ्नीं** = शतघ्नी नामक अस्त्र
**व्यसृजत्** = प्रहार गऱ्यो
**सर्वे** = अरू सबै
**योधाः च** = योद्धाहरूले पनि
**युगपत्** = एकै साथ
**विव्यधुः स्म** = अस्त्र प्रहार गरे

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले पनि शस्त्रास्त्रको प्रयोग गरेर पीठसहित ताम्र आदि सबै असुरहरूको शिर, तिघ्रा, बाहु, खुट्टा र कवचहरू काटेर तिनीहरूलाई यमलोक पुऱ्याइदिनुभयो। श्रीकृष्णले आफ्नो सुदर्शन चक्र र बाणद्वारा आफ्ना सेनापतिहरूलाई मारेको देखेर नरकासुर नामले पनि चिनिएको पृथिवीको पुत्र भौमासुरलाई असह्य भयो। ऊ समुद्रको प्रभावद्वारा ऐरावतकुलमा उत्पन्न भएका मदशाली हात्तीहरू लिएर युद्ध गर्न दुर्गबाट बाहिर निस्कियो। सूर्यमाथि बिजुलीको साथमा बसेको वर्षाकालीन श्यामवर्णको मेघ झैँ गरुडमाथि पत्नी सत्यभामाका साथमा बस्नुभएका श्यामसुन्दर श्रीकृष्णलाई देखेर उसले भगवान्लाई शतघ्नी नामक अस्त्र प्रहार गऱ्यो। त्यसको लगत्तै उसका अन्य योद्धाहरूले पनि एकसाथ भगवान्माथि अस्त्रहरू प्रहार गरे।

**तद् भौमसैन्यं भगवान् गदाग्रजो विचित्रवाजैर्निशितैः शिलीमुखैः।**
**निकृत्तबाहूरुशिरोध्रविग्रहं चकार तर्ह्येव हताश्वकुञ्जरम्॥ १६॥**

**पदार्थ–**
**तर्हि एव** = त्यही वेला
**भगवान्** = भगवान्
**गदाग्रजः** = गदका दाजु श्रीकृष्णले
**विचित्रवाजैः** = विचित्र प्वाँख भएका
**निशितैः** = तिखा
**शिलीमुखैः** = बाणहरूद्वारा
**तत्** = त्यो
**भौमसैन्यं** = भौमासुरको सेनालाई
**निकृत्तबाहूरुशिरोध्रविग्रहं** = बाहु, तिघ्रा, घाँटी र शरीर काटिएको
**हताश्वकुञ्जरं** = घोडा र हात्तीहरू पनि मारिएको
**चकार** = बनाउनुभयो

**वाक्यार्थ–** त्यही वेला श्रीकृष्ण भगवान्ले पनि विचित्र वर्णका प्वाँख भएका तिखा-तिखा धारिला आफ्ना बाणहरूको प्रयोग गरेर भौमासुरको त्यो विशाल सेनाका सैनिकहरूको हात, तिघ्रा, घाँटी र शरीर काटिदिनुभयो भने तिनीहरूका घोडा र हात्तीहरूलाई पनि मारिदिनुभयो।

**यानि योधैः प्रयुक्तानि शस्त्रास्त्राणि कुरूद्वह।**
**हरिस्तान्यच्छिनत् तीक्ष्णैः शरैरेकैकशस्त्रीभिः॥ १७॥**

**पदार्थ–**
**कुरूद्वह** = हे कुरुश्रेष्ठ
**योधैः** = योद्धाहरूद्वारा
**यानि** = जुन जुन
**प्रयुक्तानि** = प्रहार गरिएका
**शस्त्रास्त्राणि** = खड्ग, बाण आदि शस्त्रास्त्रहरू थिए
**हरिः** = श्रीकृष्णले
**तानि** = ती शस्त्रास्त्रहरूलाई
**एकैकशः** = एक-एक गरेर
**त्रीभिः** = तीन ओटा
**तीक्ष्णैः** = तिखा
**शरैः** = बाणहरूद्वारा
**अच्छिनत्** = छेदन गर्नुभयो

**वाक्यार्थ–** हे कुरुश्रेष्ठ परीक्षित्! भौमासुरका सेनाको वधभन्दा अगाडि ती दैत्य योद्धाहरूले भगवान्माथि जे-जस्ता शस्त्रास्त्रहरू प्रहार गरेका थिए, ती प्रत्येक शस्त्रास्त्रहरूलाई भगवान्ले तीन ओटा तिखा बाणहरूले छेदन गर्नुभयो।

**उह्यमानः सुपर्णेन पक्षाभ्यां निघ्नता गजान्।**

**गरुत्मता हन्यमानास्तुण्डपक्षनखैर्गजाः॥ १८॥**

**पुरमेवाविशन्नार्ता नरको युध्ययुध्यत।**

**दृष्ट्वा विद्रावितं सैन्यं गरुडेनार्दितं स्वकम्॥ १९॥**

**तं भौमः प्राहरच्छक्त्या वज्रः प्रतिहतो यतः।**

**नाकम्पत तया विद्धो मालाहत इव द्विपः॥ २०॥**

**पदार्थ–**
**पक्षाभ्यां** = दुबै पखेटाद्वारा
**गजान्** = हात्तीहरूलाई
**निघ्नता** = मारिरहेका
**सुपर्णेन** = गरुडद्वारा
**उह्यमानः** = बोकिनुभएका भगवान्
**गरुत्मता** = गरुडबाट
**तुण्डपक्षनखैः** = मुखको चुच्चो, पखेटा र नङ्ग्राद्वारा
**हन्यमानाः** = घाइते बनाइएका
**गजाः** = हात्तीहरू
**आर्ताः** = पीडित भएर
**पुरं एव** = नगरतिर नै
**आविशन्** = प्रवेश गर्न थाले
**नरकः** = नरक (भौमासुर) एक्लैले
**युधि** = युद्धमा
**अयुध्यत** = लडाइँ गरिरह्यो
**गरुडेन** = गरुडद्वारा
**आर्दितं** = घाइते बनाइएको
**विद्रावितं** = भागेका
**स्वकं** = आफ्नो
**सैन्यं** = सेनालाई
**दृष्ट्वा** = देखेर
**भौमः** = भौमासुरले
**तं** = ती गरुडलाई
**शक्त्या** = शक्तिले
**प्राहरत्** = प्रहार गऱ्यो
**यतः** = जुन शक्तिद्वारा
**वज्रः** = वज्र पनि
**प्रतिहतः** = विफल भएको थियो
**तया** = त्यस शक्तिद्वारा
**विद्धः** = घाइते भएका गरुड
**मालाहतः** = मालाले प्रहार गरिएको
**द्विपः इव** = हात्ती झैँ
**न अकम्पत** = विचलित भएनन्

**वाक्यार्थ–** त्यसवेला भगवान् श्रीकृष्ण गरुडमाथि बस्नुभएको थियो। गरुड चाहिँ आफ्ना दुबै पखेटाले हानेर हात्तीहरूलाई मारिरहेका थिए। गरुडको मुखको चुच्चो, पखेटा र नङ्ग्राको प्रहारले घाइते भएका भौमासुरका हात्तीहरू पीडित भएर नगरतिर फर्किन थाले। नरकासुर (भौमासुर) एक्लै लडाइँ गरिरह्यो। गरुडको प्रहारबाट घाइते भएर भागेका आफ्ना सेनाहरूलाई देखेर भौमासुरले गरुडमाथि शक्ति (अस्त्रविशेष) प्रहार गऱ्यो। वज्रलाई पनि विफल बनाइदिने शक्तिशाली अस्त्र शक्तिको प्रहारले घाइते भएर पनि जसरी मालाको प्रहारले हात्ती विचलित हुँदैन त्यसरी नै गरुड कत्ति पनि विचलित भएनन्।

**शूलं भौमोऽच्युतं हन्तुमाददे वितथोद्यमः।**

**तद्विसर्गात् पूर्वमेव नरकस्य शिरो हरिः॥**

**अपाहरद् गजस्थस्य चक्रेण क्षुरनेमिना॥ २१॥**

**पदार्थ—**
**वितथोद्यमः** = सम्पूर्ण प्रयास व्यर्थ भएको
**भौमः** = भौमासुरले
**अच्युतं** = श्रीकृष्णलाई
**हन्तुं** = मार्न
**शूलं** = त्रिशूल
**आददे** = लियो
**हरिः** = भगवान् श्रीकृष्णले
**तद्विसर्गात्** = त्यसले त्रिशूलप्रहार गर्नुभन्दा
**पूर्वम् एव** = पहिले नै
**क्षुरनेमिना** = तिखो धार भएको
**चक्रेण** = सुदर्शन चक्रद्वारा
**गजस्थस्य** = हात्तीमा बसेको
**नरकस्य** = भौमासुरको
**शिरः** = शिर
**अपाहरत्** = छेदन गर्नुभयो

**वाक्यार्थ—** आफ्नो सम्पूर्ण प्रयास व्यर्थ भएको देखेर भौमासुरले श्रीकृष्णलाई मार्नका लागि हातमा त्रिशूल लियो। भौमासुरले त्यो त्रिशूलले प्रहार गर्नुभन्दा पहिले नै भगवान् श्रीकृष्णले तिखो धार भएको सुदर्शन चक्र प्रहार गरेर हात्तीमा बसेको भौमासुरको शिर काटिदिनुभयो।

**सकुण्डलं चारुकिरीटभूषणं बभौ पृथिव्यां पतितं समुज्ज्वलत्।**
**हा हेति साध्वित्यृषयः सुरेश्वरा माल्यैर्मुकुन्दं विकिरन्त ईडिरे॥ २२॥**

**पदार्थ—**
**सकुण्डलं** = कुण्डलले सहित भएको
**चारुकिरीटभूषणं** = सुन्दर मुकुटको गहना लगाएको
**समुज्ज्वलत्** = चम्किलो (भौमासुरको शिर)
**पृथिव्यां** = भुइँमा
**पतितं** = झरेर
**बभौ** = शोभित भयो
**हा हा इति** = (भौमासुरका आत्मीयजनहरू) हाय हाय
**ऋषयः** = ऋषिहरू
**साधु इति** = राम्रो-राम्रो (भन्न थाले)
**सुरेश्वराः** = इन्द्र आदि देवताहरूले
**माल्यैः** = पुष्पमालाहरूद्वारा
**मुकुन्दं** = श्रीकृष्णलाई
**विकिरन्तः** = ढाक्दै (छर्दै)
**ईडिरे** = स्तुति गर्न लागे

**वाक्यार्थ—** कुण्डल र सुन्दर मुकुट लगाएको हुनाले देदीप्यमान भएको भौमासुरको शिर भुइँमा खस्यो। त्यो दृश्य देखेर भौमासुरका आत्मीयजनहरू 'हाय-हाय' भन्न लागे भने ऋषिहरू 'राम्रो-राम्रो' भन्न लागे। इन्द्र आदि देवताहरूले चाहिँ पुष्पवृष्टि गर्दै भगवान् श्रीकृष्णको स्तुति गर्न लागे।

**ततश्च भूः कृष्णमुपेत्य कुण्डले प्रतप्तजाम्बूनदरत्नभास्वरे।**
**सवैजयन्त्या वनमालयार्पयत् प्राचेतसं छत्रमथो महामणिम्॥ २३॥**

**पदार्थ—**
**ततः च** = त्यसपछि
**भूः** = (भौमासुरकी आमा) पृथिवी
**कृष्णं** = श्रीकृष्णको नजिकमा
**उपेत्य** = आएर
**प्रतप्तजाम्बूनदरत्नभास्वरे** = तताएको सुनमा रत्न जडेको अति उज्ज्वल
**कुण्डले** = दुई ओटा कुण्डल
**अथो** = तथा
**सवैजयन्त्या** = वैजयन्तीसहित
**वनमालया** = वनमालाद्वारा सजाएर
**प्राचेतसं** = वरुणदेवको
**छत्रं** = छत्र
**महामणिं** = मेरुको अंशभूत मणिपर्वत पनि
**अर्पयत्** = (फिर्ता) दिइन्

**वाक्यार्थ–** भौमासुरको वध भएपछि उसकी आमा पृथिवी भगवान् श्रीकृष्णको अगाडि आएर उहाँलाई वैजयन्ती र वनमाला लगाइदिइन् अनि तताएको सुनमा रत्न जडेको अति उज्ज्वल दुई ओटा कुण्डल, वरुणको छत्र र मेरुको अंशभूत मणिपर्वत पनि भगवान्लाई फिर्ता दिइन्।

**अस्तौषीदथ विश्वेशं देवी देववरार्चितम्।**

**प्राञ्जलिः प्रणता राजन् भक्तिप्रवणया धिया॥ २४॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**राजन्** = हे राजा परीक्षित्
**प्राञ्जलिः** = दुबै हात जोडेकी
**प्रणता** = शिर झुकाएकी
**देवी** = पृथिवी देवीले
**भक्तिप्रवणया** = भक्तिभावले द्रवित भएको
**धिया** = मनद्वारा
**देववरार्चितं** = ब्रह्मा आदि श्रेष्ठ देवताहरूद्वारा पूजित
**विश्वेशं** = जगदीश्वर श्रीकृष्णलाई
**अस्तौषीत्** = स्तुति गरिन्

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्यसपछि पृथिवी देवीले ब्रह्मा आदि श्रेष्ठ देवताहरूद्वारा पनि पूजा गरिएका जगदीश्वर श्रीकृष्णलाई शिर झुकाउँदै दुबै हात जोडेर नमस्कार गरिन् अनि भक्तिभावले द्रवित हुँदै उनले भगवान्को स्तुति गरिन्।

**भूमिरुवाच** (भूमिले भनिन्)

**नमस्ते देवदेवेश शङ्खचक्रगदाधर।**

**भक्तेच्छोपात्तरूपाय परमात्मन् नमोऽस्तु ते॥ २५॥**

**पदार्थ–**
**देवदेवेश** = हे देवाधिदेव
**शङ्खचक्रगदाधर** = हे शङ्खचक्रगदाधारक भगवान्
**ते** = हजुरलाई
**नमः** = नमस्कार छ
**परमात्मन्** = हे सर्वान्तर्यामी
**भक्तेच्छोपात्तरूपाय** = भक्तको इच्छा अनुसार रूप ग्रहण गर्ने
**ते** = हजुरलाई
**नमः** = नमस्कार
**अस्तु** = छ

**वाक्यार्थ–** हे देवाधिदेव! शङ्ख, चक्र र गदाधारी हे सर्वान्तर्यामी! भक्तको इच्छा पूर्ण गर्नका लागि हजुरले अनेक रूप ग्रहण गर्नुहुन्छ। म हजुरलाई नमस्कार गर्दछु।

**नमः पङ्कजनाभाय नमः पङ्कजमालिने।**

**नमः पङ्कजनेत्राय नमस्ते पङ्कजाङ्घ्रये॥ २६॥**

**पदार्थ–**
**पङ्कजनाभाय** = नाभिमा कमल भएका हजुरलाई
**नमः** = नमस्कार गर्दछु
**पङ्कजमालिने** = कमलको माला लगाउनुभएका हजुरलाई
**नमः** = नमस्कार छ
**पङ्कजनेत्राय** = कमल जस्तै प्रफुल्ल नेत्र भएका हजुरलाई
**नमः** = नमस्कार छ
**पङ्कजाङ्घ्रये** = कमलजस्तै कोमल चरण भएका
**ते** = हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** हे श्रीकृष्ण ! नाभिमा कमल भएका हजुरलाई म नमस्कार गर्दछु। कमलको माला गलामा धारण गर्नुभएका, कमल जस्तै प्रफुल्ल नेत्र भएका र कमलजस्तै कोमल चरण भएका हजुरलाई म बारम्बार नमस्कार गर्दछु।

**नमो भगवते तुभ्यं वासुदेवाय विष्णवे ।**
**पुरुषायादिबीजाय पूर्णबोधाय ते नमः ॥ २७ ॥**

**पदार्थ–**
**भगवते** = समग्र ऐश्वर्यका आश्रय
**वासुदेवाय** = वसुदेवनन्दन
**विष्णवे** = सर्वव्यापक
**तुभ्यं** = हजुरलाई
**नमः** = नमस्कार छ
**पुरुषाय** = पुरुष
**आदिबीजाय** = समग्र जगत्को कारणका पनि कारण
**पूर्णबोधाय** = पूर्णज्ञानस्वरूप
**ते** = हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** समग्र ऐश्वर्य, ज्ञान, यश, धर्म र वैराग्यका एक मात्र आश्रय, सर्वव्यापक भएर पनि अहिले वसुदेवनन्दन श्रीकृष्णका रूपमा रहनुभएका एवं समग्र जगत्को कारणका पनि कारण भएका पूर्ण ज्ञानस्वरूप हजुरलाई नमस्कार गर्दछु।

**अजाय जनयित्रेऽस्य ब्रह्मणेऽनन्तशक्तये ।**
**परावरात्मन् भूतात्मन् परमात्मन् नमोऽस्तु ते ॥ २८ ॥**

**पदार्थ–**
**परावरात्मन्** = हे कारण र कार्यका आत्मभूत
**भूतात्मन्** = हे पञ्चमहाभूतका आत्मभूत
**परमात्मन्** = हे परमात्मा
**अजाय** = जन्मरहित (तर)
**अस्य** = यो विश्वको
**जनयित्रे** = जनक
**अनन्तशक्तये** = अनन्त शक्तिमान्
**ब्रह्मणे** = साक्षात् ब्रह्मरूप
**ते** = हजुरलाई
**नमः** = नमस्कार
**अस्तु** = छ

**वाक्यार्थ–** हे परमात्मा ! कारण र कार्यका रूपमा हजुर नै विराजमान हुनुहुन्छ। पञ्चमहाभूत पनि हजुरकै स्वरूप हो। हजुर स्वरूपतः जन्मरहित हुनुहुन्छ तर यो विश्वको उत्पत्ति पनि हजुर नै गर्नुहुन्छ। अनन्त शक्तिमान् साक्षात् परब्रह्म हजुरलाई मेरो नमस्कार छ।

**त्वं वै सिसृक्षू रज उत्कटं प्रभो तमो निरोधाय बिभर्ष्यसंवृतः ।**
**स्थानाय सत्त्वं जगतो जगत्पते कालः प्रधानं पुरुषो भवान् परः ॥ २९ ॥**

**पदार्थ–**
**प्रभो** = हे प्रभु
**जगत्पते** = हे जगदीश्वर
**त्वं वै** = हजुर नै
**सिसृक्षुः** = जगत्को सृष्टि गर्न इच्छुक भई
**उत्कटं** = कार्योन्मुख
**रजः** = रजोगुणलाई
**जगतः** = जगत्को
**स्थानाय** = पालनका लागि
**सत्त्वं** = कार्योन्मुख सत्त्वगुणलाई

**निरोधाय** = जगत्को संहार गर्न
**तमः** = कार्योन्मुख तमोगुणलाई
**बिभर्षि** = धारण गर्नुहुन्छ
(तर पनि)
**असंवृतः** = स्वतन्त्र
**कालः** = काल
**प्रधानं** = प्रकृति
**पुरुषः** = पुरुष
**भवान्** = हजुर
**परः** = काल आदिदेखि भिन्न
हुनुहुन्छ

**वाक्यार्थ–** हे प्रभु ! हजुर नै जगत्को सृष्टि गर्नका लागि कार्योन्मुख रजोगुणलाई, पालन गर्नका लागि सत्त्वगुणलाई र जगत्को संहार गर्नका लागि तमोगुणलाई स्वीकार गर्नुहुन्छ। यी सबै कार्यहरू गर्न हजुर स्वतन्त्र हुनुहुन्छ। हे जगदीश्वर ! हजुर काल, प्रकृति र पुरुषको रूपमा रहनुहुन्छ, तापनि स्वरूपतः हजुर काल, प्रकृति र पुरुषदेखि पर हुनुहुन्छ।

**अहं पयो ज्योतिरथानिलो नभो मात्राणि देवा मन इन्द्रियाणि।**
**कर्ता महानित्यखिलं चराचरं त्वय्यद्वितीये भगवनयं भ्रमः॥ ३०॥**

**पदार्थ–**
**भगवन्** = हे भगवान्
**अहं** = म (पृथिवी)
**पयः** = जल
**ज्योतिः** = अग्नि
**अनिलः** = वायु
**नभः** = आकाश
**अथ** = तथा
**मात्राणि** = शब्द आदि
पञ्चतन्मात्रा
**देवाः** = अग्नि आदि इन्द्रियका
अधिष्ठाता देवताहरू
**मनः** = मन
**इन्द्रियाणि** = चक्षु आदि
इन्द्रियहरू
**कर्ता** = अहङ्कार
**महान्** = महत्तत्त्व
**इति** = यी
**अखिलं** = सम्पूर्ण
**चराचरं** = चराचर जगत्
**अद्वितीये** = अद्वितीय
**त्वयि** = हजुरमा (प्रतीत छ)
**अयं** = (चराचर जगत्को
हजुरमा हुने) यो प्रतीति
**भ्रमः** = भ्रम मात्र हो

**वाक्यार्थ–** हे भगवान् ! म (पृथिवी), जल, अग्नि, वायु र आकाश यी पञ्चमहाभूत; शब्द, स्पर्श, रूप, रस, गन्ध यी पञ्चतन्मात्रा; अग्नि आदि इन्द्रियहरूका अधिष्ठाता देवताहरू; मन, चक्षु आदि इन्द्रियहरू; अहङ्कार, महत्तत्त्व अनि यी सम्पूर्ण स्थावर र जङ्गम जगत् अद्वितीय हजुरमा नै भिन्न-भिन्न रूपले प्रतीत भएका छन्। अद्वितीय हजुरमा हुने यो भिन्नताको प्रतीति केवल भ्रम मात्र हो।

**तस्यात्मजोऽयं तव पादपङ्कजं भीतः प्रपन्नार्तिहरोपसादितः।**
**तत्पालयैनं कुरु हस्तपङ्कजं शिरस्यमुष्याखिलकल्मषापहम्॥ ३१॥**

**पदार्थ–**
**प्रपन्नार्तिहर** = शरणागत
भक्तको दुःखविनाश गर्ने हे
भगवान्
**भीतः** = डराएको
**अयं** = यो भगदत्त नामको
**तस्य** = त्यस भौमासुरको
**आत्मजः** = छोरो
**तव** = हजुरको
**पादपङ्कजं** = चरणकमलमा
**उपसादितः** = ल्याइएको छ
**तत्** = त्यसकारण
**एनं** = यसलाई
**पालय** = रक्षा गर्नुहोस्
**अमुष्य** = यसको

| | | |
|---|---|---|
| **शिरसि** = शिरमा | पापलाई नष्ट गर्ने | **कुरु** = राखिदिनुहोस् |
| **अखिलकल्मषापहं** = सम्पूर्ण | **हस्तपङ्कजं** = करकमल | |

**वाक्यार्थ–** हे भगवान् ! हजुर शरणमा आएका भक्तहरूको दुःखलाई नष्ट गर्नुहुन्छ। भगदत्त नाम गरेको यो भौमासुरको छोरो (मेरो नाति) अत्यन्त भयभीत छ। मैले यसलाई हजुरको चरणकमलमा ल्याएको छु। हजुर यसको रक्षा गर्नुहोस्। सम्पूर्ण पापहरूलाई नष्ट गर्ने हजुरको करकमल यसको शिरमा राखिदिनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति भूम्यार्थितो वाग्भिर्भगवान् भक्तिनम्रया ।**

**दत्त्वाभयं भौमगृहं प्राविशत् सकलर्द्धिमत् ॥ ३२ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भक्तिनम्रया** = भक्तिले नम्र भएकी | **वाग्भिः** = स्तुति वचनहरूद्वारा | **सकलर्द्धिमत्** = सम्पूर्ण भोगका उपकरणहरूले समृद्ध |
| **भूम्या** = पृथिवीले | **अर्थितः** = प्रार्थना गरिनुभएका | **भौमगृहं** = भौमासुरको दरबारमा |
| **इति** = यसरी | **भगवान्** = भगवान् श्रीकृष्णले | **प्राविशत्** = प्रवेश गर्नुभयो |
| | **अभयं** = भगदत्तलाई अभय | |
| | **दत्त्वा** = दिएर | |

**वाक्यार्थ–** हे राजा परीक्षित् ! पृथिवीले भक्तिभावद्वारा नम्र भएर यसरी स्तुतिवचनहरूद्वारा प्रार्थना गरेपछि भगवान्ले पनि भगदत्तलाई अभयदान दिनुभयो अनि भोगका सम्पूर्ण उपकरणहरूले सम्पन्न भौमासुरको ऐश्वर्यशाली दरबारमा प्रवेश गर्नुभयो।

**तत्र राजन्यकन्यानां षट्सहस्राधिकायुतम् ।**

**भौमाहृतानां विक्रम्य राजभ्यो ददृशे हरिः ॥ ३३ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तत्र** = त्यो भौमासुरको दरबारमा | हरण गरिएका | हजारको उपस्थिति |
| **विक्रम्य** = पराक्रम गरी | **राजन्यकन्यानां** = राजकुमारी-हरूको | **हरिः** = भगवान् श्रीकृष्णले |
| **राजभ्यः** = अनेक राजाहरूबाट | **षट्सहस्राधिकायुतं** = (दश हजारमा छ हजार बढी) सोह्र | **ददृशे** = देख्नुभयो |
| **भौमाहृतानां** = भौमासुरद्वारा | | |

**वाक्यार्थ–** भौमासुरको दरबारमा प्रवेश गरेपछि त्यहाँ भगवान् श्रीकृष्णले भौमासुरद्वारा पराक्रम गरी अपहरण गरेर ल्याइएका सोह्र हजार राजकुमारीहरूलाई देख्नुभयो।

**तं प्रविष्टं स्त्रियो वीक्ष्य नरवीरं विमोहिताः ।**

**मनसा वव्रिरेऽभीष्टं पतिं दैवोपसादितम् ॥ ३४ ॥**

**पदार्थ–**
**दैवोपसादितं** = सौभाग्यले आफ्ना नजिकमा प्राप्त हुनुभएका
**प्रविष्टं** = त्यही भवनमा प्रवेश गर्नुभएका
**अभीष्टं** = चाहे अनुरूपका
**नरवीरं** = नरश्रेष्ठ श्रीकृष्णलाई
**वीक्ष्य** = देखेर
**विमोहिताः** = मोहित भएका
**तं** = ती श्रीकृष्णलाई
**स्त्रियः** = राजकन्याहरूले
**मनसा** = मनद्वारा
**पतिं** = पतिको रूपमा
**वव्रिरे** = वरण गरे

**वाक्यार्थ–** सौभाग्यले गर्दा त्यही भवनमा प्रवेश गरी आफ्ना नजिकमा प्राप्त हुनुभएका भगवान् श्रीकृष्णलाई देखेर राजकन्याहरू मोहित भए। आफूले चाहे अनुसारका नरश्रेष्ठ श्रीकृष्णलाई देखेर उनीहरूले उहाँलाई मनमनै पतिको रूपमा वरण गरे।

**भूयात् पतिरयं मह्यं धाता तदनुमोदताम्।**
**इति सर्वाः पृथक् कृष्णे भावेन हृदयं दधुः॥ ३५॥**

**पदार्थ–**
**अयं** = यी श्रीकृष्ण नै
**मह्यं** = मेरा
**पतिः** = पति
**भूयात्** = हुनुहोस्
**तत्** = मेरो त्यो इच्छालाई
**धाता** = विधाताले
**अनुमोदतां** = सत्य बनाऊन्
**इति** = यस्तो
**भावेन** = भावनाद्वारा
**सर्वाः** = सबै राजकन्याहरूले
**पृथक्** = प्रत्येकले
**कृष्णे** = भगवान् श्रीकृष्णमा
**हृदयं** = हृदय
**दधुः** = दिए

**वाक्यार्थ–** 'यिनै श्रीकृष्ण मेरा पति हुनुहोस्, मेरो यो इच्छालाई विधाताले सत्य बनाऊन्' भन्दै ती प्रत्येक राजकन्याहरूले मनमनै प्रार्थना गरे। उनीहरूले आफ्नो हृदय सम्पूर्णरूपमा प्रेमभावनापूर्वक श्रीकृष्णमा अर्पण गरे।

**ताः प्राहिणोद् द्वारवतीं सुमृष्टविरजोऽम्बराः।**
**नरयानैर्महाकोशान् रथाश्वान् द्रविणं महत्॥ ३६॥**

**पदार्थ–**
(भगवान्ले)
**सुमृष्टविरजोऽम्बराः** = स्नान गरेपछि निर्मल वस्त्र लगाएका
**ताः** = ती राजकन्याहरूलाई
**नरयानैः** = पालकीद्वारा
**द्वारवतीं** = द्वारकामा
**प्राहिणोत्** = पठाउनुभयो (त्यस्तै)
**महाकोशान्** = ठुलो खजाना
**रथाश्वान्** = रथ, घोडा (र)
**महत्** = धेरै
**द्रविणं** = सम्पत्ति (पनि पठाउनुभयो)

**वाक्यार्थ–** स्नान गरेपछि निर्मल वस्त्रहरू पहिरिएका ती सम्पूर्ण राजकन्याहरूलाई भगवान्ले पालकीमा चढाएर द्वारका पठाउनुभयो अनि उहाँले ठुलो खजाना, थुप्रै रथ र घोडाहरू तथा धेरै सम्पत्ति पनि द्वारका पठाउनुभयो।

**ऐरावतकुलेभांश्च चतुर्दन्तांस्तरस्विनः।**
**पाण्डुरांश्च चतुःषष्टिं प्रेरयामास केशवः॥ ३७॥**

**पदार्थ–**
**केशवः** = श्रीकृष्णले
**चतुर्दन्तान्** = चार-चार ओटा दाँत भएका
**तरस्विनः** = अत्यन्त बलशाली
**पाण्डुरान् च** = खैरो वर्ण भएका
**चतुःषष्टिं** = चौसट्ठी ओटा
**ऐरावतकुलेभान् च** = ऐरावतकुलमा उत्पन्न भएका हात्तीहरू पनि
**प्रेरयामास** = पठाउनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले ऐरावतकुलमा उत्पन्न भएका अत्यन्त वेगशाली एवं चार-चार ओटा दाँत भएका चौसट्ठी ओटा खैरा हात्तीहरू पनि द्वारका पठाउनुभयो।

**गत्वा सुरेन्द्रभवनं दत्त्वादित्यै च कुण्डले।**
**पूजितस्त्रिदशेन्द्रेण सहेन्द्राण्या च सप्रियः॥ ३८॥**

**पदार्थ–**
**सप्रियः** = सपत्नीक श्रीकृष्ण
**सुरेन्द्रभवनं** = देवराज इन्द्रको नगरी
**गत्वा** = गएर
**अदित्यै च** = अदितिलाई
**कुण्डले** = दुई ओटा कुण्डल
**दत्त्वा** = दिएर
**इन्द्राण्या सह** = इन्द्राणीले सहित
**त्रिदशेन्द्रेण च** = देवराज इन्द्रद्वारा पनि
**पूजितः** = पूजित हुनुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्ण पत्नी सत्यभामालाई लिएर इन्द्रको नगरी अमरावती जानुभयो। त्यहाँ देवराज इन्द्र र उनकी पत्नी इन्द्राणीले भगवान्‌को पूजा सत्कार गरे। भगवान्‌ले पनि देवमाता अदितिलाई भौमासुरले हरण गरेका दुई ओटा कुण्डल दिनुभयो।

**चोदितो भार्ययोत्पाट्य पारिजातं गरुत्मति।**
**आरोप्य सेन्द्रान् विबुधान् निर्जित्योपानयत् पुरम्॥ ३९॥**

**पदार्थ–**
**भार्यया** = पत्नी सत्यभामाद्वारा
**चोदितः** = प्रेरित भई
**पारिजातं** = स्वर्गमा रहेको पारिजात वृक्ष
**उत्पाट्य** = उखेलेर
**गरुत्मति** = गरुडमा
**आरोप्य** = राखेर
**सेन्द्रान्** = इन्द्रसहित
**विबुधान्** = देवताहरूलाई
**निर्जित्य** = युद्धमा जितेर
**पुरं** = द्वारका नगरीमा
**उपानयत्** = ल्याउनुभयो

**वाक्यार्थ–** फर्किंदा बाटोमा पत्नी सत्यभामाको आग्रह अनुसार भगवान् श्रीकृष्णले स्वर्गमा रहेको पारिजातको वृक्षलाई उखेलेर गरुडमाथि राख्नुभयो। आफ्ना विरुद्धमा लडाइँ गर्न आएका देवराज इन्द्रसहित सम्पूर्ण देवताहरूलाई जितेर भगवान्‌ले पारिजातलाई द्वारकामा ल्याउनुभयो।

**स्थापितः सत्यभामाया गृहोद्यानोपशोभनः।**
**अन्वगुर्भ्रमराः स्वर्गात् तद्गन्धासवलम्पटाः॥ ४०॥**

**पदार्थ–**
**सत्यभामायाः** = सत्यभामाको
**गृहोद्यानोपशोभनः** = महल

नजिकैको उद्यानलाई सुशोभित गराउने गरी
**स्थापितः** = पारिजात राखियो
**तद्गन्धासवलम्पटाः** = त्यो पारिजातको सुवास र मकरन्दमा आसक्त
**भ्रमराः** = भँवराहरू
**स्वर्गात्** = स्वर्गबाट
**अन्वगुः** = (पारिजातलाई) पछ्याउँदै आए

**वाक्यार्थ–** भगवान्‌ले पारिजातलाई सत्यभामाको महलनजिकै रहेको उद्यानको शोभा बढाउन त्यहीँ राख्नुभयो। पारिजातको सुवास र मकरन्दमा आसक्त भँवराहरू चाहिँ स्वर्ग छाडेर पारिजातलाई पछ्याउँदै द्वारकामा आए।

**ययाच आनम्य किरीटकोटिभिः पादौ स्पृशन्नच्युतमर्थसाधनम्।**
**सिद्धार्थ एतेन विगृह्यते महानहो सुराणां च तमो धिगाढ्यताम्॥ ४१॥**

**पदार्थ–**
**आनम्य** = शिर झुकाएर
**किरीटकोटिभिः** = मुकुटको अग्र भागले
**पादौ** = भगवान्‌को चरणकमललाई
**स्पृशन्** = छोएर (इन्द्रले)
**अच्युतं** = भगवान् श्रीकृष्णसँग
**अर्थसाधनं** = भौमासुरको वध आदि स्वार्थ सिद्ध गराइदिन
**ययाचे** = प्रार्थना गरे
**सिद्धार्थः** = भौमासुर वध आदि प्रयोजन सिद्ध भएका
**महान्** = ज्ञानी इन्द्रले
**एतेन** = आफ्नो कार्य सिद्ध गराइदिने श्रीकृष्णसँग
**विगृह्यते** = पारिजातका लागि विरोध गरे
**अहो** = आश्चर्य
**सुराणां च** = सत्त्वगुणी देवताहरूमा पनि
**तमः** = अज्ञान हुँदो रहेछ (त्यसैले)
**आढ्यतां** = धनीपनलाई
**धिक्** = धिक्कार छ

**वाक्यार्थ–** जब इन्द्रलाई आफ्नो स्वार्थसिद्ध गर्नु थियो तब उनले आफ्नो शिर झुकाएर मुकुटको अग्र भागले भगवान् श्रीकृष्णको चरणलाई स्पर्श गर्दै भौमासुरको वध गरिदिन प्रार्थना गरे। जब उनको त्यो प्रयोजन भगवान्‌ले सिद्ध गरिदिनुभयो अनि उनले तिनै कार्यसाधक श्रीकृष्णसँग पारिजातको विषयमा लडाइँ गरे। आश्चर्य ! सत्त्वगुणी देवताहरूमा पनि कत्रो अज्ञानता, धनीपन नै यसको कारण हो, त्यसैले धनीपनलाई धिक्कार छ।

**अथो मुहूर्त एकस्मिन् नानागारेषु ताः स्त्रियः।**
**यथोपयेमे भगवान् तावद्रूपधरोऽव्ययः॥ ४२॥**

**पदार्थ–**
**अथो** = यसपछि (द्वारका फर्किएपछि)
**एकस्मिन्** = एउटै
**मुहूर्ते** = शुभ मुहूर्तमा
**ताः** = ती (सोह्र हजार)
**स्त्रियः** = राजकन्याहरूलाई
**नानागारेषु** = अलग-अलग महलमा
**तावद्रूपधरः** = त्यति नै सङ्ख्यामा रूप धारण गर्नुभएका
**अव्ययः** = नाशरहित
**भगवान्** = भगवान् श्रीकृष्णले
**यथा** = यथाविधि
**उपयेमे** = विवाह गर्नुभयो

**वाक्यार्थ–** द्वारकामा फर्किएपछि एउटै शुभमुहूर्तमा अलग-अलग महलमा ती सोह्र हजार राजकन्याहरूसँग त्यति नै सङ्ख्यामा अलग-अलग रूप धारण गरी नाशरहित भगवान् श्रीकृष्णले शास्त्रीय विधि अनुसार विवाह गर्नुभयो।

**गृहेषु तासामनपाय्यतर्ककृन्निरस्तसाम्यातिशयेष्ववस्थितः।**
**रेमे रमाभिर्निजकामसंप्लुतो यथेतरो गार्हकमेधिकांश्चरन्॥ ४३॥**

**पदार्थ–**
**तासां** = ती सबै पत्नीहरूको
**निरस्तसाम्यातिशयेषु** = भोग्य पदार्थहरूको समृद्धिका दृष्टिले समानता र अधिकतारहित
**गृहेषु** = महलहरूमा
**अवस्थितः** = बस्नुभएका
**अनपायी** = विश्लेषरहित भई
**इतरः यथा** = अन्य सामान्य मनुष्य झैं
**गार्हकमेधिकान्** = गृहस्थ धर्मलाई
**चरन्** = पालना गर्दै
**अतर्क्यकृत्** = अचिन्त्य जगत्का कर्ता
**निजकामसंप्लुतः** = आत्मानन्दले पूर्ण भगवान् श्रीकृष्ण
**रमाभिः** = लक्ष्मीका अंशभूत ती पत्नीहरूका साथमा
**रेमे** = विहार गर्नुभयो

**वाक्यार्थ–** भगवान्का ती सबै पत्नीहरूको महलमा भोग्य पदार्थहरूको समृद्धि यति धेरै थियो कि त्यस बराबर वा त्योभन्दा बढी समृद्धि संसारमा अन्त कतै पनि थिएन। त्यस्तो महलमा बसेर भगवान् श्रीकृष्णले सामान्य मनुष्यले झैं गृहस्थ धर्मको पालन गर्नुभयो। अचिन्त्य जगत्का कर्ता भगवान्ले स्वयंमा आत्मानन्दद्वारा परिपूर्ण भएर पनि लक्ष्मीका अंशभूत ती सोह्र हजार एक सय पत्नीहरूसँग आनन्दपूर्वक विहार गर्नुभयो।

**इत्थं रमापतिमवाप्य पतिं स्त्रियस्ता**
**ब्रह्मादयोऽपि न विदुः पदवीं यदीयाम्।**
**भेजुर्मुदाविरतमेधितयानुराग-**
**हासावलोकनवसङ्गमजल्पलज्जाः॥ ४४॥**

**पदार्थ–**
**ब्रह्मादयः अपि** = ब्रह्मा आदि देवताहरूले पनि
**यदीयां** = जसको
**पदवीं** = प्राप्तिमार्ग
**न विदुः** = जान्दैनन् (त्यस्ता)
**रमापतिं** = लक्ष्मीपति श्रीकृष्णलाई
**इत्थं** = यस प्रकारले
**पतिं** = पतिका रूपमा
**अवाप्य** = पाएर
**अनुरागहासावलोकनवसङ्गम-जल्पलज्जाः** = अनुराग सहितको मन्द मुस्कान, हेराइ, नवसमागम, प्रणयवार्ता र त्यसमा हुने लज्जाले युक्त भएका
**ताः** = ती
**स्त्रियः** = पत्नीहरूले
**अविरतम्** = निरन्तर
**एधितया** = बढ्दै गएको
**मुदा** = हर्षद्वारा (भगवान्लाई)
**भेजुः** = सेवा गर्न थाले

**वाक्यार्थ–** हे परीक्षित् ! ब्रह्मा आदि श्रेष्ठ देवताहरू पनि भगवान्को प्राप्ति हुने मार्गलाई जान्न सक्दैनन्। त्यस्ता लक्ष्मीपति श्रीकृष्णलाई ती सोह्र हजार एक सय स्त्रीले पतिको रूपमा प्राप्त गरेपछि भगवान्मा उनीहरूको प्रेम दिनानुदिन बढ्दै जान थाल्यो। अनुरागसहितको मन्द मुस्कान, मुस्कानसहितको हेराइ, नवसमागम, प्रणयवार्ता तथा लज्जाभावले युक्त भएका उनीहरूले आनन्दपूर्वक भगवान्को सेवा गर्न थाले।

**प्रत्युद्गमासनवरार्हणपादशौच-**
**ताम्बूलविश्रमणवीजनगन्धमाल्यैः।**
**केशप्रसारशयनस्नपनोपहार्यै-**
**र्दासीशता अपि विभोर्विदधुः स्म दास्यम्॥ ४५॥**

**पदार्थ–**
**दासीशताः अपि** = सय ओटी दासी भए पनि ती स्त्रीहरू (आफैँ)
**विभोः** = महत्तम आफ्ना पति श्रीकृष्णको
**प्रत्युद्गमासनवरार्हणपादशौच-ताम्बूलविश्रमणवीजनगन्ध-माल्यैः** = आउँदै गर्दा स्वागतार्थ अगाडि जाने, आसन दिने, अर्घ्य आदिद्वारा सत्कार गर्ने, चरण धुने, पान खुवाउने, गोडा मिचेर थकाइ हटाउने, पङ्खाले हम्किने, चन्दन र माला लगाइदिने कार्यहरूद्वारा
**केशप्रसारशयनस्नपनोपहार्यैः** = कपाल कोरिदिने, सुताउने, स्नान गराउने र भोजन गराउने आदि कर्महरूद्वारा
**दास्यं** = सेवा
**विदधुः स्म** = गर्दथे

**वाक्यार्थ–** ती प्रत्येक पत्नीहरूका सय-सय ओटी दासीहरू भए पनि उनीहरूले आफैँले आफ्ना महत्तम पति श्रीकृष्णको सेवा गरे। कतै गएर आउँदा स्वागतका लागि अगाडि जाने, बस्न आसन दिने, अर्घ्य आदि सामग्रीद्वारा सत्कार गर्ने, चरण धुने, पान खुवाउने, थकाइ हटाउन गोडा मिच्ने, पङ्खाले हम्किने, चन्दन र माला लगाइदिने, कपाल कोरिदिने, शय्यामा सुताउने, उचित समयमा स्नान र भोजन गराउने जस्ता कार्यहरू गरी उनीहरूले भगवान्को सेवा राम्ररी गर्दथे।

**विवरण–** यस अध्यायमा सम्पूर्ण लोकलाई सुखप्रदान गर्ने भगवान्ले भौमासुरलाई मार्नुभएको वर्णन गरिएको छ। इन्द्रको छत्र अनि अदितिको कुण्डल हरण गर्ने भौमासुरलाई मार्न भगवान्ले सत्यभामालाई पनि साथमा नै लानुभएको छ। युद्धमा स्त्रीलाई साथमा लिएर जानु अनुचित मानिन्छ। तर सत्यभामालाई साथमा लानुमा अनेक कारणहरू रहेका छन्। हरिवंशमा दिइएको कथाअनुसार नारदजीले स्वर्गको दिव्य फूल श्रीकृष्णलाई दिँदा उहाँले तत्काल त्यो फूल रुक्मिणीलाई दिनुभएछ। फूलको सुगन्धबाट आकृष्ट भएकी सत्यभामाले मलाई पनि त्यो फूल दिनुहोस् भनी श्रीकृष्णलाई भन्दा उहाँले तिमीलाई कल्पवृक्ष नै दिउँला भनी सत्यभामाको चित्त बुझाउनुभएछ। लडाइँमा साथ दिएकी सत्यभामाले नै कल्पवृक्ष लिएर आएकी हुन् भनी रुक्मिणी आदिलाई सम्झाउन सजिलो पर्छ भनी श्रीकृष्णले सत्यभामालाई युद्धमा साथै लिएर जानुभएको हो। नत्र स्वर्गबाट ल्याएको कल्पवृक्ष सिधै सत्यभामाकहाँ लगेर रोपिदिँदा अरू रिसाउन सक्थे।

यसैले अरूको भनाइबाट जोगिई आफ्नो वचन पूरा गर्नका लागि श्रीकृष्णले सत्यभामालाई साथै लिई जानुभयो भनी हरिवंशमा बताइएको छ।

विष्णुपुराणमा श्रीकृष्णले सत्यभामालाई युद्धमा साथमा लिएर जानुमा अर्को कारण दिइएको छ। त्यो अर्को कारण चाहिँ पूर्वकल्पको घटनासँग सम्बन्धित छ। वराह अवतारको समयमा भगवान्को पृथिवीबाट एउटा पुत्र भएको थियो, त्यही पुत्र नै भौमासुर थियो। दुष्ट स्वभाव अनि अपरिमित पराक्रम भएकाले यसलाई भगवान्ले नै मार्नुहुन्छ भन्ने थाहा पाएकी पृथिवीले मातृवात्सल्यका कारण आफूले नभनेसम्म आफ्नो छोरोलाई नमार्न भनिन्। त्यही भूमिपुत्र भौमासुरलाई मार्न भूमिकै अवताररूपा सत्यभामाको अनुमति लिन उहाँले सत्यभामालाई साथमा नै लानुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे पारिजातहरणनरकवधो नामैकोनषष्टितमोऽध्यायः॥ ५९॥**

# अथ षष्टितमोऽध्यायः

## भगवान् श्रीकृष्ण र रुक्मिणीको संवाद

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**कर्हिचित् सुखमासीनं स्वतल्पस्थं जगद्गुरुम्।**
**पतिं पर्यचरद् भैष्मी व्यजनेन सखीजनैः॥ १॥**

**पदार्थ—**
**कर्हिचित्** = कुनै दिन
**सखीजनैः** = सखीहरूका साथमा रहेकी
**भैष्मी** = भीष्मककी पुत्री रुक्मिणी
**स्वतल्पस्थं** = आफ्नो पलङमा बस्नुभएका
**सुखं** = सुखपूर्वक
**आसीनं** = विश्राम गर्नुभएका
**जगद्गुरुम्** = जगत्का परमपिता
**पतिं** = पति श्रीकृष्णलाई
**व्यजनेन** = पङ्खाले हम्किएर
**पर्यचरत्** = सेवा गर्दै थिइन्

**वाक्यार्थ—** कुनै दिन जगत्का पिता भगवान् श्रीकृष्ण आफ्नो पलङमा आनन्दपूर्वक बसिरहनुभएको थियो। आफ्ना सखीहरूको साथमा रहेकी रुक्मिणी आफ्ना पतिदेव श्रीकृष्णलाई पङ्खा हम्किएर उहाँको सेवा गरिरहेकी थिइन्।

**यस्त्वेतल्लीलया विश्वं सृजत्यत्त्यवतीश्वरः।**
**स हि जातः स्वसेतूनां गोपीथाय यदुष्वजः॥ २॥**

**पदार्थ—**
**यः** = जुन
**ईश्वरः** = सर्वेश्वर श्रीकृष्णले
**लीलया** = लीलाद्वारा
**एतत्** = यो
**विश्वं** = जगत्
**सृजति** = सृजना गर्नुहुन्छ
**अत्ति** = संहार गर्नुहुन्छ
**अवति** = पालन गर्नुहुन्छ
**सः हि** = उनै
**अजः** = अजन्मा भगवान्
**स्वसेतूनां** = आफूले बनाएका धर्ममर्यादाहरूको
**गोपीथाय** = रक्षा गर्नका लागि
**यदुषु** = यदुकुलमा
**जातः** = उत्पन्न हुनुभयो

**वाक्यार्थ—** जुन सर्वेश्वर भगवान् श्रीकृष्णले विना कुनै श्रम सजिलै यो सम्पूर्ण जगत्को सृष्टि, पालन र लय गर्नुहुन्छ, त्यस्ता भगवान् स्वरूपतः जन्मरहित हुनुहुन्छ तापनि आफूले बनाएका धर्मका मर्यादाहरूको रक्षा गर्नका लागि उहाँ यदुकुलमा उत्पन्न हुनुभएको थियो।

**तस्मिन्नन्तर्गृहे भ्राजन्मुक्तादामविलम्बिना।**
**विराजिते वितानेन दीपैर्मणिमयैरपि॥ ३॥**

**मल्लिकादामभिः पुष्पैर्द्विरेफकुलनादितैः ।**
**जालरन्ध्रप्रविष्टैश्च गोभिश्चन्द्रमसोऽमलैः ॥ ४ ॥**
**पारिजातवनामोदवायुनोद्यानशालिना ।**
**धूपैरगुरुजै राजन् जालरन्ध्रविनिर्गतैः ॥ ५ ॥**
**पयःफेननिभे शुभ्रे पर्यङ्के कशिपूत्तमे ।**
**उपतस्थे सुखासीनं जगतामीश्वरं पतिम् ॥ ६ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**भ्राजन्मुक्तादामविलम्बिना** = मोतीका धागामा उनिएका गुच्छाले शोभायमान भएको
**वितानेन** = चँदुवाद्वारा
**मणिमयैः** = मणिले निर्मित
**दीपैः अपि** = दीपद्वारा पनि
**मल्लिकादामभिः** = बेलीका लहराहरूद्वारा
**द्विरेफकुलनादितैः** = भँवराका समूहहरूको गुञ्जनले युक्त
**पुष्पैः** = अन्य फूलहरूद्वारा
**जालरन्ध्रप्रविष्टैः** = आँखीझ्यालका छिद्रहरूबाट पसेका
**चन्द्रमसः** = चन्द्रमाका
**अमलैः** = स्वच्छ
**गोभिः च** = किरणहरूद्वारा पनि
**उद्यानशालिना** = उद्यानलाई शोभित गराउने
**पारिजातवनामोदवायुना** = पारिजातको वनको सुगन्धमय वायुद्वारा
**जालरन्ध्रविनिर्गतैः** = आँखीझ्यालको प्वालबाट बाहिर निस्किएका
**अगुरुजैः** = अगुरुद्वारा बनाइएको
**धूपैः** = अगरबत्तीको धुवाँद्वारा
**विराजिते** = सुशोभित
**तस्मिन्** = त्यो
**अन्तर्गृहे** = रुक्मिणीको अन्तःपुरमा (रहेको)
**पर्यङ्के** = पलङमाथि (राखिएको)
**पयःफेननिभे** = दुधको फिँज जस्तै कोमल
**शुभ्रे** = सेतो
**कशिपूत्तमे** = उत्तम शय्यामा
**सुखासीनं** = सुखपूर्वक विराजमान
**जगतां** = जगत्का
**ईश्वरं** = स्वामी
**पतिं** = पति श्रीकृष्णलाई
**उपतस्थे** = सेवा गर्दै थिइन्

**वाक्यार्थ–** हे राजा परीक्षित् ! रुक्मिणीको अन्तःपुरमा मोतीका धागामा उनिएका फूलका गुच्छाहरूले शोभायमान भएका चँदुवाहरू झुन्ड्याइएका थिए। मणिले बनेका दीपहरू प्रकाशमान देखिन्थे। बेलीका लहरा र अन्य फूलहरू ठाउँ-ठाउँमा फुलेका थिए। ती फूलहरूमा बसेका भँवराहरूको समूहको गुञ्जन ज्यादै मनमोहक थियो। आँखीझ्यालका स-साना प्वालहरूबाट महलभित्र चन्द्रमाका स्वच्छ किरणहरू प्रवेश गरिरहेका थिए। उद्यानलाई सुशोभित बनाइरहेको पारिजातको वनबाट बहेको सुगन्धी वायुले महललाई सुगन्धमय र शीतल बनाएको थियो। आँखीझ्यालका प्वालहरूबाट अगुरुले बनेको अगरबत्तीको धुँवा बाहिर निस्किरहेको देखिन्थ्यो। रुक्मिणीको यस्तो अति सुन्दर र भव्य महलमा दुधको फिँज जस्तो सेतो शय्या बिछ्याइएको पलङमा सम्पूर्ण जगत्का स्वामी भगवान् श्रीकृष्ण सुखपूर्वक विराजमान हुनुभएको थियो भने

रुक्मिणी आफ्ना पतिदेव भगवान् श्रीकृष्णको सेवा गर्दै थिइन्।

**वालव्यजनमादाय रत्नदण्डं सखीकरात्।**
**तेन वीजयती देवी उपासाञ्चक्र ईश्वरम्॥ ७॥**

**पदार्थ–**
**सखीकरात्** = सखीको हातबाट
**रत्नदण्डं** = रत्नको बिँड भएको
**वालव्यजनं** = चामर
**आदाय** = लिएर
**तेन** = त्यही चामरले
**वीजयती** = हम्किँदै
**देवी** = रुक्मिणी देवीले
**ईश्वरं** = जगत्पति श्रीकृष्णलाई
**उपासाञ्चक्रे** = सेवा गर्न लागिन्

**वाक्यार्थ–** भगवती रुक्मिणीले सखीको हातबाट रत्नको बिँड भएको चामर आफैँले लिइन् र त्यही चामरले हम्किँदै जगत्पति श्रीकृष्णको सेवा गर्न लागिन्।

**सोपाच्युतं क्वणयती मणिनूपुराभ्यां**
**रेजेऽङ्गुलीयवलयव्यजनाग्रहस्ता।**
**वस्त्रान्तगूढकुचकुङ्कुमशोणहार-**
**भासा नितम्बधृतया च परार्ध्यकाञ्च्या॥ ८॥**

**पदार्थ–**
**उपाच्युतं** = भगवान् श्रीकृष्णको नजिकमा बसेकी
**अङ्गुलीयवलयव्यजनाग्रहस्ता** = औँठी, चुरा र चमर हातमा लिएकी
**मणिनूपुराभ्यां** = चरणमा लगाएको मणिनिर्मित पाउजूद्वारा
**क्वणयती** = रुनरुन रुनरुन ध्वनि निकालिरहेकी
**वस्त्रान्तगूढकुचकुङ्कुमशोणहार-भासा** = सारीको आँचलले छोपेको स्तनमा लगाइएको कुङ्कुम (केशर)ले मन्द रातो भएको मुक्ताहारको कान्तिद्वारा
**नितम्बधृतया** = नितम्बमा धारण गरेको
**परार्ध्यकाञ्च्या च** = बहुमूल्य काञ्ची (कन्दनी)द्वारा पनि
**सा** = ती रुक्मिणी
**रेजे** = सुशोभित भएकी थिइन्

**वाक्यार्थ–** त्यस बखत भगवान्को नजिकै बसेकी रुक्मिणीले औँठी र चुराहरूले सुसज्जित हातमा चमर लिएकी थिइन्। उनले पाउमा लगाएका मणिनिर्मित पाउजुबाट रुनरुन-रुनरुन मधुर ध्वनि निस्किरहेको थियो। सारीको आँचलद्वारा छोपिएका उनका दुबै स्तनमा लेपन गरिएको कुङ्कुमको रातोपनले गलामा लगाइएको मुक्ताहारको कान्ति पनि मन्द रातो भएको थियो। नितम्ब भागमा लगाइएको बहुमूल्य काञ्चीद्वारा पनि ती रुक्मिणी अत्यन्त सुशोभित भएकी थिइन्।

**तां रूपिणीं श्रियमनन्यगतिं निरीक्ष्य**
**या लीलया धृततनोरनुरूपरूपा।**

**प्रीतः स्मयन्नलककुण्डलनिष्ककण्ठ-**
**वक्त्रोल्लसत्स्मितसुधां हरिराबभाषे ॥ ९॥**

**पदार्थ–**
**या** = जसले
**लीलया** = लीलाद्वारा
**धृततनोः** = मनुष्यको शरीर धारण गर्नुभएका भगवान्‌को
**अनुरूपरूपा** = योग्य रूप (शरीर) धारण गरेकी छन्
**तां** = त्यस्ती
**रूपिणीं** = मनुष्यरूप धारण गरेकी
**श्रियं** = लक्ष्मीलाई
**अनन्यगतिं** = आफूदेखि भिन्न आश्रय नभएकी
**अलककुण्डलनिष्ककण्ठवक्त्रोल्लसत्स्मितसुधां** = कपाल, कुण्डल, स्वर्णहार र सुन्दर घाँटीद्वारा सुशोभित अनुहारमा मुस्कानरूपी अमृत उल्लसित भएकी रुक्मिणीलाई
**निरीक्ष्य** = देखेर
**प्रीतः** = प्रसन्न हुनुभएका
**हरिः** = श्रीकृष्णले
**स्मयन्** = मुस्कुराउँदै
**आबभाषे** = भन्नुभयो

**वाक्यार्थ–** लीलाद्वारा मनुष्यको शरीर धारण गर्नुभएका भगवान्‌का लागि योग्य मनुष्यरूप धारण गरेकी लक्ष्मीलाई आफूदेखि भिन्न आश्रय नभएकी; कपाल, कुण्डल, स्वर्णहार र सुन्दर घाँटीद्वारा सुशोभित अनुहारमा मुस्कानरूपी अमृत उल्लसित भएकी रुक्मिणीको रूपमा देखेर प्रसन्न हुनुभएका भगवान् श्रीकृष्णले मुस्कुराउँदै भन्नुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्‌ले भन्नुभयो)

**राजपुत्रीप्सिता भूपैर्लोकपालविभूतिभिः।**
**महानुभावैः श्रीमद्भी रूपौदार्यबलोर्जितैः ॥ १० ॥**

**पदार्थ–**
**राजपुत्रि** = हे राजकुमारी
**लोकपालविभूतिभिः** = इन्द्र आदि लोकपालको जस्तै ऐश्वर्य भएका
**महानुभावैः** = ठुलो प्रभाव भएका
**श्रीमद्भिः** = अपार सम्पत्ति भएका
**रूपौदार्यबलोर्जितैः** = सौन्दर्य, उदारता र शक्तिले सम्पन्न
**भूपैः** = अनेक राजाहरूद्वारा
**ईप्सिता** = विवाहका लागि चाहना गरिएकी थियौ

**वाक्यार्थ–** हे राजकुमारी ! इन्द्र आदि लोकपालका समान ऐश्वर्य भएका अनि अपार सम्पत्ति, सौन्दर्य, उदारता र शक्तिले सम्पन्न भएका राजाहरू तिमीलाई विवाह गर्न चाहन्थे।

**तान् प्राप्तानर्थिनो हित्वा चैद्यादीन् स्मरदुर्मदान्।**
**दत्ता भ्रात्रा स्वपित्रा च कस्मान्नो ववृषेऽसमान्॥ ११ ॥**
**राजभ्यो बिभ्यतः सुभ्रूः समुद्रं शरणं गतान्।**
**बलवद्भिः कृतद्वेषान् प्रायस्त्यक्तनृपासनान्॥ १२ ॥**

**पदार्थ–**
**सुभ्रूः** = हे सुन्दर आँखीभौँ भएकी (सुन्दरी)
**भ्रात्रा** = दाइ रुक्मीद्वारा र
**स्वपित्रा च** = आफ्ना पिताजी विदर्भद्वारा पनि
**दत्ता** = दिइएकी
**अर्थिनः** = तिमीलाई माग्न
**प्राप्तान्** = आएका
**स्मरदुर्मदान्** = कामवासनाले उन्मत्त भएका
**तान्** = ती
**चैद्यादीन्** = शिशुपाल आदिलाई
**हित्वा** = त्यागेर
**असमान्** = बराबरी नहुने
**राजभ्यः** = जरासन्ध आदि राजाहरूबाट
**बिभ्यतः** = डराएका (त्यसैले)
**समुद्रं** = समुद्रको
**शरणं** = शरणमा
**गतान्** = गएका
**बलवद्भिः** = बलवान् पुरुषहरूसँग
**कृतद्वेषान्** = शत्रुता गरेका
**प्रायः** = प्रायः
**त्यक्तनृपासनान्** = राजसिंहासनबाट पनि वञ्चित भएका
**नः** = हामी (म)लाई
**कस्मात्** = किन
**ववृषे** = वरण गऱ्यौ

**वाक्यार्थ–** हे सुन्दरी ! तिम्रा पिता विदर्भ र दाइ रुक्मीले तिमीलाई शिशुपाललाई दिने वचन दिइसकेका थिए। शिशुपाल जस्ता वीरपुरुषहरू तिमीलाई माग्न आएका पनि थिए। त्यस्ता कामोन्मत्त वीरहरूलाई त्यागेर म जस्तो असमान (तिमी राजकुमारी, म गरिब वसुदेवको छोरो) हैसियत भएको व्यक्तिलाई किन पतिको रूपमा वरण गऱ्यौ ? अर्को कुरा, हामी जरासन्ध आदि राजाहरूबाट डराएर समुद्रको शरणमा आएका छौँ। हामीले बलशाली राजाहरूसँग शत्रुता गरेका छौँ। हामी प्रायः राजसिंहासनबाट पनि वञ्चित छौँ। यस्तो मलाई तिमीले किन वरण गऱ्यौ ?

**विवरण–** माथिका तीन श्लोकहरूमा भगवान्ले रुक्मिणीलाई शिशुपाल आदि वीरहरूलाई छाडी आफ्नो वरण गर्नु अयोग्य एवं अनुचित भएको बताउनुभएको छ। यहाँ सबभन्दा पहिले नै भगवान्ले रुक्मिणीलाई राजपुत्री ! अर्थात् हे राजाकी छोरी भनी सम्बोधन गर्नुभएको छ। यसबाट रुक्मिणीभित्र राजपुत्री हुनुको अभिमान रहेको थियो भन्ने थाहा हुन्छ। अनि सम्पूर्ण उपहासवचनहरू आफ्नी पत्नी रुक्मिणीको लागि भन्दा पनि राजाकी छोरी रुक्मिणीप्रति प्रयुक्त थिए भन्ने सूचित भएको छ। भगवान् जो सम्पूर्ण लोक–लोकान्तरका एक मात्र स्वामी हुनुहुन्छ, त्यस्ता सर्वव्यापक एवं सर्वसमर्थ परमात्माको सेवा गरिरहँदा पनि आफूलाई ठुलो ठान्ने अभिमानले युक्त हुनु राम्रो होइन। भगवान्लाई अभिमानी व्यक्ति मन पर्दैन, उहाँ आफू मान खोज्नुहुन्न र आफ्ना भक्तहरूलाई उहाँ आफ्नो भन्दा बढी मान दिनुहुन्छ। विष्णुसहस्रनाममा भगवान्का अनेक नामहरू बताउने क्रममा उहाँलाई **अमानी मानदो मान्यः** भनिएको छ। भगवान् आफू मान खोज्नुहुन्न, उहाँ भक्त एवं सत्पुरुषहरूलाई मान दिनुहुन्छ अनि यही कारणले उहाँ जगत्भरि मान्य हुनुभएको छ। सबैलाई मान दिने सद्गुण जसमा हुन्छ, त्यस व्यक्तिले आफ्नै गुणको गरिमाले सबैबाट सम्मान पाउँछ। यस्तो स्वभाव भएका भगवान्लाई प्रसन्न पार्न पनि भगवान्को स्वभावकै अनुसरण गर्नुपर्दछ।

अभिमान व्यष्टि भाव हो, यसले सर्वव्यापक आत्मचैतन्यलाई परिच्छिन्न पारिदिन्छ। शरीर, इन्द्रिय, आत्मा आदिमा गरिएको यही अभिमानको कारण आफू सर्वव्यापक चैतन्य भएर पनि

भक्तले कहिलेकाहीँ आफूलाई सीमित तत्त्वको रूपमा बोध गर्दछ। यहाँ भगवान्‌ले रुक्मिणीको अभिमानलाई नष्ट गर्न खोज्नुभएको छ। रुक्मिणीलाई भगवान्‌का अनेक पत्नीहरू भए पनि तिनीहरूमध्ये आफू नै सबैभन्दा विशेष भएको अभिमान थियो। आफूलाई शिशुपाल आदि अनेक वीरहरूले चाहँदा-चाहँदै पनि भगवान्‌ले आफूमाथि विशेष प्रेम देखाई स्वयं अपहरण गर्नुभएको हो भन्ने भाव उनमा थियो। ती सबै अभिमानका भावहरूलाई नष्ट गर्न भगवान्‌ले ती सबै प्रसङ्गहरू यहाँ उठाउनुभएको छ। पारिजात सत्यभामालाई दिँदा पनि नरिसाएकी प्रिय पत्नी रुक्मिणीका रोष वचनहरूको मधुरतालाई आस्वाद गर्ने उद्देश्यले भगवान्‌ले यो परिहास गर्नुभएको हो भन्ने भाव पनि यहाँ निस्कन्छ। भगवान्‌ले यहाँ आफूलाई असम अर्थात् बराबर नभएको भनी बताउनुभएको छ। कहाँ राजपुत्री तिमी अनि कहाँ राजगद्दीको अधिकारी नभएको म भनी यहाँ भिन्नता देखाइएको छ।

कतिपय भक्तहरूले भने भगवान्‌ले नै गर्नुभएको भए तापनि भगवान्‌को निन्दा अप्रामाणिक भएको भन्दै त्यसको स्तुतिपरक अर्थ निकालेका छन्। यहाँका सबै निन्दावचनहरूलाई स्तुतिपरक तात्पर्यमा अर्थ्याउन पनि सकिन्छ। यहाँ **असम** शब्दले सबै लोकका नित्य अधिपति भगवान्‌सँग केही प्रदेशका क्षणिक राजपरिवारको सम्बन्ध हुनु योग्य हुन सक्दैन भन्ने भाव निस्किएको छ। **राजभ्यो बिभ्यतः** अर्थात् राजाहरूबाट डराइरहेका भन्ने पदावलीमा पनि बिचमा खण्डाकारको पाठ गरी **राजभ्योऽबिभ्यतः** पढी राजाहरूबाट नडराउने भन्ने स्तुतिपरक अर्थ गरिएको छ। **त्यक्तनृपासन** शब्दको पनि स्तुतिपरक अर्थ रहेको पाइन्छ। सर्वलोकपति भएकाले नृपासन अनुपयुक्त हुने देखी भगवान्‌ले राजसिंहासन त्यागिदिनुभएको कुरा बताइएको छ।

**अस्पष्टवर्त्मनां पुंसामलोकपथमीयुषाम्।**
**आस्थिताः पदवीं सुभ्रूः प्रायः सीदन्ति योषितः॥ १३॥**

**पदार्थ–**
**सुभ्रूः** = हे सुन्दरी
**अस्पष्टवर्त्मनां** = आचार स्पष्ट नभएका
**अलोकपथं** = लोकातीत मार्गमा
**ईयुषां** = गएका
**पुंसां** = मजस्ता पुरुषहरूको
**पदवीं** = मार्गलाई
**आस्थिताः** = अनुसरण गर्ने
**योषितः** = नारीहरूले
**प्रायः** = धेरैजसो
**सीदन्ति** = दुःख पाउँछन्

**वाक्यार्थ–** हे सुन्दरी ! जसको आचार स्पष्ट छैन, जसको नैतिक व्यवहार लोकसम्मत छैन, त्यस्ता मजस्ता पुरुषहरूको मार्गलाई अनुसरण गर्ने नारीहरूले धेरैजसो दुःख पाउँछन्।

**निष्किञ्चना वयं शश्वन्निष्किञ्चनजनप्रियाः।**
**तस्मात् प्रायेण न ह्याढ्या मां भजन्ति सुमध्यमे॥ १४॥**

**पदार्थ–**
**सुमध्यमे** = हे सुन्दरी
**वयं** = हामी
**शश्वत्** = सधैँ
**निष्किञ्चनाः** = गरिब छौँ
**निष्किञ्चनजनप्रियाः** = गरिब

मान्छेहरूका लागि प्रिय छौँ
**तस्मात्** = त्यसैले
**प्रायेण** = प्रायः गरी
**आढ्याः** = धनीहरूले
**मां** = मलाई
**न हि भजन्ति** = सेवा गर्दैनन्

**वाक्यार्थ–** हे सुन्दरी ! हामीहरू सधैँ गरिब छौँ र गरिबहरूले नै हामीलाई मन पराउँछन्। त्यसैले धनीहरूले प्रायः मेरो सेवा गर्दैनन्।

**ययोरात्मसमं वित्तं जन्मैश्वर्याकृतिर्भवः।**
**तयोर्विवाहो मैत्री च नोत्तमाधमयोः क्वचित्॥ १५॥**

**पदार्थ–**
**ययोः** = ज-जसका
**वित्तं** = धन
**जन्म** = कुल
**ऐश्वरी** = ऐश्वर्य
**आकृतिः** = सौन्दर्य
**भवः** = समृद्धि
**आत्मसमं** = आफूसमान छ
**तयोः** = तिनीहरूको नै
**विवाहः** = विवाह र
**मैत्री च** = मित्रता (उपयुक्त) हुन्छ
**उत्तमाधमयोः** = आफूभन्दा श्रेष्ठ र अधमको
**क्वचित्** = कहिल्यै पनि
**न** = हुँदैन

**वाक्यार्थ–** ज-जसको धन, कुल, ऐश्वर्य र समृद्धि समान छ, तिनीहरूको नै परस्पर विवाह र मित्रता उपयुक्त हुन्छ। जो आफूभन्दा श्रेष्ठ वा अधम छ, त्यससँग विवाह र मित्रता दुबै राम्रो हुँदैन।

**वैदर्भ्येतदविज्ञाय त्वयादीर्घसमीक्षया।**
**वृता वयं गुणैर्हीना भिक्षुभिः श्लाघिता मुधा॥ १६॥**

**पदार्थ–**
**वैदर्भी** = हे विदर्भराजकुमारी
**एतत्** = यस्तो असमानतालाई
**अविज्ञाय** = विचार नगरेर
**अदीर्घसमीक्षया** = टाढासम्म विचार गर्न नसक्ने
**त्वया** = तिमीद्वारा
**गुणैः** = गुणहरूले
**हीनाः** = रहित
**भिक्षुभिः** = भिक्षुहरूद्वारा
**श्लाघिताः** = प्रशंसित
**वयं** = हामीहरू
**मुधा** = व्यर्थ
**वृताः** = वरण गरियौँ

**वाक्यार्थ–** हे विदर्भराजकुमारी ! तिमीमा दीर्घकालीन विचार पुगेन, त्यसैले हामीबिच रहेको त्यो असमानतालाई तिमीले ध्यान दिइनौ। भिक्षुहरूले गरेको मेरो नचाहिँदो प्रशंसा सुनेर तिमीले मजस्तो गुणहीनलाई व्यर्थै वरण गर्‍यौ।

**विवरण–** यस प्रसङ्गमा भगवान्ले आफ्नै निन्दा गर्नुभएको छ। भगवान्को महिमा अनन्त छ, उहाँका गुणहरू असङ्ख्य छन्। सर्वज्ञ एवं सर्वशक्तिमान् भए पनि आफ्नो महिमाको अन्त भने भगवान् पनि जान्नुहुन्न भन्ने भक्तहरूको भावना पाइन्छ। त्यसैले कुनै पनि अर्थमा भगवान्को निन्दा हुनै सक्दैन। परमात्माले आफैँले आफ्नै निन्दा गरिरहनुहोस्, तर पुण्य-पाप आदिले रहित भएकाले उहाँलाई त्यसबाट केही फरक पर्दैन, भक्तहरूलाई भने भगवान्को निन्दा असह्य हुन्छ।

यसैले यहाँ भगवान्‌द्वारा प्रयोग गरिएका सबै निन्दावचनहरूलाई टीकाकारहरूले स्तुतिपरक तात्पर्यमा अर्थ्याएका छन्। त्यसैले रुक्मिणीले पनि सबै भनाइहरूको स्तुतिपरक प्रत्युत्तर नै दिएको देखिन्छ।

**अथात्मनोऽनुरूपं वै भजस्व क्षत्रियर्षभम्।**
**येन त्वमाशिषः सत्या इहामुत्र च लप्स्यसे॥ १७॥**

**पदार्थ—**
**अथ** = अझै पनि
**येन** = जुन पुरुषको वरणद्वारा
**इह** = यो लोकमा
**अमुत्र च** = परलोकमा पनि
**त्वं** = तिमी
**सत्याः** = आफूद्वारा वाञ्छित
**आशिषः** = भोग्य विषयहरू
**लप्स्यसे** = प्राप्त गर्न सक्छ्यौ (त्यस्तो)
**आत्मनः** = आफ्नो
**अनुरूपं** = अनुरूप (समान योग्यता भएको)
**क्षत्रियर्षभं** = क्षेष्ठ क्षत्रियलाई
**वै** = निश्चय नै
**भजस्व** = वरण गर

**वाक्यार्थ—** अझै पनि केही बिग्रिएको छैन। तिमीले आफूसमान योग्यता भएको कुनै श्रेष्ठ क्षत्रियलाई वरण गर, जसबाट यो लोक र परलोकसम्बन्धी तिम्रा सम्पूर्ण कामनाहरूलाई प्राप्त गर्न सक्छ्यौ।

**चैद्यशाल्वजरासन्धदन्तवक्त्रादयो नृपाः।**
**मम द्विषन्ति वामोरु रुक्मी चापि तवाग्रजः॥ १८॥**

**पदार्थ—**
**वामोरु** = हे सुन्दरी (सुन्दर तिघ्रा भएकी)
**चैद्यशाल्वजरासन्धदन्त-वक्त्रादयः** = शिशुपाल, शाल्व, जरासन्ध, दन्तवक्र आदि
**नृपाः** = राजाहरू
**तव** = तिम्रो
**अग्रजः** = दाजु
**रुक्मी च अपि** = रुक्मी पनि
**मम** = मेरो
**द्विषन्ति** = द्वेष गर्दछन्

**वाक्यार्थ—** हे सुन्दरी! शिशुपाल, शाल्व, जरासन्ध, दन्तवक्त्र आदि राजाहरू र तिम्रो दाइ रुक्मीले पनि मेरो द्वेष गर्दछन्।

**तेषां वीर्यमदान्धानां दृप्तानां स्मयनुत्तये।**
**आनितासि मया भद्रे तेजोऽपहरतासताम्॥ १९॥**

**पदार्थ—**
**भद्रे** = हे कल्याणी
**वीर्यमदान्धानां** = बलले विवेकशून्य भएका
**दृप्तानां** = अहङ्कारी
**तेषां** = ती शिशुपाल आदिको
**स्मयनुत्तये** = अहङ्कारलाई विनाश गर्न
**असतां** = दुष्टहरूको
**तेजः** = शक्ति
**अपहरता** = हरण गर्ने
**मया** = मद्वारा
**आनिता** = हरण गरेर ल्याइएकी
**असि** = हौ

**वाक्यार्थ–** हे कल्याणी ! बलको अहङ्कारका कारण विवेकशून्य भएका शिशुपाल आदि राजाहरूको अहङ्कारलाई नष्ट गर्नका लागि मैले तिमीलाई हरण गरेर ल्याएको हुँ।

**उदासीना वयं नूनं न स्त्र्यपत्यार्थकामुकाः।**
**आत्मलब्ध्यास्महे पूर्णा गेहयोर्ज्योतिरक्रियाः॥ २०॥**

**पदार्थ–**
**वयं** = हामी
**उदासीनाः** = आसक्तिरहित छौँ
**गेहयोः** = शरीर र घरको
**ज्योतिः** = ज्योति रूँ
**अक्रियाः** = सम्पूर्ण विक्रियाले रहित
**आत्मलब्ध्या** = स्वात्मानन्दको अनुभवले
**पूर्णाः** = पूर्ण
**आस्महे** = छौँ (त्यसैले)
**नूनं** = निश्चय नै
**न स्त्र्यपत्यार्थकामुकाः** = स्त्री, पुत्र र धनको इच्छाले रहित छौँ

**वाक्यार्थ–** हामी आसक्तिरहित छौँ, शरीर र घरको सम्बन्ध नभएको ज्योति रूँ हामी स्वात्मानन्दको अनुभवले आफैँमा पूर्ण छौँ। त्यसैले हामीमा स्त्री, पुत्र र धन आदिको इच्छा कत्ति पनि छैन।

**विवरण–** यस प्रसङ्गमा रुक्मिणीमा रहेको अभिमानलाई भगवान्‌ले नष्ट गर्नुभएको देखाइएको छ। जगदीश्वर भगवान् श्रीकृष्ण आफ्नै आसनमा साथै रहनुभएकाले रुक्मिणीले आफूलाई ज्यादै भाग्यवती सम्झिन्। भावपूर्वक पतिसेवा गरिरहेको समयमा आफ्नो सौभाग्यको अनुभूतिले उनमा अभिमान जाग्यो। अनेकौँ पटरानीहरूमध्ये आफूलाई स्वयं भगवान्‌ले हरण गर्नुभएको कुरा अनि आफू पहिली र सबैभन्दा प्रिय रानी भएको कुरा सम्झिएर बसिरहँदा रुक्मिणीको मनमा भगवान्‌ले आफूलाई कहिल्यै पनि छोड्न सक्नुहुन्न भन्ने कल्पना आउन थाल्यो र उनको मन भगवान्‌को सेवामा भन्दा पनि आफ्नै अभिमानको तुष्टिमा लाग्यो। सर्वान्तर्यामी भगवान्‌ले यो कुरा थाहा पाउनुभयो र उहाँले रुक्मिणीलाई परिहास वचनद्वारा सम्झाउन खोज्नुभयो। ठ्याक्कै हेर्दा यहाँ श्रीकृष्णले आफ्नी अनुव्रता पत्नीलाई मर्मसम्म बिझ्ने तिखा वचनहरूको प्रयोग गर्नुभएको छ। सधैँ आफूलाई प्रेम गरिरहने पत्नीलाई कुनै अर्को व्यक्तिसँग विवाह गर भनी भगवान्‌द्वारा अत्यन्तै अनुचित शब्दको प्रयोग गरिएको देखिन्छ, तर यी परिहासवचनहरू रुक्मिणीका लागि नभई उनको अभिमानका लागि थिए। भगवत्सेवामा अभिमान सबैभन्दा बढी बाधक हुन्छ। यो भगवत्सेवाको अभिमान सांसारिक विषयको अभिमानभन्दा पनि खतरनाक हुन्छ। भगवत्सेवाको अभिमान गर्ने व्यक्तिको सम्पूर्ण परिश्रमले सेवा गर्दा पनि त्यसबाट भक्ति नभई अभिमान नै पुष्ट हुन्छ। यसरी व्यक्तिको सारा अध्यात्मसाधना व्यर्थ हुन्छ। सेवामा अभिमान गर्ने व्यक्ति साक्षात् भगवान् नै पनि आफ्नो नियन्त्रणमा रहनुहुन्छ भनी सोच्न थाल्छ, त्यसैले भक्तको अभिमान नष्ट गर्नु परम आवश्यक हुन्छ।

रुक्मिणीमा भगवान् श्रीकृष्णकी सबैभन्दा प्रिय पत्नी हुँ भन्ने अभिमान थियो। अभिमान कल्पित जीवभाव हो, जब व्यक्ति यसतिर दृष्टि दिन थाल्दछ तब ऊ साँचो परमात्मस्वरूपबाट विमुख बन्दछ। रुक्मिणीको अभिमान संसारका विषयलाई लिएर थिएन अपि तु भगवान्‌लाई

लिएर थियो। त्यसैले त्यसको नाश पनि भगवान्द्वारा नै हुनु आवश्यक थियो। यही भएर उनको मनमा बिझ्ने गरी भगवान्ले वचनहरूको प्रयोग गर्नुभयो। आफूले रुक्मिणीलाई खासै मन नपराएको भनाइ भगवान्बाट सुनिसकेपछि रुक्मिणीले भगवान्को सबैभन्दा प्रिय मै हुँ भनी गरेको अभिमान पूर्णतः नष्ट भयो।

रुक्मिणी मायाकी स्वरूप हुन्। भगवान्को नित्य शक्तिरूप भए तापनि सम्पूर्ण संसारदोषको कारण हुनाले त्यसमा दोषको सम्बन्ध रहिरहन्छ। दोष दुई प्रकारका हुन्छन्, एउटा स्वाभाविक र अर्को सांसर्गिक। स्वाभाविक र सांसर्गिक दोषको निराकरण गरेपछि मात्र त्यो वस्तु शुद्ध हुन्छ। यहाँ पनि रुक्मिणीमा सहज रूपले रहेको आन्तरिक अभिमानरूप दोष अनि रुक्मी आदिसँगको सम्बन्धका कारणले आएको सांसर्गिक दोष दुबैको निवृत्ति देखाइएको छ। सहज दोष हटाउन ज्ञानरूप भगवान् श्रीकृष्णले उपदेश गर्नुभएको छ भने सांसर्गिक दोष हटाउन आत्मबलरूपी बलदेवले। यसरी ६० औँ अनि एकसट्ठीऔँ अध्यायमा क्रमशः रुक्मिणीको अभिमानभङ्ग अनि रुक्मीमृत्युको प्रसङ्ग बताई मायाका आन्तर र बाह्य दुबै प्रकारका दोषको निवारण गरिएको देखाइएको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एतावदुक्त्वा भगवानात्मानं वल्लभामिव।**
**मन्यमानामविश्लेषात् तद्दर्पघ्न उपारमत्॥ २१॥**

**पदार्थ—**
**अविश्लेषात्** = सधैँ अभिन्नरूपमा रहेका कारण
**आत्मानं** = आफैँलाई नै
**वल्लभाम् इव** = अरू पत्नीहरूको अपेक्षा सबैभन्दा प्यारी झैँ
**मन्यमानां** = ठानेकी रुक्मिणीलाई
**तद्दर्पघ्नः** = त्यो अभिमानलाई नष्ट गर्ने
**भगवान्** = भगवान् श्रीकृष्ण
**एतावत्** = यति कुरा
**उक्त्वा** = भनेर
**उपारमत्** = चुप लाग्नुभयो

**वाक्यार्थ—** रुक्मिणी सधैँ भगवान् श्रीकृष्णकै निकट बस्ने र हत्तपत्त भिन्न नहुने भएकाले उहाँमा 'म नै अरू पत्नीहरूको अपेक्षा सबैभन्दा प्यारी पत्नी हुँ' भन्ने घमन्ड थियो। रुक्मिणीको त्यो घमन्डलाई नष्ट गर्न भगवान्ले पूर्वोक्त कुराहरू भन्नुभयो र चुप लाग्नुभयो।

**इति त्रिलोकेशपतेस्तदात्मनः प्रियस्य देव्यश्रुतपूर्वमप्रियम्।**
**आश्रुत्य भीता हृदि जातवेपथुश्चिन्तां दुरन्तां रुदती जगाम ह॥ २२॥**

**पदार्थ—**
**त्रिलोकेशपतेः** = तीनै लोकका स्वामी ब्रह्मा आदि देवताका पनि पालक
**आत्मनः** = आफ्ना
**प्रियस्य** = प्रिय श्रीकृष्णको
**इति** = यस्तो
**अश्रुतपूर्वम्** = पहिले कहिल्यै नसुनिएको
**तत्** = त्यो
**अप्रियं** = अप्रिय वचन
**आश्रुत्य** = सुनेर

**भीता** = (त्यागको सम्भावनाले) डराएकी
**हृदि** = हृदयमा
**जातवेपथुः** = कम्पन पैदा भएकी
**रुदती** = रुँदै गरेकी
**देवी** = देवी रुक्मिणी
**दुरन्तां** = अपार
**चिन्तां** = चिन्तामा
**जगाम ह** = प्राप्त हुनुभयो

**वाक्यार्थ–** देवी रुक्मिणी तीनै लोकका मालिक ब्रह्मा आदि देवताहरूका पनि पालक आफ्ना प्राणप्रिय पतिदेव श्रीकृष्णको पहिले कहिल्यै नसुनिएको अप्रिय वचन सुन्दा 'भगवान्ले मलाई त्याग गर्नुहुन्छ कि भनेर अत्यन्त डराइन्। डराएर काँप्न थालिन् अनि अपार चिन्तामा डुब्दै उनी रुन थालिन्।

**पदा सुजातेन नखारुणश्रिया भुवं लिखन्त्यश्रुभिरञ्जनासितैः।**
**आसिञ्चती कुङ्कुमरूषितौ स्तनौ तस्थावधोमुख्यतिदुःखरुद्धवाक्॥ २३॥**

**पदार्थ–**
**नखारुणश्रिया** = नङको रक्तिम कान्तिले युक्त
**सुजातेन** = सुकोमल
**पदा** = गोडाको औँलाले
**भुवं** = भुइँ
**लिखन्ति** = कोट्याउँदै रहेकी
**अञ्जनासितैः** = गाजल लत्पतिएर कालो भएको
**अश्रुभिः** = आँसुद्वारा
**कुङ्कुमरूषितौ** = कुङ्कुमले अलङ्कृत
**स्तनौ** = स्तनलाई
**आसिञ्चती** = भिजाएकी
**अतिदुःखरुद्धवाक्** = अत्यन्त दुःखले वाणी रोकिएकी रुक्मिणी
**अधोमुखी** = उँधोमुख गरेर
**तस्थौ** = बसिन्

**वाक्यार्थ–** रुक्मिणी आफ्ना नङ्का रक्तिम कान्तिद्वारा युक्त रातो-रातो अत्यन्त कोमल गोडाका औँलाले भुइँ कोट्याउन लागिन्। रुँदा-रुँदा आँखाको गाजल लत्पतिएको आँसुले कुङ्कुमद्वारा अलङ्कृत उनका स्तनहरू भिजिसकेका थिए। अत्यन्त दुःखले वाणी अवरुद्ध भएकी रुक्मिणी उँधोमुख लगाएर बसिरहिन्।

**तस्याः सुदुःखभयशोकविनष्टबुद्धे-**
**र्हस्ताच्छ्लथद्वलयतो व्यजनं पपात।**
**देहश्च विक्लवधियः सहसैव मुह्यन्**
**रम्भेव वायुविहता प्रविकीर्य केशान्॥ २४॥**

**पदार्थ–**
**सुदुःखभयशोकविनष्टबुद्धेः** = अत्यन्त दुःख, भय र शोकका कारण विवेकशक्ति नष्ट भएकी
**विक्लवधियः** = बुद्धि व्याकुल भएकी
**तस्याः** = ती रुक्मिणीको
**श्लथद्वलयतः** = लत्रिनाले चुरा झरेको
**हस्तात्** = हातबाट
**व्यजनं** = पङ्खा
**पपात** = खस्यो
**देहः च** = शरीर पनि
**सहसा एव** = अचानक नै
**मुह्यन्** = मूर्च्छित भई

**केशान्** = कपाल
**प्रविकीर्य** = छरिएर
**वायुविहता** = हुरीद्वारा उखेलिएको
**रम्भा इव** = केरा झैँ (भुइँमा ढलिन्)

**वाक्यार्थ–** अत्यन्त दुःख, भय र शोकका कारण विवेकशक्ति नष्ट भई व्याकुल भएकी रुक्मिणीका हात लत्रिए र ती हातबाट चुरा झरे। उनले डोलाइरहेको पङ्खा खस्यो। उनी अचानक मूर्च्छित भइन् र केश फिँजार्दै हुरीद्वारा उखेलिएको केराको खम्बा झैँ भुइँमा लडिन्।

**तद् दृष्ट्वा भगवान् कृष्णः प्रियायाः प्रेमबन्धनम्।**
**हास्यप्रौढिमजानन्त्याः करुणः सोऽन्वकम्पत॥ २५॥**

**पदार्थ–**
**सः** = ती
**करुणः** = दयालु
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्ण
**हास्यप्रौढिम्** = हास्यको गम्भीरतालाई
**अजानन्त्याः** = नजानेकी
**प्रियायाः** = प्रिया रुक्मिणीको
**तत्** = त्यो
**प्रेमबन्धनं** = प्रेमको बन्धनलाई
**दृष्ट्वा** = देखेर
**अन्वकम्पत** = कृपायुक्त हुनुभयो

**वाक्यार्थ–** हास्यको गम्भीरतालाई बुझ्न नसकेकी रुक्मिणीको त्यो प्रेमबन्धनलाई देखेर भगवान् श्रीकृष्ण कृपायुक्त हुनुभयो।

**पर्यङ्कादवरुह्याशु तामुत्थाप्य चतुर्भुजः।**
**केशान् समुह्य तद्वक्त्रं प्रामृजत् पद्मपाणिना॥ २६॥**

**पदार्थ–**
**चतुर्भुजः** = चार ओटा हात भएका भगवान् श्रीकृष्णले
**आशु** = हतार-हतार
**पर्यङ्कात्** = पलङबाट
**अवरुह्य** = ओर्लिएर
**ताम्** = ती भुइँमा लडेकी रुक्मिणीलाई
**उत्थाप्य** = उठाएर
**केशान्** = केशहरूलाई
**समुह्य** = समालिदिएर
**पद्मपाणिना** = कमल झैँ कोमल हातद्वारा
**तद्वक्त्रं** = उनको मुख
**प्रामृजत्** = पुछिदिनुभयो

**वाक्यार्थ–** चतुर्भुज भगवान् श्रीकृष्णले हतार-हतार पलङबाट ओर्लिएर भुइँमा लडेकी रुक्मिणीलाई उठाएर आफ्नो काखमा राख्नुभयो अनि रुक्मिणीको छिरलिएको केशलाई समालिदिएर कमल झैँ कोमल हातले उनको मुख पुछिदिनुभयो।

**प्रमृज्याश्रुकले नेत्रे स्तनौ चोपहतौ शुचा।**
**आश्लिष्य बाहुना राजन्ननन्यविषयां सतीम्॥ २७॥**
**सान्त्वयामास सान्त्वज्ञः कृपया कृपणां प्रभुः।**
**हास्यप्रौढिभ्रमच्चित्तामतदर्हां सतां गतिः॥ २८॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**सान्त्वज्ञः** = सान्त्वनाको उपाय जान्ने
**सतां** = सज्जनहरूको
**गतिः** = आश्रय
**प्रभुः** = भगवान् श्रीकृष्णले
**अश्रुकले** = आँसुका धारा भएका
**नेत्रे** = आँखा (तथा)
**शुचा** = शोकजन्य आँसुद्वारा
**उपहतौ** = भिजेका
**स्तनौ च** = स्तनलाई पनि
**प्रमृज्य** = पुछेर
**बाहुना** = बाहुद्वारा
**आश्लिष्य** = आलिङ्गन गरेर
**अनन्यविषयां** = आफू नै एक मात्र विषय भएकी
**कृपणां** = दुःखी
**अतदर्हां** = दुःखित गराउन अयोग्य
**हास्यप्रौढिभ्रमच्चित्तां** = हास्यको गम्भीरताले भ्रमित चित्त भएकी
**सतीम्** = सती रुक्मिणीलाई
**कृपया** = कृपापूर्वक
**सान्त्वयामास** = सम्झाउनुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! सान्त्वनाको उपायलाई जान्ने र सज्जनहरूका परम आश्रय हुनुभएका भगवान् श्रीकृष्णले सती रुक्मिणीको आँसुले भिजेका आँखा र शोकजन्य आँसुले भिजेका स्तनलाई पुछिदिनुभयो र उनलाई अङ्कमाल गर्नुभयो। आफूलाई नै एक मात्र आश्रय मानेकी रुक्मिणी आफ्ना वचनका कारण दुःखी भएकी देखेर सान्त्वना दिन सिपालु भगवान् श्रीकृष्णले सम्झाइ-बुझाइ गर्न थाल्नुभयो। किनभने हास्यको गम्भीरताले भ्रमित बुद्धि भएकी रुक्मिणी दुःखित गराउन योग्य थिइनन्।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**मा मा वैदर्भ्यसूयेथा जाने त्वां मत्परायणाम्।**
**त्वद्वचः श्रोतुकामेन क्ष्वेल्याचरितमङ्गने ॥ २९॥**

**पदार्थ–**
**वैदर्भि** = हे विदर्भराजकुमारी
**मा** = मलाई
**मा असूयेथाः** = दोषी नठान (मसँग नरिसाऊ)
**मत्परायणां** = म नै परम आश्रय भएकी
**त्वां** = तिमीलाई
**जाने** = जान्दछु
**अङ्गने** = हे सुन्दरी
**त्वद्वचः** = तिम्रा वाणीहरू
**श्रोतुकामेन** = सुन्न चाहने मद्वारा
**क्ष्वेल्या** = ख्यालठट्टा गर्दै
**आचरितम्** = यसो गरियो (यी कुराहरू भनिए)

**वाक्यार्थ–** हे विदर्भराजकुमारी ! मसँग नरिसाऊ, तिमीले मलाई नै परम आश्रय मानेकी छ्यौ भन्ने मलाई थाहा छ। हे सुन्दरी ! तिम्रा मधुर वाणीहरू सुन्ने इच्छाले मैले केवल ख्यालठट्टा गर्दै उक्त वचनहरू बोलेको हुँ।

**मुखं च प्रेमसंरम्भस्फुरिताधरमीक्षितुम्।**
**कटाक्षेपारुणापाङ्गं सुन्दरभ्रुकुटीतटम् ॥ ३० ॥**

**पदार्थ–**
**प्रेमसंरम्भस्फुरिताधरं** = प्रणय-कोपका कारण थर्थराएको

अधर भएको
**कटाक्षेपारुणापाङ्गं** = कटाक्षको आक्षेपद्वारा आँखाको भाग राता भएको
**सुन्दरभ्रुकुटीतटं** = सुन्दर परेली भएको
**मुखं च** = अनुहार
**ईक्षितुम्** = हेर्न (मैले त्यसो भनेको हुँ)

**वाक्यार्थ–** प्रणयकोपका कारण तिम्रो ओठ कसरी काँप्छ, कटाक्षपूर्ण हेराइका कारण राता भएका तिम्रा आँखाको वरिपरिको भाग कस्तो देखिन्छ, अनि सुन्दर परेलीहरूले शोभित तिम्रो अनुहार कस्तो देखिन्छ भनेर हेर्नका लागि मैले त्यसो भनेको हुँ।

**अयं हि परमो लाभो गृहेषु गृहमेधिनाम्।**
**यन्नर्मैर्नीयते यामः प्रियया भीरु भामिनि॥ ३१॥**

**पदार्थ–**
**भीरु** = हे डराउने स्वभाव भएकी
**भामिनि** = सुन्दरी
**यत्** = जुन
**प्रियया** = प्रियासँग गरिने
**नर्मैः** = परिहासवचनद्वारा
**यामः** = काल
**नीयते** = व्यतीत गरिन्छ
**अयं हि** = यो नै
**गृहेषु** = गार्हस्थ्यमा (रहने)
**गृहमेधिनां** = गृहस्थहरूको
**परमः** = सर्वोत्कृष्ट
**लाभः** = सुखरूप फल हो

**वाक्यार्थ–** डराउने स्वभाव भएकी हे सुन्दरी ! गृहस्थहरूको परम सुखजनक फल (लाभ) भनेको यही हो जो यहाँ आफ्नी प्रिय पत्नीसँग परिहासपूर्ण वचनहरू बोलेर सुखपूर्वक समय बिताउन पाइन्छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**सैवं भगवता राजन् वैदर्भी परिसान्त्विता।**
**ज्ञात्वा तत्परिहासोक्तिं प्रियत्यागभयं जहौ॥ ३२॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**सा** = ती
**वैदर्भी** = रुक्मिणीले
**भगवता** = भगवान्द्वारा
**एवं** = यसरी
**परिसान्त्विता** = आश्वस्त भई
**तत्परिहासोक्तिं** = उहाँको ख्यालठट्टाको तात्पर्यलाई
**ज्ञात्वा** = जानेर
**प्रियत्यागभयं** = प्रिय श्रीकृष्णले त्याग्नुहोला कि भन्ने भयलाई
**जहौ** = त्यागिन्

**वाक्यार्थ–** हे राजा परीक्षित् ! भगवान्ले यसरी सम्झाइबुझाइ गरेर सान्त्वना दिएपछि आश्वस्त भएकी रुक्मिणीले भगवान्का ती कुराहरू ख्यालठट्टा मात्र हुन् भन्ने बुझिन् र प्रिय श्रीकृष्णले त्याग्नुहोला कि भन्ने उनको भय पनि हरायो।

**बभाष ऋषभं पुंसां वीक्षन्ती भगवन्मुखम्।**
**सव्रीडहासरुचिरस्निग्धापाङ्गेन भारत॥ ३३॥**

**पदार्थ–**
**भारत** = हे भरतवंशी परीक्षित्
**सव्रीडहासरुचिरस्निग्धापाङ्गेन** = लज्जाले युक्त हाँसोले सुन्दर देखिएको प्रेमपूर्ण कर्के आँखाले
**भगवन्मुखं** = भगवान्को मुखारविन्दलाई
**वीक्षन्ती** = हेरिरहेकी रुक्मिणीले
**पुंसां** = पुरुषहरूमा
**ऋषभं** = श्रेष्ठ श्रीकृष्णलाई
**बभाष** = भनिन्

**वाक्यार्थ–** हे भरतवंशी परीक्षित् ! रुक्मिणीले लज्जाले सहित भएको हाँसोले सुन्दर देखिएको प्रेमपूर्ण कर्के नजरले पुरुषोत्तम भगवान् श्रीकृष्णलाई हेर्दै भनिन्।

**रुक्मिण्युवाच** (रुक्मिणीले भनिन्)

**नन्वेवमेतदरविन्दविलोचनाह**
**यद् वै भवान् भगवतोऽसदृशी विभूम्नः।**
**क्व स्वे महिम्न्यभिरतो भगवांस्त्र्यधीशः**
**क्वाहं गुणप्रकृतिरज्ञगृहीतपादा ॥ ३४ ॥**

**पदार्थ–**
**अरविन्दविलोचन** = हे कमलनयन
**विभूम्नः** = अनन्त गुणहरूले परिपूर्ण
**भगवतः** = सम्पूर्ण ज्ञान र ऐश्वर्य आदिले पूर्ण हजुरको
**असदृशी** = असमान भएकी (भनेर)
**भवान्** = हजुरले
**यत्** = जुन
**आह** = भन्नुभयो
**ननु** = निश्चय नै
**एतत् वै** = त्यो कुरा यथार्थ हो (किनभने)
**स्वे** = आफ्नो असाधारण
**महिम्नि** = अखण्ड आनन्द स्वरूपमा
**अभिरतः** = स्थित
**त्र्यधीशः** = त्रिगुण तथा ब्रह्मा आदि त्रिदेवका नियन्ता
**भगवान्** = भगवान् हजुर
**क्व** = कहाँ
**अज्ञगृहीतपादा** = अज्ञानी (काम्य कर्म गर्ने पुरुष)हरूद्वारा सेवित भएकी
**गुणप्रकृतिः** = त्रिगुण नै स्वरूप भएकी
**अहं** = म रुक्मिणी
**क्व** = कहाँ

**वाक्यार्थ–** हे कमलनयन ! हजुरले हामीबिच भएको असमानताको जुन कुरा गर्नुभयो, त्यो ठिक हो। किनभने हजुर अनन्त गुण र समग्र ज्ञान, ऐश्वर्य आदिले परिपूर्ण हुनुहुन्छ। यस्तो वास्तविकता हुँदाहुँदै म हजुरको योग्य (समान) कसरी हुन सक्छु ? आफ्नो असाधारण अखण्ड आनन्दमा रहनुभएका तथा सत्त्व आदि त्रिगुण र ब्रह्मा आदि त्रिदेवका नियन्ता हजुर कहाँ र काम्य कर्म गर्ने अज्ञानी पुरुषहरूद्वारा सेवित त्रिगुणात्मक स्वरूप भएकी म कहाँ ? (अतः हजुरको र मेरो समानता हुनै सक्दैन)।

**सत्यं भयादिव गुणेभ्य उरुक्रमान्तः**
**शेते समुद्र उपलम्भनमात्र आत्मा।**

नित्यं कदिन्द्रियगणैः कृतविग्रहस्त्वं
त्वत्सेवकैर्नृपपदं विधुतं तमोऽन्धम् ॥ ३५ ॥

**पदार्थ–**
**उरुक्रम** = हे महान् पराक्रमशाली भगवान्
**गुणेभ्यः** = गुणका कार्यभूत शब्द आदि राजाहरूबाट
**भयात् इव** = डराए झैँ गरी
**समुद्रे** = समुद्र झैँ अगाध
**अन्तः** = अन्तःकरणमा
**उपलम्भनमात्रः** = केवल ज्ञानरूप
**आत्मा** = आत्मा (हजुर)
**शेते** = निश्चल भएर रहनुहुन्छ
**सत्यं** = यो ठिक (सत्य) हो
**कदिन्द्रियगणैः** = दुष्ट (बहिर्मुख) इन्द्रियहरूसँग
**त्वं** = हजुरले
**नित्यं** = सधैँ
**कृतविग्रहः** = शत्रुता गर्नुभएको छ
**अन्धं** = गाढ
**तमः** = अज्ञानान्धकारको हेतु
**नृपपदं** = राजसिंहासन
**त्वत्सेवकैः** = हजुरकै सेवक प्रियव्रत आदिले (समेत)
**विधुतम्** = त्यागेका छन् (हजुरको त के कुरा)

**वाक्यार्थ–** हे महान् पराक्रमशाली भगवान् ! हजुरले ठिकै भन्नुभयो कि हजुर राजाहरूबाट डराएर समुद्रमा लुक्नुभएको छ, तर राजा भनेका त गुणका कार्यभूत शब्द आदि विषय हुन् र यिनीहरूबाट डराए झैँ गरी भक्तहरूको अगाध अन्तःकरणरूप समुद्रमा केवल चैतन्यरूप आत्मरूपमा हजुर रहनुहुन्छ। हजुरले बहिर्मुखी इन्द्रियरूप खराब राजाहरूसँग सधैँ शत्रुता गर्नुभएको कुरा पनि सत्य नै हो। हजुर राजसिंहासनले रहित हुनुहुन्छ भन्ने कुरामा पनि कुनै सन्देह छैन किनभने राजसिंहासन अज्ञानरूपी अन्धकारको हेतु हो, त्यसलाई हजुरकै भक्त प्रियव्रत आदिले त त्यागेका थिए भने हजुरलाई त्यसको आवश्यकता नै किन रह्यो र ?

**विवरण–** यी माथिका दुई श्लोकमा शिशुपाल आदि वीरहरूलाई छाडी भगुवा एवं अयोग्य मलाई किन वरण गर्‍यौ त भनी भगवान्‌ले गर्नुभएको प्रश्नको रुक्मिणीले उत्तर दिएकी छिन्। रुक्मिणी भन्छिन्– हजुरले आफूलाई असमान भनी बताउनुभएको ठिकै हो, किनभने हामीसँग हजुरको समता हुन सक्दैन। भगवान् सम्पूर्ण जगत्‌का एक मात्र प्रतिष्ठा या आधार हुनुहुन्छ अनि भगवान्‌को चाहिँ अर्को कुनै आधार छैन। यस्ता **त्र्यधीशः** अर्थात् तीनै लोकका मालिक परमात्मा कहाँ, अनि **अज्ञगृहीतपादा** अर्थात् अज्ञानीहरूद्वारा मात्र अनुसरण गरिने त्रिगुणात्मिका प्रकृति म कहाँ। यसैले हामी दुईबिचको सम्बन्ध नमिलेकै हो भनी रुक्मिणीले समर्थन गर्नुभएको छ। राजाहरूबाट डराई समुद्रको शरणमा लुक्न गएका भगुवा मलाई किन वरण गर्‍यौ भन्ने हजुरको प्रश्न पनि ठिकै हो। किनभने हजुर तीन गुणहरूको खलबलको भयले भित्री अन्तःकरणरूपी समुद्रमा लुक्दै केवल ज्ञानस्वरूप बनेर त्यहाँ रहिरहनुभएको छ। भगवान्‌ले बलवान्‌हरूसँग आफ्नो शत्रुता भएको र आफूहरू राजसिंहासनको अनधिकारी भएको बताउनुभएको थियो। यसको उत्तरमा रुक्मिणीले बलवान् शब्दको अर्थ निन्दित बल भएका इन्द्रियहरू भन्ने गरेकी छिन्। **बल** शब्दमा **मतुप्** प्रत्यय लाग्दा **बलवान्** शब्द बन्दछ, मतुप्‌का तीन अर्थ हुन्छन्, **भूम-निन्दा-प्रशंसा** अर्थात् धेरै, निन्दा र प्रशंसा। यहाँ निन्दा अर्थमा मतुप् प्रत्ययको प्रयोग गरिएको छ भन्ने

रुक्मिणीको भनाइको तात्पर्य हो। यसको अर्थ दुष्ट बल भएका इन्द्रियहरूसँग भगवान्‌को शत्रुता छ भन्ने हुन्छ। बहिर्मुखी इन्द्रियहरूले अन्तर्यामी परमात्मालाई भेट्टाउन सक्दैनन्। यही विरोधी स्वभाव हुनु नै यी दुईबिचको शत्रुता हुनु हो। परस्पर स्वभावमा विरोध भएकैले परमात्मा इन्द्रियद्वारा प्राप्य हुनुहुन्न। त्यसैले उहाँलाई **अधोक्षज** भनिएको छ। भगवान् राजसिंहासनका लागि अयोग्य हुनुहुन्छ भन्ने पनि ठिक नै हो किनभने भगवान्‌का चरणसेवकहरूले पनि अन्धकारमय राजसिंहासनलाई सजिलै त्यागिदिन्छन्। उनीहरूले त्यसलाई अनर्थरूप मानी केवल भगवान्‌को मात्र भजन गरिरहन्छन् भने स्वयं भगवान्‌ले राजसिंहासनमा बस्न आवश्यक एवं योग्य पनि छैन। यसरी भगवान्‌का परिहासवचनहरूलाई रुक्मिणीले स्तुतिरूपमा अर्थ्याएकी छिन्।

**त्वत्पादपद्‌ममकरन्दजुषां मुनीनां**
**वर्त्मास्फुटं नृपशुभिर्ननु दुर्विभाव्यम्।**
**यस्मादलौकिकमिवेहितमीश्वरस्य**
**भूमंस्तवेहितमथो अनु ये भवन्तम्॥ ३६॥**

| पदार्थ– | **मुनीनां** = त्यस्ता भक्तजनहरूको | **दुर्विभाव्यं** = अनुमान गर्न कठिन हुन्छ |
|---|---|---|
| **यस्मात्** = किनभने | **वर्त्म** = मार्ग | **अथो** = त्यसैले |
| **ये** = जुन भक्तहरूले | **अस्फुटं** = अस्पष्ट छ र | **भूमन्** = हे सर्वव्यापक अनन्त |
| **भवन्तं** = हजुरलाई | **ईहितं** = चेष्टा पनि | **ईश्वरस्य** = सर्वेश्वर |
| **अनु** = सेवा गर्दछन् | **अलौकिकं इव** = अलौकिक झैं हुन्छ | **तव** = हजुरको |
| **त्वत्पादपद्‌ममकरन्दजुषां** = हजुरको चरणकमलको परमानन्ददायक रसविशेषको सेवन गर्ने | **ननु** = निश्चय नै | **ईहितं** = मार्ग र चेष्टा असाधारण छ भन्नुमा के आश्चर्य |
| | **नृपशुभिः** = पशुतुल्य अविवेकी व्यक्तिहरूद्वारा | |

**वाक्यार्थ–** (हजुरले भन्नुभएको थियो, 'हाम्रो मार्ग स्पष्ट छैन र साधारण मनुष्यको जस्तो आचरण पनि छैन' यो कुरा पनि सत्य हो।) किनभने सधैँ हजुरको सेवा गर्ने ऋषिमुनि आदिले हजुरको चरणकमलको परमानन्दात्मक रसविशेषको पान गरेका छन्, त्यस्ता भक्तहरूको मार्ग अस्पष्ट र चेष्टा (आचरण) अलौकिक हुन्छ। त्यसैले सामान्य व्यक्तिले हजुरका ती भक्तहरूको मार्ग र चेष्टालाई त बुझ्न सक्दैनन् भने हे सर्वव्यापक अनन्त ! त्यस्ता पशुतुल्य अविवेकी व्यक्तिहरूले सर्वेश्वर सर्वशक्तिमान् हजुरको मार्ग र चेष्टालाई कसरी बुझ्न सकून् ?

**निष्किञ्चनो ननु भवान् न यतोऽस्ति किञ्चिद्**
**यस्मै बलिं बलिभुजोऽपि हरन्त्यजाद्याः।**

न त्वा विदन्त्यसुतृपोऽन्तकमाढ्यतान्धाः
प्रेष्ठो भवान् बलिभुजामपि तेऽपि तुभ्यम् ॥ ३७ ॥

**पदार्थ–**
**ननु** = फेरि
**यतः** = जसबाट
**किञ्चिद्** = केही पनि (दुर्लभ)
**न अस्ति** = छैन (त्यस्ता)
**निष्किञ्चनः** = अकिञ्चन
**भवान्** = हजुर हुनुहुन्छ
**बलिभुजः** = अरूले गरेको पूजालाई स्वीकार गर्ने
**अजाद्याः अपि** = ब्रह्मा आदि देवताहरू पनि
**यस्मै** = जुन हजुरलाई
**बलिं** = पूजा
**हरन्ति** = समर्पण गर्दछन् (त्यस्ता हजुरमा दरिद्रता कसरी रहोस्)
**बलिभुजां अपि** = लोकेश्वर ब्रह्मा आदि देवताहरूको पनि
**भवान्** = हजुर नै
**प्रेष्ठः** = प्रिय हुनुहुन्छ
**तुभ्यं** = हजुरको
**आढ्यतान्धाः** = धनाढ्यताको अभिमानले विवेकशून्य भई अन्धो भएका
**असुतृपः** = इन्द्रियहरूलाई मात्रै तृप्त गराउने
**ते अपि** = ती धनाढ्यहरूले पनि
**अन्तकं** = कालरूप
**त्वा** = हजुरलाई
**न विदन्ति** = जान्दैनन्

**वाक्यार्थ–** (हे प्रभु ! हजुरले आफूलाई अकिञ्चन भन्नुभएको थियो, त्यो पनि उचित नै हो, तर त्यसको अर्थ हजुरमा दरिद्रता छ भन्ने चाहिँ किमार्थ होइन किनभने) हजुरबाट नै सम्पूर्ण वस्तुहरू प्राप्त हुन्छन् र हजुरदेखि अतिरिक्त कुनै वस्तु पनि छैन। सामान्य व्यक्तिहरूद्वारा पूजित ब्रह्मा आदि देवताहरूले समेत हजुरको पूजा गर्दछन्, किनभने हजुर उनीहरूको लागि अति नै प्रिय हुनुहुन्छ। त्यस्ता हजुरमा दरिद्रता कसरी रहोस् ? (धनाढ्य मान्छेहरूले हजुरको पूजा गर्दैनन् भन्ने कुरा पनि सही हो किनभने) धनाढ्यताको अभिमानले विवेकशक्ति नष्ट भएर उनीहरू अन्धो भएका हुन्छन् र उनीहरू आफ्नो इन्द्रियहरूलाई तृप्त गराउन मात्र व्यग्र हुन्छन्। त्यस्ता मतिभ्रष्ट धनाढ्यहरूले कालरूप हजुरलाई चिन्न सक्दैनन्।

**विवरण–** भगवान्ले आफू धनहीन भएको, आफूलाई त्यस्तै धनहीनहरूले मात्र मन पराउने अनि धनीले आफूलाई मन नपराउने कुरा बताउनुभएको थियो। **निष्किञ्चन** शब्दले सामान्यतः केही पनि नभएको निर्धनलाई बुझाउँछ। तर भगवान् त सर्वैश्वर्यसम्पन्न हुनुहुन्छ, कसरी उहाँलाई निष्किञ्चन भन्न मिल्छ ? यसैले यहाँ यसको विशेष अर्थ गरिएको छ। **यदपेक्षया किञ्चित् अन्यत् नास्ति** अर्थात् जोभन्दा अर्को कुनै पनि वस्तु नै छैन, त्यस्ता परमात्मा पनि निष्किञ्चन हुनुहुन्छ। छान्दोग्योपनिषद् (६।२।१)मा पनि परमात्मालाई **एकमेवाद्वितीयम्** अर्थात् एकमात्र र अद्वितीय भनी बताइएको छ। यहाँ अद्वितीय शब्दले परमात्मा भन्दा कुनै दोस्रो वस्तु नभएको अर्थलाई बुझाउँछ। उसो भए अनेक रूपमा देखिइरहेको यो जगत् के हो त भन्ने शङ्काको समाधानमा भनिन्छ– यो सम्पूर्ण जगत् पनि परमात्मादेखि अभिन्न नै हो। परमात्मा नै आफ्नो रूपलाई नछाडी जगत्को रूपमा देखिनुभएको हो, जसरी माटो आफ्नो रूपलाई नछाडी घैँटो, गमला आदिको रूपमा देखिन्छ। घैँटो हुनुभन्दा अघि माटो मात्र थियो, घैँटो फुटेपछि पनि त्यो माटो नै हुन्छ, अनि जुन

वेलामा घैँटो छ, त्यो वेला पनि त्यसमा माटो नै छ। त्यसैले घैँटो भनेको माटोको एउटा नाम मात्र हो। यसै गरी जगत् हुनुभन्दा अघि ब्रह्म थियो, जगत्को प्रलयपछि ब्रह्म मात्र बाँकी रहन्छ अनि जगत् भएको वेलामा पनि यो ब्रह्मरूप नै छ, त्यसभन्दा भिन्न होइन। **वाचारम्भणं विकारो नामधेयं मृत्तिकेत्येव सत्यम्** (छान्दोग्योपनिषद् ६।१।४)अर्थात् घैँटो आदि विकार-कार्यहरू, केवल वाणीका मात्र विलास हुन्, वास्तवमा त कारण माटो नै यथार्थ हो जगत् भनिने नयाँ कार्यरूप केवल देखिएको मात्र हो, वास्तवमा त त्यो ब्रह्मकै नामान्तर हो। यस श्लोकमा आएको **न यतोऽस्ति किञ्चित्** अर्थात् जुन परमात्माभन्दा दोस्रो कुनै वस्तु छैन भन्ने पदले पनि परमात्मा **निष्किञ्चन** हुनुको यही रहस्यलाई बुझाएको छ। धनीहरूले भगवान्को भजन गर्दैनन् भन्नुको अर्थ शरीर आदिमा अभिमान गर्ने अज्ञानीहरूले परमात्मचिन्तन गर्दैनन् भन्नु हो। **असुतृपः** अर्थात् आफ्नो मात्र प्राणको तृप्ति गर्न लागिपर्ने त्यस्ता मोहित व्यक्तिहरू दृष्टिविहीन जस्ता भई परमप्रिय आफ्नै आत्मालाई नै उपेक्षा गर्दछन्।

निष्किञ्चनजनप्रिय यो शब्दको अर्थ हुन्छ— संसारका पदार्थहरू आफूसँग छन् भनी अभिमान नगर्ने अकिञ्चन व्यक्तिहरूलाई मन पराउने या त्यस्ता व्यक्तिहरूद्वारा मन पराइने। जोसँग पदार्थहरूको अभिमान छैन, त्यस्ता व्यक्तिहरूले मात्र भगवान्लाई खुसी गराउन सक्दछन्, संसारभरका पदार्थहरूलाई आफ्नो मान्ने व्यक्तिहरूले परमात्मालाई प्रसन्न पार्न सक्दैनन्। यसरी यहाँ परमात्मा निष्किञ्चनजनप्रिय हुनुको तात्पर्य स्पष्ट पारिएको छ।

**त्वं वै समस्तपुरुषार्थमयः फलात्मा**
**यद्वाञ्छया सुमतयो विसृजन्ति कृत्स्नम्।**
**तेषां विभो समुचितो भवतः समाजः**
**पुंसः स्त्रियाश्च रतयोः सुखदुःखिनोर्न॥ ३८॥**

**पदार्थ—**
**त्वं वै** = हजुर नै
**समस्तपुरुषार्थमयः** = धर्म आदि सम्पूर्ण पुरुषार्थका स्वरूप र (पुरुषार्थका प्रदाता पनि)
**फलात्मा** = परमानन्दात्मक फल नै स्वरूप भएका हुनुहुन्छ
**यद्वाञ्छया** = जुन फलरूप हजुरलाई प्राप्त गर्ने इच्छाद्वारा
**सुमतयः** = विवेकीहरू
**कृत्स्नं** = सम्पूर्ण प्रपञ्चलाई
**विसृजन्ति** = त्याग्दछन्
**विभो** = हे व्यापक प्रभु
**तेषां** = ती विवेकीहरूको
**भवतः** = हजुरका साथ
**समाजः** = सेव्यसेवकभाव सम्बन्ध
**समुचितः** = उपयुक्त छ
**रतयोः** = परस्परको अनुरागमा बाँधिएका
**सुखदुःखिनोः** = सुख र दुःखमा वशीभूत भएका
**पुंसः** = पुरुष र
**स्त्रियाः च** = स्त्रीका साथ
**न** = सम्बन्ध उचित छैन

**वाक्यार्थ—** (सम्बन्ध समान व्यक्तिका बिच हुनुपर्छ भन्ने हजुरको कुरा पनि ठिक हो।) संसारमा मानिसले इच्छा गर्ने धर्म, अर्थ, काम र मोक्ष यी चार ओटा पुरुषार्थ केवल हजुरले नै प्रदान

गर्नुहुन्छ र यी पुरुषार्थबाट हुने आनन्दात्मक फलका रूपमा पनि हजुर नै विराजमान हुनुहुन्छ। त्यसैले विवेकीहरू फलरूप हजुरलाई नै प्राप्त गर्नका लागि सम्पूर्ण प्रपञ्चलाई छाडिदिन्छन्। हे प्रभु ! त्यस्ता विवेकशील व्यक्तिहरूका साथ हजुरको जुन सेव्यसेवकभाव सम्बन्ध छ त्यो सम्बन्ध बिल्कुल सही छ तर जुन स्त्रीपुरुषहरू परस्परमा हुने वासनात्मक अनुरागमा बाँधिएर सुखी वा दुःखी छन्, तिनीहरूका साथ हजुरको सम्बन्ध (सेव्यसेवकभाव) हुनै सक्दैन।

**त्वं न्यस्तदण्डमुनिभिर्गदितानुभाव**
**आत्मात्मदश्च जगतामिति मे वृतोऽसि।**
**हित्वा भवद्भ्रुव उदीरितकालवेग-**
**ध्वस्ताशिषोऽब्जभवनाकपतीन् कुतोऽन्ये ॥ ३९ ॥**

**पदार्थ–**
**न्यस्तदण्डमुनिभिः** = कसैलाई पनि दण्ड (पीडा) नदिने भिक्षुहरूद्वारा
**गदितानुभावः** = प्रशंसित महिमा भएका
**जगतां** = संसारको
**आत्मा** = आत्मा
**आत्मदः च** = आफ्ना भक्तहरूलाई आत्मदान गर्ने
**त्वं इति** = हजुर नै हुनुहुन्छ (भन्ने जानेर)
**भवद्भ्रुवः** = हजुरको आँखीभौँको सङ्केतबाट
**उदीरितकालवेगध्वस्ताशिषः** = प्रेरित भएको कालको वेगले खण्डित अभिलाषा भएका
**अब्जभवनाकपतीन्** = ब्रह्मा, इन्द्र आदि देवताहरूलाई
**हित्वा** = त्यागेर
**मे** = मद्वारा
**वृतः** = वरण गरिएको
**असि** = हुनुहुन्छ
**अन्ये** = अरू शिशुपालहरूको
**कुतः** = के गणना

**वाक्यार्थ–** यो यथार्थ हो कि हजुरको महिमाको वर्णन र प्रशंसा भिक्षुहरूले गर्दछन्, तर ती भिक्षुहरू कस्ता छन् भने पापीभन्दा पापी पुरुषहरूलाई पनि उनीहरू कुनै दण्ड दिँदैनन्। (त्यसैले मैले नबुझेर वा मेरो अदूरदर्शिताका कारण हजुरलाई वरण गरेको होइन।) मलाई स्पष्ट थाहा छ कि हजुर सम्पूर्ण जगत्को आत्मा हुनुहुन्छ र हजुर आफ्ना भक्तहरूलाई आत्मदान पनि गर्नुहुन्छ। हजुरको आँखीभौँको इसाराबाट प्रेरित भएको कालको वेगले ब्रह्मा, इन्द्र आदि देवताहरूको पनि सम्पूर्ण अभिलाषाहरूलाई ध्वस्त बनाइदिन्छ भने शिशुपाल, दन्तवक्त्र आदिको के गणना ? त्यसैले मैले यो सबै बुझेर नै पतिको रूपमा हजुरलाई वरण गरेकी हुँ।

**जाड्यं वचस्तव गदाग्रज यस्तु भूपान्**
**विद्राव्य शार्ङ्गनिनदेन जहर्थ मां त्वम्।**
**सिंहो यथा स्वबलिमीश पशून् स्वभागं**
**तेभ्यो भयाद् यदुदधिं शरणं प्रपन्नः ॥ ४० ॥**

**पद्यार्थ—**
**ईश** = हे सर्वेश्वर
**गदाग्रज** = हे (गदका दाजु) श्रीकृष्ण
**यथा** = जसरी
**सिंहः** = सिंहले
**पशून्** = अन्य वन्य पशुहरूलाई
**विद्राव्य** = भगाएर
**स्वबलिं** = आफ्नो भाग मांस आदि (लैजान्छ त्यस्तै)
**यः तु** = जुन
**त्वं** = हजुरले
**शार्ङ्गनिनदेन** = शार्ङ्ग धनुको टङ्कारद्वारा
**भूपान्** = जरासन्ध आदि राजाहरूलाई भगाएर
**स्वभागं** = आफ्नो भाग
**मां** = मलाई
**जहर्थ** = हरण गर्नुभएको थियो
**तव** = त्यस्ता हजुरको
**तेभ्यः** = ती जरासन्ध आदि राजाहरूबाट
**भयात्** = डरका कारण
**उदधिं** = समुद्रमा
**शरणं** = शरण लिन
**प्रपन्नः** = आएका छौं भन्ने
**यद् वचः** = जुन भनाइ छ (त्यो)
**जाड्यम्** = अनुचित छ

**वाक्यार्थ—** हे सर्वेश्वर श्रीकृष्ण ! जसरी सिंहले अन्य वन्य पशुहरूलाई आफ्नो गर्जनाद्वारा भगाएर आफ्नो भागको सिकार लिएर जान्छ, त्यसै गरी हजुरले पनि मेरो स्वयंवरको समयमा आएका जरासन्ध आदि राजाहरूलाई आफ्नो शार्ङ्ग धनुको टङ्कारद्वारा भगाएर मलाई हरण गरेर ल्याउनुभएको थियो। त्यसकारण 'जरासन्ध आदि राजाहरूको डरका कारण समुद्रमा शरण लिन आएका हौं' भन्ने हजुरको भनाइ चाहिँ कत्ति पनि मिलेन।

**विवरण—** भगवान्ले भिक्षुकहरूद्वारा मात्र मन पराइने आफूलाई वरण गरी रुक्मिणीले भुल गरेको बताउनुभएको थियो। यसको उत्तरमा रुक्मिणी भन्छिन्— **न्यस्तदण्ड** अर्थात् संसारका रागद्वेष आदिलाई छाडिदिएका मुनिहरूले मात्र परमात्मालाई चिन्न सक्दछन्। उहाँको चिन्तन एवं सेवा व्यर्थको कर्म पनि होइन, किनभने उहाँ स्वयं आत्मा हुनुहुन्छ। आत्माकै लागि संसारका अनेक व्यवहारहरू हुने गर्दछन्। सम्पूर्ण व्यवहारका एक मात्र उद्देश्य आत्मालाई नै वरण गर्नु कसरी अज्ञान हुन सक्दछ। अज्ञानी त ती हुन् जो आफैँलाई नजानी संसारका अरू-अरू पदार्थहरूलाई जानेर आफ्नो समय बर्बाद पार्दछन्। जो आफैँलाई पनि जान्दैन त्यो भन्दा महामूर्ख संसारमा अर्को को हुन सक्दछ र ? त्यसैले मैले संसारका क्षणिक पदार्थ एवं व्यवहारलाई छाडी नित्य पदार्थ आत्मालाई वरण गरेकी हुँ। संसारका अरू पदार्थहरूको कामना एवं तिनको प्राप्ति कालको प्रवाहमा एक दिन नष्ट भइहाल्दछ। नाशवान् वस्तुहरूमा ज्यानतोड परिश्रम गरेर के काम ? त्योभन्दा त नित्य वस्तुमैं प्रयास गर्नु राम्रो भएकाले आफ्नो काम असाध्यै उचित भएको रुक्मिणीको धारणा छ।

हजुरले शार्ङ्ग धनुको टङ्कारले सारा राजाहरूको समूलाई छिन्नभिन्न पार्नुभयो। आज आफैँले आफूलाई भगुवा एवं कातर भन्नु कहाँ सुहाउने कुरा हो र ? अन्य वन्य पशुहरूका बथानलाई भगाएर आफ्नो भाग लिने सिंह डराएको हुन्छ ? त्यसैले सर्वसमर्थ परमात्माले आफैँलाई भगुवा भन्नु उचित होइन भनी रुक्मिणीले आफ्नो भाव व्यक्त गरेकी छिन्।

**यद्वाञ्छया नृपशिखामणयोऽङ्गवैन्य-**
**जायन्तनाहुषगयादय ऐकपत्यम्।**

**राज्यं विसृज्य विविशुर्वनमम्बुजाक्ष**
**सीदन्ति तेऽनुपदवीं त इहास्थिताः किम् ॥ ४१ ॥**

**पदार्थ—**
**अम्बुजाक्ष** = हे कमलनयन
**अङ्गवैन्यजायन्तनाहुषगयादयः** = अङ्ग (वेनका पिता), पृथु, भरत, ययाति र गय आदि
**नृपशिखामणयः** = राजशिरोमणिहरूले
**यद्वाञ्छया** = हजुरलाई प्राप्त गर्ने इच्छाद्वारा
**ऐकपत्यं** = आफू एक मात्र मालिक भएको (एकछत्र)
**राज्यं** = साम्राज्य
**विसृज्य** = त्यागेर
**वनं** = वनमा
**विविशुः** = प्रवेश गरे
**ते** = ती राजाहरूले
**ते** = हजुरको
**अनुपदवीं** = मार्गमा
**आस्थिताः** = रहेर
**किं** = के
**इह** = यस संसारमा
**सीदन्ति** = दुःख पाएका छन्

**वाक्यार्थ—** हे कमलनयन ! अङ्ग, वेनबाट उत्पन्न भएका पृथु, भरत, नहुषका पुत्र ययाति र गय आदि राजाधिराजहरूले आ–आफ्नो एकाधिकारमा रहेको साम्राज्य छोडेर हजुरलाई प्राप्त गर्न भनेर जङ्गल गए। हजुरको मार्गमा रही हजुरकै मार्गको अनुसरण गरेका ती राजाहरूले सामान्य मान्छेले झैं के यो संसारमा दुःख पाए होलान् ? (पाएनन्, किनभने उनीहरू मुक्त भए। त्यसैले हजुरको मार्ग अस्पष्ट छैन) ।

**कान्यं श्रयेत तव पादसरोजगन्ध-**
**माघ्राय सन्मुखरितं जनतापवर्गम् ।**
**लक्ष्म्यालयं त्वविगणय्य गुणालयस्य**
**मर्त्या सदोरुभयमर्थविविक्तदृष्टिः ॥ ४२ ॥**

**पदार्थ—**
**जनतापवर्गम्** = भक्तजनहरूको अपवर्ग (मोक्ष)रूप हुनुभएका
**लक्ष्म्यालयं** = लक्ष्मीको आश्रय
**सन्मुखरितं** = विचारशील व्यक्तिहरूद्वारा वर्णित
**गुणालयस्य** = गुणका खानि भएका
**तव** = हजुरको
**पादसरोजगन्धं** = चरणकमलको सुगन्धलाई
**आघ्राय** = सुँघेर
**अर्थविविक्तदृष्टिः** = आफ्नो हित र अहितको चिन्तन गर्न समर्थ
**मर्त्या** = मनुष्यको स्वभाव भएकी
**का** = कुन स्त्रीले
**अविगणय्य** = हजुरको अनादर गरेर
**सदा** = सधैँ
**उरुभयं** = जन्म, जरा आदि धेरै भयले युक्त
**अन्यं तु** = अरु नै पुरुषलाई
**श्रयेत** = सेवा गर्ली

**वाक्यार्थ—** (हजुरको भनाइ अनुसार म आफूसमानको कुनै राजकुमारलाई वरण गर्दिनँ।) हे प्रभु ! श्रवण, कीर्तन आदिमा एकाग्र भई लागेका भक्तजनहरूलाई हजुर अपवर्ग (मोक्ष) प्रदान गर्नुहुन्छ।

हजुर साक्षात् लोकजननी भगवती लक्ष्मीको आश्रय हुनुहुन्छ। गुणका खानि भएका हजुरको चरणकमलको सुगन्ध सुँघेर सांसारिक पीडाबाट मुक्ति मिल्दछ भनी विचारशील सज्जनहरू बताउँछन्। त्यसैले आफ्नो हित र अहित कहाँ छ भनेर राम्ररी बुझेकी कुन चाहिँ त्यस्ती स्त्री होली जसले हजुरलाई अनादर गरेर सधैँ जन्म, मृत्यु, जरा, व्याधि आदि अनेक दुःख र भयले युक्त अरू कुनै पुरुषलाई वरण गर्ली।

**तं त्वानुरूपमभजं जगतामधीश-**
**मात्मानमत्र च परत्र च कामपूरम्।**
**स्यान्मे तवाङ्घ्रिररणं सृतिभिर्भ्रमन्त्या**
**यो वै भजन्तमुपयात्यनृतापवर्गः ॥ ४३ ॥**

**पदार्थ–**
**जगताम्** = सम्पूर्ण जगत्को
**अधीशम्** = स्वामी
**आत्मानम्** = प्राणीहरूका आत्मा
**अत्र च** = यो लोकमा र
**परत्र च** = परलोकमा पनि
**कामपूरं** = सम्पूर्ण कामनालाई पूर्ण गरिदिने
**तं** = त्यस्ता
**त्वा** = हजुरलाई
**अनुरूपं** = आफ्नो योग्य मानेर
**अभजं** = वरण गरेँ
**अनृतापवर्गः** = मिथ्या संसारबाट मुक्ति दिने
**यः वै** = जुन
**तव** = हजुरको चरणकमल
**भजन्तं** = सधैँ सेवा गर्ने व्यक्तिलाई
**उपयाति** = स्वयं प्राप्त हुन्छ
(त्यस्तो हजुरको)
**अङ्घ्रिः** = चरणकमल
**सृतिभिः** = अनेक जन्मद्वारा
**भ्रमन्त्या** = संसारमा डुलिरहने
**मे** = मेरो
**अरणं** = सेव्यरूपमा आश्रय
**स्यात्** = होस्

**वाक्यार्थ–** हे भगवान्! हजुर सम्पूर्ण लोकहरूका एक मात्र स्वामी र सबै प्राणीहरूको आत्मा पनि हुनुहुन्छ। यो लोक र परलोकका सम्पूर्ण कामनाहरूलाई हजुरले नै पूर्ण गरिदिनुहुन्छ। त्यसैले मैले हजुरलाई आफ्नो योग्य ठानेर नै वरण गरेकी हुँ। हजुरको चरणकमलले मिथ्या सांसारिक दुःखबाट मुक्ति प्रदान गर्दछ। आफ्नो भजन गर्ने व्यक्तिलाई त्यस चरणकमलको प्राप्ति हुन्छ। त्यसैले म आफ्नो कर्म अनुसार संसारमा अनेक जुनी लिएर जति नै पटक डुलिरहे पनि म हजुरकै सेवनीय चरणकमलको आश्रयमा रहन सकूँ।

**तस्याः स्युरच्युत नृपा भवतोपदिष्टाः**
**स्त्रीणां गृहेषु खरगोश्वबिडालभृत्याः।**
**यत्कर्णमूलमरिकर्षण नोपयायाद्**
**युष्मत्कथा मृडविरिञ्चसभासु गीता ॥ ४४ ॥**

**पदार्थ—**
**अच्युत** = हे अच्युत
**अरिकर्षण** = हे शत्रुनाशक
**स्त्रीणां** = स्त्रीहरूको
**गृहेषु** = घरमा
**खरगोश्वबिडालभृत्याः** = गधा, गोरु, कुकुर, बिरालो र नोकर जस्ता
**भवता** = हजुरद्वारा
**उपदिष्टाः** = (गुणशाली भनेर) बताइएका
**नृपाः** = राजाहरू
**तस्याः** = त्यस्ता अभागिनी स्त्रीका (पति)
**स्युः** = होलान्
**यत्कर्णमूलं** = जसको कानको प्वालभित्र
**मृडविरिञ्चसभासु** = महादेव, ब्रह्मा आदिका सभाहरूमा
**गीता** = गाइएको
**युष्मत्कथा** = हजुरको लीलाचरित्र र महिमाका कथा
**न उपयायात्** = प्रवेश गरेको छैन

**वाक्यार्थ—** हे अच्युत ! हे शत्रुनाशक ! हजुरद्वारा गुणशाली भनिएका गधा, गोरु, कुकुर र बिरालो जस्ता घरमा बस्ने आइमाईका नोकर राजाहरू त त्यस्ता अभागिनी स्त्रीका पति होलान्, जुन स्त्रीको कानभित्र महादेव, ब्रह्माजी जस्ता श्रेष्ठ देवताहरूको सभामा पनि गाइने हजुरका महिमा र लीलाचरित्रका कथाहरूले कहिल्यै प्रवेश पाएका छैनन्।

**त्वक्श्मश्रुरोमनखकेशपिनद्धमन्त-**
**मांसास्थिरक्तकृमिविट्कफपित्तवातम् ।**
**जीवच्छवं भजति कान्तमतिर्विमूढा**
**या ते पदाब्जमकरन्दमजिघ्रती स्त्री ॥ ४५ ॥**

**पदार्थ—**
**या** = जुन
**विमूढा** = मूर्ख
**स्त्री** = स्त्रीले
**ते** = हजुरको
**पदाब्जमकरन्दं** = चरणकमलको सुगन्ध
**अजिघ्रती** = सुँघेकी छैन
**कान्तमतिः** = कमनीय (प्रिय) पति नै यही हो भन्ने बुद्धि भएकी त्यस स्त्रीले नै
**त्वक्श्मश्रुरोमनखकेशपिनद्धं** = छाला, दाह्री, जुँगा, रौँ, नङ र कपालले ढाकिएको
**अन्तः** = शरीरभित्र
**मांसास्थिरक्तकृमिविट्कफपित्त-वातं** = मासु, हड्डी, रगत, किरा, मलमूत्र, कफ, पित्त र वायुले युक्त
**जीवच्छवं** = जिउँदो भएर पनि लासजस्तो पुरुषलाई
**भजति** = सेवन गर्दछे

**वाक्यार्थ—** बाहिरबाट छाला, दाह्री, जुँगा, रौँ, नङ, कपाल आदिले ढाकिएको र भित्रपट्टि मासु, हाड, रगत, किरा, मलमूत्र, कफ, पित्त र वायु भरिएकाले जिउँदो भएर पनि लास जस्तो शरीर भएको कुनै पुरुषलाई केवल त्यस्ती मूर्ख स्त्रीले मात्र आफ्नो प्रिय पति ठानी सेवन गर्दछे जसले हजुरको चरणकमलको सुगन्ध सुँघेकी छैन।

**विवरण—** माथिका दुई श्लोकमा रुक्मिणीले परमात्मालाई छाडी अरू राजाहरूको वरण गर्ने स्त्री महामूर्ख र महाअभागिनी हो भनी बताएकी छिन्। भगवान्ले जुन अरू राजाहरूलाई वरण गर्न भनी सल्लाह दिनुभएको थियो, ती सबै राजाहरू गधा, गोरु आदि जस्ता हुन् भनी रुक्मिणीले

बताएकी छिन्। गधा भारी बोकिरहन्छ, त्यस्तै अज्ञानी राजाहरू संसारैको बोझ आफैँले उठाए झैँ व्यर्थमैं यसको भारी बोक्दछन्। गोरु सधैँ जोतिए झैँ ती राजाहरू पनि संसारमा जोतिइरहन्छन्। कुकुर जताततैबाट अपमानित भए झैँ ती संसारमा आसक्त भएका व्यक्तिहरूले पनि समाज, परिवार आदि सबैतिरबाट अपमानित भइरहनुपर्दछ। बिरालो हिंस्रक भए झैँ ती संसारीहरू पनि दयाहीन अनि परपीडक हुन्छन्। यस्ता अज्ञानी संसारी राजाहरूलाई त्यही अभागी स्त्रीले वरण गर्दछे जसले परमात्माको चरणकमलको विषयमा अलिकति पनि थाहा पाएको छैन। रुक्मिणी भन्छिन्— हे परमात्मा ! हजुरका अनन्त गुणले युक्त चरित्रहरू जसको कानको प्वालसम्म पुगेकै छैनन्, त्यस्ताले मात्र परमात्मालाई छाडी तुच्छ संसारलाई वरण गर्दछन्। जसले एकपटक पनि परमात्माका दिव्य कल्याणमय गुणहरूको विषयमा सुनेको छ, त्यो व्यक्ति कसै गरी पनि संसारको पछि लाग्दैन।

दोस्रो श्लोकमा चाहिँ रुक्मिणीले श्रीकृष्णलाई आफूले शरीरदृष्टिले मात्र नभई आत्मदृष्टिले नै पति बनाएको रहस्य खोलेकी छिन्। पतिलाई **कान्त** भनिन्छ। कान्त शब्दले प्रियतम भन्ने अर्थ बुझाउँछ। संसारमा सबभन्दा बढी प्रिय आत्मा नै छ। पति आदिमा हुने प्रेम पनि ती शरीरभित्र आत्मा रहुन्जेल मात्र हुन्छ। आत्मा विना शरीर लाससमान हुन्छ। जुन वेलामा शरीर बाँचेको देखिन्छ, त्यस वेलामा पनि वास्तवमा यो जड एवं मरेको नै छ। यसैले त्यस्तो शरीरलाई यहाँ **जीवच्छव** भनिएको छ। यो पदको अर्थ हुन्छ— ज्युँदो हुँदाहुँदै पनि मूर्दासमानको। यसरी जुन आत्माका लागि संसारभर प्रेम गरिन्छ अनि प्रेम गरिने पुत्र, पति आदि व्यक्तिहरूभित्र पनि जुन आत्मा नै पसी तिनीहरूलाई चेतन झैँ बनाइदिएको छ, त्यसैलाई भुली अरू मूर्दासमानका जड पदार्थहरूलाई पति मान्नुको के अर्थ छ ? **पाति इति पतिः** अर्थात् जसले जोगाउँछ, उसैलाई पति भनिन्छ। जो आफैँ मृत्युबाट जोगिन सक्दैन र जीवित छँदाछँदै पनि मूर्दासमानको छ, त्यस्तो शरीर पनि कहीँ पति हुन सक्छ ? पति बनाउने नै भए ज्युँदी आइमाईले बुद्धि पुऱ्याई परमात्मालाई पति बनाउनुपर्दछ। यहाँ आत्माभन्दा शरीर हेय एवं तुच्छ भएको जनाउन शरीरमा रहने विभिन्न विकारी पदार्थहरूको वर्णन गरिएको छ। छाला, मासु, रगत, नङ, कपाल, हाड, दिसा-पिसाब, कफ, वात र पित्त आदिले भरिएको शरीर एकातिर छ भने **शुक्रं अकायं अव्रणं अस्नाविरं शुद्धम्** अर्थात् स्वयंप्रकाश, तीनै थरी शरीर अनि चोटपटक र नाडी नसाले रहित भएको शुद्ध आत्मतत्त्व अर्कोतिर छ। त्यस्तो शुद्ध एवं अपरिवर्तनीय आत्मालाई छाडी कुन बुद्धिमती स्त्रीले वीभत्स शरीरलाई पतिको रूपमा वरण गर्ली ? भन्ने रुक्मिणीको भनाइको तात्पर्य हो।

**अस्त्वम्बुजाक्ष मम ते चरणानुराग**
**आत्मन् रतस्य मयि चानतिरिक्तदृष्टेः।**
**यर्ह्यस्य वृद्धय उपात्तरजोऽतिमात्रो**
**मामीक्षसे तदु ह नः परमानुकम्पा ॥ ४६ ॥**

**पदार्थ–**
**अम्बुजाक्ष** = हे कमलनयन
**मयि च** = ममा (मेरो रूप, सौन्दर्य वा गुणको विषयमा) पनि
**अनतिरिक्तदृष्टेः** = विशेष दृष्टि नराख्नुभएका
**आत्मन्** = आफूमा
**रतस्य** = रत हुनुभएका
**ते** = हजुरको
**चरणानुरागः** = चरणकमलको प्रेम
**मम** = मेरो
**अस्तु** = होस्
**यर्हि** = जब
**अस्य** = यस विश्वको
**वृद्धये** = वृद्धि (विस्तार)का लागि
**उपात्तरजोऽतिमात्रः** = उत्कृष्ट रजोगुणलाई स्वीकार गरेर
**माम्** = प्रकृतिरूपा मलाई
**ईक्षसे** = हेर्नुहुन्छ
**तद् ह** = त्यो हेराइ नै
**नः** = हाम्रो लागि
**परमा** = निरतिशय
**अनुकम्पा** = अनुग्रह हुन्छ

**वाक्यार्थ–** हे कमलनयन ! हजुर आफ्नै आनन्दमा मस्त हुनुहुन्छ। मेरो रूप, सौन्दर्य वा गुणको विषयमा हजुरमा कुनै विशेष दृष्टि छैन (उदासीन हुनुहुन्छ)। बाह्य विषयमा सधैँ उदासीन रहने हजुरको चरणकमलमा मेरो सधैँ प्रेम रहिरहोस्, म यही चाहन्छु। जब हजुरले संसारको विस्तार गर्नका लागि उत्कट रजोगुणलाई स्वीकार गर्नुहुन्छ र प्रकृतिरूपा मलाई साक्षीभावले हेर्नुहुन्छ, तब हजुरको त्यो मतिरको दृष्टि नै मेरो लागि परम अनुग्रह हुन्छ।

**नैवालीकमहं मन्ये वचस्ते मधुसूदन।**
**अम्बाया इव हि प्रायः कन्यायाः स्याद् रतिः क्वचित्॥ ४७॥**

**पदार्थ–**
**मधुसूदन** = हे मधुसूदन
**ते** = हजुरको
**वचः** = (आफ्नो अनुरूप पुरुषको वरण गर भन्ने) भनाइलाई
**अहं** = म
**अलीकं** = असत्य
**न एव मन्ये** = मान्दिनँ
**हि** = किनभने
**अम्बायाः इव** = (काशिराजकी छोरी) अम्बाको जस्तै नै
**कन्यायाः** = कन्याको
**प्रायः** = कहिलेकाहीँ
**क्वचित्** = अर्को पुरुषमा
**रतिः** = प्रेम
**स्यात्** = हुन सक्छ

**वाक्यार्थ–** हे मधुसूदन ! 'कुनै आफू समानको पुरुषलाई वरण गर' भन्ने हजुरको वचनलाई म असत्य मान्दिनँ। किनभने कहिलेकाहीँ एउटा पुरुषको भएर पनि परिस्थिति अनुसार काशिराजपुत्री अम्बाको झैँ कन्याको कुनै अर्को पुरुषमा प्रेम हुन सक्दछ।

**विशेष–** काशिराजका अम्बा, अम्बिका र अम्बालिका गरी तीन ओटी पुत्रीलाई भीष्मपितामहले चित्राङ्गद र विचित्रवीर्यका लागि भनेर स्वयंवरमण्डपबाट हरण गरे। त्यसमध्ये जेठी अम्बाले आफूले शाल्वलाई मन पराएको र उसैलाई मनले पति मानेको बताएपछि भीष्मले अम्बालाई शाल्वकै पासमा फर्काइदिए, तर शाल्वले अरूद्वारा हरण गरिएकीलाई म पत्नी बनाउँदिनँ भनेर स्वीकार नगरेपछि अम्बा फर्किन् र आफूलाई हरण गर्ने भीष्मलाई म अब तपाईँसँग नै विवाह गर्न चाहन्छु भनिन्। भीष्मका गुरु परशुरामले भीष्मलाई तिमीले अम्बासँग विवाह गर्नु नै उचित हुन्छ भनी सम्झाउँदा समेत भीष्मले आजीवन ब्रह्मचर्य पालना गर्ने आफ्नो वचनबद्धताका कारण

अम्बासँग विवाह गर्न मानेनन्। त्यसपछि अम्बाले तपस्या गरी शरीर त्यागिन् र भीष्मसँग प्रतिशोध लिन शिखण्डी भएर जन्मिइन् भन्ने प्रसङ्ग महाभारतमा पाइन्छ।

**व्यूढायाश्चापि पुंश्चल्या मनोऽभ्येति नवं नवम्।**
**बुधोऽसतीं न बिभृयात् तां बिभ्रदुभयच्युतः॥ ४८॥**

**पदार्थ–**
**व्यूढायाः च अपि** = विवाहिता भएर पनि
**पुंश्चल्याः** = वेश्या स्त्रीको
**मनः** = मन
**नवं नवं** = नयाँ-नयाँ पुरुषतिर
**अभ्येति** = जान्छ
**बुधः** = सज्जनले
**असतीं** = असती स्त्रीलाई
**न बिभृयात्** = स्वीकार नगरोस्
**तां** = त्यस्ती वेश्यालाई
**बिभ्रत्** = भरणपोषण गर्ने पुरुष
**उभयच्युतः** = दुबै लोकबाट भ्रष्ट हुन्छ

**वाक्यार्थ–** वेश्या स्त्रीको मन विवाहिता भएर पनि नयाँ-नयाँ पुरुषतिर गइरहन्छ। त्यसैले सज्जन पुरुषले त्यस्ती असती स्त्रीलाई स्वीकार नगर्नू। त्यस्ती स्त्रीलाई स्वीकार गरी भरणपोषण गर्ने पुरुष यो लोक र परलोक दुबैबाट भ्रष्ट हुन्छ।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**साध्व्येतच्छ्रोतुकामैस्त्वं राजपुत्रि प्रलम्भिता।**
**मयोदितं यदन्वात्थ सर्वं तत् सत्यमेव हि॥ ४९॥**

**पदार्थ–**
**साध्वि** = हे सती
**राजपुत्रि** = हे राजकुमारी
**एतत्** = तिमीले भनेका यी सबै कुराहरू
**श्रोतुकामैः** = सुन्ने इच्छा भएका हामीद्वारा
**त्वं** = तिमी
**प्रलम्भिता** = ठट्टा गरिएकी हौ
**मया** = मद्वारा
**उदितं** = बताइएका कुराहरूलाई
**यत्** = जुन
**अन्वात्थ** = व्याख्या गऱ्यौ (दोहोऱ्यायौ)
**तत्** = त्यो
**सर्वं हि** = सबै नै
**सत्यम् एव** = यथार्थ हो

**वाक्यार्थ–** हे सती ! हे राजकुमारी ! तिम्रा यिनै कुराहरू सुन्ने इच्छाले मैले तिमीसँग ख्यालठट्टा गरेको हुँ। मैले तिमीलाई जे-जे भनेँ र ती मेरा भनाइलाई तिमीले जसरी व्याख्या गऱ्यौ, त्यो सबै सत्य हो।

**यान् यान् कामयसे कामान् मय्यकामाय भामिनि।**
**सन्ति ह्येकान्तभक्तायास्तव कल्याणि नित्यदा॥ ५०॥**

**पदार्थ–**
**भामिनि** = हे सुन्दरी
**अकामाय** = कामनाको समाप्तिका लागि
**यान् यान्** = जे-जे
**कामान्** = कामनाहरू
**कामयसे** = इच्छा गरेकी छ्यौ
**कल्याणि** = हे कल्याणि
**मयि** = ममाथि

**एकान्तभक्तायाः** = अत्यन्तै प्रेम गर्ने भएकी
**तव** = तिम्रा लागि (ती कामनाहरू)
**नित्यदा** = सधैँ
**सन्ति हि** = प्राप्त नै छन्

**वाक्यार्थ–** हे सुन्दरी ! कामनाको समाप्तिका लागि तिमीले मबाट जे-जे कुराहरू पूर्ण होऊन् भन्ने चाहेकी छ्यौ, ती कामनाहरू त ममाथि अत्यन्तै प्रेम गर्ने भएकी तिमीलाई सधैँ नै प्राप्त छन्।

**उपलब्धं पतिप्रेम पातिव्रत्यं च तेऽनघे।**
**यद्वाक्यैश्चाल्यमानाया न धीर्मय्यपकर्षिता॥ ५१॥**

**पदार्थ–**
**अनघे** = हे निष्पाप रुक्मिणी
**ते** = तिम्रो
**पतिप्रेम** = पतिप्रेम
**पातिव्रत्यं च** = पातिव्रत्य पनि
**उपलब्धं** = देखेँ
**यद्** = जो
**वाक्यैः** = मेरा ती विभिन्न वचनहरूद्वारा
**चाल्यमानायाः** = विचलित गराउन खोजिएकी तिम्रो
**मयि** = ममा रहेको
**धीः** = बुद्धि
**न अपकर्षिता** = अन्यत्र हटेन

**वाक्यार्थ–** हे निष्पाप रुक्मिणी ! मैले तिम्रो अटल पतिप्रेम र दृढ पातिव्रत्यलाई देखेँ। मैले ती विभिन्न वचनहरूद्वारा तिमीलाई विचलित गराउन खोजेको थिएँ, तर तिम्रो ममा यति प्रगाढ बुद्धि रहेछ कि केही गरे पनि तिम्रो बुद्धि मदेखि अन्यत्र कतै पनि मोडिएन।

**ये मां भजन्ति दाम्पत्ये तपसा व्रतचर्यया।**
**कामात्मानोऽपवर्गेशं मोहिता मम मायया॥ ५२॥**

**पदार्थ–**
**कामात्मानः** = विषयभोगमा चित्त भएका
**ये** = जुन मान्छेहरूले
**अपवर्गेशं** = मोक्षदाता
**मां** = मलाई
**दाम्पत्ये** = दाम्पत्य जीवनको सुखभोगका लागि
**तपसा** = तपस्या र
**व्रतचर्यया** = ब्रह्मचर्यद्वारा
**भजन्ति** = भजन गर्दछन् (तिनीहरू)
**मम** = मेरो
**मायया** = मायाद्वारा
**मोहिताः** = मोहित छन्

**वाक्यार्थ–** म मोक्षदाता हुँ तर विषयभोगमा आसक्त भएका सकाम कर्म गर्नेहरूले दाम्पत्य जीवनको सुखका लागि अनेक तपस्या र ब्रह्मचर्यद्वारा मेरो भजन गर्दछन् भने तिनीहरू मेरो मायाद्वारा मोहित भएका हुन्।

**मां प्राप्य मानिन्यपवर्गसम्पदं वाञ्छन्ति ये सम्पद एव तत्पतिम्।**
**ते मन्दभाग्या निरयेऽपि ये नृणां मात्रात्मकत्वान्निरयः सुसङ्गमः॥ ५३॥**

**पदार्थ–**
**मानिनि** = दृढ सङ्कल्प भएकी हे रुक्मिणी
**अपवर्गसम्पदं** = मोक्षसहितको सम्पूर्ण सम्पत्तिका आश्रय
**तत्पतिं** = ती सम्पत्तिहरूका स्वामी
**मां** = मलाई
**प्राप्य** = प्राप्त गरेर पनि

**ये** = जसले
**सम्पदः एव** = विषयभोगलाई नै
**वाञ्छन्ति** = चाहन्छन्
**ते** = तिनीहरू
**मन्दभाग्याः** = मन्दभागी हुन्
**ये** = जुन विषयभोग
**निरये अपि** = नरक तुल्य (कुकुर, सुँगुर आदिको) जुनीमा पनि (सुलभ छन्, अतः)
**नृणां** = त्यस्ता मानिसहरूका लागि
**मात्रात्मकत्वात्** = विषय भोगतुल्य भएकाले
**निरयः** = नरक नै
**सुसङ्गमः** = उचित ठहर्दछ

**वाक्यार्थ–** दृढ सङ्कल्प भएकी हे रुक्मिणी ! मोक्ष तथा सम्पूर्ण सम्पत्तिहरूको आश्रय र स्वामी भएको मलाई प्राप्त गरेर पनि जसले विषयभोगजन्य सुखलाई नै चाहन्छन् तिनीहरू मन्दभागी हुन् किनभने विषयसुख त सुँगुर, कुकुर आदिको अति निकृष्ट जुनीमा पनि सहज प्राप्त छ (तर मेरो सेवा प्राप्त छैन)। अतः त्यस्ता मानिसहरूका लागि विषय भोग जस्तै भएकाले तिनीहरू नरकमा जानु नै उपयुक्त ठहर्दछ।

**दिष्ट्या गृहेश्वर्यसकृन्मयि त्वया कृतानुवृत्तिर्भवमोचनी खलैः।**
**सुदुष्करासौ सुतरां दुराशिषो ह्यसुंभराया निकृतिञ्जुषः स्त्रियाः॥ ५४॥**

**पदार्थ–**
**गृहेश्वरि** = हे गृहेश्वरी
**दिष्ट्या** = राम्रो भयो (किनभने)
**त्वया** = तिमीद्वारा
**असकृत्** = निरन्तर
**मयि** = ममा
**अनुवृत्तिः** = सेवा
**कृता** = गरियो
**असौ** = यो सेवा
**भवमोचनी** = सांसारिक बन्धनबाट मुक्ति दिनेवाला छ
**खलैः** = दुर्जनहरूद्वारा (सेवा गर्न असाध्य कठिन)
**निकृतिञ्जुषः** = दूषित चित्त भएकी
**असुंभरायाः** = इन्द्रियलाई मात्र तृप्त गराउने
**दुराशिषः** = नराम्रा कामना भएकी
**स्त्रियाः हि** = स्त्रीका लागि त
**सुतरां** = निश्चय नै
**सुदुष्करा** = गर्न अति नै कठिन छ

**वाक्यार्थ–** हे गृहेश्वरी ! यो राम्रो कुरा हो कि तिमीले मेरो निरन्तर सेवा गरेकी छ्यौ। मेरो सेवाले सांसारिक बन्धनबाट मुक्तिप्रदान गर्दछ। दुष्टहरूले यस्तो सेवा गर्न सक्दैनन्। जुन स्त्रीको चित्त दूषित छ, जसले इन्द्रियहरूको तृप्तिका लागि मात्र अनेक प्रकारका नराम्रा कामनाहरू गरेकी छ, त्यस्ती स्त्रीका लागि त मेरो सेवा गर्नु अत्यन्त कठिन छ।

**न त्वादृशीं प्रणयिनीं गृहिणीं गृहेषु**
**पश्यामि मानिनि यया स्वविवाहकाले।**
**प्राप्तान् नृपानवगणय्य रहोहरो मे**
**प्रस्थापितो द्विज उपश्रुतसत्कथस्य॥ ५५॥**

**पदार्थ–**
**मानिनि** = हे दृढसङ्कल्पवाली
**यया** = जुन तिमीद्वारा

**स्वविवाहकाले** = आफ्नो विवाहको समयमा
**प्राप्तान्** = आएका
**नृपान्** = राजाहरूलाई
**अवगणय्य** = उपेक्षा गरेर
**उपश्रुतसत्कथस्य** = शुभ लीलाकथा सुनेकै आधारमा
**मे** = मेरो लागि
**रहोहरः** = गुप्त सन्देशवाहक (दूत)
**द्विजः** = ब्राह्मण
**प्रस्थापितः** = पठाइयो
**गृहेषु** = गृहस्थ आश्रममा
**त्वादृशीं** = तिमीजस्ती
**प्रणयिनीं** = परमप्रेमिका
**गृहिणीं** = पत्नी (अर्को)
**न पश्यामि** = देखिदनँ

**वाक्यार्थ–** हे दृढसङ्कल्पवाली रुक्मिणी ! जुन समयमा तिमीले मलाई देखेकी थिइनौ केवल मेरो बारेमा सुनेकी मात्र थियौ, सुनेकै आधारमा आफ्नो विवाहको समयमा तिमीलाई विवाह गर्न भनेर आएका अनेक राजाहरूलाई उपेक्षा गरेर तिमीले म भएको ठाउँमा गुप्त सन्देशवाहक ब्राह्मणलाई सन्देश बोकाएर पठाएकी थियौ। यस्ती तिमीजस्ती परमप्रेमिका पत्नी म यो गृहस्थ आश्रममा तिमीबाहेक अरू कोही पनि देखिदनँ।

**भ्रातुर्विरूपकरणं युधि निर्जितस्य**
**प्रोद्वाहपर्वणि च तद्वधमक्षगोष्ठ्याम्।**
**दुःखं समुत्थमसहोऽस्मदयोगभीत्या**
**नैवाब्रवीः किमपि तेन वयं जितास्ते ॥ ५६ ॥**

**पदार्थ–**
**युधि** = युद्धमा
**निर्जितस्य** = हारेको
**भ्रातुः** = तिम्रो दाइ रुक्मीको
**विरूपकरणं** = विरूप गरिएको
**प्रोद्वाहपर्वणि** = अनिरुद्धको विवाहको समयमा
**अक्षगोष्ठ्यां** = द्यूतसभामा
**तद्वधं च** = ती रुक्मीको वध पनि (गरियो)
**समुत्थं** = ती घटनाको सम्झनाबाट उत्पन्न हुने
**दुःखं** = दुःखलाई
**अस्मदयोगभीत्या** = हामीसँग हुने वियोगको डरका कारण
**असहः** = सहन गर्‍यौ
**किम् अपि** = केही पनि
**न एव अब्रवीः** = बौलिनौ
**तेन** = त्यसकारण
**ते** = तिमीद्वारा
**वयं** = हामीहरू
**जिताः** = वशीभूत भएका छौँ

**वाक्यार्थ–** तिमीलाई हरण गर्ने समयमा मैले तिम्रा दाइ रुक्मीलाई युद्धमा पराजित गरेर उनलाई विरूप बनाइदिएँ। अनिरुद्धको विवाहोत्सवका सन्दर्भमा आयोजित द्यूतसभामा मेरा दाइ बलरामले उनको बध गरिदिनुभयो। यी घटनाहरूको सम्झना हुँदा तिमीलाई बारम्बार दुःखको अनुभूति हुँदो हो, तर मसँग वियोग हुने हो कि भन्ने ठानेर तिमीले ती सबै दुःखहरूलाई सहन गर्‍यौ, केही पनि बोलिनौ। तिम्रो यही स्नेहका कारण म तिम्रो वशीभूत भएको छु।

**दूतस्त्वयात्मलभने सुविविक्तमन्त्रः**
**प्रस्थापितो मयि चिरायति शून्यमेतत्।**

**मत्वा जिहास इदमङ्गमनन्ययोग्यं**
**तिष्ठेत तत् त्वयि वयं प्रतिनन्दयामः ॥ ५७ ॥**

**पदार्थ–**
**त्वया** = तिमीद्वारा
**आत्मलभने** = मलाई प्राप्त गर्न
**सुविविक्तमन्त्रः** = गुप्त सन्देशवाला
**दूतः** = दूत
**प्रस्थापितः** = पठाइयो (त्यस वेला)
**मयि** = मैले
**चिरायति** = विलम्ब गर्दा
**एतत्** = यो सम्पूर्ण विश्वलाई
**शून्यं** = शून्य
**मत्वा** = मानेर
**इदं** = यो
**अङ्गं** = सुन्दर शरीरलाई
**अनन्ययोग्यं** = कुनै अरू पुरुषको लागि योग्य छैन भनेर
**जिहासे** = त्याग्ने निश्चय गऱ्यौ
**तत्** = त्यो तिम्रो प्रेमभाव
**त्वयि** = तिमीमै
**तिष्ठेत** = रहोस्
**वयं** = हामी चाहिँ
**प्रतिनन्दयामः** = साधुवादद्वारा अभिनन्दन गर्दछौँ

**वाक्यार्थ–** हे रुक्मिणी ! तिमीले मलाई पतिका रूपमा प्राप्त गर्न मकहाँ गुप्तसन्देशसहित दूत पठाएकी थियौ, तर जब म आउन अलिकति ढिलो भयो, तब तिमीले यो सम्पूर्ण विश्वलाई शून्य देख्न थाल्यौ। आफ्नो सर्वाङ्गसुन्दर शरीरलाई कुनै अर्को पुरुषको लागि योग्य नभएको ठानेर तिमीले शरीरै त्याग्ने इच्छा गरेकी थियौ। तिम्रो मप्रतिको यो अगाध प्रेमभाव तिमीमैँ रहोस्। म त्यसको बदलामा (तिमीलाई केही दिन त सक्दिनँ, तर) साधुवादद्वारा तिमीलाई अवश्य अभिनन्दन गर्दछु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं सौरतसंलापैर्भगवाञ्जगदीश्वरः ।**
**स्वरतो रमया रेमे नरलोकं विडम्बयन् ॥ ५८ ॥**

**पदार्थ–**
**स्वरतः** = आत्माराम
**जगदीश्वरः** = जगदीश्वर
**भगवान्** = भगवान् श्रीकृष्णले
**नरलोकं** = मनुष्यको जस्तो लीला
**विडम्बयन्** = अनुकरण गर्दै
**एवं** = यसरी
**सौरतसंलापैः** = प्रणयमूलक मिठा वार्तालापहरूद्वारा
**रमया** = लक्ष्मीरूपिणी रुक्मिणीसँग
**रेमे** = रमण गर्नुभयो

**वाक्यार्थ–** आत्माराम जगदीश्वर भगवान् श्रीकृष्णले पनि सामान्य मनुष्यको लीलाचरित्रको अनुकरण गर्दै उक्त प्रकारले दाम्पत्योचित प्रणयमूलक मिठा-मिठा वार्तालापहरू गर्दै साक्षात् लक्ष्मीरूपिणी रुक्मिणीसँग रमण गर्नुभयो।

**तथान्यासामपि विभुर्गृहेषु गृहवानिव ।**
**आस्थितो गृहमेधीयान् धर्मान् लोकगुरुर्हरिः ॥ ५९ ॥**

**पदार्थ–**
**तथा** = त्यसै गरी
**अन्यासाम् अपि** = अरू पत्नीहरूको पनि
**गृहेषु** = घरमा
**आस्थितः** = बसेर
**विभुः** = (त्यति नै रूप धारण गर्ने) सर्वव्यापक
**लोकगुरुः** = जगत्को गुरु
**हरिः** = श्रीकृष्णले
**गृहमेधीयान् धर्मान्** = गार्हस्थ्य धर्मको पालन गर्दै
**गृहवान् इव** = गृहस्थ झैं भएर (रमण गर्नुभयो)

**वाक्यार्थ–** (जसरी रुक्मिणीको महलमा भगवान् श्रीकृष्ण सुखपूर्वक विहार गर्नुहुन्थ्यो) त्यसरी नै अन्य पत्नीहरूको महलमा पनि गृहस्थ झैं भएर गार्हस्थ्य धर्मको पालना गर्दै जगत्का पथप्रदर्शक गुरु सर्वव्यापक भगवान् श्रीकृष्णले ती पत्नीहरूका साथमा रमण गर्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**

**कृष्णरुक्मिणीसंवादो नाम षष्टितमोऽध्यायः ॥ ६० ॥**

# अथैकषष्टितमोऽध्यायः

## अनिरुद्धको विवाहोत्सवमा रुक्मीको वध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एकैकशस्ताः कृष्णस्य पुत्रान् दशदशाबलाः ।**

**अजीजनन्ननवमान् पितुः सर्वात्मसम्पदा ॥ १ ॥**

**पदार्थ–**
**ताः** = ती
**कृष्णस्य** = भगवान् श्रीकृष्णका
**अबलाः** = पत्नीहरू
**एकैकशः** = प्रत्यकले
**सर्वात्मसम्पदा** = बल, वीर्य, सौन्दर्य आदि सम्पूर्ण सम्पत्तिद्वारा
**पितुः** = पिता श्रीकृष्णभन्दा
**अनवमान्** = कम नभएका
**दशदश** = दश-दश ओटा
**पुत्रान्** = छोराहरू
**अजीजनन्** = जन्माए

**वाक्यार्थ–** भगवान् श्रीकृष्णका सम्पूर्ण पत्नीहरू प्रत्येकले दश-दश ओटा पुत्रहरू जन्माए। ती पुत्रहरू बल, वीर्य, सौन्दर्य आदि सम्पत्तिका दृष्टिले पिता श्रीकृष्णभन्दा कम थिएनन्।

**गृहादनपगं वीक्ष्य राजपुत्र्योऽच्युतं स्थितम् ।**

**प्रेष्ठं न्यमंसत स्वं स्वं न तत्तत्त्वविदः स्त्रियः ॥ २ ॥**

**पदार्थ–**
**अच्युतं** = भगवान् अच्युत
**गृहात्** = आ-आफ्नो महलबाट
**अनपगं** = कहिल्यै बाहिर नजानुभएको
**स्थितं** = सधैँ आफ्नै महलमा बस्नुभएको
**वीक्ष्य** = देखेर
**न तत्तत्त्वविदः** = भगवान् श्रीकृष्णको वास्तविक स्वरूपलाई नजानेका
**राजपुत्र्यः** = राजपुत्री
**स्त्रियः** = ती श्रीकृष्णका पत्नीहरूले
**स्वं स्वं** = आफैँ-आफैँलाई
**प्रेष्ठं** = भगवान्को प्रियतम
**न्यमंसत** = मान्न थाले

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण कहिल्यै आफ्नो महलबाट बाहिर नजाने, सधैँ आफूसँगै बसिरहने गरेको देखेर ती राजकुमारीहरू प्रत्येकले आफूलाई भगवान्को सबैभन्दा प्यारी भएको ठान्दथे। ती राजकुमारीहरूले आत्माराम भगवान् श्रीकृष्णको वास्तविक स्वरूपलाई जानेका थिएनन्।

**चार्वब्जकोशवदनायतबाहुनेत्र-**

**सप्रेमहासरसवीक्षितवल्गुजल्पैः ।**

**सम्मोहिता भगवतो न मनो विजेतुं**

**स्वैर्विभ्रमैः समशकन् वनिता विभूम्नः ॥ ३ ॥**

**पदार्थ–**
**भगवतः** = भगवान्को
**चार्वब्जकोशवदनायतबाहुनेत्रस-प्रेमहासरसवीक्षितवल्गुजल्पैः** = कमलको कोपिलाजस्तो सुन्दर अनुहार, विशाल बाहु, ठुला आँखा, प्रेममय मुस्कान, सरस हेराइ र मनोहर वाणीद्वारा
**सम्मोहिताः** = मोहित भएका
**वनिताः** = पत्नीहरूले
**स्वैः** = आफ्नो
**विभ्रमैः** = अनेक भावभङ्गीद्वारा
**विभूम्नः** = आत्मानन्दले परिपूर्ण भगवान्को
**मनः** = मनलाई
**विजेतुं** = जित्न
**न समशकन्** = सकेनन्

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको कमलपुष्पको कोपिलाजस्तो सुन्दर अनुहार, विशाल बाहु, ठुला आँखा, प्रेमपूर्ण मुस्कान, सरस हेराइ र मनोहर वाणीद्वारा भगवान्का ती सबै पत्नीहरू मोहित भएका थिए। उनीहरूले भगवान्को मनलाई जित्न अनेक शृङ्गारिक भावभङ्गीहरू देखाउँथे, तर पनि आत्मानन्दले परिपूर्ण भगवान् श्रीकृष्णको मनलाई उनीहरूले वशीभूत गर्न सकेनन्।

**स्मायावलोकलवदर्शितभावहारि-**
**भ्रूमण्डलप्रहितसौरतमन्त्रशौण्डैः।**
**पत्न्यस्तु शोडशसहस्रमनङ्गबाणै-**
**र्यस्येन्द्रियं विमथितुं करणैर्न शेकुः॥ ४॥**

**पदार्थ–**
**स्मायावलोकलवदर्शितभावहारि-भ्रूमण्डलप्रहितसौरतमन्त्रशौण्डैः** = मन्द मुस्कानसहितको सूक्ष्म हेराइद्वारा सूचित प्रणयभाव तथा मनोहर आँखीभौँको सङ्केतद्वारा रतिरागात्मक प्रस्तुति गर्न कुशल
**अनङ्गबाणैः** = कामबाणद्वारा
**करणैः** = अन्य उपायद्वारा पनि
**यस्य** = जुन भगवान्का
**इन्द्रियं** = इन्द्रियहरूलाई
**विमथितुं** = विचलित गराउन
**शोडशसहस्रं** = सोह्र हजार
**पत्न्यः तु** = पत्नीहरूले पनि
**न शेकुः** = सकेनन्

**वाक्यार्थ–** भगवान् श्रीकृष्णका सोह्र हजार पत्नीहरू आ-आफ्नो मन्दमुस्कानसहितको सूक्ष्म हेराइद्वारा प्रणयभावको प्रदर्शन गर्दथे। मनोहर आँखीभौँका अनेक सङ्केतहरूद्वारा रतिरागात्मकता प्रस्तुत गर्न उनीहरू कुशल थिए। यी बाहेक कामबाण प्रहार गरेर र अन्य उपायहरूको अवलम्बन गरेर पनि उनीहरूले भगवान्का मन आदि इन्द्रियहरूलाई विचलित गराउन सकेनन्।

**इत्थं रमापतिमवाप्य पतिं स्त्रियस्ता**
**ब्रह्मादयोऽपि न विदुः पदवीं यदीयाम्।**
**भेजुर्मुदाविरतमेधितयानुराग-**
**हासावलोकनवसङ्गमलालसाद्यम्॥ ५॥**

**पदार्थ–**
**ब्रह्मादयः अपि** = ब्रह्मा आदि देवताहरूले पनि
**यदीयां** = जसको
**पदवीं** = प्राप्तिमार्ग
**न विदुः** = जान्न सकेनन्

**इत्थं** = त्यस्ता
**रमापतिं** = लक्ष्मीपति श्रीकृष्णलाई
**पतिं** = पतिका रूपमा
**अवाप्य** = प्राप्त गरेर
**ताः** = ती
**स्त्रियः** = स्त्रीहरूले
**अविरतं** = निरन्तर
**एधितया** = बढ्दै गएको
**मुदा** = हर्षद्वारा
**अनुरागहासावलोकनवसङ्गम-लालसाद्यं** = अनुरागयुक्त मुस्कान, हेराइ, नवसमागमको इच्छा आदिद्वारा
**भेजुः** = भगवान्‌को सेवा गर्दथे

**वाक्यार्थ–** ब्रह्मा आदि देवताहरूले पनि जसलाई प्राप्त गर्ने मार्ग बुझ्न सकेका छैनन्, त्यस्ता लक्ष्मीपति भगवान् श्रीकृष्णलाई पतिका रूपमा प्राप्त गरेका ती स्त्रीहरूको प्रसन्नता दिन-प्रतिदिन निरन्तर बढ्दै गएको थियो। त्यसैले उनीहरूले पनि आफ्नो अनुरागयुक्त मुस्कान, हेराइ र नवसमागमको इच्छा आदिद्वारा भगवान्‌को सेवा गर्ने गर्दथे।

**प्रत्युद्गमासनवरार्हणपादशौच-**
**ताम्बूलविश्रमणवीजनगन्धमाल्यैः।**
**केशप्रसारशयनस्नपनोपहार्यैः**
**दासीशता अपि विभोर्विदधुः स्म दास्यम्॥ ६॥**

**विशिष–** यो श्लोक माथि १०।५९।४५ मा नै आइसकेको छ। यसैले यस श्लोकको पदार्थ र वाक्यार्थ सोही ठाउँमा हेर्नुहोला।

**तासां या दशपुत्राणां कृष्णस्त्रीणां पुरोदिताः।**
**अष्टौ महिष्यस्तत्पुत्रान् प्रद्युम्नादीन् गृणामि ते॥ ७॥**

**पदार्थ–**
**दशपुत्राणां** = दश-दश ओटा छोरा भएका
**तासां** = ती
**कृष्णस्त्रीणां** = श्रीकृष्णका पत्नीहरूमध्ये
**या** = जुन
**अष्टौ** = रुक्मिणी आदि आठ ओटी
**महिष्यः** = प्रमुख रानीहरू
**पुरोदिताः** = अगाडि बताइए (तिनीहरूका)
**तत्पुत्रान्** = तिनीहरूका छोरा
**प्रद्युम्नादीन्** = प्रद्युम्न आदिका बारेमा
**ते** = तपाईंलाई
**गृणामि** = बताउँछु

**वाक्यार्थ–** हे परीक्षित्! मैले तपाईंलाई अगाडि नै बताएको थिएँ कि भगवान् श्रीकृष्णका रुक्मिणी आदि आठ ओटी मुख्य रानी थिए र तिनीहरू प्रत्येकले दश-दश ओटा छोराहरू जन्माएका थिए। अब म तपाईंलाई तिनै प्रधान पत्नीहरूको प्रद्युम्न आदि छोराहरूको विषयमा बताउँछु।

**चारुदेष्णः सुदेष्णश्च चारुदेहश्च वीर्यवान्।**
**सुचारुश्चारुगुप्तश्च भद्रचारुस्तथापरः॥ ८॥**

**चारुचन्द्रो विचारुश्च चारुश्च दशमो हरेः ।**
**प्रद्युम्नप्रमुखा जाता रुक्मिण्यां नावमाः पितुः ॥ ९ ॥**

**पदार्थ–**
**रुक्मिण्यां** = रुक्मिणीमा
**प्रद्युम्नप्रमुखाः** = प्रद्युम्न नै जेठा भएका
**चारुदेष्णः** = चारुदेष्ण
**सुदेष्णः च** = सुदेष्ण
**वीर्यवान्** = अत्यन्त पराक्रमी
**चारुदेहः च** = चारुदेह
**सुचारुः** = सुचारु
**चारुगुप्तः च** = चारुगुप्त
**भद्रचारुः** = भद्रचारु
**चारुचन्द्रः** = चारुचन्द्र
**विचारुः च** = विचारु
**तथा अपरः** = त्यस्तै अर्का
**दशमः** = दशौँ (कान्छा)
**चारुः च** = चारु समेतका
**पितुः** = पिता
**हरेः** = श्रीकृष्णभन्दा
**नावमाः** = (रूप, बल आदिमा) कम नभएका
**जाताः** = जन्मिए

**वाक्यार्थ–** रुक्मिणीको गर्भबाट दश ओटा पुत्रहरू जन्मिए। यिनीहरू क्रमशः प्रद्युम्न, चारुदेष्ण, सुदेष्ण, अत्यन्त पराक्रमी चारुदेह, सुचारु, चारुगुप्त, भद्रचारु, चारुचन्द्र, विचारु र चारु हुन्। यी दश ओटै पुत्रहरू रूप, बल आदिमा पिता श्रीकृष्णभन्दा कम थिएनन्।

**भानुः सुभानुः स्वर्भानुः प्रभानुर्भानुमांस्तथा ।**
**चन्द्रभानुर्बृहद्भानुरतिभानुस्तथाष्टमः ॥ १० ॥**
**श्रीभानुः प्रतिभानुश्च सत्यभामात्मजा दश ।**
**साम्बः सुमित्रः पुरुजिच्छतजिच्च सहस्रजित् ॥ ११ ॥**
**विजयश्चित्रकेतुश्च वसुमान् द्रविडः क्रतुः ।**
**जाम्बवत्याः सुता ह्येते साम्बाद्याः पितृसम्मताः ॥ १२ ॥**

**पदार्थ–**
**भानुः** = भानु
**सुभानुः** = सुभानु
**स्वर्भानुः** = स्वर्भानु
**प्रभानुः** = प्रभानु
**भानुमान्** = भानुमान्
**चन्द्रभानुः** = चन्द्रभानु
**बृहद्भानुः** = बृहद्भानु
**तथा** = तथा
**अष्टमः** = आठौँ
**अतिभानुः** = अतिभानु
**तथा** = त्यसै गरी
**श्रीभानुः** = श्रीभानु
**प्रतिभानुः च** = प्रतिभानु (गरी)
**सत्यभामात्मजाः** = सत्यभामाका छोराहरू
**दश** = दश जना थिए
**साम्बः** = साम्ब
**सुमित्रः** = सुमित्र
**पुरुजित्** = पुरुजित्
**शतजित्** = शतजित्
**सहस्रजित् च** = सहस्रजित्
**विजयः** = विजय
**चित्रकेतुः** = चित्रकेतु
**वसुमान्** = वसुमान्
**द्रविडः** = द्रविड
**क्रतुः च** = क्रतु समेत
**जाम्बवत्याः** = जाम्बवतीका
**सुताः** = पुत्रहरू थिए
**एते हि** = यी
**साम्बाद्याः**= साम्ब आदि दश छोरा
**पितृसम्मताः** = पिता श्रीकृष्णका अत्यन्त प्रिय थिए

**वाक्यार्थ–** सत्यभामाका भानु, सुभानु, स्वर्भानु, प्रभानु, भानुमान्, चन्द्रभानु, बृहद्भानु, अतिभानु, श्रीभानु र प्रतिभानु नामका दश जना छोराहरू थिए। जाम्बवतीका पनि साम्ब, सुमित्र, पुरुजित्, शतजित्, सहस्रजित्, विजय, चित्रकेतु, वसुमान्, द्रविड र क्रतु नामका दश जना छोराहरू थिए। साम्ब आदि यी पुत्रहरू पिता श्रीकृष्णका अत्यन्त प्रिय थिए।

**वीरश्चन्द्रोऽश्वसेनश्च चित्रगुर्वेगवान् वृषः।**

**आमः शङ्कुर्वसुः श्रीमान् कुन्तिर्नाग्नजितेः सुताः॥ १३॥**

**पदार्थ–**
**नाग्नजितेः** = नाग्नजिती सत्याका
**वीरः** = वीर
**चन्द्रः** = चन्द्र
**अश्वसेनः च** = अश्वसेन
**चित्रगुः** = चित्रगु
**वेगवान्** = वेगवान्
**वृषः** = वृष
**आमः** = आम
**शङ्कुः** = शङ्कु
**वसुः** = वसु
**श्रीमान्** = परम तेजस्वी
**कुन्तिः** = कुन्ति (यी दश जना)
**सुताः** = छोराहरू थिए

**वाक्यार्थ–** नाग्नजिती सत्याका पनि क्रमशः वीर, चन्द्र, अश्वसेन, चित्रगु, वेगवान्, वृष, आम, शङ्कु, वसु र परम तेजस्वी कुन्ति नामका दश जना छोराहरू थिए।

**श्रुतः कविर्वृषो वीरः सुबाहुर्भद्र एकलः।**

**शान्तिर्दर्शः पूर्णमासः कालिन्द्याः सोमकोऽवरः॥ १४॥**

**पदार्थ–**
**कालिन्द्याः** = कालिन्दीका
**श्रुतः** = श्रुत
**कविः** = कवि
**वृषः** = वृष
**वीरः** = वीर
**सुबाहुः** = सुबाहु
**एकलः** = एक्लै (शत्रुहरूको संहार गर्न सक्षम)
**भद्रः** = भद्र
**शान्तिः** = शान्ति
**दर्शः** = दर्श
**पूर्णमासः** = पूर्णमास र
**अवरः** = कान्छा चाहिँ
**सोमकः** = सोमक (गरी दश जना छोराहरू थिए)

**वाक्यार्थ–** कालिन्दीका श्रुत, कवि, वृष, वीर, सुबाहु, एक्लै शत्रुहरूको संहार गर्न सक्षम भद्र, शान्ति, दर्श, पूर्णमास र कान्छा सोमक गरी दश जना छोराहरू थिए।

**प्रघोषो गात्रवान् सिंहो बलः प्रबल ऊर्ध्वगः।**

**माद्र्याः पुत्रा महाशक्तिः सह ओजोऽपराजितः॥ १५॥**

**पदार्थ–**
**माद्र्याः** = मद्र देशकी राजकुमारी लक्ष्मणाका
**प्रघोषः** = प्रघोष
**गात्रवान्** = गात्रवान्
**सिंहः** = सिंह
**बलः** = बल
**प्रबलः** = प्रबल
**ऊर्ध्वगः** = ऊर्ध्वग
**महाशक्तिः** = महाशक्ति
**सहः** = सह
**ओजः** = ओज (र)
**अपराजितः** = अपराजित
**पुत्राः** = पुत्रहरू थिए

**वाक्यार्थ–** मद्र देशकी राजकुमारी लक्ष्मणाका प्रघोष, गात्रवान्, सिंह, बल, प्रबल, ऊर्ध्वग, महाशक्ति, सह, ओज र अपराजित नामका दश जना पुत्रहरू थिए।

**वृको हर्षोऽनिलो गृध्रो वर्धनोऽन्नाद एव च।**

**महाशः पावनो वह्निर्मित्रविन्दात्मजाः क्षुधिः॥ १६॥**

**पदार्थ–**
**वृकः** = वृष
**हर्षः** = हर्ष
**अनिलः** = अनिल
**गृध्रः** = गृध्र
**वर्धनः** = वर्धन
**अन्नादः एव च** = अन्नाद समेत
**महाशः** = महाश
**पावनः** = पावन
**वह्निः** = वह्नि र
**क्षुधिः** = क्षुधि
**मित्रविन्दात्मजाः** = मित्रविन्दाका छोराहरू थिए

**वाक्यार्थ–** मित्रविन्दाका वृक, हर्ष, अनिल, गृध्र, वर्धन, अन्नाद, महाश, पावन, वह्नि र क्षुधि नामका दश जना छोराहरू थिए।

**सङ्ग्रामजिद् बृहत्सेनः शूरः प्रहरणोऽरिजित्।**

**जयः सुभद्रो भद्राया वाम आयुश्च सत्यकः॥ १७॥**

**पदार्थ–**
**भद्रायाः** = भद्राका
**सङ्ग्रामजित्** = सङ्ग्रामजित्
**बृहत्सेनः** = बृहत्सेन
**शूरः** = शूर
**प्रहरणः** = प्रहरण
**अरिजित्** = अरिजित्
**जयः** = जय
**सुभद्रः** = सुभद्र
**वामः** = वाम
**आयुः** = आयु
**सत्यकः च** = सत्यक समेत (दश पुत्रहरू थिए)

**वाक्यार्थ–** भद्राका सङ्ग्रामजित्, बृहत्सेन, शूर, प्रहरण, अरिजित्, जय, सुभद्र, वाम, आयु र सत्यक गरी दश जना छोराहरू थिए।

**दीप्तिमांस्ताम्रतप्ताद्या रोहिण्यास्तनया हरेः।**

**प्रद्युम्नाच्चानिरुद्धोऽभूद् रुक्मवत्यां महाबलः॥**

**पुत्र्यां तु रुक्मिणो राजन् नाम्ना भोजकटे पुरे॥ १८॥**

**एतेषां पुत्रपौत्राश्च बभूवुः कोटिशो नृप।**

**मातरः कृष्णजातानां सहस्राणि च षोडश॥ १९॥**

**पदार्थ–**
**हरेः** = श्रीकृष्णका
**रोहिण्याः** = रोहिणीबाट
**दीप्तिमान्** = दीप्तिमान्
**ताम्रतप्ताद्याः** = ताम्रतप्त आदि
**तनयाः** = छोराहरू भए
**राजन्** = हे राजा परीक्षित्
**प्रद्युम्नात् च** = प्रद्युम्नबाट
**नाम्ना** = नामले

**भोजकटे पुरे** = भोजकट नगरमा
**रुक्मिणः** = रुक्मीकी
**पुत्र्यां** = छोरी
**रुक्मवत्यां तु** = रुक्मवतीमा
**महाबलः** = महाबली
**अनिरुद्धः** = अनिरुद्ध
**अभूत्** = जन्मिए
**एतेषां** = प्रद्युम्नबाहेक अरू पनि
**पुत्रपौत्राः च** = पुत्रका पुत्र (नातिहरू)
**कोटिशः** = करोडौं
**बभूवुः** = भए
**नृप** = हे राजा परीक्षित्
**कृष्णजातानां** = श्रीकृष्णका छोराहरूको
**मातरः** = आमाहरू नै
**षोडश सहस्राणि च** = सोह्र हजार थिए

**वाक्यार्थ–** श्रीकृष्णकी रानी रोहिणीबाट दीप्तिमान्, ताम्रतप्त आदि (दश जना) छोराहरू जन्मिए। श्रीकृष्णका पुत्र प्रद्युम्नको भोजकट नगरका राजा रुक्मीकी छोरी रुक्मवतीको गर्भबाट महाबली अनिरुद्धको जन्म भयो। भगवान् श्रीकृष्णका प्रद्युम्नदेखि अतिरिक्त अन्य पुत्र र तिनीहरूका छोरा आदि गर्दै श्रीकृष्णका करोडौं सन्तान भए। हे राजा परीक्षित् ! श्रीकृष्णका छोराहरूका आमा नै सोह्र हजार थिए।

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**कथं रुक्म्यरिपुत्राय प्रादाद् दुहितरं युधि।**
**कृष्णेन परिभूतस्तं हन्तुं रन्ध्रं प्रतीक्षते॥**
**एतदाख्याहि मे विद्वन् द्विषोर्वैवाहिकं मिथः॥ २०॥**

**पदार्थ–**
**रुक्मी** = रुक्मीले
**अरिपुत्राय** = शत्रु श्रीकृष्णको छोरो प्रद्युम्नलाई
**दुहितरं** = आफ्नी छोरी
**कथं** = कसरी
**प्रादात्** = दियो (ऊ त)
**युधि** = युद्धमा
**कृष्णेन** = श्रीकृष्णद्वारा
**परिभूतः** = अपमानित भएर
**तं** = ती श्रीकृष्णलाई
**हन्तुं** = मार्नका लागि
**रन्ध्रं** = उचित अवसर
**प्रतीक्षते** = प्रतीक्षा गरिरहेको थियो
**विद्वन्** = हे विद्वान् गुरुदेव
**द्विषोः** = परस्पर शत्रुता भएका श्रीकृष्ण र रुक्मीको
**मिथः** = एक-आपसमा
**वैवाहिकं** = वैवाहिक सम्बन्ध (जुन भयो)
**एतत्** = यस विषयमा
**मे** = मलाई
**आख्याहि** = बताउनुहोस्

**वाक्यार्थ–** श्रीकृष्णलाई मार्न उचित अवसरको प्रतीक्षा गरिरहेको रुक्मीले आफ्ना शत्रु श्रीकृष्णका छोरा प्रद्युम्नलाई आफ्नी पुत्री रुक्मवतीको विवाह कसरी गरिदियो ? परस्परमा शत्रुता भएका श्रीकृष्ण र रुक्मीको बिच कसरी वैवाहिक सम्बन्ध कायम भयो ? हे सर्वज्ञ गुरुदेव ! मलाई यस विषयमा कृपापूर्वक बताउनुहोस्।

**अनागतमतीतं च वर्तमानमतीन्द्रियम्।**
**विप्रकृष्टं व्यवहितं सम्यक् पश्यन्ति योगिनः॥ २१॥**

**पदार्थ–**
**योगिनः** = योगीहरूले
**अनागतं** = भविष्यत्

**अतीतं** = भूत
**वर्तमानं** = वर्तमान
**अतीन्द्रियं** = इन्द्रियले भेट्न नसक्ने
**विप्रकृष्टं** = टाढाको वस्तु र
**व्यवहितं च** = छेकिएको वस्तु पनि
**सम्यक्** = राम्ररी
**पश्यन्ति** = देख्दछन्

**वाक्यार्थ–** (हे मुनि ! हजुर योगीश्वर हुनुहुन्छ) योगीहरूले भूत, भविष्यत् र वर्तमान अनि अतीन्द्रिय वस्तु, टाढाको वस्तु र छेकिएको वस्तुलाई पनि राम्ररी देख्दछन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**वृतः स्वयंवरे साक्षादनङ्गोऽङ्गयुतस्तया।**
**राज्ञः समेतान् निर्जित्य जहारैकरथो युधि॥ २२॥**

**पदार्थ–**
**तया** = ती रुक्मवतीद्वारा
**स्वयंवरे** = स्वयंवरमा
**वृतः** = वरण गरिएका
**एकरथः** = एउटा रथ मात्र सहयोगी भएका
**अङ्गयुतः** = मूर्तिमान्
**साक्षात्** = साक्षात्
**अनङ्गः** = कामदेव प्रद्युम्नले
**समेतान्** = स्वयंवरमा आएका
**राज्ञः** = राजाहरूलाई
**युधि** = युद्धमा
**निर्जित्य** = जितेर
**जहार** = (रुक्मवतीलाई) हरण गरे

**वाक्यार्थ–** श्रीकृष्णनन्दन प्रद्युम्न साक्षात् मूर्तिमान् कामदेव हुनुहुन्थ्यो। जब स्वयंवरमा रुक्मवतीले साक्षात् मूर्तिमान् कामदेव प्रद्युम्नलाई वरण गरिन् तब स्वयंवरमा आएका अन्य राजाहरूले उनीमाथि आक्रमण गरे र एउटा रथ मात्र सहयोगी भएका प्रद्युम्नले युद्धमा उनीहरूलाई जिते र रुक्मवतीलाई हरण गरे।

**यद्यप्यनुस्मरन् वैरं रुक्मी कृष्णावमानितः।**
**व्यतरद् भागिनेयाय सुतां कुर्वन् स्वसुः प्रियम्॥ २३॥**

**पदार्थ–**
**यद्यपि** = यद्यपि
**कृष्णावमानितः** = श्रीकृष्णद्वारा अपमानित भएको
**रुक्मी** = रुक्मीले
**वैरं** = शत्रुतालाई
**अनुस्मरन्** = सम्झिए पनि
**स्वसुः** = बहिनी रुक्मिणीको
**प्रियं** = प्रिय
**कुर्वन्** = गर्दै
**भागिनेयाय** = भान्जा प्रद्युम्नलाई
**सुतां** = आफ्नी छोरी रुक्मवती
**व्यतरत्** = दियो

**वाक्यार्थ–** यद्यपि श्रीकृष्णद्वारा आफू अपमानित हुनुपरेकाले रुक्मीले श्रीकृष्णसँगको आफ्नो शत्रुतालाई बिर्सिएको थिएन, तापनि बहिनी रुक्मिणीलाई प्रसन्न गराउनकै लागि भए पनि उसले भान्जा प्रद्युम्नसँग आफ्नी छोरी रुक्मवतीको विवाह गरिदियो।

**रुक्मिण्यास्तनयां राजन् कृतवर्मसुतो बली।**
**उपयेमे विशालाक्षीं कन्यां चारुमतीं किल॥ २४॥**

**पदार्थ—**
**राजन्** = हे राजा (परीक्षित्)
**विशालाक्षीं** = ठुला-ठुला आँखा भएकी
**चारुमतीं** = चारुमती नामकी
**रुक्मिण्याः** = रुक्मिणीकी
**कन्यां** = कन्या
**तनयां** = छोरीलाई
**कृतवर्मसुतः** = कृतवर्माका छोरा
**बली** = बलीले
**किल** = निश्चय नै
**उपयेमे** = विवाह गरे

**वाक्यार्थ—** हे राजा परीक्षित् ! रुक्मिणीकी ठुला-ठुला आँखा भएकी चारुमती नामकी छोरी थिइन्। कृतवर्माका छोरा बलीले उनलाई विवाह गरे।

**दौहित्रायानिरुद्धाय पौत्रीं रुक्म्याददाद्धरेः।**
**रोचनां बद्धवैरोऽपि स्वसुः प्रियचिकीर्षया॥**
**जानन्नधर्मं तद् यौनं स्नेहपाशानुबन्धनः॥ २५॥**

**पदार्थ—**
**हरेः** = भगवान् श्रीकृष्णसँग
**बद्धवैरः अपि** = शत्रुतामा बाँधिएको भए पनि
**तत्** = त्यो
**यौनं** = वैवाहिक सम्बन्धलाई
**अधर्मं** = अधर्मको रूपमा
**जानन्** = जानेर पनि
**स्नेहपाशानुबन्धनः** = स्नेहको पाशमा बाँधिएको
**रुक्मी** = रुक्मीले
**स्वसुः** = बहिनी रुक्मिणीको
**प्रियचिकीर्षया** = प्रसन्नताको इच्छाले
**दौहित्राय** = आफ्नो नाति (छोरीको छोरो)
**अनिरुद्धाय** = अनिरुद्धलाई
**रोचनां** = रोचना नाम गरेकी
**पौत्रीं** = आफ्नी नातिनी (छोरोकी छोरी)
**आददात्** = दियो

**वाक्यार्थ—** रुक्मीको भगवान् श्रीकृष्णसँग शत्रुता भए पनि र यो वैवाहिक सम्बन्ध धर्मविरुद्ध हो भन्ने थाहा पाएर पनि बहिनी रुक्मिणीको प्रसन्नताका लागि उसले आफ्नी नातिनी (छोरोको छोरी) रोचना श्रीकृष्णको नाति (प्रद्युम्न र रुक्मवतीको छोरा) अनिरुद्धलाई दियो।

**तस्मिन्नभ्युदये राजन् रुक्मिणी रामकेशवौ।**
**पुरं भोजकटं जग्मुः साम्बप्रद्युम्नकादयः॥ २६॥**

**पदार्थ—**
**राजन्** = हे राजा परीक्षित्
**तस्मिन्** = त्यो
**अभ्युदये** = अनिरुद्धको विवाहोत्सवमा
**रुक्मिणी** = रुक्मिणी
**रामकेशवौ** = बलराम, श्रीकृष्ण
**साम्बप्रद्युम्नकादयः** = साम्ब, प्रद्युम्न आदि
**भोजकटं** = भोजकट
**पुरं** = नगरमा
**जग्मुः** = जानुभयो

**वाक्यार्थ—** हे राजा परीक्षित् ! अनिरुद्धको विवाहोत्सवमा रुक्मिणी, बलराम, श्रीकृष्ण, साम्ब, प्रद्युम्न आदि रुक्मीको भोजकट नगरमा जानुभयो।

**तस्मिन् निवृत्त उद्वाहे कालिङ्गप्रमुखा नृपाः।**
**दृप्तास्ते रुक्मिणं प्रोचुर्बलमक्षैर्विनिर्जय॥ २७॥**

**पदार्थ–**
**तस्मिन्** = त्यो
**उद्वाहे** = वैवाहिक कार्यक्रम
**निवृत्ते** = सकिएपछि
**कालिङ्गप्रमुखाः** = कलिङ्गराज आदि (जो)
**दृप्ताः** = अहङ्कारी
**नृपाः** = राजाहरू थिए
**ते** = तिनीहरूले
**रुक्मिणं** = रुक्मीलाई
**प्रोचुः** = भने
**अक्षैः** = जुवा खेलेर
**बलं** = बलरामलाई
**विनिर्जय** = जित

**वाक्यार्थ–** अनिरुद्धको वैवाहिक कार्यक्रम सुसम्पन्न भइसकेपछि कलिङ्गराज आदि अहङ्कारी राजाहरूले रुक्मीलाई भने– 'तिमी जुवा खेलेर बलरामलाई हराऊ।'

**अनक्षज्ञो ह्ययं राजन्नपि तद्व्यसनं महत्।**
**इत्युक्तो बलमाहूय तेनाक्षैरुक्म्यदीव्यत॥ २८॥**

**पदार्थ–**
**राजन्** = हे राजा रुक्मी
**अयं हि** = यी बलराम
**अनक्षज्ञः अपि** = जुवा खेल्न नजान्ने भए पनि (यिनमा)
**तद्व्यसनं** = त्यसको व्यसन
**महत्** = धेरै छ
**इति** = यसो
**उक्तः** = भनिएका
**रुक्मी** = रुक्मीले
**बलं** = बलरामलाई
**आहूय** = बोलाएर
**तेन** = उहाँका साथ
**अक्षैः** = जुवा
**अदीव्यत** = खेल्न थाल्यो

**वाक्यार्थ–** 'हे राजा रुक्मी ! बलरामलाई जुवा राम्ररी खेल्न आउँदैन, तर यिनको जुवा खेल्ने ठुलो व्यसन छ' भनी ती राजाहरूले भनेपछि भनिएका रुक्मीले बलरामलाई बोलायो अनि उहाँका साथ जुवा खेल्न थाल्यो।

**शतं सहस्रमयुतं रामस्तत्राददे पणम्।**
**तं तु रुक्म्यजयत् तत्र कालिङ्गः प्राहसद् बलम्॥**
**दन्तान् सन्दर्शयन्नुच्चैर्नामृष्यत् तद्धलायुधः॥ २९॥**

**पदार्थ–**
**रामः** = बलरामले
**तत्र** = त्यस जुवामा
**शतं** = सय
**सहस्रं** = हजार र
**अयुतं** = दश हजार (स्वर्णमुद्रा)
**पणं** = च्याँखे
**आददे** = थाप्नुभयो
**रुक्मी** = रुक्मीले
**तं तु** = ती च्याँखेलाई
**अजयत्** = जित्यो
**तत्र** = त्यो वेलामा
**दन्तान्** = दाँतहरू
**सन्दर्शयन्** = देखाउँदै
**कालिङ्गः** = कलिङ्गराज
**बलं** = बलरामलाई (उपहास गर्दै)
**उच्चैः** = बेसरी
**प्राहसत्** = हाँस्यो
**हलायुधः** = हलो लिने बलरामले
**तत्** = कलिङ्गराजको त्यो उपहासलाई
**न अमृष्यत्** = सहनुभएन

**वाक्यार्थ–** बलरामले जुवामा क्रमशः सय, हजार अनि दशहजार स्वर्णमुद्रा च्याँखे थाप्नुभयो। ती

सबै स्वर्णमुद्राहरू रुक्मीले जित्यो। रुक्मीको जित हुँदै गएपछि कलिङ्गराज बलरामको उपहास गर्दै दाँतहरू देखाएर बेसरी हाँस्न थाल्यो। आफूलाई कलिङ्गराजले उपहास गरेको बलरामलाई सह्य भएन।

**ततो लक्षं रुक्म्यगृह्णाद् ग्लहं तत्राजयद् बलः।**
**जितवानहमित्याह रुक्मी कैतवमाश्रितः॥ ३०॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **ततः** = त्यसपछि | **तत्र** = त्यस वेला | **अहं** = मैले |
| **रुक्मी** = रुक्मीले | **बलः** = बलरामले | **जितवान्** = जितेँ |
| **लक्षं** = एक लाख | **अजयत्** = जित्नुभयो | **इति** = भनेर |
| **ग्लहं** = च्याँखे | **कैतवं** = छलकपट | **आह** = भन्न थाल्यो |
| **अगृह्णात्** = थाप्यो | **आश्रितः** = स्वीकार गरेका | |
| | **रुक्मी** = रुक्मीले | |

**वाक्यार्थ–** त्यसपछि रुक्मीले एक लाख स्वर्णमुद्रा च्याँखे थाप्यो, त्यसलाई बलरामले जित्नुभयो। तर छलकपट गर्ने रुक्मीले बलरामको त्यो जितलाई स्वीकार गरेन, बरु 'मैले जितेँ, मैले जितेँ' भन्न थाल्यो।

**मन्युना क्षुभितः श्रीमान् समुद्र इव पर्वणि।**
**जात्यारुणाक्षोऽतिरुषा न्यर्बुदं ग्लहमाददे॥ ३१॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **मन्युना** = क्रोधले | **क्षुभितः** = क्षुब्ध हुनुभएका | **अतिरुषा** = अति नै रिसाएर |
| **पर्वणि** = पूर्णिमाको दिन | **जात्या** = स्वभावैले | **न्यर्बुदं** = दश करोड |
| **समुद्रः इव** = समुद्र जैँ | **अरुणाक्षः** = राता आँखा भएका | **ग्लहं** = च्याँखे (दाउमा) |
| | **श्रीमान्** = श्रीमान् बलरामले | **आददे** = थाप्नुभयो |

**वाक्यार्थ–** पूर्णिमाको दिन समुद्रमा ज्वारभाटा उठे जैँ उठेको क्रोधको वेगले क्षुब्ध भएका र स्वभावैले राता आँखा भएका श्रीमान् बलरामले रिसाएर दश करोड स्वर्णमुद्रा च्याँखे थाप्नुभयो।

**तं चापि जितवान् रामो धर्मेण छलमाश्रितः।**
**रुक्मी जितं मयात्रेमे वदन्तु प्राश्निका इति॥ ३२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **रामः** = बलरामले | **छलं** = छललाई | **इमे** = यहाँ अवस्थित |
| **तं च अपि** = त्यो दश करोड स्वर्णमुद्रा पनि | **आश्रितः** = आश्रय लिएका | **प्राश्निकाः** = साक्षी कलिङ्गराज आदिले |
| **धर्मेण** = जुवाको नियम अनुसार | **रुक्मी** = रुक्मी चाहिँ | **वदन्तु** = निर्णय गर्नुहुन्छ |
| **जितवान्** = जित्नुभयो (तर) | **मया** = मद्वारा | **इति** = यसो (भन्न थाल्यो) |
| | **जितं** = जितिएको हो | |
| | **अत्र** = यस विषयमा | |

**वाक्यार्थ–** यसपटक पनि जुवाको नियम अनुसार ती दश करोड स्वर्णमुद्राहरू बलरामले जित्नुभयो। तर छल गर्दै रुक्मीले भन्यो– 'यी स्वर्णमुद्राहरू मैले जितेको हुँ, नपत्याए यसको निर्णय यहाँ बस्नुभएका हाम्रो खेलका साक्षी कलिङ्गराज आदिले गर्नुहुन्छ।'

**तदाब्रवीन्नभोवाणी बलेनैव जितो ग्लहः।**

**धर्मतो वचनेनैव रुक्मी वदति वै मृषा॥ ३३॥**

**पदार्थ–**
**तदा** = त्यही वेला
**नभोवाणी** = आकाशवाणीले
**अब्रवीत्** = भन्यो
**धर्मतः** = जुवाको नियम अनुसार
**बलेन एव** = बलरामद्वारा नै
**ग्लहः** = बाजी (दाउ)
**जितः** = जितिएको हो
**रुक्मी** = रुक्मीले त
**वचनेन एव** = वचनद्वारा मात्र
(मैले जितेँ भनेर)
**मृषा वै** = झुट नै
**वदति** = बोलिरहेको छ

**वाक्यार्थ–** त्यसै वेला आकाशवाणी भयो– 'जुवाको नियम अनुसार बलरामद्वारा नै बाजी जितिएको हो, रुक्मीले मैले जितेको हुँ भनेर झुटो बोलिरहेको छ।'

**तामनादृत्य वैदर्भो दुष्टराजन्यचोदितः।**

**सङ्कर्षणं परिहसन् बभाषे कालचोदितः॥ ३४॥**

**पदार्थ–**
**दुष्टराजन्यचोदितः** = दुष्ट राजाहरूबाट प्रेरित भएका
**कालचोदितः** = कालले कुत्कुत्याएको
**वैदर्भः** = विदर्भमा जन्मिएको रुक्मीले
**तां** = त्यो आकाशवाणीलाई
**अनादृत्य** = बेवास्ता गरी
**सङ्कर्षणं** = बलरामलाई
**परिहसन्** = उपहास गर्दै
**बभाषे** = भन्न थाल्यो

**वाक्यार्थ–** दुष्ट राजाहरूद्वारा उचालिएको र कालद्वारा कुत्कुत्याइएको रुक्मीले आकाशवाणीलाई बेवास्ता गरी बलरामलाई उपहास गर्दै भन्न थाल्यो।

**नैवाक्षकोविदा यूयं गोपाला वनगोचराः।**

**अक्षैर्दीव्यन्ति राजानो बाणैश्च न भवादृशाः॥ ३५॥**

**पदार्थ–**
**यूयं** = तिमीहरू
**अक्षकोविदाः** = जुवाको दक्ष खेलाडी
**न एव** = होइनौ
**गोपालाः** = गोठाला
**वनगोचराः** = वनमा डुल्ने जङ्गली (हौ)
**राजानः** = (हामी जस्ता) राजाहरू नै
**अक्षैः** = जुवाद्वारा
**बाणैः च** = बाण पनि
**दीव्यन्ति** = खेल्दछन्
**भवादृशाः** = तिमीहरू जस्ता गोठालाले
**न** = खेल्दैनन्

**वाक्यार्थ–** तिमीहरू जुवाको खेलाडी होइनौ। तिमीहरू त गाई चराउने गोठाला र वनमा बस्ने

जङ्गली हौ। हामी जस्ता राजाहरूले मात्र जुवा र बाणको खेल खेल्दछन्। तिमीहरू जस्ता जङ्गली गोठालाले खेल्दैनन्।

**रुक्मिणैवमधिक्षिप्तो राजभिश्चोपहासितः।**
**क्रुद्धः परिघमुद्यम्य जघ्ने तं नृम्णसंसदि ॥ ३६ ॥**

**पदार्थ—**
**एवं** = यस्ता वचनबाट
**रुक्मिणा** = रुक्मीद्वारा
**अधिक्षिप्तः** = अपमानित गरिनुभएका र
**राजभिः च** = अन्य राजाहरूद्वारा पनि
**उपहासितः** = उपहास गरिनुभएका
**क्रुद्धः** = अत्यन्तै रिसाउनुभएका बलरामले
**परिघं** = फलामको मुङ्ग्रो
**उद्यम्य** = उठाएर
**नृम्णसंसदि** = विवाहोत्सवको सभामा
**तं** = ती रुक्मीलाई
**जघ्ने** = मार्नुभयो

**वाक्यार्थ—** यस्ता कुरा गरेर रुक्मीले बलरामलाई अपमानित गऱ्यो र अन्य राजाहरूले पनि उपहास गरे। त्यसपछि बलराम अत्यन्त क्रुद्ध हुनुभयो र उहाँले फलामको मुङ्ग्रो उठाई त्यसले प्रहार गरेर विवाहको सभामा नै रुक्मीलाई मार्नुभयो।

**कलिङ्गराजं तरसा गृहीत्वा दशमे पदे।**
**दन्तानपातयत् क्रुद्धो योऽहसद् विवृतैर्द्विजैः ॥ ३७ ॥**

**पदार्थ—**
**यः** = जसले
**विवृतैः** = मुख खुलाउँदा देखिएका
**द्विजैः** = दाँतद्वारा
**अहसत्** = हाँस्यो (त्यो)
**कलिङ्गराजं** = कलिङ्गराजलाई
**तरसा** = हातार हतार (भाग्दै गर्दा)
**दशमे पदे** = दश पाइलामा नै
**गृहीत्वा** = समातेर
**क्रुद्धः** = रिसाएका बलरामले
**दन्तान्** = दाँतहरू
**अपातयत्** = झारिदिनुभयो

**वाक्यार्थ—** पहिले दाँत देखाएर बलरामलाई उपहास गर्दै ङिच्च हाँस्ने कलिङ्गराज डराएर हतार हतार भाग्न लाग्यो, तर दश पाइला मात्रै के भागेको थियो, बलरामले त्यसलाई तुरुन्त समात्नुभयो र रिसाएका बलरामले त्यसका दाँतहरू झारिदिनुभयो।

**अन्ये निर्भिन्नबाहूरुशिरसो रुधिरोक्षिताः।**
**राजानो दुद्रवुर्भीता बलेन परिघार्दिताः ॥ ३८ ॥**

**पदार्थ—**
**बलेन** = बलरामद्वारा
**परिघार्दिताः** = मुङ्ग्रोको प्रहारले घाइते बनाइएका
**निर्भिन्नबाहूरुशिरसः** = बाहु, तिघ्रा र शिरहरू भाँचिएका
**रुधिरोक्षिताः** = रगतमा लत्पतिएका
**अन्ये** = अरू पनि रुक्मीपक्षका
**राजानः** = राजाहरू
**भीताः** = डराएर
**दुद्रवुः** = भागे

**वाक्यार्थ–** बलरामद्वारा मुड्ग्रोले हानेर घाइते बनाइएका अन्य राजाहरूमध्ये कतिको बाहु, तिघ्रा र शिरहरू भाँचिएका थिए भने कति रगतमा लत्पतिएका थिए। तिनीहरू सबै डराएर भागे।

**निहते रुक्मिणि श्याले नाब्रवीत् साध्वसाधु वा।**
**रुक्मिणीबलयो राजन् स्नेहभङ्गभयाद्धरिः॥ ३९॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**श्याले** = आफ्नो जेठान
**रुक्मिणि** = रुक्मी
**निहते** = मारिएपछि
**हरिः** = श्रीकृष्णले
**रुक्मिणीबलयोः** = रुक्मिणी र बलरामको
**स्नेहभङ्गभयात्** = स्नेह भङ्ग हुने डरले
**साधु** = राम्रो
**असाधु वा** = अथवा नराम्रो
**न अब्रवीत्** = केही बोल्नुभएन

**वाक्यार्थ–** हे राजा परीक्षित् ! आफ्नो जेठान रुक्मी मारिएपछि श्रीकृष्णले त्यस घटनालाई लिएर 'राम्रो भयो' वा 'नराम्रो भयो' केही भन्नुभएन। पत्नी रुक्मिणी र दाजु बलरामप्रतिको स्नेह भङ्ग हुने डरले उहाँले केही नबोल्नुभएको हो।

**ततोऽनिरुद्धं सह सूर्यया वरं रथं समारोप्य ययुः कुशस्थलीम्।**
**रामादयो भोजकटाद् दशार्हाः सिद्धाखिलार्था मधुसूदनाश्रयाः॥ ४०॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**सिद्धाखिलार्थाः** = (अनिरुद्धको विवाह र शत्रुवध आदि) सम्पूर्ण प्रयोजन सिद्ध भएका
**मधुसूदनाश्रयाः** = श्रीकृष्णका आश्रित
**रामादयः** = बलराम आदि
**दशार्हाः** = यदुवंशीहरू
**सूर्यया सह** = नवविवाहिता दुलही रोचना (सूर्या)का साथ
**अनिरुद्धं** = अनिरुद्धलाई
**वरं** = श्रेष्ठ
**रथं** = रथमा
**समारोप्य** = राखेर
**भोजकटात्** = भोजकट नगरबाट
**कुशस्थलीम्** = द्वारका नगरीमा
**ययुः** = पुग्नुभयो

**वाक्यार्थ–** त्यसपछि अनिरुद्धको विवाह र शत्रुको वध आदि आफ्ना सबै प्रयोजनहरू सिद्ध भएपछि भगवान् श्रीकृष्णको आश्रयमा रहेका बलराम लगायत अन्य यदुवंशीहरू नवविवाहित दुलही रोचना (सूर्या)का साथ दुलाहा अनिरुद्धलाई श्रेष्ठ रथमा राखेर भोजकट नगरबाट आफ्नो नगर द्वारकामा फर्कनुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**
**अनिरुद्धविवाहे रुक्मिवधो नामैकषष्टितमोऽध्यायः॥ ६१॥**

# अथ द्विषष्टितमोऽध्यायः

## उषा र अनिरुद्धको भेट

**राजोवाच** (महाराज परीक्षित्‌ले भन्नुभयो)

**बाणस्य तनयामूषामुपयेमे यदूत्तमः।**

**तत्र युद्धमभूद् घोरं हरिशङ्करयोर्महत्॥**

**एतत् सर्वं महायोगिन् समाख्यातुं त्वमर्हसि॥ १॥**

**पदार्थ–**
**यदूत्तमः** = यदुश्रेष्ठ अनिरुद्धले
**बाणस्य** = बाणकी
**तनयां** = छोरी
**ऊषां** = ऊषालाई
**उपयेमे** = विवाह गर्नुभयो
**तत्र** = त्यस अवसरमा
**हरिशङ्करयोः** = श्रीकृष्ण र शङ्करको
**महत्** = ठुलो
**घोरं** = भयङ्कर
**युद्धं** = युद्ध
**अभूत्** = भयो
**महायोगिन्** = हे योगीश्वर !
**त्वं** = हजुर
**एतत्** = यस विषयमा
**सर्वं** = सबै कुरा
**समाख्यातुं** = बताउन
**अर्हसि** = योग्य हुनुहुन्छ

**वाक्यार्थ–** यदुश्रेष्ठ अनिरुद्धले बाणकी छोरी ऊषासँग विवाह गर्नुभयो र यसै अवसरमा भगवान् श्रीकृष्ण र शङ्करको भयङ्कर ठुलो युद्ध पनि भयो। हे योगीश्वर ! हजुरले मलाई कृपा गरेर यो सबै कुरा बताउनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**बाणः पुत्रशतज्येष्ठो बलेरासीन्महात्मनः।**

**येन वामनरूपाय हरयेऽदायि मेदिनी॥ २॥**

**पदार्थ–**
**येन** = जसद्वारा
**वामनरूपाय** = वामन अवतार
**हरये** = भगवान् श्रीहरिलाई
**मेदिनी** = पृथिवी
**अदायि** = दिइएको थियो
**महात्मनः** = ती महात्मा
**बलेः** = बलिका
**पुत्रशतज्येष्ठः** = सय भाइ छोराहरूमा जेठो
**बाणः** = बाण
**आसीत्** = थियो

**वाक्यार्थ–** जसले वामनावतार भगवान् श्रीहरिलाई पृथिवी दान दिएका थिए ती दानवीर महात्मा बलिका सय जना छोराहरू थिए, तीमध्ये बाण जेठो थियो।

**तस्यौरसः सुतो बाणः शिवभक्तिरतः सदा ।**
**मान्यो वदान्यो धीमांश्च सत्यसन्धो दृढव्रतः ॥ ३ ॥**

**पदार्थ—**
**तस्य** = ती बलिको
**औरसः** = आफ्नै
**सुतः** = छोरो
**बाणः** = बाण
**मान्यः** = सम्मानयोग्य
**वदान्यः** = उदार चित्त भएको
**धीमान्** = बुद्धिमान्
**सत्यसन्धः** = सत्यनिष्ठ
**दृढव्रतः** = दृढव्रत
**सदा** = सधैँ
**शिवभक्तिरतः च** = शिवको भक्तिमा निमग्न पनि थियो

**वाक्यार्थ—** बलिको आफ्नै छोरो बाण सम्मानयोग्य, उदार चित्त भएको, बुद्धिमान्, दृढप्रतिज्ञ, दृढव्रत र शिवको भक्तिमा तल्लीन रहने व्यक्ति थियो।

**शोणिताख्ये पुरे रम्ये स राज्यमकरोत् पुरा ॥**
**तस्य शम्भोः प्रसादेन किङ्करा इव तेऽमराः ॥**
**सहस्रबाहुर्वाद्येन ताण्डवेऽतोषयन्मृडम् ॥ ४ ॥**

**पदार्थ—**
**सः** = त्यो बाणले
**पुरा** = पहिले
**शोणिताख्ये** = शोणित नाम गरेको
**रम्ये** = अत्यन्त रमणीय
**पुरे** = नगरमा
**राज्यं** = राज्य
**अकरोत्** = गऱ्यो
**ते** = ती (इन्द्र आदि)
**अमराः** = देवताहरू
**शम्भोः** = भगवान् शिवको
**प्रसादेन** = कृपाद्वारा
**तस्य** = त्यो बाणको
**किङ्कराः इव** = नोकर जैँ थिए
**सहस्रबाहुः** = हजार ओटा हात भएको बाणले
**मृडं** = शिवलाई
**ताण्डवे** = ताण्डव नृत्यको समयमा
**वाद्येन** = बाजाहरूद्वारा
**अतोषयत्** = प्रसन्न गरायो

**वाक्यार्थ—** बाण पहिले रमणीय शोणित नगरमा राज्य गर्दथ्यो। भगवान् शिवको कृपाद्वारा इन्द्र आदि देवताहरू बाणका नोकर जस्ता भएका थिए। हजार ओटा हात भएको त्यो बाणले एक दिन भगवान् शिवको ताण्डव नृत्यको समयमा अनेक प्रकारका बाजाहरू बजाएर उहाँलाई प्रसन्न पाऱ्यो।

**भगवान् सर्वभूतेशः शरण्यो भक्तवत्सलः ।**
**वरेण छन्दयामास स तं वव्रे पुराधिपम् ॥ ५ ॥**

**पदार्थ—**
**सर्वभूतेशः** = सम्पूर्ण प्राणीहरूका स्वामी
**शरण्यः** = शरणागतका रक्षक
**भक्तवत्सलः** = भक्तहरूका प्रेमी
**भगवान्** = भगवान् शिवले

(बाणलाई)
**वरेण** = वरदान
**छन्दयामास** = माग्न भन्नुभयो
**सः** = त्यो बाणले
**तं** = उहाँ शिवलाई
**पुराधिपं** = आफ्नो नगरको
रक्षकको रूपमा रहन
**वव्रे** = वर माग्यो

**वाक्यार्थ–** सम्पूर्ण प्राणीहरूका स्वामी, शरणागतका रक्षक र भक्तहरूका प्रेमी भगवान् शिवले बाणलाई 'वर माग' भन्नुभयो, बाणले 'हजुर मेरो नगरको रक्षकको रूपमा रहनुहोस्' भनी वर माग्यो।

**स एकदाह गिरिशं पार्श्वस्थं वीर्यदुर्मदः।**
**किरीटेनार्कवर्णेन संस्पृशंस्तत्पदाम्बुजम्॥ ६॥**

**पदार्थ–**
**वीर्यदुर्मदः** = शक्तिले उन्मत्त
**सः** = त्यो बाणले
**एकदा** = एकदिन
**अर्कवर्णेन** = सूर्य झैं चम्किलो
वर्ण भएको
**किरीटेन** = मुकुटद्वारा
**तत्पदाम्बुजं** = भगवान् शिवको
चरणकमललाई
**संस्पृशन्** = छुँदै
**पार्श्वस्थं** = नजिकै रहनुभएका
**गिरिशं** = भगवान् शिवलाई
**आह** = भन्यो

**वाक्यार्थ–** शक्तिका कारण उन्मत्त हुँदै गएका बाणले एक दिन सूर्य झैं चम्किलो आफ्नो मुकुटले नजिकै रहनुभएका भगवान् शिवको चरणकमललाई छुँदै भन्यो।

**नमस्ये त्वां महादेव लोकानां गुरुमीश्वरम्।**
**पुंसामपूर्णकामानां कामपूरामराङ्घ्रिपम्॥ ७॥**

**पदार्थ–**
**महादेव** = हे देवाधिदेव
**लोकानां** = सम्पूर्ण जगत्का
**गुरुं** = गुरु
**ईश्वरं** = शासक
**अपूर्णकामानां** = मनोरथ पूर्ण
नभएका
**पुंसां** = व्यक्तिहरूका
**कामपूरामराङ्घ्रिपं** = इच्छा पूर्ण
गराइदिने कल्पवृक्ष समान
**त्वां** = हजुरलाई
**नमस्ये** = नमस्कार गर्दछु

**वाक्यार्थ–** हे देवाधिदेव ! हजुर सम्पूर्ण जगत्को गुरु र शासक हुनुहुन्छ। मनोरथ पूर्ण नभएका व्यक्तिहरूको मनोरथ पूर्ण गराइदिने कल्पवृक्ष समानका हजुरलाई म नमस्कार गर्दछु।

**दोःसहस्रं त्वया दत्तं परं भाराय मेऽभवत्।**
**त्रिलोक्यां प्रतियोद्धारं न लभे त्वदृते समम्॥ ८॥**

**पदार्थ–**
**त्वया** = हजुरद्वारा
**मे** = मेरा लागि
**दोःसहस्रं** = हजार बाहुहरू
**दत्तं** = दिइए
**परं** = तर (त्यो)
**भाराय** = भारका लागि
**अभवत्** = भयो
**त्वदृते** = हजुरलाई छाडेर

**त्रिलोक्यां** = तीनै लोकमा
**समं** = मेरा बराबरको
**प्रतियोद्धारं** = प्रतिस्पर्धी योद्धा
**न लभे** = भेटिनँ

**वाक्यार्थ–** हजुरले मलाई वरदानका रूपमा हजार बाहुहरू प्रदान गर्नुभयो, तर ती बाहुहरू मेरा लागि भार मात्र भए, किनभने हजुर बाहेक यी तीनै लोकमा म बराबरको प्रतिस्पर्धी योद्धा मैले प्राप्त गर्न सकिनँ (अतः हजुर नै मेरो प्रतिस्पर्धी योद्धा बन्नुहोस् र मेरो युद्ध गर्ने इच्छा पूर्ण होस्)।

**कण्डूत्या निभृतैर्दोर्भिर्युयुत्सुर्दिग्गजानहम्।**
**आद्यायां चूर्णयन्नद्रीन् भीतास्तेऽपि प्रदुद्रुवुः॥ ९॥**

**पदार्थ–**
**आद्य** = हे आदिदेव
**कण्डूत्या** = युद्ध गर्ने चिलाइले
**निभृतैः** = पूर्ण
**दोर्भिः** = बाहुद्वारा
**युयुत्सुः** = युद्ध गर्ने इच्छा भएको
**अहं** = मैले
**अद्रीन्** = पहाडहरूलाई
**चूर्णयन्** = धुलो बनाउँदै
**दिग्गजान्** = दिग्गजहरू समक्ष
**अयाम्** = गएँ (तर)
**ते अपि** = ती दिग्गजहरू पनि
**भीताः** = डराएर
**प्रदुद्रुवुः** = भागे

**वाक्यार्थ–** हे आदिदेव ! एक पटक युद्ध गर्ने इच्छाले मेरा हातहरू चिलाउन थाले र म लडाइँ गर्न भनेर पहाडहरूलाई धुलो पार्दै दिग्गजहरू भएको ठाउँमा गएँ तर ती दिग्गजहरू मसँग डराएर भागे।

**तच्छ्रुत्वा भगवान् क्रुद्धः केतुस्ते भज्यते यदा।**
**त्वद्दर्पघ्नं भवेन्मूढ संयुगं मत्समेन ते॥ १०॥**

**पदार्थ–**
**तत्** = बाणको त्यो कुरा
**श्रुत्वा** = सुनेर
**भगवान्** = भगवान् शिवले
**क्रुद्धः** = रिसाएर (भन्नुभयो)
**मूढ** = हे मूर्ख
**यदा** = जब
**ते** = तेरो
**केतुः** = झन्डा
**भज्यते** = झर्दछ (तब)
**त्वद्दर्पघ्नं** = तेरो घमन्डलाई नाश गर्ने
**मत्समेन** = मबराबरको योद्धासँग
**ते** = तेरो
**संयुगं** = युद्ध
**भवेत्** = हुनेछ

**वाक्यार्थ–** बाणको घमन्डी कुरा सुनेर भगवान् शिवले रिसाउँदै भन्नुभयो– हे मूर्ख ! जब तेरो झन्डा झर्दछ, त्यस वेला मबराबरको कुनै योद्धासँग तेरो युद्ध हुनेछ (र त्यही योद्धाले तेरो घमन्डलाई नष्ट गरिदिनेछ)।

**इत्युक्तः कुमतिर्हृष्टः स्वगृहं प्राविशन्नृप।**
**प्रतीक्षन् गिरिशादेशं स्ववीर्यनशनं कुधीः॥ ११॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**इति** = यसरी

**उक्तः** = भगवान्द्वारा बताइएको
**कुमतिः** = दुर्बुद्धि बाणासुर
**हृष्टः** = प्रसन्न भएर
**स्वगृहं** = आफ्नो महलमा
**प्राविशत्** = फर्कियो (त्यसपछि)
**कुधीः** = बुद्धि भ्रष्ट भएको बाणासुर
**स्ववीर्यनशनं** = आफ्नो वीर्यनाशको सूचना दिने
**गिरिशादेशं** = भगवान्ले बताएको झन्डा खस्ने दिन
**प्रतीक्षन्** = प्रतीक्षा गर्न थाल्यो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! भगवान् शिवको कुरा सुनेर बाणासुर आफ्नो महलमा फर्कियो। बुद्धि भ्रष्ट भएको बाणासुर आफ्नो वीर्यनाशको सूचक भगवान्ले भने अनुसार आफ्नो झन्डा कहिले खस्ला भनेर झन्डा खस्ने दिनको प्रतीक्षा गरेर बस्न थाल्यो।

**तस्योषा नाम दुहिता स्वप्ने प्राद्युम्निना रतिम्।**
**कन्यालभत कान्तेन प्रागदृष्टश्रुतेन सा॥ १२॥**

**पदार्थ–**
**तस्य** = त्यो बाणासुरको
**ऊषा नाम** = ऊषा नाम गरेकी
**दुहिता** = छोरी थिइन्
**सा** = ती
**कन्या** = कन्या ऊषाले
**प्रागदृष्टश्रुतेन** = पहिले कहिल्यै नदेखिएका र नसुनिएका
**कान्तेन** = अति सुन्दर
**प्राद्युम्निना** = प्रद्युम्नपुत्र अनिरुद्धसँग
**स्वप्ने** = स्वप्नमा
**रतिं** = सहवास
**अलभत** = प्राप्त गरिन्

**वाक्यार्थ–** बाणासुरकी ऊषा नामकी छोरी थिइन्। एक दिन उनले सपनामा प्रद्युम्नपुत्र अत्यन्त सुन्दर पुरुष अनिरुद्धसँग सहवास गरिन्। उषाले अनिरुद्धलाई न पहिले कहिल्यै देखेकी थिइन्, न त अनिरुद्धको विषयमा सुनेकी नै थिइन्।

**सा तत्र तमपश्यन्ती क्वासि कान्तेति वादिनी।**
**सखीनां मध्य उत्तस्थौ विह्वला व्रीडिता भृशम्॥ १३॥**

**पदार्थ–**
**तत्र** = त्यो स्वप्नमा नै
**तं** = ती अनिरुद्धलाई
**अपश्यन्ती** = नदेखेर
**विह्वला** = विह्वल बनेकी
**सा** = ती ऊषाले
**कान्त** = हे प्रिय
**क्व** = कहाँ
**असि** = हुनुहुन्छ
**इति** = यस्तो
**वादिनी** = भन्दै
**सखीनां** = सङ्गिनीहरूको
**मध्ये** = बिचमा
**भृशं** = अत्यन्त
**व्रीडिता** = लजाउँदै
**उत्तस्थौ** = उठिन्

**वाक्यार्थ–** सपनामा नै ऊषाले अनिरुद्धलाई देखिनन् अनि अत्यन्त विह्वल भएर भन्न थालिन्– 'हे प्रिय ! तपाईं कहाँ हुनुहुन्छ ?' त्यही वेला सङ्गिनीहरूको बिचमा उनी अत्यन्त लजाउँदै उठिन्।

**बाणस्य मन्त्री कुम्भाण्डश्चित्रलेखा तु तत्सुता।**
**सख्यपृच्छत् सखीमूषां कौतूहलसमन्विता॥ १४॥**

**पदार्थ—**
**बाणस्य** = बाणासुरको
**मन्त्री** = मन्त्री
**कुम्भाण्डः** = कुम्भाण्ड थिए
**तत्सुता** = ती कुम्भाण्डकी छोरी
**चित्रलेखा तु** = चित्रलेखा चाहिँ
**सखी** = ऊषाकी साथी थिइन्
**कौतूहलसमन्विता** = आश्चर्य-चकित भएकी चित्रलेखाले
**सखीम्** = सङ्गिनी
**ऊषां** = ऊषालाई
**अपृच्छत्** = सोधिन्

**वाक्यार्थ—** बाणासुरका मन्त्री कुम्भाण्डकी छोरीको नाम चित्रलेखा थियो। चित्रलेखा र ऊषा साथी थिए। (ऊषाको त्यो अवस्था देखेर) आश्चर्यचकित भएकी चित्रलेखाले ऊषालाई सोधिन्।

**कं त्वं मृगयसे सुभ्रूः कीदृशस्ते मनोरथः।**
**हस्तग्राहं न तेऽद्यापि राजपुत्र्युपलक्षये॥ १५॥**

**पदार्थ—**
**राजपुत्रि** = हे राजकुमारी
**ते** = तिम्रो
**हस्तग्राहं** = पाणिग्रहण गर्ने पति
**अद्य अपि** = आजसम्म
**न उपलक्षये** = देखेकी छैन
**सुभ्रूः** = हे सुन्दरी
**त्वं** = तिमी
**कं** = कसलाई
**मृगयसे** = खोज्दैछ्यौ
**ते** = तिम्रो
**मनोरथः** = इच्छा
**कीदृशः** = कस्तो छ

**वाक्यार्थ—** हे राजपुत्री ! आजसम्म मैले तिम्रो पाणि ग्रहण गर्ने पति देखेको छैन। हे सुन्दरी ! तिमी कसलाई खोजिरहेकी छ्यौ ? तिम्रो कस्तो चाहना छ ?

**ऊषोवाच** (ऊषाले भनिन्)

**दृष्टः कश्चिन्नरः स्वप्ने श्यामः कमललोचनः।**
**पीतवासा बृहद्बाहुर्योषितां हृदङ्गमः॥ १६॥**

**पदार्थ—**
**श्यामः** = कालो कालो वर्ण भएको
**कमललोचनः** = कमल जस्तै आँखा भएको
**पीतवासाः** = पीताम्बर लगाएको
**बृहद्बाहुः** = लामा हात भएको
**योषितां** = स्त्रीहरूको
**हृदङ्गमः** = मनलाई आकर्षित गर्ने
**कश्चित्** = कुनै
**नरः** = पुरुष
**स्वप्ने** = स्वप्नमा
**दृष्टः** = देखियो

**वाक्यार्थ—** हे चित्रलेखा ! मैले सपनामा कालो-कालो वर्णको, पीताम्बर धारण गरेको, कमल जस्तै आँखा भएको, लामा हात भएको, स्त्रीहरूको मनलाई सजिलै आकर्षित गर्ने कुनै सुन्दर पुरुष देखेँ।

**तमहं मृगये कान्तं पाययित्वाधरं मधु।**
**क्वापि यातः स्पृहयतीं क्षिप्त्वा मां वृजिनार्णवे॥ १७॥**

**पदार्थ–**
**अधरं** = अधरको
**मधु** = मधु
**पाययित्वा** = पियाएर
**स्पृहयतीं** = उसैको चाहना गर्ने
**मां** = मलाई
**वृजिनार्णवे** = विरहजन्य दुःखको समुद्रमा
**क्षिप्त्वा** = छोडेर
**क्व अपि** = कतै
**यातः** = गयो
**अहं** = म
**तं** = त्यो
**कान्तं** = सुन्दर युवकलाई
**मृगये** = खोजिरहेकी छु

**वाक्यार्थ–** आज कसैले आफ्नो ओठको मधु पियाएर उसैको चाहना गर्ने मलाई विरहजन्य दुःखको समुद्रमा एक्लै छाडेर कता गयो कता ? अहिले म त्यही सुन्दर युवकलाई खोजिरहेकी छु।

**चित्रलेखोवाच** (चित्रलेखाले भनिन्)

**व्यसनं तेऽपकर्षामि त्रिलोक्यां यदि भाव्यते।**

**तमानेष्ये वरं यस्ते मनोहर्ता तमादिश ॥ १८ ॥**

**पदार्थ–**
**ते** = तिम्रो
**व्यसनं** = विरहव्यथालाई
**अपकर्षामि** = हटाउनेछु
**यः** = जुन
**ते** = तिम्रो
**मनोहर्ता** = मन हरण गर्ने त्यो युवक
**यदि** = यदि
**त्रिलोक्यां** = तीनै लोकमा
**भाव्यते** = प्राप्त हुन्छ भने
**तं** = त्यो
**वरं** = युवकलाई
**आनेष्ये** = ल्याउनेछु
**तं** = त्यो पुरुषका बारेमा
**आदिश** = बताऊ

**वाक्यार्थ–** हे राजकुमारी ! जुन युवकले तिम्रो मन हरण गरेको छ, त्यो पुरुष तीनै लोकभित्र कहीं प्राप्त हुन्छ भने म त्यसलाई खोजेर तिमी भएको ठाउँमा ल्याउनेछु र तिम्रो विरहव्यथा हटाउनेछु। त्यो युवकका बारेमा बताऊ।

**इत्युक्त्वा देवगन्धर्वसिद्धचारणपन्नगान्।**

**दैत्यविद्याधरान् यक्षान् मनुजांश्च यथालिखत्॥ १९ ॥**

**पदार्थ–**
**इति** = यति
**उक्त्वा** = भनेर
**देवगन्धर्वसिद्धचारणपन्नगान्** = देवता, गन्धर्व, सिद्ध, चारण, पन्नग
**दैत्यविद्याधरान्** = दैत्य, विद्याधर
**यक्षान्** = यक्ष
**मनुजान् च** = मनुष्यहरूको पनि
**यथा** = यथावत् रूपमा
**अलिखत्** = चित्र बनाइन्

**वाक्यार्थ–** यति भनेर चित्रलेखाले देवता, गन्धर्व, सिद्ध, चारण, पन्नग, दैत्य, विद्याधर, यक्ष र मनुष्यहरूको जस्ताको त्यस्तै चित्र बनाइन्।

**मनुजेषु च सा वृष्णीन् शूरमानकदुन्दुभिम्।**

**व्यलिखद् रामकृष्णौ च प्रद्युम्नं वीक्ष्य लज्जिता ॥ २० ॥**

**पदार्थ—**
**सा** = ती चित्रलेखाले
**मनुजेषु च** = मनुष्यहरूमा पनि
**वृष्णीन्** = वृष्णिवंशी
**शूरं** = शूर
**आनकदुन्दुभिं** = वसुदेव
**रामकृष्णौ च** = बलराम र श्रीकृष्ण पनि
**व्यलिखत्** = चित्रमा लेखिन्
**प्रद्युम्नं** = प्रद्युम्नलाई
**वीक्ष्य** = देखेर
**लज्जिता** = (ऊषा) लजाइन्

**वाक्यार्थ—** चित्रलेखाले मनुष्यहरूमा पनि वृष्णिवंशी शूर (वसुदेवका पिता), वसुदेव, बलराम र श्रीकृष्णको पनि चित्र बनाइन्। प्रद्युम्नको चित्र देखेपछि ऊषा लजाइन् (किनभने अनिरुद्धसँग प्रद्युम्नको आकृति मिल्दथ्यो र यी मेरा ससुरा हुन् भन्ने पनि उनलाई लाग्यो)।

**अनिरुद्धं विलिखितं वीक्ष्योषावाङ्मुखी ह्रिया।**
**सोऽसावसाविति प्राह स्मयमाना महीपते॥ २१॥**

**पदार्थ—**
**महीपते** = हे राजा परीक्षित्
**विलिखितं** = चित्रमा अङ्कित
**अनिरुद्धं** = अनिरुद्धलाई
**वीक्ष्य** = देखेर
**ह्रिया** = लाजले
**अवाङ्मुखी** = मुख निहुराएकी
**ऊषा** = ऊषाले
**स्मयमाना** = मन्द मुस्कुराउँदै
**सः** = त्यो मैले देखेको युवक
**असौ** = यही हो
**असौ** = यही हो
**इति** = यसो
**प्राह** = भनिन्

**वाक्यार्थ—** हे परीक्षित्! जब ऊषाले चित्रमा अङ्कित अनिरुद्धलाई देखिन्, तब लाजले मुख निहुराइन् अनि मन्द मुस्कुराउँदै भनिन्— 'मैले स्वप्नमा देखेको युवक यही हो, यही हो।'

**चित्रलेखा तमाज्ञाय पौत्रं कृष्णस्य योगिनी।**
**ययौ विहायसा राजन् द्वारकां कृष्णपालिताम्॥ २२॥**

**पदार्थ—**
**राजन्** = हे राजा परीक्षित्
**योगिनी** = योगविद्या जानेकी
**चित्रलेखा** = चित्रलेखाले
**तं** = (ऊषाले बताए अनुसार) ती
**कृष्णस्य** = श्रीकृष्णका
**पौत्रं** = नाति अनिरुद्धलाई
**आज्ञाय** = जानेर
**विहायसा** = आकाशमार्गबाट
**कृष्णपालितां** = श्रीकृष्णद्वारा रक्षित
**द्वारकां** = द्वारका नगरी
**ययौ** = गइन्

**वाक्यार्थ—** हे राजा परीक्षित्! योगविद्या जानेकी चित्रलेखाले थाहा पाइन् कि ऊषाले सङ्केत गरेको युवक श्रीकृष्णका नाति अनिरुद्ध हुन्। त्यसपछि उनी आकाशमार्ग हुँदै श्रीकृष्णद्वारा सुरक्षित द्वारकानगरी गइन्।

**तत्र सुप्तं सुपर्यङ्के प्राद्युम्निं योगमास्थिता।**
**गृहीत्वा शोणितपुरं सख्यै प्रियमदर्शयत्॥ २३॥**

पदार्थ—
**योगं** = योगशक्ति
**आस्थिता** = स्वीकार गरेकी चित्रलेखाले
**तत्र** = त्यस द्वारकामा
**सुपर्यङ्के** = सुन्दर पलङमा
**सुप्तं** = सुतेका
**प्राद्युम्निं** = प्रद्युम्नपुत्र अनिरुद्धलाई
**गृहीत्वा** = लिएर
**शोणितपुरं** = शोणित पुरमा (पुऱ्याएर)
**सख्यै** = सङ्गिनी ऊषालाई
**प्रियं** = प्रिय अनिरुद्ध
**अदर्शयत्** = देखाइदिइन्

**वाक्यार्थ—** योगशक्तिद्वारा द्वारकामा पुगेकी चित्रलेखाले त्यहाँ सुन्दर पलङमा सुतिरहेका अनिरुद्धलाई योगबलद्वारा शोणित पुरमा पुऱ्याइन् अनि ऊषालाई उनको प्रियतमको दर्शन गराइदिइन्।

**सा च तं सुन्दरवरं विलोक्य मुदितानना।**
**दुष्प्रेक्ष्ये स्वगृहे पुंभिः रेमे प्राद्युम्निना समम्॥ २४॥**

पदार्थ—
**मुदितानना** = प्रसन्न अनुहार भएकी
**सा च** = ती ऊषाले पनि
**सुन्दरवरं** = अति सुन्दर
**तं** = ती अनिरुद्धलाई
**विलोक्य** = देखेर
**पुंभिः** = अन्य पुरुषहरूद्वारा
**दुष्प्रेक्ष्ये** = हेर्न पनि नसकिने
**स्वगृहे** = आफ्नो अन्तःपुरमा
**प्राद्युम्निना समं** = प्रद्युम्न पुत्र अनिरुद्धसँग
**रेमे** = रमण गर्न थालिन्

**वाक्यार्थ—** आफूले खोजेको सर्वश्रेष्ठ सुन्दर पुरुष अनिरुद्धलाई देखेर प्रसन्न भएकी उषाले अन्य पुरुषहरूले हेर्न पनि नसक्ने अन्तःपुरभित्र अनिरुद्धका साथमा रमण गर्न थालिन्।

**परार्ध्यवासःस्रग्गन्धधूपदीपासनादिभिः।**
**पानभोजनभक्ष्यैश्च वाक्यैः शुश्रूषयार्चितः॥ २५॥**
**गूढः कन्यापुरे शश्वत् प्रवृद्धस्नेहया तया।**
**नाहर्गणान् स बुबुधे ऊषयापहृतेन्द्रियः॥ २६॥**

पदार्थ—
**कन्यापुरे** = कन्या ऊषाको अन्तःपुरमा
**गूढः** = लुकेका
**शश्वत्प्रवृद्धस्नेहया** = सधैँ प्रेम बढ्दै गएकी
**तया** = ती
**ऊषया** = ऊषाबाट
**परार्ध्यवासःस्रग्गन्धधूपदीपासनादिभिः** = बहुमूल्य वस्त्र, माला, चन्दन, धूप, दीप, आसन आदिद्वारा
**पानभोजनभक्ष्यैः** = पेयपदार्थ, भोज्य वस्तु, भक्ष्यवस्तुद्वारा
**वाक्यैः** = मधुर वाणीद्वारा
**शुश्रूषया च** = सेवाद्वारा पनि
**अर्चितः** = पूजित भई
**अपहृतेन्द्रियः** = मन आदि इन्द्रियहरू वशीभूत भएका
**सः** = ती अनिरुद्धले
**अहर्गणान्** = दिनहरू (बित्दै गएको) पनि
**न बुबुधे** = थाहा पाएनन्

**वाक्यार्थ–** बहुमूल्य वस्त्र, माला, चन्दन, धूप, दीप, आसन, पेय पदार्थ, चपाएर खाइने भोज्य वस्तु, भक्ष्य (धेरै नचपाई खाइने) वस्तु, समर्पण गरेर मिठो बोली बोलेर तथा अन्य प्रकारका सेवाहरूद्वारा ती ऊषाले अनिरुद्धको राम्रो सेवा सत्कार गरिन्। यिनै सेवाका कामहरूबाट ऊषाले अनिरुद्धको मन जितिन्। बाणासुरकी कन्या ऊषाको अन्तःपुरमा यसरी लुकेर बसेका अनिरुद्धले आफू त्यहाँ आएको कति दिन भयो भन्ने पनि थाहा पाएनन्।

**तां तथा यदुवीरेण भुज्यमानां हतव्रताम्।**

**हेतुभिर्लक्षयाञ्चक्रुरापृतां दुरवच्छदैः॥ २७॥**

**पदार्थ–**
**यदुवीरेण** = यदुवीर अनिरुद्धद्वारा
**भुज्यमानां** = भोग गरिएकी
**आपृतां** = अत्यन्त प्रसन्न
**तां** = ती ऊषालाई
**दुरवच्छदैः** = लुकाउन नसकिने
**हेतुभिः** = रतिचिह्नहरूद्वारा
**तथा** = त्यसरी
**हतव्रतां** = कुमारीपन नष्ट भएकी
**लक्षयाञ्चक्रुः** = (अरूले) थाहा पाए

**वाक्यार्थ–** यदुवीर अनिरुद्धद्वारा भोग गरिएकी र अत्यन्त प्रसन्न रहेकी ऊषाको कुमारीपन नष्ट भएको कुराको स्पष्ट सङ्केत उनका शरीरमा लुकाउनै नसकिने गरी देखिएका रतिचिह्नहरूले दिइरहेका थिए। यो कुरा अरूले पनि थाहा पाए।

**भटा आवेदयाञ्चक्रू राजंस्ते दुहितुर्वयम्।**

**विचेष्टितं लक्षयाम कन्यायाः कुलदूषणम्॥ २८॥**

**पदार्थ–**
**भटाः** = सैनिकहरूले (बाणासुरलाई)
**आवेदयाञ्चक्रुः** = निवेदन गरे
**राजन्** = हे महाराज
**वयं** = हामीहरू
**ते** = हजुरकी
**कन्यायाः** = अविवाहिता
**दुहितुः** = छोरी ऊषाको
**कुलदूषणं** = कुलमा कलङ्क लगाउने
**विचेष्टितं** = चेष्टालाई
**लक्षयामः** = बुझिरहेका छौँ

**वाक्यार्थ–** ती सैनिकहरूले बाणासुरलाई निवेदन गरे– हे महाराज ! हजुरकी अविवाहिता छोरी ऊषाको कुलमा नै कलङ्क लगाउने खालका चेष्टाहरू हामीले थाहा पाइरहेका छौँ।

**अनपायिभिरस्माभिर्गुप्तायाश्च गृहे प्रभो।**

**कन्याया दूषणं पुम्भिर्दुष्प्रेक्ष्याया न विद्महे॥ २९॥**

**पदार्थ–**
**प्रभो** = हे महाराज
**अनपायिभिः** = कहीँ पनि नगएका
**अस्माभिः** = हामीहरूद्वारा
**गृहे** = महलमा
**गुप्तायाः** = सुरक्षित भएकी
**पुम्भिः** = बाहिरका पुरुषहरूद्वारा
**दुष्प्रेक्ष्यायाः च** = देख्न पनि नसकिने
**कन्यायाः** = राजकुमारी ऊषाको
**दूषणं** = दूषण (कसरी भयो)
**न विद्महे** = जान्दैनौँ

**वाक्यार्थ–** महाराज ! हामी राजकुमारीको महलको सुरक्षा छाडेर बाहिर कहिल्यै गएका छैनौँ। महलभित्र नै सुरक्षित भएकी उहाँलाई बाहिरको पुरुषले देख्नसम्म पनि सक्दैन। अब यस्तो अवस्थामा राजपुत्री कसरी दूषित हुनुभयो ? यसबारे हामीलाई थाहा छैन।

**ततः प्रव्यथितो बाणो दुहितुः श्रुतदूषणः।**
**त्वरितः कन्यकागारं प्राप्तोऽद्राक्षीद् यदूद्वहम्॥ ३०॥**

**पदार्थ–**
**दुहितुः** = छोरीको
**श्रुतदूषणः** = कलङ्कका बारेमा सुनेको
**प्रव्यथितः** = अत्यन्त दुःखी भएको
**बाणः** = बाणासुर
**ततः** = त्यहाँबाट
**त्वरितः** = अत्यन्त शीघ्र
**कन्यकागारं** = छोरी ऊषाको महलमा
**प्राप्तः** = पुग्यो (अनि उसले)
**यदूद्वहं** = यदुश्रेष्ठ अनिरुद्धलाई
**अद्राक्षीत्** = देख्यो

**वाक्यार्थ–** छोरी ऊषाको कलङ्कसम्बन्धी कुरा सुनेर बाणासुर अत्यन्त दुःखी भयो र ऊ त्यहाँबाट शीघ्र छोरीको महलमा पुग्यो। उसले महलभित्र यदुश्रेष्ठ अनिरुद्धलाई देख्यो।

**कामात्मजं तं भुवनैकसुन्दरं श्यामं पिशङ्गाम्बरमम्बुजेक्षणम्।**
**बृहद्भुजं कुण्डलकुन्तलत्विषा स्मितावलोकेन च मण्डिताननम्॥ ३१॥**
**दीव्यन्तमक्षैः प्रिययाभिनृम्णया तदङ्गसङ्गस्तनकुङ्कुमस्रजम्।**
**बाह्वोर्दधानं मधुमल्लिकाश्रितां तस्याग्र आसीनमवेक्ष्य विस्मितः॥ ३२॥**

**पदार्थ–**
**कामात्मजं** = कामावतार प्रद्युम्नका छोरा
**भुवनैकसुन्दरं** = संसारका एक मात्र सर्वश्रेष्ठ सुन्दर
**श्यामं** = काला काला वर्ण भएका
**पिशङ्गाम्बरं** = पीताम्बर लगाएका
**अम्बुजेक्षणं** = कमलको फूल जस्तो आँखा भएका
**बृहद्भुजं** = लामा हात भएका
**कुण्डलकुन्तलत्विषा** = कुण्डल र घुँघरिएको कपालको कान्तिद्वारा
**स्मितावलोकेन च** = मन्द मुस्कान र हेराइद्वारा पनि
**मण्डिताननं** = सुशोभित मुखमण्डल भएका
**अभिनृम्णया** = अत्यन्त मङ्गलमयी
**प्रियया** = प्रिया ऊषासँग
**अक्षैः** = जुवा
**दीव्यन्तं** = खेलिरहेएका
**मधुमल्लिकाश्रितां** = वसन्त ऋतुमा फुल्ने मल्लिका पुष्पले बुनिएको
**तदङ्गसङ्गस्तनकुङ्कुमस्रजं** = ऊषाको अङ्गको स्पर्शका कारण ऊषाको स्तनगत कुङ्कुमले युक्त माला
**बाह्वोः** = दुबै बाहुमा
**दधानं** = धारण गरेका
**तस्याः** = ती ऊषाको
**अग्रे** = अगाडि
**आसीनं** = बसेका
**तं** = ती अनिरुद्धलाई
**अवेक्ष्य** = देखेर (बाणासुर)
**विस्मितः** = चकित भयो

**वाक्यार्थ–** कामदेवका अवतार प्रद्युम्नका छोरा अनिरुद्ध जत्तिको सुन्दर पुरुष तीनै लोकमा कोही थिएन। कालो–कालो वर्णका, कमलको फूल जस्तै आँखा भएका, पीताम्बर धारण गरेका, लामा हात भएका, कानमा कुण्डल लगाएका, घुँघरिएको कपाल र मन्द मुस्कान अनि स्निग्ध हेराइले सुशोभित मुखमण्डल भएका अनिरुद्ध त्यस वेला आफ्नी मङ्गलमयी प्रियतमा ऊषासँग जुवा खेलिरहेका थिए। उनका दुबै हातमा वसन्त ऋतुमा फुल्ने मल्लिका फूलले गाँसिएको सुन्दर माला थियो, जुन माला ऊषाको अङ्गस्पर्शका कारण उनको स्तनमा लगाइएको कुङ्कुमले युक्त थियो, त्यस्ता अनिरुद्धलाई आफ्नी छोरी ऊषाको अगाडि बसेको देखेर बाणासुर आश्चर्यचकित भयो।

**स तं प्रविष्टं वृतमाततायिभिर्भटैरनेकैरवलोक्य माधवः।**
**उद्यम्य मौर्वं परिघं व्यवस्थितो यथान्तको दण्डधरो जिघांसया ॥ ३३ ॥**

**पदार्थ–**
**सः** = ती
**माधवः** = मधुवंशी अनिरुद्धले
**आततायिभिः** = शस्त्रास्त्रहरूले सुसज्जित
**अनेकैः** = धेरै
**भटैः** = सेनाहरूद्वारा
**वृतं** = युक्त भएको
**प्रविष्टं** = महलमा प्रवेश गरेको
**तं** = त्यो बाणासुरलाई
**अवलोक्य** = देखेर
**मौर्वं** = फलामे
**परिघं** = मुङ्ग्रो
**उद्यम्य** = उठाएर
**दण्डधरः** = दण्ड धारण गरेको
**अन्तकः यथा** = यमराज झैँ
**जिघांसया** = मार्ने इच्छाले
**व्यवस्थितः** = बाणासुरको नजिक गए

**वाक्यार्थ–** ऊषाका प्रियतम मधुवंशी अनिरुद्धले जब शस्त्रास्त्रहरू लिएका धेरै सेनाहरूको साथमा बाणासुर आफू बसेकै महलमा प्रवेश गरेको देखे, तब उनले एउटा ठुलो फलामे मुङ्ग्रो हातमा लिएर दण्ड धारण गरेको यमराज झैँ बनी बाणासुरलाई मार्न त्यसकै अगाडि गए।

**जिघृक्षया तान् परितः प्रसर्पतः शुनो यथा शूकरयूथपोऽहनत्।**
**ते हन्यमाना भवनाद् विनिर्गता निर्भिन्नमूर्धोरुभुजाः प्रदुद्रुवुः ॥ ३४ ॥**

**पदार्थ–**
**जिघृक्षया** = समात्ने इच्छाले
**परितः** = चारैतिरबाट
**प्रसर्पतः** = नजिक आएका
**तान्** = ती सेनाहरूलाई
**शूकरयूथपः** = सुँगुरको समूहरक्षकले
**शुनः यथा** = कुकुरहरूलाई झैँ
**अहनत्** = प्रहार गरे
**निर्भिन्नमूर्धोरुभुजाः** = शिर, तिघ्रा र बाहु छिन्नभिन्न भएका
**हन्यमानाः** = घाइते भएका
**भवनात्** = महलबाट
**विनिर्गताः** = बाहिर निस्किएका
**ते** = ती बाणासुरका सेनाहरू
**प्रदुद्रुवुः** = भाग्न थाले

**वाक्यार्थ–** अनिरुद्धलाई समात्न चारैतिरबाट आइलागेका बाणासुरका सेनाहरूलाई उनले त्यसरी प्रहार गरे, जसरी सुँगुरहरूको गोठालाले कुकुरहरूलाई प्रहार गर्दछ। अनिरुद्धको प्रहारबाट शिर, तिघ्रा र बाहु छिन्नभिन्न भएका सेनाहरू घाइते भए र महलबाट बाहिर निस्कँदै भाग्न थाले।

**तं नागपाशैर्बलिनन्दनो बली घ्नन्तं स्वसैन्यं कुपितो बबन्ध ह ।**
**ऊषा भृशं शोकविषादविह्वला बद्धं निशम्याश्रुकलाक्ष्यरौदिषीत् ॥ ३५ ॥**

**पदार्थ–**
**स्वसैन्यं** = आफ्नो सेनालाई
**घ्नन्तं** = मारिरहेका
**तं** = ती अनिरुद्धलाई
**कुपितः** = अत्यन्त रिसाएको
**बलिनन्दनः** = बलिका पुत्र
**बली** = बलशाली बाणासुरले
**नागपाशैः** = नागपाशद्वारा
**बबन्ध ह** = बाँध्यो
**बद्धं** = (अनिरुद्ध) बाँधिएका
**निशम्य** = देखेर
**शोकविषादविह्वला** = शोक र दुःखले विह्वल भएकी
**अश्रुकलाक्षी** = आँसुको धाराले आँखा भरिएकी
**ऊषा** = ऊषा
**भृशं** = अत्यन्त
**अरौदिषीत्** = रुन थालिन्

**वाक्यार्थ–** अनिरुद्धले आफ्ना सेनाहरूलाई मार्न थालेको देखेर बलिका बलशाली पुत्र बाणासुरलाई असाध्यै रिस उठ्यो अनि उसले नागपाशद्वारा अनिरुद्धलाई बाँध्यो। अनिरुद्धलाई बाँधिएको अवस्थामा देखेर शोक र दुःखले विह्वल भएकी ऊषा आँखाभरि आँसु लिई बेसरी रुन थालिन्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे**
**उत्तरार्धेऽनिरुद्धबन्धो नाम द्विषष्टितमोऽध्यायः ॥ ६२ ॥**

# अथ त्रिषष्टितमोऽध्यायः

## भगवान् श्रीकृष्णद्वारा बाणासुरको गर्वभङ्ग र बन्दी बनाइएका अनिरुद्ध मुक्त

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अपश्यतां चानिरुद्धं तद्बन्धूनां च भारत।**
**चत्वारो वार्षिका मासा व्यतीयुरनुशोचताम्॥ १॥**

**पदार्थ–**
**भारत** = हे भरतवंशी परीक्षित्
**अनिरुद्धं** = अनिरुद्धलाई
**अपश्यतां** = नदेखेका (नभेटेका)
**अनुशोचतां च** = चिन्ता गरिरहेका
**तद्बन्धूनां** = उनका आफन्तजनहरूको
**वार्षिकाः** = वर्षाका
**चत्वारः** = चार
**मासाः च** = महिनाहरू
**व्यतीयुः** = बिते

**वाक्यार्थ–** हे परीक्षित्! हराएका अनिरुद्धलाई नभेटेर चिन्ता गर्दागर्दै उनका आफन्तहरूले वर्षाका चार महिना (असार, साउन, भदौ र असोज) बिताए। (अनिरुद्ध कता हराए भन्ने उनका आफन्तहरू कसैलाई थाहा भएन)।

**नारदात् तदुपाकर्ण्य वार्तां बद्धस्य कर्म च।**
**प्रययुः शोणितपुरं वृष्णयः कृष्णदैवताः॥ २॥**

**पदार्थ–**
**बद्धस्य** = (बाणासुरद्वारा) बाँधिएका अनिरुद्धको
**वार्तां** = हरणदेखि बन्धनसम्मका सम्पूर्ण वृत्तान्त
**कर्म च** = युद्ध आदि कर्म पनि
**नारदात्** = देवर्षि नारदबाट
**उपाकर्ण्य** = सुनेर
**कृष्णदैवताः** = श्रीकृष्णलाई देवता मानेका
**वृष्णयः** = वृष्णिवंशीहरू (युद्धका लागि)
**शोणितपुरं** = शोणितपुर
**प्रययुः** = गए

**वाक्यार्थ–** देवर्षि नारदको मुखबाट चित्रलेखाले अनिरुद्धलाई हरण गरेर शोणितपुर लगेको, बाणासुरसँग युद्ध भएको अनि बाणासुरले नागपाशमा बाँधेको आदि वृत्तान्त सुनिसकेपछि श्रीकृष्णलाई आफ्नो देवता मान्ने वृष्णिवंशीहरू बाणासुरसँग युद्ध गर्न शोणितपुर गए।

**प्रद्युम्नो युयुधानश्च गदः साम्बोऽथ सारणः।**
**नन्दोपनन्दभद्राद्या रामकृष्णानुवर्तिनः॥ ३॥**
**अक्षौहिणीभिर्द्वादशभिः समेताः सर्वतो दिशम्।**
**रुरुधुर्बाणनगरं समन्तात् सात्वतर्षभाः॥ ४॥**

**पदार्थ–**
**प्रद्युम्नः** = प्रद्युम्न
**युयुधानः** = युयुधान
**गदः** = गद
**अथ** = त्यस्तै
**साम्बः** = साम्ब
**सारणः** = सारण
**नन्दोपनन्दभद्राद्याः च** = नन्द, उपनन्द, भद्र आदि
**रामकृष्णानुवर्तिनः** = बलराम र श्रीकृष्णका अनुयायी
**सात्वतर्षभाः** = श्रेष्ठ यदुवंशीहरूले
**द्वादशभिः** = बाह्र
**अक्षौहिणीभिः** = अक्षौहिणी सेनाहरू सहित
**समेताः** = एकत्रित भएर
**सर्वतोदिशं** = सबै दिशाबाट
**समन्तात्** = वरिपरिबाट (व्यूह बनाएर)
**बाणनगरं** = बाणासुरको शोणित पुरलाई
**रुरुधुः** = घेरा हाले

**वाक्यार्थ–** श्रीकृष्ण र बलरामसँगै उहाँका अनुयायी प्रद्युम्न, युयुधान, गद, साम्ब, सारण, नन्द, उपनन्द, भद्र आदि श्रेष्ठ यदुवंशीहरूले बाह्र अक्षौहिणी सेनाका साथ व्यूह बनाएर सबै दिशाबाट बाणासुरको राजधानी शोणितपुरलाई घेरा हाले।

**भज्यमानपुरोद्यानप्राकाराट्टालगोपुरम्।**
**प्रेक्षमाणो रुषाविष्टस्तुल्यसैन्योऽभिनिर्ययौ ॥ ५॥**

**पदार्थ–**
**भज्यमानपुरोद्यानप्राकाराट्टाल-गोपुरं** = भत्काइँदै गरेका नगरका बगैंचा, पर्खाल, बुर्जा र नगरद्वारलाई
**प्रेक्षमाणः** = हेरिरहेको बाणासुर
**रुषा** = क्रोधले
**आविष्टः** = युक्त भई
**तुल्यसैन्यः** = बराबर (यदुवंशीको सेना बराबर बाह्र अक्षौहिणी) सेना सहित
**अभिनिर्ययौ** = युद्ध गर्न निस्कियो

**वाक्यार्थ–** यदुवंशीहरूले आफ्नो नगरको बगैंचा, पर्खाल, पर्खालमाथिको बुर्जा र नगरको मूलद्वारलाई भत्काएको देखेर अत्यन्त क्रुद्ध भएको बाणासुर पनि यदुवंशीको सेना बराबर बाह्र अक्षौहिणी सेना लिएर युद्ध गर्न बाहिर निस्कियो।

**बाणार्थे भगवान् रुद्रः ससुतैः प्रमथैर्वृतः।**
**आरुह्य नन्दिवृषभं युयुधे रामकृष्णयोः ॥ ६॥**

**पदार्थ–**
**बाणार्थे** = बाणासुरको सहयोगका लागि
**ससुतैः** = पुत्र कार्त्तिकेयसँगै
**प्रमथैः** = आफ्ना गणहरूले
**वृतः** = युक्त हुनुभएका
**भगवान्** = भगवान्
**रुद्रः** = रुद्र
**नन्दिवृषभं** = नन्दी नामक साँढेमा
**आरुह्य** = चढेर
**रामकृष्णयोः** = बलराम र श्रीकृष्णसँग
**युयुधे** = युद्ध गर्न लाग्नुभयो

**वाक्यार्थ–** त्यस वेला बाणासुरलाई सहयोग गर्नका लागि भगवान् रुद्र, पुत्र कार्त्तिकेय र आफ्ना

गणहरूलाई साथमा लिएर आफ्नो वाहन नन्दी नामक साँढेमा चढी आउनुभयो अनि उहाँले श्रीकृष्ण र बलरामसँग युद्ध गर्न लाग्नुभयो।

**आसीत् सुतुमुलं युद्धमद्भुतं रोमहर्षणम्।**
**कृष्णशङ्करयो राजन् प्रद्युम्नगुहयोरपि ॥ ७ ॥**
**कुम्भाण्डकूपकर्णाभ्यां बलेन सह संयुगः।**
**साम्बस्य बाणपुत्रेण बाणेन सह सात्यकेः ॥ ८ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**कृष्णशङ्करयोः** = श्रीकृष्ण र शङ्करको
**प्रद्युम्नगुहयोः अपि** = प्रद्युम्न र कार्त्तिकेयको
**सुतुमुलं** = अत्यन्त घमासान (भएकाले)
**रोमहर्षणं** = रौँ ठाडा-ठाडा हुने
**अद्भुतं** = अद्भुत
**युद्धं** = युद्ध
**आसीत्** = भयो (यसै गरी)
**बलेन सह** = बलरामसँग
**कुम्भाण्डकूपकर्णाभ्यां** = कुम्भाण्ड र कूपकर्णको
**बाणपुत्रेण** = बाणासुरको छोरोसँग
**साम्बस्य** = साम्बको
**बाणेन सह** = बाणासुरसँग
**सात्यकेः** = सात्यकिको
**संयुगः** = भिडन्त (भयो)

**वाक्यार्थ–** हे राजा परीक्षित्! भगवान् शङ्करसँग श्रीकृष्णको र कार्त्तिकेयसँग प्रद्युम्नको घमासान युद्ध भयो जुन युद्ध हेर्दा पनि शरीरमा रोमाञ्च हुन्थ्यो। यसै गरी त्यो युद्धमा कुम्भाण्ड र कूपकर्णसँग बलरामको, बाणासुरको छोरोसँग साम्बको र बाणासुरसँग सात्यकिको अद्भुत भिडन्त भयो।

**ब्रह्मादयः सुराधीशा मुनयः सिद्धचारणाः।**
**गन्धर्वाप्सरसो यक्षा विमानैर्द्रष्टुमागमन् ॥ ९ ॥**

**पदार्थ–**
**ब्रह्मादयः** = ब्रह्मा आदि
**सुराधीशाः** = श्रेष्ठ देवताहरू
**मुनयः** = ऋषिहरू
**सिद्धचारणाः** = सिद्ध र चारणहरू
**गन्धर्वाप्सरसः** = गन्धर्व र अप्सराहरू
**यक्षाः** = यक्षहरू
**विमानैः** = विमानमा चढेर
**द्रष्टुं** = (युद्ध) हेर्न
**आगमन्** = आए

**वाक्यार्थ–** ब्रह्मा आदि श्रेष्ठ देवता, ऋषि, सिद्ध, चारण, गन्धर्व, अप्सरा र यक्षहरू त्यो युद्ध हेर्नका लागि विमानमा चढेर आए।

**शङ्करानुचराञ्छौरिर्भूतप्रमथगुह्यकान्।**
**डाकिनीर्यातुधानांश्च वेतालान् सविनायकान् ॥ १० ॥**
**प्रेतमातृपिशाचांश्च कूष्माण्डान् ब्रह्मराक्षसान्।**

**द्रावयामास तीक्ष्णाग्रैः शरैः शार्ङ्गधनुश्च्युतैः ॥ ११ ॥**

**पदार्थ–**
**शौरिः** = भगवान् श्रीकृष्णले
**शार्ङ्गधनुश्च्युतैः** = शार्ङ्गधनुबाट प्रहार गरिएका
**तीक्ष्णाग्रैः** = ज्यादै तिखो टुप्पो भएका
**शरैः** = बाणहरूद्वारा
**शङ्करानुचरान्** = भगवान् शङ्करका अनुचर
**भूतप्रमथगुह्यकान्** = भूत, प्रमथ, गुह्यक
**डाकिनीः** = डाकिनी
**यातुधानान्** = यातुधान
**सविनायकान्** = विनायकले सहित
**वेतालान् च** = वेताल
**प्रेतमातृपिशाचान्** = प्रेत, मातृगण, पिशाच
**कूष्माण्डान्** = कूष्माण्डहरू र
**ब्रह्मराक्षसान् च** = ब्रह्मराक्षसहरूलाई पनि
**द्रावयामास** = भगाउनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले आफ्नो शार्ङ्गधनुबाट प्रहार गरिएका ज्यादै तिखा टुप्पा भएका बाणहरूद्वारा भगवान् शङ्करका अनुचर, भूत, प्रमथ, गुह्यक, डाकिनी, यातुधान, विनायक, वेताल, प्रेत, मातृगण, पिशाच, कूष्माण्ड र ब्रह्मराक्षसहरूलाई पनि भगाउनुभयो।

**पृथग्विधानि प्रायुङ्क्त पिनाक्यस्त्राणि शार्ङ्गिणे ।**
**प्रत्यस्त्रैः शमयामास शार्ङ्गपाणिरविस्मितः ॥ १२ ॥**

**पदार्थ–**
**पिनाकी** = पिनाक धनुर्धारी भगवान् शङ्करले
**शार्ङ्गिणे** = शार्ङ्ग धनुर्धारी श्रीकृष्णमाथि
**पृथग्विधानि** = विभिन्न प्रकारका
**अस्त्राणि** = अस्त्रहरू
**प्रायुङ्क्त** = प्रयोग गर्नुभयो
**शार्ङ्गपाणिः** = हातमा शार्ङ्ग धनु लिनुभएका श्रीकृष्णले
**अविस्मितः** = भयरहित भएर (ती अस्त्रहरूलाई)
**प्रत्यस्त्रैः** = विरोधी अस्त्रहरूद्वारा
**शमयामास** = शान्त बनाउनुभयो

**वाक्यार्थ–** पिनाक धनुर्धारी भगवान् शङ्करले शार्ङ्ग धनुर्धारी श्रीकृष्णमाथि विभिन्न प्रकारका अस्त्रहरूको प्रयोग गर्नुभयो। शार्ङ्ग धनु हातमा लिनुभएका श्रीकृष्णले भयरहित भएर ती अस्त्रहरूलाई विरोधी अस्त्रहरूको प्रयोग गरेर शान्त गरिदिनुभयो।

**ब्रह्मास्त्रस्य च ब्रह्मास्त्रं वायव्यस्य च पार्वतम् ।**
**आग्नेयस्य च पार्जन्यं नैजं पाशुपतस्य च ॥ १३ ॥**

**पदार्थ–**
**ब्रह्मास्त्रस्य च** = ब्रह्मास्त्रका लागि
**ब्रह्मास्त्रं** = ब्रह्मास्त्र
**वायव्यस्य च** = वायव्यास्त्रका लागि
**पार्वतं** = पार्वतास्त्र
**आग्नेयस्य च** = आग्नेयास्त्रका लागि
**पार्जन्यं** = पार्जन्यास्त्र
**पाशुपतस्य च** = पाशुपतास्त्रका लागि
**नैजम्** = आफ्नो नारायणास्त्र (प्रयोग गर्नुभयो)

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले ब्रह्मास्त्रका लागि ब्रह्मास्त्र, वायव्यास्त्रका लागि पार्वतास्त्र, आग्नेयास्त्रका लागि पार्जन्यास्त्र र पाशुपतास्त्रको लागि आफ्नो नारायणास्त्रको प्रयोग गर्नुभयो।

**मोहयित्वा तु गिरिशं जृम्भणास्त्रेण जृम्भितम्।**
**बाणस्य पृतनां शौरिर्जघानासिगदेषुभिः॥ १४॥**

**पदार्थ–**
**शौरिः तु** = शुरवंशी श्रीकृष्णले त
**जृम्भणास्त्रेण** = जृम्भणास्त्र (हाई–हाई गराउने अस्त्र)द्वारा
**जृम्भितं** = ज्यादै अल्छी लागेर हाइ–हाइ गरिरहने बनाई
**गिरिशं** = शङ्करलाई
**मोहयित्वा** = मोहित गराएर
**बाणस्य** = बाणासुरको
**पृतनां** = सेनालाई
**असिगदेषुभिः** = तरबार, गदा र बाणद्वारा
**जघान** = मार्नुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्णले जृम्भणास्त्रको प्रयोग गरेर भगवान् शङ्करलाई ज्यादै अल्छी लागेर हाइ–हाइ गरिरहने गरी मोहित बनाउनुभयो अनि तरबार, गदा र बाणको प्रयोग गरेर बाणासुरको सेनालाई मार्नुभयो।

**स्कन्दः प्रद्युम्नबाणौघैरर्द्यमानः समन्ततः।**
**असृग् विमुञ्चन् गात्रेभ्यः शिखिनापाक्रमद्रणात्॥ १५॥**

**पदार्थ–**
**प्रद्युम्नबाणौघैः** = प्रद्युम्नका बाणहरूद्वारा
**समन्ततः** = सम्पूर्ण रूपमा
**अर्द्यमानः** = घाइते भएका
**स्कन्दः** = कार्त्तिकेय
**गात्रेभ्यः** = शरीरबाट
**असृक्** = रगत
**विमुञ्चन्** = बगाउँदै
**शिखिना** = मयूरमा चढेर
**रणात्** = रणभूमिबाट
**अपाक्रमत्** = भाग्नुभयो

**वाक्यार्थ–** प्रद्युम्नका बाणहरूको प्रहारबाट पूर्णरूपले घाइते भएका कार्त्तिकेयको शरीरबाट रगतका धाराहरू बग्न थाले। त्यसपछि उहाँ आफ्नो वाहन मयूरमा चढेर रणभूमिबाट भाग्नुभयो।

**कुम्भाण्डः कूपकर्णश्च पेततुर्मुसलार्दितौ।**
**दुद्रुवुस्तदनीकानि हतनाथानि सर्वतः॥ १६॥**

**पदार्थ–**
**मुसलार्दितौ** = बलरामको मुसलबाट घाइते भएका
**कुम्भाण्डः** = कुम्भाण्ड र
**कूपकर्णः च** = कूपकर्ण पनि
**पेततुः** = ढले
**हतनाथानि** = सेनापति नष्ट भएको
**तदनीकनि** = तिनीहरूका सेनाहरू
**सर्वतः** = चारैतिर
**दुद्रुवुः** = भागे

**वाक्यार्थ–** बलरामको मुसलप्रहारबाट कुम्भाण्ड र कूपकर्ण दुबै घाइते भएर रणभूमिमा ढले। आफ्नो सेनापति ढलेपछि रक्षकहीन बनेका कुम्भाण्ड र कूपकर्णका सेनाहरू चारैतिर भाग्न थाले।

**विशीर्यमाणं स्वबलं दृष्ट्वा बाणोऽत्यमर्षणः ।**
**कृष्णमभ्यद्रवत् सङ्ख्ये रथी हित्वैव सात्यकिम् ॥ १७ ॥**

**पदार्थ–**
**स्वबलं** = आफ्ना सेनाहरूलाई
**विशीर्यमाणं** = चारैतिर भागेको
**दृष्ट्वा** = देखेर
**अत्यमर्षणः** = अति क्रुद्ध
**रथी** = रथमा बसेको
**बाणः** = बाणासुर
**सङ्ख्ये** = युद्धमा
**सात्यकिं** = सात्यकिलाई
**हित्वा एव** = छोडेर नै
**कृष्णं** = श्रीकृष्णतर्फ
**अभ्यद्रवत्** = दौडियो

**वाक्यार्थ–** आफ्ना सेनाहरू चारैतिर भाग्न थालेको देखेपछि रथमा बसेको बाणासुर अत्यन्तै क्रुद्ध भयो र उसले तत्काल आफ्नो प्रतियोद्धा सात्यकिलाई छाडेर युद्ध गर्न श्रीकृष्णतर्फ जाइलाग्यो ।

**धनूंष्याकृष्य युगपद् बाणः पञ्चशतानि वै ।**
**एकैकस्मिञ्छरौ द्वौ द्वौ सन्दधे रणदुर्मदः ॥ १८ ॥**

**पदार्थ–**
**रणदुर्मदः** = युद्धमा उन्मत्त भएको
**बाणः** = बाणासुरले
**युगपत्** = एकै पटक
**पञ्चशतानि वै** = पाँच सय
**धनूंषि** = धनुहरू
**आकृष्य** = खिँचेर
**एकैकस्मिन्** = प्रत्येक धनुमा
**द्वौ द्वौ शरौ** = दुई–दुई ओटा बाण
**सन्दधे** = चढायो

**वाक्यार्थ–** युद्धमा उन्मत्त भएको बाणासुरले (आफ्ना एक हजार हातले) एकै पटक पाँच सय धनुहरू खिँचेर प्रत्येक धनुमा एकसाथ दुई–दुईओटा बाण चढायो ।

**तानि चिच्छेद भगवान् धनूंषि युगपद्धरिः ।**
**सारथिं रथमश्वांश्च हत्वा शङ्खमपूरयत् ॥ १९ ॥**

**पदार्थ–**
**भगवान्** = भगवान्
**हरिः** = श्रीकृष्णले (आफ्नो बाणद्वारा)
**तानि** = ती धनुहरूलाई
**युगपत्** = एकै पटक
**चिच्छेद** = काटिदिनुभयो
**सारथिं** = सारथि
**धनूंषि** = धनुहरू
**रथं** = रथ र
**अश्वान् च** = घोडाहरूलाई पनि
**हत्वा** = मारेर
**शङ्खं** = शङ्ख
**अपूरयत्** = बजाउनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले बाण प्रहार गरेर ती सबै धनुहरूलाई एकै चोटि काटिदिनुभयो । त्यसपछि बाणासुरको सारथि र घोडालाई मारेर उसको रथलाई भत्काइदिएपछि उहाँले शङ्ख बजाउनुभयो ।

**तन्माता कोटरा नाम नग्ना मुक्तशिरोरुहा ।**
**पुरोऽवतस्थे कृष्णस्य पुत्रप्राणरिरक्षया ॥ २० ॥**

**पदार्थ–**
**कोटरा नाम** = कोटरा नाम गरेकी
**तन्माता** = त्यो बाणासुरकी आमा
**पुत्रप्राणरिरक्षया** = छोरोको प्राणरक्षा गर्ने इच्छाले
**मुक्तशिरोरुहा** = कपाल खुला राखेर
**नग्ना** = नाङ्गै
**कृष्णस्य** = श्रीकृष्णको
**पुरः** = अगाडि
**अवतस्थे** = आइपुगी

**वाक्यार्थ–** कोटरा नाम गरेकी बाणासुरकी आमा थिई। त्यो छोरो बाणासुरको प्राण बचाउनका लागि कपाल छेरेर नाङ्गै भगवान् श्रीकृष्णको अगाडि आइपुगी।

**ततस्तिर्यङ्मुखो नग्नामनिरीक्षन् गदाग्रजः।**
**बाणश्च तावद् विरथश्छिन्नधन्वाविशत् पुरम्॥ २१॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**नग्नां** = नाङ्गी कोटरालाई
**अनिरीक्षन्** = हेर्न नचाहने
**गदाग्रजः** = गदाग्रज श्रीकृष्णले
**तिर्यङ्मुखः** = मुख अन्यत्र फर्काउनुभयो
**तावत् च** = त्यही समयमा
**विरथः** = रथहीन
**छिन्नधन्वा** = धनु नष्ट भएको
**बाणः** = बाणासुर
**पुरं** = आफ्नो नगरमा
**आविशत्** = प्रवेश गऱ्यो

**वाक्यार्थ–** त्यसपछि नाङ्गी कोटरालाई हेर्न नचाहेकाले भगवान् श्रीकृष्णले आफ्नो मुख अर्कातिर फर्काउनुभयो त्यही वेलामा मौका पाएर रथहीन र धनु भङ्ग भएको बाणासुर आफ्नै नगरमा फर्कियो।

**विद्राविते भूतगणे ज्वरस्तु त्रीशिरास्त्रीपात्।**
**अभ्यधावत दाशार्हं दहन्निव दिशो दश॥ २२॥**

**पदार्थ–**
**भूतगणे** = भूतगण
**विद्राविते** = भगाइएपछि
**दश दिशः** = दशै दिशाहरूलाई
**दहन् इव** = डढाउँला झैँ गरी
**त्रिशिराः** = तीन ओटा शिर भएको
**त्रिपात्** = तीन ओटा खुट्टा भएको
**ज्वरः तु** = ज्वर
**दाशार्हं** = श्रीकृष्णका सामु
**अभ्यधावत** = दौडिएर आयो

**वाक्यार्थ–** यसरी भगवान् श्रीकृष्णले भूतगणलाई भगाएपछि (भगवान् शङ्करद्वारा पठाइएको) तीन ओटा शिर र तीन ओटै खुट्टा भएको ज्वर दशै दिशाहरूलाई डढाउँला झैँ गरी भगवान् श्रीकृष्णका अगाडि युद्ध गर्न दौडँदै आयो।

**अथ नारायणो देवस्तं दृष्ट्वा व्यसृजज्ज्वरम्।**
**माहेश्वरो वैष्णवश्च युयुधाते ज्वरावुभौ॥ २३॥**

**पदार्थ—**
**अथ** = त्यसपछि
**नारायणः** = नारायण
**देवः** = भगवान् श्रीकृष्णले
**तं** = त्यो ज्वरलाई
**दृष्ट्वा** = देखेर
**ज्वरं** = शीत ज्वर
**व्यसृजत्** = छोडिदिनुभयो
**माहेश्वरः** = माहेश्वर ज्वर र
**वैष्णवः च** = वैष्णव ज्वर
**उभौ** = दुई ओटै
**ज्वरौ** = ज्वर
**युयुधाते** = युद्ध गर्न थाले

**वाक्यार्थ—** शङ्करको ज्वर आफूतिर आइरहेको देखेर नारायण भगवान् श्रीकृष्णले शीत ज्वर छोडिदिनुभयो। त्यसपछि शङ्करको माहेश्वर ज्वर र श्रीकृष्णको वैष्णव ज्वर (ऊष्ण ज्वर र शीत ज्वर) परस्पर युद्ध गर्न थाले।

**माहेश्वरः समाक्रन्दन् वैष्णवेन बलार्दितः।**
**अलब्ध्वाभयमन्यत्र भीतो माहेश्वरो ज्वरः॥**
**शरणार्थी हृषीकेशं तुष्टाव प्रयताञ्जलिः॥ २४॥**

**पदार्थ—**
**वैष्णवेन** = वैष्णव ज्वरद्वारा
**बलार्दितः** = जबर्जस्ती पीडित
**माहेश्वरः** = माहेश्वर ज्वर
**समाक्रन्दन्** = चिच्याउँदै
**अन्यत्र** = भगवान्देखि अन्यत्र
**अभयं** = भयरहित स्थान
**अलब्ध्वा** = नपाएर
**भीतः** = डराएको
**शरणार्थी** = शरण खोजेको
**माहेश्वरः** = माहेश्वर
**ज्वरः** = ज्वरले
**प्रयताञ्जलिः** = हात जोड्दै
**हृषीकेशं** = इन्द्रियहरूका मालिक श्रीकृष्णलाई
**तुष्टाव** = स्तुति गर्‍यो

**वाक्यार्थ—** वैष्णव ज्वरद्वारा माहेश्वर ज्वर पीडित भयो र चिच्याउन थाल्यो। अन्यत्र कहीँ अभय प्राप्त गर्न नसकेपछि अत्यन्तै डराएर माहेश्वर ज्वर श्रीकृष्णको शरणमा गयो र दुबै हात जोडेर उसले इन्द्रियहरूका मालिक श्रीकृष्णको स्तुति गर्‍यो।

**ज्वर उवाच** (ज्वरले भन्यो)

**नमामि त्वानन्तशक्तिं परेशं सर्वात्मानं केवलं ज्ञप्तिमात्रम्।**
**विश्वोत्पत्तिस्थानसंरोधहेतुं यत्तद् ब्रह्म ब्रह्मलिङ्गं प्रशान्तम्॥ २५॥**

**पदार्थ—**
**अनन्तशक्तिं** = अनन्त शक्तिसम्पन्न
**परेशं** = परमेश्वर
**सर्वात्मानं** = सम्पूर्ण जीवहरूका आत्मा
**केवलं** = असङ्ग
**ज्ञप्तिमात्रं** = चैतन्यस्वरूप
**विश्वोत्पत्तिस्थानसंरोधहेतुं** = जगत्को सृष्टि, स्थिति र लयका कारण
**यत्तत्** = जो सर्वस्वरूप
**ब्रह्मलिङ्गं** = वेदद्वारा बोध्य
**प्रशान्तं** = शान्त
**ब्रह्म** = साक्षात् परब्रह्म (हुनुहुन्छ, त्यस्ता)
**त्वा** = हजुरलाई
**नमामि** = नमस्कार गर्दछु

**वाक्यार्थ–** हे भगवान् ! हजुर अनन्त शक्तिसम्पन्न परमेश्वर हुनुहुन्छ। सर्वदा असङ्ग चैतन्यस्वरूप हजुर नै सम्पूर्ण जीवहरूको एक मात्र साक्षी आत्मा हुनुहुन्छ। सर्वस्वरूप हजुर नै जगत्को उत्पत्ति, स्थिति र लयको कारण हुनुहुन्छ। हजुरको ज्ञान वेदद्वारा मात्र हुन सक्छ। सर्वदा शान्त साक्षात् परब्रह्म हजुरलाई म नमस्कार गर्दछु।

**कालो दैवं कर्म जीवः स्वभावो द्रव्यं क्षेत्रं प्राण आत्मा विकारः।**
**तत्सङ्घातो बीजरोहप्रवाहस्त्वन्मायैषा तन्निषेधं प्रपद्ये ॥ २६ ॥**

**पदार्थ–**
**कालः** = काल (गुणक्षोभक)
**दैवं** = अदृष्ट (प्रारब्ध)
**कर्म** = कर्म
**जीवः** = जीव (कर्मसंस्कारवान्)
**स्वभावः** = स्वभाव (कर्मसंस्कार)
**द्रव्यं** = द्रव्य (शब्दादि भूतसूक्ष्म)
**क्षेत्रं** = शरीर
**प्राणः** = पञ्च प्राण
**आत्मा** = अहङ्कार
**विकारः** = पञ्च महाभूत र एकादश इन्द्रियहरू
**तत्सङ्घातः** = तिनीहरूको समूह सूक्ष्म शरीर
**बीजरोहप्रवाहः** = बीजाङ्कुर (बीजबाट अङ्कुर उत्पन्न हुने र अङ्कुर बढ्दै गएपछि त्यसबाट बीज उत्पन्न भए झैँ सूक्ष्म शरीरबाट कर्म र त्यसबाट शरीरप्राप्ति यस्तो) प्रवाह
**एषा** = यो परम्परा
**त्वन्माया** = हजुरकै माया हो
**तन्निषेधं** = त्यस्तो मायाको निषेधस्वरूप हजुरको शरणमा
**प्रपद्ये** = आएको छु

**वाक्यार्थ–** काल, अदृष्ट, कर्म, जीव, स्वभाव, द्रव्य, शरीर, पञ्च प्राण, अहङ्कार, पञ्च महाभूत र एकादश इन्द्रिय र तीनै कलाले बनेको सूक्ष्म शरीर तथा बीजाङ्कुरन्याय झैँ सूक्ष्म शरीरबाट कर्म, कर्मबाट फेरि लिङ्ग शरीरको प्राप्ति भइरहने प्रवाह यी सबै हजुरकै माया हो। तर हजुरमा चाहिँ मायाको निषेध छ। यस्ता हजुरको शरणमा म आएको छु।

**विवरण–** यहाँ भगवान् शिवबाट प्रयोग गरिएको उष्ण ज्वरले काल, अदृष्ट, कर्म, जीव आदिले सहित यो सम्पूर्ण संसार परमात्माको माया हो तर परमात्मामा चाहिँ मायाको निषेध छ भनी भगवान् श्रीकृष्णको स्तुति गरेको छ। कालले जीवका कर्म एवं प्रकृतिका गुणहरूलाई क्षुब्ध गरी सृष्टि गर्न सघाउँछ, कर्म सम्पूर्ण प्राणीहरूको जन्मको कारण हो। त्यही कर्ममध्ये अत्यन्त फलोन्मुख भएको प्रारब्ध कर्म नै दैव हो। स्वभाव भनेको अनेक जन्मदेखिका संस्कार हुन् र यी सबै सँगाल्ने व्यक्ति नै जीव हो। द्रव्य भनेको सूक्ष्म महाभूत या रूप, रस आदि पञ्चतन्मात्रा हुन् भने क्षेत्र भनेको शरीर हो। प्राण भनेका पञ्च प्राण हुन् भने आत्मा भनेर यहाँ अहङ्कारलाई बुझाइएको हो। यहाँ विकार भनेको सूक्ष्मभूतबाट बनेको यो पञ्चमहाभूतमय स्थूल जगत् अनि भित्री–बाहिरी इन्द्रियहरू हुन्। सङ्घात भनेको दश इन्द्रिय, पाँच प्राण अनि अन्तःकरणको समूह सोह्र कला भएको सूक्ष्म शरीर हो। यी सबै रुख र बिउ झैँ अनादि कालदेखि बारम्बार एक–अर्काबाट उत्पन्न भइरहेका छन्। यी सबै परमात्माकै मायाका कारण प्रतीत भएका हुन्। **तन्निषेध** शब्दको अर्थ हुन्छ **तस्य निषेधः यस्मिन्** अर्थात् यो सबै प्रपञ्चको निषेध जहाँ हुन्छ। उपनिषद्मा पनि ब्रह्ममा माया अनि मायाको कार्य दुबैलाई निषेध गर्दै **नेति नेति** (बृहदारण्यकोपनिषद्

४।४।२२) भनी ब्रह्मलाई बताइएको छ। सम्पूर्ण मायिक संसारको निषेध गरिरहँदा पनि सबै पदार्थको निषेध गरिएको अधिष्ठान चेतन आत्माको भने निषेध हुन सक्दैन। यसरी मायाद्वारा आफैँमा जगत् उत्पन्न गर्ने अनि आफैँमा त्यसको निषेध गर्ने ब्रह्म एक मात्र सत्य पदार्थ हो। यहाँ जगत्को उत्पत्ति अनि बाधको पनि आधारका रूपमा रहेका उनै परमात्माको स्तुति गरिएको छ।

**नानाभावैर्लीलयैवोपपन्नैर्देवान् साधून् लोकसेतून् बिभर्षि ।**
**हंस्युन्मार्गान् हिंसया वर्तमानान् जन्मैतत् ते भारहाराय भूमेः ॥ २७ ॥**

**पदार्थ–**
**लीलया एव** = लीलाद्वारा नै
**उपपन्नैः** = स्वीकार गरिएका
**नानाभावैः** = विभिन्न अवतारहरूद्वारा
**देवान्** = देवता
**साधून्** = सज्जन
**लोकसेतून्** = (वर्णाश्रम आदि) लोकमर्यादाहरूलाई
**बिभर्षि** = धारण गर्नुहुन्छ
**हिंसया** = हिंसाद्वारा
**वर्तमानान्** = रहेका
**उन्मार्गान्** = गलत बाटोमा हिँड्नेहरूलाई
**हंसि** = मार्नुहुन्छ
**एतत्** = यो
**ते** = हजुरको
**जन्म** = अवतार
**भूमेः** = पृथिवीको
**भारहाराय** = भार हरण गर्नका लागि (हुने गर्दछ)

**वाक्यार्थ–** हजुर आफ्नो लीलाद्वारा समय-समयमा विभिन्न प्रकारका अवतार ग्रहण गर्नुहुन्छ र देवता, सज्जन आदि सन्मार्गीहरूको रक्षा गर्नुका साथै वर्णाश्रम धर्म आदि लोकमर्यादालाई पालनपोषण गर्नुहुन्छ। त्यसै गरी हिंस्रक स्वभाव भएका कुमार्गीहरूको संहार पनि गर्नुहुन्छ। हे प्रभु ! वास्तवमा हजुरको अवतार पृथिवीको भार हरण गर्नकै लागि हुने गर्दछ।

**तप्तोऽहं ते तेजसा दुःसहेन शान्तोग्रेणात्युल्बणेन ज्वरेण ।**
**तावत् तापो देहिनां तेऽङ्घ्रिमूलं नो सेवेरन् यावदाशानुबद्धाः ॥ २८ ॥**

**पदार्थ–**
**शान्तोग्रेण** = शान्त र उग्र
**अत्युल्बणेन** = अति भयङ्कर
**दुःसहेन** = सहन गर्न कठिन
**ते** = हजुरको
**तेजसा** = ज्वररूप तेजद्वारा
**अहं** = म
**तप्तः** = सन्तप्त छु
**यावत्** = जबसम्म
**आशानुबद्धाः** = आशाको डोरीले बाँधिएका मनुष्यहरूले
**ते** = हजुरको
**अङ्घ्रिमूलं** = चरणकमललाई
**नो सेवेरन्** = सेवा गर्दैनन्
**तावत्** = तबसम्म
**ज्वरेण** = ज्वरले
**देहिनां** = मनुष्यहरूको
**तापः** = ताप भइरहन्छ

**वाक्यार्थ–** हे प्रभु ! पहिले शान्त र शीतल जस्तो लागे पनि पछि अत्यन्त दाहक बन्ने, अति भयङ्कर र सहन कठिन हजुरको ज्वररूप तेजद्वारा म सन्तप्त छु। आशाको डोरीले बाँधिएर त्यसको प्राप्तिका लागि संसारमा घुमिरहेका मनुष्यहरू जबसम्म हजुरको शरणमा पर्दैनन् तबसम्म तिनीहरूलाई यस ज्वरबाट ताप भइरहन्छ।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**त्रिशिरस्ते प्रसन्नोऽस्मि व्येतु ते मज्ज्वराद् भयम्।**
**यो नौ स्मरति संवादं तस्य त्वन्न भवेद् भयम्॥ २९॥**

**पदार्थ–**
**त्रिशिरः** = हे त्रिशिरा
**ते** = तिमीसँग
**प्रसन्नः** = प्रसन्न
**अस्मि** = छु
**मज्ज्वरात्** = मेरो ज्वरबाट
**ते** = तिमीलाई
**भयं** = डर
**व्येतु** = हटेर जाओस्
**यः** = जसले
**नौ** = हाम्रो
**संवादं** = संवादलाई
**स्मरति** = स्मरण गर्दछ
**तस्य** = त्यसका लागि
**त्वत्** = तिमीबाट
**भयं** = भय
**न भवेत्** = हुनेछैन

**वाक्यार्थ–** हे त्रिशिरा ! म तिमीसँग प्रसन्न छु। त्यसैले मेरो ज्वरबाट तिमीलाई कुनै भय नहोस्। जसले तिम्रो र मेरो यो संवादको स्मरण गर्दछ उसलाई  तिमीबाट कहिल्यै पनि भय हुनेछैन।

**इत्युक्तोऽच्युतमानम्य गतो माहेश्वरो ज्वरः।**
**बाणस्तु रथमारूढः प्रागाद् योत्स्यञ्जनार्दनम्॥ ३०॥**

**पदार्थ–**
**इति** = यस्तो कुरा
**उक्तः** = भगवान्‌द्वारा बताइएको
**माहेश्वरः** = माहेश्वर
**ज्वरः** = ज्वर
**अच्युतं** = श्रीकृष्णलाई
**आनम्य** = नमस्कार गरेर
**गतः** = गयो
**बाणः तु** = बाणासुर चाहिँ
**रथं** = रथमा
**आरूढः** = चढेर
**योत्स्यन्** = युद्ध गर्न
**जनार्दनं** = श्रीकृष्णको नजिकमा
**प्रागात्** = आइपुग्यो

**वाक्यार्थ–** भगवान्‌को आज्ञा अनुसार माहेश्वर ज्वर श्रीकृष्णलाई नमस्कार गरेर गयो। बाणासुर चाहिँ रथमा चढेर फेरि पनि युद्ध गर्नका लागि भगवान् श्रीकृष्णको नजिकमा आइपुग्यो।

**ततो बाहुसहस्रेण नानायुधधरोऽसुरः।**
**मुमोच परमक्रुद्धो बाणांश्चक्रायुधे नृप॥ ३१॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**ततः** = त्यसपछि
**नानायुधधरः** = विभिन्न हतियारहरू लिएको
**परमक्रुद्धः** = ज्यादै रिसाएको
**असुरः** = बाणासुरले
**बाहुसहस्रेण** = हजार हातद्वारा
**चक्रायुधे** = सुदर्शन चक्र नै हतियार भएका श्रीकृष्णमाथि
**बाणान्** = बाणहरू
**मुमोच** = प्रहार गर्‍यो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! त्यसपछि ज्यादै क्रुद्ध भएको बाणासुरले आफ्ना हजार ओटा हातद्वारा विभिन्न हतियारहरू लिई सुदर्शन चक्रधारी भगवान् श्रीकृष्णमाथि बाणहरू प्रहार गर्‍यो।

**तस्यास्यतोऽस्त्राण्यसकृच्चक्रेण क्षुरनेमिना ।**

**चिच्छेद भगवान् बाहून् शाखा इव वनस्पतेः ॥ ३२ ॥**

**पदार्थ–**
**भगवान्** = भगवान् श्रीकृष्णले
**असकृत्** = बारम्बार
**अस्त्राणि** = अस्त्रहरू
**अस्यतः** = प्रहार गरिरहेका
**तस्य** = त्यो बाणासुरका
**बाहून्** = हातहरू
**वनस्पतेः** = रुखको
**शाखाः इव** = हाँगालाई झैं
**क्षुरनेमिना** = तिखो धार भएको
**चक्रेण** = सुदर्शन चक्रद्वारा
**चिच्छेद** = काटिदिनुभयो

**वाक्यार्थ–** बाणासुरले बारम्बार आफूमाथि अस्त्रहरू प्रहार गर्न थालेपछि भगवान् श्रीकृष्णले पनि रुखका हाँगा काटे झैं तिखो धार भएको आफ्नो सुदर्शन चक्र प्रहार गरेर बाणासुरका हातहरू काटिदिनुभयो ।

**बाहुषुच्छिद्यमानेषु बाणस्य भगवान् भवः ।**

**भक्तानुकम्प्युपव्रज्य चक्रायुधमभाषत ॥ ३३ ॥**

**पदार्थ–**
**बाणस्य** = बाणासुरका
**बाहुषु** = हातहरू
**छिद्यमानेषु** = काटिइरहँदा
**भक्तानुकम्पी** = भक्तहरूलाई अनुग्रह गर्ने
**भगवान्** = भगवान्
**भवः** = शङ्करले
**चक्रायुधं** = चक्र नै हतियार भएका श्रीकृष्णको अगाडि
**उपव्रज्य** = गएर
**अभाषत** = भन्नुभयो

**वाक्यार्थ–** आफ्नो परमभक्त बाणासुरका हातहरू श्रीकृष्णले काटिरहेको वेलामा भक्तहरूलाई सधैं अनुग्रह गर्नुहुने भगवान् शङ्कर चक्रधारी श्रीकृष्णको अगाडि जानुभयो र भन्नुभयो ।

**श्रीरुद्र उवाच** (भगवान् रुद्रले भन्नुभयो)

**त्वं हि ब्रह्म परं ज्योतिर्गूढं ब्रह्मणि वाङ्मये ।**

**यं पश्यन्त्यमलात्मान आकाशमिव केवलम् ॥ ३४ ॥**

**पदार्थ–**
**वाङ्मये** = शब्दमय
**ब्रह्मणि** = वेदमा
**गूढं** = प्रच्छन्न
**परं ज्योतिः** = परम ज्योति
**ब्रह्म** = परब्रह्म स्वरूप
**यं** = जुन
**त्वं** = हजुरलाई
**हि** = निश्चय नै
**अमलात्मानः** = शुद्ध अन्तःकरण भएका व्यक्तिहरूले
**आकाशं इव** = आकाशलाई झैं (व्यापक रूपमा)
**केवलं** = केवल (मायाको स्पर्शले रहित निर्विकार तत्त्वका रूपमा)
**पश्यन्ति** = साक्षात्कार गर्दछन्

**वाक्यार्थ–** हजुर शब्दमय वेदमन्त्रहरूमा प्रतिपादित ज्ञानमय परम ज्योति साक्षात् परब्रह्म हुनुहुन्छ। शुद्ध अन्तःकरण भएका व्यक्तिहरूले मात्र आकाश झैं व्यापक एवं मायाको स्पर्शले रहित

निर्विकार तत्त्वका रूपमा हजुरको साक्षात्कार गर्दछन्।

**नाभिर्नभोऽग्निर्मुखमम्बु रेतो द्यौः शीर्षमाशाः श्रुतिरङ्घ्रिरुर्वी।**
**चन्द्रो मनो यस्य दृगर्क आत्मा अहं समुद्रो जठरं भुजेन्द्रः॥ ३५॥**

**पदार्थ–**
**नभः** = आकाश
**यस्य** = जसको
**नाभिः** = नाभि
**अग्निः** = अग्नि
**मुखं** = मुख
**अम्बु** = जल
**रेतः** = वीर्य
**द्यौः** = स्वर्ग
**शीर्षम्** = शिर
**आशाः** = दिशाहरू
**श्रुतिः** = कान
**उर्वी** = पृथिवी
**अङ्घ्रिः** = पाउ
**चन्द्रः** = चन्द्रमा
**मनः** = मन
**अर्कः** = सूर्य
**दृक्** = आँखा
**अहं** = म (रुद्र)
**आत्मा** = अहङ्कार
**समुद्रः** = समुद्र
**जठरं** = पेट
**इन्द्रः** = इन्द्र आदि लोकपाल
**भुजा** = बाहु हुन्

**वाक्यार्थ–** हे प्रभु ! आकाश हजुरको नाभि हो। अग्नि मुख, जल वीर्य र स्वर्ग नै शिर हो। सम्पूर्ण दिशाहरू हजुरका कान हुन् भने पृथिवी पाउ हो। चन्द्रमा हजुरको मन हो र सूर्य आँखा हो। म (रुद्र) हजुरको अहङ्कार हुँ। त्यस्तै समुद्र नै हजुरको पेट हो भने इन्द्र आदि लोकपालहरू हजुरका बाहु हुन्।

**विवरण–** यस प्रसङ्गमा भगवान् श्रीकृष्ण र भगवान् शङ्करबिच युद्ध भएको देखाइएको छ। यो युद्ध केवल लीलाका लागि गरिएको हो। भगवान् शङ्कर श्रीकृष्णका आत्मा नै हुनुहुन्छ। श्रीकृष्णले के आफैँसँग लड्न सम्भव छ ? आफू एक मात्र भएकाले आफूसँग न रिसाउन मिल्छ, न खुसी हुन मिल्छ। लड्नका लागि त आफू अलग र आफ्नो प्रतिद्वन्द्वी अलग चाहिन्छ। भगवान् शङ्कर र भगवान् श्रीकृष्णलाई उभयात्मा अर्थात् एक-अर्काको आत्मा पनि भनिएको छ। त्यसैले यी दुईको युद्ध भए पनि उहाँहरू आपसमा द्वेषपूर्वक लड्नुभएको होइन भन्ने सिद्ध हुन्छ। यो त केवल सर्वस्वतन्त्र परमात्माको लीलाविलास हो। अभिमानी बाणासुरको अभिमानलाई नष्ट गर्न भगवान् शङ्करले नै उसलाई तेरो प्रतिद्वन्द्वी श्रीकृष्ण हुनुहुनेछ भनी बताइदिनुभएको थियो। त्यसलाई सत्य सिद्ध गर्न श्रीकृष्णले बाणासुरसँग लड्नुभयो। फेरि बाणासुर शिवभक्त भएकाले र उसको नगरको अधिपति हुने वर आफैँले दिएकाले भगवान् शङ्करले उनलाई यत्तिकै छाड्न पनि मिलेन र उसको पक्षबाट युद्ध गर्न जानुभयो। यसबाट भगवान् कतिसम्म भक्तको वशमा रहनुहुन्छ भन्ने पनि देखिन्छ। यसरी युद्धको नाटक रचाई भक्त प्रह्लादको वंशमा उत्पन्न अभिमानी बाणासुरको अभिमानलाई शान्त गरिएको छ र अभिमाननाशपछि उसलाई भगवान् श्रीकृष्णले नै अभयदान दिनुभएको छ। भगवान् विष्णुका अनन्य भक्त प्रह्लादका पनाति बाणासुर शिवको पार्षद नै हुने गरी उहाँको भक्त भएको हुनाले पनि शिव र विष्णुको भक्तिमा भेदभावना गर्नु हुँदैन भन्ने सूचित भएको छ। साथै भक्तको अभिमान नाश गर्न भगवान्हरूले लीला गर्ने बताइएको छ। शिवलाई श्रीकृष्णले जितेको प्रसङ्गमा पनि अर्को रहस्य रहेको छ। सर्वश्रेष्ठ देवताहरू शिव र विष्णुमध्ये

राजा परीक्षित् कृष्णका भक्त हुन् र उनले आफ्ना आराध्य कृष्णमा नै मनको निरोध गर्नुपर्दछ। शिवलाई पनि श्रीकृष्णले जितेको चरित्र सुनेपछि उनमा आफ्ना इष्टप्रति सर्वश्रेष्ठत्वको आदरभाव उब्जिन्छ, जुन उपासकको एकाग्रताका लागि परम आवश्यक छ। यसैका लागि पनि भागवतमा ठाउँ-ठाउँमा शिवपराजय, शिवमोह आदि भएको कथा आएका छन्। वास्तवमा यसै श्लोकमा बताइए अनुसार शिव र विष्णु एउटै सत्ताका दुई प्रतिरूप हुन् भनी बुझ्नुपर्दछ।

**रोमाणि यस्यौषधयोऽम्बुवाहाः केशा विरिञ्चो धिषणा विसर्गः।**
**प्रजापतिर्हृदयं यस्य धर्मः स वै भवान् पुरुषो लोककल्पः॥ ३६॥**

**पदार्थ—**
**यस्य** = जसको
**ओषधयः** = विभिन्न औषधिहरू
**रोमाणि** = रौँहरू हुन्
**अम्बुवाहाः** = मेघहरू
**केशाः** = केश हुन्
**धर्मः** = धर्म नै
**हृदयं** = हृदय हो
**यस्य** = जसको
**विरिञ्चः** = ब्रह्मा
**धिषणा** = बुद्धि
**प्रजापतिः** = प्रजापति
**विसर्गः** = लिङ्ग (हुन्)
**सः** = त्यस्ता
**भवान् वै** = हजुर नै
**लोककल्पः** = लोकद्वारा अवयवीका रूपमा प्रतिपादित
**पुरुषः** = विराट् पुरुष हुनुहुन्छ

**वाक्यार्थ—** विभिन्न औषधिहरू जसका रौँ हुन्, मेघहरू जसका केश हुन्, धर्म जसको हृदय हो अनि ब्रह्मा जसको बुद्धिका रूपमा तथा प्रजापति लिङ्गका रूपमा रहनुभएको छ, जो लोकद्वारा अवयवी (शरीरी)का रूपमा प्रतिपादित हुनुहुन्छ यस्ता हजुर विराट् पुरुष हुनुहुन्छ।

**तवावतारोऽयमकुण्ठधामन् धर्मस्य गुप्त्यै जगतो भवाय।**
**वयं च सर्वे भवतानुभाविता विभावयामो भुवनानि सप्त॥ ३७॥**

**पदार्थ—**
**अकुण्ठधामन्** = हे अखण्ड ज्योतिर्मय प्रभु
**तव** = हजुरको
**अयं** = यो
**अवतारः** = जन्म
**धर्मस्य** = धर्मको
**गुप्त्यै** = रक्षाका लागि (र)
**जगतः** = संसारको
**भवाय** = कल्याणका लागि हो
**वयं** = हामीहरू
**सर्वे च** = सबै लोकपालहरूले
**भवता** = हजुरद्वारा
**अनुभाविताः** = प्रेरित भई
**सप्त भुवनानि** = सातै लोकहरूलाई
**विभावयामः** = पालन गर्दछौँ

**वाक्यार्थ—** हे प्रभु ! हजुर अखण्ड ज्योतिर्मय हुनुहुन्छ। हजुरको यो जन्म पनि धर्मको संरक्षण र जगत्को कल्याणका लागि नै भएको हो। हामी सबै लोकपालहरू हजुरद्वारा प्रेरित भएर नै सातै लोक (भुर्लोक, भुवर्लोक, स्वर्लोक, महर्लोक, जनलोक, तपर्लोक, र सत्यलोक)को पालन गर्दछौँ।

**त्वमेक आद्यः पुरुषोऽद्वितीयस्तुर्यः स्वदृग्घेतुरहेतुरीशः।**
**प्रतीयसेऽथापि यथाविकारं स्वमायया सर्वगुणप्रसिद्ध्यै॥ ३८॥**

**पदार्थ–**
**त्वं** = हजुर नै
**एकः** = एक मात्र (सजातीय, विजातीय र स्वगत भेदशून्य)
**आद्यः पुरुषः** = आदि पुरुष
**अद्वितीयः** = अद्वितीय
**तुर्यः** = तुरीय स्वरूप (जाग्रत्, स्वप्न र सुषुप्ति यी तीन अवस्थाभन्दा पर)
**स्वदृक्** = स्वयंप्रकाश
**हेतुः** = सर्वकारण
**अहेतुः** = आफ्नो हेतुरहित (अकारण)
**ईशः** = सर्वस्वतन्त्र हुनुहुन्छ
**अथ अपि** = तर पनि
**सर्वगुणप्रसिद्ध्यै** = रजः आदि सम्पूर्ण गुणहरूद्वारा ऐश्वर्य आदिको प्रकाशनका लागि
**स्वमायया** = आफ्नो मायाद्वारा
**यथाविकारं** = विकारहरूलाई स्वीकार गरी (देवता, पशुपक्षी, मनुष्य आदि रूपमा)
**प्रतीयसे** = प्रतीत हुनुहुन्छ

**वाक्यार्थ–** हजुर सजातीय, विजातीय र स्वगत भेदशून्य एक मात्र आदिपुरुष र अद्वितीय हुनुहुन्छ। जाग्रत्, स्वप्न र सुषुप्ति यी तीन अवस्थाभन्दा पर अर्थात् तुरीय स्वरूप र स्वयंप्रकाश हुनुहुन्छ। सम्पूर्ण पदार्थहरूको कारण हजुर नै हुनुहुन्छ, तर हजुरको कुनै कारण छैन। हजुर सर्वतन्त्र स्वतन्त्र हुनुहुन्छ तापनि त्रिगुण र तज्जन्य ऐश्वर्यहरूको प्रकाशनका लागि आफ्नो मायाद्वारा विकारहरूलाई स्वीकार गरी देव, पशुपक्षी र मनुष्य आदिको रूपमा प्रतीत हुनुहुन्छ।

**यथैव सूर्यः पिहितश्छायया स्वया छायां च रूपाणि च सञ्चकास्ति।**
**एवं गुणेनापिहितो गुणांस्त्वमात्मप्रदीपो गुणिनश्च भूमन्॥ ३९॥**

**पदार्थ–**
**भूमन्** = हे सर्वव्यापक परमात्मा
**यथा** = जसरी
**स्वया** = आफ्नै
**छायया एव** = छाया मेघद्वारा नै
**पिहितः** = ढाकिएको
**सूर्यः** = सूर्यले
**छायां च** = मेघ आदि छाया र
**रूपाणि च** = निलो, पहैँलो आदि विभिन्न रूप तथा घट, पट आदि पदार्थहरूलाई पनि
**सञ्चकास्ति** = प्रकाशित गर्दछन्
**एवं** = त्यसै गरी
**गुणेन** = गुणरूप अहङ्कारद्वारा
**अपिहितः** = ढाकिए जैँ हुनुभएका
**आत्मप्रदीपः** = स्वयंप्रकाश
**त्वं** = हजुरले
**गुणान्** = ती गुणहरूलाई र
**गुणिनः च** = गुणी जीवहरूलाई पनि (प्रकाशित गर्नुहुन्छ)

**वाक्यार्थ–** हे सर्वव्यापक परमात्मा ! जसरी सूर्य आफ्नै कार्यभूत मेघ आदि छायाद्वारा ढाकिए जैँ हुन्छन् र मेघका साथै निलो, पहैँलो आदि विभिन्न रूप तथा घट, पट आदि पदार्थहरूलाई पनि आफैँ प्रकाशित गर्दछन् त्यसै गरी हजुर आफ्नै कार्यभूत गुणरूप अहङ्कारद्वारा ढाकिए जैँ हुनुहुन्छ, तर पनि स्वयंप्रकाश हजुरले शरीर, इन्द्रिय, अन्तःकरण आदि गुणहरूका साथै देह, इन्द्रिय आदिद्वारा ढाकिएको जीवलाई पनि प्रकाशित गर्नुहुन्छ।

**यन्मायामोहितधियः पुत्रदारगृहादिषु।**
**उन्मज्जन्ति निमज्जन्ति प्रसक्ता वृजिनार्णवे॥ ४०॥**

**पदार्थ–**
**यन्मायामोहितधियः** = जसको मायाद्वारा बुद्धि मोहित भएका

मनुष्यहरू
**पुत्रदारगृहादिषु** = छोरो, पत्नी र घर-व्यवहारमा
**प्रसक्ताः** = आसक्त भई
**वृजिनार्णवे** = दुःखको सागरमा
**निमज्जन्ति** = डुब्दछन् र
**उन्मज्जन्ति** = बाहिर निस्कन्छन्

**वाक्यार्थ–** हजुरको मायाद्वारा बुद्धि मोहित भएका मनुष्यहरू छोराछोरी, पत्नी र घर-व्यवहारमैं आसक्त हुन्छन् र दुःखको सागरमा डुब्दछन् र बाहिर निस्कन्छन्।

**देवदत्तमिमं लब्ध्वा नृलोकमजितेन्द्रियः।**
**यो नाद्रियेत त्वत्पादौ स शोच्यो ह्यात्मवञ्चकः॥ ४१॥**

**पदार्थ–**
**देवदत्तं** = भगवान्‌द्वारा दिइएको
**इमं** = यो
**नृलोकं** = मनुष्य शरीर
**लब्ध्वा** = पाएर पनि
**यः** = जसले
**अजितेन्द्रियः** = इन्द्रियलाई नजिती (इन्द्रियको वशमा परेर)
**त्वत्पादौ** = हजुरको चरणकमललाई
**न आद्रियेत** = सेवा गर्दैन
**सः** = त्यो व्यक्ति
**हि** = निश्चय नै
**आत्मवञ्चकः** = आफैँलाई ठग्ने
**शोच्यः** = शोचनीय हो

**वाक्यार्थ–** हे भगवान् ! दिव्यरूप हजुरद्वारा अत्यन्त कृपा गरेर प्रदान गरिएको मनुष्य शरीर पाएर पनि इन्द्रियसुखमा आसक्त भएर जसले हजुरको चरणकमलको सेवा गर्दैन, इन्द्रियको दास भएको त्यो व्यक्ति निश्चय नै शोचनीय छ किनभने उसले आफैँलाई ठगिरहेको छ।

**यस्त्वां विसृजते मर्त्य आत्मानं प्रियमीश्वरम्।**
**विपर्ययेन्द्रियार्थार्थं विषमत्त्यमृतं त्यजन्॥ ४२॥**

**पदार्थ–**
**यः** = जुन
**मर्त्यः** = मरणशील मनुष्यले
**आत्मानं** = सर्वात्मा
**प्रियं** = सर्वप्रिय
**ईश्वरं** = सर्वेश्वर
**त्वां** = हजुरलाई
**विपर्ययेन्द्रियार्थार्थं** = हजुरको विपरीत इन्द्रियका विषयभूत पुत्र आदिका लागि
**विसृजते** = त्याग्दछ (त्यसले)
**अमृतं** = अमृतलाई
**त्यजन्** = त्यागेर
**विषं** = विष
**अत्ति** = खाँदैछ

**वाक्यार्थ–** हे भगवान् ! हजुर सर्वात्मा, सर्वप्रिय र सर्वेश्वर हुनुहुन्छ। यस्ता हजुरलाई त्यागेर मरणशील जुन मनुष्यले हजुरको विपरीत अनात्मा, अप्रिय (दुःखरूप) र अनीश्वर स्वभाव भएका इन्द्रियका विषयभूत स्त्री, पुत्र आदिको पछि लाग्दछ उसले अमृत त्यागेर विष खाइरहेको छ।

**अहं ब्रह्माथ विबुधा मुनयश्चामलाशयाः।**
**सर्वात्मना प्रपन्नास्त्वामात्मानं प्रेष्ठमीश्वरम्॥ ४३॥**

**पदार्थ–**
**अहं** = म (शिव)
**ब्रह्मा** = ब्रह्मा

**अथ** = त्यस्तै
**विबुधाः** = सम्पूर्ण देवताहरू
**अमलाशयाः** = शुद्ध हृदय भएका
**मुनयः च** = ऋषिगण समेतका हामीहरू
**सर्वात्मना** = सर्वात्मभावले
**आत्मानं** = सर्वात्मा
**प्रेष्ठं** = परमप्रिय
**ईश्वरं** = सर्वेश्वर
**त्वां** = हजुरमा
**प्रपन्नाः** = शरणागत छौँ

**वाक्यार्थ–** म (शिव), ब्रह्मा, सम्पूर्ण देवता तथा जसको हृदय शुद्ध भइसकेको छ ती ऋषिगणहरू हामी सबै सर्वात्मभावले सर्वात्मा, परमप्रिय र सर्वेश्वर हजुरको शरणमा आएका छौँ।

**तं त्वा जगत्स्थित्युदयान्तहेतुं समं प्रशान्तं सुहृदात्मदैवम्।**
**अनन्यमेकं जगदात्मकेतं भवापवर्गाय भजाम देवम्॥ ४४॥**

**पदार्थ–**
**जगत्स्थित्युदयान्तहेतुं** = संसारको सृष्टि, स्थिति र लयका कारण
**समं** = सर्वसम
**प्रशान्तं** = प्रशान्त
**सुहृदात्मदैवं** = (बुद्धिप्रवर्तक) सुहृद्, सर्वात्मा र इष्टदेव
**अनन्यं** = अनन्य
**तं** = ती
**एकं** = अद्वितीय
**जगदात्मकेतं** = संसारका जीवात्माहरूको आश्रय
**देवं** = देव
**त्वा** = हजुरलाई
**भवापवर्गाय** = संसारबाट मुक्ति पाउनका लागि
**भजामः** = भजन (सेवा) गर्दछौँ

**वाक्यार्थ–** हजुर जगत्को उत्पत्ति, स्थिति र संहारको कारण हुनुहुन्छ। हजुर सबैमा समान र शान्त हुनुहुन्छ। सबै जीवहरूको बुद्धिका प्रवर्तक हजुर सुहृत्, आत्मा र आराध्यदेव हुनुहुन्छ। हामी संसारी जीवात्माहरूका अनन्य आश्रय, अद्वितीय, देवाधिदेव हजुरलाई संसारबाट मुक्ति पाउनका लागि भजन गर्दछौँ।

**अयं ममेष्टो दयितोऽनुवर्ती मयाभयं दत्तममुष्य देव।**
**सम्पाद्यतां तद् भवतः प्रसादो यथा हि ते दैत्यपतौ प्रसादः॥ ४५॥**

**पदार्थ–**
**अयं** = यो बाणासुर
**मम** = मेरो
**इष्टः** = मन परेको
**दयितः** = प्रिय
**अनुवर्ती** = अनुचर हो
**देव** = हे देव
**मया** = मद्वारा
**अमुष्य** = यसलाई
**अभयं** = अभय
**दत्तं** = दिइएको छ
**तत्** = त्यसकारण
**यथा हि** = जसरी
**दैत्यपतौ** = दैत्यराज प्रह्लादमा
**ते** = हजुरद्वारा
**प्रसादः** = कृपा गरियो (त्यसै गरी)
**भवतः** = हजुरबाट
**प्रसादः** = अनुग्रह
**सम्पाद्यताम्** = गरियोस्

**वाक्यार्थ–** हे प्रभु ! बाणासुर मेरो मन परेको प्रिय अनुचर हो। यसलाई मैले अभयप्रदान गरेको छु। जसरी हजुरले दैत्यराज प्रह्लादलाई अनुग्रह गर्नुभएको थियो, त्यसै गरी प्रह्लादकै वंशमा उत्पन्न यो बाणासुरमाथि पनि हजुरको कृपादृष्टि रहिरहोस्।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**यदात्थ भगवंस्त्वं नः करवाम प्रियं तव ।**

**भवतो यद् व्यवसितं तन्मे साध्वनुमोदितम् ॥ ४६ ॥**

**पदार्थ—**
**भगवन्** = हे भगवान्
**त्वं** = हजुरले
**नः** = हामीलाई
**यत्** = जे
**आत्थ** = भन्नुभयो (त्यही अनुसार)
**तव** = हजुरको
**प्रियं** = प्रिय (बाणासुरलाई अभयप्रदान)
**करवामः** = गर्छौं
**यत्** = जे
**भवतः** = हजुरको
**व्यवसितं** = निश्चय थियो
**तत्** = त्यही नै
**मे** = मद्वारा
**साधु** = राम्ररी
**अनुमोदितम्** = अनुमोदन मात्र गरियो

**वाक्यार्थ—** हे भगवान् ! हजुरले भने अनुसार नै मैले यो बाणासुरलाई अभयप्रदान गर्दछु। अब यसको बाहुच्छेदन जो भएको छ, त्यो पनि हजुरको नै पूर्वनिर्णय थियो, मैले त यसको बाहुहरू काटेर हजुरकै पूर्वनिर्णयलाई अनुमोदन मात्र गरेको हुँ।

**अवध्योऽयं ममाप्येष वैरोचनिसुतोऽसुरः ।**

**प्रह्लादाय वरो दत्तो न वध्यो मे तवान्वयः ॥ ४७ ॥**

**पदार्थ—**
**अयं** = यो
**असुरः** = असुर
**मम अपि** = मेरो लागि पनि
**अवध्यः** = अवध्य छ
(किनभने)
**एषः** = यो बाणासुर
**वैरोचनिसुतः** = बलिको पुत्र हो
**तव** = तिम्रो
**अन्वयः** = सन्तति
**मे** = मद्वारा
**न वध्यः** = वध्य हुनेछैन भनेर
**प्रह्लादाय** = प्रह्लादलाई
**वरः** = वरदान
**दत्तः** = दिएको थिएँ

**वाक्यार्थ—** बाणासुर दैत्यराज बलिको छोरो हो। त्यसैले मेरा लागि पनि यो अवध्य छ। किनभने मैले मेरा परमभक्त प्रह्लादलाई 'म तिम्रो वंशमा उत्पन्न कुनै पनि असुरको वध गर्नेछैन' भनी वरदान दिएको थिएँ।

**दर्पोपशमनायास्य प्रवृक्णा बाहवो मया ।**

**सूदितं च बलं भूरि यच्च भारायितं भुवः ॥ ४८ ॥**

**पदार्थ—**
**मया** = मद्वारा
**दर्पोपशमनाय** = घमन्ड नष्ट गर्नका लागि
**अस्य** = यो बाणासुरका
**बाहवः** = हातहरू
**प्रवृक्णाः** = काटिए
**यत् च** = जुन
**भुवः** = पृथिवीको
**भारायितं** = भार भएका
**भूरि** = धेरै
**बलं च** = सेनाहरू थिए

(तिनीहरू पनि)
**सूदितम्** = मारिए

**वाक्यार्थ–** बाणासुरको घमन्डलाई नष्ट गर्नकै लागि मैले यसका हातहरू काटिदिएको हुँ। पृथिवीका भार भएका यसका यी धेरै सेनाहरूलाई पनि मैले मारिदिएँ।

**चत्वारोऽस्य भुजाः शिष्टा भविष्यत्यजरामरः।**

**पार्षदमुख्यो भवतो न कुतश्चिद्भयोऽसुरः॥ ४९॥**

**पदार्थ–**
**अस्य** = यो बाणासुरका
**चत्वारः** = चार ओटा
**भुजाः** = बाहुहरू
**शिष्टाः** = बाँकी रहेका छन्
(यो)
**असुरः** = बाणासुर
**अजरामरः** = अजर अमर
**भवतः** = हजुरको
**पार्षदमुख्यः** = मुख्य पार्षद तथा
**न कुतश्चिद्भयः** = कसैबाट पनि भय नहुने सदा निर्भय
**भविष्यति** = हुनेछ

**वाक्यार्थ–** यो बाणासुरका चार ओटा हातहरू बाँकी रहेका छन्। यो सधैं अजर, अमर हुनेछ। यो हजुरको मुख्य पार्षद हुनेछ र यसलाई कसैबाट पनि भय हुनेछैन।

**इति लब्ध्वाभयं कृष्णं प्रणम्य शिरसासुरः।**

**प्राद्युम्निं रथमारोप्य सवध्वा समुपानयत्॥ ५०॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**अभयं** = अभय
**लब्ध्वा** = पाएर
**असुरः** = बाणासुरले
**शिरसा** = शिरद्वारा
**कृष्णं** = श्रीकृष्णलाई
**प्रणम्य** = नमस्कार गरेर
**सवध्वा** = वधू ऊषाले सहित
**प्राद्युम्निं** = अनिरुद्धलाई
**रथं** = रथमा
**आरोप्य** = राखेर
**समुपानयत्** = ल्यायो

**वाक्यार्थ–** यसरी भगवान् श्रीकृष्णबाट अभय प्राप्त गरेको बाणासुरले शिर झुकाएर श्रीकृष्णलाई नमस्कार गर्‍यो। त्यसपछि उसले वधू ऊषासहित अनिरुद्धलाई रथमा राखेर भगवान्‌को अगाडि ल्यायो।

**अक्षौहिण्या परिवृतं सुवासःसमलङ्कृतम्।**

**सपत्नीकं पुरस्कृत्य ययौ रुद्रानुमोदितः॥ ५१॥**

**पदार्थ–**
**रुद्रानुमोदितः** = भगवान् शङ्करबाट अनुमति प्राप्त गर्नुभएका श्रीकृष्ण
**अक्षौहिण्या** = अक्षौहिणी सेनाद्वारा
**परिवृतं** = युक्त भएका
**सुवासःसमलङ्कृतं** = सुन्दर वस्त्राभूषणहरूद्वारा अलङ्कृत
**सपत्नीकं** = पत्नी ऊषाले सहित भएका अनिरुद्धलाई
**पुरस्कृत्य** = अगाडि लगाएर
**ययौ** = (द्वारका) जानुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्णले शङ्करसँग अनुमति लिएपछि अनेक सुन्दर वस्त्र र अलङ्कारहरूद्वारा अलङ्कृत भएका ऊषा र अनिरुद्धको दम्पतीलाई एक अक्षौहिणी सेनासहित अगाडि लगाएर आफ्नो नगरी द्वारका फर्किनुभयो।

**स्वराजधानीं समलङ्कृतां ध्वजैः सतोरणैरुक्षितमार्गचत्वराम्।**

**विवेश शङ्खानकदुन्दुभिस्वनैरभ्युद्यतः पौरसुहृद्द्विजातिभिः॥ ५२॥**

पदार्थ–
**पौरसुहृद्द्विजातिभिः** = नगरवासी, मित्रजन र ब्राह्मणहरूद्वारा
**अभ्युद्यतः** = नजिकै आएर सत्कार गरिनुभएका श्रीकृष्ण
**शङ्खानकदुन्दुभिस्वनैः** = शङ्ख, नगारा र ढोलको ध्वनिद्वारा
**सतोरणैः** = तोरणसहित
**ध्वजैः** = झन्डाहरूद्वारा
**समलङ्कृतां** = सजिएको
**उक्षितमार्गचत्वरां** = पानीले बाटा र चौरहरू सेचन गरिएको
**स्वराजधानीं** = आफ्नो राजधानी द्वारकामा
**विवेश** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको आगमनमा प्रसन्न भएका नगरवासी, मित्रजन र ब्राह्मणहरूले अगाडि नै आएर भगवान्लाई सत्कार गरे। पूरै नगर शङ्ख, नगारा र ढोलको ध्वनिले गुन्जायमान थियो। जताततै तोरण र झन्डाहरू टाँगिएको द्वारकानगरी अत्यन्तै सजिएको थियो। बाटाघाटा र चौरहरू पानीले सिञ्चित गरिएका थिए। भगवान् श्रीकृष्णले यस्तो आफ्नो सुन्दर नगरी द्वारकामा प्रवेश गर्नुभयो।

**य एवं कृष्णविजयं शङ्करेण च संयुगम्।**

**संस्मरेत् प्रातरुत्थाय न तस्य स्यात् पराजयः॥ ५३॥**

पदार्थ–
**यः** = जसले
**एवं** = यस्तो
**कृष्णविजयं** = भगवान् श्रीकृष्णको विजय
**शङ्करेण च** = भगवान् शङ्करसँगको
**संयुगं** = युद्धलाई
**प्रातः** = बिहान
**उत्थाय** = उठेर
**संस्मरेत्** = स्मरण गर्दछ
**तस्य** = त्यसको
**पराजयः** = पराजय
**न स्यात्** = हुँदैन

**वाक्यार्थ–** जसले बिहानै उठेर भगवान् शङ्करसँग भएको श्रीकृष्णको युद्ध र त्यस युद्धमा भएको भगवान् श्रीकृष्ण विजयको स्मरण गर्दछ, त्यसको कहिल्यै पराजय हुँदैन।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे**

**उत्तरार्धेऽनिरुद्धानयनं नाम त्रिषष्टितमोऽध्यायः॥ ६३॥**

# अथ चतुःषष्टितमोऽध्यायः

## नृग राजाको कथा

यो अध्यायदेखि चौरासी अध्यायसम्मका एक्काईस अध्यायमा भगवान्का सात्त्विक निरोधका लीलाहरू बताइएका छन्। यसलाई पनि धर्म, अर्थ, काम र मोक्ष भनी चार प्रकरणमा विभाग गरिएको छ। प्रकरणविभाग गर्ने अनेक व्याख्याहरू परमात्मलीलाको रस लिने अनेक प्रक्रियाहरू हुन्। वास्तवमा त परमात्माको एउटै लीलामा पनि अनेक रहस्यहरू रहेका हुन्छन्। सुबोधिनीकार वल्लभाचार्यका अनुसार एक्काईस अध्यायमध्ये छ-छ अध्यायको कथावस्तुले क्रमशः अर्थ, धर्म र कामको प्रसङ्गलाई सूचित गर्दछन् भने अन्तिमका तीन अध्यायको कथावस्तुले मोक्षको सूचना गर्दछ। यो अध्यायदेखि उनान्सत्तरी अध्यायसम्मको छ अध्याय अर्थप्रकरण हो।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एकदोपवनं राजन् जग्मुर्यदुकुमारकाः।**

**विहर्तुं साम्बप्रद्युम्नचारुभानुगदादयः॥ १॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**एकदा** = एक दिन
**साम्बप्रद्युम्नचारुभानुगदादयः** = साम्ब, प्रद्युम्न, चारु, भानु, गद आदि
**यदुकुमारकाः** = यदुकुमारहरू
**उपवनं** = उपवनमा
**विहर्तुं** = विहार गर्न
**जग्मुः** = गए

**वाक्यार्थ–** हे राजा परीक्षित्! एक दिन साम्ब, प्रद्युम्न, चारु, भानु, गद आदि यदुकुमारहरू विहार गर्नका लागि उपवनमा गए।

**क्रीडित्वा सुचिरं तत्र विचिन्वन्तः पिपासिताः।**

**जलं निरुदके कूपे ददृशुः सत्त्वमद्भुतम्॥ २॥**

**पदार्थ–**
**तत्र** = त्यस उपवनमा
**सुचिरं** = धैरै समयसम्म
**क्रीडित्वा** = खेलेर
**पिपासिताः** = तिर्खाएका यदुकुमारहरूले
**जलं** = पानी
**विचिन्वन्तः** = खोज्दै गर्दा
**निरुदके** = पानी नभएको
**कूपे** = कुवामा
**अद्भुतं** = अद्भुत
**सत्त्वं** = जन्तुलाई
**ददृशुः** = देखे

**वाक्यार्थ–** त्यो उपवनमा धैरै समयसम्म विभिन्न खेलहरू खेलेपछि यदुकुमारहरू अत्यन्त तिर्खाए। उनीहरू पानी खोज्दै उपवनमा यता र उता डुल्न थाले। यसै क्रममा उनीहरूले पानी नभएको कुनै कुवाभित्र एउटा अद्भुत जन्तुलाई देखे।

**कृकलासं गिरिनिभं वीक्ष्य विस्मितमानसाः।**
**तस्य चोद्धरणे यत्नं चक्रुस्ते कृपयान्विताः॥ ३॥**

**पदार्थ–**
**गिरिनिभं** = पहाड जस्तै ठुलो
**कृकलासं** = छेपारोलाई
**वीक्ष्य** = देखेर
**विस्मितमानसाः** = आश्चर्यचकित भएका
**ते** = ती कुमारहरूले
**कृपयान्विताः** = कृपा गर्दै
**तस्य च** = त्यो छेपारोको
**उद्धरणे** = उद्धार गर्न
**यत्नं** = प्रयास
**चक्रुः** = गरे

**वाक्यार्थ–** पहाड जस्तै ठुलो शरीर भएको त्यस छेपारोलाई देखेर आश्चर्यचकित भएका दयालु यदुवंशी कुमारहरूले त्यसलाई कुवाबाट निकालेर उद्धार गर्ने प्रयास गरे।

**चर्मजैस्तान्तवैः पाशैर्बद्ध्वा पतितमर्भकाः।**
**नाशक्नुवन् समुद्धर्तुं कृष्णायाचख्युरुत्सुकाः॥ ४॥**

**पदार्थ–**
**अर्भकाः** = ती यदुकुमारहरूले
**पतितं** = (कुवामा) खसेको छेपारोलाई
**चर्मजैः** = छालाबाट बनेको
**तान्तवैः** = सूत्रमय
**पाशैः** = डोरीले
**बद्ध्वा** = बाँधेर
**समुद्धर्तुं** = निकाल्न
**न अशक्नुवन्** = सकेनन् (तब)
**उत्सुकाः** = (उद्धार गर्न) उत्सुक भएका ती कुमारहरूले
**कृष्णाय** = श्रीकृष्णलाई
**आचख्युः** = सुनाए

**वाक्यार्थ–** यदुकुमारहरूले कुवामा खसेको छेपारोलाई छालाले बनेको बलियो डोरीले बाँधेर निकाल्ने प्रयास गरे तर उनीहरूले निकाल्न सकेनन्। त्यसपछि त्यसको उद्धार कसरी होला भनेर उत्सुक भएका उनीहरूले श्रीकृष्णलाई सबै वृत्तान्त सुनाए।

**तत्रागत्यारविन्दाक्षो भगवान् विश्वभावनः।**
**वीक्ष्योज्जहार वामेन तं करेण स लीलया॥ ५॥**

**पदार्थ–**
**विश्वभावनः** = विश्वकै जीवनदाता
**अरविन्दाक्षः** = कमलनयन
**भगवान्** = भगवान्
**सः** = ती श्रीकृष्ण
**तत्र** = त्यस कुवामा
**आगत्य** = आएर
**वीक्ष्य** = (छेपारोलाई) देखेर
**वामेन** = देब्रे
**करेण** = हातद्वारा
**तं** = त्यो छेपारोलाई
**लीलया** = सजिलै
**उज्जहार** = उद्धार गर्नुभयो

**वाक्यार्थ–** विश्वकै जीवनदाता कमलनयन भगवान् श्रीकृष्ण त्यस कुवामा आउनुभयो र उहाँले कुवामा खसेको छेपारालाई देख्नुभयो। अनि आफ्नो देब्रे हातले तानेर त्यस छेपारालाई सजिलै कुवाबाट बाहिर निकाल्नुभयो।

**स उत्तमःश्लोककराभिमृष्टो विहाय सद्यः कृकलासरूपम् ।**

**सन्तप्तचामीकरचारुवर्णः स्वर्ग्यद्भुतालङ्करणाम्बरस्रक् ॥ ६ ॥**

**पदार्थ–**
**उत्तमःश्लोककराभिमृष्टः** = पवित्र कीर्ति भएका भगवान्को हातको स्पर्श पाएको
**सः** = त्यो छेपारो
**सद्यः** = तुरुन्त
**कृकलासरूपं** = छेपारोको रूपलाई
**विहाय** = त्यागेर
**सन्तप्तचामीकरचारुवर्णः** = तताएको सुनजस्तो सुन्दर वर्ण भएको
**अद्भुतालङ्करणाम्बरस्रक्** = अद्भुत वस्त्र, गहना र माला धारण गरेको
**स्वर्गी** = स्वर्गीय देवता (भयो)

**वाक्यार्थ–** पवित्रकीर्ति भएका भगवान् श्रीकृष्णको हातको स्पर्श पाउनासाथ त्यो बाहिर निकालिएको छेपारोले तत्काल छेपारोको रूपलाई त्याग गऱ्यो र तताएको सुन झैँ सुन्दर वर्ण भएको अनि विचित्र प्रकारका अद्भुत वस्त्र, गहना र माला धारण गरेको स्वर्गीय देवताको रूपमा परिणत भयो।

**पप्रच्छ विद्वानपि तन्निदानं जनेषु विख्यापयितुं मुकुन्दः ।**

**कस्त्वं महाभाग वरेण्यरूपो देवोत्तमं त्वां गणयामि नूनम् ॥ ७ ॥**

**पदार्थ–**
**मुकुन्दः** = भगवान् श्रीकृष्णले
**तन्निदानं** = त्यसको छेपारोको रूपमा जन्म भएको कारणलाई
**विद्वान् अपि** = जानेर पनि
**जनेषु** = मानिसहरूमा
**विख्यापयितुं** = प्रसिद्ध गराउन
**पप्रच्छ** = सोध्नुभयो
**वरेण्यरूपः** = सुन्दर रूप भएका
**महाभाग** = हे महोदय
**त्वं** = तपाईं
**कः** = को हुनुहुन्छ
**नूनं** = निश्चय नै
**त्वां** = तपाईंलाई
**देवोत्तमं** = श्रेष्ठ देवता
**गणयामि** = ठान्दछु

**वाक्यार्थ–** त्यो सुन्दर पुरुषको छेपारोको रूपमा जन्म के कारणले भएको थियो भन्ने कुरा भगवान् श्रीकृष्णलाई थाहा थियो तापनि त्यो कुरा सबै मनुष्यहरूमा प्रसिद्ध होस् भनेर उहाँले त्यो सुन्दर पुरुषलाई सोध्नुभयो– 'हे महाशय ! अति सुन्दर र दिव्य रूप भएका हजुर को हुनुहुन्छ ? मलाई लाग्दछ कि तपाईं कुनै श्रेष्ठ देवता हुनुहुन्छ।'

**दशामिमां वा कतमेन कर्मणा सम्प्रापितोऽस्यतदर्हः सुभद्र ।**

**आत्मानमाख्याहि विवित्सतां नो यन्मन्यसे नः क्षममत्र वक्तुम् ॥ ८ ॥**

**पदार्थ–**
**सुभद्र** = हे कल्याणमय भगवान्
**अतदर्हः** = यसका (छेपारो हुनका) लागि अयोग्य भएर पनि
**इमां** = यो (छेपारोको)
**दशां** = अवस्थामा
**कतमेन वा** = कुन चाहिँ
**कर्मणा** = कर्मद्वारा
**सम्प्रापितः** = प्राप्त हुनुभएको
**असि** = छ
**यत्** = यदि
**अत्र** = यहाँ

| | | |
|---|---|---|
| **नः** = हामीहरूलाई | **मन्यसे** = ठान्नुहुन्छ भने | **विवित्सतां** = जान्न चाहने |
| **वक्तुम्** = बताउन | **आत्मानं** = तपाईंको आफ्नो | **नः** = हामीहरूलाई |
| **क्षमं** = उचित | पूर्वरूप | **आख्याहि** = बताउनुहोस् |

**वाक्यार्थ–** हे भद्र ! वास्तवमा तपाईं यो छेपारो हुन योग्य हुनुहुन्न। अतः तपाईंको कुन त्यस्तो कर्मका कारण छेपारो हुनुपऱ्यो ? यस विषयमा यदि तपाईं हामीलाई बताउन उचित सम्झनुहुन्छ भने तपाईंको पूर्वरूपका बारेमा जान्न चाहने हामीहरूलाई यहाँ सबै कुरा बताउनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति स्म राजा सम्पृष्टः कृष्णेनानन्तमूर्तिना।**
**माधवं प्रणिपत्याह किरीटेनार्कवर्चसा ॥ ९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अनन्तमूर्तिना** = अनन्तमूर्ति | **राजा** = दिव्य पुरुषले | **माधवं** = श्रीकृष्णलाई |
| **कृष्णेन** = भगवान् श्रीकृष्णद्वारा | **अर्कवर्चसा** = सूर्यको जस्तो | **प्रणिपत्य** = ढोगेर |
| **इति** = यस प्रकार | कान्ति भएको | **आह स्म** = भने |
| **सम्पृष्टः** = सोधिएका | **किरीटेन** = मुकुटयुक्त शिरद्वारा | |
| | झुकेर | |

**वाक्यार्थ–** अनन्तमूर्ति भगवान् श्रीकृष्णले दिव्य पुरुषलाई यसरी सोधेपछि उनले सूर्यको जस्तै कान्ति भएको आफ्नो शिरको मुकुट झुकाएर भगवान्लाई ढोगे, अनि उनले भने।

**नृग उवाच** (नृगले भने)

**नृगो नाम नरेन्द्रोऽहमिक्ष्वाकुतनयः प्रभो।**
**दानिष्वाख्यायमानेषु यदि ते कर्णमस्पृशम्॥ १०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **प्रभो** = हे प्रभु | **नरेन्द्रः** = राजा हुँ | **ते** = हजुरको |
| **अहं** = म | **दानिषु** = दानीहरू | **कर्णम्** = कानलाई |
| **इक्ष्वाकुतनयः** = इक्ष्वाकुको छोरो | **आख्यायमानेषु** = बताउने | **अस्पृशम्** = मैले (मेरो नामले) |
| **नृगः नाम** = नृग नाम गरेको | क्रममा | छोएको हुनुपर्दछ |
| | **यदि** = निश्चय नै | |

**वाक्यार्थ–** हे प्रभु ! म इक्ष्वाकुको छोरो राजा नृग हुँ। दानीहरूको गणना गर्ने सन्दर्भमा मेरो नामले निश्चय नै हजुरको कानलाई स्पर्श गरेको (मेरो नाम सुन्नुभएको) हुनुपर्दछ।

**किं नु तेऽविदितं नाथ सर्वभूतात्मसाक्षिणः।**
**कालेनाव्याहतदृशो वक्ष्येऽथापि तवाज्ञया॥ ११॥**

**पदार्थ—**
**नाथ** = हे नाथ
**सर्वभूतात्मसाक्षिणः** = सम्पूर्ण प्राणीहरूको बुद्धिका साक्षी
**कालेन** = कालद्वारा पनि
**अव्याहतदृशः** = नछेकिएको अखण्ड ज्ञान भएका
**ते** = हजुरको लागि
**किं नु** = के चाहिँ
**अविदितं** = नजानिएको कुरा छ र
**अथ अपि** = तर पनि
**तव** = हजुरको
**आज्ञया** = आज्ञाद्वारा
**वक्ष्ये** = बताउँछु

**वाक्यार्थ—** हे नाथ ! हजुर सम्पूर्ण प्राणीहरूको बुद्धिको साक्षी हुनुहुन्छ। भूत, भविष्यत् आदि कालको प्रवाहले पनि हजुरको अखण्ड ज्ञानलाई अवरोध गर्न सक्दैन। अतः हजुरले नजानेको कुरा के छ र ? तर पनि हजुरको आज्ञालाई स्वीकार गरेर म हजुरले सोध्नुभएका कुराहरू बताउँछु।

**यावत्यः सिकता भूमेर्यावत्यो दिवि तारकाः।**
**यावत्यो वर्षधाराश्च तावतीरददां स्म गाः॥ १२॥**

**पदार्थ—**
**भूमेः** = पृथिवीको
**यावत्यः** = जति पनि
**सिकताः** = धुलोका कणहरू
**दिवि** = आकाशमा
**यावत्यः** = जति पनि
**तारकाः** = ताराहरू छन्
**यावत्यः** = जति पनि
**वर्षधाराः च** = वर्षाकालमा जलका धारा हुन्छन्
**तावतीः** = त्यति नै
**गाः** = गाईहरू
**अददाम् स्म** = दिएँ

**वाक्यार्थ—** पृथिवीमा जति धुलाका कणहरू छन्, आकाशमा जति ताराहरू छन् र वर्षाकालमा जति पानीका धाराहरू खस्दछन्, त्यति नै गाई मैले दान गरेँ।

**पयस्विनीस्तरुणीः शीलरूपगुणोपपन्नाः कपिला हेमशृङ्गीः।**
**न्यायार्जिता रूप्यखुराः सवत्सा दुकूलमालाभरणा ददावहम्॥ १३॥**

**पदार्थ—**
**अहं** = मैले
**पयस्विनीः** = अति दुधालु
**तरुणीः** = जवान (पहिलो बेते)
**शीलरूपगुणोपपन्नाः** = शील (सोझोपन), रूप (राम्री) गुण (मिठो दुध तथा धेरै घिउ लाग्ने आदि) भएकी
**कपिलाः** = कैली वर्णकी
**हेमशृङ्गीः** = सिङमा सुन बेरिएकी
**न्यायार्जिताः** = धर्मपूर्वक कमाइएकी
**रूप्यखुराः** = खुरमा चाँदीले मोडिएकी
**सवत्साः** = बाच्छाले सहित भएकी
**दुकूलमालाभरणाः** = वस्त्र, माला र गहनाहरू लगाइएका गाईहरू
**ददौ** = दान गरेँ

**वाक्यार्थ—** मैले अति दुधालु, पहिलो बेत ब्याएका जवान, साह्रै सोझा, राम्रा, स्वादिष्ट दुध दिने, प्रशस्त घिउ लाग्ने साह्रै गुणवती अनि कैलो वर्णका, मैले धर्मपूर्वक कमाएका, सिङमा सुन र खुरमा चाँदी बेरिएका, बाच्छा-बाच्छीले युक्त अनि वस्त्र, माला र गहनाहरू लगाएका गाईहरू दान गरेँ।

**स्वलङ्कृतेभ्यो गुणशीलवद्भ्यः सीदत्कुटुम्बेभ्य ऋतव्रतेभ्यः ।**
**तपःश्रुतब्रह्मवदान्यसद्भ्यः प्रादां युवभ्यो द्विजपुङ्गवेभ्यः ॥ १४ ॥**

**पदार्थ–**
**स्वलङ्कृतेभ्यः** = (मैले दिएका अलङ्कारद्वारा) राम्ररी अलङ्कृत
**गुणशीलवद्भ्यः** = सन्तोष आदि गुण र शील भएका
**सीदत्कुटुम्बेभ्य** = दुःखी कुटुम्ब भएका (निर्धन)
**ऋतव्रतेभ्यः** = सत्य व्रत भएका
**तपःश्रुतब्रह्मवदान्यसद्भ्यः** = तपस्वी, वेदाध्यायी, वेदका अध्यापक, सदाचारी
**युवभ्यः** = (गोपालन गर्न सक्षम) युवक
**द्विजपुङ्गवेभ्यः** = उत्तम ब्राह्मणहरूलाई
**प्रादाम्** = गाई दिएँ

**वाक्यार्थ–** सन्तोष आदि गुण र राम्रो शीलस्वभाव भएका अनि निर्धन भएकाले परिवारजनहरू दुःखी भएका, सत्य व्रत भएका, तपस्वी, वेदाध्यायी, वेदका अध्यापक, सदाचारी, राम्ररी गोपालन गर्न सक्षम युवक उत्तम ब्राह्मणहरूलाई मैले अलङ्कारहरूले अलङ्कृत गाईहरू दान दिएँ।

**गोभूहिरण्यायतनाश्वहस्तिनः कन्याः सदासीस्तिलरूप्यशय्याः ।**
**वासांसि रत्नानि परिच्छदान् रथानिष्टं च यज्ञैश्चरितं च पूर्तम् ॥ १५ ॥**

**पदार्थ–**
**गोभूहिरण्यायतनाश्वहस्तिनः** = गाई, भूमि, सुन, घर, घोडा र हात्तीहरू
**सदासीः** = दासीले सहित
**कन्याः** = कन्याहरू
**तिलरूप्यशय्याः** = तिल, चाँदी, शय्या
**वासांसि** = लत्ताकपडा
**रत्नानि** = रत्नहरू
**परिच्छदान्** = घरमा आवश्यक हुने अन्य सामग्रीहरू
**रथान् च** = रथहरू पनि दिएँ
**यज्ञैः** = यज्ञद्वारा
**इष्टं** = अग्निष्टोम आदि इष्ट कर्म र
**पूर्तम् च** = कुवा, चौतारो आदि बनाउने पूर्त कर्म पनि
**चरितम्** = गरेँ

**वाक्यार्थ–** मैले भूमि, सुन, घर, घोडा, हात्ती, दासीसहितकी कन्या, तिल, चाँदी, शय्या, लत्ताकपडा, अनेक रत्न, घरेलु सामग्री, रथहरू पनि दान गरेँ। मैले यज्ञहरूद्वारा इष्ट कर्म अनि पूर्त कर्महरू पनि गरेँ।

**टिप्पणी–** इष्ट कर्म र पूर्त कर्मका बारेमा भागवत ७।१५।४८-४९ मा बताइएको छ।

**कस्यचिद् द्विजमुख्यस्य भ्रष्टा गौर्मम गोधने ।**
**सम्पृक्ताविदुषा सा च मया दत्ता द्विजातये ॥ १६ ॥**

**पदार्थ–**
**कस्यचित्** = कुनै
**द्विजमुख्यस्य** = उत्तम (दान नलिने) ब्राह्मणको
**गौः** = गाई
**भ्रष्टा** = बथानबाट छुटेर
**मम** = मेरो
**गोधने** = गोधन भएको गोठमा
**सम्पृक्ता** = आएर मिसिइन्

**अविदुषा** = त्यो थाहा नपाएको
**मया** = मैले
**सा च** = त्यो गाई पनि
**द्विजातये** = अर्कै ब्राह्मणलाई
**दत्ता** = दिएँ

**वाक्यार्थ–** दान नलिने कुनै सदाचारी ब्राह्मणको गाई आफ्नो बथानबाट छुटेर मेरो गोठमा आएर मिसिइछन्, मैले त्यो कुरा थाहा पाइनँ। अनजानमा मैले ती गाई अर्कै ब्राह्मणलाई दान दिएँ।

**तां नीयमानां तत्स्वामी दृष्ट्वोवाच ममेति तम्।**
**ममेति प्रतिग्राह्याह नृगो मे दत्तवानिति ॥ १७ ॥**

**पदार्थ–**
**तां** = ती दानस्वरूप दिइएकी
**नीयमानां** = (दान प्राप्त गर्ने ब्राह्मणद्वारा) लैजाँदै गरिएकी गाईलाई
**तत्स्वामी** = त्यो गाईको वास्तविक मालिकले
**दृष्ट्वा** = देखेर
**मम इति** = मेरो हो भनेर
**तं** = ती ब्राह्मणलाई
**उवाच** = भने
**प्रतिग्राही** = गोदान पाएका ब्राह्मणले पनि
**मम इति** = मेरो हो (किनभने)
**नृगः** = महाराज नृगले
**मे** = मलाई
**दत्तवान् इति** = दिनुभएको हो भनेर
**आह** = भने

**वाक्यार्थ–** ती ब्राह्मणले गाई लिएर जाँदै गर्दा बाटामा गाईको वास्तविक मालिकले आफ्नो गाईलाई देखे र ती ब्राह्मणलाई 'यो गाई त मेरो हो' भने। गोदान पाएका ब्राह्मणले पनि 'होइन होइन, यो गाई त मेरै हो, महाराज नृगले मलाई दानस्वरूप दिनुभएको हो' भने।

**विप्रौ विवदमानौ मामूचतुः स्वार्थसाधकौ।**
**भवान् दातापहर्तेति तच्छ्रुत्वा मेऽभवद् भ्रमः ॥ १८ ॥**

**पदार्थ–**
**विवदमानौ** = परस्पर झगडा गरिरहेका
**स्वार्थसाधकौ** = (मेरो निर्णयबाट) आफ्नो स्वार्थ सिद्ध गर्न (गाई लिन) उत्सुक
**विप्रौ** = ती दुबै ब्राह्मणहरूले
**मां** = मलाई
**ऊचतुः** = भन्न थाले
**भवान्** = हजुर
**दाता** = दाता हुनुहुन्छ
**अपहर्ता इति** = हजुर गाई हरण गर्नेवाला हुनुहुन्छ
**तत्** = ती दुबैको कुरा
**श्रुत्वा** = सुनेर
**मे** = मलाई
**भ्रमः** = भ्रम
**अभवत्** = भयो

**वाक्यार्थ–** परस्पर झगडा गर्दै मेरो अगाडि आएका ती दुबै जना ब्राह्मण (मेरो निर्णयबाट) आफ्नो स्वार्थ सिद्ध गर्न (गाई लिन) उत्सुक थिए। त्यसपछि गोदान पाउने ब्राह्मणले 'हजुर दाता हुनुहुन्छ' भन्न थाले भने गोस्वामी अर्का ब्राह्मणले 'हजुर गाई हरण गर्नेवाला हुनुहुन्छ' भन्न थाले। ती दुबैको कुरा सुनेर म भ्रमित भएँ।

**अनुनीतावुभौ विप्रौ धर्मकृच्छ्रगतेन वै ।**
**गवां लक्षं प्रकृष्टानां दास्याम्येषा प्रदीयताम् ॥ १९ ॥**

**पदार्थ—**
**धर्मकृच्छ्रगतेन वै** = धर्मको विचार गर्न नसकेर सङ्कटमा परेको मद्वारा
**उभौ** = दुबै
**विप्रौ** = ब्राह्मणहरू
**अनुनीतौ** = प्रार्थना गरिए
**प्रकृष्टानां** = श्रेष्ठ
**गवां** = गाईहरूमा
**लक्षं** = एक लाख
**दास्यामि** = दिनेछु
**एषा** = यी गाई (हजुरहरूमध्ये एकले अर्कालाई)
**प्रदीयताम्** = दिनुहोस्

**वाक्यार्थ—** धर्मको विचार गर्न नसकेर सङ्कटमा परेको मैले ती दुबै ब्राह्मणहरूलाई प्रार्थना गर्दै भनेँ— 'म यो गाईको सट्टा श्रेष्ठ एक लाख गाईहरू दिनेछु। अतः यो गाई हजुरहरूमध्ये एक जनाले अर्कालाई दिनुहोस् ।'

**भवन्तावनुगृह्णीतां किङ्करस्याविजानतः ।**
**समुद्धरत मां कृच्छ्रात् पतन्तं निरयेऽशुचौ ॥ २० ॥**

**पदार्थ—**
**भवन्तौ** = हजुरहरूले
**अविजानतः** = (यो गाई अरूको हो भन्ने) नजानेको
**किङ्करस्य** = सेवक ममाथि
**अनुगृह्णीतां** = कृपा गर्नुहोस्
**अशुचौ** = अपवित्र घोर
**निरये** = नरकमा
**पतन्तं** = खस्न लागेको
**मां** = मलाई
**कृच्छ्रात्** = सङ्कटबाट
**समुद्धरत** = उद्धार गर्नुहोस्

**वाक्यार्थ—** यो गाई अरूकै हो भन्ने मलाई थाहा भएन, म हजुरहरूको सेवक हुँ, मलाई कृपा गर्नुहोस् । अपवित्र घोर नरकमा खस्न लागेको मलाई सङ्कटबाट बचाउनुहोस् ।

**नाहं प्रतीच्छे वै राजन्नित्युक्त्वा स्वाम्यपाक्रमत् ।**
**नान्यद् गवामप्ययुतमिच्छामीत्यपरो ययौ ॥ २१ ॥**

**पदार्थ—**
**राजन्** = हे राजा
**अहं** = म (बदलामा दिने भनिएका गाईहरू)
**न प्रतीच्छे** = लिन चाहन्नँ
**इति उक्त्वा** = यसो भनेर
**स्वामी** = गोस्वामी ब्राह्मण
**अपाक्रमत्** = गए
**वै** = निश्चय नै (त्यसपछि)
**अपरः** = अर्का प्रतिग्राही ब्राह्मण
**अन्यत्** = अरू (यीभन्दा बाहेक)
**गवां अयुतं अपि** = दश हजार गाई दिए पनि
**न इच्छामि** = लिन चाहन्नँ
**इति** = यसो भनेर
**ययौ** = गए

**वाक्यार्थ—** हे राजा ! यी गाईलाई छोडेर यसको सट्टामा हजुरद्वारा दिने भनिएका एक लाख गाईहरू दिए पनि मलाई चाहिँदैन भनेर गोस्वामी ब्राह्मण गए। अर्का प्रतिग्राही ब्राह्मणले पनि हे राजा ! हजुरले प्रतिज्ञा गरेको एक लाख गाईहरूमा अरू दश हजार (जम्मा एक लाख दशहजार)

गाईहरू थपेर नै दिए पनि म यसको सट्टामा अरू गाई लिन चाहन्नँ भनेर गए।

**एतस्मिन्नन्तरे याम्यैर्दूतैर्नीतो यमक्षयम्।**
**यमेन पृष्टस्तत्राहं देवदेव जगत्पते॥ २२॥**

| **पदार्थ–** | **याम्यैः** = यमराजका | **यमेन** = यमराजद्वारा |
|---|---|---|
| **देवदेव** = हे देवाधिदेव | **दूतैः** = दूतहरूद्वारा (म) | **अहं** = म |
| **जगत्पते** = हे जगदीश्वर | **यमक्षयं** = यमलोकमा | **पृष्टः** = सोधिएँ |
| **एतस्मिन्** = यसै | **नीतः** = पुऱ्याइएँ | |
| **अन्तरे** = बिचमा | **तत्र** = त्यहाँ | |

**वाक्यार्थ–** हे देवाधिदेव जगदीश्वर! यसै बिचमा यमदूतहरू आएर मलाई यमलोकमा पुऱ्याए। यमलोकमा पुगेपछि मलाई यमराजले सोध्नुभयो।

**पूर्वं त्वमशुभं भुङ्क्ष उताहो नृपते शुभम्।**
**नान्तं दानस्य धर्मस्य पश्ये लोकस्य भास्वतः॥ २३॥**

| **पदार्थ–** | **उताहो** = अथवा | **भास्वतः** = प्रकाशमान |
|---|---|---|
| **नृपते** = हे राजा | **शुभं** = पुण्यको फल | **लोकस्य** = स्वर्ग आदि लोकको |
| **त्वं** = तपाईं | **भुङ्क्षे** = भोग गर्नुहुन्छ | **अन्तं** = अन्त्य |
| **पूर्वं** = पहिले | **दानस्य** = दानको | **न पश्ये** = देख्दिनँ |
| **अशुभं** = पापको फल | **धर्मस्य** = धर्मको | |

**वाक्यार्थ–** हे राजा! तपाईं पहिले पापको (अरूको गाई आफूले दान गरेको) फल भोग्न चाहनुहुन्छ कि पुण्यको फल? हजुरले जुन दान गर्नुभएको छ, त्यसबाट उत्पन्न भएको धर्मको फलस्वरूप हजुरलाई यस्ता प्रकाशमान् लोकको प्राप्ति हुनेछ, जसको कुनै अन्त्य नै म देख्दिनँ।

**पूर्वं देवाशुभं भुञ्ज इति प्राह पतेति सः।**
**तावदद्राक्षमात्मानं कृकलासं पतन् प्रभो॥ २४॥**

| **पदार्थ–** | **इति** = यसो भनेपछि | **पतन्** = पतन भएको मैले |
|---|---|---|
| **देव** = हे भगवान् | **सः** = ती यमराजले | **तावत्** = त्यस वेला |
| **पूर्वं** = पहिले म | **पत इति** = पतन होस् भनेर | **आत्मानं** = आफूलाई |
| **अशुभं** = पापको फल | **प्राह** = भन्नुभयो | **कृकलासं** = छेपारोको रूपमा |
| **भुञ्जे** = भोग्न चाहन्छु | **प्रभो** = हे प्रभु | **अद्राक्षम्** = देखेँ |

**वाक्यार्थ–** मैले भनेँ– हे भगवान्! पहिले म पापको फल भोग्न चाहन्छु। त्यसपछि यमराजले

'पतन होस्' भन्नुभयो। उहाँले त्यसो भन्नासाथ मेरो पतन भयो। त्यसपछि मैले आफूलाई छेपारोको रूपमा देखेँ।

**ब्रह्मण्यस्य वदान्यस्य तव दासस्य केशव।**
**स्मृतिर्नाद्यापि विध्वस्ता भवत्सन्दर्शनार्थिनः॥ २५॥**

**पदार्थ—**
**केशव** = हे केशव
**ब्रह्मण्यस्य** = ब्राह्मणभक्त
**वदान्यस्य** = दानी
**तव** = हजुरको
**दासस्य** = सेवक
**भवत्सन्दर्शनार्थिनः** = हजुरको दर्शन गर्न चाहने मेरो
**अद्य अपि** = अहिले पनि
**स्मृतिः** = पूर्वजन्मको स्मृति
**न विध्वस्ता** = नष्ट भएको छैन

**वाक्यार्थ—** हे केशव ! म ब्राह्मणहरूको भक्त, दानी र हजुरको सेवक थिएँ। त्यसैले मेरो हजुरलाई दर्शन गर्ने चाहना थियो। त्यसैले अहिले पनि त्यो मेरो पूर्वजन्मको स्मृति नष्ट भएको छैन।

**स त्वं कथं मम विभोऽक्षिपथः परात्मा**
**योगेश्वरैः श्रुतिदृशामलहृद्विभाव्यः।**
**साक्षादधोक्षज उरुव्यसनान्धबुद्धेः**
**स्यान्मेऽनुदृश्य इह यस्य भवापवर्गः॥ २६॥**

**पदार्थ—**
**विभो** = हे प्रभु
**योगेश्वरैः** = योगेश्वरहरूद्वारा
**श्रुतिदृशा** = उपनिषद्दृष्टिद्वारा
**अमलहृद्विभाव्यः** = शुद्ध अन्तःकरणमा चिन्तन गरिनुहुने
**साक्षात्** = साक्षात्
**अधोक्षजः** = इन्द्रियको विषयभन्दा पर रहेका
**सः** = त्यस्ता
**परात्मा** = परमात्मा
**त्वं** = हजुरले
**उरुव्यसनान्धबुद्धेः** = धेरै दुःखका कारण बुद्धि अन्धो भएको
**मम** = मेरो
**अक्षिपथः** = आँखाको बाटोमा
**कथं** = कसरी आउनुभयो
**इह** = यस संसारमा
**यस्य** = जसको
**भवापवर्गः** = संसारको समाप्ति
**स्यात्** = हुन्छ (त्यसको लागि दर्शनीय हजुर)
**मे** = मेरो
**अनुदृश्यः** = दर्शनको विषय हुनुभएको छ

**वाक्यार्थ—** हे प्रभु ! योगीश्वरहरूले उपनिषद्दृष्टिद्वारा (अभेददृष्टिद्वारा) हजुरलाई आफ्नै शुद्ध हृदयमा चिन्तन गर्दछन् (तर साक्षात्कार गर्न सक्दैनन्)। त्यस्ता इन्द्रियको विषयभन्दा पर रहेका केवल चिन्तनका विषयका रूपमा रहनुहुने हजुर कसरी मेरो आँखाको विषय हुनुभयो ? म त अनेक प्रकारका दुःखहरूबाट प्रताडित भएर अन्धो (विवेकशून्य) भएको संसारी व्यक्ति हुँ। हजुरको दर्शन त त्यस वेला हुन्छ, जब कुनै व्यक्तिका लागि संसारको प्रपञ्च समाप्त हुन्छ। तर पनि मैले हजुरलाई दर्शन गर्न पाएँ।

**देवदेव जगन्नाथ गोविन्द पुरुषोत्तम ।**
**नारायण हृषीकेश पुण्यश्लोकाच्युताव्यय ॥ २७ ॥**
**अनुजानीहि मां कृष्ण यान्तं देवगतिं प्रभो ।**
**यत्र क्वापि सतश्चेतो भूयान्मे त्वत्पदास्पदम् ॥ २८ ॥**

**पदार्थ–**
**गोविन्द** = हे गोविन्द
**देवदेव** = हे देवाधिदेव
**जगन्नाथ** = हे जगत्का स्वामी
**पुरुषोत्तम** = हे पुरुषोत्तम
**नारायण** = हे नारायण
**हृषीकेश** = हे इन्द्रियहरूका अधिष्ठाता
**पुण्यश्लोक** = हे पवित्रकीर्ति भएका भगवान्
**अच्युत** = हे अच्युत
**अव्यय** = हे अविनाशी
**प्रभो** = हे प्रभु
**कृष्ण** = हे श्रीकृष्ण
**देवगतिं** = देवलोक स्वर्ग
**यान्तं** = जान लागेको
**मां** = मलाई
**अनुजानीहि** = आज्ञा दिनुहोस्
**यत्र** = जहाँ
**क्व अपि** = कहीँ पनि
**सतः** = बसेको
**मे** = मेरो
**चेतः** = मन
**त्वत्पदास्पदं** = हजुरको चरणकमलको आश्रयी
**भूयात्** = होस्

**वाक्यार्थ–** हे गोविन्द, हे देवाधिदेव, हे जगत्का स्वामी, हे पुरुषोत्तम, हे नारायण, हे इन्द्रियहरूका अधिष्ठाता, हे पवित्रकीर्ति भएका भगवान्, हे अच्युत, हे अविनाशी, हे प्रभु श्रीकृष्ण ! अब म स्वर्गलोक जान्छु, कृपया मलाई आज्ञा दिनुहोस्। हे प्रभु ! कर्मवशात् म जहाँ कहीँ रहनु परे पनि हजुरको स्मरणीय चरणकमलमा मेरो मन लागिरहोस्।

**नमस्ते सर्वभावाय ब्रह्मणेऽनन्तशक्तये ।**
**कृष्णाय वासुदेवाय योगानां पतये नमः ॥ २९ ॥**

**पदार्थ–**
**सर्वभावाय** = सम्पूर्ण कार्यरूप तथा कारणरूप
**ब्रह्मणे** = परब्रह्म
**अनन्तशक्तये** = अनन्त शक्तिमान्
**ते** = हजुरलाई
**नमः** = नमस्कार गर्दछु
**कृष्णाय** = श्रीकृष्ण
**वासुदेवाय** = वासुदेव
**योगानां** = योगहरूका
**पतये** = स्वामी हजुरलाई
**नमः** = नमस्कार गर्दछु

**वाक्यार्थ–** हे श्रीकृष्ण ! हजुर सम्पूर्ण कार्यरूपमा र कारणरूपमा आफैँ अभिव्यक्त हुनुहुन्छ, अनन्त शक्तिले सम्पन्न साक्षात् परब्रह्म हजुरलाई म नमस्कार गर्दछु। हे वासुदेव ! समस्त योगहरूका स्वामी हजुरलाई नमस्कार गर्दछु।

**इत्युक्त्वा तं परिक्रम्य पादौ स्पृष्ट्वा स्वमौलिना ।**
**अनुज्ञातो विमानाग्र्यमारुहत् पश्यतां नृणाम् ॥ ३० ॥**

**पदार्थ–**
**इति उक्त्वा** = यसो भनेर
**तं** = ती भगवान् श्रीकृष्णलाई
**परिक्रम्य** = परिक्रमा गरेर
**स्वमौलिना** = आफ्नो मुकुटद्वारा
**पादौ** = भगवान्का चरणकमल
**स्पृष्ट्वा** = स्पर्श गरेर
**अनुज्ञातः** = आज्ञा लिएर
**नृणां** = सबै मानिसहरूले
**पश्यतां** = हेदर्हिर्दै
**विमानाग्र्यं** = श्रेष्ठ विमानमा
**आरुहत्** = चढे

**वाक्यार्थ–** यसो भनेर राजा नृगले भगवान् श्रीकृष्णलाई परिक्रमा गरे अनि आफ्नो मुकुटले (शिर झुकाएर) भगवान्को चरणकमलको स्पर्श गरे। अनि भगवान्को आज्ञा पाएर उनी सबै मानिसहरूले हेदर्हिर्दै श्रेष्ठ विमानमा चढे।

**कृष्णः परिजनं प्राह भगवान् देवकीसुतः।**
**ब्रह्मण्यदेवो धर्मात्मा राजन्याननुशिक्षयन्॥ ३१॥**

**पदार्थ–**
**ब्रह्मण्यदेवः** = ब्राह्मणलाई देवता मान्ने
**धर्मात्मा** = धर्मात्मा
**देवकीसुतः** = देवकीनन्दन
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्णले
**राजन्यान्** = क्षत्रियहरूलाई
**अनुशिक्षयन्** = शिक्षा दिँदै
**परिजनं** = उपस्थित आत्मीय जनहरूलाई
**प्राह** = भन्नुभयो

**वाक्यार्थ–** त्यसपछि ब्राह्मणका परमभक्त, धर्मात्मा, देवकीनन्दन, भगवान् श्रीकृष्णले क्षत्रियहरूलाई शिक्षा दिनका लागि वरिपरि उपस्थित आत्मीयजनहरूलाई भन्नुभयो।

**दुर्जरं बत ब्रह्मस्वं भुक्तमग्नेर्मनागपि।**
**तेजीयसोऽपि किमुत राज्ञां ईश्वरमानिनाम्॥ ३२॥**

**पदार्थ–**
**बत** = निश्चय नै
**मनाग् अपि** = थोरै पनि (अनुचित ढङ्गले)
**भुक्तं** = भोग गरिएको
**ब्रह्मस्वं** = ब्राह्मणको सम्पत्ति
**अग्नेः** = अग्निसमान
**तेजीयसः अपि** = तेजस्वी पुरुषको लागि पनि
**दुर्जरं** = अपाच्य हुन्छ
**ईश्वरमानिनां** = आफूलाई सर्वसमर्थ ठान्ने अभिमानी
**राज्ञां** = राजाहरूको लागि
**किमुत** = के भन्नु र

**वाक्यार्थ–** अग्निसमान अति तेजस्वी व्यक्तिहरू पनि यदि ब्राह्मणको थोरै पनि सम्पत्ति अनुचित ढङ्गले भोग गर्दछन् भने तिनीहरूले त्यो पचाउन सक्दैनन् भने आफूलाई सर्वसमर्थ ठान्ने अभिमानी राजाहरूले त झन् कसरी ब्रह्मस्व पचाउन सक्लान्?

**नाहं हालाहलं मन्ये विषं यस्य प्रतिक्रिया।**
**ब्रह्मस्वं हि विषं प्रोक्तं नास्य प्रतिविधिर्भुवि॥ ३३॥**

**पदार्थ–**
**यस्य** = जसको
**प्रतिक्रिया** = निवृत्तिको उपाय

(उपचार) छ
**हालाहलं** = त्यस्तो हालाहललाई
**अहं** = म
**विषं** = विष
**न मन्ये** = मान्दिनँ
**हि** = निश्चय नै
**ब्रह्मस्वं** = ब्राह्मणको सम्पत्ति
**विषं** = विष (भनेर)
**प्रोक्तं** = बताइएको छ
**अस्य** = यो ब्रह्मस्वको
**भुवि** = पृथिवीमा
**प्रतिविधिः** = प्रतिरोध गर्ने उपाय
**न** = छैन

**वाक्यार्थ—** म हालाहललाई विष मान्दिनँ किनकि त्यसलाई शान्त गर्ने उपाय वा उपचार छ। वास्तवमा ब्राह्मणको सम्पत्ति नै विष हो किनभने पृथिवीमा ब्रह्मस्वको प्रतिरोध गर्ने कुनै उपाय छैन।

**हिनस्ति विषमत्तारं वह्निरद्भिः प्रशाम्यति।**
**कुलं समूलं दहति ब्रह्मस्वारणिपावकः॥ ३४॥**

**पदार्थ—**
**विषं** = विषले
**अत्तारं** = खाने मान्छेलाई मात्र
**हिनस्ति** = मार्दछ
**वह्निः** = आगो
**अद्भिः** = पानीद्वारा
**प्रशाम्यति** = निभ्दछ
**ब्रह्मस्वारणिपावकः** = ब्राह्मणको सम्पत्तिरूप अरणि (आगो पार्नका लागि प्रयोग गरिने काठ) बाट उत्पन्न आगोले त
**समूलं** = मूलसहित
**कुलं** = कुललाई
**दहति** = डढाउँछ

**वाक्यार्थ—** विषले त विष खाने मान्छेलाई मात्र मार्दछ। पानीले आगोलाई निभाइदिन्छ, तर ब्राह्मणको सम्पत्तिरूप अरणिबाट उत्पन्न पापरूपी आगोले त मूलै सहित कुललाई नै डढाइदिन्छ।

**ब्रह्मस्वं दुरनुज्ञातं भुक्तं हन्ति त्रिपूरुषम्।**
**प्रसह्य तु बलाद् भुक्तं दश पूर्वान् दशापरान्॥ ३५॥**

**पदार्थ—**
**दुरनुज्ञातं** = राम्ररी अनुमति नलिईकन
**भुक्तं** = भोग गरिएको
**ब्रह्मस्वं** = ब्राह्मणको सम्पत्ति
**त्रिपूरुषं** = तीन पुस्ता (तथा)
**प्रसह्य** = हठ गरेर अथवा
**बलात्** = बलपूर्वक खोसेर
**भुक्तं तु** = भोग गरिएको ब्रह्मस्वले त
**दश पूर्वान्** = दश पुस्ता अगाडि र
**दश अपरान्** = दश पुस्ता पछाडिका मान्छेलाई पनि
**हन्ति** = नष्ट गर्दछ (नरकमा पार्दछ)

**वाक्यार्थ—** ब्राह्मणको सम्पत्ति राम्ररी अनुमति नलिईकन भोग गरियो भने त्यो भोग गर्ने व्यक्तिको तीन पुस्ता (भोक्ता, भोक्ताको पिता र भोक्ताको छोरा) नरकमा पर्दछन् । तर यदि कसैले हठ गरेर अथवा बलपूर्वक खोसेर ब्राह्मणको सम्पत्ति खान्छ भने त्यसको अगाडि र पछाडिका दश-दश पुस्ताका मानिसहरू समेत नरकमा पर्दछन्।

**राजानो राजलक्ष्म्यान्धा नात्मपातं विचक्षते।**
**निरयं येऽभिमन्यन्ते ब्रह्मस्वं साधु बालिशाः॥ ३६॥**

**पदार्थ–**
**ये** = जो
**राजलक्ष्म्या** = राजलक्ष्मीद्वारा
**अन्धाः** = अन्धो भएका
**बालिशाः** = मूर्ख
**राजानः** = राजाहरू
**निरयं** = नरकको कारण
**ब्रह्मस्वं** = ब्राह्मणको सम्पत्तिलाई
**साधु** = राम्ररी
**अभिमन्यन्ते** = भोग गर्न चाहन्छन् (तिनीहरू)
**आत्मपातं** = आफ्नो पतनलाई
**न विचक्षते** = देख्दैनन्

**वाक्यार्थ–** राजलक्ष्मीको आडमा मदान्ध भएका जुन मूर्ख राजाहरू नरकको कारण भएको ब्राह्मणको सम्पत्ति लुटेर भोग गर्न चाहन्छन्, तिनीहरू नरकमा आफ्नो पतन हुन्छ भन्ने थाहा पाउँदैनन्।

**गृह्णन्ति यावतः पांसून् क्रन्दतामश्रुबिन्दवः।**
**विप्राणां हृतवृत्तीनां वदान्यानां कुटुम्बिनाम्॥ ३७॥**
**राजानो राजकुल्याश्च तावतोऽब्दान् निरङ्कुशाः।**
**कुम्भीपाकेषु पच्यन्ते ब्रह्मदायापहारिणः॥ ३८॥**

**पदार्थ–**
**हृतवृत्तीनां** = वृत्ति हरण गरिएका
**वदान्यानां** = उदार हृदय भएका
**कुटुम्बिनां** = धेरै जहान भएका
**विप्राणां** = ब्राह्मणहरूको
**क्रन्दताम्** = रुँदा झरेका
**अश्रुबिन्दवः** = आँसुका थोपाहरूले
**यावतः** = जति
**पांसून्** = धुलोको कणहरू
**गृह्णन्ति** = लिन्छन् (भिज्दछन्)
**तावतः** = त्यति नै
**अब्दान्** = वर्षहरू
**निरङ्कुशाः** = शास्त्रको मर्यादा नाघ्ने निरङ्कुश
**ब्रह्मदायापहारिणः** = ब्राह्मणको सम्पत्ति खोस्ने
**राजानः** = राजाहरू र
**राजकुल्याः च** = राजकुलमा उत्पन्न भएकाहरू पनि
**कुम्भीपाकेषु** = कुम्भीपाक नरकमा
**पच्यन्ते** = पकाइन्छन्

**वाक्यार्थ–** जुन राजाले अथवा राजकुलमा उत्पन्न भएका व्यक्तिहरूले उदारहृदयी, प्रशस्त कुटुम्ब भएको ब्राह्मणको वृत्ति हरण गर्दछन् वा उसको सम्पत्ति जबर्जस्ती लुट्दछन् तिनीहरूले त्यति नै वर्षसम्म कुम्भीपाक नरकमा परेर दुःख पाउँछन् जति त्यो ब्राह्मण रुँदा उसको आँखाबाट झरेका आँसुले धुलोका कणहरू भिज्दछन्।

**स्वदत्तां परदत्तां वा ब्रह्मवृत्तिं हरेच्च यः।**
**षष्टिवर्षसहस्राणि विष्ठायां जायते कृमिः॥ ३९॥**

**पदार्थ–**
**यः च** = जसले
**स्वदत्तां** = आफैँले दिएको
**परदत्तां वा** = अथवा अरूले दिएको
**ब्रह्मवृत्तिं** = ब्राह्मणको वृत्तिलाई
**हरेत्** = हरण गर्दछ (त्यो व्यक्ति)
**षष्टिवर्षसहस्राणि** = साठी हजार वर्षसम्म
**विष्ठायां** = विष्ठामा हुने
**कृमिः** = किरा भएर
**जायते** = जन्मन्छ

**वाक्यार्थ–** जसले आफूले दिएको वा अरू कसैले दिएको ब्राह्मणको वृत्ति (जीविकाको साधन) हरण गर्दछ भने त्यो व्यक्ति साठी हजार वर्षसम्म विष्ठाको किरा भएर जन्मन्छ।

**न मे ब्रह्मधनं भूयाद् यद् गृध्वाल्पायुषो नराः।**
**पराजिताश्च्युता राज्याद् भवन्त्युद्वेजिनोऽहयः॥ ४०॥**

**पदार्थ–**
**ब्रह्मधनं** = ब्राह्मणको धन
**मे** = मेरो कोषमा
**न भूयात्** = नहोस्
**यद्** = जुन धन
**गृध्वा** = चाहना गर्दा
**नराः** = मनुष्यहरू
**अल्पायुषः** = अल्पायु
**पराजिताः** = पराजित
**राज्यात्** = राज्य आदि ऐश्वर्यबाट
**च्युताः** = भ्रष्ट र (मृत्युपश्चात्)
**उद्वेजिनः** = अरूलाई दुःख दिने
**अहयः** = सर्प
**भवन्ति** = हुन्छन्

**वाक्यार्थ–** मेरो कोषमा ब्राह्मणको धन कहिल्यै नआओस्। त्यस्तो धनको चाहना मात्र गर्दा पनि मनुष्यहरूको आयु क्षीण हुन्छ, उनीहरू शत्रुबाट पराजित हुन्छन् र राज्य आदि ऐश्वर्यबाट च्युत हुन्छन्। अर्काको धनको इच्छा गर्ने मान्छे मृत्युपछि पनि अरूलाई दुःख दिने सर्प भएर जन्मन्छ।

**विप्रं कृतागसमपि नैव द्रुह्यत मामकाः।**
**घ्नन्तं बहु शपन्तं वा नमस्कुरुत नित्यशः॥ ४१॥**

**पदार्थ–**
**मामकाः** = हे मेरा प्रियजनहरू
**कृतागसम् अपि** = अपराध गरेकै भए पनि
**घ्नन्तं** = पिटिरहेको भए पनि
**बहु** = धेरै
**शपन्तं वा** = गाली गलौज गरे पनि
**विप्रं** = ब्राह्मणलाई
**न एव द्रुह्यत** = द्वेष नगर्नू
**नित्यशः** = सधैँ
**नमस्कुरुत** = नमस्कार गर्नू

**वाक्यार्थ–** मेरा प्रियजनहरू ! कुनै बाह्मणले अपराध नै गरेको छ, कसैलाई पिटिरहेको छ वा गालीगलौज गरिरहेको छ भने पनि त्यो ब्राह्मणसँग कहिल्यै द्वेष नगर्नू। उसलाई सधैँ नमस्कार गर्नू।

**यथाहं प्रणमे विप्राननुकालं समाहितः।**
**तथा नमत यूयं च योऽन्यथा मे स दण्डभाक्॥ ४२॥**

**पदार्थ–**
**यथा** = जसरी
**अहं** = म

| | | |
|---|---|---|
| **समाहितः** = सावधान भएर | **तथा** = त्यसै गरी | **अन्यथा** = नमस्कार गर्दैन |
| **अनुकालं** = तीनै काल | **यूयं च** = तिमीहरू पनि | **सः** = त्यो मान्छे |
| **विप्रान्** = ब्राह्मणहरूलाई | **नमत** = नमस्कार गर | **मे** = मेरो |
| **प्रणमे** = नमस्कार गर्दछु | **यः** = जसले | **दण्डभाक्** = दण्डको भागी बन्छ |

**वाक्यार्थ–** जसरी म प्रत्येक दिन तीनै काल सावधानपूर्वक ब्राह्मणहरूलाई नमस्कार गर्दछु, त्यसै गरी तिमीहरू पनि नमस्कार गर। जसले मेरो यो आज्ञा मान्दैन, ऊ मेरो दण्डको भागी हुन्छ।

**ब्राह्मणार्थो ह्यपहृतो हर्तारं पातयत्यधः।**
**अजानन्तमपि ह्येनं नृगं ब्राह्मणगौरिव ॥ ४३ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **एनं हि** = यी राजा | **हर्तारं** = हरणकर्तालाई |
| **ब्राह्मणगौः** = ब्राह्मणको गाईले | **नृगं इव** = नृगलाई झैं | **अधः हि** = तलतिर (नरकमा) नै |
| **अजानन्तं अपि** = अनजान भएका भए पनि | **अपहृतः** = हरण गरिएको | **पातयति** = खसाउँछ |
| | **ब्राह्मणार्थः** = ब्राह्मणको धनले | |

**वाक्यार्थ–** जसरी अनजानमा ब्राह्मणको गाई लिएका राजा नृगलाई ब्राह्मणको गाईले छेपारो बनाइदियो, त्यसै गरी ब्राह्मणको धनहरण गरेमा त्यो धनले धनहरण गर्ने व्यक्तिलाई नरकमा खसालिदिन्छ।

**एवं विश्राव्य भगवान् मुकुन्दो द्वारकौकसः।**
**पावनः सर्वलोकानां विवेश निजमन्दिरम् ॥ ४४ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **मुकुन्दः** = श्रीकृष्णले | **विश्राव्य** = सुनाएर |
| **सर्वलोकानां** = सम्पूर्ण लोकलाई | **द्वारकौकसः** = द्वारकावासीहरूलाई | **निजमन्दिरं** = आफ्नो महलमा |
| **पावनः** = पवित्र गराउने | **एवं** = यसप्रकार | **विवेश** = प्रवेश गर्नुभयो |
| **भगवान्** = भगवान् | | |

**वाक्यार्थ–** सम्पूर्ण लोकलाई पवित्र गराउने भगवान् श्रीकृण द्वारकावासी प्रजाहरूलाई यसरी ब्रह्मस्व हरण गर्नुहुँदैन भन्ने उपदेश सुनाएर आफ्नो महलमा प्रवेश गर्नुभयो।

**विवरण–** यस अध्यायमा भगवान्ले आफ्ना छोराहरूलाई ब्राह्मणको अपमान गर्नुहुँदैन भनी शिक्षा दिनुभएको छ। सृष्टिको व्यवस्थाका लागि परमात्माले सत्त्व, रज र तम यी गुणहरूको आधारमा ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र गरी यी चार वर्णको रचना गर्नुभयो भनी शास्त्रहरूमा बताइएको छ। ती चार ओटै वर्णहरूमध्ये शास्त्रज्ञान, तपस्या, सहनशीलता, एकान्तवास आदि गुणहरूले युक्त रहने ब्राह्मणलाई सर्वश्रेष्ठ मानिएको छ। सम्पूर्ण कष्ट सहेर पनि भौतिक, आध्यात्मिक सबैथरी विद्याहरूको रक्षा गर्ने एवं त्यसको अध्ययन–अनुसन्धान र प्रचार गर्ने जिम्मा ब्राह्मणको हो। संसारमा सबैभन्दा पवित्र र महत्त्वपूर्ण वस्तु भनेको विद्या नै हो। विद्याकी

अधिष्ठात्री देवी सरस्वतीले पनि आफूलाई ब्राह्मणको सम्पत्तिका रूपमा लिएको पाइन्छ। **विद्या ह वै ब्राह्मणमाजगाम, गोपायमा शेवधिष्टेऽहमस्मि** भनी विद्याकी अधिष्ठात्री देवीले ब्राह्मणकहाँ गई भन्नुभयो– 'म तिम्री सम्पत्ति हुँ, मलाई जोगाएर राख।' ज्ञानको आलोकद्वारा सम्पूर्ण समाजलाई प्रकाशित गर्ने हुनाले ब्राह्मण संसारभरमा सबैभन्दा पूज्य भएको हो। ब्राह्मणमा अलिकति स्वार्थ या मलिनता आयो भने त्यसबाट शिक्षित हुने समाजमा पनि तिनै दुर्गुणहरू स्वतः नै आउने देखिन्छन्। त्यसैले गीताभाष्यको उपोद्‌घातमा भगवत्पाद शङ्कराचार्यले ब्राह्मणत्वको रक्षाद्वारा नै वैदिक धर्मको रक्षा हुने कुरा बताउनुभएको छ– **ब्राह्मणत्वस्य हि रक्षणेन रक्षितः स्याद् वैदिको धर्मः** अर्थात् ब्राह्मणत्वको रक्षाद्वारा नै वैदिक धर्मको रक्षा हुन्छ। भगवान्‌को अवतार पनि यसकै लागि हुने कुरा त्यहाँ बताइएको छ। ब्राह्मणत्वको रक्षा गर्ने भएकाले नै भगवान्‌लाई ब्रह्मण्यदेव भनिन्छ। यसरी आफ्नो अवतारकालमा श्रीकृष्णले ब्राह्मणत्वको आदर्श मर्यादालाई प्रकाशित गर्नुभयो अनि आफ्ना अनेक लीलाहरूबाट ब्राह्मणहरूको उच्च सम्मान गर्ने परम्परालाई पनि अघि बढाउनुभयो। धर्मरक्षा गर्न अवतीर्ण हुने परमात्माले अस्थायी रूपमा तत्कालीन दुष्टहरूलाई समाप्त पार्नुको साथमा स्थायी रूपका अरू दुई काम पनि गर्नुहुन्छ। एउटा ज्ञानको परम्परा प्रवर्तित गरी ब्राह्मणत्वको आन्तरिक सुदृढीकरण अनि अर्को सम्पूर्ण वर्णका व्यक्तिहरूलाई ब्राह्मणप्रति अनुगृहीत र श्रद्धायुक्त बनाउने शिक्षा प्रदान। भगवान्‌ले यसरी नै दीर्घकालसम्म धर्म एवं नीतिलाई जोगाउनुभएको देखिन्छ।

प्रस्तुत प्रसङ्गमा चाहिँ भगवान्‌ले सबै राजा र आफ्ना पुत्रहरूलाई ब्राह्मणको महत्त्वको विषयमा बताउनुभएको छ। यहाँ नृग राजाको कथाप्रसङ्गद्वारा ब्राह्मणको अलिकति मात्र अपमानले पनि छेपारो बन्नुपर्ने यथार्थ प्रकट भएको छ। यो कथाप्रसङ्गको उद्देश्य बताउँदै श्रीधर स्वामी लेख्नुहुन्छ– अभिमानले युक्त भएका राजाहरू अनि अभिमानले मात्तिन लागेका आफ्नै यदुकुमारहरूलाई पनि भगवान् श्रीकृष्णले शिक्षा दिनुभएको छ। श्रीकृष्णका सन्ततिहरू पनि आफ्नो सामर्थ्य एवं ऐश्वर्यको कारणले मदमत्त हुन लागेका थिए। तिनीहरूबाट हुन सक्ने ब्राह्मणको अपमानबाट उनीहरूलाई जोगाउनकै लागि यहाँ भगवान्‌ले नृगचरित्रद्वारा शिक्षा दिनुभएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे**

**उत्तरार्धे नृगोपाख्यानं नाम चतुःषष्टितमोऽध्यायः ॥ ६४ ॥**

# अथ पञ्चषष्टितमोऽध्यायः

## भगवान् बलरामको व्रजगमन र गोपिनीहरूसँग भेटघाट

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**बलभद्रः कुरुश्रेष्ठ भगवान् रथमास्थितः।**

**सुहृद्दिदृक्षुरुत्कण्ठः प्रययौ नन्दगोकुलम्॥ १॥**

**पदार्थ—**
**कुरुश्रेष्ठ** = हे कुरुश्रेष्ठ परीक्षित्
**सुहृद्दिदृक्षुः** = स्वजनहरूको दर्शन गर्न इच्छुक
**रथं** = रथमा
**आस्थितः** = चढेका
**भगवान्** = भगवान्
**बलभद्रः** = बलराम
**उत्कण्ठः** = उत्कण्ठित हुनुहुन्थ्यो, त्यसैले
**नन्दगोकुलं** = नन्दको व्रजमा
**प्रययौ** = जानुभयो

**वाक्यार्थ—** हे परीक्षित्! भगवान् बलराम स्वजनहरूको दर्शन गर्ने इच्छाले गर्दा अत्यन्त उत्कण्ठित हुँदै रथमा चढेर नन्दको व्रजमा जानुभयो।

**परिष्वक्तश्चिरोत्कण्ठैर्गोपैर्गोपीभिरेव च।**

**रामोऽभिवाद्य पितरावाशीर्भिरभिनन्दितः॥ २॥**

**पदार्थ—**
**चिरोत्कण्ठैः** = धेरै कालदेखि दर्शन गर्ने इच्छा भएका
**गोपैः** = गोपहरूद्वारा र
**गोपीभिः एव च** = गोपिनीहरूद्वारा पनि
**परिष्वक्तः** = अङ्कमाल गरिनुभएका
**रामः** = बलराम
**पितरौ** = माता र पितालाई
**अभिवाद्य** = अभिवादन गरेर
**आशीर्भिः** = आशीर्वादहरूद्वारा
**अभिनन्दितः** = ज्यादै खुसी हुनुभयो

**वाक्यार्थ—** धेरै कालदेखि दर्शन गर्ने इच्छा भएका गोप र गोपगोपिनीहरूद्वारा अङ्कमाल गरिनुभएका बलरामले माता यशोदा र पिता नन्दलाई प्रणाम गर्नुभयो। मातापिताको आशीर्वाद पाएर बलराम अत्यन्त खुसी हुनुभयो।

**चिरं नः पाहि दाशार्ह सानुजो जगदीश्वरः।**

**इत्यारोप्याङ्कमालिङ्ग्य नेत्रैः सिषिचतुर्जलैः॥ ३॥**

**पदार्थ—**
**दाशार्ह** = हे बलराम
**सानुजः** = भाइ श्रीकृष्णले सहित भएका
**जगदीश्वरः** = जगदीश्वर हजुरले
**नः** = हामीलाई
**चिरं** = धेरै समयसम्म
**पाहि** = रक्षा गर्नुहोस्
**इति** = यसो भन्दै

**अङ्कं** = काखमा
**आरोप्य** = राखेर
**आलिङ्ग्य** = आलिङ्गन गरेर
**नेत्रैः** = आँखाहरूबाट झरेका
**जलैः** = आँसुले
**सिषिचतुः** = सेचन गर्नुभयो

**वाक्यार्थ–** 'हे बलराम ! जगत्का स्वामी श्रीकृष्ण र हजुर भएर सधैँ हाम्रो रक्षा गर्नुहोला' यसो भन्दै नन्द र यशोदाले बलरामलाई काखमा राख्नुभयो, आलिङ्गन गर्नुभयो अनि हर्षका आँसुले बलरामलाई सेचन गर्नुभयो।

**गोपवृद्धांश्च विधिवद् यविष्ठैरभिवन्दितः।**
**यथावयो यथासख्यं यथासम्बन्धमात्मनः॥ ४॥**
**समुपेत्याथ गोपालान् हास्यहस्तग्रहादिभिः।**
**विश्रान्तं सुखमासीनं पप्रच्छुः पर्युपागताः॥ ५॥**
**पृष्टाश्चानामयं स्वेषु प्रेमगद्गदया गिरा।**
**कृष्णे कमलपत्राक्षे सन्न्यस्ताखिलराधसः॥ ६॥**

**पदार्थ–**
**गोपवृद्धान् च** = वृद्ध गोपहरूलाई
**विधिवत्** = विधिपूर्वक (ढोगभेट आदि गरेर)
**यविष्ठैः** = साना-साना गोपहरूद्वारा
**अभिवन्दितः** = अभिवादन गरिएका बलरामले
**गोपालान्** = गोपहरू भएको ठाउँमा
**समुपेत्य** = गएर
**हास्यहस्तग्रहादिभिः** = हाँस्ने, हात समाउने आदि कर्मद्वारा
**आत्मनः** = आफ्नो
**यथासम्बन्धं** = सम्बन्ध अनुसार
**यथावयः** = उमेर अनुसार
**यथासख्यं** = मित्रता अनुसार (भेटघाट गर्नुभयो)
**अथ** = त्यसपछि
**विश्रान्तं** = थकावट शान्त भएका
**सुखं** = सुखपूर्वक
**आसीनं** = बस्नुभएका बलरामका सामु
**कमलपत्राक्षे** = कमलनयन
**कृष्णे** = श्रीकृष्णलाई प्राप्त गर्न
**सन्न्यस्ताखिलराधसः** = सम्पूर्ण विषयहरू त्याग गरेका
**पर्युपागताः** = वरिपरि आएका
**अनामयं च** = कुशलताका बारेमा
**पृष्टाः** = प्रश्न गरिएका गोपहरूले
**प्रेमगद्गदया** = अतिशय प्रेमका कारण गद्गद भएका
**गिरा** = वाणीद्वारा
**स्वेषु** = आफ्ना प्रिय यदुवंशीहरूको विषयमा
**पप्रच्छुः** = सोधे

**वाक्यार्थ–** बलरामले त्यहाँ उपस्थित वृद्ध गोपहरूलाई विधिपूर्वक नमस्कार गर्नुभयो भने साना गोपहरूले बलरामलाई अभिवादन गरे। अर्को दिन गोपहरू भएको ठाउँमा बलराम जानुभयो। सम्बन्ध, उमेर र मित्रता अनुसार गोपहरूसँग हाँसखेल आलिङ्गन गर्नुभयो, उनीहरूका हात समाउनुभयो। थकाइ शान्त गरेर बलराम आरामपूर्वक बसिरहनुभएको थियो, त्यही वेला गोपहरू उहाँका वरिपरि आए। उनीहरूले कमलनयन भगवान् श्रीकृष्णलाई प्राप्त गर्न सम्पूर्ण विषयहरू

त्याग गरेर भगवान्मैं चित्त लगाएका थिए। बलरामले उनीहरूलाई 'सन्चो-बिसन्चो के छ ?' भनेर प्रश्न गर्नुभयो। गोपहरूले पनि अतिशय प्रेमका कारण विह्वल हुँदै आफ्ना आत्मीयजन यदुवंशीहरूको कुशलताका विषयमा गद्गद हुँदै बलरामसँग सोधे।

**कच्चिन्नो बान्धवा राम सर्वे कुशलमासते।**
**कच्चित् स्मरथ नो राम यूयं दारसुतान्विताः॥ ७॥**

**पदार्थ—**
**राम** = हे बलराम
**नः** = हाम्रा
**सर्वे** = वसुदेव आदि सबै
**बान्धवाः** = बन्धुहरू
**कच्चित्** = के
**कुशलं** = कुशल
**आसते** = हुनुहुन्छ
**राम** = हे बलराम
**दारसुतान्विताः** = पत्नी र पुत्रहरू समेतका
**यूयं** = हजुरहरू
**नः** = हामीहरूलाई
**स्मरथ कच्चित्** = सम्झिनुहुन्छ के

**वाक्यार्थ—** हे बलराम ! द्वारकामा रहेका वसुदेव आदि हाम्रा सबै बन्धुहरूलाई सन्चै छ त ? पत्नी, पुत्र र अन्य परिवारहरू सहित हजुरहरूले हामी गोपहरूलाई कहिलेकाँही सम्झिनुहुन्थ्यो त ?

**दिष्ट्या कंसो हतः पापो दिष्ट्या मुक्ताः सुहृज्जनाः।**
**निहत्य निर्जित्य रिपून् दिष्ट्या दुर्गं समाश्रिताः॥ ८॥**

**पदार्थ—**
**दिष्ट्या** = हाम्रो भाग्यले
**पापः** = दुष्ट
**कंसः** = कंस
**हतः** = मारियो
**दिष्ट्या** = भाग्यवश
**सुहृज्जनाः** = प्रियजनहरू
**मुक्ताः** = मुक्त भए
**दिष्ट्या** = खुसीको कुरा
**रिपून्** = शत्रुहरूलाई
**निहत्य** = मारेर
**निर्जित्य** = जितेर भगवान् श्रीकृष्ण
**दुर्गं** = सुरक्षित किल्ला बनाएर (द्वारकामा)
**समाश्रिताः** = बस्नुभएको छ

**वाक्यार्थ—** हाम्रो भाग्यले हजुरहरूले दुष्ट कंसलाई मारेर कष्टकर जीवन गुजारिरहेका प्रियजनहरूलाई दुःखमुक्त गराउनुभयो। खुसीको कुरा शत्रुहरूलाई मारेर र केहीलाई जितेर हजुरहरू अहिले सुरक्षित किल्ला बनाएर द्वारकामा बस्नुभएको छ।

**गोप्यो हसन्त्यः पप्रच्छू रामसन्दर्शनादृताः।**
**कच्चिदास्ते सुखं कृष्णः पुरस्त्रीजनवल्लभः॥ ९॥**

**पदार्थ—**
**रामसन्दर्शनादृताः** = बलरामको दर्शन पाउनाले अनुगृहीत भएका
**गोप्यः** = गोपिनीहरूले
**हसन्त्यः** = हाँस्दै
**पप्रच्छुः** = सोधे
**पुरस्त्रीजनवल्लभः** = नगरका नारीहरूका प्राणप्रिय
**कृष्णः** = श्रीकृष्ण
**कच्चित्** = के
**सुखं** = सुखपूर्वक
**आस्ते** = रहनुभएको छ त ?

**वाक्यार्थ–** बलरामको दर्शनबाट अनुगृहीत भएका गोपिनीहरूले हाँस्दै सोधे– हे बलरामजी ! नगरवासी नारीहरूका प्राणप्रिय श्रीकृष्ण सुखपूर्वक रहनुभएको छ त ?

**कच्चित् स्मरति वा बन्धून् पितरं मातरं च सः ।**
**अप्यसौ मातरं द्रष्टुं सकृदप्यागमिष्यति ॥**
**अपि वा स्मरतेऽस्माकमनुसेवां महाभुजः ॥ १० ॥**

**पदार्थ–**
**सः वा** = ती श्रीकृष्णले
**बन्धून्** = बन्धुजन
**पितरं** = पिता
**मातरं च** = मातालाई पनि
**कच्चित् स्मरति** = सम्झिनुहुन्छ
त ?
**अपि** = के
**महाभुजः** = महाबाहु
**असौ** = यी श्रीकृष्ण
**सकृत्** = एकपटक भए पनि
**मातरं** = मातालाई
**द्रष्टुं** = (देख्न) भेट्न
**अपि आगमिष्यति** = आउनुहुनेछ
**वा** = अथवा
**अस्माकं** = हाम्रो
**अनुसेवां** = सेवा
**अपि स्मरते** = सम्झिनुहुन्छ

**वाक्यार्थ–** श्रीकृष्णले यहाँका भाइबन्धु, माता र पितालाई सम्झनुहुन्छ त ? के उहाँ एकपटक भए पनि माताको दर्शन गर्न यहाँ आउनुहोला ? महाबाहु श्रीकृष्णले हामीले गरेको सेवालाई पनि सम्झिरहनुभएको छ त ?

**मातरं पितरं भ्रातॄन् पतीन् पुत्रान् स्वसॄनपि ।**
**यदर्थे जहिम दाशार्ह दुस्त्यजान् स्वजनान् प्रभो ॥ ११ ॥**
**ता नः सद्यः परित्यज्य गतः सञ्छिन्नसौहृदः ।**
**कथं नु तादृशं स्त्रीभिर्न श्रद्धीयेत भाषितम् ॥ १२ ॥**

**पदार्थ–**
**दाशार्ह** = हे यदुश्रेष्ठ बलरामजी
**प्रभो** = हे प्रभु
**यदर्थे** = जसका लागि हामीले
**मातरं** = माता
**पितरं** = पिता
**भ्रातॄन्** = दाजुभाइ
**पतीन्** = पति
**पुत्रान्** = छोरा
**स्वसॄः अपि** = दिदीबहिनी आदि
**दुस्त्यजान्** = त्याग्न कठिन
**स्वजनान्** = आफन्तजनलाई
**जहिम** = त्याग्यौँ
**ताः** = त्यस्ता
**नः** = हामीहरूलाई
**सद्यः** = तत्क्षण
**परित्यज्य** = छोडेर
**सञ्छिन्नसौहृदः** = हार्दिक
प्रेमको बन्धन काटेर
**गतः** = जानुभयो
**तादृशं** = त्यस्तो मिठो
**भाषितं** = वचनलाई
**स्त्रीभिः** = हामीजस्ता स्त्रीहरूले
**कथं नु** = कसरी
**न श्रद्धीयेत** = नपत्याउने

**वाक्यार्थ–** हे बलरामजी ! हामीले श्रीकृष्णका लागि माता, पिता, दाजुभाइ, पुत्र, दिदीबहिनी

आदि सबै आफन्तलाई त्याग्यौँ जसलाई त्याग्न अत्यन्त कठिन हुन्छ। तर प्रभु ! श्रीकृष्णले हामीलाई मिठा-मिठा कुराहरूमा अल्मल्याई विश्वस्त बनाएर तत्क्षण हार्दिक प्रेमको बन्धन चुँडाएर जानुभयो। हामीजस्ता स्त्रीहरूले उहाँका त्यस्ता मिठा कुराहरू नपत्याउने त कुरै भएन।

**कथं नु गृह्णन्त्यनवस्थितात्मनो वचः कृतघ्नस्य बुधाः पुरस्त्रियः।**
**गृह्णन्ति वै चित्रकथस्य सुन्दरस्मितावलोकोच्छ्वसितस्मरातुराः॥ १३॥**

| पदार्थ– | **वचः** = मिठा वचनलाई | **स्मरातुराः** = मनोहर मुस्कान र |
|---|---|---|
| **बुधाः** = चलाख | **कथं नु** = कसरी | हेराइद्वारा उद्दीप्त भएको |
| **पुरस्त्रियः** = नगरका स्त्रीहरूले | **गृह्णन्ति** = विश्वास गर्दछन् ? | कामवासनाले विवश भएका |
| **अनवस्थितात्मनः** = चञ्चल मन | **चित्रकथस्य** = अनेक प्रकारका | नगरका सुन्दरीहरूले |
| भएका | कुराहरू गर्न जान्ने श्रीकृष्णको | **गृह्णन्ति वै** = अवश्य विश्वास |
| **कृतघ्नस्य** = कृतघ्न श्रीकृष्णको | **सुन्दरस्मितावलोकोच्छ्वसित-** | गर्दछन् |

**वाक्यार्थ–** (एउटी गोपिनीले भनिन्–) नगरका स्त्रीहरूले त चञ्चल मन भएका कृतघ्न श्रीकृष्णको मिठा-मिठा वचनको कसरी विश्वास गर्लान् र ? (उनीहरू त कहाँ हामीजस्ता सोझा हुन्छन् र ?) (अर्की गोपिनी भन्दछिन्– किन गर्दैनन् ?) अनेक प्रकारका कुराहरू गर्न जान्ने श्रीकृष्णको मनोहर मुस्कान र हेराइद्वारा कामवासना उद्दीप्त भएका नगरका सुन्दरीहरूले उनको कुरामा विश्वास नगर्ने कुरै भएन।

**किं नस्तत्कथया गोप्यः कथाः कथयतापराः।**
**यात्यस्माभिर्विना कालो यदि तस्य तथैव नः॥ १४॥**

| पदार्थ– | **अपराः** = अरू नै | पनि |
|---|---|---|
| **गोप्यः** = हे गोपिनीहरू | **कथाः** = कुराहरू | **कालः** = समय |
| **तत्कथया** = ती कृष्णको | **कथयत** = गर | **याति** = बित्दछ भने |
| कुराद्वारा | **यदि** = यदि | **तथा एव** = त्यसै गरी |
| **नः** = हामीहरूलाई | **तस्य** = ती कृष्णको | **नः** = हाम्रो (पनि बित्दछ) |
| **किं** = के लाभ | **अस्माभिः विना** = हामी विना | |

**वाक्यार्थ–** हे गोपिनीहरू ! (तिमीहरू किन कृष्णकै कुरा गर्छौ ?) कृष्णको कुरा गरेर अब हामीलाई के फाइदा छ र ? अरू नै कुरा गर। यदि हामीविना कृष्णको समय बित्दछ भने कृष्ण विना हाम्रो पनि समय बित्दछ।

**इति प्रहसितं शौरेर्जल्पितं चारुवीक्षितम्।**
**गतिं प्रेमपरिष्वङ्गं स्मरन्त्यो रुरुदुः स्त्रियः॥ १५॥**

**पदार्थ—**
**इति** = यस्ता कुरा गरिरहेका
**स्त्रियः** = गोपिनीहरू
**शौरेः** = श्रीकृष्णको
**प्रहसितं** = मधुर हाँसो
**जल्पितं** = वचन
**चारु** = सुन्दर
**वीक्षितं** = हेराइ
**गतिं** = हिँडाइको चालढाल
**प्रेमपरिष्वङ्गं** = प्रेमयुक्त आलिङ्गन
**स्मरन्त्यः** = सम्झिँदै
**रुरुदुः** = रुन थाले

**वाक्यार्थ—** श्रीकृष्णका विषयमा यस्ता कुरा गरिरहेका गोपिनीहरू भगवान् श्रीकृष्णको मधुर हाँसो, मिठा-मिठा कुराकानी, मनोहर हेराइ, हिँडाइको चालढाल र प्रेमयुक्त आलिङ्गनहरू सम्झिँदै रुन थाले।

**सङ्कर्षणस्ताः कृष्णस्य सन्देशैर्हृदयङ्गमैः।**
**सान्त्वयामास भगवान् नानानुनयकोविदः॥ १६॥**

**पदार्थ—**
**नानानुनयकोविदः** = अनेक तरिकाले अनुनय गर्न निपुण
**भगवान्** = भगवान्
**सङ्कर्षणः** = बलरामले
**कृष्णस्य** = श्रीकृष्णको
**हृदयङ्गमैः** = हृदयसम्म पुग्ने (विश्वासजनक)
**सन्देशैः** = सन्देशहरूद्वारा
**ताः** = ती गोपिनीहरूलाई
**सान्त्वयामास** = सान्त्वना दिनुभयो

**वाक्यार्थ—** अनेक तरिकाले अनुनय विनय गर्न सिपालु भगवान् बलरामले श्रीकृष्णका विश्वासजनक सन्देशहरू सुनाएर ती गोपिनीहरूलाई सान्त्वना प्रदान गर्नुभयो।

**द्वौ मासौ तत्र चावात्सीन्मधुं माधवमेव च।**
**रामः क्षपासु भगवान् गोपीनां रतिमावहन्॥ १७॥**

**पदार्थ—**
**भगवान्** = भगवान्
**रामः** = बलराम
**क्षपासु** = रातमा
**गोपीनां** = गोपिनीहरूको मनमा
**रतिं** = प्रीति
**आवहन्** = उत्पन्न गर्दै
**मधुं** = चैत
**माधवम् एव च** = बैसाख
**द्वौ मासौ** = दुई महिना
**तत्र च** = त्यहाँ व्रजमा
**अवात्सीत्** = बस्नुभयो

**वाक्यार्थ—** भगवान् बलरामले रातको समयमा गोपिनीहरूसँग बसेर उनीहरूको मनमा प्रीति उत्पन्न गर्दै चैत र बैसाख दुई महिना व्रजमा नै बिताउनुभयो।

**पूर्णचन्द्रकलामृष्टे कौमुदीगन्धवायुना।**
**यमुनोपवने रेमे सेविते स्त्रीगणैर्वृतः॥ १८॥**

**पदार्थ—**
**पूर्णचन्द्रकलामृष्टे** = पूर्ण चन्द्रमाको किरणद्वारा उज्ज्वल भएको
**कौमुदीगन्धवायुना** = कुमुदिनी (कमल)को सुगन्धले युक्त वायुद्वारा
**सेविते** = सेवित (सुगन्धमय भएको)

**यमुनोपवने** = यमुनाको तटमा रहेको उपवनमा
**स्त्रीगणैः** = गोपिनीहरूद्वारा
**वृतः** = घेरिनुभएका (बलरामले)
**रेमे** = रमण गर्नुभयो

**वाक्यार्थ–** रातको समयमा पूर्णचन्द्रको किरणद्वारा उज्ज्वल भएको र कुमुदिनीको सुगन्धलाई बहाउँदै मन्दगतिले हावा चलिरहेको यमुनाको तटमा रहेको उपवनमा गोपिनीहरूद्वारा घेरिनुभएका बलरामले रमण गर्नुभयो।

**वरुणप्रेषिता देवी वारुणी वृक्षकोटरात्।**
**पतन्ती तद्वनं सर्वं स्वगन्धेनाध्यवासयत्॥ १९॥**

**पदार्थ–**
**वरुणप्रेषिता** = वरुणद्वारा पठाइएकी
**वारुणी** = वारुणी नामकी
**देवी** = मदिराकी अधिष्ठात्री देवीले
**वृक्षकोटरात्** = रुखको टोड्काबाट
**पतन्ती** = धाराको रूपमा भुइँमा खस्दै
**स्वगन्धेन** = आफ्नो सुगन्धले
**तत्** = त्यो
**सर्वं** = सबै
**वनं** = वनलाई
**अध्यवासयत्** = सुगन्धित बनाइन्

**वाक्यार्थ–** त्यसै वेला वरुणद्वारा पठाइएकी वारुणी नामकी मदिराकी अधिष्ठात्री देवीले रुखको टोड्काबाट धाराको रूपमा भुइँमा खस्दै आफ्नो सुगन्धले त्यो सम्पूर्ण वनलाई सुगन्धित बनाइन्।

**टिप्पणी–** समुद्रमथनको वेलामा लक्ष्मी र अमृतसँगै मदिरा उत्पन्न भयो। त्यो मदिरा दैत्यराज वरुणलाई दिइयो र त्यसलाई वरुणकी पुत्री मानियो त्यसकारण त्यसलाई वारुणी भनियो। वारुणी मदिरा मधुधाराको रूपमा सबै वृक्षहरूमा रहन्छ। बलराम भगवान्का तामस मूर्ति हुनुहुन्छ त्यसकारण उहाँले वारुणी मधु ग्रहण गर्नुहुन्छ।

**तं गन्धं मधुधाराया वायुनोपहृतं बलः।**
**आघ्रायोपगतस्तत्र ललनाभिः समं पपौ॥ २०॥**

**पदार्थ–**
**वायुना** = वायुद्वारा
**उपहृतं** = ल्याइएको
**मधुधारायाः** = मदिराको
**तं** = त्यो
**गन्धं** = सुगन्धलाई
**आघ्राय** = सुँघेर
**तत्र** = वारुणी मदिराको धारा झरिरहेको रुखनजिक
**उपगतः** = आउनुभएका
**बलः** = बलरामले
**ललनाभिः समं** = गोपिनीहरूका साथ
**पपौ** = पिउनुभयो

**वाक्यार्थ–** हावाले ल्याएको वारुणी मदिराको त्यो सुगन्धलाई बलरामले सुँघ्नुभयो अनि उहाँ त्यही वारुणी मदिराको धारा झरिरहेको रुखनजिक आइपुग्नुभयो। त्यसपछि गोपिनीहरूका साथमा उहाँले त्यो मदिरा पिउनुभयो।

**उपगीयमानचरितो वनिताभिर्हलायुध।**
**वनेषु व्यचरत् क्षीवो मदविह्वललोचनः॥ २१॥**

**स्रग्व्येककुण्डलो मत्तो वैजयन्त्या च मालया ।**
**बिभ्रत् स्मितमुखाम्भोजं स्वेदप्रालेयभूषितम् ॥ २२ ॥**

**पदार्थ—**
**उपगीयमानचरितः** = (देवता, गन्धर्व आदिद्वारा) चरित्रगान गरिएका
**क्षीवः** = मदमस्त हुनुभएका
**मदविह्वललोचनः** = मदले आँखा लोलाएका
**स्रग्वी** = फूलको माला लगाउनुभएका
**एककुण्डलः** = एउटा मात्रै कानमा कुण्डल लगाउनुभएका
**मत्तः** = (आनन्दले) उन्मत्त हुनुभएका
**वैजयन्त्या** = वैजयन्ती (घुँडासम्म झुन्डिने मालाविशेष)
**मालया च** = मालाद्वारा अलङ्कृत हुनुभएका
**स्वेदप्रालेयभूषितं** = हिमकण जस्ता देखिने पसिनाका थोपाद्वारा शोभित
**स्मितमुखाम्भोजं** = मुस्कानले युक्त मुखारविन्दलाई
**बिभ्रत्** = धारण गर्नुभएका
**हलायुधः** = हलो नै हतियार भएका बलराम
**वनिताभिः** = गोपिनीहरूसँग
**वनेषु** = वनमा
**व्यचरत्** = विहार गर्न थाल्नुभयो

**वाक्यार्थ—** देवता, गन्धर्व आदिद्वारा चरित्रगान गरिएका, मदिरापान गरेर मदमस्त हुनुभएका, मदले आँखा लोलाएका, फूलको माला लगाउनुभएका, एउटा मात्रै कानमा कुण्डल लगाउनुभएका, आनन्दले उन्मत्त हुनुभएका, वैजयन्ती मालाद्वारा अलङ्कृत हुनुभएका, हिमकण जस्ता देखिने पसिनाका थोपाद्वारा शोभित अनि मुस्कानले युक्त सुन्दर मुखारविन्दलाई धारण गर्नुभएका बलराम आफ्नो हतियारको रूपमा हलो लिएर वनमा गोपिनीहरूसँग विहार गर्न थाल्नुभयो।

**स आजुहाव यमुनां जलक्रीडार्थमीश्वरः ।**
**निजं वाक्यमनादृत्य मत्त इत्यापगां बलः ॥**
**अनागतां हलाग्रेण कुपितो विचकर्ष ह ॥ २३ ॥**

**पदार्थ—**
**ईश्वरः** = सर्वशक्तिमान्
**सः** = ती
**बलः** = बलरामले
**जलक्रीडार्थम्** = जलक्रीडा गर्नका लागि
**यमुनां** = यमुनालाई
**आजुहाव** = बोलाउनुभयो
**मत्तः इति** = उहाँ मात्नुभएको छ भन्ने सोचेर
**निजं** = आफ्नो
**वाक्यं** = आज्ञालाई
**अनादृत्य** = उल्लङ्घन गरेर
**अनागतां** = नआएकी
**आपगां** = यमुना नदीलाई
**कुपितः** = रिसाउनुभएका बलरामले
**हलाग्रेण** = हलोको टुप्पोले
**विचकर्ष ह** = तान्नुभयो

**वाक्यार्थ—** सर्वशक्तिमान् बलरामले जलक्रीडा गर्नका लागि यमुनालाई बोलाउनुभयो। तर यमुना 'बलरामजी त मदमस्त हुनुभएको छ' भन्ने सोचेर उहाँको आज्ञा उल्लङ्घन गर्दै उहाँको नजिक

गइनन्। आफ्नो आज्ञा यमुनाले नमानेपछि रिसाएका बलरामले हलोको टुप्पोले यमुनालाई आफूतिर तान्नुभयो।

**टिप्पणी–** यी यमुना नदी श्रीमद्भागवतका पहिलाका अध्यायहरूमा वर्णित भगवान्‌की पत्नीरूपा कालिन्दी नभएर समुद्रकी पत्नी हुन् भन्ने कुरा हरिवंश पुराणमा उल्लेख गरिएको छ।

**पापे त्वं मामवज्ञाय यन्नायासि मयाहुता।**
**नेष्ये त्वां लाङ्गलाग्रेण शतधा कामचारिणीम्॥ २४॥**

**पदार्थ–**
**पापे** = हे पापिनी
**यत्** = जो
**मया** = म बलरामद्वारा
**आहुता** = बोलाइएकी
**त्वं** = तँ
**मां** = मलाई
**अवज्ञाय** = तिरस्कार गरी
**न आयासि** = आउँदिनस्
**कामचारिणीम्** = स्वेच्छाचारिणी
**त्वां** = तँलाई
**लाङ्गलाग्रेण** = हलोको टुप्पोले
**शतधा** = सय टुक्रा
**नेष्ये** = बनाइदिनेछु

**वाक्यार्थ–** हे पापिनी यमुना! मैले बोलाउँदा पनि मलाई तिरस्कार गरी तँ आउँदिनस्। स्वेच्छाचारिणी बनेकी तँलाई अब हलोको टुप्पोले सय टुक्रा बनाइदिन्छु भनेर बलरामले यमुनालाई हप्काउनुभयो।

**एवं निर्भर्त्सिता भीता यमुना यदुनन्दनम्।**
**उवाच चकिता वाचं पतिता पादयोर्नृप॥ २५॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**एवं** = यसप्रकार
**निर्भर्त्सिता** = हप्काइएकी
**भीता** = डराएकी
**चकिता** = काँप्न थालेकी
**पादयोः** = बलरामको पाउमा
**पतिता** = परेकी
**यमुना** = यमुनाले
**यदुनन्दनं** = यदुनन्दन बलरामलाई
**वाचं** = आफ्नो कुरा
**उवाच** = भनिन्

**वाक्यार्थ–** हे परीक्षित्! बलरामले यसरी हप्काएपछि यमुना डराएर थर्थर काँप्न थालिन्। अनि यदुनन्दन बलरामको पाउमा परेर उनले भनिन्।

**राम राम महाबाहो न जाने तव विक्रमम्।**
**यस्यैकांशेन विधृता जगती जगतः पते॥ २६॥**

**पदार्थ–**
**राम** = हे लोकरञ्जक
**राम** = हे बलराम
**महाबाहो** = हे महाबाहु
**जगतः** = जगत्का
**पते** = हे स्वामी
**यस्य** = जुन हजुरको
**एकांशेन** = एक अंश सङ्कर्षणद्वारा
**जगती** = पृथिवी
**विधृता** = धारण गरिएको छ
**तव** = (त्यस्ता) हजुरको
**विक्रमं** = प्रभावलाई मैले
**न जाने** = जान्न सकिनँ

**वाक्यार्थ–** हे लोकरञ्जक महाबाहु बलराम ! हजुरको एक अंश सङ्कर्षणले यो सम्पूर्ण पृथिवीलाई धारण गर्नुभएको छ भने साक्षात् हजुरको प्रभाव कति होला ? हे जगदीश्वर ! त्यस्तो अनन्त शक्तिमान् हजुरको प्रभावलाई मैले जान्न सकिनँ।

**परं भावं भगवतो भगवन् मामजानतीम्।**
**मोक्तुमर्हसि विश्वात्मन् प्रपन्नां भक्तवत्सल ॥ २७ ॥**

**पदार्थ–**
**भगवन्** = हे भगवान्
**विश्वात्मन्** = हे विश्वात्मा
**भक्तवत्सल** = हे भक्तवत्सल
**भगवतः** = भगवान् हजुरको
**परं भावं** = महासङ्कर्षणरूप वास्तविक स्वरूपलाई
**अजानतीम्** = नजानेकी
**प्रपन्नां** = शरणागत
**मां** = मलाई
**मोक्तुं** = छोड्न
**अर्हसि** = योग्य हुनुहुन्छ

**वाक्यार्थ–** हे भगवान् ! हजुर सर्वस्वरूप विश्वात्मा हुनुहुन्छ। हे भक्तवत्सल ! मैले हजुरको महासङ्कर्षणरूप वास्तविक स्वरूपलाई जान्न सकिनँ। हजुरको शरणमा आएकी मलाई छाडिदिनुहोस्।

**ततो व्यमुञ्चद् यमुनां याचितो भगवान् बलः।**
**विजगाह जलं स्त्रीभिः करेणुभिरिवेभराट् ॥ २८ ॥**

**पदार्थ–**
**याचितः** = यसरी प्रार्थना गरिनुभएका
**भगवान्** = भगवान्
**बलः** = बलरामले
**यमुनां** = यमुनालाई
**व्यमुञ्चत्** = छाडिदिनुभयो
**ततः** = त्यसपछि
**करेणुभिः** = हस्तिनीहरूसँग
**इभराट् इव** = गजराजले झैँ
**स्त्रीभिः** = गोपिनीहरूसँग
**जलं** = जलमा
**विजगाह** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** यसरी प्रार्थना गरेपछि भगवान् बलरामले यमुनालाई छाडिदिनुभयो अनि गजराजले हस्तिनीहरूसँग क्रीडा गरे झैँ यमुनाको जलमा प्रवेश गरेर उहाँले गोपिनीहरूसँगै जलमा प्रवेश गर्नुभयो।

**कामं विहृत्य सलिलादुत्तीर्णायासिताम्बरे।**
**भूषणानि महार्हाणि ददौ कान्तिः शुभां स्रजम् ॥ २९ ॥**

**पदार्थ–**
**कामं** = यथेच्छ
**विहृत्य** = जलविहार गरी
**सलिलात्** = जलबाट
**उत्तीर्णाय** = बाहिर निस्कनुभएका बलरामलाई
**कान्तिः** = लक्ष्मीले
**असिताम्बरे** = नील वस्त्र
**महार्हाणि** = बहुमूल्य
**भूषणानि** = गहना
**शुभां** = मङ्गलमयी
**स्रजं** = माला
**ददौ** = दिनुभयो

**वाक्यार्थ–** यथेच्छ जलविहार गरेर जब बलराम यमुनाको जलबाट बाहिर निस्कनुभयो तब उहाँलाई लक्ष्मीले नीलाम्बर (नीलो कपडा), बहुमूल्य गहना र मङ्गलमय माला दिनुभयो।

**वसित्वा वाससी नीले मालामामुच्य काञ्चनीम्।**
**रेजे स्वलङ्कृतो लिप्तो माहेन्द्र इव वारणः॥ ३०॥**

**पदार्थ–**
**नीले** = नीला
**वाससी** = लुगाहरू
**वसित्वा** = लगाएर
**काञ्चनीम्** = सुवर्णमय
**मालां** = माला
**आमुच्य** = धारण गरेर
**स्वलङ्कृतः** = राम्ररी अलङ्कृत हुनुभएका
**लिप्तः** = चन्दन लगाउनुभएका बलराम
**माहेन्द्रः** = इन्द्रको
**वारणः इव** = ऐरावत हात्ती जस्तै
**रेजे** = सुशोभित हुनुभयो

**वाक्यार्थ–** बलरामले लक्ष्मीले दिएका नीला लुगाहरू शरीरमा धारण गर्नुभयो अनि सुवर्णमय माला घाँटीमा लगाउनुभयो। दिव्य चन्दन शरीरमा लेपन गरेर सजिनुभएका बलराम देवराज इन्द्रको ऐरावत हात्ती जस्तै सुशोभित हुनुभयो।

**अद्यापि दृश्यते राजन् यमुनाकृष्टवर्त्मना।**
**बलस्यानन्तवीर्यस्य वीर्यं सूचयतीव हि॥ ३१॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**आकृष्टवर्त्मना** = हलोको सियो (टुप्पो)ले तानेको बाटोबाट बगेकी
**यमुना** = यमुना नदी
**अद्य अपि** = आज पनि
**अनन्तवीर्यस्य** = अनन्त शक्तिमान्
**बलस्य** = बलरामको
**वीर्यं** = सामर्थ्य
**सूचयति इव** = जानकारी दिए जस्तै गरी
**दृश्यते हि** = देखिन्छिन्

**वाक्यार्थ–** हे राजा परीक्षित्! यमुना नदी अहिले पनि अनन्तशक्तिमान् बलरामले हलोको सियोले तानेकै बाटोबाट बगिरहेकी देखिन्छिन्। त्यही बाटोबाट बगेर मानौँ यमुनाले बलरामको सामर्थ्यको जानकारी दिइरहेकी छिन्।

**एवं सर्वा निशा याता एकेव रमतो व्रजे।**
**रामस्याक्षिप्तचित्तस्य माधुर्यैर्व्रजयोषिताम्॥ ३२॥**

**पदार्थ–**
**एवं** = यसरी नै (गोपिनीहरूसँग)
**व्रजे** = व्रजमा
**रमतः** = विहार गर्नुभएका
**व्रजयोषितां** = व्रजका गोपिनीहरूको
**माधुर्यैः** = माधुर्यद्वारा
**आक्षिप्तचित्तस्य** = मुग्ध हृदय भएका
**रामस्य** = बलरामको
**सर्वाः** = सम्पूर्ण
**निशाः** = रातहरू
**एका एव** = एकै रात जस्तै भएर
**याता** = बिते

**वाक्यार्थ–** यसरी व्रजमा विहार गरेका अनि व्रजका गोपिनीहरूको माधुर्यले हृदय मोहित भएका बलरामका धेरै रातहरू पनि एकै रात झैं थाहै नपाई बिते।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे बलदेवविजये यमुनाकर्षणं नाम पञ्चषष्टितमोऽध्यायः॥ ६५॥**

# अथ षट्षष्टितमोऽध्यायः

## पौण्ड्रक र काशिराजको वध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**नन्दव्रजं गते रामे करूषाधिपतिर्नृप ।**

**वासुदेवोऽहमित्यज्ञो दूतं कृष्णाय प्राहिणोत् ॥ १ ॥**

**पदार्थ—**
**नृप** = हे राजा
**रामे** = बलराम
**नन्दव्रजं** = नन्दको गाउँ
**गते** = गएपछि
**अज्ञः** = मूर्ख
**करूषाधिपतिः** = करूष देशको राजा पौण्ड्रकले
**अहं** = म
**वासुदेवः इति** = वासुदेव हुँ भनेर
**कृष्णाय** = श्रीकृष्णका प्रति
**दूतं** = दूत
**प्राहिणोत्** = पठायो

**वाक्यार्थ—** हे राजा परीक्षित् ! बलराम नन्दको गाउँ गएपछि करूष देशको मूर्ख राजा पौण्ड्रकले म नै भगवान् वासुदेव हुँ भन्ने सन्देशका साथ श्रीकृष्णलाई भेट्न एउटा दूत पठायो।

**त्वं वासुदेवो भगवानवतीर्णो जगत्पतिः ।**

**इति प्रस्तोभितो बालैर्मेन आत्मानमच्युतम् ॥ २ ॥**

**पदार्थ—**
**त्वं** = हजुर नै
**जगत्पतिः** = जगत्का पालक
**भगवान्** = भगवान्
**वासुदेवः** = वासुदेव
**अवतीर्णः** = उत्पन्न हुनुहुन्छ
**इति** = यसरी
**बालैः** = अज्ञानीहरूद्वारा
**प्रस्तोभितः** = स्तुति गरिएको त्यो पौण्ड्रक
**आत्मानं** = आफूलाई
**अच्युतं** = भगवान् श्रीकृष्ण
**मेने** = मान्दथ्यो

**वाक्यार्थ—** हजुर नै जगत्को पालन गर्नका लागि भगवान् वासुदेवको रूपमा जन्मनुभएको हो भन्ने यस्ता प्रशंसावाक्यहरू अज्ञानीहरूलाई बोल्न लगाएर त्यो पौण्ड्रकले आफूलाई साक्षात् भगवान् श्रीकृष्ण ठानिरहेको थियो।

**दूतं च प्राहिणोन्मन्दः कृष्णायाव्यक्तवर्त्मने ।**

**द्वारकायां यथा बालो नृपो बालकृतोऽबुधः ॥ ३ ॥**

**पदार्थ—**
**यथा** = जसरी
**अबुधः** = अज्ञानी
**बालः** = बालक (खेल्दा)
**बालकृतः** = बालकहरूद्वारा कल्पित रूपमा बनाइएको

**नृपः** = राजाले (आफूलाई राजा मान्दछ) त्यसरी नै
**मन्दः** = त्यो मूर्खले
**द्वारकायां** = द्वारकामा बस्नुहुने
**अव्यक्तवर्त्मने** = अचिन्त्य माहात्म्य भएका
**कृष्णाय** = श्रीकृष्णका प्रति
**दूतं च** = दूत पनि
**प्राहिणोत्** = पठायो

**वाक्यार्थ–** जसरी अज्ञानी बालकहरूले खेल खेल्दा कुनै एउटा बालकलाई कल्पित राजा बनाउँछन् र त्यो बालकले आफूलाई राजा नै सम्झन्छ, त्यसै गरी मूर्ख पौण्ड्रकले आफूलाई वासुदेव ठानी द्वारकामा बस्नुभएका अचिन्त्य माहात्म्यले सम्पन्न भगवान् श्रीकृष्णसामु दूत पठायो।

**दूतस्तु द्वारकामेत्य सभायामास्थितं प्रभुम्।**
**कृष्णं कमलपत्राक्षं राजसन्देशमब्रवीत्॥ ४॥**

**पदार्थ–**
**दूतः तु** = दूतले चाहिँ
**द्वारकां** = द्वारकामा
**एत्य** = आएर
**सभायां** = सभामा
**आस्थितं** = बस्नुभएका
**प्रभुं** = प्रभु
**कमलपत्राक्षं** = कमलनयन
**कृष्णं** = श्रीकृष्णलाई
**राजसन्देशं** = आफ्नो राजाको सन्देश
**अब्रवीत्** = सुनायो

**वाक्यार्थ–** कमलनयन भगवान् श्रीकृष्ण द्वारकामा सभामा बस्नुभएको समयमा पौण्ड्रकको दूत आइपुग्यो र उसले आफ्नो राजा पौण्ड्रकको सन्देश सुनायो।

**वासुदेवोऽवतीर्णोऽहमेक एव न चापरः।**
**भूतानामनुकम्पार्थं त्वं तु मिथ्याभिधां त्यज॥ ५॥**

**पदार्थ–**
**भूतानां** = प्राणीहरूको
**अनुकम्पार्थं** = कृपाका लागि
**एकः एव** = एक मात्र
**वासुदेवः** = वासुदेव
**अहं** = म नै
**अवतीर्णः** = अवतीर्ण भएको हुँ
**अपरः च न** = अर्को कुनै छैन
**त्वं तु** = तँ चाहिँ
**मिथ्या** = झुठो
**अभिधां** = वासुदेव नाम
**त्यज** = त्यागिदे

**वाक्यार्थ–** प्राणीहरूलाई कृपा गर्नका लागि संसारमा अवतार लिने एक मात्र वासुदेव म नै हुँ। अरू कोही वासुदेव छैन। तैँले जो वासुदेव नाम राखेको छस्, त्यो मिथ्या नाम त्यागिदे।

**यानि त्वमस्मच्चिह्नानि मौढ्याद् बिभर्षि सात्वत।**
**त्यक्त्वैहि मां त्वं शरणं नो चेद् देहि ममाहवम्॥ ६॥**

**पदार्थ–**
**सात्वत** = हे यादव
**त्वं** = तँ
**यानि** = जुन-जुन
**अस्मच्चिह्नानि** = मेरा (शङ्ख, चक्र आदि) चिह्नहरू
**मौढ्यात्** = मूर्खतावश
**बिभर्षि** = धारण गर्दछस् (ती चिह्नहरू)

**त्यक्त्वा** = त्यागेर
**त्वं** = तँ
**मां** = मेरो
**शरणं** = शरणमा
**एहि** = आइज
**नो चेत्** = यदि आउँदैनस् भने
**मम** = मेरा लागि
**आहवं** = युद्ध
**देहि** = दे

**वाक्यार्थ–** हे यादव ! तैँले शङ्ख, चक्र आदि मेरा चिह्नहरू धारण गरेको छस्। अब त्यो मूर्खता नगर्। ती मेरा सम्पूर्ण चिह्नहरू त्यागेर मेरो शरणमा आइज। होइन भने मसँग युद्ध गर्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**कत्थनं तदुपाकर्ण्य पौण्ड्रकस्याल्पमेधसः।**
**उग्रसेनादयः सभ्या उच्चकैर्जहसुस्तदा ॥ ७ ॥**

**पदार्थ–**
**तदा** = त्यस बेला
**अल्पमेधसः** = मन्दबुद्धि भएको
**पौण्ड्रकस्य** = पौण्ड्रकको
**तत्** = त्यो
**कत्थनं** = दुर्वचन
**उपाकर्ण्य** = सुनेर
**सभ्याः** = सभामा बसेका
**उग्रसेनादयः** = उग्रसेन आदि सभासद्हरू
**उच्चकैः** = उच्च स्वरमा
**जहसुः** = हाँसे

**वाक्यार्थ–** मन्दबुद्धि भएको पौण्ड्रकको दुर्वचन सुनेर सभामा बसेका उग्रसेन आदि सभासद्हरू उच्च स्वरमा हाँसे।

**उवाच दूतं भगवान् परिहासकथामनु।**
**उत्स्रक्ष्ये मूढ चिह्नानि यैस्त्वमेवं विकत्थसे ॥ ८ ॥**

**पदार्थ–**
**परिहासकथां** = ठट्टाको प्रसङ्ग
**अनु** = सकिएपछि
**भगवान्** = भगवान् श्रीकृष्णले
**दूतं** = दूतलाई
**उवाच** = भन्नुभयो
**मूढ** = हे मूर्ख
**यैः** = जुन दुष्टहरूसँग मिलेर
**त्वं** = तँ
**एवं** = यस्तो मप्रति दुर्वचन
**विकत्थसे** = बोलिरहेको छस् (तँ माथि)
**चिह्नानि** = चक्र आदि चिह्नहरू
**उत्स्रक्ष्ये** = छोड्नेछु (प्रहार गर्नेछु)

**वाक्यार्थ–** हाँसोको प्रसङ्ग समाप्त भएपछि श्रीकृष्णले पौण्ड्रकको दूतलाई भन्नुभयो– आफ्नो राजालाई सुनाउनू, हे मूर्ख ! तँ यदि अरू केही दुष्टहरूको भनाइमा लागेर त्यसो भन्छस् भने ठिकै छ। म युद्धमा नै आफ्ना चक्र आदि चिह्नहरू तँमाथि नै छोड्नेछु (प्रहार गर्नेछु)।

**मुखं तदपिधायाज्ञ कङ्कगृध्रवटैर्वृतः।**
**शयिष्यसे हतस्तत्र भविता शरणं शुनाम् ॥ ९ ॥**

**पदार्थ–**
**अज्ञ** = हे मूर्ख
**हतः** = मारिएको तँ
**तत्** = त्यो दुर्वचन बोल्ने
**मुखं** = मुखलाई
**अपिधाय** = छोपेर

**शयिष्यसे** = सुत्नेछस्
**कङ्कगृध्रवटैः** = ढुङ्गीफोर, गिद्ध र बटेर चराहरूद्वारा
**वृतः** = घेरिएको (हुनेछस्)
**तत्र** = त्यहाँ
**शुनां** = कुकुरहरूको
**शरणं** = शरणमा
**भविता** = हुनेछस्

**वाक्यार्थ–** हे मूर्ख ! अहिले जुन मुखले मेरा बारेमा दुर्वचन बोल्दैछस्, रणभूमिमा मारिएपछि तँ त्यो मुख छोपेर सुत्नेछस्। तँलाई ढुङ्गीफोर, गिद्ध र बटेर चराहरूले घेर्नेछन् अनि त्यस वेलामा तेरो शरण चाहिँ कुकुरहरू हुनेछन्।

**इति दूतस्तदाक्षेपं स्वामिने सर्वमाहरत्।**
**कृष्णोऽपि रथमास्थाय काशीमुपजगाम ह ॥ १० ॥**

**पदार्थ–**
**इति** = यसरी
**तत्** = त्यो
**सर्वम्** = सबै
**आक्षेपं** = आक्षेपपूर्ण वचन
**दूतः** = दूतले
**स्वामिने** = स्वामी पौण्ड्रकलाई
**आहरत्** = निवेदन गऱ्यो
**कृष्णः अपि** = श्रीकृष्ण पनि
**रथं** = रथमा
**आस्थाय** = चढेर
**काशीम्** = काशि देशमा
**उपजगाम ह** = आक्रमण गर्न जानुभयो

**वाक्यार्थ–** यसरी भगवान्ले गर्नुभएको आक्षेपपूर्ण सन्देश दूतले आएर आफ्नो स्वामी पौण्ड्रकलाई सुनायो। भगवान् श्रीकृष्ण पनि रथमा चढेर काशि देशमा आक्रमण गर्न जानुभयो। (पौण्ड्रक त्यस बखत काशिराजको राज्यमा भएको हुनाले भगवान् करूष देशमा नगई काशिदेशमैं आक्रमण गर्न जानुभएको हो)।

**पौण्ड्रकोऽपि तदुद्योगमुपलभ्य महारथः।**
**अक्षौहिणीभ्यां संयुक्तो निश्चक्राम पुराद् द्रुतम् ॥ ११ ॥**

**पदार्थ–**
**महारथः** = महारथी
**पौण्ड्रकः अपि** = पौण्ड्रकले पनि
**तदुद्योगं** = त्यो कृष्णको युद्ध गर्ने तयारी गरिरहेको
**उपलभ्य** = थाहा पाएर
**अक्षौहिणीभ्यां** = दुई अक्षौहिणी सेनाद्वारा
**संयुक्तः** = युक्त भई
**द्रुतं** = छिटो-छिटो
**पुरात्** = नगरबाट
**निश्चक्राम** = बाहिर निस्कियो

**वाक्यार्थ–** महारथी पौण्ड्रकले युद्ध गर्न आउँदै गर्नुभएका भगवान् श्रीकृष्णको तयारी थाहा पायो र ऊ दुई अक्षौहिणी सेना लिएर युद्ध गर्न छिटो-छिटो नगरबाट बाहिर निस्कियो।

**तस्य काशीपतिर्मित्रं पार्ष्णिग्राहोऽन्वयान्नृप।**
**अक्षौहिणीभिस्तिसृभिरपश्यत् पौण्ड्रकं हरिः ॥ १२ ॥**
**शङ्खार्यसिगदाशार्ङ्गश्रीवत्साद्युपलक्षितम्।**
**बिभ्राणं कौस्तुभमणिं वनमालाविभूषितम् ॥ १३ ॥**

**कौशेयवाससी पीते वसानं गरुडध्वजम् ।**
**अमूल्यमौल्याभरणं स्फुरन्मकरकुण्डलम् ॥ १४ ॥**

**पदार्थ—**
**नृप** = हे राजा परीक्षित्
**तस्य** = त्यो पौण्ड्रकको
**मित्रं** = मित्र
**काशीपतिः** = काशिराज
**पार्ष्णिग्राहः** = पछाडिबाट मद्दत गर्ने रक्षक भएर
**तिसृभिः** = तीन
**अक्षौहिणीभिः** = अक्षौहिणी सेनासहित
**अन्वयात्** = पछाडि पछाडिबाट निस्कियो
**हरिः** = श्रीकृष्णले
**शङ्खार्यसिगदाशार्ङ्गश्रीवत्साद्युपलक्षितं** = शङ्ख, चक्र, तरबार, गदा, शार्ङ्गधनु, श्रीवत्सचिह्न आदिद्वारा युक्त
**कौस्तुभमणिं** = कौस्तुभमणि
**बिभ्राणं** = धारण गरेको
**वनमालाविभूषितं** = वनमालाले विभूषित
**पीते** = पहेँलो
**कौशेयवाससी** = रेशमी लुगा
**वसानं** = लगाएको
**गरुडध्वजं** = रथमा गरुडको ध्वजा लगाएको
**अमूल्यमौल्याभरणं** = अमूल्य मुकुटको आभूषण भएको
**स्फुरन्मकरकुण्डलं** = चम्किलो मकराकार कुण्डल लगाएको
**पौण्ड्रकं** = पौण्ड्रकलाई
**अपश्यत्** = देख्नुभयो

**वाक्यार्थ—** हे राजा परीक्षित् ! पौण्ड्रकको मित्र काशिराज पनि पौण्ड्रकलाई पछाडिबाट रक्षा गर्ने उद्देश्यले तीन अक्षौहिणी सेना लिएर पौण्ड्रककै पछि पछि निस्कियो। भगवान् श्रीकृष्णले शङ्ख, चक्र, तरबार, गदा, शार्ङ्ग धनु, श्रीवत्सचिह्न, कौस्तुभमणि, वनमाला र पहेँलो रेशमी लुगाले सुशोभित पौण्ड्रकलाई देख्नुभयो। उसले रथमा गरुडको ध्वजा लगाएको थियो भने शिरमा अमूल्य मुकुट तथा कानमा चाहिँ चम्किलो मकराकार कुण्डल धारण गरेको थियो।

**दृष्ट्वा तमात्मनस्तुल्यवेषं कृत्रिममास्थितम् ।**
**यथा नटं रङ्गगतं विजहास भृशं हरिः ॥ १५ ॥**

**पदार्थ—**
**कृत्रिमं** = बनावटी
**आत्मनः** = आफ्नो
**तुल्यवेषं** = समान वेषभूषा भएको
**रङ्गगतं** = रङ्गमञ्चमा आएको
**नटं यथा** = नट जैँ
**आस्थितं** = रहेको
**तं** = त्यो पौण्ड्रकलाई
**दृष्ट्वा** = देखेर
**हरिः** = भगवान् श्रीकृष्ण
**भृशं** = अति नै
**विजहास** = हाँस्नुभयो

**वाक्यार्थ—** रङ्गमञ्चमा आएको नटको जस्तो बनावटी रूपमा आफ्नै नक्कल गरी बनाइएको वेषभूषा धारण गरेको पौण्ड्रकलाई देखेर भगवान् श्रीकृष्ण बेसरी हाँस्नुभयो।

**शूलैर्गदाभिः परिघैः शक्त्यृष्टिप्रासतोमरैः ।**
**असिभिः पट्टिशैर्बाणैः प्राहरन्नरयो हरिम् ॥ १६ ॥**

**पदार्थ–**
**अरयः** = शत्रुहरूले
**शूलैः** = त्रिशूल
**गदाभिः** = गदा
**परिघैः** = मुङ्ग्रो
**शक्त्यृष्टिप्रासतोमरैः** = शक्ति, ऋष्टि (खड्गविशेष), भाला, तोमर आदिद्वारा
**असिभिः** = तरबारहरूद्वारा
**पट्टिशैः** = पट्टिशहरूद्वारा
**बाणैः** = बाणहरूद्वारा
**हरिम्** = श्रीकृष्णलाई
**प्राहरन्** = प्रहार गरे

**वाक्यार्थ–** शत्रुहरूले भगवान् श्रीकृष्णलाई त्रिशूल, गदा, मुङ्ग्रो, शक्ति, ऋष्टि (खड्गविशेष), भाला, तोमर, तरबार, पट्टिश र बाणहरू प्रहार गरे।

**कृष्णस्तु तत्पौण्ड्रककाशिराजयोर्बलं गजस्यन्दनवाजिपत्तिमत्।**
**गदासिचक्रेषुभिरार्दयद् भृशं यथा युगान्ते हुतभुक् पृथक् प्रजाः॥ १७॥**

**पदार्थ–**
**कृष्णः तु** = श्रीकृष्णले पनि
**गजस्यन्दनवाजिपत्तिमत्** = हात्ती, रथ, घोडा र पैदलयुक्त
**पौण्ड्रककाशिराजयोः** = पौण्ड्रक र काशिराजको
**तत्** = त्यो
**बलं** = सेनालाई
**युगान्ते** = प्रलयकालमा
**हुतभुक्** = अग्निले
**पृथक्** = विभिन्न
**प्रजाः यथा** = प्राणीहरूलाई झैँ
**गदासिचक्रेषुभिः** = गदा, तरबार, चक्र र बाणहरूद्वारा
**भृशं** = सजिलै
**आर्दयत्** = नष्ट गर्नुभयो

**वाक्यार्थ–** जसरी प्रलयकालमा अग्निले विभिन्न (अण्डज, उद्भिज, स्वेदज र जरायुज) प्राणीहरूलाई जलाएर नष्ट गर्दछ त्यसै गरी भगवान् श्रीकृष्णले आफ्नो गदा, तरबार, सुदर्शन चक्र र बाणहरू प्रहार गरेर पौण्ड्रक र काशिराजका हात्ती, रथ, घोडा र पैदलसहितको चतुरङ्ग सेनालाई सजिलैसँग नष्ट गर्नुभयो।

**आयोधनं तद्रथवाजिकुञ्जरद्विपत्खरोष्ट्रैररिणावखण्डितैः।**
**बभौ चितं मोदवहं मनस्विनामाक्रीडनं भूतपतेरिवोल्बणम्॥ १८॥**

**पदार्थ–**
**अरिणा** = सुदर्शन चक्रद्वारा
**अवखण्डितैः** = टुक्रा-टुक्रा पारिएका
**रथवाजिकुञ्जरद्विपत्खरोष्ट्रैः** = रथ, घोडा, हात्ती, मनुष्य, गधा, उँट आदिद्वारा
**चितं** = ढाकिएको
**तत्** = त्यो
**आयोधनं** = युद्धस्थल
**उल्बणं** = भयङ्कर
**भूतपतेः** = भूतपति रुद्रको
**आक्रीडनं इव** = क्रीडास्थल झैँ
**मनस्विनां** = वीर योद्धाहरूको
**मोदवहं** = हर्षवर्द्धक हुने गरी
**बभौ** = सुशोभित भयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले प्रहार गर्नुभएको सुदर्शन चक्रद्वारा टुक्रा-टुक्रा पारिएका रथ, घोडा, हात्ती, मान्छे, गदा, ऊँट जताततै छरिएर त्यो युद्धस्थल भूतपति भगवान् रुद्रको प्रलयकालीन क्रीडास्थल जस्तै अत्यन्त भयङ्कर अनि वीर योद्धाहरूको हर्षलाई अझै बढाउने किसिमको भयो।

**अथाह पौण्ड्रकं शौरिर्भो भो पौण्ड्रक यद् भवान्।**
**दूतवाक्येन मामाह तान्यस्त्राण्युत्सृजामि ते॥ १९॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**शौरिः** = श्रीकृष्णले
**पौण्ड्रकं** = पौण्ड्रकलाई
**आह** = भन्नुभयो
**भो भो पौण्ड्रक** = हे पौण्ड्रक
**दूतवाक्येन** = दूतको वाक्य (मुख) द्वारा
**मां** = मलाई
**यत्** = जे (शस्त्रादि त्याग्ने कुरा)
**भवान्** = तैँले
**आह** = भनेको थिइस्
**तानि** = ती
**अस्त्राणि**= अस्त्रहरू
**ते** = तँमाथि
**उत्सृजामि** = त्याग्दछु (प्रहार गर्दछु)

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्णले पौण्ड्रकलाई भन्नुभयो– ए पौण्ड्रक ! दूतको मुखद्वारा तैँले मलाई सम्पूर्ण शस्त्र आदि चिह्नहरू त्याग्न भनेको थिइस्, अब म ती शस्त्रहरू तँमाथि नै प्रहार गर्दैछु।

**त्याजयिष्येऽभिधानं मे यत् त्वयाज्ञ मृषा धृतम्।**
**व्रजामि शरणं तेऽद्य यदि नेच्छामि संयुगम्॥ २०॥**

**पदार्थ–**
**अज्ञ** = हे मूर्ख
**यत्** = जुन वासुदेव भन्ने
**मे** = मेरो
**अभिधानं** = नाम
**मृषा** = छलपूर्वक
**त्वया** = तँद्वारा
**धृतं** = धारण गरियो (त्यो नाम)
**त्याजयिष्ये** = छुटाउनेछु
**यदि** = यदि (डराएर)
**संयुगं** = युद्ध गर्न
**न इच्छामि** = नचाहेको भए
**अद्य** = अहिल्यै
**ते** = तेरो
**शरणं** = शरणमा
**व्रजामि** = आउँथेँ

**वाक्यार्थ–** हे मूर्ख ! मेरो वासुदेव भन्ने नामलाई तैँले छल गरेर जो राखिस्, त्यो नाम तँलाई आजै त्याग्न लगाउँछु। यदि मैँले डराएर तँसँग युद्ध गर्न नचाहेको भए म अहिल्यै तेरो शरणमा आउँथेँ।

**इति क्षिप्त्वा शितैर्बाणैर्विरथीकृत्य पौण्ड्रकम्।**
**शिरोऽवृश्चद् रथाङ्गेन वज्रेणेन्द्रो यथा गिरेः॥ २१॥**

**पदार्थ–**
**इति** = यस्ता वचनद्वारा
**पौण्ड्रकं** = पौण्ड्रकलाई
**क्षिप्त्वा** = गाली गरेर
**शितैः** = तिखा
**बाणैः** = बाणहरूद्वारा
**विरथीकृत्य** = रथरहित बनाएर
**इन्द्रः** = इन्द्रले
**वज्रेण** = वज्रद्वारा
**गिरेः यथा** = पहाडको चुचुरोलाई झैँ
**रथाङ्गेन** = चक्रद्वारा
**शिरः** = (पौण्ड्रकको) शिर
**अवृश्चत्** = काट्नुभयो

**वाक्यार्थ–** यस्ता आक्षेपपूर्ण वचनहरूद्वारा भगवान् श्रीकृष्णले पौण्ड्रकलाई गाली गरी त्यसको रथलाई तिखा बाणहरू हानेर नष्ट गरिदिनुभयो। त्यसपछि इन्द्रले वज्र प्रहार गरेर पहाडका चुचुराहरू काटे झैँ गरी रथहीन भएको पौण्ड्रकको शिर सुदर्शन चक्र प्रहार गरेर काटिदिनुभयो।

**तथा काशिपतेः कायाच्छिर उत्कृत्य पत्रिभिः।**
**न्यपातयत् काशिपुर्यां पद्मकोशमिवानिलः॥ २२॥**

**पदार्थ–**
**तथा** = त्यसै गरी
**पत्रिभिः** = बाणहरूद्वारा
**काशिपतेः** = काशिराजको
**शिरः** = शिरलाई
**कायात्** = शरीरबाट
**उत्कृत्य** = काटेर
**अनिलः** = हावाले
**पद्मकोशं इव** = कमल फूललाई झैँ
**काशिपुर्यां** = काशि पुरीमा
**न्यपातयत्** = झारिदिनुभयो

**वाक्यार्थ–** जसरी हावाले कमलको फूललाई चुँडाएर झार्दछ, त्यसै गरी भगवान् श्रीकृष्णले बाणहरू प्रहार गरी काशिराजको शरीरबाट शिर काटेर उसैको राजधानी काशिपुरीमा झारिदिनुभयो।

**एवं मत्सरिणं हत्वा पौण्ड्रकं ससखं हरिः।**
**द्वारकामाविशत् सिद्धैर्गीयमानकथामृतः॥ २३॥**

**पदार्थ–**
**एवं** = यसरी
**ससखं** = मित्र काशिराजसहित
**मत्सरिणं** = ईर्ष्यालु
**पौण्ड्रकं** = पौण्ड्रकलाई
**हत्वा** = मारेर
**सिद्धैः** = सिद्धहरूद्वारा
**गीयमानकथामृतः** = अमृतमय कथागान गरिएका
**हरिः** = श्रीकृष्ण
**द्वारकां** = द्वारकामा
**आविशत्** = फर्कनुभयो

**वाक्यार्थ–** यसरी भगवान् श्रीकृष्णले ईर्ष्यालु पौण्ड्रक र उसको मित्र काशिराजलाई मारेर द्वारका फर्किनुभयो। त्यस वेला सिद्धहरूले भगवान्को अमृतमय कथागान गरिरहेका थिए।

**स नित्यं भगवद्ध्यानप्रध्वस्ताखिलबन्धनः।**
**बिभ्राणश्च हरे राजन् स्वरूपं तन्मयोऽभवत्॥ २४॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**नित्यं** = सधैँ (शत्रुता गरेर)
**भगवद्ध्यानप्रध्वस्ताखिलबन्धनः** = भगवान्को ध्यानद्वारा सम्पूर्ण कर्मबन्धन नष्ट भएको
**हरेः** = श्रीकृष्णको
**स्वरूपं** = स्वरूप
**बिभ्राणः च** = धारण गरेको
**सः** = त्यो पौण्ड्रक
**तन्मयः** = भगवन्मय नै
**अभवत्** = भयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! भगवान् श्रीकृष्णको सधैँ (शत्रुभावले नै भए पनि) ध्यान गर्नाले पौण्ड्रकका सम्पूर्ण कर्मवासनारूप बन्धन नष्ट भएका थिए। यसैले भगवान्कै जस्तो रूप धारण

गर्ने पौण्ड्रक भगवान्मै लीन भयो।

**शिरः पतितमालोक्य राजद्वारे सकुण्डलम्।**
**किमिदं कस्य वा वक्त्रमिति संशिशिरे जनाः॥ २५॥**

**पदार्थ–**
**राजद्वारे** = राजदरबारको ढोकामा
**सकुण्डलं** = कुण्डल सहितको
**शिरः** = शिर
**पतितं** = झरेको
**आलोक्य** = देखेर
**जनाः** = मान्छेहरूले
**किं इदं** = यो के हो
**कस्य वा** = अथवा कसको
**वक्त्रं इति** = मुख (शिर) हो भन्दै
**संशिशिरे** = सन्देह गर्न थाले

**वाक्यार्थ–** यता काशि पुरीमा दरबारको मूल ढोकामैं कानमा कुण्डलसहित भएको शिर खसेको देखेर त्यहाँका मान्छेहरू संशय गर्दै भन्न थाले– यो के हो ? कसको शिर हो ?

**राज्ञः काशिपतेर्ज्ञात्वा महिष्यः पुत्रबान्धवाः।**
**पौराश्च हा हता राजन् नाथ नाथेति प्रारुदन्॥ २६॥**

**पदार्थ–**
**काशिपतेः** = काशिका पालक
**राज्ञः** = राजाको (शिर हो भन्ने)
**ज्ञात्वा** = जानेर
**महिष्यः** = रानीहरू
**पुत्रबान्धवाः** = छोरा र बन्धुहरू
**पौराः च** = नगरवासीहरू पनि
**राजन्** = हे राजा
**नाथ नाथ** = हे नाथ, हे स्वामी
**हा हताः** = लौन, हामी त मर्‍यौँ नि
**इति** = यसो भन्दै
**प्रारुदन्** = रुन थाले

**वाक्यार्थ–** त्यो शिर काशिराजको नै हो भन्ने थाहा पाएपछि रानी, राजपुत्र, बन्धुजन र नगरबासीहरू पनि हे महाराज ! हे स्वामी ! हे नाथ ! हामी त मर्‍यौँ नि भन्दै रुन थाले।

**सुदक्षिणस्तस्य सुतः कृत्वा संस्थाविधिं पितुः।**
**निहत्य पितृहन्तारं यास्याम्यपचितिं पितुः॥ २७॥**
**इत्यात्मनाभिसन्धाय सोपाध्यायो महेश्वरम्।**
**सुदक्षिणोऽर्चयामास परमेण समाधिना॥ २८॥**

**पदार्थ–**
**तस्य** = ती काशिराजको
**सुदक्षिणः** = सुदक्षिण नामक
**सुतः** = छोरोले
**पितुः** = पिताको
**संस्थाविधिं** = अन्त्येष्टि कर्म
**कृत्वा** = गरेर
**पितृहन्तारं** = पिताको हत्यारालाई
**निहत्य** = मारेर
**पितुः** = पिताको
**अपचितिं** = ऋणमोचन
**यास्यामि** = प्राप्त गर्नेछु
**इति** = यसरी
**आत्मना** = मनद्वारा

**अभिसन्धाय** = निश्चय गरेर
**सोपाध्यायः** = उपाध्यायले सहित
**सुदक्षिणः** = सुदक्षिणले
**परमेण** = अति एकाग्र
**समाधिना** = चित्तद्वारा
**महेश्वरं** = भगवान् शिवलाई
**अर्चयामास** = पूजा गऱ्यो

**वाक्यार्थ–** आफ्नो पिताको अन्त्येष्टि क्रिया गरिसकेपछि पिताको हत्यारा श्रीकृष्णलाई मारेर मात्रै मैले पितृऋणबाट मुक्ति पाउनेछु भन्ने मनमा निश्चय गरेर आफ्ना उपाध्यायका साथमा बसेर काशिराजको पुत्र सुदक्षिणले एकाग्र चित्तद्वारा भगवान् शिवको पूजा गऱ्यो।

**प्रीतोऽविमुक्ते भगवांस्तस्मै वरमदाद् भवः।**
**पितृहन्तृवधोपायं स वव्रे वरमीप्सितम्॥ २९॥**

**पदार्थ–**
**अविमुक्ते** = अविमुक्त नामक काशिक्षेत्रमा
**सः** = त्यो सुदक्षिणले
**ईप्सितं** = इच्छा गरेको
**पितृहन्तृवधोपायं** = पिताको हत्यारालाई मार्ने उपाय
**वरं** = वरका रूपमा
**वव्रे** = वरण गऱ्यो
**प्रीतः** = प्रसन्न हुनुभएका
**भगवान्** = भगवान्
**भवः** = शिवले
**तस्मै** = त्यो सुदक्षिणलाई
**वरं** = वर
**अदात्** = दिनुभयो (उपाय बताउनुभयो)

**वाक्यार्थ–** अविमुक्त नाम गरेको काशिक्षेत्रमा रही त्यो सुदक्षिणले भगवान् शिवलाई आफ्नो पिताको हत्यारालाई मार्ने उपाय वरको रूपमा माग्यो (उपाय सोध्यो), प्रसन्न हुनुभएका भगवान् शिवले त्यो सुदक्षिणलाई उपाय बताउनुभयो।

**दक्षिणाग्निं परिचर ब्राह्मणैः सममृत्विजम्।**
**अभिचारविधानेन स चाग्निः प्रमथैर्वृतः॥ ३०॥**
**साधयिष्यति सङ्कल्पमब्रह्मण्ये प्रयोजितः।**
**इत्यादिष्टस्तथा चक्रे कृष्णायाभिचरन् व्रती॥ ३१॥**

**पदार्थ–**
**ब्राह्मणैः समं** = ब्राह्मणहरूका साथ
**अभिचारविधानेन** = शत्रुमारण विधि अनुसार (कर्म गर्ने)
**ऋत्विजं** = ऋत्विक् भएको (आफूलाई यज्ञमा लगाउने)
**दक्षिणाग्निं** = दक्षिणाग्निलाई
**परिचर** = आराधना गर
**प्रमथैः** = मेरा प्रमथगणहरूद्वारा
**वृतः** = युक्त भएको
**सः** = त्यो आराधित
**अग्निः च** = दक्षिणाग्निले
**अब्रह्मण्ये** = ब्राह्मणको अभक्तमाथि
**प्रयोजितः** = प्रयोग गरिएको छ भने त्यसले
**सङ्कल्पं** = तिम्रो सङ्कल्पलाई
**साधयिष्यति** = सफल गराउनेछ
**इति** = यसरी
**आदिष्टः** = बताइएको
**व्रती** = अनुष्ठानको नियम स्वीकार गरेका
**कृष्णाय** = श्रीकृष्णलाई

**अभिचरन्** = द्रोह गर्ने सुदक्षिणले
**तथा** = त्यसै अनुसार (शिवले बताए जैँ)
**चक्रे** = गऱ्यो

**वाक्यार्थ–** भगवान् शिवले भन्नुभयो– तिमी ब्राह्मणहरूसँग मिलेर ऋत्विक् भएको (यज्ञमा नियोग गराउने) दक्षिणाग्निको शत्रुमारण विधि अनुसार पूजा आराधना गर। त्यसपछि मेरा प्रमथगणसहित आराधित अग्नि प्रकट हुनेछन्। ब्राह्मणका अभक्तहरूमाथि त्यो अग्नि प्रयोग गरिएको छ भने त्यसले तिम्रो सङ्कल्प पूर्ण गराइदिनेछन्। यसरी बताइएको सुदक्षिणले अनुष्ठानका नियमहरूको पूर्ण पालन गर्दै श्रीकृष्णको द्वेष गर्दै भगवान् शिवले बताए अनुसार दक्षिणाग्निको आराधना गऱ्यो।

**ततोऽग्निरुत्थितः कुण्डान्मूर्तिमानतिभीषणः।**
**तप्तताम्रशिखाश्मश्रुरङ्गारोद्गारिलोचनः॥ ३२॥**
**दंष्ट्रोग्रभ्रुकुटीदण्डकठोरास्यः स्वजिह्वया।**
**आलिहन् सृक्किणी नग्नो विधुन्वंस्त्रिशिखं ज्वलन्॥ ३३॥**

**पदार्थ–**
**ततः** = त्यो अग्निकुण्डबाट
**अतिभीषणः** = अत्यन्त डरलाग्दो
**तप्तताम्रशिखाश्मश्रुः** = तताएको तामाजस्तो कपाल र दाह्री भएको
**अङ्गारोद्गारिलोचनः** = आँखाबाट अङ्गार निकालिरहेको
**दंष्ट्रोग्रभ्रुकुटीदण्डकठोरास्यः** = तिखा दारा र उग्र आँखीभौँका रेखाले मुखमण्डल क्रूर देखिएको
**स्वजिह्वया** = आफ्नो जिब्रोले
**सृक्किणी** = तल र माथिको ओठ
**आलिहन्** = चाटिरहेको
**नग्नः** = नाङ्गै भएको
**ज्वलन्** = आगाका लप्काहरू निकालिरहेको
**त्रिशिखं** = त्रिशूल
**विधुन्वन्** = घुमाइरहेको
**मूर्तिमान्** = मूर्तिमान्
**अग्निः** = अग्नि
**कुण्डात्** = कुण्डबाट
**उत्थितः** = उत्पन्न भयो

**वाक्यार्थ–** (शत्रुमारण विधिले गरिएको आराधना समाप्त हुनासाथ) त्यो अग्निकुण्डबाट तताएको तामाजस्तो कपाल र दाह्री भएको, आँखाबाट अङ्गार निकालिरहेको, तिखा दारा र उग्र आँखीभौँका रेखाले गर्दा मुखमण्डल क्रूर देखिएको, आफ्नो जिब्रोले ओठको तल र माथि चाटिरहेको, आगाका लप्काहरू निकालिरहेको र हातमा लिएको त्रिशूललाई घुमाइरहेको अत्यन्त डर लाग्दो मूर्तिमान् अग्नि उत्पन्न भयो।

**पद्भ्यां तालप्रमाणाभ्यां कम्पयन्नवनीतलम्।**
**सोऽभ्यधावद् वृतो भूतैर्द्वारकां प्रदहन् दिशः॥ ३४॥**

**पदार्थ–**
**सः** = त्यो अग्नि
**भूतैः** = प्रमथगणहरूद्वारा

**वृतः** = युक्त भएर
**दिशः** = सम्पूर्ण दिशाहरूलाई
**प्रदहन्** = डढाउँदै
**तालप्रमाणाभ्यां** = ताडको
रुखजस्तै अग्ला
**पद्भ्यां** = खुट्टाहरूद्वारा
**अवनीतलं** = पृथिवीलाई
**कम्पयन्** = हल्लाउँदै
**द्वारकां** = द्वारका नगरीतिर
**अभ्यधावत्** = दौडियो

**वाक्यार्थ–** त्यो अग्नि सम्पूर्ण दिशाहरूलाई डढाउँला झैं गर्दै अनि ताडको रुख झैं अग्ला-अग्ला खुट्टाहरूको दवावले पृथिवीलाई हल्लाउँदै प्रमथगणले सहित भएर द्वारकातिर दौडियो।

**तमाभिचारदहनमायान्तं द्वारकौकसः।**
**विलोक्य तत्रसुः सर्वे वनदाहे मृगा यथा॥ ३५॥**

**पदार्थ–**
**सर्वे** = सबै
**द्वारकौकसः** = द्वारकावासीहरू
**तं** = त्यो
**आभिचारदहनं** = अभिचारात्मक अग्निलाई
**आयान्तं** = आइरहेको
**विलोक्य** = देखेर
**वनदाहे** = वनको डढेलोमा
**मृगाः यथा** = मृगहरू झैं
**तत्रसुः** = डराए

**वाक्यार्थ–** जसरी वनमा डढेलो लागेपछि मृगहरू डराउँछन्, त्यसै गरी त्यो अभिचारात्मक अग्निलाई द्वारकातिर आइरहेको देखेर द्वारकावासीहरू डराए।

**अक्षैः सभायां क्रीडन्तं भगवन्तं भयातुराः।**
**त्राहि त्राहि त्रिलोकेश वह्नेः प्रदहतः पुरम्॥ ३६॥**

**पदार्थ–**
**भयातुराः** = डरले थर्कमान भएका द्वारकावासीहरूले
**सभायां** = सभामा
**अक्षैः** = जुवा
**क्रीडन्तं** = खेलिरहनुभएका
**भगवन्तं** = भगवान्लाई (भने)
**त्रिलोकेश** = तीनै लोकका स्वामी हे प्रभु
**पुरं** = द्वारका नगरीलाई
**प्रदहतः** = डढाइरहेको
**वह्नेः** = आगोबाट
**त्राहि त्राहि** = रक्षा गर्नुहोस्

**वाक्यार्थ–** डरले थर्कमान द्वारकावासीहरूले सभामा जुवा खेलिरहनुभएका भगवान् श्रीकृष्णलाई भने– तीनै लोकका स्वामी हे प्रभु ! द्वारका नगरीलाई डढाइरहेको आगोबाट हाम्रो रक्षा गर्नुहोस्।

**श्रुत्वा तज्जनवैक्लव्यं दृष्ट्वा स्वानां च साध्वसम्।**
**शरण्यः सम्प्रहस्याह मा भैष्टेत्यवितास्म्यहम्॥ ३७॥**

**पदार्थ–**
**तज्जनवैक्लव्यं** = ती द्वारकावासीहरूको व्याकुलता
**श्रुत्वा** = सुनेर
**स्वानां** = आफ्ना भक्तहरूको
**साध्वसं च** = भयलाई पनि
**दृष्ट्वा** = देखेर
**शरण्यः** = शरणागत परिपालक भगवान्ले

**सम्प्रहस्य** = हाँसेर
**मा भैष्ट** = नडराउनुहोस्
**अहं** = म
**अवितास्मि इति** = रक्षा गर्नेछु
**आह** = भन्नुभयो

**वाक्यार्थ–** द्वारकावासीहरूको व्याकुलता र पुकार सुनेर अनि आफ्ना भक्तजनहरू भयभीत भएको देखेर शरणागत परिपालक भगवान्‌ले हाँसेर 'नडराउनुहोस्, म रक्षा गर्नेछु' भन्नुभयो।

**सर्वस्यान्तर्बहिःसाक्षी कृत्यां माहेश्वरीं विभुः।**

**विज्ञाय तद्विघातार्थं पार्श्वस्थं चक्रमादिशत्॥ ३८॥**

**पदार्थ–**
**विभुः** = सर्वव्यापक
**सर्वस्य** = सम्पूर्ण जगत्‌को
**अन्तःबहिः** = बाहिर र भित्रको
**साक्षी** = साक्षात् द्रष्टा भगवान् श्रीकृष्णले
**माहेश्वरीं** = माहेश्वरी
**कृत्यां** = कृत्यालाई
**विज्ञाय** = जानेर
**तद्विघातार्थं** = कृत्या नामक अग्निको प्रतिकारका लागि
**पार्श्वस्थं** = आफ्नो नजिकै रहेको
**चक्रं** = सुदर्शन चक्रलाई
**आदिशत्** = आज्ञा दिनुभयो

**वाक्यार्थ–** सम्पूर्ण जगत्‌को बाहिर र भित्रको साक्षात् द्रष्टा सर्वव्यापक भगवान्‌ले त्यो माहेश्वरी कृत्या अग्निको प्रतिकार गर्नका लागि आफ्नो नजिकै रहेको सुदर्शन चक्रलाई आज्ञा दिनुभयो।

**तत् सूर्यकोटिप्रतिमं सुदर्शनं**

**जाज्वल्यमानं प्रलयानलप्रभम्।**

**स्वतेजसा खं ककुभोऽथ रोदसी**

**चक्रं मुकुन्दास्त्रमथाग्निमार्दयत्॥ ३९॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**सूर्यकोटिप्रतिमं** = करोडौं सूर्यसमान तेज भएको
**प्रलयानलप्रभं** = प्रलयकालीन अग्नि झैं कान्ति भएको
**जाज्वल्यमानं** = प्रकाशमान
**स्वतेजसा** = आफ्नो तेजले
**खं** = आकाश
**ककुभः** = दिशा
**अथ** = त्यस्तै
**रोदसी** = अन्तरिक्षलाई (प्रकाशित गरिरहेको)
**तत्** = त्यो
**मुकुन्दास्त्रं** = श्रीकृष्णको अस्त्र
**सुदर्शनं** = सुदर्शन
**चक्रं** = चक्रले
**अग्निं** = त्यो कृत्या अग्निलाई
**आर्दयत्** = तहसनहस पाऱ्यो

**वाक्यार्थ–** त्यसपछि करोडौं सूर्यसमान तेजस्वी तथा प्रलयकालीन अग्नि झैं कान्ति भएको प्रकाशमान त्यस सुदर्शन चक्रले आफ्नो तेजले आकाश, सम्पूर्ण दिशा र अन्तरिक्षलाई समेत प्रकाशित गर्दै कृत्या अग्निलाई तहसनहस पाऱ्यो।

**कृत्यानलः प्रतिहतः स रथाङ्गपाणे-**

**रस्त्रौजसा स नृप भग्नमुखो निवृत्तः।**

**वाराणसीं परिसमेत्य सुदक्षिणं तं**
**सर्त्विग्जनं समदहत् स्वकृतोऽभिचारः ॥ ४० ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**रथाङ्गपाणेः** = चक्रपाणि श्रीकृष्णको
**अस्त्रौजसा** = अस्त्रभूत सुदर्शन चक्रको तेजद्वारा
**भग्नमुखः** = मुख च्यात्तिएको (गतिहीन भएको)
**प्रतिहतः** = पराजित भएको
**सः** = त्यो
**कृत्यानलः** = कृत्या नामको अग्नि
**निवृत्तः** = फर्कियो (त्यसपछि)
**सः** = त्यो कृत्या अग्निले
**वाराणसीं** = वाराणसी (काशि)मा
**परिसमेत्य** = आएर
**सर्त्विग्जनं** = ऋत्विक्‌हरूले र अन्य मान्छेहरूले सहित
**तं** = त्यो काशिराजको पुत्र
**सुदक्षिणं** = सुदक्षिणलाई
**समदहत्** = डढाइदियो
**स्वकृतः** = आफैँद्वारा प्रयुक्त
**अभिचारः** = अभिचार (आफ्नै नाशको कारण भयो)

**वाक्यार्थ–** हे राजा परीक्षित् ! चक्रपाणि भगवान् श्रीकृष्णको अस्त्र सुदर्शन चक्रको तेजले कृत्या अग्निको गति मोडियो र चक्रसँग पराजित भएर त्यो अग्नि काशिमा नै फर्कियो। काशिमा आएर उसले ऋत्विक् र अन्य मान्छेहरूसहित आफूलाई प्रयोग गर्ने काशिराजपुत्र सुदक्षिणलाई पनि डढाइदियो। यसरी आफैँले प्रयोग गरेको अभिचार गलत ठाउँमा (ब्राह्मणभक्त श्रीकृष्णमा) प्रयोग गरेका कारण उसैको नाश भयो।

**चक्रं च विष्णोस्तदनुप्रविष्टं**
**वाराणसीं साट्टसभालयापणाम्।**
**सगोपुराट्टालककोष्ठसङ्कुलां**
**सकोशहस्त्यश्वरथान्नशालाम्॥ ४१ ॥**

**पदार्थ–**
**तदनुप्रविष्टं** = त्यो कृत्या अग्निकै पछि-पछि काशिमा प्रवेश गरेको
**विष्णोः** = श्रीकृष्णको
**चक्रं च** = चक्रले
**साट्टसभालयापणां** = मञ्चसहित सभामण्डप, घर र बजारक्षेत्र भएको
**सगोपुराट्टालककोष्ठसङ्कुलां** = नगरको ढोका, ढोकाको माथिल्लो भाग, रत्नभण्डारले व्याप्त भएको
**सकोशहस्त्यश्वरथान्नशालाम्** = अर्थभण्डार, हात्ती, घोडा, रथ र अन्नभण्डार भएको
**वाराणसीं** = वाराणसीलाई (डढाइदियो)

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको सुदर्शन चक्र पनि कृत्या अग्निकै पछि-पछि काशिमा प्रवेश गऱ्यो। चक्रले काशिका ठुला-ठुला मञ्च, सभामण्डप, घर, बजारक्षेत्र, नगरका ढोका, ढोकाका माथिल्ला भाग, रत्नभण्डार, अर्थभण्डार, हात्ती, घोडा, रथ र अन्नभण्डारहरू सहित वाराणसीलाई डढाइदियो।

**दग्ध्वा वाराणसीं सर्वां विष्णोश्चक्रं सुदर्शनम्।**
**भूयः पार्श्वमुपातिष्ठत् कृष्णस्याक्लिष्टकर्मणः ॥ ४२ ॥**

**पदार्थ—**
**सुदर्शनं** = सुदर्शन
**चक्रं** = चक्र
**सर्वां** = सम्पूर्ण
**वाराणसीं** = वाराणसीलाई
**दग्ध्वा** = डढाएर
**भूयः** = फेरि
**अक्लिष्टकर्मणः** = उदार कर्म भएका
**विष्णोः** = सर्वव्यापक
**कृष्णस्य** = भगवान् श्रीकृष्णको
**पार्श्वम्** = निकटमा
**उपातिष्ठत्** = उपस्थित भयो

**वाक्यार्थ—** सुदर्शन चक्र सम्पूर्ण वाराणसी नगरलाई डढाएर उदारकर्मी सर्वव्यापक भगवान् श्रीकृष्ण भएको ठाउँमा फर्कियो।

**य एतच्छ्रावयेन्मर्त्य उत्तमःश्लोकविक्रमम्।**
**समाहितो वा शृणुयात् सर्वपापैः प्रमुच्यते ॥ ४३ ॥**

**पदार्थ—**
**यः** = जुन
**मर्त्यः** = मानिसले
**एतत्** = यो
**उत्तमःश्लोकविक्रमं** = पवित्रकीर्ति श्रीकृष्णको पराक्रम
**समाहितः** = एकाग्र भएर
**शृणुयात्** = सुन्ला
**श्रावयेत् वा** = अथवा सुनाउला (त्यो मानिस)
**सर्वपापैः** = सम्पूर्ण पापहरूबाट
**प्रमुच्यते** = मुक्त हुन्छ

**वाक्यार्थ—** जुन मानिसले पवित्र कीर्ति भएका भगवान् श्रीकृष्णको यो पराक्रम एकाग्र भएर सुन्ला वा अरूलाई सुनाउला, त्यो मानिस सम्पूर्ण पापहरूबाट मुक्त हुन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे**
**उत्तरार्धे पौण्ड्रकादिवधो नाम षट्षष्टितमोऽध्यायः ॥ ६६ ॥**

# अथ सप्तषष्टितमोऽध्यायः

## द्विविदको वध

**राजोवाच** (राजा परीक्षित्‌ले भन्नुभयो)

**भूयोऽहं श्रोतुमिच्छामि रामस्याद्भुतकर्मणः।**

**अनन्तस्याप्रमेयस्य यदन्यत् कृतवान् प्रभुः॥ १॥**

**पदार्थ–**
**अहं** = म
**भूयः** = फेरि
**अद्भुतकर्मणः** = आश्चर्य लाग्दा कर्महरू गर्ने
**अनन्तस्य** = सर्वव्यापक
**अप्रमेयस्य** = अपार महिमा भएका
**रामस्य** = बलरामका (चरित्र)
**श्रोतुं** = सुन्न
**इच्छामि** = चाहन्छु
**प्रभुः** = सर्वसमर्थ बलरामले
**अन्यत्** = अरू
**यत्** = जे-जे (लीला)
**कृतवान्** = गर्नुभयो (ती सबै बताउनुहोस्)

**वाक्यार्थ–** आश्चर्य लाग्दा कर्महरू गर्ने अपार महिमा भएका सर्वव्यापक बलरामका चरित्रहरू म फेरि सुन्न चाहन्छु। सर्वसमर्थ बलरामले अरू जे-जे लीला गर्नुभयो, ती सबै बताउनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**नरकस्य सखा कश्चिद् द्विविदो नाम वानरः।**

**सुग्रीवसचिवः सोऽथ भ्राता मैन्दस्य वीर्यवान्॥ २॥**

**पदार्थ–**
**नरकस्य** = नरकासुर (भौमासुर)को
**सखा** = साथी
**कश्चित्** = कुनै
**वीर्यवान्** = शक्तिशाली
**द्विविदः** = द्विविद
**नाम** = नाम गरेको
**वानरः** = बाँदर (थियो)
**सः** = त्यो द्विविद
**सुग्रीवसचिवः** = सुग्रीवको मन्त्री
**अथ** = र
**मैन्दस्य** = मैन्दको
**भ्राता** = भाइ (थियो)

**वाक्यार्थ–** हे राजा परीक्षित्! सुग्रीवको मन्त्री र मैन्दको भाइ नरकासुर (भौमासुर)को साथी द्विविद नाम गरेको एउटा शक्तिशाली बाँदर थियो।

**सख्युः सोऽपचितिं कुर्वन् वानरो राष्ट्रविप्लवम्।**

**पुरग्रामाकरान् घोषानदहद् वह्निमुत्सृजन्॥ ३॥**

**पदार्थ–**
**सः** = त्यो
**वानरः** = बाँदरले
**सख्युः** = साथी भौमासुरको हारको
**अपचितिं** = बदला

**कुर्वन्** = लिनका निम्ति
**राष्ट्रविप्लवं** = राज्यमा उत्पात मच्चाउने
**पुरग्रामाकरान्** = सहर, गाउँ र खानीहरूमा (तथा)
**घोषान्** = (गोपहरूका) गोठहरूमा
**वह्निं** = आगो
**उत्सृजन्** = लगाउँदै
**अदहत्** = डढाउन लाग्यो

**वाक्यार्थ—** श्रीकृष्णले भौमासुरलाई पराजित गरेको हुनाले रिसाएको त्यस द्विविद नामक बाँदरले साथीको हारको बदला लिनका निम्ति राज्यमा ठुला-ठुला उत्पात मच्चाउँदै गाउँ, सहर, खानी तथा गोठहरूमा आगो लगाएर डढाउन थाल्यो।

**क्वचित् स शैलानुत्पाट्य तैर्देशान् समचूर्णयत्।**
**आनर्तान् सुतरामेव यत्रास्ते मित्रहा हरिः॥ ४॥**

**पदार्थ—**
**सः** = त्यस द्विविदले
**क्वचित्** = कहिले
**शैलान्** = ठुला-ठुला ढुङ्गाहरू
**उत्पाट्य** = उठाएर
**तैः** = तिनको प्रहारले
**देशान्** = बस्तीहरूलाई
**सुतरां** = विशेष गरेर
**आनर्तान्** = द्वारकामाथि
**एव** = नै
**समचूर्णयत्** = धुलोपिठो पार्दथ्या
**यत्र** = जहाँ
**मित्रहा** = उसको मित्रलाई नाश गर्ने
**हरिः** = श्रीकृण
**आस्ते** = बस्नुहुन्थ्यो

**वाक्यार्थ—** त्यस दुष्टले कहिले ठुला-ठुला ढुङ्गाहरू उठाएर प्रहार गर्दै बस्तीहरूलाई धुलोपिठो पारिदिन्थ्यो। विशेष गरेर त्यसले यस्ता उपद्रवहरू द्वारकापुरीमाथि गर्दथ्यो जहाँ त्यसको मित्र भौमासुरलाई नाश गर्ने भगवान् श्रीकृष्ण रहनुहुन्थ्यो।

**क्वचित् समुद्रमध्यस्थो दोर्भ्यामुत्क्षिप्य तज्जलम्।**
**देशान् नागायुतप्राणो वेलाकूलानमज्जयत्॥ ५॥**

**पदार्थ—**
**क्वचित्** = कहिले
**नागायुतप्राणः** = दश हजार हात्तीको बराबर बल भएको त्यस दुष्टले
**समुद्रमध्यस्थः** = समुद्रको बिचमा बसेर
**दोर्भ्याम्** = दुबै हातले
**तज्जलं** = त्यो समुद्रको पानी
**उत्क्षिप्य** = छ्यापेर
**वेलाकूलान्** = किनारमा रहेका
**देशान्** = प्रदेशहरूलाई
**अमज्जयत्** = डुबाइदिन्थ्यो

**वाक्यार्थ—** कहिले दश हजार हात्तीको जैँ बल भएको त्यो दुष्ट समुद्रको बिचमा जान्थ्यो र दुबै हातले पानी छ्यापेर किनारका प्रदेशहरूलाई डुबाइदिन्थ्यो।

**आश्रमानृषिमुख्यानां कृत्वा भग्नवनस्पतीन्।**
**अदूषयच्छकृन्मूत्रैरग्नीन् वैतानिकान् खलः॥ ६॥**

**पदार्थ–**
**खलः** = दुष्ट द्विविदले
**ऋषिमुख्यानां** = मुख्य-मुख्य ऋषिहरूका
**आश्रमान्** = आश्रमहरूलाई
**भग्नवनस्पतीन्** = बोटविरुवा भाँची छिन्नभिन्न
**कृत्वा** = गरेर
**शकृन्मूत्रैः** = मलमूत्रले
**वैतानिकान्** = यज्ञ सम्बन्धी
**अग्नीन्** = अग्निहरूलाई
**अदूषयत्** = दूषित गरिदिन्थ्यो

**वाक्यार्थ–** त्यस दुष्ट द्विविदले मुख्य-मुख्य ऋषिमुनिहरूका आश्रमहरूमा गई त्यहाँका बोटविरुवा र बगैँचाहरू भाँची छिन्नभिन्न पार्दथ्यो र त्यहाँका यज्ञकुण्डमा गई अग्निलाई मलमूत्रले दूषित पारिदिन्थ्यो।

**पुरुषान् योषितो दृप्तः क्ष्माभृद्द्रोणीगुहासु सः।**
**निक्षिप्य चाप्यधाच्छैलैः पेशष्कारीव कीटकम्॥ ७॥**

**पदार्थ–**
**दृप्तः** = उन्मत्त भएको
**सः** = त्यस द्विविदले
**पेशष्कारी** = कुमलकोटीले
**कीटकं इव** = किरालाई (आफ्नो प्वालमा बन्द गरे) झैँ
**क्ष्माभृद्द्रोणीगुहासु** = पहाडका खोँचमा रहेका गुफाहरूमा
**पुरुषान्** = पुरुषहरू र
**योषितः च** = स्त्रीहरूलाई पनि
**निक्षिप्य** = हुलेर
**शैलैः** = ठुला-ठुला चट्टानले
**अप्यधात्** = (गुफाको मुख) बन्द गरिदिन्थ्यो

**वाक्यार्थ–** जसरी कुमलकोटी किराले अन्य किरालाई लगेर आफ्नो प्वालभित्र बन्द गरिदिन्छ त्यसै गरी त्यस दुष्ट द्विविदले पनि पुरुष र स्त्रीहरूलाई लगेर पहाडका खोँचहरूमा रहेका गुफाहरूमा हुली बाहिरबाट ठुला-ठुला चट्टानले गुफाका मुख बन्द गरिदिन्थ्यो।

**एवं देशान् विप्रकुर्वन् दूषयंश्च कुलस्त्रियः।**
**श्रुत्वा सुललितं गीतं गिरिं रैवतकं ययौ॥ ८॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**देशान्** = बस्तीहरूलाई
**विप्रकुर्वन्** = विध्वंस गर्दै तथा
**कुलस्त्रियः च** = कुलका नारीहरूलाई
**दूषयन्** = दूषित गर्दै
**सुललितं** = सुमधुर
**गीतं** = गीत
**श्रुत्वा** = सुनेर
**रैवतकं** = रैवतक नामक
**गिरिं** = पहाडमा
**ययौ** = पुग्यो

**वाक्यार्थ–** यसप्रकार बस्तीहरूलाई विध्वंस गर्दै र कुलीन स्त्रीहरूलाई दूषित पार्दै हिँडेको त्यो बाँदर एक दिन सुमधुर गीतको ध्वनि सुन्दै रैवतक नाम गरेको पहाडमा पुग्यो।

**तत्रापश्यद् यदुपतिं रामं पुष्करमालिनम्।**
**सुदर्शनीयसर्वाङ्गं ललनायूथमध्यगम्॥ ९॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ
**पुष्करमालिनं** = कमलको माला लगाएका
**सुदर्शनीयसर्वाङ्गं** = सर्वाङ्गसुन्दर भएका
**ललनायूथमध्यगं** = युवतीहरूको समूहका बिचमा बस्नुभएका
**यदुपतिं** = यदुवंशका रक्षक
**रामं** = बलरामलाई
**अपश्यत्** = देख्यो

**वाक्यार्थ–** रैवतक पर्वतमा पुगेपछि त्यसले कमलका सुगन्धित माला लगाएका, युवतीहरूका बिचमा बसिरहनुभएका सर्वाङ्गसुन्दर यदुपति बलरामलाई देख्यो।

**गायन्तं वारुणीं पीत्वा मदविह्वललोचनम्।**
**विभ्राजमानं वपुषा प्रभिन्नमिव वारणम्॥ १०॥**

**पदार्थ–**
**वारुणीं** = वारुणी मदिरा
**पीत्वा** = पिएर
**गायन्तं** = गीत गाइरहेका
**मदविह्वललोचनं** = मदले विह्वल आँखा भएका बलराम
**वपुषा** = शारीरिक रूपले
**प्रभिन्नं** = उन्मत्त
**वारणं इव** = हात्ती झैँ
**विभ्राजमानम्** = शोभायमान देखिनुभएको थियो

**वाक्यार्थ–** त्यस बखतमा वारुणी मदिरा पान गरी सुमधुर लयमा गीत गाइरहनुभएका र मदले विह्वल आँखा भएका बलराम शारीरिक रूपले हेर्दा उन्मत्त हात्ती झैँ शोभायमान देखिनुभएको थियो।

**दुष्टः शाखामृगः शाखामारूढः कम्पयन् द्रुमान्।**
**चक्रे किलकिलाशब्दमात्मानं सम्प्रदर्शयन्॥ ११॥**

**पदार्थ–**
**शाखां** = हाँगामा
**आरूढः** = चढेको
**दुष्टः** = दुष्ट स्वभाव भएको
**शाखामृगः** = बाँदर
**द्रुमान्** = रुखहरूलाई
**कम्पयन्** = हल्लाउँदै
**आत्मानं** = आफूलाई
**सम्प्रदर्शयन्** = देखाउँदै
**किलकिलाशब्दं** = क्याँ-क्याँ र कुँ-कुँ आवाज
**चक्रे** = निकाल्न लाग्यो

**वाक्यार्थ–** त्यो दुष्ट बाँदर हाँगामा चढेर रुखहरूलाई हल्लाउँदै आफ्नो पौरख देखाउन र क्याँ-क्याँ र कुँ-कुँ गर्दै कराउन लाग्यो।

**तस्य धाष्ट्र्यं कपेर्वीक्ष्य तरुण्यो जातिचापलाः।**
**हास्यप्रिया विजहसुर्बलदेवपरिग्रहाः॥ १२॥**

**पदार्थ–**
**जातिचापलाः** = स्वभावैले अति चञ्चल
**हास्यप्रियाः** = ठट्टा गर्न रुचाउने
**बलदेवपरिग्रहाः** = बलरामका साथमा बसेका
**तरुण्यः** = तरुणीहरू
**तस्य** = त्यस
**कपेः** = बाँदरको
**धाष्ट्र्यं** = उपद्रोलाई
**वीक्ष्य** = देखेर
**विजहसुः** = हाँस्न लागे

**वाक्यार्थ–** बलरामका साथमा बसेका स्वभावैले अति चञ्चल र ठट्टा गर्न मन पराउने तरुणीहरू त्यस बाँदरको उपद्रोलाई देखेर हाँस्न लागे।

**ता हेलयामास कपिर्भ्रूक्षेपैः सम्मुखादिभिः।**
**दर्शयन् स्वगुदं तासां रामस्य च निरीक्षितः॥ १३॥**

**पदार्थ–**

**कपिः च** = त्यस बाँदरले पनि
**रामस्य** = बलरामले
**निरीक्षितः** = हेर्दाहेर्दै
**तासां** = ती तरुणीहरूलाई
**स्वगुदं** = आफ्नो गुप्ताङ्ग
**दर्शयन्** = देखाउँदै
**भ्रूक्षेपैः** = आँखा झिम्क्याउँदै
**सम्मुखादिभिः** = नजिक-नजिक पुगेर मुख बङ्ग्याउँदै दौडिने आदि क्रियाद्वारा
**ताः** = ती युवतीहरूलाई
**हेलयामास** = जिस्क्याउन लाग्यो

**वाक्यार्थ–** त्यस बाँदरले बलरामले हेर्दा-हेर्दै ती तरुणीहरूलाई कहिले आफ्नो गुप्ताङ्ग देखाउने, कहिले आँखा झिम्क्याउने र कहिले नजिक आई मुख बङ्ग्याउँदै दौडिने जस्ता क्रियाद्वारा जिस्क्याउने तथा तिरस्कार गर्ने गर्न लाग्यो।

**तं ग्राव्णा प्राहरत् क्रुद्धो बलः प्रहरतां वरः।**
**स वञ्चयित्वा ग्रावाणं मदिराकलशं कपिः॥ १४॥**
**गृहीत्वा हेलयामास धूर्तस्तं कोपयन् हसन्।**
**निर्भिद्य कलशं दुष्टो वासांस्यास्फालयद् बलम्॥ १५॥**

**पदार्थ–**

**प्रहरतां** = प्रहार गर्नेहरूमा
**वरः** = सर्वश्रेष्ठ
**क्रुद्धः** = अत्यन्त रिसाएका
**बलः** = बलरामले
**ग्राव्णा** = ढुङ्गाले
**तं** = त्यस बाँदरलाई
**प्राहरत्** = हिर्काउनुभयो (तर)
**सः धूर्तः** = त्यो धूर्त
**दुष्टः** = दुष्ट
**कपिः** = बाँदरले
**ग्रावाणं** = ढुङ्गालाई
**वञ्चयित्वा** = छलेर
**हसन्** = हाँस्दै
**बलं** = बलरामलाई
**कोपयन्** = क्रोधित बनाउँदै
**मदिराकलशं** = मदिराको कलश
**गृहीत्वा** = उठाएर
**कलशं** = त्यस कलशलाई
**निर्भिद्य** = फुटाउँदै (र)
**वासांसि** = ती युवतीहरूका कपडाहरू
**आस्फालयत्** = बेसरी तान्न थाल्यो र
**तं** = उहाँलाई
**हेलयामास** = तिरस्कार गर्न लाग्यो

**वाक्यार्थ–** ताकेर हान्न सिपालु बलरामले अत्यन्त रिसाएर त्यस बाँदरलाई ढुङ्गाले हिर्काउनुभयो, तर त्यस धूर्त बाँदरले ढुङ्गालाई छली बलरामलाई क्रोधित बनाउँदै मदिराको कलश नै लिएर भाग्यो। त्यसपछि त्यस कलशलाई फोर्दै र तरुणीहरूका कपडा बेसरी तान्दै बलरामलाई समेत तिरस्कार गर्न लाग्यो।

**कदर्थीकृत्य बलवान् विप्रचक्रे मदोद्धतः।**
**तं तस्याविनयं दृष्ट्वा देशांश्च तदुपद्रुतान्॥ १६॥**
**क्रुद्धो मुसलमादत्त हलं चारिजिघांसया।**
**द्विविदोऽपि महावीर्यः शालमुद्यम्य पाणिना॥ १७॥**
**अभ्येत्य तरसा तेन बलं मूर्धन्यताडयत्।**
**तं तु सङ्कर्षणो मूर्ध्नि पतन्तमचलो यथा॥ १८॥**
**प्रतिजग्राह बलवान् सुनन्देनाहनच्च तम्।**
**मुसलाहतमस्तिष्को विरेजे रक्तधारया॥ १९॥**
**गिरिर्यथा गैरिकया प्रहारं नानुचिन्तयन्।**
**पुनरन्यं समुत्क्षिप्य कृत्वा निष्पत्रमोजसा॥ २०॥**
**तेनाहनत् सुसङ्क्रुद्धस्तं बलः शतधाच्छिनत्।**
**ततोऽन्येन रुषा जघ्ने तं चापि शतधाच्छिनत्॥ २१॥**

पदार्थ—
**मदोद्धतः** = मदले उन्मत्त भएको
**बलवान्** = बलशाली द्विविदले
**तं** = ती बलरामलाई
**कदर्थीकृत्य** = तिरस्कार गरेर
**विप्रचक्रे** = अपमान गर्‍यो
**तस्य** = त्यस द्विविदको
**अविनयं** = उद्दण्डता
**तदुपद्रुतान्** = त्यसले उपद्रव गरेका
**देशान् च** = विभिन्न स्थानहरूलाई पनि
**दृष्ट्वा** = देखेर
**क्रुद्धः** = रिसाएका बलरामले
**अरिजिघांसया** = शत्रुलाई मार्ने इच्छाले
**मुसलं** = मुसल र
**हलं च** = हलो
**आदत्त** = उठाउनुभयो
**महावीर्यः** = अति पराक्रमी
**द्विविदः अपि** = द्विविदले पनि
**पाणिना** = हातले
**शालं** = शालको वृक्ष
**उद्यम्य** = उखेलेर
**तरसा** = वेगले
**अभ्येत्य** = नजिकै आई
**तेन** = त्यस शालको रुखले
**बलं** = बलरामलाई
**मूर्धनि** = शिरमा
**अताडयत्** = हिर्कायो
**अचलः यथा** = पर्वत झैँ हलचल नगरी बस्नुभएका
**बलवान्** = शक्तिशाली
**सङ्कर्षणः** = बलरामले
**मूर्ध्नि** = आफ्नो टाउकोमा
**पतन्तं** = बज्रिदैँ गरेको
**तं तु** = त्यस वृक्षलाई
**प्रतिजग्राह** = समाउनुभयो र
**तं च** = त्यस बाँदरलाई पनि
**सुनन्देन** = आफ्नो सुनन्दन नामक मुसलले
**अहनत्** = प्रहार गर्नुभयो
**यथा** = जसरी
**गैरिकया** = गैरिक आदि धातुद्वारा
**गिरिः** = पर्वत शोभायमान हुन्छ (त्यसै गरी)
**मुसलाहतमस्तिष्कः** = मुसलको

प्रहारले टाउको फुटेको द्विविद बाँदर
**रक्तधारया** = रगतको धाराले
**विरेजे** = सुशोभित भयो
**प्रहारं** = मुसलको चोटलाई
**नानुचिन्तयन्** = वास्ता नगरी
**पुनः** = फेरि
**अन्यं** = अर्को वृक्ष
**समुत्क्षिप्य** = उखेलेर
**निष्पत्रं** = पात रहित
**कृत्वा** = बनाएर
**तेन** = त्यसैले
**ओजसा** = तेजपूर्वक (बेसरी)
**अहनत्** = बलरामलाई हिर्कायो
**सुसङ्क्रुद्धः** = अत्यन्त रिसाउनुभएका
**बलः** = बलरामले
**तं** = त्यस वृक्षलाई
**शतधा** = सयौँ टुक्रामा
**अच्छिनत्** = छिन्नभिन्न पारिदिनुभयो
**ततः** = त्यसपछि (द्विविदले)
**रुषा** = रिसले
**अन्येन** = अरू वृक्षहरूले
**जघ्ने** = प्रहार गऱ्यो
**तं च अपि** = त्यसलाई पनि (बलरामले)
**शतधा** = सयौँ टुक्रा पारेर
**अच्छिनत्** = काटिदिनुभयो

**वाक्यार्थ–** यसप्रकार मदले उन्मत्त भएको बलवान् द्विविदले बलरामको अपमान र तिरस्कार गर्न लागेपछि त्यसको त्यो दुष्टता र त्यसले छिन्नभिन्न पारेका विभिन्न स्थानहरूलाई देखेर ज्यादै रिसाउनुभएका बलरामले त्यसलाई मार्ने इच्छाले आफ्नो मुसल र हलो उचाल्नुभयो। त्यो देखेर महाबलशाली द्विविदले पनि हातले शालको रुख उखेलेर वेगले नजिकै आई बलरामको शिरमा ताकेर प्रहार गऱ्यो। पर्वत झैँ हलचल नगरी बस्नुभएका बलरामले शिरमा लाग्न नपाउँदै त्यस वृक्षलाई समाउनुभयो र आफ्नो सुनन्दन नामक मुसलले द्विविदलाई प्रहार गर्नुभयो। मुसलको प्रहारले टाउको फुटी रगतका धारा बगाउँदै गरेको त्यो बाँदर गैरिक आदि धातुले पर्वत झैँ शोभायमान देखियो। त्यस मुसलको चोटलाई कत्ति वास्ता नगरी उसले रिसले अर्को रुख उखेल्यो र त्यसका जम्मै पात पतिङ्गर झरझुर पारेर अति जोडले बलराममाथि प्रहार गऱ्यो। बलरामले त्यस रुखलाई सयौँ टुक्रामा छिन्नभिन्न पारिदिनुभयो। यसपछि त्यसले झनै रिसाएर अर्को रुखले प्रहार गऱ्यो, तर बलरामले त्यसलाई पनि सयौँ टुक्रा पारेर काटिदिनुभयो।

**एवं युध्यन् भगवता भग्ने भग्ने पुनः पुनः।**
**आकृष्य सर्वतो वृक्षान् निर्वृक्षमकरोद् वनम्॥ २२॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**भगवता** = भगवान् बलरामसँग
**युध्यन्** = युद्ध गर्दा
**भग्ने भग्ने** = प्रत्येक रुख भाँचिएपछि
**पुनः पुनः** = फेरि–फेरि
**सर्वतः** = चारैतिरबाट
**वृक्षान्** = रुखहरू
**आकृष्य** = उखेलेर
**वनं** = वनलाई नै
**निर्वृक्षं** = वृक्षरहित
**अकरोत्** = बनायो

**वाक्यार्थ–** यसप्रकार भगवान् बलरामसँग युद्ध गर्दा त्यस द्विविदले एकपछि अर्को गर्दै चारैतिरका रुखहरू उखेलेर सम्पूर्ण वनलाई वृक्षरहित बनायो।

**ततोऽमुञ्चच्छिलावर्षं बलस्योपर्यमर्षितः।**

**तत् सर्वं चूर्णयामास लीलया मुसलायुधः॥ २३॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**अमर्षितः** = रिसाएको द्विविदले
**बलस्य उपरि** = बलराममाथि
**शिलावर्षं** = ढुङ्गाको वर्षा
**अमुञ्चत्** = फ्याँक्न लाग्यो
**मुसलायुधः** = मुसल हतियार भएका बलरामले
**तत् सर्वं** = त्यो सबैलाई
**लीलया** = ख्यालख्यालमै
**चूर्णयामास** = धुलोपिठो पारिदिनुभयो

**वाक्यार्थ–** त्यसपछि अत्यन्त रिसाएको त्यस द्विविदले बलराममाथि ढुङ्गाको वर्षा गर्न लाग्यो, तर मुसल हातमा लिनुभएका बलरामले ती सबै ढुङ्गाहरूलाई ख्याल-ख्यालमैं धुलोपिठो पारिदिनुभयो।

**स बाहू तालसङ्काशौ मुष्टीकृत्य कपीश्वरः।**

**आसाद्य रोहिणीपुत्रं ताभ्यां वक्षस्यरूरुजत्॥ २४॥**

**पदार्थ–**
**सः कपीश्वरः** = त्यस बाँदरराजले
**तालसङ्काशौ** = ताडवृक्ष जैँ लामा
**बाहू** = दुबै हातलाई
**मुष्टीकृत्य** = मुट्ठी पारेर
**रोहिणीपुत्रं** = रोहिणीपुत्र बलरामको
**आसाद्य** = नजिकमा आएर
**ताभ्यां** = ती दुबै मुड्कीले
**वक्षसि** = छातीमा
**अरूरुजत्** = प्रहार गर्‍यो

**वाक्यार्थ–** त्यो बाँदरराज द्विविदले ताडवृक्षसमान आफ्ना लामा-लामा दुबै हातलाई मुट्ठी पारेर बलरामको नजिक आई उहाँको छातीमा प्रहार गर्‍यो।

**यादवेन्द्रोऽपि तं दोर्भ्यां त्यक्त्वा मुसललाङ्गले।**

**जत्रावभ्यर्दयत् क्रुद्धः सोऽपतद् रुधिरं वमन्॥ २५॥**

**पदार्थ–**
**क्रुद्धः** = रिसाउनुभएका
**यादवेन्द्रः अपि** = युदुपति बलरामले पनि
**मुसललाङ्गले** = मुसल र हलो
**त्यक्त्वा** = छाडेर
**दोर्भ्यां** = दुबै हातले
**तं** = त्यस बाँदरको
**जत्रौ** = काँधका हाडमा
**अभ्यर्दयत्** = जोडले प्रहार गर्नुभयो (त्यसपछि)
**सः** = त्यो द्विविद
**रुधिरं** = रगत
**वमन्** = छाद्दै
**अपतत्** = भुइँमा लड्यो

**वाक्यार्थ–** द्विविदको प्रहारबाट रिसाउनुभएका बलरामले पनि मुसल र हलोलाई छाडेर आफ्ना दुबै हातले त्यस बाँदरका काँधका दुबै हाडमा जोडले प्रहार गर्नुभयो। त्यसपछि त्यो द्विविद रगत छाद्दै भुइँमा लड्यो।

**चकम्पे तेन पतता सटङ्कः सवनस्पतिः।**

**पर्वतः कुरुशार्दूल वायुना नौरिवाम्भसि ॥ २६ ॥**

**पदार्थ–**
**कुरुशार्दूल** = हे कुरुश्रेष्ठ परीक्षित्
**वायुना** = हावाद्वारा
**अम्भसि** = पानीमा
**नौः इव** = डुङ्गा (हल्लिए) झैँ
**पतता** = लड्दै गर्दा
**तेन** = त्यो द्विविद
**सटङ्कः** = पोखरीहरूले र
**सवनस्पतिः** = ठुला-ठुला वृक्ष वनस्पतिले युक्त भएको
**पर्वतः** = रैवतक पर्वत नै
**चकम्पे** = हल्लियो

**वाक्यार्थ–** हे कुरुश्रेष्ठ परीक्षित् ! हावा लाग्दा पानीमाथिको डुङ्गा हल्लिए झैँ त्यो द्विविद भुइँमा लड्दै गर्दा ठुला-ठुला पोखरी र वृक्ष वनस्पतिले युक्त रैवतक पर्वत नै हल्लियो।

**जयशब्दो नमः शब्दः साधु साध्विति चाम्बरे ।**
**सुरसिद्धमुनीन्द्राणामासीत् कुसुमवर्षिणाम् ॥ २७ ॥**

**पदार्थ–**
**अम्बरे** = आकाशमा
**कुसुमवर्षिणां** = पुष्पवृष्टि गरिरहेका
**सुरसिद्धमुनीन्द्राणां** = देवता, सिद्ध एवं ठुला-ठुला ऋषिहरूको
**जयशब्दः** = जय शब्द
**नमः शब्दः** = नमः शब्द र
**साधु साधु इति च** = साधु साधु आदि ध्वनि पनि
**आसीत्** = भयो

**वाक्यार्थ–** त्यसवेला आकाशबाट पुष्पवृष्टि गरिरहेका देवता, सिद्ध र ठुला-ठुला ऋषिमुनिहरूले बोलेका जय, नमः र साधु साधु जस्ता ध्वनिहरू गुन्जिन थाले।

**एवं निहत्य द्विविदं जगद्व्यतिकरावहम् ।**
**संस्तूयमानो भगवाञ्जनैः स्वपुरमाविशत् ॥ २८ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**जगद्व्यतिकरावहम्** = संसारलाई दुःख दिने
**द्विविदं** = द्विविदलाई
**निहत्य** = मारेर
**जनैः** = लोकवासीहरूद्वारा
**संस्तूयमानः** = स्तुति गरिनुभएका
**भगवान्** = भगवान् बलराम
**स्वपुरं** = आफ्नो द्वारका पुरीमा
**आविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** यसप्रकार संसारलाई दुःख दिने द्विविद बाँदरलाई मारेर लोकवासीहरूद्वारा स्तुति गरिनुभएका भगवान् बलराम आफ्नो नगर द्वारका पुरीमा फर्कनुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे**
**उत्तरार्धे द्विविदवधो नाम सप्तषष्टितमोऽध्यायः ॥ ६७ ॥**

# अथाष्टषष्टितमोऽध्यायः

## कौरवको गर्वभङ्ग र बलराम हस्तिनापुरलाई गङ्गाजीमा डुबाउन तयार हुनु

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**दुर्योधनसुतां राजन् लक्ष्मणां समितिंजयः।**

**स्वयंवरस्थामहरत् साम्बो जाम्बवतीसुतः॥ १॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**समितिंजयः** = युद्धविजयी
**जाम्बवतीसुतः** = जाम्बवतीपुत्र
**साम्बः** = साम्बले
**स्वयंवरस्थां** = स्वयंवर समारोहमा रहेकी
**दुर्योधनसुतां** = दुर्योधनकी छोरी
**लक्ष्मणां** = लक्ष्मणालाई
**अहरत्** = हरण गरे

**वाक्यार्थ–** हे राजा परीक्षित्! जाम्बवतीका छोरा युद्धविजयी साम्बले स्वयंवर समारोहमा आएकी दुर्योधनकी छोरी लक्ष्मणालाई हरण गरे।

**कौरवाः कुपिता ऊचुर्दुर्विनीतोऽयमर्भकः।**

**कदर्थीकृत्य नः कन्यामकामामहरद् बलात्॥ २॥**

**पदार्थ–**
**कुपिताः** = रिसाएका
**कौरवाः** = कौरवहरूले
**ऊचुः** = भने
**अयं** = यो
**दुर्विनीतः** = उद्दण्ड भएको
**अर्भकः** = बालकले
**नः** = हामीहरूलाई
**कदर्थीकृत्य** = तिरस्कार गरेर
**अकामां** = उसलाई नचाहने
**कन्यां** = हाम्री कन्यालाई
**बलात्** = जबर्जस्ती
**अहरत्** = अपहरण गऱ्यो

**वाक्यार्थ–** उद्दण्ड भएको यस बालकले हामीलाई तिरस्कार गरी उसलाई मन नपराउने हाम्री कन्यालाई जबर्जस्ती अपहरण गरेर लग्यो भनी रिसाएका कौरवहरू कुरा गर्न लागे।

**बध्नीतेमं दुर्विनीतं किं करिष्यन्ति वृष्णयः।**

**येऽस्मत्प्रसादोपचितां दत्तां नो भुञ्जते महीम्॥ ३॥**

**पदार्थ–**
**इमं** = यो
**दुर्विनीतं** = दुष्ट बालकलाई
**बध्नीत** = बाँधिदेऊ
**वृष्णयः** = यादवहरूले
**किं** = के नै
**करिष्यन्ति** = गर्न सक्छन् र
**ये** = जो
**अस्मत्प्रसादोपचितां** = हाम्रो कृपाले समृद्धशाली बनेकी
**नः** = हामीहरूद्वारा नै
**दत्तां** = दिइएकी

**महीम्** = पृथिवीलाई
**भुञ्जते** = भोग गर्दछन्

**वाक्यार्थ–** यस दुष्ट बालकलाई समातेर बाँधिहाल। यादवहरूले हाम्रो के नै बिगार गर्न सक्छन् र? जसले हामीले नै कृपा गरेर दिएको धनधान्यले समृद्ध हामीद्वारा नै दिइएको भूमिको भोग गरिरहेका छन्।

**निगृहीतं सुतं श्रुत्वा यद्येष्यन्तीह वृष्णयः।**
**भग्नदर्पाः शमं यान्ति प्राणा इव सुसंयताः॥ ४॥**

**पदार्थ–**
**यदि** = कथञ्चित्
**सुतं** = छोरो
**निगृहीतं** = बाँधिएको कुरा
**श्रुत्वा** = सुनेर
**वृष्णयः** = यादवहरू
**इह** = यहाँ
**एष्यन्ति** = आउँछन् (भने पनि, ती)
**सुसंयताः** = पूर्ण संयमले
**प्राणाः इव** = इन्द्रियहरू शान्त बने जैं
**भग्नदर्पाः** = घमन्ड नष्ट भएर
**शमं** = शान्त
**यान्ति** = हुनेछन्

**वाक्यार्थ–** कथञ्चित् आफ्नो छोरो बन्दी बनेको सुनेर रिसाएका यादवहरू यहाँ आए भने पनि शम, दम आदि उपायद्वारा इन्द्रिय शान्त भए जैं घमन्ड नष्ट भएका तिनीहरू शान्त हुनेछन्।

**इति कर्णः शलो भूरिर्यज्ञकेतुः सुयोधनः।**
**साम्बमारेभिरे बद्धुं कुरुवृद्धानुमोदिताः॥ ५॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**कुरुवृद्धानुमोदिताः** = कुरुवंशका बुढापाकाहरूबाट अनुमति पाएका
**कर्णः** = कर्ण
**शलः** = शल
**भूरिः** = भूरिश्रवा
**यज्ञकेतुः** = यज्ञकेतु र
**सुयोधनः** = सुयोधन (दुर्योधन)ले
**साम्बं** = साम्बलाई
**बद्धुं** = बन्दी बनाउन
**आरेभिरे** = सुरु गरे

**वाक्यार्थ–** यसप्रकार कुरुवंशका बुढापाकाहरूबाट अनुमति पाएका कर्ण, शल, भूरिश्रवा र दुर्योधन आदिले साम्बलाई बन्दी बनाउन सुरु गरे।

**दृष्ट्वानुधावतः साम्बो धार्तराष्ट्रान् महारथः।**
**प्रगृह्य रुचिरं चापं तस्थौ सिंह इवैकलः॥ ६॥**

**पदार्थ–**
**महारथः** = महारथी
**साम्बः** = साम्बले
**अनुधावतः** = आफ्नो पछि दौडिरहेका
**धार्तराष्ट्रान्** = धृतराष्ट्रका सेनाहरू
**दृष्ट्वा** = देखेर
**रुचिरं** = सुन्दर
**चापं** = धनु
**प्रगृह्य** = लिएर
**सिंहः इव** = सिंह जैं

| | | |
|---|---|---|
| **एकलः** = एक्लै | **तस्थौ** = (प्रतिकारका निम्ति) | तयार भए |

**वाक्यार्थ—** धृतराष्ट्रका छोराहरू आफ्नो पछि दौडिरहेको देखेका महारथी साम्ब हातमा सुन्दर धनु लिई प्रतिकारका लागि सिंह झैँ एक्लै तयार भए।

**तं ते जिघृक्षवः क्रुद्धास्तिष्ठ तिष्ठेति भाषिणः।**
**आसाद्य धन्विनो बाणैः कर्णाग्रण्यः समाकिरन्॥ ७॥**

| पदार्थ— | **भाषिणः** = भनिरहेका | **धन्विनः** = धनुर्धारी साम्बको |
|---|---|---|
| **तं** = ती साम्बलाई | **क्रुद्धाः** = अत्यन्त रिसाएका | **आसाद्य** = नजिक पुगेर |
| **जिघृक्षवः** = बन्दी बनाउन चाहने | **ते** = ती | **बाणैः** = बाणहरूको |
| **तिष्ठ तिष्ठ इति** = पर्खी पर्खी यस्तो | **कर्णाग्रण्यः** = कर्ण आदि कौरवहरूले | **समाकिरन्** = वर्षा गर्न लागे |

**वाक्यार्थ—** साम्बलाई बन्दी बनाउन चाहने अनि अत्यन्त रिसाउँदै पर्खी-पर्खी भन्दै गरेका कर्ण आदि कौरवहरूले धनुर्धारी साम्बको नजिकै पुगेर बाणको वर्षा गर्न लागे।

**सोऽपविद्धः कुरुश्रेष्ठ कुरुभिर्यदुनन्दनः।**
**नामृष्यत् तदचिन्त्यार्भः सिंह क्षुद्रमृगैरिव॥ ८॥**

| पदार्थ— | **अपविद्धः** = प्रहार गरिएका | (सहन गर्न नसके) झैँ |
|---|---|---|
| **कुरुश्रेष्ठ** = हे कुरुश्रेष्ठ परीक्षित् | **यदुनन्दनः** = यदुकुमार | **तत्** = कौरवहरूको त्यो प्रहारलाई |
| **अचिन्त्यार्भः** = कल्पना गर्नै नसकिने ऐश्वर्यशाली श्रीकृष्णका छोरा | **सः** = ती साम्बले | **नामृष्यत्** = सहन गर्न सकेनन् |
| **कुरुभिः** = कौरवहरूद्वारा | **क्षुद्रमृगैः** = अन्य साना पशुले गरेको तिरस्कार | |
| | **सिंहः इव** = पराक्रमी सिंहले | |

**वाक्यार्थ—** हे कुरुश्रेष्ठ परीक्षित् ! जसरी पराक्रमी सिंहले अन्य साना पशुको तिरस्कार सहन गर्न सक्दैन, त्यसै गरी कल्पनातीत ऐश्वर्यशाली श्रीकृष्णका पुत्र यदुकुमार साम्बले कौरवहरूको प्रहारलाई सहन गर्न सकेनन्।

**विस्फूर्ज्य रुचिरं चापं सर्वान् विव्याध सायकैः।**
**कर्णादीन् षड्रथान् वीरस्तावद्भिर्युगपत् पृथक्॥ ९॥**

| पदार्थ— | **चापं** = धनुलाई | आएका |
|---|---|---|
| **वीरः** = ती वीर साम्बले | **विस्फूर्ज्य** = टङ्कार गराएर | **कर्णादीन्** = कर्ण आदि |
| **रुचिरं** = सुन्दर | **षड्रथान्** = छ ओटा रथमा | **सर्वान्** = सबै वीरहरूलाई |

**तावद्भिः** = त्यति नै
**सायकैः** = बाणहरूले
**युगपत्** = एकै पटकमा
**पृथक्** = प्रत्येकलाई
**विव्याध** = घाइते बनाइदिए

**वाक्यार्थ–** ती वीर साम्बले पनि आफ्नो सुन्दर धनुको टङ्कार सुनाउँदै छ ओटा रथमा चढेर आएका कर्ण आदि वीरहरूमाथि एकैचोटि छ-छ ओटा बाण हानेर ती सबैलाई घाइते बनाइदिए।

**चतुर्भिश्चतुरो वाहानेकैकेन च सारथीन्।**
**रथिनश्च महेष्वासांस्तस्य तत् तेऽभ्यपूजयन्॥ १० ॥**

पदार्थ–
**चतुर्भिः** = चार ओटा बाणले
**चतुरः** = चार ओटा
**वाहान्** = घोडाहरूलाई
**एकैकेन** = एक-एक बाणले
**सारथीन् च** = सारथिहरू र
**महेष्वासान्** = महान् धनुर्धारी
**रथिनः च** = रथीहरूलाई पनि (प्रहार गरे)
**तस्य** = ती साम्बको
**तत्** = त्यो पराक्रमलाई
**ते** = ती कर्ण आदि वीरहरूले
**अभ्यपूजयन्** = प्रशंसा गर्न लागे

**वाक्यार्थ–** साम्बले प्रहार गरेका छ-छ ओटा बाणमध्ये चार-चार ओटाले चार-चार घोडालाई र एक-एक बाणले सारथि तथा बाँकी एक-एक बाणले महान् धनुर्धारी रथीहरूलाई प्रहार गरे। उनको यस्तो पराक्रमलाई कर्ण आदि वीरहरूले समेत प्रशंसा गर्न लागे।

**तं तु ते विरथं चक्रुश्चत्वारश्चतुरो हयान्।**
**एकस्तु सारथिं जघ्ने चिच्छेदान्यः शरासनम्॥ ११ ॥**

पदार्थ–
**ते** = ती कर्ण आदि वीरहरूले
**तं तु** = ती साम्बलाई
**विरथं** = रथहीन
**चक्रुः** = बनाइदिए
**चत्वारः** = चार वीरहरूले
**चतुरः** = चार ओटा
**हयान्** = घोडालाई
**एकः तु** = एउटाले
**सारथिं** = साम्बको सारथिलाई
**जघ्ने** = मारे
**अन्यः** = बाँकी अर्कोले
**शरासनं** = धनुलाई नै
**चिच्छेद** = काटिदिए

**वाक्यार्थ–** त्यसपछि ती छ जना कर्ण आदि वीरहरूले मिलेर साम्बलाई रथहीन बनाइदिए, जसमा चार वीरहरूले एक-एक बाणले उनका चार घोडालाई र एकले उनको सारथिलाई मारे भने अर्कोले उनको धनु काटिदिए।

**तं बद्ध्वा विरथीकृत्य कृच्छ्रेण कुरवो युधि।**
**कुमारं स्वस्य कन्यां च स्वपुरं जयिनोऽविशन्॥ १२ ॥**

पदार्थ–
**युधि** = युद्धमा
**तं** = ती साम्बलाई
**कृच्छ्रेण** = कष्टपूर्वक
**विरथीकृत्य** = रथहीन बनाएर
**बद्ध्वा** = बाँधेर

**जयिनः** = विजय प्राप्त गरेका
**कुरवः** = कौरवहरू
**कुमारं** = कुमार साम्बलाई र
**स्वस्य** = आफ्नी
**कन्यां च** = छोरीलाई समेत लिएर
**स्वपुरं** = आफ्नो नगर हस्तिनापुरमा
**अविशन्** = प्रवेश गरे

**वाक्यार्थ–** यसप्रकार कौरवहरूले ठुलो दुःखले साम्बलाई रथहीन बनाई बाँधे र विजयी भएका उनीहरू आफ्नी छोरीसहित साम्बलाई लिएर हस्तिनापुर प्रवेश गरे।

**तच्छ्रुत्वा नारदोक्तेन राजन् सञ्जातमन्यवः।**
**कुरून् प्रत्युद्यमं चक्रुरुग्रसेनप्रचोदिताः॥ १३॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**नारदोक्तेन** = नारदद्वारा बताइएको
**तत्** = त्यो साम्बको वृत्तान्त
**श्रुत्वा** = सुनेर
**सञ्जातमन्यवः** = क्रुद्ध भएका
**उग्रसेनप्रचोदिताः** = राजा उग्रसेनको आज्ञा पाएका यादवहरूले
**कुरून्** = कौरवहरूमाथि
**प्रत्युद्यमं** = प्रत्याक्रमण गर्ने योजना
**चक्रुः** = बनाए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! नारदले बताएको साम्बको वृत्तान्त सुनेर क्रुद्ध भएका यादवहरूले उग्रसेनको आज्ञा लिएर कौरवहरूमाथि प्रत्याक्रमण गर्ने योजना बनाए।

**सान्त्वयित्वा तु तान् रामः सन्नद्धान् वृष्णिपुङ्गवान्।**
**नैच्छत् कुरूणां वृष्णीनां कलिं कलिमलापहः॥ १४॥**
**जगाम हास्तिनपुरं रथेनादित्यवर्चसा।**
**ब्राह्मणैः कुलवृद्धैश्च वृतश्चन्द्र इव ग्रहैः॥ १५॥**

**पदार्थ–**
**कलिमलापहः** = कलिको दोषलाई नाश गर्ने
**रामः** = बलरामले
**कुरूणां** = कुरुवंशी र
**वृष्णीनां** = वृष्णिवंशीहरूका बिचको
**कलिं तु** = झगडा त
**न ऐच्छत्** = चाहनुभएन
**सन्नद्धान्** = युद्धका लागि तम्तयार भएका
**तान्** = ती
**वृष्णिपुङ्गवान्** = वीर यादवहरूलाई
**सान्त्वयित्वा** = सम्झाएर
**ग्रहैः** = ग्रहहरूले (घेरिएका)
**चन्द्रः इव** = चन्द्रमा झैं
**ब्राह्मणैः** = ब्राह्मणहरू र
**कुलवृद्धैः च** = कुलका प्रतिष्ठित व्यक्तिहरूले
**वृतः** = सहित भएर
**आदित्यवर्चसा** = सूर्यसमान तेजिलो
**रथेन** = रथमा चढेर
**हास्तिनपुरं** = हस्तिनापुरतर्फ
**जगाम** = प्रस्थान गर्नुभयो

**वाक्यार्थ–** कलिको दोषलाई नाश गर्ने बलरामलाई कुरुवंशी र यदुवंशीहरूका बिचको यो झगडा मन परेन र उहाँले युद्धका निम्ति तम्तयार भएका यादवहरूलाई सम्झाउनुभयो। त्यसपछि

ग्रहहरूले घेरिएका चन्द्रमा झैँ ब्राह्मण तथा यदुकुलका मान्यजनलाई साथमा लिएर सूर्यसमान तेजिलो रथमा चढेर बलराम हस्तिनापुर प्रस्थान गर्नुभयो।

**गत्वा गजाह्वयं रामो बाह्योपवनमास्थितः।**
**उद्धवं प्रेषयामास धृतराष्ट्रं बुभुत्सया॥ १६॥**

**पदार्थ—**
**गजाह्वयं** = हस्तिनापुरमा
**गत्वा** = गएर
**बाह्योपवनं** = शहर नजिकैको उद्यानमा
**आस्थितः** = बस्नुभएका
**रामः** = बलरामले
**बुभुत्सया** = कौरवहरूको हालखबर बुझ्नका निम्ति
**उद्धवं** = उद्धवलाई
**धृतराष्ट्रं** = धृतराष्ट्रकहाँ
**प्रेषयामास** = पठाउनुभयो

**वाक्यार्थ—** हस्तिनापुर पुगेर त्यहाँको एक उद्यानमा बस्नुभएका बलरामले कौरवहरूको हालखबर बुझ्नका निम्ति उद्धवलाई धृतराष्ट्रकहाँ पठाउनुभयो।

**सोऽभिवन्द्याम्बिकापुत्रं भीष्मं द्रोणं च बाह्लिकम्।**
**दुर्योधनं च विधिवद् राममागतमब्रवीत्॥ १७॥**

**पदार्थ—**
**सः च** = ती उद्धवले पनि
**अम्बिकापुत्रं** = अम्बिकापुत्र धृतराष्ट्रलाई
**भीष्मं** = भीष्मपितामहलाई
**द्रोणं** = द्रोणाचार्यलाई
**बाह्लिकं** = बाह्लिकलाई र
**दुर्योधनं च** = दुर्योधनलाई पनि
**विधिवत्** = मर्यादापूर्वक
**अभिवन्द्य** = अभिवादन गरेर
**आगतं** = हस्तिनापुरमा आउनुभएका
**रामं** = बलरामको खबर
**अब्रवीत्** = सुनाए

**वाक्यार्थ—** उद्धवले पनि कौरवको सभामा पुगी त्यहाँ उपस्थित अम्बिकापुत्र धृतराष्ट्र, भीष्मपितामह, द्रोणाचार्य, बाह्लिक र दुर्योधन आदिलाई मर्यादापूर्वक अभिवादन गरी बलराम हस्तिनापुरमा आउनुभएको खबर सुनाए।

**तेऽतिप्रीतास्तमाकर्ण्य प्राप्तं रामं सुहृत्तमम्।**
**तमर्चयित्वाभिययुः सर्वे मङ्गलपाणयः॥ १८॥**

**पदार्थ—**
**ते** = ती कौरवहरू
**सुहृत्तमं** = परम मित्र
**तं रामं** = ती बलराम
**प्राप्तं** = आएको कुरा
**आकर्ण्य** = सुनेर
**अतिप्रीताः** = अत्यन्त खुसी भए (र)
**तं** = ती उद्धवलाई
**अर्चयित्वा** = सत्कार गरेर
**मङ्गलपाणयः** = हात-हातमा माङ्गलिक सामग्री लिएका
**सर्वे** = सबै कौरवहरू
**अभिययुः** = (बलरामको स्वागतका निम्ति) आए

**वाक्यार्थ—** आफ्ना परम मित्र बलराम आएको खबर सुन्दा अत्यन्त खुसी भएका कौरवहरूले

खबर सुनाउने उद्धवको सत्कार गरे। त्यसपछि हात-हातमा माङ्गलिक सामग्री लिएर उनीहरू स्वागतका निम्ति उद्यानमा पुगे।

**तं सङ्गम्य यथान्यायं गामर्घ्यं च न्यवेदयन्।**

**तेषां ये तत्प्रभावज्ञाः प्रणेमुः शिरसा बलम्॥ १९॥**

**पदार्थ–**

**यथान्यायं** = मर्यादा अनुसार
**तं** = ती बलरामसँग
**सङ्गम्य** = भेटघाट गरेर
**गां** = (स्वागतका निम्ति) गाई
**अर्घ्यं च** = अर्घ्य आदि पूजा सामग्री
**न्यवेदयन्** = अर्पण गरे
**तेषां** = तीमध्ये
**ये** = जो
**तत्प्रभावज्ञाः** = उहाँको प्रभावलाई जान्दथे, तिनीहरूले
**बलं** = बलरामलाई
**शिरसा** = शिर झुकाएर
**प्रणेमुः** = प्रणाम गरे

**वाक्यार्थ–** मर्यादा अनुसार बलरामसित भेट गरेका कौरवहरूले सत्कारका निम्ति उहाँलाई गाई तथा अर्घ्य समर्पण गरे। तिनीहरूमध्ये जो बलरामको महिमालाई जान्दथे तिनीहरूले शिर झुकाएर उहाँलाई प्रणाम गरे।

**बन्धून् कुशलिनः श्रुत्वा पृष्ट्वा शिवमनामयम्।**

**परस्परमथो रामो बभाषेऽविक्लवं वचः॥ २०॥**

**पदार्थ–**

**अथ** = त्यसपछि
**परस्परं** = एक-आपसमा
**शिवं** = कुशल
**अनामयं** = मङ्गल
**पृष्ट्वा** = सोधेर (तथा)
**बन्धून्** = सम्पूर्ण बन्धुबान्धवहरू
**कुशलिनः** = सकुशल रहेको
**श्रुत्वा** = सुनेर
**रामः** = बलरामले
**अविक्लवं** = धैर्यपूर्वक
**वचः बभाषे** = कुरा गर्नुभयो

**वाक्यार्थ–** यसरी परस्परमा कुशल मङ्गल प्रश्न सोध्ने तथा सम्पूर्ण बन्धुबान्धवहरू सकुशल रहेको जानकारी लिने क्रम सकिएपछि बलरामले धैर्यपूर्वक यस्तो कुरा गर्नुभयो।

**उग्रसेनः क्षितीशेशो यद् व आज्ञापयत् प्रभुः।**

**तदव्यग्रधियः श्रुत्वा कुरुध्वं मा विलम्बितम्॥ २१॥**

**पदार्थ–**

**प्रभुः** = शक्तिशाली
**क्षितीशेशः** = महाराजाधिराज
**उग्रसेनः** = उग्रसेनले
**वः** = तिमीहरूलाई
**यत्** = जे
**आज्ञापयत्** = भन्नुभएको छ
**तत्** = त्यसलाई
**अव्यग्रधियः** = एकाग्रतापूर्वक
**श्रुत्वा** = सुनेर
**विलम्बितम् मा** = ढिलो नगर
**कुरुध्वम्** = पालना गर

**वाक्यार्थ–** शक्तिशाली महाराजाधिराज उग्रसेनले तिमीहरूलाई जे आज्ञा दिनुभएको छ, त्यसलाई ध्यानपूर्वक सुन र ढिलो नगरी पालना गर।

**यद् यूयं बहवस्त्वेकं जित्वाधर्मेण धार्मिकम् ।**

**अबध्नीताथ तन्मृष्ये बन्धूनामैक्यकाम्यया ॥ २२ ॥**

**पदार्थ–**
**यत्** = जो
**यूयं** = तिमीहरू
**बहवः तु** = धैरै जना मिलेर
**अधर्मेण** = अधर्मपूर्वक
**एकं** = एक्लो
**धार्मिकं** = धर्मानुयायी साम्बलाई
**जित्वा** = जितेर
**अबध्नीत** = बन्दी बनाएका छौ
**अथ** = तर पनि
**तत्** = तिमीहरूको त्यो दुष्ट कर्मलाई
**बन्धूनां** = बान्धवहरूका बिचको
**ऐक्यकाम्यया** = एकता चाहेर
**मृष्ये** = मैले सहन गरेको छु

**वाक्यार्थ–** यद्यपि तिमीहरूले धैरै जना मिलेर अधर्मपूर्वक धर्मानुयायी साम्बलाई जिती बन्दी बनाएका छौ, तापनि तिमीहरूको त्यो दुष्ट कर्मलाई बान्धवहरूका बिचको एकता चाहने मैले सहन गरेको छु। (अतः नववधू सहित साम्बलाई छिट्टै मुक्त गरी पठाइदेओ)।

**वीर्यशौर्यबलोन्नद्धमात्मशक्तिसमं वचः ।**

**कुरवो बलदेवस्य निशम्योचुः प्रकोपिताः ॥ २३ ॥**

**पदार्थ–**
**वीर्यशौर्यबलोन्नद्धं** = वीरता, शूरता र बलले भरिपूर्ण भएका
**आत्मशक्तिसमं** = आफूसमान पराक्रमी
**बलदेवस्य** = बलरामका
**वचः** = कुरा
**निशम्य** = सुनेर
**प्रकोपिताः** = रिसाएका
**कुरवः** = कौरवहरूले
**ऊचुः** = भन्न लागे

**वाक्यार्थ–** वीरता, शूरता र बलले भरिपूर्ण तथा आफूसमान शक्तिशाली बलरामका कुरा सुनेर अत्यन्त रिसाएका कौरवहरूले यसो भन्न लागे।

**अहो महच्चित्रमिदं कालगत्या दुरत्यया ।**

**आरुरुक्षत्युपानद् वै शिरो मुकुटसेवितम् ॥ २४ ॥**

**पदार्थ–**
**अहो** = अहो
**इदं** = यो
**महत्** = ठुलो
**चित्रं** = आश्चर्यको कुरा
**कालगत्या** = कालको गति
**दुरत्यया** = बुझ्न ज्यादै गाह्रो छ
**वै** = किनभने
**उपानत्** = खुट्टामा लगाउने जुत्ता
**मुकुटसेवितं** = मुकुटले सुशोभित
**शिरः** = शिरमा
**आरुरुक्षति** = चढ्न खोजिरहेछ

**वाक्यार्थ–** अहो ! यो त अति आश्चर्यको कुरा हो। वास्तवमा कालको गति बुझ्न ज्यादै गाह्रो छ, त्यसैले त खुट्टामा लगाउने जुत्ता पनि मुकुट लगाउने शिरमा चढ्न खोजिरहेको छ।

**एते यौनेन सम्बद्धाः सहशय्यासनाशनाः ।**

**वृष्णयस्तुल्यतां नीता अस्मद्दत्तनृपासनाः ॥ २५ ॥**

**पदार्थ—**
**एते** = यी
**वृष्णयः** = यदुवंशीहरू
**यौनेन** = वैवाहिक सम्बन्धले
**सम्बद्धाः** = सम्बन्धी बनेर
**सहशय्यासनाशनाः** = हामीसँगै सुत्ने, बस्ने र खाने भएका र
**अस्मद्दत्तनृपासनाः** = हामीहरूले नै राज्यसिंहासन दिएर
**तुल्यतां** = हाम्रै बराबरी
**नीताः** = बनाइएका हुन्

**वाक्यार्थ—** यी यदुवंशीहरू (कुन्तीसँगको) वैवाहिक सम्बन्धले गर्दा हाम्रा सम्बन्धी भई हामीसँग सुत्ने, बस्ने, उठ्ने र खाने गर्न लागेका छन्। हामीहरूले नै यिनीहरूलाई राज्यसिंहासन दिएर आफूसमान बनाएका हौँ।

**चामरव्यजने शङ्खमातपत्रं च पाण्डुरम्।**
**किरीटमासनं शय्यां भुञ्जन्त्यस्मदुपेक्षया॥ २६॥**

**पदार्थ—**
**चामरव्यजने** = यी चामरपङ्खा
**शङ्खं** = शङ्ख
**पाण्डुरं** = सेतो
**आतपत्रं** = छाता
**किरीटं** = मुकुट
**आसनं** = सिंहासन
**शय्यां च** = राजशय्या आदि राजकीय वस्तु
**अस्मत्** = हामीहरूको
**उपेक्षया** = बेवास्ताका कारण
**भुञ्जन्ति** = उपभोग गरिरहेका छन्

**वाक्यार्थ—** हामीहरूले वास्ता नगरिदिएकाले नै यी यादवहरूले चामर, पङ्खा, शङ्ख, सेतो छाता, मुकुट, राजसिंहासन एवं राजोचित शय्याको उपभोग गर्न पाएका छन्।

**अलं यदूनां नरदेवलाञ्छनैर्दातुः प्रतीपैः फणिनामिवामृतम्।**
**येऽस्मत्प्रसादोपचिता हि यादवा आज्ञापयन्त्यद्य गतत्रपा बत॥ २७॥**

**पदार्थ—**
**फणिनां** = सर्पलाई
**अमृतं इव** = दुध खुवाए झैँ
**दातुः** = आफ्नो दाताको नै
**प्रतीपैः** = विरोधी
**यदूनां** = यादवहरूलाई
**नरदेवलाञ्छनैः** = राजकीय चिह्नहरूको उपभोगले
**अलं** = पुग्यो
**बत** = दुःखको कुरा
**ये** = जो
**अस्मत्प्रसादोपचिताः हि** = हाम्रै कृपाले सम्पन्न बनेका
**यादवाः** = यादवहरू थिए, तिनीहरू
**अद्य** = आज
**गतत्रपाः** = निर्लज्ज भएर
**आज्ञापयन्ति** = हामीलाई आज्ञा दिन लागेका छन्

**वाक्यार्थ—** सर्पलाई दुध खुवाउँदा खुवाउनेको नै हानी भए झैँ हामीले दिएका राजचिह्नहरू लिएर यी यादवहरू हाम्रै विरोधी भएका छन्। अतः अब यिनीहरूलाई राजचिह्न दिनु हुँदैन। दुःखको कुरा, हाम्रै कृपाले यस्तो सम्पन्न अवस्थामा पुगेका यादवहरू अहिले निर्लज्ज बनेर हामीलाई आज्ञा दिन थालेका छन्।

**कथमिन्द्रोऽपि कुरुभिर्भीष्मद्रोणार्जुनादिभिः।**
**अदत्तमवरुन्धीत सिंहग्रस्तमिवोरणः॥ २८॥**

**पदार्थ—**
**सिंहग्रस्तं** = सिंहले लिएको भाग
**उरणः इव** = भेडाले (खोस्न नसके) झैँ
**भीष्मद्रोणार्जुनादिभिः** = भीष्म, द्रोण र अर्जुन आदि
**कुरुभिः** = कुरुवंशीहरूले
**अदत्तं** = नदिएको कुरा
**इन्द्रः अपि** = इन्द्रले पनि
**कथं** = कसरी
**अवरुन्धीत** = उपभोग गर्न सक्छन् र

**वाक्यार्थ—** जसरी सिंहले लिएको भागलाई कुनै भेडाले खोस्न सक्दैन, त्यसै गरी भीष्म, द्रोण र अर्जुन आदि कौरवहरूले नदिएको कुनै वस्तु इन्द्रले पनि कसरी उपभोग गर्न सक्छन् र ?

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**जन्मबन्धुश्रियोन्नद्धमदास्ते भरतर्षभ।**
**आश्राव्य रामं दुर्वाच्यमसभ्याः पुरमाविशन्॥ २९॥**

**पदार्थ—**
**भरतर्षभ** = हे राजा परीक्षित्
**जन्मबन्धुश्रिया** = आफ्नो कुल, बन्धुबान्धव र सम्पत्तिले
**उन्नद्धमदाः** = उन्मत्त भएका
**असभ्याः** = अशिष्ट
**ते** = ती कौरवहरूले
**रामं** = बलरामलाई
**दुर्वाच्यं** = दुर्वचन
**आश्राव्य** = सुनाएर
**पुरं** = हस्तिनापुरमा
**आविशन्** = प्रवेश गरे

**वाक्यार्थ—** हे राजा परीक्षित् ! त्यसपछि ती कुल, बन्धुबान्धव र सम्पत्तिको घमन्डले उन्मत्त भएका अशिष्ट कौरवहरू बलरामलाई दुर्वचनहरू सुनाएर आफ्नो हस्तिनापुर नगरमा प्रवेश गरे।

**दृष्ट्वा कुरूणां दौःशील्यं श्रुत्वावाच्यानि चाच्युतः।**
**अवोचत् कोपसंरब्धो दुष्प्रेक्ष्यः प्रहसन् मुहुः॥ ३०॥**

**पदार्थ—**
**कुरूणां** = कौरवहरूको
**दौःशील्यं** = उद्दण्डता
**दृष्ट्वा** = देखेर
**अवाच्यानि** = दुर्वचनहरू
**श्रुत्वा च** = सुनेर पनि
**कोपसंरब्धः** = रिसले चुर हुनुभएकाले
**दुष्प्रेक्ष्यः** = हेर्नै नसकिने
**अच्युतः** = बलरामले
**मुहुः** = बारम्बार
**प्रहसन्** = हाँस्दै
**अवोचत्** = भन्न लाग्नुभयो

**वाक्यार्थ—** कौरवहरूको त्यसप्रकारको उद्दण्डता देखेर तथा उनीहरूका दुर्वचनहरू सुनेर अत्यन्त रिसाएका कारण हेर्नै नसकिने भएका बलरामले बारम्बार हाँस्दै यसो भन्नुभयो।

**नूनं नानामदोन्नद्धाः शान्तिं नेच्छन्त्यसाधवः।**
**तेषां हि प्रशमो दण्डः पशूनां लगुडो यथा॥ ३१॥**

**पदार्थ—**
**नूनं** = निश्चय नै
**नानामदोन्नद्धाः** = अनेक किसिमका घमन्डले उन्मत्त बनेका
**असाधवः** = दुष्टहरू
**शान्तिं** = शान्तिलाई
**न इच्छन्ति** = चाहँदैनन्
**हि** = किनभने
**यथा** = जसरी
**पशूनां** = पशुहरूलाई
**लगुडः** = लट्ठी मात्र उपाय हुन्छ
(त्यसै गरी)
**तेषां** = ती दुर्जनहरूलाई
**प्रशमः** = शान्त गर्ने उपाय
**दण्डः** = दण्ड नै हो

**वाक्यार्थ—** जसरी पशुहरूलाई तह लगाउन लट्ठी नै आवश्यक हुन्छ त्यसै गरी अनेक किसिमका घमन्डले उन्मत्त भएका दुर्जनहरूलाई शान्त पार्नका निम्ति दण्ड नै चाहिन्छ, किनभने तिनीहरू शान्ति चाहँदैनन्।

**अहो यदून् सुसंरब्धान् कृष्णं च कुपितं शनैः।**
**सान्त्वयित्वाहमेतेषां शममिच्छन्निहागतः॥ ३२॥**

**पदार्थ—**
**अहो** = खेदको कुरा
**सुसंरब्धान्** = युद्धका निम्ति तम्तयार
**यदून्** = यादवहरूलाई
**कुपितं** = क्रुद्ध भएका
**कृष्णं च** = श्रीकृष्णलाई पनि
**शनैः** = बिस्तारै
**सान्त्वयित्वा** = सम्झाएर
**अहं** = म
**एतेषां** = यी कौरवहरूको
**शमं** = कल्याण
**इच्छन्** = चाहँदै
**इह** = यस हस्तिनापुरमा
**आगतः** = आएको छु

**वाक्यार्थ—** अहो ! दुःखको कुरा, यिनीहरूकै कल्याणका निम्ति अत्यन्त रिसाएका श्रीकृष्ण र युद्धका निम्ति तम्तयार यादवहरूलाई बिस्तारै सम्झाएर म यहाँ आएको छु।

**त इमे मन्दमतयः कलहाभिरताः खलाः।**
**तं मामवज्ञाय मुहुर्दुर्भाषान् मानिनोऽब्रुवन्॥ ३३॥**

**पदार्थ—**
**ते इमे** = ती यी
**मन्दमतयः** = बुद्धि मन्द भएका
**कलहाभिरताः** = झगडा मन पराउने
**मानिनः** = अहङ्कारी
**खलाः** = दुष्टहरूले
**तं मां** = त्यस्तो मलाई
**अवज्ञाय** = तिरस्कार गरेर
**मुहुः** = बारम्बार
**दुर्भाषान्** = दुर्वचनहरू
**अब्रुवन्** = बोले

**वाक्यार्थ—** तापनि बुद्धि नभएका झगडा मात्र मन पराउने यी अहङ्कारी दुष्ट कौरवहरूले मलाई नै तिरस्कार गर्दै बारम्बार दुर्वचनहरू बोले।

**नोग्रसेनः किल विभुर्भोजवृष्ण्यन्धकेश्वरः ।**
**शक्रादयो लोकपाला यस्यादेशानुवर्तिनः ॥ ३४ ॥**

**पदार्थ—**
**शक्रादयः** = इन्द्र आदि
**लोकपालाः** = लोकपालहरू
**यस्य** = जसको
**आदेशानुवर्तिनः** = आज्ञाको पालना गर्दछन्, त्यस्ता
**उग्रसेनः** = उग्रसेन
**किल** = निश्चय नै
**न विभुः** = राजा मात्र होइनन् (उनी त)
**भोजवृष्ण्यन्धकेश्वरः** = राजा भोज, वृष्णि र अन्धकवंशी यादवहरूका मालिक पनि हुन्

**वाक्यार्थ—** इन्द्र आदि लोकपालहरू पनि जसको आज्ञाको पालना गर्दछन्, त्यस्ता महाराज उग्रसेन केवल राजा मात्र होइनन्, उनी त राजा भोज, वृष्णि र यादवहरूका मालिक समेत हुन्।

**सुधर्माक्रम्यते येन पारिजातोऽमराङ्घ्रिपः ।**
**आनीय भुज्यते सोऽसौ न किलाध्यासनार्हणः ॥ ३५ ॥**

**पदार्थ—**
**येन** = जसद्वारा
**सुधर्मा** = देवसभामा
**आक्रम्यते** = आक्रमण गरिन्छ (अनि)
**अमराङ्घ्रिपः** = देववृक्ष
**पारिजातः** = पारिजात
**आनीय** = पृथिवीमा ल्याएर
**भुज्यते** = भोग गरिन्छ
**सः असौ** = त्यस्ता श्रीकृष्ण पनि
**अध्यासनार्हणः** = राजसिंहासनका अधिकारी
**न किल** = हुनुभएन

**वाक्यार्थ—** जसले देवसभामा नै आक्रमण गर्नुभयो र त्यहाँबाट पारिजातलाई पृथिवीमा ल्याएर भोग गर्नुभयो, त्यस्ता श्रीकृष्ण स्वयं त राजसिंहासनका योग्य अधिकारी हुन खोज्नुभएन ?

**यस्य पादयुगं साक्षाच्छ्रीरुपास्तेऽखिलेश्वरी ।**
**स नार्हति किल श्रीशो नरदेवपरिच्छदान् ॥ ३६ ॥**

**पदार्थ—**
**यस्य** = जसका
**पादयुगं** = चरणयुगललाई
**अखिलेश्वरी** = संसारकी मालिक्नी
**साक्षात्** = प्रत्यक्ष
**श्रीः** = लक्ष्मीले
**उपास्ते** = उपासना गर्छिन्
**सः** = ती
**श्रीशः** = लक्ष्मीका स्वामी श्रीकृष्णले
**नरदेवपरिच्छदान्** = राजचिह्नहरू
**न अर्हति किल** = राख्न सक्नुहुन्नथ्यो र ?

**वाक्यार्थ—** जसका चरणकमललाई संसारकी मालिक्नी साक्षात् लक्ष्मीले सेवा गर्छिन्, त्यस्ता लक्ष्मीपति श्रीकृष्णले छत्र, चामर आदि राजचिह्नहरू धारण गर्न सक्नुहुन्नथ्यो र ?

**यस्याङ्घ्रिपङ्कजरजोऽखिललोकपालै-**
**मौंल्युत्तमैर्धृतमुपासिततीर्थतीर्थम् ।**
**ब्रह्मा भवोऽहमपि यस्य कलाः कलायाः**
**श्रीश्चोद्वहेम चिरमस्य नृपासनं क्व ॥ ३७ ॥**

**पदार्थ–**
**अखिललोकपालैः** = सम्पूर्ण लोकपालहरूद्वारा
**मौल्युत्तमैः** = सुन्दर मुकुटमा
**धृतं** = धारण गरिएको
**यस्य** = जसको
**अङ्घ्रिपङ्कजरजः** = चरणकमलको धुलोले
**उपासिततीर्थतीर्थम्** = सज्जनहरूले सेवा गरिएको तीर्थलाई (पनि पवित्र पारिदिन्छ र जुन धुलोलाई)
**यस्य** = जुन भगवान्का
**कलायाः** = अंशका
**कलाः** = अंशावतार
**ब्रह्मा** = ब्रह्माजी
**भवः** = शङ्करजी
**श्रीः** = लक्ष्मीजी
**अहं अपि च** = म सङ्कर्षण समेतले पनि
**चिरं** = लामो समयसम्म
**उद्वहेम** = धारण गर्दछौं
**अस्य** = यस्ता भगवान्का निम्ति
**नृपासनं** = राजसिंहासन
**क्व** = कहाँको तुच्छ कुरा

**वाक्यार्थ–** जसका चरणकमलको धुलोलाई सम्पूर्ण लोकपालहरूले आफ्नो सुन्दर मुकुटमा धारण गर्दछन् र जुन धुलोले सज्जनहरूले सेवा गरेर पवित्र भएका तीर्थलाई पनि पवित्र पार्दछ अनि जसको चरणको धुलोलाई उहाँका अंशावतार ब्रह्माजी, शङ्करजी, लक्ष्मीजी र म स्वयं लामो समयसम्म धारण गरिरहन्छु, त्यस्ता भगवान्का लागि राजसिंहासन के नै हो र ? (त्यो त अति तुच्छ कुरा हो ।)

**भुञ्जते कुरुभिर्दत्तं भूखण्डं वृष्णयः किल ।**
**उपानहः किल वयं स्वयं तु कुरवः शिरः ॥ ३८ ॥**

**पदार्थ–**
**वृष्णयः** = यादवहरू
**कुरुभिः** = कौरवहरूद्वारा
**दत्तं** = दिइएको
**भूखण्डं** = राज्य
**भुञ्जते** = भोग गर्दछन् (त्यसैले)
**किल** = यस्तो पो हो
**वयं** = हामीहरू
**उपानहः** = जुत्ता हौं
**कुरवः तु** = कौरवहरू
**स्वयं** = आफैँ
**शिरः** = शिर हुन्
**किल** = यस्तो पो हो रे !

**वाक्यार्थ–** ओहो ! यादवहरूले कौरवहरूले कृपा गरेर दिएको राज्यको भोग गरेको हो रे ! त्यसैले हामीहरू त केवल जुत्ता हौं, कौरवहरू चाहिँ शिर भएका हुन् रे !

**अहो ऐश्वर्यमत्तानां मत्तानामिव मानिनाम् ।**
**असम्बद्धा गिरो रुक्षाः कः सहेतानुशासिता ॥ ३९ ॥**

**पदार्थ–**
**अहो** = अहो
**ऐश्वर्यमत्तानां** = सम्पत्तिले मात्तिएका
**मत्तानां इव** = पागल जस्ता
**मानिनां** = अहङ्कारी कौरवहरूको
**असम्बद्धाः** = अप्रासङ्गिक
**रुक्षाः** = रुखो
**गिरः** = भनाइलाई
**कः** = कुन
**अनुशासिता** = शासकले
**सहेत** = सहन गर्न सक्छ र

**वाक्यार्थ–** अहो ! सम्पत्तिले उन्मत्त तथा पागल जस्ता भएका अहङ्कारी कौरवहरूका अप्रासङ्गिक रुखो भनाइलाई कुन चाहिँ शासकले सहन गर्न सक्ला र ?

**अद्य निष्कौरवीं पृथ्वीं करिष्यामीत्यमर्षितः ।**
**गृहीत्वा हलमुत्तस्थौ दहन्निव जगत्त्रयम् ॥ ४० ॥**

**पदार्थ–**
**अद्य** = आज
**पृथ्वीं** = पृथिवीलाई
**निष्कौरवीं** = कौरवरहित
**करिष्यामि** = बनाउँछु
**इति** = यस्तो भन्दै
**अमर्षितः** = अत्यन्त रिसाउनुभएका बलरामले
**हलं** = हलो
**गृहीत्वा** = समातेर
**जगत्त्रयं** = तीनै लोकलाई
**दहन् इव** = डढाउन लागे झैं गरी
**उत्तस्थौ** = उठ्नुभयो

**वाक्यार्थ–** आज म पृथिवीलाई कौरवहीन बनाउँछु भन्दै अत्यन्त रिसाउनुभएका बलराम हातमा हलो लिएर तीनै लोकलाई डढाउनै लागे झैं गरी खडा हुनुभयो।

**लाङ्गलाग्रेण नगरमुद्विदार्य गजाह्वयम् ।**
**विचकर्ष स गङ्गायां प्रहरिष्यन्नमर्षितः ॥ ४१ ॥**

**पदार्थ–**
**अमर्षितः** = अत्यन्त रिसाउनुभएका
**सः** = ती बलरामले
**लाङ्गलाग्रेण** = हलोको टुप्पोले
**गजाह्वयं**= हस्तिनापुर नाम गरेको
**नगरं** = सहरलाई
**प्रहरिष्यन्** = प्रहार गर्दै
**उद्विदार्य** = भत्काएर
**गङ्गायां** = गङ्गामा डुबाउनका लागि
**विचकर्ष** = तान्न लाग्नुभयो

**वाक्यार्थ–** यसरी अत्यन्त रिसाउनुभएका बलरामले हलोको टुप्पोको प्रहारले हस्तिनापुर सहरलाई ध्वस्त पारी पानीमा डुबाइदिनका निम्ति गङ्गातिर तान्न लाग्नुभयो।

**जलयानमिवाघूर्णं गङ्गायां नगरं पतत् ।**
**आकृष्यमाणमालोक्य कौरवाः जातसम्भ्रमाः ॥ ४२ ॥**

**पदार्थ–**
**अघूर्णं** = पानीमा डगमगाइरहेको
**जलयानं इव** = डुङ्गा झैं
**आकृष्यमाणं** = (बलरामद्वारा) तानिइरहेको
**नगरं** = हस्तिनापुर नगर
**गङ्गायां** = गङ्गामा
**पतत्** = खस्न लागेको
**आलोक्य** = देखेर
**कौरवाः** = कौरवहरू
**जातसम्भ्रमाः** = हड्बडाउन लागे

**वाक्यार्थ–** बलरामद्वारा तानिएको हस्तिनापुर नगर पानीमा डगमगाउँदै गरेको डुङ्गा जस्तै गङ्गामा खस्न लागेको देखेर कौरवहरू आत्तिए।

**तमेव शरणं जग्मुः सकुटुम्बा जिजीविषवः।**

**सलक्ष्मणं पुरस्कृत्य साम्बं प्राञ्जलयः प्रभुम्॥ ४३॥**

| पदार्थ– | **सलक्ष्मणं** = लक्ष्मणाले सहित | **तम् एव** = तिनै |
|---|---|---|
| **जिजीविषवः** = बाँच्न चाहने | **साम्बं** = साम्बलाई | **प्रभुं** = प्रभु बलरामको |
| **सकुटुम्बाः** = बन्धुबान्धवहरूले | **पुरस्कृत्य** = अघि लगाएर | **शरणं** = शरणमा |
| सहित भएका कौरवहरू | **प्राञ्जलयः** = हात जोड्दै | **जग्मुः** = गए |

**वाक्यार्थ–** त्यसपछि बन्धुबान्धवले सहित भएका कौरवहरू ज्यान जोगाउनका निम्ति लक्ष्मणा र साम्बलाई अघि लगाएर हात जोड्दै भगवान् बलरामको शरणमा गए।

**राम रामाखिलाधार प्रभावं न विदाम ते।**

**मूढानां नः कुबुद्धीनां क्षन्तुमर्हस्यतिक्रमम्॥ ४४॥**

| पदार्थ– | **प्रभावं** = प्रभावलाई | **अतिक्रमं** = अपराध |
|---|---|---|
| **राम राम** = हे राम हे राम | **न विदामः** = बुझ्न सकेनौँ | **क्षन्तुं** = क्षमा गर्न |
| **अखिलाधार** = हे संसारका | **कुबुद्धीनां** = खराब बुद्धि भएका | **अर्हसि** = योग्य हुनुहुन्छ |
| आधार | **मूढानां** = मूर्ख | |
| **ते** = हजुरको | **नः** = हामीहरूको | |

**वाक्यार्थ–** हे राम ! हे राम ! हे संसारका आधार ! हामीलाई हजुरको प्रभाव थाहा भएन। खराब बुद्धि भएका मूर्ख हामीहरूको अपराध कृपया क्षमा गरिदिनुहोस्।

**स्थित्युत्पत्त्यप्ययानां त्वमेको हेतुर्निराश्रयः।**

**लोकान् क्रीडनकानीश क्रीडतस्ते वदन्ति हि॥ ४५॥**

| पदार्थ– | **एकः** = एक मात्र | **क्रीडतः** = लीला गर्ने |
|---|---|---|
| **त्वं** = हजुर | **हेतुः** = कारण हुनुहुन्छ | **ते** = हजुरका |
| **निराश्रयः** = अर्को आश्रयविना नै | **हि** = त्यसैले | **क्रीडनकान्** = खेलौना हुन् (भनेर |
| **स्थित्युत्पत्त्यप्ययानां** = स्थिति, | **ईश** = हे प्रभु | विज्ञहरू) |
| उत्पत्ति र प्रलयका | **लोकान्** = यी लोकहरूलाई | **वदन्ति** = भन्छन् |

**वाक्यार्थ–** हे भगवान् ! हजुर जगत्को स्थिति, उत्पत्ति र प्रलयका एक मात्र कारण हुनुहुन्छ, त्यसैले हे प्रभु ! विद्वान्हरू यी सम्पूर्ण लोकहरू लीला गर्ने हजुरका खेल्ने सामग्री हुन् भन्दछन्।

**त्वमेव मूर्ध्नीदमनन्त लीलया भूमण्डलं बिभर्षि सहस्रमूर्धन्।**
**अन्ते च यः स्वात्मनि रुद्धविश्वः शेषेऽद्वितीयः परिशिष्यमाणः॥ ४६॥**

**पदार्थ—**
**अनन्त** = हे सर्वव्यापक भगवान्
**सहस्रमूर्धन्** = हे हजार शिर भएका प्रभु
**त्वम् एव** = हजुरले नै
**इदं** = यो
**भूमण्डलं** = भूमण्डललाई
**लीलया** = ख्याल ख्यालमै
**मूर्ध्नि** = आफ्नो शिरमा
**बिभर्षि** = धारण गर्नुहुन्छ
**अन्ते च** = प्रलयकालमा
**यः** = जुन हजुर
**स्वात्मनिरुद्धविश्वः** = आफूमा विश्वलाई लीन गरेर
**अद्वितीयः** = एक मात्र
**परिशिष्यमाणः** = बाँकी रहेर
**शेषे** = शयन गर्नुहुन्छ

**वाक्यार्थ—** हे हजार शिर भएका अनन्त भगवान्! हजुरले ख्याल-ख्यालमैं सारा भूमण्डललाई आफ्नो शिरमा धारण गर्नुहुन्छ र प्रलय कालमा हजुर नै यी सबैलाई आफैँमा समेटी एक मात्र बाँकी रहेर शयन गर्नुहुन्छ।

**कोपस्तेऽखिलशिक्षार्थं न द्वेषान्न च मत्सरात्।**
**बिभ्रतो भगवन् सत्त्वं स्थितिपालनतत्परः॥ ४७॥**

**पदार्थ—**
**भगवन्** = हे ईश्वर
**स्थितिपालनतत्परः** = संसारको स्थिति र पालनका निम्ति तत्पर
**सत्त्वं** = सत्त्वगुणमय शरीर
**बिभ्रतः** = धारण गर्नुभएका
**ते** = हजुरको
**कोपः** = क्रोध
**अखिलशिक्षार्थं** = सम्पूर्ण प्राणीलाई सन्मार्गमा प्रेरित गर्नका लागि हो
**द्वेषात् न** = शत्रुताका निम्ति होइन
**न च मत्सरात्** = न त कुटिलताका कारण नै हो

**वाक्यार्थ—** हे भगवान्! हजुरले संसारको स्थिति र पालनका निम्ति सत्त्वगुणी शरीरलाई धारण गर्नुभएको छ। अतः हजुरको यो क्रोध पनि सम्पूर्ण प्राणीलाई शिक्षा दिनकै निम्ति हो, यो शत्रुता र कुटिलताका निम्ति होइन।

**नमस्ते सर्वभूतात्मन् सर्वशक्तिधराव्यय।**
**विश्वकर्मन् नमस्तेऽस्तु त्वां वयं शरणं गताः॥ ४८॥**

**पदार्थ—**
**सर्वभूतात्मन्** = हे सम्पूर्ण प्राणीका आत्मस्वरूप
**सर्वशक्तिधर** = हे सम्पूर्ण शक्तिलाई धारण गर्ने
**अव्यय** = हे अविनाशी भगवान्
**ते** = हजुरलाई
**नमः** = नमस्कार छ
**विश्वकर्मन्** = हे संसारका स्रष्टा भगवान्
**ते** = हजुरलाई
**नमः अस्तु** = नमस्कार छ
**वयं** = हामीहरू
**त्वां** = हजुरकै
**शरणं** = शरणमा
**गताः** = परेका छौँ

**वाक्यार्थ–** हे सम्पूर्ण प्राणीहरूका आत्मस्वरूप सर्वशक्तिधर अविनाशी भगवान् ! हजुरलाई नमस्कार छ। हे संसारका स्रष्टा भगवान् ! हजुरलाई बारम्बार नमस्कार छ। हामीहरू हजुरकै शरणमा आएका छौं।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं प्रपन्नैः संविग्नैर्वेपमानायनैर्बलः।**

**प्रसादितः सुप्रसन्नो मा भैष्टेत्यभयं ददौ ॥ ४९॥**

पदार्थ–
**एवं** = यसप्रकार
**वेपमानायनैः** = घरबार ढल्न लाग्नाले
**संविग्नैः** = आत्तिएका र
**प्रपन्नैः** = शरणमा परेका कौरवहरूद्वारा
**प्रसादितः** = स्तुति गरिएकाले
**सुप्रसन्नः** = अति प्रसन्न हुनुभएका
**बलः** = बलरामले
**मा भैष्ट इति** = नडराओ भन्दै
**अभयं** = अभयदान
**ददौ** = दिनुभयो

**वाक्यार्थ–** यसप्रकार घरबार सबै ढल्न लाग्नाले आत्तिएर शरणमा परेका कौरवहरूले स्तुति गरेपछि अति प्रसन्न हुनुभएका बलरामले ती सबैलाई 'नडराओ' भन्दै अभयदान दिनुभयो।

**दुर्योधनः पारिबर्हं कुञ्जरान् षष्टिहायनान्।**
**ददौ च द्वादशशतान्ययुतानि तुरङ्गमान् ॥ ५० ॥**
**रथानां षट्सहस्राणि रौक्माणां सूर्यवर्चसाम्।**
**दासीनां निष्ककण्ठीनां सहस्रं दुहितृवत्सलः ॥ ५१ ॥**

पदार्थ–
**दुहितृवत्सलः** = छोरी लक्ष्मणालाई माया गर्ने
**दुर्योधनः** = दुर्योधनले
**पारिबर्हं** = दाइजोको रूपमा
**षष्टिहायनान्** = साठी-साठी वर्षका
**द्वादशशतानि** = बाह्र सय
**कुञ्जरान्** = हात्तीहरू
**अयुतानि** = दश हजार
**तुरङ्गमान्** = घोडाहरू
**सूर्यवर्चसां** = सूर्यको समान तेज भएका
**रौक्माणां** = सुवर्णमय
**षट्सहस्राणि** = छ हजार
**रथानां च** = रथहरू र
**निष्ककण्ठीनां** = सुनका हार लगाएका
**दासीनां सहस्रं** = एक हजार दासीहरू
**ददौ** = दिए

**वाक्यार्थ–** छोरी लक्ष्मणालाई माया गर्ने दुर्योधनले दाइजोको रूपमा साठी-साठी वर्षका बाह्र सय हात्तीहरू, दश हजार घोडाहरू, सूर्यसमान तेजिला छ हजार सुनका रथहरू र गलामा सुनका हार लगाएका एक हजार दासीहरू दिए।

**प्रतिगृह्य तु तत् सर्वं भगवान् सात्वतर्षभः।**

**ससुतः सस्नुषः प्रागात् सुहृद्भिरभिनन्दितः ॥ ५२ ॥**

**पदार्थ—**
**सुहृद्भिः** = बन्धुबान्धवहरूद्वारा
**अभिनन्दितः** = अभिनन्दित हुनुभएका
**भगवान्** = भगवान्
**सात्वतर्षभः तु** = यदुश्रेष्ठ बलराम पनि
**तत् सर्वं** = त्यो सबै
**प्रतिगृह्य** = स्वीकार गरेर
**ससुतः** = छोरो साम्ब र
**सस्नुषः** = बुहारी लक्ष्मणासहित
**प्रागात्** = द्वारका फर्किनुभयो

**वाक्यार्थ—** सम्पूर्ण बन्धुबान्धवहरूद्वारा अभिनन्दित हुनुभएका यदुकुलश्रेष्ठ भगवान् बलराम पनि दुर्योधनले अर्पण गरेका सबै सामग्रीलाई स्वीकार गरेर छोरो साम्ब तथा बुहारी लक्ष्मणालाई साथमा लिएर द्वारकातर्फ फर्किनुभयो।

**ततः प्रविष्टः स्वपुरं हलायुधः समेत्य बन्धूननुरक्तचेतसः।**
**शशंस सर्वं यदुपुङ्गवानां मध्ये सभायां कुरुषु स्वचेष्टितम्॥ ५३॥**

**पदार्थ—**
**ततः** = त्यसपछि
**स्वपुरं** = आफ्नो नगरमा
**प्रविष्टः** = प्रवेश गर्नुभएका
**हलायुधः** = हलोलाई हतियार बनाउनुभएका बलरामले
**अनुरक्तचेतसः** = उत्सुक चित्त भएका
**बन्धून्** = बन्धुहरूलाई
**समेत्य** = भेटेर
**यदुपुङ्गवानां** = श्रेष्ठ यदुवंशीहरूको
**सभायां** = सभाको
**मध्ये** = माझमा
**कुरुषु** = कौरवहरूका साथ
**स्वचेष्टितं** = आफूले गरेको
**सर्वं** = सबै वृत्तान्त
**शशंस** = सुनाउनुभयो

**वाक्यार्थ—** त्यसपछि बलराम आफ्नो द्वारकामा पुग्नुभयो र आफ्ना बारेमा जान्न उत्सुक भएका बन्धुहरूसँग भेटघाट गर्नुभयो। त्यसपछि उहाँले श्रेष्ठ यदुवंशीहरूको सभाको माझमा आफूले कौरवहरूसँग गरेका सम्पूर्ण वृत्तान्त सुनाउनुभयो।

**अद्यापि च पुरं ह्येतत् सूचयद् रामविक्रमम्।**
**समुन्नतं दक्षिणतो गङ्गायामनुदृश्यते॥ ५४॥**

**पदार्थ—**
**हि** = निश्चय नै
**रामविक्रमं** = बलरामको पराक्रमलाई
**सूचयत्** = स्मरण गराउने
**एतत्** = यो
**पुरं** = हस्तिनापुर
**अद्य अपि** = आज पनि
**दक्षिणतः** = दक्षिणतिर
**समुन्नतं** = केही उठेको
**गङ्गायां च** = गङ्गाजीतिर चाहिँ
**अनुदृश्यते** = झुकेको देखिन्छ

**वाक्यार्थ—** बलरामको पराक्रमलाई सम्झाइरहने यो हस्तिनापुर आज पनि दक्षिणतिर केही उठेको र गङ्गातिर झुकेको देखिन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**
**हास्तिनपुरकर्षणरूपसङ्कर्षणविजयो नामाष्टषष्टितमोऽध्यायः॥ ६८॥**

# अथैकोनसप्ततितमोऽध्यायः

## देवर्षि नारदद्वारा भगवान् श्रीकृष्णको गार्हस्थ्य जीवनको अवलोकन

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**नरकं निहतं श्रुत्वा तथोद्वाहं च योषिताम्।**
**कृष्णेनैकेन बह्वीनां तद् दिदृक्षुः स्म नारदः॥ १॥**

**पदार्थ–**
**कृष्णेन** = भगवान् श्रीकृष्णद्वारा
**नरकं** = भौमासुर
**निहतं** = मारिएको
**तथा** = तथा
**एकेन** = एउटा श्रीकृष्णद्वारा
**बह्वीनां** = धेरै
**योषितां** = स्त्रीहरूसँग
**उद्वाहं च** = विवाह गरेको पनि
**श्रुत्वा** = सुनेर
**नारदः** = नारदजी
**तत्** = त्यो
**दिदृक्षुः स्म** = हेर्न इच्छुक हुनुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! भगवान् श्रीकृष्णले भौमासुरलाई मारेर एक्लैले धेरै स्त्रीहरूसँग विवाह गर्नुभएको छ भन्ने सुन्नुभएका नारदजीलाई भगवान्को घरगृहस्थी हेर्ने इच्छा भयो।

**चित्रं बतैतदेकेन वपुषा युगपत् पृथक्।**
**गृहेषु द्व्यष्टसाहस्रं स्त्रिय एक उदावहत्॥ २॥**

**पदार्थ–**
**बत** = अहो
**एतत्** = यो
**चित्रं** = आश्चर्यको कुरा
**एकः** = एक जना श्रीकृष्णले
**एकेन** = एउटै
**वपुषा** = शरीरद्वारा
**युगपत्** = एउटै समयमा
**पृथक्** = भिन्न-भिन्न
**गृहेषु** = घरहरूमा
**द्व्यष्टसाहस्रं** = सोह्र हजार
**स्त्रियः** = स्त्रीहरूसँग
**उदावहत्** = विवाह गर्नुभयो

**वाक्यार्थ–** अहो! यो त अति आश्चर्यको कुरा भयो, एक जना भगवान् श्रीकृष्णले एउटै स्वरूपमा, एकै समयमा भिन्न-भिन्न घरहरूमा सोह्र हजार स्त्रीहरूसँग विवाह गर्नुभयो।

**इत्युत्सुको द्वारवतीं देवर्षिर्द्रष्टुमागमत्।**
**पुष्पितोपवनारामद्विजालिकुलनादिताम्॥ ३॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**द्रष्टुं** = श्रीकृष्णको लीला हेर्न
**उत्सुकः** = उत्सुक भएका
**देवर्षिः** = देवर्षि नारद
**पुष्पितोपवनारामद्विजालिकुल-नादितां** = विभिन्न फूल फुलेर सुशोभित भएका बगैँचाहरूले युक्त एवं पक्षी तथा भँवराको

मधुर आवाजले गुन्जिरहेको
**द्वारवतीं** = द्वारका सहरमा
**आगमत्** = आउनुभयो

**वाक्यार्थ–** यसप्रकार भगवान्‌को लीला हेर्न अति उत्सुक हुनुभएका देवर्षि नारद विभिन्न किसिमका फूलहरू फुलेर सुशोभित बनेका बगैँचाहरूले युक्त तथा पक्षी र भँवराको मधुर ध्वनिले गुन्जिरहेको द्वारका सहरमा आउनुभयो।

**उत्फुल्लेन्दीवराम्भोजकह्लारकुमुदोत्पलैः।**

**छुरितेषु सरस्सूच्चैः कूजितां हंससारसैः॥ ४॥**

**पदार्थ–**
**उत्फुल्लेन्दीवराम्भोजकह्लार-कुमुदोत्पलैः** = फुलेका नीलकमल, रक्तकमल, कुमुद र अन्य कमलहरूले
**छुरितेषु** = भरिपूर्ण भएका
**सरस्सु** = पोखरीहरूमा
**हंससारसैः** = हाँस र सारसहरू
**उच्चैः** = ठुलो-ठुलो स्वरले
**कूजिताम्** = कराइरहेको (द्वारका सहरमा नारद आउनुभयो)

**वाक्यार्थ–** नारदजी द्वारकापुरीमा आउँदा त्यहाँका पोखरीहरू नीलकमल, रक्तकमल, कुमुद र अन्य कमलहरू फुलेर शोभायमान देखिएका थिए भने ती पोखरीका किनारमा बसेका हाँस, सारस आदि पक्षीहरू ठुलो-ठुलो स्वरमा कराइरहेका थिए।

**प्रासादलक्षैर्नवभिर्जुष्टां स्फाटिकराजतैः।**

**महामरकतप्रख्यैः स्वर्णरत्नपरिच्छदैः॥ ५॥**

**पदार्थ–**
(द्वारकापुरी)
**स्फाटिकराजतैः** = स्फटिक र चाँदीले बनेका
**महामरकतप्रख्यैः** = पन्ना आदि मणिका प्रकाशले चम्किएका
**स्वर्णरत्नपरिच्छदैः** = सुन र हीराका सामग्रीले सजिएका
**नवभिः प्रासादलक्षैः** = नौ लाख महलहरूले
**जुष्टाम्** = सुशोभित थियो

**वाक्यार्थ–** द्वारका नगरमा स्फटिक र चाँदीले बनेका, पन्ना आदि मणिका प्रकाशले चम्किएका तथा सुन र हीराका सामग्रीले सजिएका नौ लाख महलहरू थिए।

**विभक्तरथ्यापथचत्वरापणैः शालासभाभी रुचिरां सुरालयैः।**

**संसिक्तमार्गाङ्गणवीथिदेहलीं पतत्पताकाध्वजवारितातपाम्॥ ६॥**

**पदार्थ–**
**विभक्तरथ्यापथचत्वरापणैः** = छुट्टाछुट्टै व्यवस्थित राजमार्ग, गल्ली, चौबाटो र बजारहरूले
**शालासभाभिः** = पशुशाला एवं ठुला-ठुला सभाभवनहरूले र
**सुरालयैः** = देवमन्दिरहरूले
**रुचिरां** = सजिएको (द्वारकापुरी)
**संसिक्तमार्गाङ्गणवीथिदेहलीं** = बाटा-घाटा, चोक, आँगन र ढोका सबै सुगन्धित वस्तुले सेचन गरिएका
**पतत्पताकाध्वजवारितातपाम्** = फर्फराउँदै गरेका ध्वजा-पताकाहरूले सूर्यलाई छेकेर

शीतल पारिएको (थियो)

**वाक्यार्थ–** व्यवस्थित रूपमा अलग-अलग बनाइएका राजमार्ग, गल्ली, चौबाटो, बजार, पशुशाला तथा ठुला-ठुला सभाभवनहरूले र देवमन्दिरहरूले द्वारकापुरी सजिएको थियो। त्यहाँका बाटा-घाटा, चोक, आँगन र ढोका सबैतिर सुगन्धित वस्तु छरिएको थियो भने फर्फराउँदै गरेका ध्वजा-पताकाहरूले सूर्यको किरणलाई छेकेर सबै ठाउँ शीतल बनेको थियो।

**तस्यामन्तःपुरं श्रीमदर्चितं सर्वधिष्ण्यपैः।**
**हरेः स्वकौशलं यत्र त्वष्ट्रा कार्त्स्न्येन दर्शितम्॥ ७॥**

**पदार्थ–**
**तस्यां** = त्यस द्वारका सहरमा
**सर्वधिष्ण्यपैः** = सम्पूर्ण लोकपालहरूद्वारा
**अर्चितं** = प्रशंसा गरिएको
**श्रीमत्** = श्रीसम्पत्तिपूर्ण
**हरेः** = भगवान् श्रीकृष्णको
**अन्तःपुरं** = महल थियो
**यत्र** = जहाँ
**त्वष्ट्रा** = विश्वकर्माद्वारा
**कार्त्स्न्येन** = पूर्णरूपले
**स्वकौशलं** = आफ्नो कालिगढी
**दर्शितम्** = देखाइएको थियो

**वाक्यार्थ–** त्यस द्वारका सहरमा सम्पूर्ण लोकपालहरूद्वारा प्रशंसा गरिएको, श्रीसम्पत्तिले भरिपूर्ण अति राम्रो भगवान् श्रीकृष्णको महल थियो, जुन महलको निर्माणमा विश्वकर्माले आफ्नो कालिगढी पूर्णरूपमा देखाएका थिए।

**तत्र षोडशभिः सद्मसहस्रैः समलङ्कृतम्।**
**विवेशैकतमं शौरेः पत्नीनां भवनं महत्॥ ८॥**

**पदार्थ–**
**तत्र** = त्यस अन्तःपुरमा
**शौरेः** = श्रीकृष्णका
**पत्नीनां** = पत्नीहरूका
**षोडशभिः** = सोह्र
**सद्मसहस्रैः** = हजार भवनहरू
**समलङ्कृतं** = सजिएका थिए
**एकतमं** = ती मध्येको एक
**महत्** = ठुलो
**भवनं** = भवनमा
**विवेश** = नारदजी प्रवेश गर्नुभयो

**वाक्यार्थ–** त्यस अन्तःपुरमा पनि भगवान्का सोह्र हजार पत्नीका सोह्र हजार महलहरू सजिएर रहेका थिए। तिनै मध्येको एउटा ठुलो भवनमा नारदजी प्रवेश गर्नुभयो।

**विष्टब्धं विद्रुमस्तम्भैर्वैदूर्यफलकोत्तमैः।**
**इन्द्रनीलमयैः कुड्यैर्जगत्या चाहतत्विषा॥ ९॥**

**पदार्थ–**
**विद्रुमस्तम्भैः** = मुगाका खम्बाहरूले
**वैदूर्यफलकोत्तमैः** = वैदूर्य मणिका छतहरूले
**इन्द्रनीलमयैः** = इन्द्रनील मणिका
**कुड्यैः** = भित्ताहरूले (र)
**अहतत्विषा** = कहिल्यै प्रकाश

कम नहुने (मणिहरू छापिएको)
**जगत्या च** = भुइँले गर्दा पनि
**विष्टब्धम्** = (त्यो महल) सुशोभित थियो

**वाक्यार्थ–** नारदजी जुन महलमा प्रवेश गर्नुभयो त्यो महल मुगाका खम्बा, वैदूर्य मणिका राम्रा-राम्रा छत, इन्द्रनील मणि जडिएका भित्ता र कहिल्यै प्रकाश नघट्ने मणिहरू छापिएको भुइँले गर्दा अति सुशोभित थियो।

**वितानैर्निर्मितैस्त्वष्ट्रा मुक्तादामविलम्बिभिः।**
**दान्तैरासनपर्यङ्कैर्मण्युत्तमपरिष्कृतैः॥ १०॥**

**पदार्थ–**
**त्वष्ट्रा** = विश्वकर्माद्वारा
**निर्मितैः** = बनाइएका
**मुक्तादामविलम्बिभिः** = मोतीका झल्लरहरू झुन्डिएका
**वितानैः** = चदुवाँहरूद्वारा
**मण्युत्तमपरिष्कृतैः** = राम्रा-राम्रा मणिहरूद्वारा सजाइएका
**दान्तैः** = हात्तीका दाँतबाट बनाइएका
**आसनपर्यङ्कैः** = आसन र पलङ्गहरूद्वारा (त्यो भवन सुशोभित थियो)

**वाक्यार्थ–** विश्वकर्माले मोतीका झल्लरहरू जडी बनाएका चदुवाँहरूले र राम्रा-राम्रा मणि जडिएका हात्तीका दाँतका आसन तथा पलङ्गहरूले त्यो महल सुशोभित थियो।

**दासीभिर्निष्ककण्ठीभिः सुवासोभिरलङ्कृतम्।**
**पुम्भिः सकञ्चुकोष्णीषसुवस्त्रमणिकुण्डलैः॥ ११॥**

**पदार्थ–**
**सुवासोभिः** = राम्रा-राम्रा कपडा लगाएका
**निष्ककण्ठीभिः** = घाँटीमा सुनका हार लगाएका
**दासीभिः** = दासीहरूद्वारा र
**सकञ्चुकोष्णीषसुवस्त्रमणिकुण्डलैः** = दौरा, पगरी, राम्रा-राम्रा कपडा र मणिका कुण्डलहरू लगाएका
**पुम्भिः** = पुरुष(सेवक)हरूद्वारा पनि
**अलङ्कृतम्** = (त्यो महल) सुसज्जित थियो

**वाक्यार्थ–** राम्रा-राम्रा कपडा तथा सुनका हार लगाएका दासीहरू र मणिका कुण्डल, दौरा, पगरी आदि लगाएका सेवकहरू आ-आफ्नो काममा व्यस्त थिए। त्यसले पनि महलको शोभा बढिरहेको थियो।

**रत्नप्रदीपनिकरद्युतिभिर्निरस्त-**
**ध्वान्तं विचित्रवलभीषु शिखण्डिनोऽङ्ग।**
**नृत्यन्ति यत्र विहितागुरुधूपमक्षै-**
**र्निर्यान्तमीक्ष्य घनबुद्धय उन्नदन्तः॥ १२॥**

**पदार्थ—**
**अङ्ग** = हे प्रिय परीक्षित्
**रत्नप्रदीपनिकरद्युतिभिः** = बत्ती झैं बल्ने रत्नसमूहको प्रकाशले
**निरस्तध्वान्तं** = अन्धकार नासिएको
**यत्र** = जुन त्यो महलका
**विचित्रवलभीषु** = रङ्गीचङ्गी अटालीमा बसेका
**शिखण्डिनः** = मयूरहरू
**अक्षैः** = झ्यालहरूबाट
**निर्यान्तं** = निस्किरहेको
**विहितागुरुधूपं** = बालिएको सुगन्धित अगुरु धूपको धुवाँलाई
**ईक्ष्य** = देखेर
**घनबुद्ध्यः** = बादल भन्ने मानेर
**उन्नदन्तः**= जोड-जोडले कराउँदै
**नृत्यन्ति** = नाच्दछन्

**वाक्यार्थ—** ठाउँ-ठाउँमा राखिएका बत्ती झैं बल्ने विभिन्न प्रकारका रत्नका प्रकाशले अँध्यारो हटेको त्यस महलका रङ्गीचङ्गी अटालीहरूमा बसेका मयूरहरू बालिएको अगुरु धूपको धुवाँ झ्यालहरूबाट निस्किरहेको देखेर त्यसलाई बादल भन्ने ठानी जोड-जोडले कराउँदै नाचिरहेका थिए।

**तस्मिन् समानगुणरूपवयःसुवेष-**
**दासीसहस्रयुतयानुसवं गृहिण्या।**
**विप्रो ददर्श चमरव्यजनेन रुक्म-**
**दण्डेन सात्वतपतिं परिवीजयन्त्या ॥ १३ ॥**

**पदार्थ—**
**विप्रः** = ब्राह्मण नारदजीले
**तस्मिन्** = त्यस महलमा
**अनुसवं** = सधैं
**समानगुणरूपवयःसुवेषदासी-सहस्रयुतया** = आफूसमान गुण, रूप, उमेर, पहिरन भएका हजारौं दासीहरूले युक्त भएर पनि
**रुक्मदण्डेन** = सुनका बिँड भएका
**चमरव्यजनेन** = चमरको पङ्खाले
**परिवीजयन्त्या** = राम्ररी हम्किरहेकी
**गृहिण्या** = पत्नी रुक्मिणीले सहित
**सात्वतपतिं** = यदुपति भगवान् श्रीकृष्णलाई
**ददर्श** = देख्नुभयो

**वाक्यार्थ—** नारदजीले त्यस दिव्य महलमा रुक्मिणीका साथमा बसिरहनुभएका भगवान् श्रीकृष्णलाई देख्नुभयो, जहाँ आफूसमान गुण, रूप, उमेर र पहिरन भएका हजारौं दासीहरू हरपल सेवामा तत्पर थिए, तर पनि रुक्मिणीले आफैं सुनका बिँड भएका चमरको पङ्खा डोलाएर भगवान्‌को सेवा गरिरहेकी थिइन्।

**तं सन्निरीक्ष्य भगवान् सहसोत्थितः श्री-**
**पर्यङ्कतः सकलधर्मभृतां वरिष्ठः।**
**आनम्य पादयुगलं शिरसा किरीट-**
**जुष्टेन साञ्जलिरवीविशदासने स्वे ॥ १४ ॥**

**पदार्थ–**
**तं** = ती नारदजीलाई
**सन्निरीक्ष्य** = देखेर
**सकलधर्मभृतां** = धर्मका परिपालकहरूमध्ये
**वरिष्ठः** = सर्वश्रेष्ठ
**भगवान्** = भगवान् श्रीकृष्ण
**सहसा** = झट्पट
**श्रीपर्यङ्कतः** = रुक्मिणीको पलङ्गबाट
**उत्थितः** = उठ्नुभयो र
**किरीटजुष्टेन** = मुकुटले सजिएको
**शिरसा** = शिरले
**पादयुगलं** = नारदजीका दुबै पाउमा
**आनम्य** = ढोगेर
**साञ्जलिः** = हात जोड्दै
**स्वे** = आफ्नै
**आसने** = आसनमा
**अवीविशत्** = बसाउनुभयो

**वाक्यार्थ–** नारदजीलाई देख्नेबित्तिकै धर्मपरिपालकहरूमध्ये सर्वश्रेष्ठ भगवान् श्रीकृष्ण हत्तपत्त रुक्मिणीको पलङ्गबाट उठ्नुभयो र मुकुटले सजिएको शिर झुकाएर ऋषिका दुबै पाउमा प्रणाम गर्नुभयो। त्यसपछि उहाँले हात जोड्दै नारदजीलाई आफ्नै आसनमा बसाउनुभयो।

**तस्यावनिज्य चरणौ तदपः स्वमूर्ध्ना**
**बिभ्रज्जगद्गुरुतमोऽपि सतां पतिर्हि।**
**ब्रह्मण्यदेव इति यद् गुणनाम युक्तं**
**तस्यैव यच्चरणशौचमशेषतीर्थम्॥ १५॥**

**पदार्थ–**
**जगद्गुरुतमः अपि** = संसारका परमगुरु भएर पनि
**सतां पतिः** = सज्जनहरूका पालक भगवान् श्रीकृष्णले
**तस्य** = ती नारदजीका
**चरणौ** = पाउ
**अवनिज्य** = धोएर
**तदपः** = त्यो जल
**स्वमूर्ध्ना** = आफ्नो शिरमा
**बिभ्रत्** = लगाउनुभयो
**हि** = त्यसै कारण
**ब्रह्मण्यदेवः** = ब्राह्मणलाई देवता मान्ने
**इति** = यस्तो
**यत्** = जुन
**गुणनाम** = गुण अनुसारको नाम छ त्यो
**युक्तं** = सार्थक छ
**तस्य एव** = उनै भगवान् श्रीकृष्णका
**चरणशौचं** = चरणकमल धोएको
**यत्** = जुन जल छ (त्यो)
**अशेषतीर्थम्** = सम्पूर्ण तीर्थरूप छ

**वाक्यार्थ–** संसारका परम गुरु भएर पनि सज्जनहरूका पालक भगवान् श्रीकृष्णले नारदजीका पाउ धोएर त्यो जल आफ्नो शिरमा लगाउनुभयो। यसबाट ब्राह्मणलाई देवता मान्ने भन्ने अर्थको जुन उहाँको ब्रह्मण्यदेव नाम छ त्यो सार्थक छ। उनै भगवान्का चरणकमललाई धुँदा बनेको जुन गङ्गा छ त्यो सम्पूर्ण तीर्थरूप मानिन्छ।

**सम्पूज्य देवऋषिवर्यमृषिः पुराणो**
**नारायणो नरसखो विधिनोदितेन।**

**वाण्याभिभाष्य मितयामृतमिष्टया तं**
**प्राह प्रभो भगवते करवाम हे किम् ॥ १६ ॥**

**पदार्थ–**
**पुराणः** = सनातन
**ऋषिः** = वेदप्रवर्तक
**नरसखः** = नरका साथी
**नारायणः** = नारायणले
**उदितेन विधिना** = शास्त्रोक्त विधिद्वारा
**देवऋषिवर्यम्** = देवर्षिहरूमा श्रेष्ठ
**तं** = ती नारदजीलाई
**सम्पूज्य** = पूजा गरेर
**अमृतमिष्टया** = अमृत जस्तै मधुर
**मितया** = सीमित
**वाण्या** = बोलीले
**हे प्रभो** = हे ब्राह्मणदेव
**अभिभाष्य** = भन्ने सम्बोधन गर्दै
**भगवते** = हजुरलाई
**किं** = के
**करवाम** = सेवा गरौं
**प्राह** = भन्नुभयो

**वाक्यार्थ–** सनातन, वेदप्रवर्तक, नरका मित्र भगवान् नारायणले शास्त्रोक्त विधिले देवर्षिहरूमा श्रेष्ठ नारदजीको स्वागत सत्कार गर्नुभयो। त्यसपछि अमृत जैँ मिठो तर छोटो बोलीमा नारदजीलाई 'हे ब्राह्मणदेव !' भनी सम्बोधन गर्दै 'अब म हजुरको के सेवा गरौँ' भनी सोध्नुभयो।

**श्रीनारद उवाच** (नारदजीले भन्नुभयो)

**नैवाद्भुतं त्वयि विभोऽखिललोकनाथे**
**मैत्री जनेषु सकलेषु दमः खलानाम् ।**
**निःश्रेयसाय हि जगत्स्थितिरक्षणाभ्यां**
**स्वैरावतार उरुगाय विदाम सुष्ठु ॥ १७ ॥**

**पदार्थ–**
**विभो** = हे सर्वव्यापक प्रभु
**सकलेषु** = सम्पूर्ण
**जनेषु** = प्राणीहरूसँग
**मैत्री** = मित्रता गाँस्ने
**खलानां** = दुष्टहरूको
**दमः** = नाश गर्ने
**अखिललोकनाथे** = संसारका मालिक
**त्वयि** = हजुरका निम्ति
**अद्भुतं** = आश्चर्यको कुरो
**न एव** = केही छैन
**हि** = किनभने
**उरुगाय** = हे परमकीर्तिशाली भगवान् (हजुरले)
**जगत्स्थितिरक्षणाभ्यां** = संसारको पालन र रक्षाद्वारा
**निःश्रेयसाय** = सम्पूर्ण प्राणीको कल्याणका निम्ति नै
**स्वैरावतारः** = स्वेच्छाले अवतार लिनुभएको हो भन्ने कुरा
**सुष्ठु** = राम्ररी
**विदामः** = जान्दछौँ

**वाक्यार्थ–** हे सर्वव्यापक प्रभु ! हजुर संसारका एक मात्र मालिक हुनुहुन्छ। हजुर आफ्ना शरणमा आएका प्राणीसँग मित्रता गर्नुहुन्छ भने दुष्टहरूलाई दण्ड दिनुहुन्छ। हजुरका निम्ति यहाँ आश्चर्यको कुरो केही छैन। हे परमकीर्तिशाली भगवान् ! हजुरले जगत्को पालन, रक्षणद्वारा संसारका सम्पूर्ण प्राणीको कल्याण गर्नका निम्ति स्वेच्छाले अवतार ग्रहण गर्नुभएको हो भन्ने कुरो

हामीले राम्ररी बुझेका छौँ।

**दृष्टं तवाङ्घ्रियुगलं जनतापवर्गं**
**ब्रह्मादिभिर्हृदि विचिन्त्यमगाधबोधैः।**
**संसारकूपपतितोत्तरणावलम्बं**
**ध्यायंश्चराम्यनुगृहाण यथा स्मृतिः स्यात्॥ १८॥**

**पदार्थ–**
**अगाधबोधैः** = गहिरो ज्ञान भएका
**ब्रह्मादिभिः** = ब्रह्मा आदि देवताहरूद्वारा
**हृदि** = हृदयमा
**विचिन्त्यं** = चिन्तन गर्न योग्य
**जनतापवर्गं** = शरणमा परेका जनलाई मोक्ष प्रदान गर्ने
**संसारकूपपतितोत्तरणावलम्बं** = संसाररूपी दुःखको कुवामा फसेकाहरूलाई उद्धार गर्ने एक मात्र आधार भएका
**तवाङ्घ्रियुगलं** = हजुरका चरणयुगललाई
**दृष्टं** = दर्शन गर्ने अवसर मिल्यो
(अब म)
**ध्यायन्** = यिनै चरणको ध्यान गर्दै
**चरामि** = भ्रमण गरिरहन्छु
**यथा** = जसरी
**स्मृतिः** = यी चरणको सम्झना
**स्यात्** = भइरहन्छ (त्यो)
**अनुगृहाण** = कृपा गर्नुहोस्

**वाक्यार्थ–** हे भगवान्! धेरै ज्ञान भएका ब्रह्मा आदि देवताहरूले पनि सधैँ हृदयमा चिन्तन गर्न योग्य हजुरका चरणहरू शरणमा परेकालाई मोक्ष प्रदान गर्न समर्थ छन्। आज मलाई संसाररूपी अँध्यारो कुवामा फसेकाहरूलाई उद्धार गर्ने एक मात्र आधार भएका हजुरका चरणयुगलको दर्शन भयो, अब म यिनै चरणको ध्यान गर्दै संसारमा भ्रमण गर्दछु। जे गर्दा हजुरका यी श्रीचरणको स्मरण सधैँ भइरहन्छ, त्यो कृपा गर्नुहोस्।

**ततोऽन्यदाविशद् गेहं कृष्णपत्न्याः स नारदः।**
**योगेश्वरेश्वरस्याङ्ग योगमायाविवित्सया॥ १९॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
**ततः** = त्यसपछि
**सः** = ती
**नारदः** = नारदमुनि
**योगेश्वरेश्वरस्य** = योगेश्वर भगवान् श्रीकृष्णको
**योगमायाविवित्सया** = योगमायालाई जान्ने इच्छाले
**अन्यत्** = अर्को
**कृष्णपत्न्याः** = श्रीकृष्णपत्नीको
**गेहं** = महलमा
**आविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** हे परीक्षित्! त्यसपछि रुक्मिणीको भवनबाट निस्किनुभएका नारदजी योगेश्वर भगवान् श्रीकृष्णको योगमायालाई जान्ने इच्छाले अर्की श्रीकृष्णकी पत्नी (सत्यभामा)को महलमा प्रवेश गर्नुभयो।

**दीव्यन्तमक्षैस्तत्रापि प्रियया चोद्धवेन च ।**
**पूजितः परया भक्त्या प्रत्युत्थानासनादिभिः ॥ २० ॥**

**पदार्थ–**
**तत्र अपि च** = त्यहाँ पनि
**प्रियया** = प्रिय पत्नी तथा
**उद्धवेन च** = उद्धवसँग
**अक्षैः** = जुवा
**दीव्यन्तं** = खेलिरहनुभएका भगवान् श्रीकृष्णलाई (नारदजीले देख्नुभयो त्यहाँ पनि भगवान् श्रीकृष्णद्वारा)
**प्रत्युत्थानासनादिभिः** = हत्तपत्त उठी आसनमा बस्न अनुरोध गर्दै
**परया भक्त्या** = परम प्रेमपूर्वक
**पूजितः** = नारदजीको पूजा गरियो

**वाक्यार्थ–** त्यहाँ पनि भगवान् श्रीकृष्ण आफ्नी प्राणप्यारी पत्नी र उद्धवका साथमा जुवा खेलिरहनुभएको थियो। नारदजीलाई देख्नेबित्तिकै आसनबाट उठी भगवान्ले स्वागत गर्नुभयो र आसनमा बसाई विभिन्न सामग्रीहरूद्वारा प्रेमपूर्वक पूजा गर्नुभयो।

**पृष्टश्चाविदुषेवासौ कदायातो भवानिति ।**
**क्रियते किं नु पूर्णानामपूर्णैरस्मदादिभिः ॥ २१ ॥**

**पदार्थ–**
**अविदुषा इव** = केही नजान्नेले झैं गरी (भगवान् श्रीकृष्णद्वारा)
**भवान्** = हजुर
**कदा** = कति वेला
**आयातः** = आउनुभयो
**पूर्णानां** = सबै कामनाले पूर्ण हुनुभएका हजुरको
**अपूर्णैः** = चाहना पूर्ण नभएका
**अस्मदादिभिः** = हामी जस्ताले
**किं नु** = के सेवा
**क्रियते** = गरौं
**इति च** = यसप्रकार
**असौ** = यी नारदजी
**पृष्टः** = सोधिनुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान्ले केही नजाने झैं गरी नारदजीलाई हजुर यहाँ कति वेला आउनुभयो ? सबै कामनाले पूर्ण हुनुभएका हजुरलाई हामी जस्ता चाहना पूर्ण नभएकाले के सेवा गरौं भनी सोध्नुभयो।

**अथापि ब्रूहि नो ब्रह्मन् जन्मैतच्छोभनं कुरु ।**
**स तु विस्मित उत्थाय तूष्णीमन्यदगाद् गृहम् ॥ २२ ॥**

**पदार्थ–**
**अथ अपि** = तर पनि
**ब्रह्मन्** = हे ज्ञानी नारदजी
**नः** = हामीलाई
**ब्रूहि** = केही आज्ञा दिनुहोस् र
**एतत्** = यो हाम्रो
**जन्म** = जन्मलाई
**शोभनं** = सफल
**कुरु** = बनाउनुहोस्
**विस्मितः** = (भगवान्को कुरा सुनेर) आश्चर्यचकित भएका
**सः तु** = ती नारदजी त
**तूष्णीम्** = चुपचाप
**उत्थाय** = उठेर
**अन्यत्** = अर्को
**गृहं** = महलमा
**अगात्** = जानुभयो

**वाक्यार्थ–** तर पनि हे ज्ञानी नारदजी ! हामीलाई केही आज्ञा दिनुहोस् र हाम्रो यो जन्मलाई

सफल पारिदिनुहोस्। भगवान्का यस्ता कुरा सुनेर आश्चर्यचकित बनेका नारदजी चुपचाप उठेर अर्को महलमा जानुभयो।

**तत्राप्यचष्ट गोविन्दं लालयन्तं सुताञ्छिशून्।**
**ततोऽन्यस्मिन् गृहेऽपश्यन्मज्जनाय कृतोद्यमम्॥ २३॥**

**पदार्थ–**
**तत्र अपि** = त्यहाँ पनि नारदजीले
**शिशून्** = शिशु अवस्थाका
**सुतान्** = छोराहरूलाई
**लालयन्तं** = खेलाइरहनुभएका
**गोविन्दं** = श्रीकृष्णलाई
**अचष्ट** = देख्नुभयो
**ततः** = त्यसपछि
**अन्यस्मिन्** = अर्को
**गृहे** = घरमा
**मज्जनाय** = नुहाउनका निम्ति
**कृतोद्यमं** = तयार हुनुभएका श्रीकृष्णलाई
**अपश्यत्** = देख्नुभयो

**वाक्यार्थ–** त्यस महलमा पनि नारदजीले भगवान्लाई आफ्ना शिशु अवस्थाका छोराहरूलाई खेलाइरहेको देख्नुभयो भने अर्को भवनमा पुग्दा नारदजीले श्रीकृष्णलाई नुहाउनका निम्ति तयार भइरहनुभएको देख्नुभयो।

**जुह्वन्तं च वितानाग्नीन् यजन्तं पञ्चभिर्मखैः।**
**भोजयन्तं द्विजान् क्वापि भुञ्जानमवशेषितम्॥ २४॥**

**पदार्थ–**
**वितानाग्नीन्** = (कहीँ) यज्ञकुण्डको अग्निमा
**जुह्वन्तं** = हवन गर्दै र (कहीँ)
**पञ्चभिः मखैः** = पाँच महायज्ञले
**यजन्तं** = देवताहरूको पूजा गर्दै
**क्व अपि** = कहीँ
**द्विजान्** = ब्राह्मणहरूलाई
**भोजयन्तं** = भोजन गराउँदै (र कहीँ)
**अवशेषितं** = यज्ञको अवशेष
**भुञ्जानम्** = भोजन गर्दै रहनुभएका भगवान्लाई (नारदजीले देख्नुभयो)

**वाक्यार्थ–** यसै प्रकार नारदजीले कतै भगवान्लाई यज्ञकुण्डको अग्निमा हवन गर्न लाग्नुभएको देख्नुभयो भने कतै पाँच महायज्ञद्वारा देवताहरूको पूजा गर्न लाग्नुभएको देख्नुभयो। त्यस्तै कतै ब्राह्मणलाई भोजन गराउँदै रहनुभएका भगवान्लाई देख्नुभयो भने कतै चाहिँ यज्ञको बाँकी अन्न आफैँ भोजन गर्दै गरेको देख्नुभयो।

**क्वापि सन्ध्यामुपासीनं जपन्तं ब्रह्म वाग्यतम्।**
**एकत्र चासिचर्माभ्यां चरन्तमसिवर्त्मसु॥ २५॥**

**पदार्थ–**
**क्व अपि** = कहीँ भगवान्
**सन्ध्यां** = सन्ध्या
**उपासीनं** = गर्न लाग्नुभएको (कहीँ)
**वाग्यतं** = चुप लागेर
**ब्रह्म** = गायत्री
**जपन्तं** = जप्न लाग्नुभएको
**एकत्र च** = र कहीँ
**असिचर्माभ्यां** = तरबार र ढाल लिएर
**असिवर्त्मसु** = तरबार चलाउने

अभ्यासमा
**चरन्तम्** = लाग्नुभएका
भगवान्लाई (नारदजीले
देख्नुभयो)

**वाक्यार्थ–** त्यस्तै कतै नारदजीले भगवान्लाई सन्ध्यावन्दन गर्न लाग्नुभएको र कतै चुप लागेर गायत्री जप्न लाग्नुभएको देख्नुभयो, त्यस्तै कतै तरबार र ढाल लिएर तिनलाई चलाउने अभ्यासमा लाग्नुभएका भगवान्लाई नारदजीले देख्नुभयो।

**अश्वैर्गजै रथैः क्वापि विचरन्तं गदाग्रजम्।**
**क्वचिच्छयानं पर्यङ्के स्तूयमानं च वन्दिभिः॥ २६॥**

**पदार्थ–**
**क्व अपि** = कहीं
**अश्वैः** = घोडामा
**गजैः** = हात्तीमा र
**रथैः** = रथमा चढेर
**विचरन्तं** = घुमिरहनुभएका
**क्वचित्** = कतै
**पर्यङ्के** = पलङ्गमा
**शयानं** = सुत्नुभएका
**वन्दिभिः** = स्तुतिपाठकहरूद्वारा
**स्तूयमानं च** = स्तुति
गरिनुभएका
**गदाग्रजम्** = गदका दाजु
श्रीकृष्णलाई
(नारदजीले देख्नुभयो)

**वाक्यार्थ–** कहीं घोडा, हात्ती र रथमा चढेर घुमिरहनुभएका, कहीं पलङ्गमा सुत्नुभएका र कहीं स्तुतिपाठकहरूद्वारा स्तुति गरिनुभएका भगवान् श्रीकृष्णलाई नारदजीले देख्नुभयो।

**मन्त्रयन्तं च कस्मिंश्चिन्मन्त्रिभिश्चोद्धवादिभिः।**
**जलक्रीडारतं क्वापि वारमुख्याबलावृतम्॥ २७॥**

**पदार्थ–**
**कस्मिंश्चित्** = कुनै महलमा
**उद्धवादिभिः** = उद्धव आदि
**मन्त्रिभिः** = मन्त्रीहरूसँग
**मन्त्रयन्तं च** = सरसल्लाह गर्न
लाग्नुभएका र
**क्व अपि** = कतै
**वारमुख्याबलावृतं** = सुन्दरी
युवतीहरूद्वारा घेरिएर
**जलक्रीडारतम् च** = जलक्रीडामा
मग्न हुनुभएका श्रीकृष्णलाई
(नारदजीले देख्नुभयो)

**वाक्यार्थ–** त्यस्तै कुनै महलमा नारदजीले उद्धव आदि मन्त्रीहरूसँग सरसल्लाह गर्न लाग्नुभएका र कतै सुन्दरी युवतीहरूसँगै जलक्रीडा गर्न लाग्नुभएका श्रीकृष्णलाई देख्नुभयो।

**कुत्रचिद् द्विजमुख्येभ्यो ददतं गाः स्वलङ्कृताः।**
**इतिहासपुराणानि शृण्वन्तं मङ्गलानि च॥ २८॥**

**पदार्थ–**
**कुत्रचित्** = कतै चाहिँ
**द्विजमुख्येभ्यः** = उत्तम
ब्राह्मणहरूलाई
**स्वलङ्कृताः** = सिँगारिएका
**गाः** = गाईहरू
**ददतं** = दान गर्न लाग्नुभएका
(र कतै)
**मङ्गलानि** = कल्याणकारी
**इतिहासपुराणानि** = इतिहास
पुराणहरू
**शृण्वन्तम्** = सुन्न लाग्नुभएका
भगवान् श्रीकृष्णलाई (नारदजीले
देख्नुभयो)

**वाक्यार्थ–** कतै नारदजीले उत्तम ब्राह्मणहरूलाई सिंगारिएका गाईहरू दान गरिरहनुभएका र कतै माङ्गलिक इतिहासपुराणहरू सुनिरहनुभएका भगवान्‌लाई देख्नुभयो।

**हसन्तं हास्यकथया कदाचित् प्रियया गृहे।**
**क्वापि धर्मं सेवमानमर्थकामौ च कुत्रचित्॥ २९॥**

**पदार्थ–**
**कदाचित्** = कुनै समयमा
**प्रियया** = पत्नीसँगै
**गृहे** = महलमा
**हास्यकथया** = ख्यालठट्टा गरेर
**हसन्तं** = हाँस्न लाग्नुभएका
**क्व अपि** = कहीँ कुनै महलमा
**धर्मं** = धर्मको
**सेवमानं** = पालना गर्न लाग्नुभएका
**कुत्रचित् च** = कुनै महलमा
**अर्थकामौ** = धनसम्पत्ति र कामनाको उपभोग गर्न लाग्नुभएका श्रीकृष्णलाई (नारदजीले देख्नुभयो)

**वाक्यार्थ–** कहीँ कुनै पत्नीको महलमा ख्यालठट्टाका कुरा गरेर हाँस्न लाग्नुभएका र कहीँ धर्म, कहीँ अर्थ र कहीँ कामवासनाको उपभोग गर्न लाग्नुभएका श्रीकृष्णलाई नारदजीले देख्नुभयो।

**ध्यायन्तमेकमासीनं पुरुषं प्रकृतेः परम्।**
**शुश्रूषन्तं गुरून् क्वापि कामैर्भोगैः सपर्यया॥ ३०॥**

**पदार्थ–**
**प्रकृतेः** = (कतै) प्रकृतिभन्दा
**परं** = भिन्न
**एकं** = अद्वितीय
**पुरुषं** = पुरुष ब्रह्मको
**ध्यायन्तं** = ध्यान गर्दै
**आसीनं** = बस्नुभएका
**क्व अपि** = कहीँ चाहिँ
**कामैर्भोगैः** = इच्छा अनुसारका सामग्रीद्वारा
**सपर्यया** = पूजा अर्चना गर्दै
**गुरून्** = गुरुहरूलाई
**शुश्रूषन्तम्** = सेवा सुश्रूषा गर्न लाग्नुभएका श्रीकृष्णलाई (नारदजीले देख्नुभयो)

**वाक्यार्थ–** कतै एक्लै बसेर प्रकृतिदेखि भिन्न अद्वितीय परब्रह्मको चिन्तनमा लाग्नुभएका र कतै इच्छा अनुसारका सामग्री अर्पण गरेर गुरुसेवा गर्न लाग्नुभएका श्रीकृष्णलाई नारदजीले देख्नुभयो।

**कुर्वन्तं विग्रहं कैश्चित् सन्धिं चान्यत्र केशवम्।**
**कुत्रापि सह रामेण चिन्तयन्तं सतां शिवम्॥ ३१॥**

**पदार्थ–**
**कैश्चित्** = कहीँ कसैसित
**विग्रहं** = युद्धको कुरा
**कुर्वन्तं** = गर्न लाग्नुभएका
**अन्यत्र च** = अन्त कतै
**सन्धिं** = मेलमिलापको कुरा गर्न लाग्नुभएका तथा
**कुत्र अपि** = कहीँ चाहिँ
**रामेण सह** = बलरामका साथमा
**सतां** = साधुजनहरूको
**शिवं** = कल्याणको विषयमा
**चिन्तयन्तं** = विचार विमर्श गरिरहनुभएका
**केशवम्** = भगवान् केशवलाई देख्नुभयो

**वाक्यार्थ–** देवर्षि नारदजीले भगवान्‌ले कहीँ कसैसित युद्धका कुरा र कसैसित मेलमिलापका कुरा गर्न लाग्नुभएको तथा कहीँ चाहिँ बलरामका साथमा सज्जनहरूको कल्याणको विषयमा विचार विमर्श गर्न लाग्नुभएको देख्नुभयो।

**पुत्राणां दुहितॄणां च काले विध्युपयापनम्।**
**दारैर्वरैस्तत्सदृशैः कल्पयन्तं विभूतिभिः॥ ३२॥**

| पदार्थ– | **तत्सदृशैः** = मिल्दाजुल्दा | **विधि** = विधिपूर्वक |
|---|---|---|
| **काले** = कहीँ उचित समयमा | **दारैः** = पत्नी र | **उपयापनं** = विवाह आदि |
| **पुत्राणां** = छोराहरूको र | **वरैः** = वरसँग | **कल्पयन्तम्** = गर्न लाग्नुभएका |
| **दुहितॄणां च** = छोरीहरूको पनि | **विभूतिभिः** = धुमधामसँग | श्रीकृष्णलाई देख्नुभयो |

**वाक्यार्थ–** नारदजीले कहीँ उचित समयमा आफ्ना छोराछोरीको मिल्दाजुल्दा कन्या र वरसँग धुमधाम किसिमले विधिपूर्वक विवाह आदि गर्न लाग्नुभएका श्रीकृष्णलाई देख्नुभयो।

**प्रस्थापनोपानयनैरपत्यानां महोत्सवान्।**
**वीक्ष्य योगेश्वरेशस्य येषां लोका विसिस्मिरे॥ ३३॥**

| पदार्थ– | **अपत्यानां** = छोरा-छोरीहरूको | **वीक्ष्य** = देखेर |
|---|---|---|
| **येषां** = जुन | **प्रस्थापनोपानयनैः** = बिदाइ गर्ने | **लोकाः** = जनताहरू |
| **योगेश्वरेशस्य** = योगीहरूका | र स्वागत गर्ने आदि | **विसिस्मिरे** = आश्चर्यचकित |
| ईश्वर श्रीकृष्णका | **महोत्सवान्** = उत्सवहरूलाई | हुन्थे |

**वाक्यार्थ–** योगेश्वर भगवान् श्रीकृष्ण कहीँ आफ्ना छोराछोरीलाई विदाइ गर्ने र कहीँ स्वागत गर्नमा व्यस्त हुनुहुन्थ्यो। उहाँका छोराछोरीहरूको बिदाइ गर्ने र स्वागत गर्ने महोत्सवलाई देखेर जनताहरू आश्चर्यचकित हुन्थे।

**यजन्तं सकलान् देवान् क्वापि क्रतुभिरूर्जितैः।**
**पूर्तयन्तं क्वचिद्धर्मं कूर्पाराममठादिभिः॥ ३४॥**

| पदार्थ– | **देवान्** = देवताहरूलाई | बनाएर |
|---|---|---|
| **क्व अपि** = कहीँ कतै | **यजन्तं** = पूजा गर्न लाग्नुभएका | **धर्मं** = धर्मशास्त्रले बताएका |
| **ऊर्जितैः** = ठुला-ठुला | **क्वचित्** = कहीँ | **पूर्तयन्तम्** = पूर्त कर्म |
| **क्रतुभिः** = यज्ञहरूद्वारा | **कूर्पाराममठादिभिः** = कुवा, | गरिरहनुभएका भगवान्‌लाई |
| **सकलान्** = सम्पूर्ण | बगैँचा, मठ-मन्दिर आदि | (देख्नुभयो) |

**वाक्यार्थ–** कहीँ ठुला-ठुला यज्ञहरूद्वारा सम्पूर्ण देवताहरूको पूजा गर्न लाग्नुभएका र कहीँ

कुवा, बगैँचा, मठ-मन्दिर आदि बनाएर धर्मशास्त्रले बताए अनुसारका पूर्त कर्म गर्न लाग्नुभएका श्रीकृष्णलाई नारदजीले देख्नुभयो।

**चरन्तं मृगयां क्वापि हयमारुह्य सैन्धवम्।**
**घ्नन्तं तत्र पशून् मेध्यान् परीतं यदुपुङ्गवैः॥ ३५॥**

| पदार्थ– | हयं = घोडामा | मेध्यान् = यज्ञका निम्ति काम |
|---|---|---|
| क्व अपि = कतै | आरुह्य = चढेर | लाग्ने |
| यदुपुङ्गवैः = श्रेष्ठ यादवहरूद्वारा | मृगयां = सिकार | पशून् = पशुहरूलाई |
| परीतं = घेरिएर | चरन्तं = खेलिरहनुभएका | घ्नन्तम् = मारिरहनुभएका |
| सैन्धवं = सिन्धुदेशीय | तत्र = त्यो सिकार कार्यमा | श्रीकृष्णलाई (देख्नुभयो) |

**वाक्यार्थ–** कतै श्रेष्ठ यादवहरूका साथमा सिन्धुदेशीय घोडा चढेर सिकार खेल्दै यज्ञका निम्ति काम लाग्ने पशुहरूलाई मार्दै हिँड्नुभएका श्रीकृष्णलाई नारदजीले देख्नुभयो।

**अव्यक्तलिङ्गं प्रकृतिष्वन्तःपुरगृहादिषु।**
**क्वचिच्चरन्तं योगेशं तत्तद्भावबुभुत्सया॥ ३६॥**

| पदार्थ– | घर-महलहरूमा | चरन्तं = घुमिरहनुभएका |
|---|---|---|
| क्वचित् = कतै | तत्तद्भावबुभुत्सया = ती सबैको | योगेशम् = योगेश्वर |
| प्रकृतिषु = प्रजाहरूका र | भावना बुझ्ने इच्छाले | श्रीकृष्णलाई (नारदजीले |
| अन्तःपुरगृहादिषु = अन्तःपुरका | अव्यक्तलिङ्गं = रूप बदलेर | देख्नुभयो) |

**वाक्यार्थ–** कतै प्रजाहरूका घरमा र अन्तःपुरका महलहरूमा तिनीहरूको भावना बुझ्ने इच्छाले नचिनिने बनेर घुम्दै हिँड्नुभएका भगवान् श्रीकृष्णलाई नारदजीले देख्नुभयो।

**अथोवाच हृषीकेशं नारदः प्रहसन्निव।**
**योगमायोदयं वीक्ष्य मानुषीमीयुषो गतिम्॥ ३७॥**

| पदार्थ– | श्रीकृष्णको | गर्नुभएका |
|---|---|---|
| अथ = यसप्रकार | योगमायोदयं = मायाशक्तिको | नारदः = नारदजीले |
| मानुषीम् = मनुष्यको जस्तो | प्रभावलाई | हृषीकेशं = हृषीकेश भगवान् |
| गतिं = लीला | वीक्ष्य = देखेर | श्रीकृष्णलाई |
| ईयुषः = गर्दै हिँड्नुभएका | प्रहसन् इव = मुस्कुराउन लागे झैँ | उवाच = भन्नुभयो |

**वाक्यार्थ–** यसप्रकार मनुष्यले जस्तो लीला गर्दै हिँड्नुभएका श्रीकृष्णको मायाशक्तिलाई देखेर चकित हुनुभएका नारदजीले मुस्कुराउँदै भगवान् हृषीकेशलाई यसो भन्नुभयो।

**विदाम योगमायास्ते दुर्दर्शा अपि मायिनाम्।**
**योगेश्वरात्मन् निर्भाता भवत्पादनिषेवया॥ ३८॥**

**पदार्थ—**
**योगेश्वर** = हे योगीहरूका ईश्वर
**आत्मन्** = आत्मस्वरूप भगवान्
**मायिनां अपि** = मायावीहरूद्वारा पनि
**दुर्दर्शाः** = दुःखले मात्र देख्न सकिने
**ते** = हजुरको
**योगमायाः** = योगमायालाई
**भवत्पादनिषेवया** = निरन्तर गरिएको हजुरको पाउको चिन्तनको प्रभावले
**निर्भाताः** = नित्य प्रकाश भइरहने
**विदामः** = हामी जान्दछौँ

**वाक्यार्थ—** हे योगीहरूका ईश्वर ! आत्मस्वरूप भगवान् ! हजुरको योगमायाशक्ति मायावीहरूद्वारा पनि दुःखले मात्र देख्न सकिने किसिमको छ, तर त्यसलाई पनि निरन्तर हजुरका चरणको चिन्तन गरेको प्रभावले गर्दा हामीले प्रत्यक्ष देखिरहेका छौँ।

**अनुजानीहि मां देव लोकांस्ते यशसाप्लुतान्।**
**पर्यटामि तवोद्गायन् लीला भुवनपावनीः॥ ३९॥**

**पदार्थ—**
**देव** = हे भगवान्
**भुवनपावनीः** = संसार पवित्र गर्ने
**तव** = हजुरका
**लीलाः** = लीलाहरूको
**उद्गायन्** = गान गर्दै
**ते** = हजुरका
**यशसा** = कीर्तिले
**आप्लुतान्** = भरिएका
**लोकान्** = लोकहरूमा
**पर्यटामि** = घुम्दछु
**मां** = (अब) मलाई
**अनुजानीहि** = जाने आज्ञा दिनुहोस्

**वाक्यार्थ—** हे भगवान् ! हजुरको कीर्ति संसारभर फैलिएको छ। अब म संसारलाई पवित्र पार्ने तिनै हजुरका यशको गान गर्दै संसारमा भ्रमण गर्दछु। अब मलाई जाने आज्ञा दिनुहोस्।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**ब्रह्मन् धर्मस्य वक्ताहं कर्ता तदनुमोदिता।**
**तच्छिक्षयँल्लोकमिममास्थितः पुत्र मा खिदः॥ ४०॥**

**पदार्थ—**
**ब्रह्मन्** = हे ब्राह्मणदेव !
**अहं** = म
**धर्मस्य** = धर्मको
**वक्ता** = उपदेश गर्नेवाला
**कर्ता** = आचरण गर्नेवाला र
**तदनुमोदिता** = त्यसलाई अनुमोदन गर्नेवाला हुँ
**लोकं** = संसारलाई
**तत्** = त्यो धर्माचरण
**शिक्षयन्** = सिकाउनका निम्ति
**इमं** = यो लीला
**आस्थितः** = मैले गरेको हुँ
**पुत्र** = हे प्रिय पुत्र नारद
**मा खिदः** = तिमी मोहित नहोऊ

**वाक्यार्थ—** हे ब्राह्मणदेव ! म नै धर्मको उपदेशक, परिपालक र त्यसको अनुमोदन गर्नेवाला हुँ।

संसारलाई धर्मको आचरणको शिक्षा दिनका निम्ति नै मैले यी सबै लीला गरेको हुँ। अतः हे प्रिय पुत्र नारद ! तिमी यसमा मोहित नहोऊ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्याचरन्तं सद्धर्मान् पावनान् गृहमेधिनाम्।**

**तमेव सर्वगेहेषु सन्तमेकं ददर्श ह ॥ ४१ ॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**गृहमेधिनां** = गृहस्थहरूलाई
**पावनान्** = पवित्र गर्ने
**सद्धर्मान्** = उत्तम धर्महरू
**आचरन्तं** = परिपालन गर्नुहुने
**तम् एव** = उनै
**एकं** = एउटै श्रीकृष्णलाई
**सर्वगेहेषु** = सबै महलमा
**सन्तं** = रहनुभएको
**ददर्श ह** = देख्नुभयो

**वाक्यार्थ–** यसप्रकार भगवान् श्रीकृष्णले गृहस्थहरूलाई पवित्र गर्ने उत्तम धर्महरूको परिपालन गर्नुहुन्थ्यो। यद्यपि भगवान् एक मात्र हुनुहुन्थ्यो, तर पनि देवर्षि नारदले उहाँलाई प्रत्येक पत्नीहरूका साथ अलग-अलग महलहरूमा देख्नुभयो।

**कृष्णस्यानन्तवीर्यस्य योगमायामहोदयम्।**

**मुहुर्दृष्ट्वा ऋषिरभूद् विस्मितो जातकौतुकः ॥ ४२ ॥**

**पदार्थ–**
**जातकौतुकः** = भगवान्को लीला जान्ने इच्छा गर्नुभएका
**ऋषिः** = ऋषि नारदजी
**अनन्तवीर्यस्य** = परम शक्तिशाली
**कृष्णस्य** = श्रीकृष्णको
**योगमायामहोदयं** = योगशक्तिको प्रभावलाई
**मुहुः** = बारम्बार
**दृष्ट्वा** = देखेर
**विस्मितः** = आश्चर्यचकित
**अभूत्** = हुनुभयो

**वाक्यार्थ–** भगवान्को लीला जान्ने इच्छाले आउनुभएका नारदजी परम शक्तिशाली श्रीकृष्णको मायाशक्तिको प्रभावलाई बारम्बार देखेर आश्चर्यचकित हुनुभयो।

**इत्यर्थकामधर्मेषु कृष्णेन श्रद्धितात्मना।**

**सम्यक् सभाजितः प्रीतस्तमेवानुस्मरन् ययौ ॥ ४३ ॥**

**पदार्थ–**
**इति** = यसरी
**अर्थकामधर्मेषु** = अर्थ, काम र धर्मरूप त्रिविध पुरुषार्थमा
**श्रद्धितात्मना** = श्रद्धा राख्ने
**कृष्णेन** = श्रीकृष्णद्वारा
**सम्यक्** = राम्ररी
**सभाजितः** = सम्मानित हुनुभएका र
**प्रीतः** = त्यसबाट प्रसन्न हुनुभएका नारदजी
**तम् एव** = उनै भगवान् श्रीकृष्णलाई नै
**अनुस्मरन्** = स्मरण गर्दै
**ययौ** = (त्यहाँबाट) जानुभयो

**वाक्यार्थ–** यसरी अर्थ, काम र धर्मरूप त्रिविध पुरुषार्थमा लोकशिक्षाका निम्ति अति श्रद्धा राख्नुहुने श्रीकृष्णले नारदजीको प्रेमपूर्वक सेवा सत्कार गर्नुभयो। त्यसबाट प्रसन्न हुनुभएका नारदजी पनि बारम्बार भगवान्‌को स्मरण गर्दै त्यहाँबाट हिँड्नुभयो।

**एवं मनुष्यपदवीमनुवर्तमानो नारायणोऽखिलभवाय गृहीतशक्तिः।**
**रेमेऽङ्ग षोडशसहस्रवराङ्गनानां सव्रीडसौहृदनिरीक्षणहासजुष्टः॥ ४४॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
**एवं** = यसप्रकार
**मनुष्यपदवीम्** = मनुष्यका जस्तो लीला
**अनुवर्तमानः** = गरिरहनुभएका
**अखिलभवाय** = सम्पूर्ण लोकको कल्याणका निम्ति
**गृहीतशक्तिः** = मायाशक्तिलाई स्वीकार गर्नुभएका
**नारायणः** = नारायणस्वरूप भगवान् श्रीकृष्णले
**षोडशसहस्रवराङ्गनानां** = सोह्र हजार सुन्दरी पत्नीहरूका
**सव्रीडसौहृदनिरीक्षणहासजुष्टः** = लज्जा सहितको प्रेम, हेराइ, मुस्कान आदिद्वारा सेवित भएर
**रेमे** = रमण गर्नुभयो

**वाक्यार्थ–** हे प्रिय परीक्षित्! यसप्रकार लोककल्याणका निम्ति मायाशक्तिलाई स्वीकार गरी मनुष्यका झैँ अनेक किसिमका लीला गर्ने नारायणस्वरूप भगवान् श्रीकृष्णले सोह्र हजार सुन्दरी पत्नीहरूका लज्जा सहितको प्रेम, हेराइ, मुस्कान आदिद्वारा सेवित हुँदै रमण गर्नुभयो।

**यानीह विश्वविलयोद्भववृत्तिहेतुः**
**कर्माण्यनन्यविषयाणि हरिश्चकार॥**
**यस्त्वङ्ग गायति शृणोत्यनुमोदते वा**
**भक्तिर्भवेद् भगवति ह्यपवर्गमार्गे॥ ४५॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
**इह** = यस संसारमा
**विश्वविलयोद्भववृत्तिहेतुः** = विश्वको प्रलय, उद्भव र स्थितिका कारण भएका
**हरिः** = भगवान् श्रीकृष्णले
**अनन्यविषयाणि** = अरूले गर्न नसक्ने
**यानि** = जे-जति
**कर्माणि**= कर्महरू
**चकार** = गर्नुभयो (तिनलाई)
**यः तु** = जसले
**गायति** = गाउँछ
**शृणोति** = सुन्छ
**अनुमोदते वा** = अथवा स्वीकार गर्छ (त्यसको)
**हि** = निश्चय नै
**अपवर्गमार्गे** = मोक्षको मार्ग
**भगवति** = भगवान्मा
**भक्तिः** = प्रेमरूप भक्ति
**भवेत्** = हुन्छ

**वाक्यार्थ–** हे राजा परीक्षित्! भगवान् श्रीकृष्ण विश्वको प्रलय, उद्भव र स्थितिका एक मात्र कारण हुनुहुन्छ। उहाँले लोकशिक्षाका निम्ति यस संसारमा अरूले गर्न नसक्ने थुप्रै लीलाहरू गर्नुभएको छ। जसले भगवान्‌का यी दिव्य लीलाहरूलाई सुन्ने, गाउने अथवा स्वीकार गर्ने गर्दछ

त्यसले अवश्य पनि मोक्षका मार्ग भगवान्मा प्रेमरूप भक्ति प्राप्त गर्दछ।

**अध्यायविवरण–** यस अध्यायमा देवर्षि नारदले श्रीकष्णको अनन्त ऐश्वर्यलाई साक्षात्कार गर्नुभएको वर्णन गरिएको छ। नारदलाई श्रीकृष्णले एक्लैले एकै चोटि हजारौँ कन्याहरूसँग कसरी विवाह गर्नुभयो र उहाँको व्यवहार कसरी चल्दछ होला भन्ने विषयमा सन्देह भएको थियो। श्रीकृष्णका विचित्र लीलाचरित्र देख्दा सामान्य व्यक्तिहरूको बुद्धि भ्रान्त हुनु त स्वाभाविक नै हो र कहिलेकाहीँ त यसले विवेकीहरूको बुद्धिलाई पनि मोहित गरिदिन्छ। अज्ञानी मानिसहरू श्रीकृष्णले हजारौँ कन्यासँग विवाह गर्नु असम्भव एवं अविवेकी कार्य भएको ठान्दछन्। यसबाट श्रीकृष्णमा स्त्रीप्रतिको अत्यधिक आसक्ति थियो भनी पुष्टि गर्न खोज्छन्, तर यथार्थ कुरो के हो भने श्रीकृष्णले सोह्र हजार कन्याहरूसँग भोगेच्छाले विवाह गर्नुभएको होइन। नरकासुरले हरण गरिसकेकाले अब कसैले पनि स्वीकार नगर्ने अवस्थामा पुगेका ती असहाय कन्याहरूलाई संरक्षण गरी भगवान्ले उनीहरूको आत्मसम्मानको रक्षा गर्नुभएको हो। असहाय व्यक्तिहरूलाई गौरवपूर्ण जीवन र प्रेमसम्बन्ध दिनु सानो उदारता होइन। यो त केवल भगवान्ले मात्र गर्न सक्ने लोकोत्तर दयाशीलता हो।

सोह्र हजार कन्याहरूलाई विवाह गरिसकेपछि भगवान्ले तिनलाई कसरी समय दिनुहुन्थ्यो ? उहाँले एक दिन एउटाको लागि समय दिए पनि सोह्र हजार दिन अर्थात् लगभग चवालीस वर्ष लाग्थ्यो। त्यसो भए उहाँले ती सबै रानीहरूलाई स्नेह दिन सक्नुहोला त ? भन्ने शङ्का नारदलाई थियो। तर द्वारकामा त श्रीकृष्ण एउटा मात्र नभई हरेक रानीकहाँ छुट्टाछुट्टै हुनुहुँदो रहेछ। उहाँले हजारौँसँग पालैपालो नभई छुट्टाछुट्टै रानीहरूसँग छुट्टाछुट्टै रूपमा रही व्यवहार गर्नुभएको देखियो। जो सोह्र हजार ओटा बन्न सक्दछ, त्यसले सोह्र हजार विवाह गर्नु पनि आश्चर्य हुँदैन। भगवान्का सम्पूर्ण लीलाहरू अनुकरण गर्न योग्य हुन्छन् भन्ने छैन। त्यसैले ईश्वरले गरेका लीलाहरूलाई सामान्य मानिसहरूले आफ्नो अनुकूल अर्थ्याउनु हुँदैन। श्रीकृष्णको अनुकरण गरेर कसैले हजारौँ विवाह गर्‍यो भने उसले के ती सबै पत्नीहरूसँग अलग–अलग रूपमा रही व्यवहार गर्न सक्छ ? श्रीकृष्णको विवाहलीलाले दुई ओटा कुरालाई स्पष्ट गरेको छ। लौकिक रूपमा श्रीकृष्णले असहाय स्त्रीहरूलाई स्वीकार गरी तिनमाथि दया गर्नुभएको देखाउँछ भने सबैसँग अलग–अलग हुने अलौकिक लीलाले चाहिँ उहाँको ईश्वरीय सामर्थ्यलाई सूचित गर्दछ। यसरी कृष्णले सोह्र हजार विवाह गर्नु अनुपयुक्त देखिँदैन।

आध्यात्मिक अर्थमा चाहिँ श्रीकृष्णले सोह्र हजार ओटा विवाह गर्नुले आत्मा षोडशकला विशिष्ट हुनुको रहस्यतर्फ सङ्केत गरेको छ। उपनिषद्हरूमा सोह्र कलाले युक्त पुरुषको विवेचन गरिएको छ। पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय, पाँच प्राण अनि एउटा अन्तःकरण गरी सूक्ष्म शरीरका सोह्र ओटा कलाहरू छन्। यी आत्माका उपाधि हुन्। आत्मा यी सबैभन्दा भिन्न भएर पनि यी सबैसँग मिसिए झैँ लौकिक व्यवहार गरिरहेको छ। यी सबै इन्द्रिय, अन्तःकरण आदिका हजारौँ अवान्तर वृत्तिहरू हुन्छन्। हजार शब्दले अनन्त भन्ने अर्थलाई पनि बुझाउने भएकाले यी अनन्त अवान्तर वृत्तिहरूले सहित सोह्र कलाहरू सोह्र हजारको सङ्ख्यामा पुग्छन्। ती सबै आत्माबाट नै प्रकाशित हुन्छन् र आत्माकै भोगका लागि भनेर ती अनेक वृत्तिहरूले संसारमा

व्यवहार गर्दछन्। कौषीतक्युपनिषद्मा सबै इन्द्रियहरूले आ-आफ्नो विषयभोग गर्नु भनेको तिनले ती विषयलाई आत्माकहाँ उपहार ल्याउनु हो भनी बताइएको छ— **तस्मै वा एतस्मै प्राणाय ब्रह्मण एताः सर्वा देवता अयाचमानाय बलिं हरन्ति** (२।१)। यसरी श्रीकृष्णको सेवा गर्ने ती रानीहरू आत्माको भोगका लागि विषयहरूको उपहार ल्याउने इन्द्रिय, अन्तःकरण आदिका प्रतीक हुन्। सम्पूर्ण वृत्तिहरूको एक मात्र आश्रय आत्मा भए झैँ सम्पूर्ण रानीहरूका एक मात्र आधार श्रीकृष्ण नै हुनुहुन्छ।

श्रीकृष्णले सोह्र हजार रानीहरूलाई विवाह गर्नुको तात्पर्य विषयतर्फ अभिमुख इन्द्रिय आदिलाई आफूमा लीन गर्नु या आत्मातिर लगाउनु हो। नरक भनेको दुःखमय संसार हो। संसारका विषयहरूको आसक्तिरूपी कारागारमा सम्पूर्ण इन्द्रियहरू थुनिएका छन्। अनादिकालीन दासताको कारणले इन्द्रियहरू आफ्नै बलले यसबाट छुट्न सक्दैनन्। तिनलाई त्यो बन्धनबाट छुटाउन भगवान्ले आफैँ कृपा गर्नुपर्दछ। जब इन्द्रियहरू संसारको बन्धनबाट छुट्दछन् तब उनीहरूका लागि परमात्माबाहेक अर्को वरणीय को हुन्छ र ? त्यसैले ती सबैले परमात्मालाई नै आफ्नो आश्रयको रूपमा वरण गरेका छन्। यी रहस्य नबुझ्ने अज्ञानीहरूले भगवान्को लीलामा तर्कवितर्क गर्नुको केही अर्थ छैन। प्रस्तुत प्रसङ्गमा पनि भगवान्को लीलामा नारदको यस्तै सन्देहको निवारण गरिएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे कृष्णगार्हस्थ्यदर्शनं नामैकोनसप्ततितमोऽध्यायः ॥ ६९॥**

# अथ सप्ततितमोऽध्यायः

## जरासन्धद्वारा कैदी बनाइएका राजाहरूले भगवान् श्रीकृष्णसमक्ष दूत पठाउनु

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथोषस्युपवृत्तायां कुक्कुटान् कूजतोऽशपन्।**

**गृहीतकण्ठ्यः पतिभिर्माधव्यो विरहातुराः॥ १॥**

**पदार्थ–**
**अथ** = यसपछि
**उषसि** = बिहानी
**उपवृत्तायां** = हुन लागेपछि
**विरहातुराः** = भगवान्सँग सँगै बस्न नपाइने भयो भनेर आत्तिएका
**पतिभिः** = पति श्रीकृष्णद्वारा
**गृहीतकण्ठ्यः** = अँगालो हालिएका
**माधव्यः** = कृष्णपत्नीहरूले
**कूजतः** = बिहानीको सङ्केत गर्दै बास्न लागेका
**कुक्कुटान्** = कुखुराहरूलाई
**अशपन्** = गाली गर्न थाले

**वाक्यार्थ–** बिहानी हुन लाग्दा कुखुराहरू बास्न थालेको सुनेर भगवान् श्रीकृष्णको अँगालोमा रहेका उहाँका पत्नीहरू अब भगवान्सँग सँगै बस्न नपाइने भयो भनेर आत्तिए र उनीहरूले बिहानीको सङ्केत गर्दै बास्न लागेका कुखुराहरूलाई गाली गर्न लागे।

**वयांस्यरुरुवन् कृष्णं बोधयन्तीव वन्दिनः।**

**गायत्स्वलिष्वनिद्राणि मन्दारवनवायुभिः॥ २॥**

**पदार्थ–**
**मन्दारवनवायुभिः** = पारिजातको वनबाट आएको सुगन्धित वायुले
**अनिद्राणि** = निद्रा हराएका
**अलिषु** = भमराहरूले
**गायत्सु** = भुँ-भुँ गर्न थालेपछि
**वयांसि** = चराहरू
**वन्दिनः इव** = स्तुतिपाठकहरूले झैं
**कृष्णं** = श्रीकृष्णलाई
**बोधयन्ति** = ब्युँझाउँदै
**अरुरुवन्** = मधुर स्वरमा चिर्बिराउन लागे

**वाक्यार्थ–** त्यस वेला पारिजातको वनबाट आएको सुगन्धित हावाले ब्युँझिएका भमराहरू भुँ-भुँ गरी भुन्भुनाउन लागे। त्यो सुनेर ब्युँझिएका चराहरूले भगवान् श्रीकृष्णलाई ब्युँझाउनका निम्ति स्तुतिपाठकहरूले स्तुति गरेझैं मधुरो स्वरमा चिर्बिर गर्न लागे।

**मुहूर्तं तं तु वैदर्भी नामृष्यदतिशोभनम्।**

**परिरम्भणविश्लेषात् प्रियबाह्वन्तरं गता॥ ३॥**

**पदार्थ–**
**प्रियबाह्वन्तरं गता** = प्रिय श्रीकृष्णको अँगालोमा

बाँधिएकी
**वैदर्भी** = रुक्मिणीले
**तं** = त्यो
**अतिशोभनं** = अत्यन्त सुन्दर
**मुहूर्तं तु** = प्रातःकाललाई पनि
**परिरम्भणविश्लेषात्** = अँगालो छुट्ने डरले
**न अमृष्यत्** = सहन सकिनन्

**वाक्यार्थ–** श्रीकृष्णको अँगालोमा बाँधिएर सुतिरहेकी रुक्मिणीले भगवान्को अँगालोबाट छुट्टिनुपर्ने डरले त्यो अत्यन्त सुन्दर प्रातःकाललाई पनि सहन गर्न सकिनन्।

**ब्राह्मे मुहूर्त उत्थाय वार्युपस्पृश्य माधवः।**
**दध्यौ प्रसन्नकरण आत्मानं तमसः परम्॥ ४॥**

**पदार्थ–**
**माधवः** = भगवान् श्रीकृष्णले
**ब्राह्मे मुहूर्ते** = ब्राह्म मुहूर्तमा
**उत्थाय** = उठेर
**वारि** = पानी
**उपस्पृश्य** = छोएर (स्नानादि गरेर)
**प्रसन्नकरणः** = शान्त चित्त भएर
**तमसः** = मायादेखि
**परं** = भिन्न
**आत्मानं** = आत्मस्वरूपको
**दध्यौ** = ध्यान गर्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले ब्राह्म मुहूर्तमा उठेर र स्नानादि नित्यकर्म सकेपछि शान्त चित्तले मायादेखि भिन्न आत्मस्वरूपको ध्यान गर्नुभयो।

**विवरण–** यस अध्यायमा भगवान् श्रीकृष्णका दिनचर्याको वर्णन गरिएको छ। हजारौँ पत्नीहरूसँग हजारौँ रूपले विहार गर्दा पनि उहाँ धर्ममर्यादामैँ हुनुहुन्छ भन्ने देखाउन यहाँ श्रीकृष्णको नित्यकर्मको वर्णन गरिएको हो। भगवान् धर्ममर्यादाका प्रवर्तक र संरक्षक हुनुहुन्छ। यद्यपि स्वयं परमात्मा धर्म-अधर्मबाट पर हुनुभएकाले उहाँका लागि धर्मपालन गर्नु आवश्यक छैन। भगवत्तत्त्वलाई जान्ने ज्ञानीहरू पनि वेदमार्गलाई अतिक्रमण गर्दछन्– **अत्र ... वेदा अवेदा** (बृहदारण्यकोपनिषद्, ४।३।२२) भनी शास्त्रमा बताइएको छ। स्वयं परमात्मामा त शास्त्र र धर्मको बन्धन कसरी सम्भव छ र? तर पनि लोकको मर्यादालाई पालन गर्दै भगवत्प्राप्त महापुरुष एवं भगवान्ले पनि आफ्नो कर्तव्यपालन गर्नुहुन्छ। यसलाई लोकसङ्ग्रह भनिन्छ। गीता (३।२४)मा भगवान्ले आफूले कर्तव्य कर्म नगर्ने हो भने सम्पूर्ण प्राणीहरूले यसैलाई हेरी अकर्मण्य बन्ने अवस्था आउँछ भन्नुभएको छ– **उत्सीदेयुरिमे लोका न कुर्यां कर्म चेदहम्।**

यहाँ भगवान्ले प्रातःकालमा आफ्नो वास्तविक स्वरूपको ध्यान गर्नुभएको बताइएको छ। ब्राह्म मुहूर्तमा उठ्ने, स्नान, सन्ध्या, दान, होम आदि गर्ने दिनचर्या देखाई भगवान् श्रीकृष्णले लौकिक मर्यादाको संरक्षण गर्नुभएको बताइएको छ।

**एकं स्वयंज्योतिरनन्यमव्ययं स्वसंस्थया नित्यनिरस्तकल्मषम्।**
**ब्रह्माख्यमस्योद्भवनाशहेतुभिः स्वशक्तिभिर्लक्षितभावनिर्वृतिम्॥ ५॥**

**पदार्थ–**
**एकं** = अद्वितीय
**स्वयंज्योतिः** = स्वयंप्रकाश
**अनन्यं** = भेदरहित
**अव्ययं** = अविनाशी
**स्वसंस्थया** = आत्मस्वरूपमा

अडिग रहने हुनाले
**नित्यनिरस्तकल्मषं** = नित्य निर्मल
**अस्य** = यस संसारको
**उद्भवनाशहेतुभिः** = उत्पत्ति, स्थिति र नाशका कारण भएका
**स्वशक्तिभिः** = आफ्ना मायाशक्तिहरूद्वारा
**लक्षितभावनिर्वृतिं** = परमानन्दस्वरूपमा चिनिएको
**ब्रह्माख्यम्** = परब्रह्म नामक आत्मस्वरूपको (ध्यान गर्नुभयो)

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले अद्वितीय स्वयंप्रकाश, भेदरहित, अविनाशी, नित्यनिर्मल तथा यस संसारको उत्पत्ति, स्थिति र नाशको कारण भएको आफ्ना मायाशक्तिहरूद्वारा परमानन्दस्वरूपमा परिचित परब्रह्मनामक आत्मस्वरूपको ध्यान गर्नुभयो।

**अथाप्लुतोऽम्भस्यमले यथाविधि क्रियाकलापं परिधाय वाससी।**
**चकार सन्ध्योपगमादि सत्तमो हुतानलो ब्रह्म जजाप वाग्यतः॥ ६॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**सत्तमः** = परम सत्स्वरूप भगवान् श्रीकृष्णले
**अमले** = निर्मल
**अम्भसि** = जलमा
**अप्लुतः** = स्नान गरेर
**वाससी** = पवित्र वस्त्र
**परिधाय** = लगाएर
**सन्ध्योपगमादि** = सन्ध्यावन्दन आदि
**क्रियाकलापं** = क्रियाकलाप
**यथाविधि** = शास्त्रीय विधि अनुसार
**चकार** = गर्नुभयो (त्यसपछि)
**हुतानलः** = अग्निमा हवन आदि कर्म गर्नुभएका भगवान्ले
**वाग्यतः** = मौन भएर
**ब्रह्म** = परब्रह्म आत्मतत्त्वको
**जजाप** = जप गर्नुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान्ले विधिपूर्वक पवित्र जलमा स्नान गर्नुभयो र पवित्र वस्त्र धारण गरी शास्त्रीय विधि अनुसार सन्ध्यावन्दन आदि कर्म गर्नुभयो। त्यसपछि उहाँले अग्निमा हवन आदि कर्म गरिसकेपछि मौन रही परब्रह्म परमात्माको जप गर्नुभयो।

**उपस्थायार्कमुद्यन्तं तर्पयित्वात्मनः कलाः।**
**देवानृषीन् पितृन् वृद्धान् विप्रानभ्यर्च्य चात्मवान्॥ ७॥**
**धेनूनां रुक्मशृङ्गीणां साध्वीनां मौक्तिकस्रजाम्।**
**पयस्विनीनां गृष्टीनां सवत्सानां सुवाससाम्॥ ८॥**
**ददौ रूप्यखुराग्राणां क्षौमाजिनतिलैः सह।**
**अलङ्कृतेभ्यो विप्रेभ्यो बद्वं बद्वं दिने दिने॥ ९॥**

**पदार्थ–**
**आत्मवान्** = धीर भगवान् श्रीकृष्णले
**उद्यन्तं** = उदाइरहेका
**अर्कम्** = सूर्यलाई
**उपस्थाय** = अगाडिपट्टि पारेर
**आत्मनः** = आफ्नै
**कलाः** = अंशस्वरूप
**देवान्** = देवताहरू
**ऋषीन्** = ऋषिहरू
**पितृन्** = पितृहरूलाई पनि
**तर्पयित्वा** = तर्पण गरेर

**वृद्धान्** = बुढापाका
**विप्रान् च** = ब्राह्मणहरूलाई पनि
**अभ्यर्च्य** = पूजा गरेर
**दिने दिने** = प्रतिदिन
**अलङ्कृतेभ्यः** = सुसज्जित भएका
**विप्रेभ्यः** = ब्राह्मणहरूलाई
**क्षौमाजिनतिलैः सह** = रेशमी वस्त्र, मृगचर्म र तिलका साथमा
**रुक्मशृङ्गीणां** = सुनले सिङ सजाइएका
**मौक्तिकस्रजां** = मोतीको माला लगाएका
**सुवाससां** = राम्रा-राम्रा कपडाले सजिएका
**साध्वीनां** = सीधासादा
**पयस्विनीनां** = दुधालु
**गृष्टीनां** = पहिलो बेते
**सवत्सानां** = बाच्छोले सहित
**रूप्यखुराग्राणां** = चाँदीले बेरिएका खुर भएका
**धेनूनां** = गाईहरू
**बद्वं बद्वं** = तेह्र हजार चौरासी सङ्ख्या
**ददौ** = दान गर्नुहुन्थ्यो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्ण उदाउँदै गरेका सूर्यपट्टि फर्केर आफ्ना अंशस्वरूप देवता, ऋषि तथा पितृहरूको तर्पण आदि कर्म गर्नुहुन्थ्यो। प्रतिदिन त्यसपछि उहाँ कुलका वृद्ध ब्राह्मणहरूको मर्यादा अनुसार पूजा गर्नुहुन्थ्यो र राम्रा-राम्रा वस्त्र र अलङ्कारले सजिएका ब्राह्मणहरूलाई सुनले सजाइएका सिङ भएका, मोतीको माला लगाएका, सुन्दर कपडाले सजिएका, चाँदीले बेरिएका खुर भएका, सीधासादा, अति दुधालु, पहिलो बेते, बाच्छाले सहित भएका तेह्र हजार चौरासी (१३,०८४) गाईहरू रेशमी वस्त्र, मृगचर्म र तिलसहित दान गर्नुहुन्थ्यो।

**गोविप्रदेवतावृद्धगुरून् भूतानि सर्वशः।**
**नमस्कृत्यात्मसम्भूतीर्मङ्गलानि समस्पृशत्॥ १०॥**

**पदार्थ–**
**आत्मसम्भूतीः** = आफ्नै विभूतिरूप भएका
**गोविप्रदेवतावृद्धगुरून्** = गाई, ब्राह्मण, देवता, वृद्धजन र गुरुवर्गलाई र
**सर्वशः** = सम्पूर्ण
**भूतानि** = प्राणीहरूलाई
**नमस्कृत्य** = नमस्कार गरेर
**मङ्गलानि** = माङ्गलिक वस्तुहरू
**समस्पृशत्** = छुनुहुन्थ्यो

**वाक्यार्थ–** त्यसपछि उहाँ आफ्नै विभूतिस्वरूप भएका गाई, ब्राह्मण, देवता, वृद्धजन, गुरुवर्ग र सम्पूर्ण प्राणीहरूलाई नमस्कार गरी माङ्गलिक वस्तुहरू छुनुहुन्थ्यो।

**आत्मानं भूषयामास नरलोकविभूषणम्।**
**वासोभिर्भूषणैः स्वीयैर्दिव्यस्रगनुलेपनैः॥ ११॥**

**पदार्थ–**
**नरलोकविभूषणं** = मनुष्यलोकका निम्ति स्वयं आभूषण भएको
**आत्मानं** = आफ्नो शरीरलाई
**स्वीयैः** = आफ्ना
**वासोभिः** = पीताम्बर आदि वस्त्र र
**भूषणैः** = किरीट, कुण्डल आदि आभूषणहरू र
**दिव्यस्रगनुलेपनैः** = सुगन्धित पुष्पमाला र चन्दन आदि लेपहरूद्वारा
**भूषयामास** = सुसज्जित गर्नुहुन्थ्यो

**वाक्यार्थ–** मनुष्यलोकका निम्ति स्वयं आभूषण भएको आफ्नो शरीरलाई भगवान् श्रीकृष्णले

पीताम्बर आदि सुन्दर वस्त्र, किरीट, कुण्डल आदि आभूषणहरू तथा सुगन्धित पुष्पमाला र चन्दन आदि लेपहरूद्वारा झनै सुसज्जित पार्नुहुन्थ्यो।

**अवेक्ष्याज्यं तथादर्शं गोवृषद्विजदेवताः।**

**कामांश्च सर्ववर्णानां पौरान्तःपुरचारिणाम्॥**

**प्रदाप्य प्रकृतीः कामैः प्रतोष्य प्रत्यनन्दत॥ १२॥**

**पदार्थ—**
**आज्यं** = घिउ
**तथा** = तथा
**आदर्शं** = ऐना
**गोवृषद्विजदेवताः** = गाई, गोरु, ब्राह्मण, देवता आदि माङ्गलिक वस्तुहरू
**अवेक्ष्य** = हेरेर
**सर्ववर्णानां** = सबै प्रकारका
**पौरान्तःपुरचारिणां** = नगरवासी र अन्तःपुरवासीहरूका
**कामान्** = चाहनाहरू
**प्रदाप्य च** = पूरा गरिदिएर पनि
**प्रकृतीः** = मन्त्री आदि कर्मचारीवर्गलाई
**कामैः** = अभिलषित कुरा दिएर
**प्रतोष्य** = प्रसन्न गराएर
**प्रत्यनन्दत** = आफू पनि प्रसन्न हुनुहुन्थ्यो

**वाक्यार्थ—** त्यसपछि भगवान् श्रीकृष्ण घिउ, ऐना आदिमा आफ्नो अनुहार हेर्नुहुन्थ्यो अनि गाई, गोरु, ब्राह्मण र देवताहरूको दर्शन गर्ने गर्नुहुन्थ्यो। त्यस्तै अन्तःपुरभित्र बस्ने तथा त्यस सहरमा बस्ने सबै प्रकारका मानिसहरूलाई कामना अनुसारका वस्तुहरू दिनुहुन्थ्यो भने मन्त्री आदि कर्मचारीवर्गलाई समेत इच्छा अनुसारको कुरा दिएर प्रसन्न गराउनुहुन्थ्यो। यसरी अरूलाई प्रसन्न गराएर उहाँ आफू पनि प्रसन्न हुनुहुन्थ्यो।

**संविभज्याग्रतो विप्रान् स्रक्ताम्बूलानुलेपनैः।**

**सुहृदः प्रकृतीर्दारानुपायुङ्क्त ततः स्वयम्॥ १३॥**

**पदार्थ—**
**स्रक्ताम्बूलानुलेपनैः** = पुष्पमाला, पान र चन्दन आदि
**अग्रतः** = पहिला
**विप्रान्** = ब्राह्मणहरूलाई
**सुहृदः** = मित्रहरूलाई
**प्रकृतीः** = मन्त्री आदि कर्मचारीहरू र
**दारान्** = पत्नीहरूलाई
**संविभज्य** = भाग लगाएर
**ततः** = त्यसपछि मात्र
**स्वयं** = आफूले
**उपायुङ्क्त** = उपभोग गर्नुहुन्थ्यो

**वाक्यार्थ—** भगवान् श्रीकृष्णले ती पुष्पमाला, पान, चन्दन आदि सुगन्धित भोगसामग्रीहरू पहिला ब्राह्मणलाई र त्यसपछि मित्र, मन्त्री आदिलाई र रानीहरूलाई बाँड्नुहुन्थ्यो अनि मात्र आफूले उपभोग गर्नुहुन्थ्यो।

**तावत् सूत उपानीय स्यन्दनं परमाद्भुतम्।**

**सुग्रीवाद्यैर्हयैर्युक्तं प्रणम्यावस्थितोऽग्रतः॥ १४॥**

**पदार्थ—**
**तावत्** = त्यति वेलासम्म
**सूतः** = सारथि (दारुक)
**सुग्रीवाद्यैः** = सुग्रीव आदि
**हयैः** = घोडाहरूले
**युक्तं** = युक्त भएको
**परमाद्भुतं** = अत्यन्त आश्चर्यलाग्दो
**स्यन्दनं** = रथ
**उपानीय** = ल्याएर
**प्रणम्य** = नमस्कार गर्दै
**अग्रतः** = अगाडि
**अवस्थितः** = बसिसकेका हुन्थे

**वाक्यार्थ—** त्यतिवेलासम्म दारुण नामका सारथि शैव्य, सुग्रीव, मेघपुष्प र बलाहक नामका घोडाहरूले युक्त भएको अत्यन्त आश्चर्यलाग्दो रथ ल्याएर नमस्कार गर्दै भगवान्को अगाडि बसिसकेका हुन्थे।

**गृहीत्वा पाणिना पाणी सारथेस्तमथारुहत्।**
**सात्यक्युद्धवसंयुक्तः पूर्वाद्रिमिव भास्करः॥ १५॥**

**पदार्थ—**
**अथ** = त्यसपछि
**पाणिना** = आफ्ना हातले
**सारथेः** = सारथिका
**पाणी** = हात
**गृहीत्वा** = समातेर
**सात्यक्युद्धवसंयुक्तः** = सात्यकि र उद्धवले सहित हुनुभएका भगवान् श्रीकृष्ण
**भास्करः** = सूर्य
**पूर्वाद्रिम् इव** = पूर्वको उदय पर्वतमा आउनुभए झैँ
**तं** = त्यो सुन्दर रथमा
**आरुहत्** = चढ्नुहुन्थ्यो

**वाक्यार्थ—** त्यसपछि सात्यकि र उद्धवले सहित हुनुभएका भगवान् श्रीकृष्ण सारथिका हात समातेर सूर्यनारायण पूर्वको उदय पर्वतमा आरूढ भए झैँ त्यस दिव्य रथमा चढ्नुहुन्थ्यो।

**ईक्षितोऽन्तःपुरस्त्रीणां सव्रीडप्रेमवीक्षितैः।**
**कृच्छ्राद् विसृष्टो निरगाज्जातहासो हरन्मनः॥ १६॥**

**पदार्थ—**
**अन्तःपुरस्त्रीणां** = अन्तःपुरका स्त्रीहरूका
**सव्रीडप्रेमवीक्षितैः** = लाज र प्रेमले भरिएका हेराइले
**ईक्षितः** = हेरिनुभएका
**कृच्छ्रात्** = कष्टपूर्वक
**विसृष्टः** = विदा गरिनुभएका
**जातहासः** = मन्दमुस्कानयुक्त भगवान् श्रीकृष्ण
**मनः** = ती स्त्रीहरूको मनलाई
**हरन्** = हरण गर्दै
**निरगात्** = निस्कनुहुन्थ्यो

**वाक्यार्थ—** त्यस समय अन्तःपुरका स्त्रीहरूले लाज र प्रेमले भरिएका नजरले टोलाएर हेर्दै कष्टसँग उहाँलाई बिदा गर्दथे। भगवान् चाहिँ मुस्कुराएर तिनीहरूको मनलाई हरण गर्दै महलबाट बाहिर निस्कनुहुन्थ्यो।

**सुधर्माख्यां सभां सर्वैर्वृष्णिभिः परिवारितः।**
**प्राविशद् यन्निविष्टानां न सन्त्यङ्ग षडूर्मयः॥ १७॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
(त्यसपछि)
**सर्वैः** = सम्पूर्ण
**वृष्णिभिः** = यदुवंशीहरूद्वारा
**परिवारितः** = सहित हुनुभएका
भगवान् श्रीकृष्ण
**सुधर्माख्यां** = सुधर्मा नाम गरेको
**सभां** = सभामा
**प्राविशत्** = प्रवेश गर्नुहुन्थ्यो
**यत्** = जुन सभामा
**निविष्टानां** = प्रवेश गर्नेहरूका
**षडूर्मयः** = भोक, प्यास, शोक, मोह, बुढ्याइँ र मृत्युरूप छ प्रकारका कष्टहरू
**न सन्ति** = बाँकी रहँदैनन्

**वाक्यार्थ–** हे प्रिय परीक्षित् ! त्यसपछि सम्पूर्ण यदुवंशीहरूले सहित हुनुभएका भगवान् श्रीकृष्ण सुधर्मा नाम गरेको सभामा प्रवेश गर्नुहुन्थ्यो जुन सभामा प्रवेश गर्नेहरूलाई भोक, प्यास, शोक, मोह, बुढ्याइँ र मृत्युरूप छ प्रकारका कष्टहरूले छुँदैनन्।

**तत्रोपविष्टः परमासने विभुर्बभौ स्वभासा ककुभोऽवभासयन्।**
**वृतो नृसिंहैर्यदुभिर्यदूत्तमो यथोडुराजो दिवि तारकागणैः॥ १८॥**

**पदार्थ–**
**तत्र** = त्यो सुधर्मा सभामा
**परमासने** = उच्च आसनमा
**उपविष्टः** = बस्नुभएका
**नृसिंहैः** = नरहरूमा श्रेष्ठ
**यदुभिः** = यदुवंशीहरूद्वारा
**वृतः** = घेरिनुभएका
**यदूत्तमः** = यदुवंशशिरोमणि
**विभुः** = भगवान् श्रीकृष्ण
**यथा** = जसरी
**दिवि** = आकाशमा
**तारकागणैः** = ताराहरूद्वारा घेरिएका
**उडुराजः** = चन्द्रमा सुशोभित हुन्छन्, त्यसै गरी
**स्वभासा** = आफ्नो दिव्य कान्तिले
**ककुभः** = चारै दिशा
**अवभासयन्** = प्रकाशित गर्दै
**बभौ** = सुशोभित हुनुहुन्थ्यो

**वाक्यार्थ–** त्यस सुधर्मा सभामा यदुवंश शिरोमणि भगवान् श्रीकृष्ण वीर यदुवंशीहरूद्वारा घेरिएको उच्च आसनमा विराजमान हुँदा जसरी आकाशमा ताराहरूले घेरिएका चन्द्रमा सुशोभित हुन्छन् त्यसै गरी आफ्नो दिव्य कान्तिले चारै दिशा प्रकाशित गर्दै सुशोभित हुनुहुन्थ्यो।

**तत्रोपमन्त्रिणो राजन् नानाहास्यरसैर्विभुम्।**
**उपतस्थुर्नटाचार्या नर्तक्यस्ताण्डवैः पृथक्॥ १९॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**तत्र** = त्यस सभामा
**उपमन्त्रिणः** = विदूषक आदि हास्य कलाकारहरूले
**नानाहास्यरसैः** = अनेक किसिमका हास्य रसहरूद्वारा
**नटाचार्याः** = मुख्य नर्तकहरूले र
**नर्तक्यः** = नर्तकीहरूले
**पृथक्** = भिन्न भिन्न किसिमका
**ताण्डवैः** = नृत्यहरूद्वारा
**विभुं** = भगवान् श्रीकृष्णलाई
**उपतस्थुः** = सेवा गर्दथे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! त्यस सभामा विदूषक आदि हास्य कलाकारहरूले अनेक किसिमका हास्य रसहरूद्वारा तथा नट र नर्तकीहरूले आ-आफ्नो समूहको भिन्न-भिन्न नृत्यहरू

देखाएर भगवान्‌को सेवा गर्दथे।

**मृदङ्गवीणामुरजवेणुतालदरस्वनैः।**
**ननृतुर्जगुस्तुष्टुवुश्च सूतमागधवन्दिनः॥ २०॥**

**पदार्थ–**
**सूतमागधवन्दिनः** = सूत, मागध र वन्दीहरूले
**मृदङ्गवीणामुरजवेणुताल-** **दरस्वनैः** = मृदङ्ग, वीणा, मुजुरा, बाँसुरी, ऱ्याली र शङ्खका स्वर तालमा
**ननृतुः** = नाच्दथे
**जगुः** = गाउँथे
**तुष्टुवुः च** = स्तुति पनि गर्दथे

**वाक्यार्थ–** सूत, मागध र वन्दीहरूले मृदङ्ग, वीणा, मुजुरा, बाँसुरी, ऱ्याली र शङ्खका स्वरतालमा नाच्ने, गाउने र स्तुतिपाठ गर्ने गर्दथे।

**तत्राहुर्ब्राह्मणाः केचिदासीना ब्रह्मवादिनः।**
**पूर्वेषां पुण्ययशसां राज्ञां चाकथयन् कथाः॥ २१॥**

**पदार्थ–**
**तत्र** = त्यस सुधर्मा सभामा
**आसीनाः** = बसेका
**केचित्** = केही
**ब्रह्मवादिनः** = वेदवादी
**ब्राह्मणाः** = ब्राह्मणहरूले
**आहुः** = वेदमन्त्रको व्याख्या गर्दथे (र)
**पुण्ययशसां** = पवित्र कीर्ति भएका
**पूर्वेषां** = पूर्वज
**राज्ञां** = राजा–महाराजाहरूको
**कथाः च** = इतिहास पनि
**अकथयन्** = वर्णन गर्दथे

**वाक्यार्थ–** त्यस सुधर्मा सभामा रहेका केही वेदवादी ब्राह्मणहरूले वेदका मन्त्रहरूको व्याख्या गर्दथे भने केहीले पवित्रकीर्ति भएका पूर्वज राजा–महाराजाहरूको इतिहासको वर्णन गर्दथे।

**तत्रैकः पुरुषो राजन्नागतोऽपूर्वदर्शनः।**
**विज्ञापितो भगवते प्रतीहारैः प्रवेशितः॥ २२॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**तत्र** = त्यहाँ एक दिन
**अपूर्वदर्शनः** = पहिले कहिल्यै पनि नदेखिएको
**एकः** = एक जना
**पुरुषः** = पुरुष
**आगतः** = आयो
**प्रतीहारैः** = द्वारपालहरूद्वारा
**भगवते** = भगवान्‌लाई
**विज्ञापितः** = जानकारी गराइयो
**प्रवेशितः** = त्यसलाई सभाभवनमा प्रवेश गराइयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! यसै क्रममा एक दिन त्यस राजसभामा एक जना नौलो पुरुष आइपुग्यो। द्वारपालहरूले त्यो खबर भगवान्‌लाई जानकारी गराएर त्यस पुरुषलाई सभाभवनमा प्रवेश गराए।

**स नमस्कृत्य कृष्णाय परेशाय कृताञ्जलिः ।**

**राज्ञामावेदयद् दुःखं जरासन्धनिरोधजम् ॥ २३ ॥**

**ये च दिग्विजये तस्य सन्नतिं न ययुर्नृपाः ।**

**प्रसह्य रुद्धास्तेनासन्नयुते द्वे गिरिव्रजे ॥ २४ ॥**

**पदार्थ–**
**सः** = त्यस पुरुषले
**परेशाय** = परमेश्वर
**कृष्णाय** = श्रीकृष्णलाई
**कृताञ्जलिः** = दुबै हात जोडेर
**नमस्कृत्य** = नमस्कार गरी
**जरासन्धनिरोधजं** = जरासन्धले बन्दी बनाएका कारण उत्पन्न भएको
**राज्ञां** = राजाहरूको
**दुःखं** = दुःखकष्ट
**आवेदयत्** = निवेदन गर्न लाग्यो
**ये च** = जे जति
**नृपाः** = राजाहरूले
**तस्य** = त्यो जरासन्धको
**दिग्विजये** = दिग्विजयको समयमा
**सन्नतिं** = झुक्ने काम
**न ययुः** = गरेनन् (त्यस्ता)
**अयुते द्वे** = दुई अयुत वा बीस हजार राजाहरू
**तेन** = त्यो जरासन्धद्वारा
**प्रसह्य** = बलपूर्वक
**गिरिव्रजे** = राजगिरि नामक राजधानीमा
**रुद्धाः** = थुनिएका
**आसन्** = थिए

**वाक्यार्थ–** त्यस पुरुषले सभाभित्र पसेपछि परमेश्वर श्रीकृष्णलाई दुई हात जोडी नमस्कार गऱ्यो र जरासन्धको कारागारमा थुनिइरहेका राजाहरूको दुःखपीडा निवेदन गर्न लाग्यो। जरासन्धले दिग्विजय गर्न लागेको वेला जुन-जुन राजाले उसको अगाडि टाउको निहुराएनन्, त्यस्ता बीस हजार राजाहरूलाई उसले जबरजस्ती आफ्नो राजधानी राजगिरिमा कैदी बनाएर राखेको थियो।

**कृष्ण कृष्णाप्रमेयात्मन् प्रपन्नभयभञ्जन ।**

**वयं त्वां शरणं यामो भवभीताः पृथग्धियः ॥ २५ ॥**

**पदार्थ–**
**प्रपन्नभयभञ्जन** = शरणमा आएकाहरूको डर नाश गरिदिने
**अप्रमेयात्मन्** = हे (इन्द्रियजन्य ज्ञानद्वारा) जान्न नसकिने आत्मस्वरूप
**कृष्ण कृष्ण** = हे श्रीकृष्ण, हे श्रीकृष्ण
**पृथग्धियः** = भेदबुद्धि भएका
**भवभीताः** = संसारको दुःखकष्टदेखि डराएका
**वयं** = हामीहरू
**त्वां** = हजुरको
**शरणं** = शरणमा
**यामः** = परेका छौँ

**वाक्यार्थ–** शरणमा आएकाहरूको डरलाई नाश गरिदिने, इन्द्रियजन्य ज्ञानद्वारा जान्न नसकिने आत्मस्वरूप हे श्रीकृष्ण ! भेदबुद्धि भएका र जन्ममृत्युरूप संसारदेखि डराएका हामीहरू हजुरको शरणमा परेका छौँ।

**लोको विकर्मनिरतः कुशले प्रमत्तः**

**कर्मण्ययं त्वदुदिते भवदर्चने स्वे ।**

**यस्तावदस्य बलवानिह जीविताशां**

**सद्यश्छिनत्त्यनिमिषाय नमोऽस्तु तस्मै ॥ २६ ॥**

**पदार्थ–**
**विकर्मनिरतः** = निषिद्ध कर्ममा फसेको
**यः अयं** = जुन यो
**लोकः** = प्राणीसमूह
**त्वदुदिते** = हजुरद्वारा बताइएको
**कुशले** = कल्याणकारी
**कर्मणि**= कर्ममा र
**स्वे** = आत्मस्वरूप
**भवदर्चने** = हजुरको सेवामा
**प्रमत्तः** = विमुख हुँदै गएको छ
**इह** = यस संसारमा
**तावत्** = त्यस्तो छ
**अस्य** = त्यसको
**जीविताशां** = बाँच्ने आशालाई
**बलवान्** = पराक्रमी हजुरले
**सद्यः** = तत्काल
**छिनत्ति** = चुँडालिदिनुहुन्छ
**तस्मै** = त्यस्ता
**अनिमिषाय** = कालस्वरूप हजुरलाई
**नमः** = नमस्कार
**अस्तु** = छ

**वाक्यार्थ–** गर्न नहुने निषिद्ध कर्ममा फसेको जो जीव हजुरद्वारा बताइएको परम कल्याणकारी कर्म र आत्मस्वरूप हजुरको सेवाबाट विमुख हुँदै गइरहेको छ। यस संसारमा त्यसको बाँच्ने आशालाई महापराक्रमी कालरूप हजुरले तुरुन्तै चुँडालिदिनुहुन्छ। त्यस्ता कालस्वरूप हजुरलाई नमस्कार छ।

**लोके भवाञ्जगदिनः कलयावतीर्णः**

**सद्रक्षणाय खलनिग्रहणाय चान्यः।**

**कश्चित् त्वदीयमतियाति निदेशमीश**

**किं वा जनः स्वकृतमृच्छति तन्न विद्मः ॥२७ ॥**

**पदार्थ–**
**जगदिनः** = जगदीश्वर
**भवान्** = हजुर
**लोके** = यस संसारमा
**सद्रक्षणाय** = सज्जनको रक्षा गर्न
**खलनिग्रहणाय च** = दुष्टको नाश गर्नका लागि पनि
**कलया** = आफ्नै अंशका रूपमा
**अवतीर्णः** = आउनुभएको हो
**ईश** = हे ईश्वर
**किं** = के
**अन्यः** = अरू
**कश्चित्** = कसैले
**त्वदीयं** = हजुरको
**निदेशं** = आज्ञालाई
**अतियाति** = उल्लङ्घन गर्न सक्छ ?
**जनः** = लोकले
**स्वकृतं** = आफ्नै कर्मको फल
**ऋच्छति वा** = प्राप्त गर्दछ ?
**तत्** = त्यो
**न विद्मः** = हामीले बुझ्न सकेका छैनौँ

**वाक्यार्थ–** हे भगवान् ! हजुर जगत्का मालिक हुनुहुन्छ। सज्जनको रक्षा र दुष्टको विनाशका निम्ति नै हजुरले आफ्ना कलाका साथमा यहाँ अवतार लिनुभएको हो। तर पनि हे परमेश्वर ! हे जगदीश्वर अरू कसैले हजुरको आज्ञाको उल्लङ्घन गर्न सक्छ ? मानिसले आफ्नै कर्मको फल भोग्छ (हजुर हुँदाहुँदै जरासन्धले हजुरको आज्ञाविपरीत हामीलाई कष्ट दिन सक्छ ?) वा हाम्रा

अशुभ कर्मको फल हामीले भोगिरहेका हौँ ? यो हामीले बुझ्न सकेका छैनौँ।

**स्वप्नायितं नृपसुखं परतन्त्रमीश**
**शश्वद्भयेन मृतकेन धुरं वहामः।**
**हित्वा तदात्मनि सुखं त्वदनीहलभ्यं**
**क्लिश्यामहेऽतिकृपणास्तव माययेह॥ २८॥**

**पदार्थ–**
**ईश** = हे जगदीश्वर
**तव मायया** = हजुरको मायाद्वारा (मोहित भएका कारण)
**अतिकृपणाः** = अति दुःखी बनेका हामीहरूले
**त्वदनीहलभ्यं** = हजुरको कृपाले मात्र प्राप्त हुने
**आत्मनि** = आफूमा रहेको
**सुखं** = परम सुखलाई
**हित्वा** = छोडेर
**स्वप्नायितं** = स्वप्न जस्तो
**परतन्त्रं** = पराधीन
**नृपसुखं** = राज्यसुखलाई
**शश्वद्भयेन** = सधैँ डर भइरहने
**मृतकेन** = मुर्दातुल्य शरीरले
**धुरं** = भारी
**वहामः** = बोकिरहेका छौँ
**तत्** = त्यसकारणले (हामी)
**इह** = यस संसारमा
**क्लिश्यामहे** = अति दुःखी छौँ

**वाक्यार्थ–** हे जगदीश्वर! हजुरको मायाद्वारा मोहित भएका कारण अति दुःखी बनेका हामीहरूले हजुरको कृपाले मात्र प्राप्त हुने आफूमा रहेको परम आनन्दरूप सुखलाई छोडेका छौँ र सधैँ डर हुने मुर्दा जस्तो शरीरले पराधीन र स्वप्न जस्तै असत् भएको राज्यसुखको भारी बोकिरहेका छौँ। यसैले यस संसारमा हामी अति दुःखी भएका छौँ।

**विवरण–** यस प्रसङ्गमा जरासन्धद्वारा थुनिएका राजाहरूले भगवान् श्रीकृष्णलाई आफ्नो दुरवस्था बताएका छन्। राजाहरूले संसारको सुखलाई स्वप्न बराबरको भनेका छन्। एउटा राजाले पाउने सुख पृथ्वीका मानिसहरूले पाउने सुखहरूमध्ये सबैभन्दा माथिल्लो कोटिको हुन्छ। उपनिषद्मा आनन्दभोगको तह विचार गर्ने क्रममा पनि सुखी चक्रवर्ती राजाको सुखलाई मनुष्यहरूले पाउन सक्ने पूर्ण सुख भनिएको छ। जो युवा, दृढ, बलिष्ठ, विनयी र शास्त्रज्ञ राजा हुन्छ, अनि जसका लागि पृथिवी यथेच्छ सम्पत्तिले भरिएकी हुन्छिन्, त्यस्तो राजाले मनुष्यको पूर्ण आनन्दलाई भोग्दछ। यस्तो राजाको सुखलाई यहाँ स्वप्नसमान असत्य भनिएको छ। जो परतन्त्र हुन्छ, त्यो सुखी हुन सक्दैन भन्ने नीतिको भनाइ छ– **सर्वं परवशं दुःखं सर्वमात्मवशं सुखम्** अर्थात् अर्काको वशमा हुनु दुःखरूप हो अनि आफ्नो वशमा हुनु सुख हो। संसारमा हुने सुख पनि परतन्त्र छ। रूप, रस आदि विषयहरूको आधारमा मात्र संसारको सुख टिक्न सक्दछ। विषयहरूको आधारमा मात्र हुने हुनाले संसारको सुख विषयपरतन्त्र हुन्छ। आत्माबाट आउने सुख चाहिँ स्वयं नै भइरहन्छ। यसलाई अरू कुनै वस्तुको सहायता चाहिँदैन। सांसारिक सुख र आत्मसुखमा यहाँ अरू पनि भिन्नता देखाइएको छ। आत्माबाट आउने सुख **अनीहलभ्य** अर्थात् केही पनि नचाहने निष्काम व्यक्तिलाई भगवान्को कृपाले मात्र मिल्दछ भने विषयसुख प्राप्त गर्न कामना अनिवार्य आवश्यक हुन्छ। संसारको सुखमा भयको पनि आशङ्का रहेको हुन्छ। यसरी विनाशको भय सबै

पदार्थहरूमा छ। फेरि संसारका सुख भोग्ने शरीर ज्यूँदो हुँदाहुँदै पनि मरे झैँ छ। आत्माको चैतन्य पाएर मात्र यो जीवित देखिएको छ। यसरी आत्मा नै सुखको मूल भए पनि नाशवान् अनेक बाह्य पदार्थहरूबाट सुख खोजी आफूहरू राजा हुँदा स्वप्नसमानका विषयभोगमा नै भुलेको भन्ने क्षमाप्रार्थनाको भाव यहाँ झल्किएको छ।

**तन्नो भवान् प्रणतशोकहराङ्घ्रियुग्मो**

**बद्धान् वियुङ्क्ष्व मगधाह्वयकर्मपाशात्।**

**यो भूभुजोऽयुतमतङ्गजवीर्यमेको**

**बिभ्रद् रुरोध भवने मृगराडिवावीः॥ २९॥**

**पदार्थ—**
**तत्** = त्यसकारण
**प्रणतशोकहराङ्घ्रियुग्मः** = शरणमा परेकाहरूको शोकलाई हरण गरिदिने चरणयुगल भएका
**भवान्** = हजुरले
**मगधाह्वयकर्मपाशात्** = जरासन्धनामक कर्मबन्धनबाट
**बद्धान्** = बाँधिएका
**नः** = हामीहरूलाई
**वियुङ्क्ष्व** = मुक्त गर्नुहोस्
**अयुतमतङ्गजवीर्यम्** = दशहजार हात्तीको जति शक्तिलाई
**बिभ्रत्** = धारण गरेको
**यः** = जुन
**एकः** = एउटै
**भूभुजः** = राजा जरासन्धले
**मृगराट्** = सिंहले
**अवीः इव** = भेडाहरूलाई झैँ
**भवने** = कारागारमा (हामीलाई)
**रुरोध** = बन्दी बनाएको छ

**वाक्यार्थ—** हे भगवान्! हजुरका चरणले शरणमा परेकाहरूको शोक नष्ट गर्दछन्। अतः जरासन्धरूपी कर्मबन्धनले बाँधिएका हामीलाई त्यस बन्धनबाट छुटाउनुहोस्, किनभने दशहजार हात्तीको समान बल भएको त्यस जरासन्धले सिंहले भेडाहरूलाई झैँ हामी सबैलाई यो राजगिरि नामको कारागारमा बन्दी बनाएको छ।

**विवरण—** यस श्लोकमा बन्दी राजाहरूले मगधराज जरासन्धको कारागाररूप कर्मबन्धनबाट छुटाउन भगवान्सँग प्रार्थना गरेका छन्। यी राजाहरू जरासन्धको कैदबाट छुटेर फेरि राज्य गर्न फर्किने मनस्थितिमा छैनन् भन्ने कुरा यहाँ अभिव्यक्त भएको छ। त्रिगुणमय संसारको बन्धनलाई छुटाउन ज्ञानद्वारा यसको मिथ्यात्वलाई बुझ्नुपर्दछ। त्यसैले राजाहरूले मगधराज जरासन्धलाई कर्मपाश अर्थात् कर्मबन्धनको प्रतीकको रूपमा बताएका छन्। अयुतमतङ्गजवीर्य अर्थात् यो कर्मबन्धनरूप जरासन्ध दसौँ हजार हात्तीभन्दा पनि बढी शक्तिशाली छ। यसकै बलले सच्चिदानन्दरूप परम स्वतन्त्र आत्मालाई पनि जन्म-मृत्युको बन्धनमा पारिदिएको छ। ती राजाहरू त्यस बन्धनबाट मुक्त हुन चाहन्छन् यसकारण आफूहरूलाई जरासन्धको कारागाररूप कर्मबन्धनबाट छुटाइदिनुहोस् भनी राजाहरूले भगवान् श्रीकृष्णलाई प्रार्थना गरेका छन्।

**यो वै त्वया द्विनवकृत्व उदात्तचक्र**

**भग्नो मृधे खलु भवन्तमनन्तवीर्यम्।**

**जित्वा नृलोकनिरतं सकृदूढदर्पो**
**युष्मत्प्रजा रुजति नोऽजित तद् विधेहि ॥ ३० ॥**

**पदार्थ–**
**उदात्तचक्र** = हे चक्रपाणि (चक्र उठाउनुहुने)
**अजित** = हे कसैसँग पनि पराजित नहुने प्रभु
**त्वया** = हजुरद्वारा
**यः** = जुन जरासन्ध
**द्विनवकृत्व** = अठार पटकसम्मको
**मृधे** = युद्धमा
**भग्नः** = हराइयो
**वै** = त्यही जरासन्ध
**अनन्तवीर्यम्** = परम शक्तिशाली
**नृलोकनिरतं** = सामान्य मनुष्यको जस्तो लीला गर्ने
**भवन्तं** = हजुरलाई
**सकृत्** = एकपटक
**जित्वा** = जितेर
**खलु** = निश्चय नै
**ऊढदर्पः** = अति घमन्डी भएको छ र
**युष्मत्प्रजाः** = हजुरका भक्त
**नः** = हामीहरूलाई
**रुजति** = दुःख दिइरहेको छ (अतः त्यसलाई जे गर्नुपर्दछ)
**तत्** = त्यो
**विधेहि** = गर्नुहोस्

**वाक्यार्थ–** हे अजित चक्रपाणि भगवान् ! जरासन्धले हजुरसँग अठार पटक हार्‍यो। त्यही जरासन्धले अपार शक्ति भएर पनि सामान्य मनुष्यको जस्तो लीला गर्ने हजुरलाई एक पटक जितेकाले उसको घमन्ड बढिरहेको छ र हामी हजुरका भक्तलाई त्यसले फेरि दुःख दिन थालेको छ। अतः त्यसलाई जसो गर्नुपर्दछ त्यसै गर्नुहोस्।

**दूत उवाच** (दूतले भने)

**इति मागधसंरुद्धा भवद्दर्शनकाङ्क्षिणः ।**
**प्रपन्नाः पादमूलं ते दीनानां शं विधीयताम् ॥ ३१ ॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**मागधसंरुद्धाः** = जरासन्धद्वारा बन्दी बनाइएका
**भवद्दर्शनकाङ्क्षिणः** = हजुरको दर्शन गर्न चाहने राजाहरू
**ते** = हजुरको
**पादमूलं** = पाउमा
**प्रपन्नाः** = परेका छन् (अतः)
**दीनानां** = ती दुःखीहरूको
**शं** = कल्याण
**विधीयताम्** = गर्नुहोस्

**वाक्यार्थ–** यसप्रकार जरासन्धद्वारा बन्दी बनाइएका राजाहरू हजुरको दर्शनको अभिलाषामा बसेका छन्। हजुरको शरणमा परेका ती दुःखीहरूको कल्याण गर्नुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**राजदूते ब्रुवत्येवं देवर्षिः परमद्युतिः ।**
**बिभ्रत् पिङ्गजटाभारं प्रादुरासीद् यथा रविः ॥ ३२ ॥**

**पदार्थ–**
**राजदूते** = राजाहरूको दूतले
**एवं** = यसप्रकार

**ब्रुवति** = बोल्दै गर्दा
**परमद्युतिः** = परम कान्ति भएका
**पिङ्गजटाभारं** = पहेँला जटाको भार
**बिभ्रत्** = धारण गर्नुभएका
**देवर्षिः** = देवर्षि नारदजी
**यथा रविः** = सूर्य जसरी
**प्रादुरासीत्** = प्रकट हुनुभयो

**वाक्यार्थ–** बन्दी राजाहरूको दूतले यसप्रकार सन्देश सुनाएपछि परम कान्तिले युक्त र पहेँला जटाले शोभायमान हुनुभएका देवर्षि नारदजी सूर्य उदाए झैँ टुप्लुक्क प्रकट हुनुभयो।

**तं दृष्ट्वा भगवान् कृष्णः सर्वलोकेश्वरेश्वरः।**
**ववन्द उत्थितः शीर्ष्णा ससभ्यः सानुगो मुदा॥ ३३॥**

**पदार्थ–**
**तं** = ती नारदजीलाई
**दृष्ट्वा** = देखेर
**सर्वलोकेश्वरेश्वरः** = सम्पूर्ण लोकपालहरूका मालिक
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्णले
**ससभ्यः** = सम्पूर्ण सभासद् र
**सानुगः** = सेवकहरूले सहित
**उत्थितः** = उठेर
**मुदा** = प्रेमपूर्वक
**शीर्ष्णा** = शिर झुकाएर
**ववन्द** = वन्दना गर्नुभयो

**वाक्यार्थ–** नारदजी आउनुभएको देखेर सम्पूर्ण लोकपालहरूका पनि मालिक भगवान् श्रीकृष्णले सम्पूर्ण सभासद् र सेवकहरूले सहित उठेर प्रेमपूर्वक शिर झुकाई वन्दना गर्नुभयो।

**सभाजयित्वा विधिवत् कृतासनपरिग्रहम्।**
**बभाषे सुनृतैर्वाक्यैः श्रद्धया तर्पयन् मुनिम्॥ ३४॥**

**पदार्थ–**
**कृतासनपरिग्रहं** = आसनमा विराजमान हुनुभएका
**मुनिं** = नारद मुनिलाई
**विधिवत्** = विधि अनुसार
**श्रद्धया** = श्रद्धापूर्वक
**सभाजयित्वा** = सत्कार गरेर
**सुनृतैः वाक्यैः** = मिठो वचनले
**तर्पयन्** = प्रसन्न गराउँदै
**बभाषे** = भन्न लाग्नुभयो

**वाक्यार्थ–** आसनमा विराजमान हुनुभएका नारद मुनिलाई भगवान् श्रीकृष्णले विधि अनुसार श्रद्धापूर्वक उहाँको स्वागत सत्कार गर्नुभयो। त्यसपछि उहाँलाई प्रसन्न गराउँदै भगवान् श्रीकृष्णले मिठो बोलीमा भन्न लाग्नुभयो।

**अपि स्विदद्य लोकानां त्रयाणामकुतोभयम्।**
**ननु भूयान् भगवतो लोकान् पर्यटतो गुणाः॥ ३५॥**

**पदार्थ–**
**अपि स्वित्** = के
**अद्य** = यति वेला
**त्रयाणां** = तीनै
**लोकानां** = लोकमा
**अकुतोभयं** = शान्ति (छ)
**ननु** = निश्चय नै
**लोकान्** = तीनै लोकमा
**पर्यटतः** = घुम्दै हिँड्नुहुने
**भगवतः** = हजुरका
**भूयान्** = धेरै
**गुणाः** = गुणहरू छन्

**वाक्यार्थ–** हे देवर्षि ! के यतिवेला तीनै लोकमा शान्ति छ ? तीनै लोकमा विचरण गर्नुहुने हजुरका धेरै गुणहरू छन्। (हजुर तीनै लोकको हालखबर बुझेर हामीलाई पनि जानकारी दिनुहुन्छ।)

**न हि तेऽविदितं किञ्चिल्लोकेष्वीश्वरकर्तृषु।**
**अथ पृच्छामहे युष्मान् पाण्डवानां चिकीर्षितम्॥ ३६॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**ईश्वरकर्तृषु** = ईश्वरद्वारा रचना गरिएका
**लोकेषु** = तीनै लोकहरूमा
**ते** = हजुरले
**अविदितं** = नजानेको
**किञ्चित्** = केही पनि
**न** = छैन
**अथ** = त्यसकारण
**पाण्डवानां** = पाण्डवहरूले
**चिकीर्षितं** = (यति वेला) गर्न चाहेको कुरा
**युष्मान्** = हजुरसँग
**पृच्छामहे** = सोध्दछौँ

**वाक्यार्थ–** ईश्वरले रचना गरेका तीनै लोकमा हजुरले नजानेका कुनै पनि कुरा छैनन्। त्यसकारण यति वेला पाण्डवहरू के गर्न चाहँदैछन् भन्ने कुरा हामी हजुरलाई सोध्दछौँ।

**नारद उवाच** (नारदजीले भन्नुभयो)

**दृष्टा मया ते बहुशो दुरत्यया माया विभो विश्वसृजश्च मायिनः।**
**भूतेषु भूमंश्चरतः स्वशक्तिभिर्वह्नेरिव छन्नरुचो न मेऽद्भुतम्॥ ३७॥**

**पदार्थ–**
**विभो** = हे सर्वव्यापक प्रभु
**विश्वसृजः च** = संसारका सृष्टिकर्ता ब्रह्माजीलाई पनि
**मायिनः** = मोहित बनाउने माया पनि
**ते** = हजुरको
**दुरत्यया** = जान्न नसकिने
**माया** = मायाशक्ति
**मया** = मद्वारा
**बहुशः** = धेरै पटक
**दृष्टा** = दखिएको छ
**भूमन्** = हे व्यापक भगवान्
**स्वशक्तिभिः** = आफ्नो मायाशक्तिद्वारा
**छन्नरुचः** = काठमा लुकेर रहेको
**वह्नेः इव** = आगोको झैँ
**भूतेषु** = सम्पूर्ण प्रपञ्चमा
**चरतः** = विचरण गर्नुहुने हजुरको (प्रश्न)
**मे** = मलाई
**अद्भुतं** = आश्चर्यलाग्दो
**न** = भएको छैन

**वाक्यार्थ–** हे सर्वव्यापक भगवान् ! हजुर संसारका सृष्टिकर्ता ब्रह्माजीलाई पनि मोहित बनाउने मायावी हुनुहुन्छ। यस्तो कसैले बुझ्न नसक्ने हजुरको मायाशक्तिलाई धेरै पटक मैले देखेको छु। काठभित्र लुकेर बसेको अग्नि झैँ सम्पूर्ण प्रपञ्चमा व्याप्त भएर रहनुहुने हजुरले (थाहा नपाएको व्यक्तिले झैँ) पाण्डवको विषयमा सोध्नु मलाई अनौठो लागेको छैन।

**तवेहितं कोऽर्हति साधु वेदितुं स्वमाययेदं सृजतो नियच्छतः।**
**यद् विद्यमानात्मतयावभासते तस्मै नमस्ते स्वविलक्षणात्मने॥ ३८॥**

**पदार्थ–**
**स्वमायया** = आफ्नो मायाशक्तिद्वारा
**इदं** = यस जगत्‌लाई
**सृजतः** = उत्पन्न गर्ने
**नियच्छतः** = संहार गर्ने
**तव** = हजुरको
**ईहितं** = इच्छालाई
**साधु** = पूर्णरूपमा
**वेदितुं** = बुझ्न
**कः** = कसले
**अर्हति** = सक्छ र
**यत्** = जुन मायाशक्ति
**विद्यमानात्मतया** = आत्मभावले रहनाले असत् संसारमा पनि
**अवभासते** = सत्‌रूपले देखा पर्दछ
**स्वविलक्षणात्मने** = विलक्षण स्वरूपवाला
**तस्मै** = त्यस्ता
**ते** = हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** हे भगवान् ! हजुरले आफ्नो मायाशक्तिद्वारा जगत्‌को सृष्टि एवं संहार गर्नुहुन्छ र हजुरकै मायाले गर्दा वास्तवमा यो जगत् असत् भएर पनि सत् झैँ देखिन्छ। हजुरले के गर्न आँट्नुभएको छ, त्यो पूर्णरूपमा कसैले पनि जान्न सक्दैन। त्यस्ता विलक्षण शक्ति भएका हजुरलाई म नमस्कार गर्दछु।

**जीवस्य यः संसरतो विमोक्षणं न जानतोऽनर्थवहाच्छरीरतः।**
**लीलावतारैः स्वयशः प्रदीपकं प्राज्वालयत् त्वा तमहं प्रपद्ये ॥ ३९ ॥**

**पदार्थ–**
**अनर्थवहात्** = दुःख दिने
**शरीरतः** = शरीरबाट
**विमोक्षणं** = मोक्षको उपाय
**न जानतः** = नजान्ने
**संसरतः** = जन्ममृत्युरूप संसारमा घुमिरहने
**जीवस्य** = जीवको (कल्याणका लागि)
**यः** = जसले
**लीलावतारैः** = अनेक लीलावतारहरू लिएर
**स्वयशः प्रदीपकं** = आफ्नो यशरूपी उज्यालो बत्ती
**प्राज्वालयत्** = बाल्नुभयो
**तं** = त्यस्ता
**त्वा** = हजुरको शरणमा
**अहं** = म
**प्रपद्ये** = पर्दछु

**वाक्यार्थ–** दुःखप्रधान यस शरीरबाट मुक्त हुने उपाय नजानेका अज्ञानी प्राणीहरू जन्ममृत्युरूप संसारमा घुमिरहन्छन्। तिनैको उद्धारका निम्ति हजुरले अनेक लीलावतार लिनुहुन्छ र आफ्नो यशरूपी बत्तीको उज्यालोले संसारी मनुष्यलाई प्रकाशित गरिदिनुहुन्छ, म त्यस्ता हजुरको शरणमा पर्दछु।

**अथाप्याश्रावये ब्रह्म नरलोकविडम्बनम्।**
**राज्ञः पैतृष्वस्रेयस्य भक्तस्य च चिकीर्षितम् ॥ ४० ॥**

**पदार्थ–**
**ब्रह्म** = हे परब्रह्म
**अथ अपि** = तर पनि
**नरलोकविडम्बनं** = सामान्य मनुष्यको जस्तो लीला गर्नुहुने हजुरलाई
**पैतृष्वस्रेयस्य** = फुपूका छोरा र
**भक्तस्य च** = प्रियभक्त पनि
**राज्ञः** = राजा युधिष्ठिरले

**चिकीर्षितं** = गर्न चाहेको कुरा | **आश्रावये** = सुनाउँछु

**वाक्यार्थ–** स्वयं परब्रह्म परमात्मा भएर पनि सामान्य मनुष्यको जस्तो लीला गर्नुहुने हे भगवान् ! हजुरका फुपूका छोरा र प्रिय भक्त युधिष्ठिरले के गर्न चाहेका छन्, सो कुरा म हजुरलाई सुनाउँछु।

**यक्ष्यति त्वां मखेन्द्रेण राजसूयेन पाण्डवः।**

**पारमेष्ठ्यकामो नृपतिस्तद् भवाननुमोदताम्॥ ४१॥**

**पदार्थ–**
**पारमेष्ठ्यकामः** = साम्राज्य चाहने
**नृपतिः** = राजा
**पाण्डवः** = पाण्डुपुत्र युधिष्ठरले
**मखेन्द्रेण** = यज्ञहरूमा श्रेष्ठ
**राजसूयेन** = राजसूय यज्ञद्वारा
**त्वां** = हजुरलाई
**यक्ष्यति** = पूजा गर्ने इच्छा गरेका छन्
**तत्** = त्यसलाई
**भवान्** = हजुरले
**अनुमोदताम्** = स्वीकार गरिदिनुहोस्

**वाक्यार्थ–** पाण्डुपुत्र राजा युधिष्ठिरले साम्राज्यको कामनाले राजसूय नामक श्रेष्ठ यज्ञद्वारा हजुरको पूजा गर्न खोजेका छन्, त्यसलाई हजुरले स्वीकार गरिदिनुहोस्।

**तस्मिन् देव क्रतुवरे भवन्तं वै सुरादयः।**

**दिदृक्षवः समेष्यन्ति राजानश्च यशस्विनः॥ ४२॥**

**पदार्थ–**
**देव** = हे भगवान्
**वै** = निश्चय नै
**तस्मिन्** = त्यो
**क्रतुवरे** = उत्तम यज्ञमा
**भवन्तं** = हजुरलाई
**दिदृक्षवः** = देख्न चाहने
**सुरादयः** = देवताहरू
**यशस्विनः** = कीर्तिशाली
**राजानः च** = राजाहरू पनि
**समेष्यन्ति** = आउनेछन्

**वाक्यार्थ–** हे भगवान् ! त्यस महायज्ञमा हजुरको दर्शन गर्न चाहने सम्पूर्ण देवताहरू र कीर्तिशाली राजाहरू पनि आउनेछन्।

**श्रवणात् कीर्तनाद् ध्यानात् पूयन्तेऽन्तेवसायिनः।**

**तव ब्रह्ममयस्येश किमुतेक्षाभिमर्शिनः॥ ४३॥**

**पदार्थ–**
**ईश** = हे प्रभु
**ब्रह्ममयस्य** = परब्रह्मस्वरूप
**तव** = हजुरको
**श्रवणात्** = (नाम र लीलाको) श्रवणले
**कीर्तनात्** = कीर्तनले र
**ध्यानात्** = ध्यानले
**अन्तेवसायिनः** = चाण्डालहरू पनि
**पूयन्ते** = शुद्ध हुन्छन् भने
**ईक्षाभिमर्शिनः** = प्रत्यक्ष आँखाले देख्नेहरू त
**किमुत** = किन पवित्र नहोऊन्

**वाक्यार्थ–** हे प्रभु ! परब्रह्मस्वरूप हजुरका नाम र लीलाको श्रवण, कीर्तन र ध्यान गर्नाले चाण्डालहरू त पवित्र हुन्छन् भने साक्षात् हजुरको दर्शन पाउनेको त के कुरा भयो र ?

**यस्यामलं दिवि यशः प्रथितं रसायां**
**भूमौ च ते भुवनमङ्गल दिग्वितानम् ।**
**मन्दाकिनीति दिवि भोगवतीति चाधो**
**गङ्गेति चेह चरणाम्बु पुनाति विश्वम् ॥ ४४ ॥**

**पदार्थ–**
**भुवनमङ्गल** = हे त्रिभुवनका मङ्गलस्वरूप भगवान्
**यस्य** = जुन
**ते** = हजुरको
**अमलं** = निर्मल
**यशः** = कीर्ति
**दिग्वितानं** = धेरै दिशाहरूमा फैलिएर
**दिवि** = स्वर्गमा
**भूमौ** = पृथिवीमा
**रसायां च** = पातालमा पनि
**प्रथितं** = प्रसिद्ध छ (त्यसै गरी)
**चरणाम्बु च** = हजुरका चरणको जलले पनि
**दिवि** = स्वर्गमा
**मन्दाकिनी इति** = मन्दाकिनी नामले
**अधः** = पातालमा
**भोगवती इति** = भोगवती नामले
**इह च** = यस पृथिवीमा
**गङ्गा इति** = गङ्गाको नामले
**विश्वं** = संसारलाई
**पुनाति** = पवित्र गरिरहेको छ

**वाक्यार्थ–** हे त्रिभुवनमङ्गल प्रभु ! हजुरको निर्मल कीर्ति दसै दिशामा फैलिँदै स्वर्गमा, पृथिवीमा र पातालमा समेत व्याप्त भइरहेको छ। यसै गरी हजुरको चरणको जलले स्वर्गमा मन्दाकिनी, पातालमा भोगवती र पृथिवीमा गङ्गाको नामले प्रवाहित भएर सम्पूर्ण विश्वलाई नै पवित्र गराइरहेको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तत्र तेष्वात्मपक्षेष्वगृह्णत्सु विजिगीषया ।**
**वाचः पेशैः स्मयन् भृत्यमुद्धवं प्राह केशवः ॥ ४५ ॥**

**पदार्थ–**
**तत्र** = त्यो सुधर्मा सभामा
**तेषु** = ती वृत्तान्त सुनिरहेका
**आत्मपक्षेषु** = यादवहरूले
**विजिगीषया** = जरासन्धलाई जित्ने इच्छाले
**अगृह्णत्सु** = नारदको कुरा अस्वीकार गर्न लागेको देखेपछि
**केशवः** = भगवान् श्रीकृष्णले
**स्मयन्** = मुस्कुराउँदै
**वाचः पेशैः** = मिठो बोलीमा
**भृत्यं** = सेवक
**उद्धवं** = उद्धवलाई
**प्राह** = भन्नुभयो

**वाक्यार्थ–** सुधर्मा सभामा सबै वृत्तान्त सुनेर बसेका यादवहरूलाई जरासन्धसँग युद्ध नगरी युधिष्ठिरको यज्ञमा जाने नारदको कुरा स्वीकार नगर्ने देखेपछि भगवान् श्रीकृष्णले मुस्कुराउँदै मिठो बोलीमा प्रिय भक्त उद्धवलाई भन्न लाग्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**त्वं हि नः परमं चक्षुः सुहृन्मन्त्रार्थतत्त्ववित्।**

**तथात्र ब्रूह्यनुष्ठेयं श्रद्दध्मः करवाम तत्॥ ४६॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**त्वं** = तिमी
**नः** = हाम्रा
**मन्त्रार्थतत्त्ववित्** = सबै सल्लाह कार्यको रहस्य जान्ने
**परमं चक्षुः** = दिव्य चक्षु
**तथा** = तथा
**सुहृत्** = हितैषी मित्र हौ (अतः)
**अत्र** = यति वेला यहाँ
**अनुष्ठेयं** = गर्नुपर्ने कुरा
**ब्रूहि** = भन
**तत्** = त्यसलाई (हामी)
**श्रद्दध्मः** = श्रद्धा गर्छौं र
**करवाम** = कार्यान्वयन पनि गर्दछौँ

**वाक्यार्थ–** हे उद्धव ! तिमी मेरा मित्र हौ। सबै सल्लाह कार्यको रहस्य जान्ने तिमी मेरा दिव्य चक्षु हौ। अतः अब मैले के गर्नुपर्दछ, त्यो भन। म त्यसलाई श्रद्धापूर्वक स्वीकारी पालन गर्दछु।

**इत्युपामन्त्रितो भर्त्रा सर्वज्ञेनापि मुग्धवत्।**

**निदेशं शिरसाधाय उद्धवः प्रत्यभाषत॥ ४७॥**

**पदार्थ–**
**सर्वज्ञेन अपि** = सबै कुरा जान्ने भएर पनि
**भर्त्रा** = स्वामीद्वारा
**मुग्धवत्** = नजान्ने झैँ गरी
**इति** = यसप्रकार
**उपामन्त्रितः** = सोधिएका
**उद्धवः** = उद्धवले
**निदेशं** = भगवान्‌को आज्ञालाई
**शिरसा** = शिर झुकाएर नम्रतापूर्वक
**आधाय** = स्वीकार गरेर
**प्रत्यभाषत** = भन्न लागे

**वाक्यार्थ–** आफैँ सर्वज्ञ भएर पनि केही नजान्नेले झैँ गरी भगवान्‌ले सल्लाह माग्नुभएपछि उद्धवले पनि भगवान्‌को आज्ञालाई शिरोपर गरी यसप्रकार भन्न लागे।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे**

**उत्तरार्धे भगवद्यानविचारे सप्ततितमोऽध्यायः॥ ७०॥**

# अथैकसप्ततितमोऽध्यायः

## भगवान् श्रीकृष्णको इन्द्रप्रस्थ प्रस्थान

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युदीरितमाकर्ण्य देवर्षेरुद्धवोऽब्रवीत् ।**

**सभ्यानां मतमाज्ञाय कृष्णस्य च महामतिः ॥ १ ॥**

**पदार्थ—**
**इति** = यसप्रकार
**उदीरितं** = भगवान्को भनाइ
**आकर्ण्य** = सुनेर
**महामतिः** = ज्यादै बुद्धिमान्
**उद्धवः** = उद्धवले
**देवर्षेः** = देवर्षि नारदजीको
**सभ्यानां** = सभासद्हरूको
**कृष्णस्य च** = श्रीकृष्णको पनि
**मतं** = विचारलाई
**आज्ञाय** = बुझेर
**अब्रवीत्** = भन्न लागे

**वाक्यार्थ—** भगवान्को भनाइ सुनिसकेपछि उद्धवले नारदजी, सभासद् र भगवान् श्रीकृष्णको विचारलाई बुझेर भन्न लागे।

**उद्धव उवाच** (उद्धवले भने)

**यदुक्तमृषिणा देव साचिव्यं यक्ष्यतस्त्वया ।**

**कार्यं पैतृष्वस्रेयस्य रक्षा च शरणैषिणाम् ॥ २ ॥**

**पदार्थ—**
**देव** = हे भगवान्
**ऋषिणा** = देवर्षि नारदजीद्वारा
**यक्ष्यतः** = यज्ञ गर्न लागेका
**पैतृष्वस्रेयस्य** = फुपूका छोरा युधिष्ठिरको
**साचिव्यं** = सहायता गर्नुपर्दछ भन्ने
**यत्** = जुन कुरा
**उक्तं** = भनिएको छ (त्यो)
**त्वया** = हजुरद्वारा
**कार्यं** = पूर्ण गरिनुपर्दछ
**शरणैषिणां** = शरणमा परेका राजाहरूको
**रक्षा च** = रक्षा पनि (गरिनुपर्दछ)

**वाक्यार्थ—** हे भगवान् ! देवर्षि नारदजीले यज्ञ गर्न लागेका फुपूका छोरा युधिष्ठिरको सहायता गर्नुपर्दछ भन्ने जुन बताउनुभएको छ, त्यो हजुरले गर्नुपर्दछ। त्यसै गरी शरणमा परेका राजाहरूको सुरक्षा पनि हजुरले गर्नुपर्दछ।

**यष्टव्यं राजसूयेन दिक्चक्रजयिना विभो ।**

**अतो जरासुतजय उभयार्थो मतो मम ॥ ३ ॥**

**पदार्थ—**
**विभो** = हे व्यापक प्रभु
**दिक्चक्रजयिना** = सबै दिशालाई जित्न चाहने राजाद्वारा
**राजसूयेन** = राजसूय यज्ञद्वारा
**यष्टव्यं** = देवपूजन गरिनुपर्दछ

| | | |
|---|---|---|
| **अतः** = त्यसकारण | **उभयार्थः** = दुबै काम सिद्ध हुन्छ | **मतः** = विचार छ |
| **जरासुतजयः** = जरासन्धलाई | भन्ने | |
| जित्नाले | **मम** = मेरो | |

**वाक्यार्थ–** हे सर्वव्यापक प्रभु ! सबै दिशा जित्न चाहने राजाले राजसूय यज्ञ अवश्य गर्नुपर्दछ। त्यसकारण जरासन्धलाई जित्नाले युधिष्ठिरको सहायता र शरणागतको रक्षा दुबै कार्य पूर्ण हुन्छ भन्ने मेरो विचार छ।

**अस्माकं च महानर्थो ह्येतेनैव भविष्यति ।**
**यशश्च तव गोविन्द राज्ञो बद्धान् विमुञ्चतः ॥ ४ ॥**

| **पदार्थ–** | | |
|---|---|---|
| **गोविन्द** = हे गोविन्द | **महान्** = महत्त्वपूर्ण | **तव** = हजुरको |
| **हि** = निश्चय नै | **अर्थः च** = कार्यसिद्धि र | **यशः च** = कीर्ति पनि |
| **एतेन एव** = यसैबाट | **बद्धान्** = बन्दी बनाइएका | **भविष्यति** = हुनेछ |
| **अस्माकं** = हामीहरूको | **राज्ञः** = राजाहरूलाई | |
| | **विमुञ्चतः** = मुक्त गर्ने | |

**वाक्यार्थ–** हे गोविन्द ! यसो गर्नाले हाम्रो महत्त्वपूर्ण काम पनि सफल हुनेछ र साथमा बन्दी राजाहरू मुक्त भएपछि हजुरको कीर्ति पनि फैलिनेछ।

**स वै दुर्विषहो राजा नागायुतसमो बले ।**
**बलिनामपि चान्येषां भीमं समबलं विना ॥ ५ ॥**

| **पदार्थ–** | | |
|---|---|---|
| **बले** = बलमा | **राजा** = राजा जरासन्ध | लागि पनि |
| **नागायुतसमः** = दश हजार | **समबलं** = उत्तिकै बल भएका | **दुर्विषहः च** = असह्य (सामना |
| हात्तीको बराबर बल भएको | **भीमं विना** = भीमसेन बाहेकका | गर्नै नसक्ने किसिमको) छ |
| **सः वै** = त्यो | **अन्येषां** = अरू | |
| | **बलिनाम् अपि** = बलवान्हरूका | |

**वाक्यार्थ–** दश हजार हात्तीको बराबर बल भएको त्यो राजा जरासन्ध उत्तिकै बलवान् भीमसेनलाई छाडेर अन्य बलवान्हरूका लागि पनि सामना गर्नै नसक्ने खालको छ।

**द्वैरथे स तु जेतव्यो मा शताक्षौहिणीयुतः ।**
**ब्राह्मण्योऽभ्यर्थितो विप्रैर्न प्रत्याख्याति कर्हिचित् ॥ ६ ॥**

| **पदार्थ–** | | |
|---|---|---|
| **सः** = त्यो जरासन्ध | **द्वैरथे** = दुईटाको युद्धमा | **शताक्षौहिणीयुतः तु** = सय |
| | **जेतव्यः** = जितिनुपर्दछ | अक्षौहिणी सेनाले युक्त भएको |

वेलामा त
**मा** = जित्न सकिँदैन
**ब्राह्मण्यः** = ब्राह्मणभक्त त्यस
जरासन्धले
**विप्रैः** = ब्राह्मणहरूद्वारा
**अभ्यर्थितः** = मागिएको कुरा
**कर्हिचित्** = कहिल्यै पनि
**न प्रत्याख्याति** = निषेध गर्दैन

**वाक्यार्थ–** महाबली जरासन्धलाई द्वन्द्वयुद्धमैं जित्नुपर्दछ। सय अक्षौहिणी सेनाले सहित भएपछि त त्यसलाई जित्नै सकिँदैन। ब्राह्मणभक्त त्यो जरासन्ध ब्राह्मणले मागेको कुरा कहिल्यै हुँदैन भन्दैन।

**ब्रह्मवेषधरो गत्वा तं भिक्षेत वृकोदरः।**
**हनिष्यति न सन्देहो द्वैरथे तव सन्निधौ॥ ७॥**

**पदार्थ–**
**ब्रह्मवेषधरः** = ब्राह्मणको वेष धारण गरेका
**वृकोदरः** = भीमसेनले
**तं** = त्यो जरासन्धकहाँ
**गत्वा** = गएर
**भिक्षेत** = द्वन्द्वयुद्धको भिक्षा मागून्
**तव** = हजुरको
**सन्निधौ** = अगाडि
**द्वैरथे** = द्वन्द्वयुद्धमा (भीमले)
**हनिष्यति** = मार्नेछन्
**न सन्देहः** = यसमा शङ्का छैन

**वाक्यार्थ–** त्यसकारण ब्राह्मणको वेषमा गएर भीमसेनले त्यससँग द्वन्द्वयुद्धको भिक्षा मागून्। हजुरको अगाडि द्वन्द्वयुद्धमा भीमसेनले त्यसलाई अवश्य मार्नेछन्, यसमा कुनै शङ्का छैन।

**निमित्तं परमीशस्य विश्वसर्गनिरोधयोः।**
**हिरण्यगर्भः शर्वश्च कालस्यारूपिणस्तव॥ ८॥**

**पदार्थ–**
**विश्वसर्गनिरोधयोः** = संसारको उत्पत्ति र विनाशमा
**हिरण्यगर्भः** = ब्रह्माजी (र)
**शर्वः च** = शिवजी पनि
**परं** = केवल
**निमित्तं** = निमित्त मात्र हुन्
(वास्तवमा ती सबै)
**ईशस्य** = ऐश्वर्यशाली
**अरूपिणः** = रूपरहित
**कालस्य** = कालस्वरूप
**तव** = हजुरकै कार्य हुन्

**वाक्यार्थ–** जसरी संसारको उत्पत्ति र विनाशका कारण मानिएका ब्रह्माजी र शिवजी केवल निमित्त कारण मात्र हुन्, त्यसको मुख्य कारण त रूपरहित कालस्वरूप ईश्वर हजुर नै हुनुहुन्छ। (त्यसै गरी जरासन्धलाई मार्न भीमसेन केवल निमित्त हुनेछन्।)

**गायन्ति ते विशदकर्म गृहेषु देव्यो**
**राज्ञां स्वशत्रुवधमात्मविमोक्षणं च।**
**गोप्यश्च कुञ्जरपतेर्जनकात्मजायाः**
**पित्रोश्च लब्धशरणा मुनयो वयं च॥ ९॥**

**पदार्थ–**
**राज्ञां** = (जरासन्धले बन्दी बनाएका) राजाहरूका
**देव्यः** = पत्नीहरूले
**गृहेषु** = आ–आफ्ना घरमा बसी
**स्वशत्रुवधं** = आफ्नो शत्रु जरासन्धको नाश (र)
**आत्मविमोक्षणं च** = आफ्ना प्रियतमहरूको उन्मुक्तिरूप
**ते** = हजुरका
**विशदकर्म** = पवित्र लीलाहरूको
**गायन्ति** = गान गर्नेछन्
**गोप्यः च** = जसरी गोपिनीहरूले (शङ्खचूड उद्धारको)
**लब्धशरणाः** = हजुरका शरणमा परेका
**मुनयः** = मुनिजनहरूले
**कुञ्जरपतेः** = गजेन्द्रको मोक्ष र
**जनकात्मजायाः** = जनककी पुत्री सीताको उद्धार र
**वयं** = हामीहरूले
**पित्रोः च** = वसुदेवदेवकीको उद्धारको गान गरिरहन्छौँ

**वाक्यार्थ–** यसरी जरासन्धको नाश गरेपछि उसले बन्दी बनाएका राजाका पत्नीहरूले आ–आफ्ना घरमा बसी शत्रुको नाश र पतिहरूको उन्मुक्तिरूप हजुरका लीलाहरूको गान गरिरहनेछन्। जसरी गोपिनीहरूले शङ्खचूड उद्धारको, हजुरका शरणमा परेका मुनिहरूले गजेन्द्रमोक्ष एवं जनकनन्दिनी जानकीको उद्धार भएको र हामीहरूले वसुदेवदेवकीको उद्धार भएको प्रसङ्गको गान गरिरहन्छौँ।

**जरासन्धवधः कृष्ण भूर्यर्थायोपकल्पते।**
**प्रायः पाकविपाकेन तव चाभिमतः क्रतुः॥ १०॥**

**पदार्थ–**
**कृष्ण** = हे श्रीकृष्ण
**जरासन्धवधः** = जरासन्धको वध
**भूर्यर्थाय** = धेरै प्रयोजनका लागि
**उपकल्पते** = हुनेछ
**प्रायः** = सम्भवतः
**पाकविपाकेन** = पुण्य र पापको परिणामका निम्ति
**क्रतुः** = राजसूय यज्ञ
**तव च** = हजुरको पनि
**अभिमतः** = रुचिको विषय हो

**वाक्यार्थ–** हे भगवान्! यसरी जरासन्धको वध धेरै प्रयोजनका लागि उपयुक्त हुनेछ। सम्भवतः बन्दी राजाहरूको पुण्यको परिणामले भए पनि अथवा जरासन्धको पापको परिणामले भए पनि हजुर पनि राजसूय यज्ञ नै होस् भन्ने चाहनुहुन्छ। (अतः पहिला राजसूय यज्ञमा नै पाल्नुहोस्।)

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युद्धववचो राजन् सर्वतोभद्रमच्युतम्।**
**देवर्षिर्यदुवृद्धाश्च कृष्णश्च प्रत्यपूजयन्॥ ११॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**इति** = यस प्रकारको
**सर्वतोभद्रं** = सबै किसिमले कल्याणकारी र
**अच्युतं** = त्रुटिरहित
**उद्धववचः** = उद्धवको वचनलाई
**देवर्षिः** = देवर्षि नारदजी
**यदुवृद्धाः च** = श्रेष्ठ यादवहरू र
**कृष्णः च** = श्रीकृष्णले पनि
**प्रत्यपूजयन्** = प्रशंसा गर्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! सबै किसिमले कल्याणकारी र त्रुटिरहित उद्धवको त्यस भनाइलाई देवर्षि नारदजी, बुढापाका यादवहरू र भगवान् श्रीकृष्णले पनि प्रशंसा गर्नुभयो।

**अथादिशत् प्रयाणाय भगवान् देवकीसुतः।**
**भृत्यान् दारुकजैत्रादीननुज्ञाप्य गुरून् विभुः॥ १२॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**विभुः** = सर्वव्यापक
**भगवान्** = भगवान्
**देवकीसुतः** = देवकीपुत्र
श्रीकृष्णले
**गुरून्** = मान्यजनको
**अनुज्ञाप्य** = अनुमति लिएर
**दारुकजैत्रादीन्** = दारुक, जैत्र आदि
**भृत्यान्** = सेवकहरूलाई
**प्रयाणाय** = हस्तिनापुर जाने तयारी गर्न
**आदिशत्** = आदेश दिनुभयो

**वाक्यार्थ–** त्यसपछि सर्वव्यापक देवकीपुत्र भगवान् श्रीकृष्णले मान्यजनहरूको अनुमति लिएर दारुक, जैत्र आदि सेवकहरूलाई हस्तिनापुर जाने तयारी गर्न आदेश दिनुभयो।

**निर्गमय्यावरोधान् स्वान् ससुतान् सपरिच्छदान्।**
**सङ्कर्षणमनुज्ञाप्य यदुराजं च शत्रुहन्॥**
**सूतोपनीतं स्वरथमारुहद् गरुडध्वजम्॥ १३॥**

**पदार्थ–**
**शत्रुहन्** = हे शत्रुविनाश गर्ने परीक्षित्
**सङ्कर्षणं** = बलराम (र)
**यदुराजं च** = यदुराज उग्रसेनको समेत
**अनुज्ञाप्य** = अनुमति लिएर
**ससुतान्** = सन्तानहरू र
**सपरिच्छदान्** = सामग्रीहरूले सहित भएका
**स्वान्** = आफ्ना
**अवरोधान्** = अन्तःपुरका स्त्रीरूलाई
**निर्गमय्य** = पठाएर (भगवान्)
**सूतोपनीतं** = सारथिद्वारा ल्याइएको
**गरुडध्वजं** = गरुडको ध्वजाले सजिएको
**स्वरथं** = आफ्नो रथमा
**आरुहत्** = चढ्नुभयो

**वाक्यार्थ–** शत्रुहरूको विनाश गर्ने हे परीक्षित् ! त्यसपछि भगवान्ले बलराम र राजा उग्रसेनसँग अनुमति लिएर भगवान् श्रीकृष्णले बालबच्चा र विभिन्न सामग्रीले सहित भएका अन्तःपुरका स्त्रीहरूलाई अघि पठाइदिनुभयो र आफू सारथिले ल्याएको गरुडको ध्वजाले सजिएको रथमा चढ्नुभयो।

**ततो रथद्विपभटसादिनायकैः करालया परिवृत आत्मसेनया।**
**मृदङ्गभेर्यानकशङ्खगोमुखैः प्रघोषघोषितककुभो निराक्रमत्॥ १४॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**रथद्विपभटसादिनायकैः** = रथ,

हात्ती, सैनिक र घोडा तथा तिनका नायकहरूले सहित भएको
**करालया** = भयङ्कर
**आत्मसेनया** = आफ्ना सेनाले
**परिवृतः** = घेरिएर
**मृदङ्गभेर्यानकशङ्खगोमुखैः** = मृदङ्ग, नगडा, ढोल, शङ्ख, नर्सिङ्गा आदिका
**प्रघोषघोषितककुभः** = चर्का आवाजले सबै दिशा घन्काउँदै
**निराक्रमत्** = प्रस्थान गर्नुभयो

**वाक्यार्थ–** त्यसपछि रथ, हात्ती, सैनिक, घोडा र तिनका नायकहरूले सहित भएका भयङ्कर आफ्ना सेनाले घेरिएर भगवान्ले प्रस्थान गर्नुभयो। त्यसवेला मृदङ्ग, नगडा, ढोल, शङ्ख र नर्सिङ्गा आदि बाजाहरूको चर्को आवाजले सबै दिशा गुन्जिरहेका थिए।

**नृवाजिकाञ्चनशिबिकाभिरच्युतं सहात्मजाः पतिमनु सुव्रता ययुः।**
**वराम्बराभरणविलेपनस्रजः सुसंवृता नृभिरसिचर्मपाणिभिः॥ १५॥**

**पदार्थ–**
**सहात्मजाः** = सन्तानले सहित भएका
**वराम्बराभरणविलेपनस्रजः** = राम्रा-राम्रा कपडा, गहना, चन्दन र सुगन्धित पुष्पमालाले सजिएका
**असिचर्मपाणिभिः** = हातमा तरबार र ढाल लिएका
**नृभिः** = सैनिकहरूद्वारा
**सुसंवृताः** = घेरिएका
**सुव्रताः** = पतिव्रता रानीहरू
**नृवाजिकाञ्चनशिबिकाभिः** = डोली, रथ र सुनका पाल्कीहरूमा बसेर
**पतिं** = पति
**अच्युतं** = भगवान् श्रीकृष्णको
**अनु ययुः** = पछि लागे

**वाक्यार्थ–** आफ्ना सन्तानले सहित भएका तथा राम्रा-राम्रा कपडा, गहना, चन्दन र फूलका मालाले सजिएका पतिव्रता रानीहरू हातमा तरबार र ढाल लिएका सैनिकहरूद्वारा घेरिएका डोली, रथ अनि सुनका पाल्कीहरूमा बसी पति भगवान् श्रीकृष्णको पछि लागे।

**नरोष्ट्रगोमहिषखराश्वतर्यनः करेणुभिः परिजनवारयोषितः।**
**स्वलङ्कृताः कटकुटिकम्बलाम्बराद्युपस्करा ययुरधियुज्य सर्वतः॥ १६॥**

**पदार्थ–**
**स्वलङ्कृताः** = सजिसजाउ भएका
**परिजनवारयोषितः** = नोकर-चाकरका पत्नी र नगरवधूहरू पनि
**कटकुटिकम्बलाम्बराद्युपस्कराः** = गुन्द्री आदिद्वारा बनाइएका अस्थायी छाप्रा, त्रिपाल, कम्बल र ओढ्ने-ओछ्याउने आदि
**सर्वतः** = सबै सामग्री
**अधियुज्य** = ऊँट, घोडा, गाडा आदि वाहनमा राखेर
**नरोष्ट्रगोमहिषखराश्वतर्यनः** = पाल्की, ऊँट, गोरु, राँगो, खच्चड, गाढा र
**करेणुभिः** = हथिनीहरूमा चढेर
**ययुः** = पछि लागे

**वाक्यार्थ–** नोकर-चाकरहरूका पत्नीहरू र नगरवधूहरू पनि सिँगारिएर गुन्द्री आदिद्वारा बनाइएका अस्थायी छाप्रा, त्रिपाल, कम्बल र ओढ्ने-ओछ्याउने आदि सबै सामग्रीहरू गोरु, राँगो र खच्चड आदिलाई बोकाएर तथा आफू स्वयं पाल्की, ऊँट, गोरु, राँगा, खच्चड र हथिनी आदिमा चढेर पछि लागे।

**बलं बृहद्ध्वजपटछत्रचामरैर्वरायुधाभरणकिरीटवर्मभिः।**
**दिवांशुभिस्तुमुलरवं बभौ रवेर्यथार्णवः क्षुभिततिमिङ्गिलोर्मिभिः॥ १७॥**

**पदार्थ–**
**क्षुभिततिमिङ्गिलोर्मिभिः** = रिसाएका तिमिङ्गिल (ठुला-ठुला) माछाहरूले उठाएका तरङ्गहरूले
**यथा** = जसरी
**अर्णवः** = समुद्र (शोभायमान हुन्छ, त्यसै गरी)
**तुमुलरवं** = ठुलो हल्लाखल्ला सहित अघि बढेको
**बलं** = त्यो सेना
**दिवा** = दिनमा
**बृहद्ध्वजपटछत्रचामरैः** = ठुला-ठुला ध्वजा-पताका, छत्र, चामर आदिले तथा
**वरायुधाभरणकिरीटवर्मभिः** = राम्रा-राम्रा शस्त्र, गहना, मुकुट, कवच आदिले र
**रवेः** = सूर्यका
**अंशुभिः** = किरणहरूले
**बभौ** = शोभायमान देखियो

**वाक्यार्थ–** जसरी रिसाएका तिमिङ्गिल (ठुला-ठुला) माछाहरूले उठाएका तरङ्गहरूले समुद्रको शोभा हुन्छ, त्यसै गरी दिउँसोको समयमा ठुलो हल्लाखल्लाका साथ अघि बढेको त्यस सेनाका ठुला-ठुला ध्वजापताकाहरू, छत्र, चामर तथा राम्रा-राम्रा शस्त्र, गहना, मुकुट, कवच आदिमा सूर्यको किरण पर्नाले अति शोभा भइरहेको थियो।

**अथो मुनिर्यदुपतिना सभाजितः प्रणम्य तं हृदि विदधद् विहायसा।**
**निशम्य तद्व्यवसितमाहृतार्हणो मुकुन्दसन्दर्शननिर्वृतेन्द्रियः॥ १८॥**

**पदार्थ–**
**अथ** = यसपछि (भगवान् द्वारकाबाट हिँड्न लाग्नुभएपछि)
**यदुपतिना** = यदुपति श्रीकृष्णद्वारा
**सभाजितः** = सम्मान गरिनुभएका र
**आहृतार्हणः** = पूजा स्वीकार गरिसक्नुभएका
**मुकुन्दसन्दर्शननिर्वृतेन्द्रियः** = भगवान् मुकुन्दको दर्शनले सम्पूर्ण मनोरथ पूर्ण भएका
**मुनिः** = नारद मुनि
**तद्व्यवसितं** = भगवान्को निश्चयलाई
**निशम्य** = बुझेर
**तं** = उहाँलाई
**प्रणम्य** = नमस्कार गरेर
**हृदि** = हृदयमा
**विदधत्** = भगवान्लाई नै धारण गरेर
**विहायसा** = आकाशमार्गबाट जानुभयो

**वाक्यार्थ–** भगवान् द्वारकाबाट हिँड्न लागेपछि भगवान्द्वारा सम्मानित र पूजित हुनुभएका तथा भगवान् मुकुन्दको दर्शनले सम्पूर्ण मनोरथ पूरा भएर प्रसन्न हुनुभएका नारदजी भगवान्को निश्चयलाई बुझेपछि उहाँलाई नमस्कार गर्दै र हृदयमा धारण गर्दै आकाशमार्गबाट जानुभयो।

**राजदूतमुवाचेदं भगवान् प्रीणयन् गिरा।**
**मा भैष्ट दूत भद्रं वो घातयिष्यामि मागधम्॥ १९॥**

**पदार्थ–**
**भगवान्** = भगवान् श्रीकृष्णले
**गिरा** = मिठो बोलीले

**राजदूतं** = राजाहरूको दूतलाई
**प्रीणयन्** = आश्वासन दिँदै
**दूत** = हे दूत
**मा भैष्ट** = नडराऊ
**वः** = तिमीहरूको
**भद्रं** = कल्याण होस्
**मागधं** = जरासन्धलाई
**घातयिष्यामि** = मार्नेछु
**इदं** = यस्तो
**उवाच** = बोल्नुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान्ले बन्दी राजाहरूको दूतलाई मिठो बोलीले आश्वासन दिँदै हे दूत ! तिमीले ती राजाहरूलाई 'डराउनु पर्दैन, छिट्टै जरासन्धको वध हुन्छ' यो खबर सुनाइदेऊ भन्नुभयो।

**इत्युक्तः प्रस्थितो दूतो यथावदवदन्नृपान्।**
**तेऽपि सन्दर्शनं शौरेः प्रत्यैक्षन् यन्मुमुक्षवः॥ २०॥**

**पदार्थ–**
**इति** = यसरी
**उक्तः** = भनिएको (भगवान्को आज्ञा पाएपछि)
**प्रस्थितः** = त्यहाँबाट हिँडेको
**दूतः** = दूतले
**नृपान्** = राजाहरूलाई
**यथावत्** = जस्ताको त्यस्तै
**अवदत्** = सन्देश सुनायो
**ते अपि** = ती राजाहरूले पनि
**यन्मुमुक्षवः** = कारागारबाट मुक्त हुने इच्छाले
**शौरेः** = श्रीकृष्णको
**सन्दर्शनं** = प्रत्यक्ष दर्शनको
**प्रत्यैक्षन्** = प्रतीक्षा गर्न लागे

**वाक्यार्थ–** भगवान्को आज्ञापछि त्यहाँबाट हिँडेको दूतले राजाहरूलाई भगवान्को सन्देश जस्ताको तस्तै सुनाइदियो। त्यसपछि छिट्टै बन्धनबाट मुक्त हुन चाहने ती राजाहरूले पनि भगवान्को प्रत्यक्ष दर्शनको प्रतीक्षा गर्न थाले।

**आनर्तसौवीरमरूंस्तीर्त्वा विनशनं हरिः।**
**गिरीन् नदीरतीयाय पुरग्रामव्रजाकरान्॥ २१॥**

**पदार्थ–**
**हरिः** = भगवान् श्रीकृष्ण
**आनर्तसौवीरमरून्** = आनर्त, सौवीर, मरु
**विनशनं** = विनशन (कुरुक्षेत्र)
**गिरीन्** = पर्वतहरू
**नदीः** = नदीहरू
**पुरग्रामव्रजाकरान्** = नगर, गाउँ, वस्ती तथा खानीहरू
**तीर्त्वा** = पार गर्दै
**अतीयाय** = अघि बढ्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण आनर्त, सौवीर, मरु, कुरुक्षेत्र र यिनमा पर्ने पर्वत, नदी, नगर, गाउँ, गोपालहरूको वस्ती र खानीहरू पार गर्दै अघि बढ्नुभयो।

**ततो दृषद्वतीं तीर्त्वा मुकुन्दोऽथ सरस्वतीम्।**
**पञ्चालानथ मत्स्यांश्च शक्रप्रस्थमथागमत्॥ २२॥**

**पदार्थ–**
**अथ ततः** = त्यसपछि
**मुकुन्दः** = भगवान् श्रीकृष्ण
**दृषद्वतीं** = चक्रनदीलाई
**अथ** = त्यसपछि
**सरस्वतीम्** = सरस्वती नदीलाई

**अथ** = त्यहाँबाट
**पञ्चालान्** = पञ्चाल देश (र)
**मत्स्यान् च** = मत्स्य देशलाई
**तीर्त्वा** = तरेर
**शक्रप्रस्थं** = इन्द्रप्रस्थमा
**आगमत्** = पुग्नुभयो

**वाक्यार्थ—** त्यसपछि भगवान् श्रीकृष्ण चक्रनदी र सरस्वती नदी पार गरेर पञ्चाल र मत्स्यदेश हुँदै इन्द्रप्रस्थ पुग्नुभयो।

**तमुपागतमाकर्ण्य प्रीतो दुर्दर्शनं नृणाम्।**
**अजातशत्रुर्निरगात् सोपाध्यायः सुहृद्वृतः॥ २३॥**

**पदार्थ—**
**नृणां** = मनुष्यहरूका लागि
**दुर्दर्शनं** = दर्शन दुर्लभ भएका
**तं** = ती भगवान् श्रीकृष्ण
**उपागतं** = आइपुग्नुभएको छ भन्ने
**आकर्ण्य** = सुनेर
**प्रीतः** = अति खुसी भएका
**सोपाध्यायः** = आचार्यले सहित
**सुहृद्वृतः** = बन्धुबान्धवहरूले घेरिएका
**अजातशत्रुः** = जसको शत्रु जन्मिएकै छैन त्यस्ता युधिष्ठिर
**निरगात्** = (भगवान्को स्वागत गर्न) नगरबाट बाहिर निस्किए

**वाक्यार्थ—** मनुष्यहरूका निम्ति दर्शन दुर्लभ भएका भगवान् श्रीकृष्ण इन्द्रप्रस्थ आइपुग्नुभएको छ भन्ने सुनेर अति प्रसन्न भएका अजातशत्रु युधिष्ठिर गुरुजन एवं बन्धुबान्धवहरूले सहित भएर स्वागतका निम्ति नगरबाट बाहिर निस्किए।

**गीतवादित्रघोषेण ब्रह्मघोषेण भूयसा।**
**अभ्ययात् स हृषीकेशं प्राणाः प्राणमिवादृतः॥ २४॥**

**पदार्थ—**
**गीतवादित्रघोषेण** = गीत गाउँदै र बाजा बजाउँदै
**भूयसा** = उच्च स्वरमा
**ब्रह्मघोषेण** = वेदमन्त्रहरूको उच्चारण गर्दै
**सः** = ती युधिष्ठिर
**आदृतः** = आदरपूर्वक
**प्राणाः** = इन्द्रियहरू
**प्राणं** = मुख्य प्राणसँग
**इव** = मिल्न गए झैं
**हृषीकेशं** = हृषीकेशको
**अभ्ययात्** = अगाडि आए

**वाक्यार्थ—** इन्द्रियहरू मुख्य प्राणसँग मिल्न गए झैं राजा युधिष्ठिर गीत गाउँदै र बाजा बजाउँदै आदरपूर्वक हृषीकेश भगवान्को स्वागत गर्न उहाँको अगाडि आए।

**दृष्ट्वा विक्लिन्नहृदयः कृष्णं स्नेहेन पाण्डवः।**
**चिराद् दृष्टं प्रियतमं सस्वजेऽथ पुनः पुनः॥ २५॥**

**पदार्थ—**
**अथ** = त्यसपछि
**स्नेहेन** = अतिशय प्रेमका कारण
**विक्लिन्नहृदयः** = हृदय पग्लेका
**पाण्डवः** = युधिष्ठिरले
**चिरात् दृष्टं** = धेरै समयपछि देखा पर्नुभएका
**प्रियतमं** = अति प्रिय
**कृष्णं** = श्रीकृष्णलाई
**दृष्ट्वा** = देखेर
**पुनः पुनः** = बारम्बार
**सस्वजे** = अँगालो मारे

**वाक्यार्थ–** धेरै समयपछि आफ्ना प्रियतम श्रीकृष्णलाई देख्दा अतिशय प्रेमका कारण हृदय पग्लिएका युधिष्ठिरले बारम्बार भगवान्लाई अँगालो मारे।

**दोर्भ्यां परिष्वज्य रमामलालयं मुकुन्दगात्रं नृपतिर्हताशुभः।**
**लेभे परां निर्वृतिमश्रुलोचनो हृष्यत्तनुर्विस्मृतलोकविभ्रमः॥ २६॥**

पदार्थ–
**दोर्भ्यां** = दुबै हातले
**रमामलालयं** = लक्ष्मीजीको निर्मल निवासस्थान
**मुकुन्दगात्रं** = भगवान् श्रीकृष्णको शरीरलाई
**परिष्वज्य** = अँगालो मारेर
**हताशुभः** = अमङ्गल नाश गरेका
**अश्रुलोचनः** = आँखामा खुसीका आँसु भरेका
**हृष्यत्तनुः** = रोमाञ्चित शरीर भएका र
**विस्मृतलोकविभ्रमः** = लोकव्यवहारको चिन्तालाई बिर्सेका
**नृपतिः** = राजा युधिष्ठिरले
**परां** = परम
**निर्वृतिं** = आनन्द
**लेभे** = प्राप्त गरे

**वाक्यार्थ–** लक्ष्मीजीको निर्मल निवासस्थान भगवान् श्रीकृष्णको शरीरलाई आलिङ्गन गर्दा राजा युधिष्ठिरको पनि सम्पूर्ण अमङ्गल नाश भयो। खुसीले गर्दा उनको आँखामा आँसु बग्न थाल्यो र शरीरभरि रोमाञ्च हुन लाग्यो। उनले लोकव्यवहारको चिन्तालाई समेत भुलेर परम आनन्दको अनुभव गरे।

**तं मातुलेयं परिरभ्य निर्वृतो भीमः स्मयन् प्रेमजवाकुलेन्द्रियः।**
**यमौ किरीटी च सुहृत्तमं मुदा प्रवृद्धबाष्पाः परिरेभिरेऽच्युतम्॥ २७॥**

पदार्थ–
**मातुलेयं** = मामाका छोरा
**तं** = ती भगवान् श्रीकृष्णलाई
**परिरभ्य** = आलिङ्गन गरेर
**निर्वृतः** = आनन्दित भएका
**भीमः** = भीमसेन
**स्मयन्** = मुस्कुराउँदै
**प्रेमजवाकुलेन्द्रियः** = अतिशय प्रेमको आवेगले व्याकुल इन्द्रिय भएका बने
**यमौ** = जुम्ल्याहा नकुल सहदेव (र)
**किरीटी च** = अर्जुनले पनि
**मुदा** = प्रेमले
**प्रवृद्धबाष्पाः** = हर्षका आँसु बगाउँदै
**सुहृत्तमं** = परम हितैषी
**अच्युतं** = भगवान् अच्युतलाई
**परिरेभिरे** = आलिङ्गन गरे

**वाक्यार्थ–** मामाका छोरा भगवान् श्रीकृष्णलाई मुस्कुराउँदै अँगालो मारेका भीमसेन अतिशय प्रेमका कारण आनन्दले व्याकुल बने। जुम्ल्याहा नकुल-सहदेव र अर्जुनले पनि हर्षका आँसु बगाउँदै परम हितैषी भगवान् अच्युतलाई आलिङ्गन गरे।

**अर्जुनेन परिष्वक्तो यमाभ्यामभिवादितः।**
**ब्राह्मणेभ्यो नमस्कृत्य वृद्धेभ्यश्च यथार्हतः॥ २८॥**

**मानितो मानयामास कुरुसृञ्जयकैकयान्।**
**सूतमागधगन्धर्वा वन्दिनश्चोपमन्त्रिणः॥ २९॥**
**मृदङ्गशङ्खपटहवीणापणवगोमुखैः।**
**ब्राह्मणाश्चारविन्दाक्षं तुष्टुवुर्ननृतुर्जगुः॥ ३०॥**

**पदार्थ—**
**अर्जुनेन** = अर्जुनद्वारा
**परिष्वक्तः** = आलिङ्गन गरिनुभएका र
**यमाभ्यां** = जुम्ल्याहा नकुल-सहदेवद्वारा
**अभिवादितः** = अभिवादन गरिनुभएका
**मानितः** = सबैद्वारा सम्मानित हुनुभएका भगवान्ले पनि
**ब्राह्मणेभ्यः** = ब्राह्मणहरूलाई र
**वृद्धेभ्यः च** = मान्यजनहरूलाई पनि
**यथार्हतः** = मर्यादा अनुसार
**नमस्कृत्य** = नमस्कार गरेर
**कुरुसृञ्जयकैकयान्** = कुरु, सृञ्जय र कैकय देशका राजाहरूलाई
**मानयामास** = सम्मान गर्नुभयो
**सूतमागधगन्धर्वाः** = सूत, मागध, गन्धर्वहरू
**वन्दिनः** = वन्दीजन र
**ब्राह्मणाः च** = ब्राह्मणहरूले
**उपमन्त्रिणः च** = विदूषक आदिले पनि
**मृदङ्गशङ्खपटहवीणापणव-गोमुखैः** = मृदङ्ग, शङ्ख, नगडा, वीणा, ढोलक, गोमुख आदि बाजा बजाउँदै
**अरविन्दाक्षं** = कमलनयन भगवान्लाई
**ननृतुः** = नाँच्दै र
**जगुः** = गाउँदै
**तुष्टुवुः** = प्रसन्न गराए

**वाक्यार्थ—** अर्जुनद्वारा पुनः आलिङ्गन र नकुल-सहदेवद्वारा अभिवादन गरिनुभएका भगवान्ले पनि ब्राह्मण र मान्यजनहरूलाई मर्यादा अनुसार नमस्कार गर्नुभयो। कुरु, सृञ्जय र कैकय देशका राजाहरूले भगवान् श्रीकृष्णलाई सम्मान गरे र भगवान्ले पनि तिनीहरूको मर्यादा अनुसार सम्मान गर्नुभयो। सूत, मागध, बन्दीजन र ब्राह्मणहरूले भगवान्को स्तुति गर्न लागे भने गन्धर्व, नट, विदूषक आदि मृदङ्ग, शङ्ख, नगडा, बीणा, ढोलक र गोमुख आदि बाजा बजाउँदै कमलनयन भगवान् श्रीकृष्णलाई प्रसन्न गराउन नाच्न र गाउन थाले।

**एवं सुहृद्भिः पर्यस्तः पुण्यश्लोकशिखामणिः।**
**संस्तूयमानो भगवान् विवेशालङ्कृतं पुरम्॥ ३१॥**

**पदार्थ—**
**एवं** = यसप्रकार
**सुहृद्भिः** = हितैषी बन्धुबान्धवले
**पर्यस्तः** = युक्त हुनुभएका
**संस्तूयमानः** = सबैद्वारा प्रशंसित हुनुभएका
**पुण्यश्लोकशिखामणिः** = पवित्रकीर्तिशालीहरूमा श्रेष्ठ
**भगवान्** = भगवान् श्रीकृष्ण
**अलङ्कृतं** = सुसज्जित
**पुरं** = इन्द्रप्रस्थ नगरमा
**विवेश** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** यसप्रकार हितैषी बन्धु-बान्धवहरूले सहित हुनुभएका पवित्रकीर्तिशालीहरूमा श्रेष्ठ भगवान् श्रीकृष्ण सबैद्वारा प्रशंसित हुँदै सुसज्जित इन्द्रप्रस्थ नगरमा प्रवेश गर्नुभयो।

**संसिक्तवर्त्म करिणां मदगन्धतोयै-**
**श्चित्रध्वजैः कनकतोरणपूर्णकुम्भैः।**
**मृष्टात्मभिर्नवदुकूलविभूषणस्रग्-**
**गन्धैर्नृभिर्युवतिभिश्च विराजमानम्॥ ३२॥**

**पदार्थ–**
**करिणां** = हात्तीहरूको
**मदगन्धतोयैः** = मदको सुगन्धमिश्रित जलले
**संसिक्तवर्त्म** = बाटाहरू सिञ्चित भएको
**कनकतोरणपूर्णकुम्भैः** = सुनका तोरण र जलपूर्ण कलशहरूले
**चित्रध्वजैः** = रङ्गीचङ्गी ध्वजाहरूले
**मृष्टात्मभिः** = नुहाइ-धुवाइ गरेर
**नवदुकूलविभूषणस्रग्गन्धैः** = नयाँ-नयाँ कपडा, गहना र सुगन्धित माला तथा चन्दन आदिले सजिएका
**नृभिः** = पुरुषहरूले (र)
**युवतिभिः च** = युवतीहरूले पनि
**विराजमानम्** = त्यो नगर अति सुशोभित भएको थियो

**वाक्यार्थ–** इन्द्रप्रस्थ नगरका बाटाहरू हात्तीको मदमिश्रित सुगन्धित जलद्वारा सिञ्चित भएका थिए। ठाउँ-ठाउँमा रहेका रङ्गीचङ्गी ध्वजाहरू, सुनका तोरणहरू र जलपूर्ण सुनका कलशहरूले शोभा बढाइरहेका थिए। त्यस्तै नुहाइ-धुवाइ गरेर राम्रा-राम्रा वस्त्र, गहना र सुगन्धित माला तथा चन्दन आदिले सजिएका पुरुष अनि युवतीहरूद्वारा त्यो नगर अति सुशोभित भएको थियो।

**उद्दीप्तदीपबलिभिः प्रतिसद्म जालनिर्यातधूपरुचिरं विलसत्पताकम्।**
**मूर्धन्यहेमकलशै रजतोरुशृङ्गैर्जुष्टं ददर्श भवनैः कुरुराजधाम॥ ३३॥**

**पदार्थ–**
**प्रतिसद्म** = हरेक घर
**उद्दीप्तदीपबलिभिः** = बलेका बत्तीका लहरहरूले
**जुष्टं** = युक्त भएको
**जालनिर्यातधूपरुचिरं** = झ्यालबाट निस्कँदै गरेको धूपको मिठो धुवाँले सुगन्धित बनेको
**विलसत्पताकं** = सुन्दर ध्वजा-पताकाले सिँगारिएको
**मूर्धन्यहेमकलशैः** = धुरीमा रहेका सुनका कलश र
**रजतोरुशृङ्गैः** = चाँदीका शिखरहरूले सजिएका
**भवनैः** = भवनहरूले सुशोभित
**कुरुराजधाम** = पाण्डवहरूको राजधानीलाई
**ददर्श** = (भगवान् श्रीकृष्णले नजिकैबाट) देख्नुभयो

**वाक्यार्थ–** प्रत्येक घरमा दीपावली गरिएको, हरेक घरका झ्यालबाट निस्कँदै गरेको धूपको मिठो बास्नाले सुगन्धित बनेको हस्तिनापुरका प्रत्येक भवनहरू सुन्दर ध्वजा-पताकाले सिँगारिएका र धुरीमा रहेका सुनका कलश तथा चाँदीका शिखरहरूले अति सुशोभित थिए। त्यस्ता दिव्य

भवनहरूले युक्त पाण्डवहरूको राजधानीलाई भगवान्ले नजिकैबाट देख्नुभयो।

**प्राप्तं निशम्य नरलोचनपानपात्र-**
**मौत्सुक्यविश्लथितकेशदुकूलबन्धाः।**
**सद्यो विसृज्य गृहकर्म पतींश्च तल्पे**
**द्रष्टुं ययुर्युवतयः स्म नरेन्द्रमार्गे॥ ३४॥**

**पदार्थ–**
**नरलोचनपानपात्रं** = मनुष्यहरूका आँखाका लागि प्रिय विषय हुनुभएका भगवान् श्रीकृष्ण
**प्राप्तं** = आइपुग्नुभयो भन्ने
**निशम्य** = सुनेर
**औत्सुक्यविश्लथितकेशदुकूल-बन्धाः** = दर्शन गर्ने उत्कण्ठाका कारण कपाल र साडीका बन्धनहरू राम्ररी कस्न नभ्याएका
**युवतयः** = युवतीहरू
**सद्यः** = तत्काल
**गृहकर्म** = घरका कामकाज (र)
**पतीन् च** = लोग्नेलाई पनि
**तल्पे** = ओछ्यानमै
**विसृज्य** = छाडेर
**द्रष्टुं** = भगवान् श्रीकृष्णलाई हेर्न
**नरेन्द्रमार्गे** = राजमार्गमा
**ययुः स्म** = पुगे

**वाक्यार्थ–** मनुष्यहरूका आँखाका लागि प्रिय विषय हुनुभएका भगवान् श्रीकृष्ण आउनुभएको खबर सुनेर हस्तिनापुरका युवतीहरू दर्शन गर्ने उत्कण्ठाले हतारिँदै कपालका चुल्ठा तथा साडीको बन्धन पनि राम्ररी कस्न नभ्याएका ती नारीहरू घरका कामकाज र पतिलाई चटक्क छाडेर भगवान्लाई हेर्न तत्काल राजमार्गमा पुगे।

**तस्मिन् सुसङ्कुल इभाश्वरथद्विपद्भिः**
**कृष्णं सभार्यमुपलभ्य गृहाधिरूढाः।**
**नार्यो विकीर्य कुसुमैर्मनसोपगुह्य**
**सुस्वागतं विदधुरुत्स्मयवीक्षितेन॥ ३५॥**

**पदार्थ–**
**गृहाधिरूढाः** = घरमा चढेका
**नार्यः** = नारीहरूले
**इभाश्वरथद्विपद्भिः** = हात्ती, घोडा, रथ र सेनाले
**सुसङ्कुले** = भरिएको
**तस्मिन्** = त्यो राजमार्गमा
**सभार्यम्** = पत्नीहरूले सहित हुनुभएका
**कृष्णं** = भगवान् श्रीकृष्णलाई
**उपलभ्य** = देखेर
**कुसुमैः** = फूलहरू
**विकीर्य** = छरेर
**मनसा** = मन–मनले
**उपगुह्य** = अँगालो मारेर
**उत्स्मयवीक्षितेन** = प्रेमपूर्ण मुस्कान र हेराइले
**सुस्वागतं** = स्वागत
**विदधुः** = गरे

**वाक्यार्थ–** घरको छतमा चढेका नारीहरूले हात्ती, घोडा र सेनाले भरिएको राजमार्गमा आफ्ना

प्रिय पत्नीहरूका साथमा आइरहनुभएका भगवान् श्रीकृष्णलाई देख्नासाथ फूलको वर्षा गरे। मनमनै उहाँलाई अँगालो मारेर तथा प्रेमपूर्ण मुस्कान र हेराइद्वारा उनीहरूले भगवान्को स्वागत गरे।

**ऊचुः स्त्रियः पथि निरीक्ष्य मुकुन्दपत्नी-**
**स्तारा यथोडुपसहाः किमकार्यमूभिः।**
**यच्चक्षुषां पुरुषमौलिरुदारहास-**
**लीलावलोककलयोत्सवमातनोति॥ ३६॥**

**पदार्थ—**
**उडुपसहाः** = चन्द्रमाले सहित भएका
**ताराः** = ताराहरू
**यथा** = जस्ता
**मुकुन्दपत्नीः** = भगवान्ले सहित भएका उहाँका पत्नीहरूलाई
**पथि** = बाटोमा
**निरीक्ष्य** = देखेर
**स्त्रियः** = सहरका नारीहरूले
**ऊचुः** = भन्न लागे
**यच्चक्षुषां** = जुन नारीहरूका आँखालाई
**पुरुषमौलिः** = पुरुषशिरोमणि भगवान्ले
**उदारहासलीलावलोककलया** = मन्द मुस्कानयुक्त हाँसो र छड्के हेराइरूपी कलाले
**उत्सवं** = आनन्द
**आतनोति** = प्रदान गर्नुहुन्छ
**अमूभिः** = त्यस्ता यी रानीहरूद्वारा
**किं** = के त्यस्तो पुण्यकर्म
**अकारि** = गरियो होला

**वाक्यार्थ—** चन्द्रमाका साथमा विराजमान भएका तारा जस्ता भगवान्का साथमा आएका उहाँका पत्नीहरूलाई बाटोमा देखेर सहरका नारीहरूले आपसमा कुरा गर्न थाले— यी रानीहरूले पूर्वजन्ममा के त्यस्तो पुण्यकर्म गरे होलान्? जसका कारण पुरुषशिरोमणि भगवान् श्रीकृष्णले मन्दमुस्कान र छड्के हेराइजस्ता आफ्ना लीलाहरूले सधैँ यिनीहरूका आँखालाई आनन्द प्रदान गरिरहनुभएको छ।

**तत्र तत्रोपसङ्गम्य पौरा मङ्गलपाणयः।**
**चक्रुः सपर्यां कृष्णाय श्रेणीमुख्या हतैनसः॥ ३७॥**

**पदार्थ—**
**तत्र तत्र** = ठाउँ-ठाउँमा
**हतैनसः** = भगवान्को दर्शनले सम्पूर्ण पाप नष्ट भएका
**मङ्गलपाणयः** = हात-हातमा माङ्गलिक वस्तु लिएका
**पौराः** = नगरवासी र
**श्रेणीमुख्याः** = धनीमानीहरूले
**उपसङ्गम्य** = नजिकै पुगेर
**कृष्णाय** = भगवान् श्रीकृष्णलाई
**सपर्यां** = स्वागत-सत्कार
**चक्रुः** = गरे

**वाक्यार्थ—** ठाउँ-ठाउँमा भगवान्को दर्शनले पवित्र भएका र हात-हातमा माङ्गलिक वस्तु लिएका सामान्य नगरवासी तथा धनीमानीहरूले पनि नजिकै पुगेर भगवान्को स्वागत-सत्कार गरे।

**अन्तःपुरजनैः प्रीत्या मुकुन्दः फुल्ललोचनैः।**
**ससम्भ्रमैरभ्युपेतः प्राविशद् राजमन्दिरम्॥ ३८॥**

**पदार्थ–**
**ससम्भ्रमैः** = (भगवान्लाई देखेर खुसीले) हड्बडाएका तथा
**फुल्ललोचनैः** = (आनन्दले) प्रफुल्ल आँखा भएका
**अन्तःपुरजनैः** = राजदरबारका कर्मचारीहरूद्वारा
**प्रीत्या** = प्रेमपूर्वक
**अभ्युपेतः** = स्वागतसत्कार गरिनुभएका
**मुकुन्दः** = भगवान् मुकुन्द
**राजमन्दिरं** = राजभवनमा
**प्राविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** भगवान्लाई देखेर खुसीले हड्बडाएका तथा आनन्दले आँखा प्रफुल्ल भएका राजदरबारका कर्मचारीहरूले प्रेमपूर्वक भगवान्को स्वागत सत्कार गरे। भगवान् मुकुन्द पनि त्यसलाई स्विकार्दै राजभवनमा प्रवेश गर्नुभयो।

**पृथा विलोक्य भ्रात्रेयं कृष्णं त्रिभुवनेश्वरम्।**
**प्रीतात्मोत्थाय पर्यङ्कात् सस्नुषा परिषस्वजे॥ ३९॥**

**पदार्थ–**
**पृथा** = कुन्तीले
**त्रिभुवनेश्वरं** = तीनै लोकका मालिक
**भ्रात्रेयं** = भाइका छोरा
**कृष्णं** = श्रीकृष्णलाई
**विलोक्य** = देखेर
**प्रीतात्मा** = अति प्रसन्न हुँदै
**सस्नुषा** = बुहारीले सहित भई
**पर्यङ्कात्** = पलङ्गबाट
**उत्थाय** = उठेर
**परिषस्वजे** = आलिङ्गन गरिन्

**वाक्यार्थ–** तीनै लोकका मालिक अनि आफ्ना भाइका छोरा श्रीकृष्ण आउनुभएको देख्दा अति प्रसन्न भएकी कुन्ती पलङ्गबाट उठी बुहारी द्रौपदीका साथ अगाडि आइन् र उनले भगवान्लाई आलिङ्गन गरिन्।

**गोविन्दं गृहमानीय देवदेवेशमादृतः।**
**पूजायां नाविदत् कृत्यं प्रमोदोपहतो नृपः॥ ४०॥**

**पदार्थ–**
**देवदेवेशं** = देवताहरूका पनि स्वामी
**गोविन्दं** = भगवान् गोविन्दलाई
**आदृतः** = आदरपूर्वक
**गृहं** = महलमा
**आनीय** = ल्याएर
**प्रमोदोपहतः** = आनन्दले विभोर भएका
**नृपः** = राजा युधिष्ठिरले
**पूजायां** = अतिथिको पूजनमा
**कृत्यं** = गर्नुपर्ने कर्मको क्रम नै
**न अविदत्** = थाहा पाएनन् (बिर्सिए)

**वाक्यार्थ–** देवताहरूका पनि स्वामी भगवान् श्रीकृष्णलाई आदरपूर्वक आफ्नो महलमा ल्याएपछि आनन्दविभोर भएका राजा युधिष्ठिरले अतिथिको स्वागतमा गर्नुपर्ने विधिसमेत बिर्सिए।

**पितृस्वसुर्गुरुस्त्रीणां कृष्णश्चक्रेऽभिवादनम्।**
**स्वयं च कृष्णया राजन् भगिन्या चाभिवन्दितः॥ ४१॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**कृष्णः** = श्रीकृष्णले
**पितृस्वसुः** = फुपू कुन्ती र
**गुरुस्त्रीणां** = गुरुजनका पत्नीहरूलाई
**अभिवादनं** = अभिवादन
**चक्रे** = गर्नुभयो
**स्वयं च** = आफू पनि
**कृष्णया** = द्रौपदी (र)
**भगिन्या च** = बहिनी सुभद्राद्वारा पनि
**अभिवन्दितः** = नमस्कृत हुनुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! भगवान् श्रीकृष्णले फुपू कुन्ती र गुरुजनका पत्नीहरूलाई अभिवादन गर्नुभयो भने द्रौपदी तथा सुभद्राले उहाँलाई नमस्कार गरे।

**श्वश्र्वा सञ्चोदिता कृष्णा कृष्णपत्नीश्च सर्वशः।**
**आनर्च रुक्मिणीं सत्यां भद्रां जाम्बवतीं तथा॥ ४२॥**
**कालिन्दीं मित्रविन्दां च शैब्यां नाग्नजितीं सतीम्।**
**अन्याश्चाभ्यागता यास्तु वासःस्रङ्मण्डनादिभिः॥ ४३॥**

**पदार्थ–**
**श्वश्र्वा** = सासू कुन्तीद्वारा
**सञ्चोदिता** = अभिप्रेरित भएकी
**कृष्णा च** = द्रौपदीले पनि
**सर्वशः** = सम्पूर्ण
**कृष्णपत्नीः** = भगवान्का पत्नीहरूलाई
**रुक्मिणीं** = रुक्मिणीलाई
**सत्यां** = सत्यभामालाई
**भद्रां** = भद्रालाई
**जाम्बवतीं** = जाम्बवतीलाई
**कालिन्दीं** = कालिन्दीलाई
**मित्रविन्दां** = मित्रविन्दालाई
**शैब्यां** = शैब्यालाई र
**सतीम्** = सती
**नाग्नजितीं** = नाग्नजितीलाई
**तथा** = त्यस्तै
**यास्तु** = जो-जो
**अन्याः** = अरू स्त्रीहरू
**अभ्यागताः च** = आएका थिए, ती सबैलाई पनि
**वासःस्रङ्मण्डनादिभिः च** = वस्त्र, माला, गहना आदिले
**आनर्च** = पूजा गरिन्

**वाक्यार्थ–** सासू कुन्तीद्वारा अभिप्रेरित भएकी द्रौपदीले पनि वस्त्र, माला, गहना आदि समर्पण गरेर रुक्मिणी, सत्यभामा, भद्रा, जाम्बवती, कालिन्दी, मित्रविन्दा, शैब्या र सती नाग्नजिती यी भगवान्का रानीहरूको तथा साथमा आएका अन्य स्त्रीहरूको पनि मर्यादा अनुसार स्वागतसत्कार गरिन्।

**सुखं निवासयामास धर्मराजो जनार्दनम्।**
**ससैन्यं सानुगामात्यं सभार्यं च नवं नवम्॥ ४४॥**

**पदार्थ–**
**धर्मराजः** = धर्मराज युधिष्ठिरले
**ससैन्यं** = सेनाले सहित

हुनुभएका
**सानुगामात्यं** = सेवक र मन्त्रीले युक्त हुनुभएका
**सभार्यं** = पत्नीहरूका साथमा
आउनुभएका
**जनार्दनं च** = भगवान् श्रीकृष्णलाई पनि
**नवं नवं** = नयाँ-नयाँ
**सुखं** = सुखको अनुभव हुने ठाउँमा
**निवासयामास** = निवास गराए

**वाक्यार्थ–** धर्मराज युधिष्ठिरले सेना, सेवक, मन्त्री र पत्नीले सहित हुनुभएका भगवान् श्रीकृष्णलाई नयाँ-नयाँ सुखको अनुभव हुने ठाउँहरूमा निवास गराए।

**तर्पयित्वा खाण्डवेन वह्निं फाल्गुनसंयुतः।**
**मोचयित्वा मयं येन राज्ञे दिव्या सभा कृता॥ ४५॥**

**पदार्थ–**
**फाल्गुनसंयुतः** = अर्जुनका साथमा रहनुभएका भगवान्ले
**खाण्डवेन** = खाण्डववन डढाएर
**वह्निं** = अग्निलाई
**तर्पयित्वा** = तृप्त पार्ने र
**मयं** = मय दानवलाई
**मोचयित्वा** = बचाउने काम गर्नुभयो
**येन** = जुन मयद्वारा
**राज्ञे** = राजा युधिष्ठिरलाई
**दिव्या** = सुन्दर
**सभा** = सभाभवन
**कृता** = बनाइएको थियो

**वाक्यार्थ–** अर्जुनको साथमा रहेर भगवान् श्रीकृष्णले खाण्डववन डढाएर अग्निलाई तृप्त पार्ने र मय दानवलाई त्यहाँबाट बचाउने जस्ता कार्यहरू गर्नुभयो। त्यही मयले राजा युधिष्ठिरका निम्ति दिव्य सभाभवन बनाइदिएको थियो।

**उवास कतिचिन्मासान् राज्ञः प्रियचिकीर्षया।**
**विहरन् रथमारुह्य फाल्गुनेन भटैर्वृतः॥ ४६॥**

**पदार्थ–**
**राज्ञः** = राजा युधिष्ठिरलाई
**प्रियचिकीर्षया** = प्रसन्न गराउने इच्छाले
**फाल्गुनेन** = अर्जुनका साथमा
**रथं** = रथमा
**आरुह्य** = चढेर
**भटैः** = सेनाहरूद्वारा
**वृतः** = घेरिएर
**विहरन्** = घुम्दै
**कतिचित्** = केही
**मासान्** = महिना
**उवास** = हस्तिनापुरमा बस्नुभयो

**वाक्यार्थ–** राजा युधिष्ठिरलाई प्रसन्न गराउने इच्छाले भगवान् श्रीकृष्ण अर्जुनका साथमा रथमा चढेर सेनाहरूलाई साथमा लिई केही महिनासम्म हस्तिनापुरमा घुम्दै फिर्दै बस्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**
**कृष्णस्येन्द्रप्रस्थगमनं नामैकसप्ततितमोऽध्यायः॥ ७१॥**

# अथ द्विसप्ततितमोऽध्यायः

## जरासन्ध वध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एकदा तु सभामध्य आस्थितो मुनिभिर्वृतः।**

**ब्राह्मणैः क्षत्रियैर्वैश्यैर्भ्रातृभिश्च युधिष्ठिरः॥ १॥**

**आचार्यैः कुलवृद्धैश्च ज्ञातिसम्बन्धिबान्धवैः।**

**शृण्वतामेव चैतेषामाभाष्येदमुवाच ह॥ २॥**

**पदार्थ–**
**एकदा तु** = एक दिन
**मुनिभिः** = ऋषिहरूद्वारा
**ब्राह्मणैः** = ब्राह्मणहरूद्वारा
**क्षत्रियैः** = क्षत्रियहरूद्वारा
**वैश्यैः** = वैश्यहरूद्वारा
**भ्रातृभिः** = भाइहरूद्वारा
**आचार्यैः** = गुरुजनहरूद्वारा
**कुलवृद्धैः** = कुलका बुढापाकाहरूद्वारा
**ज्ञातिसम्बन्धिबान्धवैः च** = आफन्त, सम्बन्धी र बन्धुबान्धवहरूद्वारा
**वृतः** = घेरिएर
**सभामध्ये** = सभाको बिचमा
**आस्थितः** = बसेका
**युधिष्ठिरः** = राजा युधिष्ठिरले
**एतेषां** = यी सबैले
**शृण्वताम् एव च** = सुन्ने गरी नै
**आभाष्य** = (भगवान्लाई) सम्बोधन गरेर
**इदं** = यस्तो
**उवाच ह** = भन्न लागे

**वाक्यार्थ–** एक दिन राजा युधिष्ठिर ऋषिहरू, ब्राह्मण, क्षत्रिय, वैश्य, भाइ, गुरुजन, कुलका बुढापाका, आफन्त, नाता-कुटुम्ब र बन्धुबान्धवले घेरिएर सभाको बिचमा बसेका थिए। त्यसै वेला सबैले सुन्ने गरी भगवान्लाई सम्बोधन गर्दै उनले यसो भन्न लागे।

**युधिष्ठिर उवाच** (युधिष्ठिरले भने)

**क्रतुराजेन गोविन्द राजसूयेन पावनीः।**

**यक्ष्ये विभूतीर्भवतस्तत्सम्पादय नः प्रभो॥ ३॥**

**पदार्थ–**
**गोविन्द** = हे गोविन्द
**क्रतुराजेन** = यज्ञहरूमा श्रेष्ठ
**राजसूयेन** = राजसूय यज्ञद्वारा
**भवतः** = हजुरको
**पावनीः** = पवित्र
**विभूतीः** = विभूतिरूप देवताहरूको
**यक्ष्ये** = पूजा गर्दछु
**प्रभो** = हे प्रभु
**नः** = हाम्रो
**तत्** = त्यस इच्छालाई
**सम्पादय** = पूरा गरिदिनुहोस्

**वाक्यार्थ–** हे गोविन्द ! हामी यज्ञहरूमा श्रेष्ठ राजसूय यज्ञद्वारा हजुरका पवित्र विभूतिरूप देवताहरूको पूजा गर्न चाहन्छौँ, हाम्रो यो इच्छा पूरा गरिदिनुहोस्।

**त्वत्पादुके अविरतं परि ये चरन्ति**
**ध्यायन्त्यभद्रनशने शुचयो गृह्णन्ति।**
**विन्दन्ति ते कमलनाभ भवापवर्ग-**
**माशासते यदि त आशिष ईश नान्ये॥ ४॥**

**पदार्थ–**
**कमलनाभ** = हे कमलनाभ
**ईश** = हे भगवान्
**ये** = ज-जसले
**अभद्रनशने** = अमङ्गलनाशक
**त्वत्पादुके** = हजुरका चरणलाई
**अविरतं** = निरन्तर
**परि चरन्ति** = सेवा गर्दछन्
**ध्यायन्ति** = ध्यान गर्दछन् र
**गृह्णन्ति** = भजन गर्दछन्
**ते** = ती
**शुचयः** = पवित्र जनहरूले
**भवापवर्गम्** = संसारबाट मुक्ति
**विन्दन्ति** = प्राप्त गर्दछन्
**यदि** = यदि
**ते** = तिनीहरूले
**आशिषः** = विषयको
**आशासते** = चाहना राख्दछन्
भने (त्यो पनि पूर्ण हुनेछ)
**न अन्ये** = अरूले पाउँदैनन्

**वाक्यार्थ–** हे कमलनाभ परमेश्वर ! अमङ्गल नाश गर्ने हजुरका चरणकमलको ज-जसले निरन्तर सेवा, ध्यान र भजन गर्दछन् ती पवित्रजनले संसारको बन्धनबाट मुक्ति प्राप्त गर्दछन्। यदि तिनीहरूले सांसारिक विषयको आशा राख्छन् भने त्यो पनि पूरा हुन्छ, तर अरूले त्यो पाउँदैनन्।

**तद् देवदेव भवतश्चरणारविन्द-**
**सेवानुभावमिह पश्यतु लोक एषः।**
**ये त्वां भजन्ति न भजन्त्युत वोभयेषां**
**निष्ठां प्रदर्शय विभो कुरुसृञ्जयानाम्॥ ५॥**

**पदार्थ–**
**तत्** = त्यसकारण
**देवदेव** = हे देवताका पनि देवता
**विभो** = हे सर्वव्यापक प्रभु
**इह** = यहाँ
**एषः लोकः** = यी जनसमुदायले
**भवतः** = हजुरका
**चरणारविन्दसेवानुभावं** = चरणकमलका सेवा गर्नाको फल
**पश्यतु** = देखोस्
**कुरुसृञ्जयानां** = कुरुवंशी र सृञ्जयवंशीहरूमध्ये
**ये** = ज-जसले
**त्वां** = हजुरलाई
**भजन्ति** = भजन गर्दछन्
**उत वा** = अथवा
**न भजन्ति** = भजन गर्दैनन्
**उभयेषां** = ती दुबैथरीको
**निष्ठां** = स्थिति
**प्रदर्शय** = देखाइदिनुहोस्

**वाक्यार्थ–** हे देवताका पनि देवता सर्वव्यापक प्रभु ! यस यज्ञमा यी जनसमुदायले हजुरका

चरणकमलको सेवाको महिमा देखून् भन्ने मेरो इच्छा छ। अतः कुरुवंशी र सृञ्जयवंशीहरूमध्ये ज-जसले हजुरको भजन गर्दछन् र जसले गर्दैनन्, यी दुबैथरीको अवस्थाको अन्तर देखाइदिनुहोस्।

**न ब्रह्मणः स्वपरभेदमतिस्तव स्यात्**
**सर्वात्मनः समदृशः स्वसुखानुभूतेः।**
**संसेवतां सुरतरोरिव ते प्रसादः**
**सेवानुरूपमुदयो न विपर्ययोऽत्र॥ ६॥**

**पदार्थ–**
**सर्वात्मनः** = सबैका आत्मस्वरूप
**समदृशः** = समदर्शी
**स्वसुखानुभूतेः** = परम आनन्दको अनुभव गर्ने
**ब्रह्मणः** = अद्वितीय ब्रह्मस्वरूप हजुरमा
**स्वपरभेदमतिः** = आफ्नो र अर्काको भन्ने भेदबुद्धि
**न स्यात्** = हुँदैन (तर पनि)
**तव** = हजुरको
**संसेवतां** = सेवा गर्नेलाई
**सुरतरोः इव** = कल्पवृक्षको सेवा गर्नेलाई झैं
**सेवानुरूपं** = सेवा अनुसारको
**ते** = हजुरको
**प्रसादः** = कृपाप्रसादको
**उदयः** = प्राप्ति हुन्छ
**अत्र** = यस विषयमा
**न विपर्ययः** = कुनै शङ्का छैन

**वाक्यार्थ–** हे प्रभु ! हजुर सबैको आत्मा, समदर्शी एवं परमानन्दको अनुभवस्वरूप परब्रह्म हुनुहुन्छ। अतः हजुरमा यो आफ्नो हो र यो अर्काको हो भन्ने भेदबुद्धि छैन। यसो भए तापनि जसरी कल्पवृक्षको सेवा गर्नेले आफ्नो सेवा अनुसारको फल पाउँछ, त्यसै गरी हजुरले पनि आफ्नो सेवा गर्नेलाई उसको भावना अनुसारको फल दिनुहुन्छ। यस विषयमा कुनै शङ्का छैन।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**सम्यग् व्यवसितं राजन् भवता शत्रुकर्शन।**
**कल्याणी येन ते कीर्तिर्लोकाननुभविष्यति॥ ७॥**

**पदार्थ–**
**राजन्** = हे राजा युधिष्ठिर
**शत्रुकर्शन** = हे शत्रुविजयी
**भवता** = तपाईंद्वारा
**सम्यक्** = अति राम्रो
**व्यवसितं** = विचार गरिएको छ
**येन** = जुन निश्चयले
**ते** = तपाईंको
**कल्याणी** = कल्याणकारी
**कीर्तिः** = कीर्ति
**लोकान्** = संसारभर
**अनुभविष्यति** = फैलिनेछ

**वाक्यार्थ–** हे शत्रुविजयी राजा युधिष्ठिर ! तपाईंले राजसूय यज्ञद्वारा सम्पूर्ण देवताको पूजा गर्ने निश्चय गर्नुभएको छ, यो अति उत्तम छ। यसले तपाईंको मङ्गलकारी कीर्ति संसारभरि फैलिनेछ।

**ऋषीणां पितृदेवानां सुहृदामपि नः प्रभो।**
**सर्वेषामपि भूतानामीप्सितः क्रतुराडयम्॥ ८॥**

**पदार्थ—**
**प्रभो** = हे समर्थ राजा
**अयं** = यो
**क्रतुराट्** = यज्ञहरूको राजा राजसूय यज्ञ
**ऋषीणां** = नारद आदि ऋषिहरूलाई
**पितृदेवानां** = पितृहरूलाई र
**सुहृदां** = बन्धुबान्धवहरूलाई
**नः अपि** = हामीहरूलाई पनि र
**सर्वेषाम्** = सम्पूर्ण
**भूतानाम् अपि** = प्राणीहरूलाई पनि
**ईप्सितः** = प्रिय छ

**वाक्यार्थ—** हे राजा ! यो राजसूय यज्ञ नारद आदि ऋषिमुनिहरू, पितृहरू, बन्धुबान्धवहरू, हामीहरू र सम्पूर्ण प्राणीहरूका लागि प्रिय छ।

**विजित्य नृपतीन् सर्वान् कृत्वा च जगतीं वशे।**
**सम्भृत्य सर्वसम्भारानाहरस्व महाक्रतुम्॥ ९॥**

**पदार्थ—**
**सर्वान्** = सम्पूर्ण
**नृपतीन्** = राजाहरूलाई
**विजित्य** = जितेर
**जगतीं च** = संसारलाई नै
**वशे** = आफ्नो वशमा
**कृत्वा** = गराएर
**सर्वसम्भारान्** = सम्पूर्ण सामग्री
**सम्भृत्य** = जुटाएर
**महाक्रतुं** = राजसूय महायज्ञको
**आहरस्व** = अनुष्ठान गर्नुहोस्

**वाक्यार्थ—** सम्पूर्ण राजाहरूलाई जितेर संसारलाई नै आफ्नो अधीन पारी पूर्ण सामग्री जुटाएर राजसूय महायज्ञको अनुष्ठान गर्नुहोस्।

**एते ते भ्रातरो राजंल्लोकपालांशसम्भवाः।**
**जितोऽस्म्यात्मवता तेऽहं दुर्जयो योऽकृतात्मभिः॥ १०॥**

**पदार्थ—**
**राजन्** = हे राजा युधिष्ठिर
**एते** = यी
**ते** = तपाईंका
**भ्रातरः** = भाइहरू
**लोकपालांशसम्भवाः** = इन्द्र आदि लोकपालहरूका अंशबाट उत्पन्न भएका हुन्
**अकृतात्मभिः** = आत्मसंयम गर्न नसक्नेहरूद्वारा
**दुर्जयः** = वशमा पार्न नसकिने
**यः अहं** = जुन म स्वयं
**आत्मवता** = आत्मसंयमी
**ते** = तपाईंहरूद्वारा
**जितः** = जितिएको
**अस्मि** = छु

**वाक्यार्थ—** हे राजा युधिष्ठिर ! यी तपाईंका भाइहरू इन्द्र आदि लोकपालहरूका अंशबाट उत्पन्न भएका हुन्। इन्द्रियसंयम गर्न नसक्नेहरूले प्राप्त गर्न नसक्ने म स्वयं आत्मसंयमी तपाईंहरूको वशमा परेको छु।

**न कश्चिन्मत्परं लोके तेजसा यशसा श्रिया।**
**विभूतिभिर्वाभिभवेद् देवोऽपि किमु पार्थिवः॥ ११॥**

**पदार्थ—**
**लोके** = संसारमा
**मत्परं** = मेरा भक्तलाई
**कश्चित्** = कुनै
**देवः अपि** = देवताले पनि
**तेजसा** = प्रतापले
**यशसा** = कीर्तिले
**श्रिया** = श्रीसम्पत्तिले
**विभूतिभिः वा** = वैभवहरूले पनि
**न अभिभवेत्** = जित्न सक्दैनन् भने
**किमु पार्थिवः** = सामान्य राजाले कसरी जित्ला

**वाक्यार्थ—** यस संसारमा कुनै देवताले समेत प्रताप, कीर्ति, धनसम्पत्ति र वैभव आदि केहीले पनि मेरा भक्तलाई जित्न सक्दैनन् भने सामान्य राजाको त के कुरा भयो र ?

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**निशम्य भगवद्गीतं प्रीतः फुल्लमुखाम्बुजः ।**
**भ्रातॄन् दिग्विजयेऽयुङ्क्त विष्णुतेजोपबृंहितान् ॥ १२ ॥**

**पदार्थ—**
**भगवद्गीतं** = भगवान्द्वारा भनिएको कुरा
**निशम्य** = सुनेर
**प्रीतः** = खुसी हुनाले
**फुल्लमुखाम्बुजः** = प्रसन्न मुखकमल भएका युधिष्ठिरले
**दिग्विजये** = संसारलाई जित्नका लागि
**विष्णुतेजोपबृंहितान्** = भगवान् विष्णुका अवतार श्रीकृष्णको तेजले उत्साहित भएका
**भ्रातॄन्** = भाइहरूलाई
**अयुङ्क्त** = आज्ञा दिए

**वाक्यार्थ—** भगवान्‌को कथनलाई सुनेर प्रसन्न मुखकमल भएका राजा युधिष्ठिरले श्रीकृष्णको प्रेरणा र तेजका कारण अत्यन्त उत्साहित आफ्ना भाइहरूलाई दिग्विजय गर्नका निम्ति आदेश दिए।

**सहदेवं दक्षिणस्यामादिशत् सह सृञ्जयैः ।**
**दिशि प्रतीच्यां नकुलमुदीच्यां सव्यसाचिनम् ॥**
**प्राच्यां वृकोदरं मत्स्यैः केकयैः सह मद्रकैः ॥ १३ ॥**

**पदार्थ—**
**सृञ्जयैः सह** = सृञ्जयवंशी वीरहरूका साथमा
**सहदेवं** = सहदेवलाई
**दक्षिणस्यां दिशि** = दक्षिण दिशामा
**मत्स्यैः** = मत्स्य देशका वीरहरूका साथमा
**नकुलं** = नकुललाई
**प्रतीच्यां** = पश्चिम दिशामा
**केकयैः** = केकय देशका वीरहरूका साथमा
**सव्यसाचिनं** = (देब्रे हातमा धनु लिने) अर्जुनलाई
**उदीच्यां** = उत्तर दिशामा र
**मद्रकैः सह** = मद्र देशका वीरहरूका साथमा
**वृकोदरं** = भीमसेनलाई
**प्राच्यां** = पूर्व दिशामा जान
**आदिशत्** = आदेश दिए

**वाक्यार्थ—** युधिष्ठिरले सहदेवलाई सृञ्जयवंशी वीरहरूका साथमा दक्षिण दिशामा जान,

नकुललाई मत्स्यदेशीय वीरहरूका साथमा पश्चिम दिशामा जान, अर्जुनलाई केकय देशका वीरहरूले सहित भई उत्तर दिशामा जान र भीमसेनलाई मद्र देशका वीरहरूका साथमा पूर्व दिशामा जान आदेश दिए।

**ते विजित्य नृपान् वीरा आजह्रुर्दिग्भ्य ओजसा।**

**अजातशत्रवे भूरि द्रविणं नृप यक्ष्यते ॥ १४ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**ते** = ती
**वीराः** = वीर भाइहरूले
**ओजसा** = बलपूर्वक
**नृपान्** = ती-ती दिशाका राजाहरूलाई
**विजित्य** = जितेर
**यक्ष्यते** = यज्ञ गर्न तयार भएका
**अजातशत्रवे** = (जसको शत्रु नै जन्मिएको छैन त्यस्ता) युधिष्ठिरलाई
**भूरि** = प्रशस्त
**द्रविणं** = धनसम्पत्ति
**दिग्भ्यः** = चारै दिशाबाट
**आजह्रुः** = ल्याएर समर्पण गरे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! ती वीर भाइहरूले पनि चारै दिशाका राजाहरूलाई जितेर राजसूय यज्ञ गर्न तयार रहेका अजातशत्रु राजा युधिष्ठिरलाई प्रशस्त धन सम्पत्ति ल्याएर दिए।

**श्रुत्वाजितं जरासन्धं नृपतेर्ध्यायतो हरिः।**

**आहोपायं तमेवाद्य उद्धवो यमुवाच ह ॥ १५ ॥**

**पदार्थ–**
**जरासन्धं** = जरासन्धलाई
**अजितं** = जितिएको छैन भन्ने
**श्रुत्वा** = सुनेर
**ध्यायतः** = कसरी त्यसलाई जित्ने होला भनी विचार गर्दै गरेका
**नृपतेः** = राजा युधिष्ठिरलाई
**आद्य** = आदिकारण
**हरिः** = श्रीकृष्णले
**तम् एव** = त्यही नै
**उपायं** = उपाय
**उवाच ह** = बताउनुभयो
**यं** = जुन
**उद्धवः** = उद्धवले
**आह** = पहिले नै बताएका थिए

**वाक्यार्थ–** भाइहरूले जरासन्धलाई जित्न नसकेको कुरा सुनेर चिन्तित भएका राजा युधिष्ठिरले अब त्यसलाई कसरी जित्ने भनी विचार गर्न लागे। त्यस वेला संसारका आदिकारण भगवान् श्रीकृष्णले त्यही उपाय उनलाई बताउनुभयो, जुन पहिले नै उद्धवले बताएका थिए।

**भीमसेनोऽर्जुनः कृष्णो ब्रह्मलिङ्गधरास्त्रयः।**

**जग्मुर्गिरिव्रजं तात बृहद्रथसुतो यतः ॥ १६ ॥**

**पदार्थ–**
**तात** = हे प्रिय परीक्षित्
(त्यसपछि)
**ब्रह्मलिङ्गधराः** = ब्राह्मणका वेष धारण गरेका
**भीमसेनः** = भीमसेन
**अर्जुनः** = अर्जुन
**कृष्णः** = श्रीकृष्ण
**त्रयः** = यी तीनै जना

**गिरिव्रजं** = गिरिव्रजमा
**जग्मुः** = गए
**यतः** = जहाँ
**बृहद्रथसुतः** = बृहद्रथको छोरो
जरासन्ध बस्दथ्यो

**वाक्यार्थ–** हे प्रिय परीक्षित् ! त्यसपछि भीम, अर्जुन र श्रीकृष्ण ब्राह्मणको वेष धारण गरेर गिरिव्रजमा गए, जहाँ बृहद्रथको छोरो जरासन्ध बस्दथ्यो।

**ते गत्वातिथ्यवेलायां गृहेषु गृहमेधिनम्।**
**ब्रह्मण्यं समयाचेरन् राजन्या ब्रह्मलिङ्गिनः॥ १७॥**

**पदार्थ–**
**ते** = ती
**ब्रह्मलिङ्गिनः** = ब्राह्मणको वेष धारण गरेका
**राजन्याः** = क्षत्रियहरूले
**आतिथ्यवेलायां** = अतिथिसत्कार गर्ने वेलामा
**गृहेषु** = जरासन्धको दरबारमा
**गत्वा** = गएर
**ब्रह्मण्यं** = ब्राह्मणभक्त
**गृहमेधिनं** = सद्गृहस्थ जरासन्धसँग
**समयाचेरन्** = याचना गरे

**वाक्यार्थ–** ब्राह्मणको वेष धारण गरेका यी तीनै जना क्षत्रियहरूले अतिथिसत्कार गर्ने वेलामा ब्राह्मणभक्त सद्गृहस्थ जरासन्धको महलमा पुगेर ऊसँग यसप्रकार याचना गरे।

**राजन् विद्ध्यतिथीन् प्राप्तानर्थिनो दूरमागतान्।**
**तन्नः प्रयच्छ भद्रं ते यद् वयं कामयामहे॥ १८॥**

**पदार्थ–**
**राजन्** = हे राजा जरासन्ध
**दूरम्** = टाढाबाट
**आगतान्** = आएका
**अर्थिनः** = भिक्षार्थी हामीलाई
**प्राप्तान्** = संयोगवश आइपुगेका
**अतिथीन्** = अतिथि
**विद्धि** = ठान्नुहोस् र
**यत्** = जे
**वयं** = हामी
**कामयामहे** = चाहना गर्दछौँ
**तत्** = त्यो
**नः** = हामीलाई
**प्रयच्छ** = दिनुहोस्
**ते** = तपाईंको
**भद्रम्** = कल्याण (हुनेछ)

**वाक्यार्थ–** हे राजा जरासन्ध ! हामी धेरै टाढाबाट आएका भिक्षार्थी हौँ। हामी तपाईंका अतिथि हौँ, हामी जे चाहन्छौँ त्यो दिनुहोस्, यसबाट तपाईंको कल्याण हुनेछ।

**किं दुर्मर्षं तितिक्षूणां किमकार्यमसाधुभिः।**
**किं न देयं वदान्यानां कः परः समदर्शिनाम्॥ १९॥**

**पदार्थ–**
**तितिक्षूणां** = सहनशीलहरूका लागि
**दुर्मर्षं** = सहन गर्न नसकिने
**किं** = के छ र
**असाधुभिः** = दुर्जनद्वारा
**अकार्यम्** = गर्न नसकिने
**किं** = के छ र
**वदान्यानां** = दानीहरूका लागि

**न देयं** = दिन नसकिने
**किं** = के छ र
**समदर्शिनां** = समदर्शीहरूका लागि
**कः** = को
**परः** = पराइ हुन्छ र

**वाक्यार्थ–** सहनशील व्यक्तिका लागि के चाहिँ असह्य हुन्छ र ? दुर्जनका लागि गर्न नहुने काम के हुन्छ र ? दानीहरूका लागि दिन नसक्ने कुरा के हुन्छ र ? समदर्शीहरूका लागि को चाहिँ पराइ हुन्छ र ?

**योऽनित्येन शरीरेण सतां गेयं यशो ध्रुवम्।**
**नाचिनोति स्वयं कल्पः स वाच्यः शोच्य एव सः ॥ २० ॥**

**पदार्थ–**
**यः** = जो
**स्वयं** = आफू
**कल्पः** = समर्थ भएर पनि
**अनित्येन** = नाशवान्
**शरीरेण** = शरीरले
**सतां** = सज्जनहरूका लागि
**गेयं** = गाइन योग्य
**ध्रुवं** = स्थिर
**यशः** = कीर्ति
**न आचिनोति** = आर्जन गर्दैन
**सः** = त्यो
**वाच्यः** = निन्दनीय छ
**सः** = त्यो
**शोच्यः** = शोक गर्न योग्य व्यक्ति
**एव** = नै हो

**वाक्यार्थ–** जो मानिस स्वयं समर्थ भएर पनि यस अनित्य शरीरले सज्जनहरूद्वारा समेत गान गरिने कीर्तिको आर्जन गर्दैन, वास्तवमा त्यो व्यक्ति निन्दनीय र शोक गर्न योग्य व्यक्ति नै हो।

**हरिश्चन्द्रो रन्तिदेव उञ्छवृत्तिः शिबिर्बलिः।**
**व्याधः कपोतो बहवो ह्यध्रुवेण ध्रुवं गताः ॥ २१ ॥**

**पदार्थ–**
**हरिश्चन्द्रः** = हरिश्चन्द्र
**रन्तिदेवः** = रन्तिदेव
**उञ्छवृत्तिः** = झरेका अन्नका दाना टिपेर गुजारा चलाउने मुद्गल ऋषि
**शिबिः** = राजा शिबि
**बलिः** = बलि राजा
**व्याधः** = व्याधा र
**कपोतः** = परेवा आदि
**बहवः** = धेरैले
**अध्रुवेण हि** = अनित्य शरीरले नै
**ध्रुवं** = ध्रुव (अविनाशी) पद
**गताः** = प्राप्त गरेका थिए

**वाक्यार्थ–** हरिश्चन्द्र, रन्तिदेव, झरेका अन्नका दाना टिपेर गुजारा चलाउने मुद्गल ऋषि, राजा शिबि, बलि राजा, व्याधा, परेवा आदि अनेक प्राणीहरूले यही नाशवान् शरीरलाई अर्काको सेवामा लगाएर अविनाशी परम पद प्राप्त गरेका थिए।

**टिप्पणी–** हरिश्चन्द्रको कथा श्रीमद्भागवतको नवम स्कन्धको सातौँ अध्यायमा वर्णित छ। मुद्गल ऋषिले आफ्ना पाहुनाहरूको सत्कारको लागि छ महिनासम्म खसेका अन्नका दाना टिपेर जीविका चलाएका थिए भन्ने कथा महाभारतको वनपर्वमा आउँछ। शिबिले परेवाको रक्षा गर्नका लागि परेवा बराबरको मासु म आफ्नै शरीरको दिन्छु भनी बाजलाई आफ्नो शरीरको मासु काटेर दिँदा–दिँदै जति मासु काटेर तराजुमा राख्दा पनि परेबा बराबर नभएपछि आफैँ तराजुमा बसेका

थिए। राजा शिबिको यो कथा पनि महाभारतको वनपर्वमा छ। राजा बलिको कथा श्रीमद्भागवतको आठौँ स्कन्धको अठारौँदेखि एक्काईसौँ अध्यायमा वर्णित छ। रन्तिदेवको कथा श्रीमद्भागवतको नवौँ स्कन्धको एक्काईसौँ अध्यायमा छ। व्याधाले ब्राह्मणको रक्षाको लागि आफ्नो शरीर बाघलाई खुवाएको कथा र परेवाले अतिथिको सेवा गर्नको लागि आफ्नो शरीर अग्निमा आहुति दिएको कथा महाभारतमा छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**स्वरैराकृतिभिस्तांस्तु प्रकोष्ठैर्ज्याहतैरपि।**

**राजन्यबन्धून् विज्ञाय दृष्टपूर्वानचिन्तयत्॥ २२॥**

**पदार्थ—**

**तान् तु** = ती श्रीकृष्ण आदिलाई
**स्वरैः** = स्वरले
**आकृतिभिः** = आकारले
**ज्याहतैः** = धनुषको डोरीको डाम बसेका
**प्रकोष्ठैः** = पाखुराहरूले
**अपि** = पनि
**दृष्टपूर्वान्** = पहिले कतै देखिएका
**राजन्यबन्धून्** = यी क्षत्रियहरू हुन् भन्ने
**विज्ञाय** = जानेर
**अचिन्तयत्** = विचार गर्न लाग्यो

**वाक्यार्थ—** तिनीहरूको स्वर, आकारप्रकार र पाखुरामा लागेका धनुषको डोरीका डामहरू देखेर जरासन्धले यी ब्राह्मण नभएर कोही क्षत्रिय हुन् भन्ने थाहा पायो र यिनलाई मैले पहिले पनि कतै देखेको छु भन्ने सम्झिँदै विचार गर्न लाग्यो।

**राजन्यबन्धवो ह्येते ब्रह्मलिङ्गानि बिभ्रति।**

**ददानि भिक्षितं तेभ्य आत्मानमपि दुस्त्यजम्॥ २३॥**

**पदार्थ—**

**हि** = निश्चय नै
**एते** = यी
**राजन्यबन्धवः** = तुच्छ क्षत्रियहरू
**ब्रह्मलिङ्गानि** = ब्राह्मणको वेष
**बिभ्रति** = धारण गरेका छन् (तर पनि)
**तेभ्यः** = यिनीहरूले
**भिक्षितं** = मागेको कुरा
**दुस्त्यजं** = त्याग्न नसकिने
**आत्मानम् अपि** = आफ्नै शरीर भए पनि
**ददानि** = दिन्छु

**वाक्यार्थ—** निश्चय नै यी तुच्छ क्षत्रियहरू ब्राह्मणको वेष धारण गरी मकहाँ आएका छन्, अतः मागेको खण्डमा म यिनलाई त्याग्न मुस्किल पर्ने आफ्नै शरीर समेत दिनेछु।

**बलेर्नु श्रूयते कीर्तिर्वितता दिक्ष्वकल्मषा।**

**ऐश्वर्याद् भ्रंशितस्यापि विप्रव्याजेन विष्णुना॥ २४॥**

**पदार्थ—**

**विप्रव्याजेन** = ब्राह्मणको वेष धारण गरी

**विष्णुना** = भगवान् विष्णुद्वारा
**ऐश्वर्यात्** = साम्राज्य वैभवबाट
**भ्रंशितस्य अपि** = वञ्चित गरिए तापनि
**बलेः** = बलिको
**अकल्मषा** = पवित्र
**कीर्तिः** = कीर्ति
**दिक्षु** = चारै दिशा
**वितता** = फैलिएको
**श्रूयते नु** = सुनिन्छ नै

**वाक्यार्थ–** भगवान् विष्णुले ब्राह्मणको वेष धारण गरी राजा बलिको राज्यवैभव खोसे तापनि उनको पवित्र कीर्ति सबै दिशामा फैलिरहेकै छ।

**श्रियं जिहीर्षतेन्द्रस्य विष्णवे द्विजरूपिणे।**
**जानन्नपि महीं प्रादाद् वार्यमाणोऽपि दैत्यराट्॥ २५॥**

**पदार्थ–**
**इन्द्रस्य** = इन्द्रको
**श्रियं** = ऐश्वर्य
**जिहीर्षता** = बलिबाट फर्काउन चाहने
**द्विजरूपिणे** = ब्राह्मण वेषधारी
**विष्णवे** = विष्णुलाई
**जानन् अपि** = जान्दाजान्दै र
**वार्यमाणोऽपि** = (गुरुद्वारा) रोकिँदा रोकिँदै पनि
**दैत्यराट्** = दैत्यराज बलिले
**महीं** = पृथिवी
**प्रादात्** = दान गरे

**वाक्यार्थ–** आफूबाट इन्द्रको राज्यलक्ष्मी खोसेर लिन भगवान् विष्णु ब्राह्मणको रूप धारण गरी आएका हुन् भन्ने जान्दा-जान्दै र गुरु शुक्राचार्यले रोक्दा-रोक्दै पनि दैत्यराज बलिले सम्पूर्ण पृथिवी दान गरे।

**जीवता ब्राह्मणार्थाय को न्वर्थः क्षत्रबन्धुना।**
**देहेन पतमानेन नेहता विपुलं यशः॥ २६॥**

**पदार्थ–**
**पतमानेन** = नाशशील शरीरले
**ब्राह्मणार्थाय** = ब्राह्मणको हित गरी
**विपुलं** = ठुलो
**यशः** = कीर्ति कमाउन
**नेहता** = नचाहने
**क्षत्रबन्धुना** = तुच्छ क्षत्रियको
**देहेन** = शरीरले
**जीवता** = बाँचेर
**को नु अर्थः** = के अर्थ हुन्छ र

**वाक्यार्थ–** क्षत्रियले आफ्नो यस नाशवान् शरीरले ब्राह्मणको हित गरी ठुलो कीर्ति कमाउने चाहना गर्दैन भने त्यस तुच्छ क्षत्रियले बाँच्नुको के अर्थ छ र ?

**इत्युदारमतिः प्राह कृष्णार्जुनवृकोदरान्।**
**हे विप्रा व्रियतां कामो ददाम्यात्मशिरोऽपि वः॥ २७॥**

**पदार्थ–**
**इति** = यस्तो
**उदारमतिः** = उदार बुद्धि भएको जरासन्धले
**कृष्णार्जुनवृकोदरान्** = श्रीकृष्ण, अर्जुन र भीमलाई

| | | |
|---|---|---|
| **हे विप्राः** = हे ब्राह्मणहरू | **वः** = तपाईंहरूलाई | **ददामि** = दिनेछु |
| **कामः** = चाहेको कुरा | **आत्मशिरः अपि** = आफ्नो शिरै भए पनि | **प्राह** = भन्यो |
| **व्रियतां** = माग्नुहोस् | | |

**वाक्यार्थ–** यसप्रकार विचार गरेर उदार बुद्धि भएको जरासन्धले श्रीकृष्ण, अर्जुन र भीमलाई सम्बोधन गर्दै हे ब्राह्मणहरू ! आफूले चाहेको कुरा माग्नुहोस्। म तपाईंहरूलाई आफ्नै शिर समेत दिन तयार छु भन्यो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**युद्धं नो देहि राजेन्द्र द्वन्द्वशो यदि मन्यसे।**

**युद्धार्थिनो वयं प्राप्ता राजन्या नान्नकाङ्क्षिणः॥ २८॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **द्वन्द्वशः** = द्वन्द | **राजन्याः** = क्षत्रियहरू |
| **राजेन्द्र** = हे राजेन्द्र जरासन्ध | **युद्धं** = युद्ध | **प्राप्ताः** = यहाँ आएका हौं |
| **यदि मन्यसे** = यदि दिन चाहन्छौ भने | **देहि** = देऊ | **अन्नकाङ्क्षिणः** = अन्नको चाहना गर्ने ब्राह्मण |
| **नः** = हामीलाई | **वयं** = हामी | **न** = होइनौं |
| | **युद्धार्थिनः** = युद्ध चाहने | |

**वाक्यार्थ–** हे राजेन्द्र जरासन्ध ! यदि त्यसो हो भने हामीलाई द्वन्द्वयुद्धको भिक्षा देऊ। किनभने हामी अरू वस्तु चाहने ब्राह्मण नभएर युद्ध चाहने क्षत्रिय हौं।

**असौ वृकोदरः पार्थस्तस्य भ्रातार्जुनो ह्ययम्।**

**अनयोर्मातुलेयं मां कृष्णं जानीहि ते रिपुम्॥ २९॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **तस्य** = ती भीमसेनका | **मां कृष्णं** = म श्रीकृष्णलाई |
| **असौ** = यी | **भ्राता** = भाइ | **हि** = निश्चय नै |
| **पार्थः** = पृथा (कुन्ती)का छोरा | **अर्जुनः** = अर्जुन | **ते** = तिम्रा |
| **वृकोदरः** = भीमसेन हुन् | **अनयोः** = यी दुबैका | **रिपुं** = शत्रु |
| **अयं** = यी | **मातुलेयं** = मामाका छोरा | **जानीहि** = हुन् भन्ने जान |

**वाक्यार्थ–** यी कुन्तीका छोरा भीमसेन हुन् र यिनी उनका भाइ अर्जुन हुन्। अनि म यी दुईका मामाको छोरा श्रीकृष्ण हुँ। हामी तीनलाई आफ्ना शत्रुका रूपमा जान।

**एवमावेदितो राजा जहासोच्चैः स्म मागधः।**

**आह चामर्षितो मन्दा युद्धं तर्हि ददामि वः॥ ३०॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **एवं** = यसप्रकार | **आवेदितः** = जानकारी गराइएको |

**राजा** = राजा
**मागधः** = जरासन्ध
**उच्चैः** = ठुलो स्वरले
**जहास** = हाँस्यो
**अमर्षितः** = रिसाउँदै
**आह स्म च** = भन्न पनि लाग्यो
**मन्दाः** = बुद्धिहीन हो
**तर्हि** = त्यसो हो भने
**वः** = तिमीहरूलाई
**युद्धं** = द्वन्द्वयुद्ध नै
**ददामि** = दिन्छु

**वाक्यार्थ–** यसप्रकार जानकारी गराएपछि राजा जरासन्ध जोडले हाँस्यो र उसले रिसाउँदै हे बुद्धिहीन हो ! यदि तिमीहरू द्वन्द्वयुद्ध नै चाहन्छौ भने म तिमीहरूलाई त्यही दिन्छु भन्यो।

**न त्वया भीरुणा योत्स्ये युधि विक्लवतेजसा।**
**मथुरां स्वपुरीं त्यक्त्वा समुद्रं शरणं गतः॥ ३१॥**

पदार्थ–
**युधि** = युद्धमा
**विक्लवतेजसा** = हड्बडाउने चित्त भएको
**भीरुणा** = कायर
**त्वया** = तँ श्रीकृष्णसँग
**न योत्स्ये** = म युद्ध गर्दिनँ (किनभने तैँले)
**स्वपुरीं** = डरले आफ्नो राजधानी
**मथुरां** = मथुरालाई
**त्यक्त्वा** = छोडेर
**समुद्रं** = समुद्रको
**शरणं** = शरण
**गतः** = लिएको छस्

**वाक्यार्थ–** हे कृष्ण ! तँ युद्धमा हड्बडाउने कायर छस्। डरले आफ्नो राजधानी मथुरा छाडी समुद्रको शरण लिन पुगेको छस्। अतः म तँसँग युद्ध गर्दिनँ।

**अयं तु वयसातुल्यो नातिसत्त्वो न मे समः।**
**अर्जुनो न भवेद् योद्धा भीमस्तुल्यबलो मम॥ ३२॥**

पदार्थ–
**वयसा** = उमेर
**अतुल्यः** = असमान
**अयं** = यो
**अर्जुनः तु** = अर्जुन त
**नातिसत्त्वः** = त्यति बलियो छैन
**न मे समः** = न त म बराबर नै छ (त्यसैले)
**योद्धा न भवेत्** = (यो पनि मसँग) युद्ध गर्नेवाला हुन सक्दैन
**भीमः** = भीमसेन चाहिँ
**मम** = मेरो
**तुल्यबलः** = समान बलशाली छ

**वाक्यार्थ–** उमेरमा म बराबरी नभएको यो अर्जुन त्यति बलियो पनि छैन, त्यसकारण यो मसँग युद्ध गर्ने योद्धा हुन सक्दैन। भीमसेन चाहिँ मसमान बलवान् छ।

**इत्युक्त्वा भीमसेनाय प्रादाय महतीं गदाम्।**
**द्वितीयां स्वयमादाय निर्जगाम पुराद् बहिः॥ ३३॥**

पदार्थ–
**इति** = यस्तो
**उक्त्वा** = भनेर
**भीमसेनाय** = भीमसेनलाई
**महतीं** = एउटा ठुलो
**गदां** = गदा

**प्रादाय** = दिएर
**द्वितीयां** = अर्को गदा
**स्वयं** = आफूले
**आदाय** = लिएर
**पुरात्** = सहरबाट
**बहिः** = बाहिर
**निर्जगाम** = निस्कियो

**वाक्यार्थ–** यति भनेर जरासन्धले भीमसेनलाई एउटा ठुलो गदा दियो र आफू पनि अर्को गदा लिएर सहर बाहिर निस्कियो।

**ततः समे खले वीरौ संयुक्तावितरेतरम्।**
**जघ्नतुर्वज्रकल्पाभ्यां गदाभ्यां रणदुर्मदौ ॥ ३४ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**समे** = समथल
**खले** = ठाउँमा पुगेर
**रणदुर्मदौ** = युद्धका निम्ति उन्मत्त भएका
**संयुक्तौ** = लड्न तमतयार भएका
**वीरौ** = दुबै वीरले
**वज्रकल्पाभ्यां** = वज्रसमानका
**गदाभ्यां** = गदाले
**इतरेतरं** = एक-अर्कालाई
**जघ्नतुः** = हिर्काउन लागे

**वाक्यार्थ–** त्यसपछि युद्धका निम्ति उन्मत्त भएका ती दुई वीरले समथल ठाउँमा पुगेर वज्रसमानको गदाले एक-अर्कालाई हिर्काउन लागे।

**मण्डलानि विचित्राणि सव्यं दक्षिणमेव च।**
**चरतोः शुशुभे युद्धं नटयोरिव रङ्गिणोः ॥ ३५ ॥**

**पदार्थ–**
**सव्यं** = देब्रे (र)
**दक्षिणं एव च** = दाहिने पनि
**विचित्राणि** = आश्चर्य लाग्दा
**मण्डलानि** = घुमाइका घेराहरू
**चरतोः** = बनाउँदै लडेका ती दुईको
**युद्धं** = गदायुद्ध
**रङ्गिणोः** = रङ्गमञ्चमा अभिनय गरिरहेका
**नटयोः इव** = नटहरूको जस्तै
**शुशुभे** = अति शोभायमान देखियो

**वाक्यार्थ–** कहिले देब्रे र कहिले दाहिनेतिर चक्कर लगाउँदै अनेक चालमा लड्न लागेका ती दुईको गदायुद्ध रङ्गमञ्चमा लड्न लागेका दुई नटको युद्ध झैँ अति शोभायमान देखियो।

**ततश्चटचटाशब्दो वज्रनिष्पेससन्निभः।**
**गदयोः क्षिप्तयो राजन् दन्तयोरिव दन्तिनोः ॥ ३६ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**ततः** = त्यसपछि
**क्षिप्तयोः** = प्रहार गरिएका
**गदयोः** = दुबै गदाको
**दन्तिनोः** = मत्त हात्तीका
**दन्तयोः इव** = दाँतको स्वर जस्तो
**वज्रनिष्पेससन्निभः** = चट्याङ पर्दाको आवाज जस्तो
**चटचटाशब्दः** = चट् चट् आवाज सुनिन लाग्यो

**वाक्यार्थ–** त्यसरी एक-आपसमा गदाको प्रहार गर्दा त्यहाँ दुई ओटा मत्तहात्ती लड्दा निस्केको दाँतको स्वरजस्तो अथवा चट्याङ पर्दाको आवाज जस्तो चट् चट् आवाज सुनिन लाग्यो।

**ते वै गदे भुजजवेन निपात्यमाने**
**अन्योन्यतोंऽसकटिपादकरोरुजत्रून्।**
**चूर्णीबभूवतुरुपेत्य यथार्कशाखे**
**संयुध्यतोर्द्विरदयोरिव दीप्तमन्य्वोः॥ ३७॥**

**पदार्थ–**
**अन्योन्यतः** = परस्परमा
**भुजजवेन** = बाहुका बलले
**निपात्यमाने** = प्रहार गरिएका
**ते वै गदे** = ती दुईका गदाहरू
**अंसकटिपादकरोरुजत्रून्** = काँध, कम्मर, पाउ, हात, तिघ्रा र हड्डीहरूमा
**उपेत्य** = ठोक्किएर
**यथा** = जसरी
**दीप्तमन्य्वोः** = रिसले बलेका
**संयुध्यतोः** = आपसमा लडिरहेका
**द्विरदयोः** = हात्तीका शरीरले
**अर्कशाखे इव** = आँकका हाँगाहरू (टुक्रा-टुक्रा) भए झैँ
**चूर्णीबभूवतुः** = धुलो-धुलो भए

**वाक्यार्थ–** जसरी रिसले चुर भएका दुई ओटा हात्ती लड्दै गर्दा आँकका हाँगा भाँचिएर टुक्रा-टुक्रा हुन्छन् त्यसै गरी अनेक किसिमले गदा घुमाउँदै एकले अर्कालाई हिर्काउँदै गरेका जरासन्ध र भीमका गदा उनीहरूका काँध, कम्मर, खुट्टा, हात, तिघ्रा र हड्डीहरूमा बज्रेर चकनाचुर भए।

**इत्थं तयोः प्रहतयोर्गदयोर्नृवीरौ**
**क्रुद्धौ स्वमुष्टिभिरयःस्पर्शैरपिष्टाम्।**
**शब्दस्तयोः प्रहरतोरिभयोरिवासी-**
**न्निर्घातवज्रपरुषस्तलताडनोत्थः॥ ३८॥**

**पदार्थ–**
**इत्थं** = यसप्रकार
**तयोः** = ती दुबैका
**गदयोः** = गदाहरू
**प्रहतयोः** = नष्ट भएपछि
**क्रुद्धौ** = ज्यादै रिसाएका
**नृवीरौ** = दुबै नरवीरले
**अयःस्पर्शैः** = फलामजस्ता कठोर
**स्वमुष्टिभिः** = आफ्ना मुड्कीहरूले
**अपिष्टां** = एकले अर्कालाई धुलोपिठो पार्न लागेका
**इभयोः इव** = मत्त हात्तीले झैँ
**प्रहरतोः** = परस्परमा प्रहार गर्दा
**तयोः** = ती दुईको
**तलताडनोत्थः** = मुड्की प्रहारबाट निस्किएको
**शब्दः** = आवाज
**निर्घातवज्रपरुषः** = भयङ्कर चट्याङ परेको जस्तो डरलाग्दो
**आसीत्** = थियो

**वाक्यार्थ–** यसप्रकार आ-आफ्ना गदा नष्ट भएपछि ती दुबै नरवीरहरू ज्यादै रिसाएर

फलामजस्ता मुड्कीहरूले हिर्काउँदै एकले अर्कालाई धुलोपिठो पार्न लागे। दुई ओटा मत्त हात्ती झैँ युद्ध गर्न लागेका ती वीरहरूको मुड्कीप्रहारबाट निस्किएको आवाज भयङ्कर चट्याङ परेको जस्तो सुनिन लाग्यो।

**तयोरेवं प्रहरतोः समशिक्षाबलौजसोः।**
**निर्विशेषमभूद् युद्धमक्षीणजवयोर्नृप ॥ ३९॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**एवं** = यसप्रकार
**समशिक्षाबलौजसोः** = अभ्यास, बल र उत्साह समान भएका
**अक्षीणजवयोः** = कत्ति पनि वेग नघटेका
**प्रहरतोः** = प्रहार गरिरहेका
**तयोः** = ती भीम र जरासन्धका बिचमा
**निर्विशेषं** = अनुपम
**युद्धं** = द्वन्द्वयुद्ध
**अभूत्** = भयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! समान अभ्यास, बल र उत्साह भएका अनि कत्ति पनि वेग नघटेका यी वीरहरूको अनुपम द्वन्द्वयुद्ध भयो।

**एवं तयोर्महाराज युध्यतोः सप्तविंशतिः।**
**दिनानि निरगंस्तत्र सुहृद्वन्निशि तिष्ठतोः ४०॥**

**पदार्थ–**
**महाराज** = हे महाराज
**एवं** = यसप्रकार
**युध्यतोः** = युद्ध गरिरहेका र
**निशि** = रातमा
**सुहृद्वत्** = मित्र-मित्र झैँ
**तिष्ठतोः** = मिलेर बसेका
**तयोः** = ती दुईका
**सप्तविंशतिः** = सत्ताईस
**दिनानि** = दिनहरू
**तत्र** = त्यहाँ (जरासन्धको दरबारमा)
**निरगमन्** = बिते

**वाक्यार्थ–** हे महाराज ! यसप्रकारले दिनमा युद्ध गर्ने र रातमा मित्र झैँ बनेर रहने यी दुबै वीरहरूले लड्दा लड्दै त्यहाँ सत्ताईस दिन बिते।

**एकदा मातुलेयं वै प्राह राजन् वृकोदरः।**
**न शक्तोऽहं जरासन्धं निर्जेतुं युधि माधव ४१॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**एकदा** = एक दिन
**वृकोदरः** = भीमसेनले
**मातुलेयं** = मामाका छोरा श्रीकृष्णलाई
**माधव** = हे मायापति
**वै** = निश्चय नै
**अहं** = म
**युधि** = युद्धमा
**जरासन्धं** = जरासन्धलाई
**निर्जेतुं** = जित्न
**न शक्तः** = सक्दिनँ
**प्राह** = भने

**वाक्यार्थ–** हे राजा परीक्षित् ! एक दिन भीमसेनले मामाका छोरा भगवान् श्रीकृष्णलाई सम्बोधन गर्दै भने– हे माधव ! म युद्धमा जरासन्धलाई जित्न सक्दिनँ।

**शत्रोर्जन्ममृती विद्वाञ्जीवितं च जराकृतम्।**
**पार्थमाप्याययन् स्वेन तेजसाचिन्तयद्धरिः॥ ४२॥**

**पदार्थ–**
**शत्रोः** = शत्रु जरासन्धको
**जन्ममृती** = जन्म र मृत्यु (र)
**जराकृतं** = जरा नामकी राक्षसीले गर्दा
**जीवितं च** = त्यो बाँचिरहेको कुरा पनि
**विद्वान्** = बुझ्नुभएका
**हरिः** = भगवान् श्रीकृष्णले
**स्वेन तेजसा** = आफ्नो तेजले
**पार्थम्** = पृथापुत्र भीमलाई
**आप्याययन्** = उत्साहित गर्दै
**अचिन्तयत्** = (कसरी यसलाई टुक्रा-टुक्रा पार्ने भनी) सोच्न लाग्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णलाई जरासन्धको जन्म र मृत्युको रहस्य थाहा थियो। जरा नामकी राक्षसीले उसको शरीरका दुई टुक्रा जोडेर जीवनदान दिएको कुरा पनि उहाँलाई थाहा थियो। त्यसै कारण आफ्नो तेजले भीमसेनको शरीरमा उत्साह भरेर जरासन्धलाई कसरी टुक्रा-टुक्रा पार्ने भनी उहाँ सोच्न लाग्नुभयो।

**सञ्चिन्त्यारिवधोपायं भीमस्यामोघदर्शनः।**
**दर्शयामास विटपं पाटयन्निव संज्ञया॥ ४३॥**

**पदार्थ–**
**अमोघदर्शनः** = निर्बाध ज्ञानस्वरूप भगवान्ले
**अरिवधोपायं** = शत्रुनाशको उपाय
**सञ्चिन्त्य** = विचार गरेर
**विटपं** = एउटा वृक्षको हाँगालाई
**पाटयन् इव** = चिरे झैँ गरी
**संज्ञया** = इसाराले
**भीमस्य** = भीमसेनलाई
**दर्शयामास** = देखाउनुभयो

**वाक्यार्थ–** निर्बाध ज्ञानस्वरूप भगवान्ले विचार गरेर शत्रुनाशको उपाय निश्चय गर्नुभयो र एउटा रुखको हाँगालाई बिचबाट चिरेर भीमसेनलाई देखाउँदै जरासन्धलाई मार्ने उपाय सङ्केत गर्नुभयो।

**तद् विज्ञाय महासत्त्वो भीमः प्रहरतां वरः।**
**गृहीत्वा पादयोः शत्रुं पातयामास भूतले॥ ४४॥**

**पदार्थ–**
**महासत्त्वः** = महापराक्रमी
**प्रहरतां वरः** = युद्ध गर्न सिपालु
**भीमः** = भीमसेनले
**तत्** = त्यो सङ्केत
**विज्ञाय** = बुझेर
**पादयोः** = दुबै खुट्टामा
**गृहीत्वा** = समातेर
**शत्रुं** = शत्रु जरासन्धलाई
**भूतले** = भुइँमा
**पातयामास** = लडाए

**वाक्यार्थ–** अति पराक्रमी र युद्ध गर्न सिपालु भीमले पनि भगवान्को इसारालाई बुझेर शत्रुको दुबै खुट्टा समाई उसलाई भुइँमा लडाए।

**एकं पादं पदाक्रम्य दोर्भ्यामन्यं प्रगृह्य सः।**
**गुदतः पाटयामास शाखामिव महागजः॥ ४५॥**

**पदार्थ–**
**सः** = ती भीमले
**पदा** = एउटा खुट्टाले
**एकं** = जरासन्धको एउटा
**पादं** = खुट्टा
**आक्रम्य** = कुल्चेर
**अन्यं** = अर्को खुट्टालाई
**दोर्भ्याम्** = दुबै हातले
**प्रगृह्य** = समातेर
**महागजः** = मत्त हात्तीले
**शाखाम् इव** = रुखका हाँगालाई झैँ
**गुदतः** = मलद्वारतिरबाट
**पाटयामास** = चिरिदिए

**वाक्यार्थ–** त्यसपछि भीमले जरासन्धको एउटा खुट्टालाई आफ्ना खुट्टाले थिचे र अर्को खुट्टालाई दुबै हातले समातेर मत्त हात्तीले रुखको हाँगा चिरे झैँ उसको शरीरलाई मलद्वारतिरबाट चिरिदिए।

**एकपादोरुवृषणकटिपृष्ठस्तनांसके।**
**एकबाह्वक्षिभ्रूकर्णे शकले ददृशुः प्रजाः॥ ४६॥**

**पदार्थ–**
**प्रजाः** = प्रजाहरूले
**एकपादोरुवृषणकटिपृष्ठ-स्तनांसके** = एउटा-एउटा खुट्टा, तिघ्रा, अण्डकोश, कम्मर, पिठिउँ, स्तन र काँध (तथा)
**एकबाह्वक्षिभ्रूकर्णे** = एउटा हात, आँखा, आँखीभौँ र कान भएको
**शकले** = दुई टुक्रा
**ददृशुः** = देखे

**वाक्यार्थ–** त्यस वेला प्रजाहरूले जरासन्धको शरीरको एक-एक ओटा खुट्टा, तिघ्रा, अण्डकोश, कम्मर, पिठिउँ, स्तन, काँध, हात, आँखा, आँखीभौँ र कान भएका दुई टुक्रा देखे।

**हाहाकारो महानासीन्निहते मगधेश्वरे।**
**पूजयामासतुर्भीमं परिरभ्य जयाच्युतौ॥ ४७॥**

**पदार्थ–**
**मगधेश्वरे** = मगधराज जरासन्ध
**निहते** = मारिएपछि
**महान्** = ठुलो
**हाहाकारः** = हाहाकार
**आसीत्** = भयो
**जयाच्युतौ** = अर्जुन र श्रीकृष्णले
**भीमं** = भीमसेनलाई
**परिरभ्य** = अँगालो हालेर
**पूजयामासतुः** = सत्कार गर्नुभयो

**वाक्यार्थ–** मगधराज जरासन्धको मृत्यु भएपछि त्यहाँ ठुलो हाहाकार हुन लाग्यो। अर्जुन र श्रीकृष्णले भीमसेनलाई अँगालो हालेर सत्कार गर्नुभयो।

**सहदेवं तत्तनयं भगवान् भूतभावनः।**
**अभ्यषिञ्चदमेयात्मा मगधानां पतिं प्रभुः॥**
**मोचयामास राजन्यान् संरुद्धा मागधेन ये॥ ४८॥**

**पदार्थ–**
**भूतभावनः** = सम्पूर्ण प्राणीका सृष्टिकर्ता
**अमेयात्मा** = सर्वशक्तिमान्
**प्रभुः** = सर्वसमर्थ
**भगवान्** = भगवान् श्रीकृष्णले
**तत्तनयं** = त्यो जरासन्धका छोरा
**सहदेवं** = सहदेवलाई
**मगधानां** = मगधवासीहरूको
**पतिं** = राजाका रूपमा
**अभ्यषिञ्चत्** = अभिषेक गर्नुभयो र
**ये** = जुन राजाहरू
**मागधेन** = मगधनरेश जरासन्धद्वारा
**संरुद्धाः** = थुनिएका थिए
**राजन्यान्** = ती राजाहरूलाई (कारागारबाट)
**मोचयामास** = मुक्त गर्नुभयो

**वाक्यार्थ–** त्यसपछि सम्पूर्ण प्राणीका सृष्टिकर्ता सर्वशक्तिमान् र सर्वसमर्थ भगवान् श्रीकृष्णले जरासन्धका छोरा सहदेवलाई मगध देशको राजाका रूपमा अभिषेक गर्नुभयो र जरासन्धद्वारा थुनिएका राजाहरूलाई कारागारबाट मुक्त गर्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे**

**जरासन्धवधो नाम द्विसप्ततितमोऽध्यायः॥ ७२॥**

# अथ त्रिसप्ततितमोऽध्यायः

## भगवान् श्रीकृष्णद्वारा जरासन्धको जेलबाट छुटाइएका राजाहरूको बिदाइ

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अयुते द्वे शतान्यष्टौ लीलया युधि निर्जिताः।**

**ते निर्गता गिरिद्रोण्यां मलिना मलवाससः॥ १॥**

**पदार्थ—**
**युधि** = युद्धमा
**लीलया** = सजिलै
**निर्जिताः** = जितिएका
**अयुते द्वे** = दुई अयुत (बीस हजार)
**अष्टौ शतानि** = आठ सय
**ते** = ती
**गिरिद्रोण्यां** = गिरिद्रोणी नामक ठाउँमा थुनेर राखिएका
**मलिनाः** = मैलो शरीर र
**मलवाससः** = मैला कपडा लगाएका (राजाहरू त्यहाँबाट)
**निर्गताः** = बाहिर निस्किए

**वाक्यार्थ—** जरासन्धद्वारा युद्धमा सजिलै जितिएका बीस हजार आठ सय राजाहरू गिरिद्रोणी नामक ठाउँमा थुनेर राखिएका थिए। मैलो शरीर भएका अनि मैला कपडाहरू लगाएका ती राजाहरू त्यहाँबाट बाहिर निस्किए।

**क्षुत्क्षामाः शुष्कवदनाः संरोधपरिकर्शिताः।**

**ददृशुस्ते घनश्यामं पीतकौशेयवाससम्॥ २॥**

**श्रीवत्साङ्कं चतुर्बाहुं पद्मगर्भारुणेक्षणम्।**

**चारुप्रसन्नवदनं स्फुरन्मकरकुण्डलम्॥ ३॥**

**पद्महस्तं गदाशङ्खरथाङ्गैरुपलक्षितम्।**

**किरीटहारकटककटिसूत्राङ्गदाचितम्॥ ४॥**

**पदार्थ—**
**क्षुत्क्षामाः** = भोकले दुर्बल बनेका
**शुष्कवदनाः** = मुख सुकेका
**संरोधपरिकर्शिताः** = बन्दी बनाइएका कारण खिन्न भएका
**ते** = ती राजाहरूले
**पीतकौशेयवाससं** = रेशमी पीताम्बर धारण गर्नुभएका
**श्रीवत्साङ्कं** = श्रीवत्स चिह्नले युक्त हुनुभएका
**चतुर्बाहुं** = चारहातले युक्त
**पद्मगर्भारुणेक्षणं** = कमलको भित्री दलजस्तो अरुण रङ्गका आँखा भएका
**चारुप्रसन्नवदनं** = सुन्दर र प्रसन्न अनुहार भएका
**स्फुरन्मकरकुण्डलं** = कानमा चम्किला गोहीआकारका कुण्डल लगाउनुभएका
**पद्महस्तं** = हातमा कमल

लिनुभएका
**गदाशङ्खरथाङ्गैः** = गदा, शङ्ख र चक्रले
**उपलक्षितं** = सुशोभित हुनुभएका
**किरीटहारकटककटिसूत्राङ्गदा-चितं** = सुन्दर मुकुट, हार, बाला, करधनी र बाजु पहिरिनुभएका
**घनश्यामं** = मेघको जस्तो श्यामवर्ण भएका भगवान् श्रीकृष्णलाई
**ददृशुः** = देखे

**वाक्यार्थ–** लामो समयसम्म थुनिएकाले भोक र प्यासले दुर्बल भएका र बन्दी बनाइएका कारण खिन्न भएका ती राजाहरूले मेघको जस्तो श्यामवर्ण भएका, पीताम्बरधारी भगवान् श्रीकृष्णलाई देखे। भगवान्ले हृदयमा श्रीवत्स चिह्न अनि चार हातमा शङ्ख, चक्र, गदा र कमल धारण गर्नुभएको थियो। त्यसै गरी कमलको भित्री दलजस्तो अरुण रङ्गका आँखा, अत्यन्त सुन्दर र प्रसन्न अनुहार भएका र कानमा गोही आकारका चम्किला कुण्डल लगाउनुभएका भगवान्ले सुन्दर मुकुट, हार, बाला, करधनी र बाजु पहिरिनुभएको थियो।

**भ्राजद्वरमणिग्रीवं निवीतं वनमालया।**
**पिबन्त इव चक्षुर्भ्यां लिहन्त इव जिह्वया॥ ५॥**
**जिघ्रन्त इव नासाभ्यां रम्भन्त इव बाहुभिः।**
**प्रणेमुर्हतपाप्मानो मूर्धभिः पादयोर्हरेः॥ ६॥**

**पदार्थ–**
**भ्राजद्वरमणिग्रीवं** = चमचम चम्किने कौस्तुभमणि गलामा धारण गर्नुभएका
**वनमालया** = वैजयन्ती मालाले
**निवीतं** = विभूषित हुनुभएका (भगवान् श्रीकृष्णलाई बन्दी राजाहरूले देखे)
**हरेः** = भगवान् श्रीकृष्णका
**पादयोः** = दुबै चरणमा
**चक्षुर्भ्यां** = दुबै आँखाले
**पिबन्तः इव** = उहाँलाई नै पिउन लागेजस्ता
**जिह्वया** = जिभ्राले
**लिहन्तः इव** = चाट्न लागेजस्ता
**नासाभ्यां** = नाकले
**जिघ्रन्तः इव** = सुँघ्न लागेजस्ता
**बाहुभिः** = हातहरूले
**रम्भन्तः इव** = अँगालो मार्न लागेजस्ता
**हतपाप्मानः** = भगवान्को दर्शनमात्रले पापनाश भएका ती राजाहरूले
**मूर्धभिः** = शिर झुकाएर
**प्रणेमुः** = प्रणाम गरे

**वाक्यार्थ–** गलामा चमचम गर्ने कौस्तुभमणि र वैजयन्ती माला धारण गर्नुभएका भगवान्को दर्शन मात्रले पापनाश भएका ती बन्दी राजाहरूले शिर निहुराएर उहाँलाई प्रणाम गरे। त्यस वेला ती राजाहरूले आँखाले भगवान्को रूप पिउन, जिभ्राले उहाँलाई चाट्न, नाकले उहाँलाई सुँघ्न र हातहरूले भगवान्लाई अँगालो हाल्न खोजेका हुन् कि जस्तो लाग्यो।

**कृष्णसन्दर्शनाह्लादध्वस्तसंरोधनक्लमाः।**
**प्रशशंसुर्हृषीकेशं गीर्भिः प्राञ्जलयो नृपाः॥ ७॥**

**पदार्थ–**
**कृष्णसन्दर्शनाह्लादध्वस्तसंरोधनक्लमाः** = भगवान् श्रीकृष्णको दर्शन गर्न पाउँदाको आनन्दले जेलमा थुनिँदाको पीडा भुलेका
**नृपाः** = राजाहरूले
**प्राञ्जलयः** = अँजुली जोडेर
**गीर्भिः** = आफ्नो वाणीले
**हृषीकेशं** = इन्द्रियहरूका मालिक श्रीकृष्णलाई
**प्रशशंसुः** = स्तुति गर्न लागे

**वाक्यार्थ–** भगवान्‌को दर्शन गर्न पाउँदाको आनन्दले जेलमा थुनिँदाको सबै पीडा भुलेका ती राजाहरूले दुबै हात जोडेर श्रीकृष्णको स्तुतिगान गर्न लागे।

**राजान ऊचुः** (राजाहरूले भने)

**नमस्ते देवदेवेश प्रपन्नार्तिहराव्यय।**
**प्रपन्नान् पाहि नः कृष्ण निर्विण्णान् घोरसंसृतेः॥ ८॥**

**पदार्थ–**
**प्रपन्नार्तिहर** = हे शरणमा परेकाहरूको दुःखकष्ट हरिदिने
**अव्यय** = हे अविनाशी
**देवदेवेश** = हे देवताहरूका पनि देव
**कृष्ण** = हे श्रीकृष्ण भगवान्
**ते** = हजुरलाई
**नमः** = नमस्कार छ
**घोरसंसृतेः** = जन्ममृत्युरूप संसारबाट
**निर्विण्णान्** = विरक्त भएका
**प्रपन्नान्** = शरणमा आएका
**नः** = हामीलाई
**पाहि** = रक्षा गर्नुहोस्

**वाक्यार्थ–** शरणमा परेकाहरूको सम्पूर्ण दुःखकष्ट हरण गरिदिने, देवताका पनि ईश्वर हे अविनाशी कृष्ण भगवान्! हजुरलाई नमस्कार छ। जरासन्धको बन्धनबाट मुक्त भएका हामीहरू संसारदेखि विरक्त भएर हजुरको शरणमा आएका छौँ, हाम्रो रक्षा गर्नुहोस्।

**नैनं नाथान्वसूयामो मागधं मधुसूदन।**
**अनुग्रहो यद् भवतो राज्ञां राज्यच्युतिर्विभो॥ ९॥**

**पदार्थ–**
**नाथ** = हे मालिक
**मधुसूदन** = हे मधुसूदन
**विभो** = हे सर्वव्यापक प्रभु
**एनं** = यस
**मागधं** = जरासन्धलाई
**न अन्वसूयामः** = दोष दिँदैनौ
**यत्** = किनभने
**राज्ञां** = (हामी) राजाहरूको
**राज्यच्युतिः** = राज्य खोसिनु
**भवतः** = हजुरको
**अनुग्रहः** = अनुग्रह नै हो

**वाक्यार्थ–** हे मालिक, हे सर्वव्यापक मधुसूदन भगवान्! यस जरासन्धप्रति हाम्रो कुनै रिस छैन, किनभने यसले हामीहरूको राज्य खोस्नु पनि हजुरकै अनुग्रह हो।

**राज्यैश्वर्यमदोन्नद्धो न श्रेयो विन्दते नृपः।**
**त्वन्मायामोहितोऽनित्या मन्यते सम्पदोऽचलाः॥ १०॥**

**पदार्थ–**
**राज्यैश्वर्यमदोन्नद्धः** = राज्यको ऐश्वर्यरूपी मदले उन्मत्त भएको

**नृपः** = राजाले
**श्रेयः** = कल्याण
**न विन्दते** = प्राप्त गर्दैन
**त्वन्मायामोहितः** = हजुरको मायाले मोहित भएको त्यसले
**अनित्याः** = अनित्य
**सम्पदः** = सम्पत्तिहरूलाई पनि
**अचलाः** = अविनाशी
**मन्यते** = मान्दछ

**वाक्यार्थ–** राज्यको ऐश्वर्यरूपी मदले उन्मत्त भएको राजाले कल्याणको मार्ग प्राप्त गर्न सक्दैन। किनभने हजुरको मायाद्वारा मोहित भएको त्यसले अनित्य सम्पत्तिलाई पनि नित्य मान्दछ।

**मृगतृष्णां यथा बाला मन्यन्त उदकाशयम्।**
**एवं वैकारिकीं मायामयुक्ता वस्तु चक्षते॥ ११॥**

**पदार्थ–**
**यथा** = जसरी
**बालाः** = अज्ञानी बालकहरूले
**मृगतृष्णां** = मृगमरीचिका (बालुवामा टल्किएको सूर्यको किरण)लाई
**उदकाशयम्** = पानीको पोखरी
**मन्यन्ते** = मान्दछन्
**एवं** = त्यसै गरी
**अयुक्ताः** = अज्ञानीहरूले
**वैकारिकीं** = नाशवान्
**मायां** = मायिक प्रकृतिलाई
**वस्तु** = सत्यवस्तु
**चक्षते** = मान्दछन्

**वाक्यार्थ–** जसरी अज्ञानी बालकहरूले मृगमरीचिकालाई नै पानीको पोखरी सम्झन्छन्, त्यसै गरी अज्ञानीहरूले पनि नाशवान् मायिक प्रकृतिलाई सत्य सम्झिन्छन्।

**वयं पुरा श्रीमदनष्टदृष्टयो**
**जिगीषयास्या इतरेतरस्पृधः।**
**घ्नन्तः प्रजाः स्वा अतिनिर्घृणाः प्रभो**
**मृत्युं पुरस्त्वाविगणय्य दुर्मदाः॥ १२॥**

**पदार्थ–**
**प्रभो** = हे प्रभु
**अस्याः** = यी पृथिवीलाई
**जिगीषया** = जित्ने इच्छाले
**इतरेतरस्पृधः** = एक-आपसमा लडिरहने
**श्रीमदनष्टदृष्टयः** = सम्पत्तिको मदले बुद्धि भ्रष्ट भएका
**पुरः** = अगाडि रहेका
**मृत्युं** = कालरूप
**त्वा** = हजुरलाई
**अविगणय्य** = वास्ता नगरेर
**दुर्मदाः** = उन्मत्त भएका
**वयं** = हामीहरूले
**पुरा** = पहिले
**स्वाः** = आफ्ना
**प्रजाः** = प्रजाहरूलाई (युद्धमा लगाएर)
**घ्नन्तः** = मार्दै
**अतिनिर्घृणाः** = अति घृणित कार्य गर्‍यौं

**वाक्यार्थ–** हे प्रभु ! धनसम्पत्तिको घमन्डले उन्मत्त भएका हामीहरू पहिला पृथिवीलाई जित्ने इच्छाले एक-आपसमा लडिरहन्थ्यौं। अगाडि रहेका कालस्वरूप हजुरलाई समेत कुनै वास्ता नगर्ने हामीहरूले आफ्ना प्रजाहरूलाई युद्धमा लगाएर मार्दै अत्यन्त घृणित काम गर्‍यौं।

**त एव कृष्णाद्य गभीररंहसा दुरन्तवीर्येण विचालिताः श्रियः।**
**कालेन तन्वा भवतोऽनुकम्पया विनष्टदर्पाश्चरणौ स्मराम ते ॥ १३ ॥**

**पदार्थ–**
**कृष्ण** = हे श्रीकृष्ण
**अद्य** = आज
**गभीररंहसा** = गहन वेग र
**दुरन्तवीर्येण** = अति पराक्रम भएको
**भवतः** = हजुरको
**अनुकम्पया** = कृपाका कारण
**कालेन तन्वा** = हजुरको शरीररूप कालद्वारा
**श्रियः** = सम्पत्तिबाट
**विचालिताः** = अलग्गिएकाले
**विनष्टदर्पाः** = घमन्ड नष्ट भएका
**ते एव** = तिनै हामीहरू
**ते** = हजुरका
**चरणौ** = दुई पाउको
**स्मरामः** = स्मरण गर्दछौँ

**वाक्यार्थ–** हे श्रीकृष्ण भगवान् ! अति गहन गति र पराक्रम भएको हजुरको कालरूप शरीरले आज हामी श्रीहीन भएकाले हजुरको कृपाका कारण हाम्रो घमन्ड नष्ट भएको छ। अतः अब हामी हजुरका चरणकमलको स्मरण गर्दछौँ।

**अथो न राज्यं मृगतृष्णिरूपितं देहेन शश्वत् पतता रुजां भुवा।**
**उपासितव्यं स्पृहयामहे विभो क्रियाफलं प्रेत्य च कर्णरोचनम् ॥ १४ ॥**

**पदार्थ–**
**अथो** = त्यसकारण
**विभो** = हे प्रभु
**मृगतृष्णिरूपितं** = मृगतृष्णा जस्तो
**शश्वत्** = निरन्तर
**पतता** = नाश भइरहने
**रुजां** = रोगको
**भुवा** = घर भएको
**देहेन** = शरीरले
**उपासितव्यं** = उपभोग गर्ने
**राज्यं** = राज्यसुख र
**कर्णरोचनं** = सुन्नका लागि मात्र प्यारो (शरीरलाई)
**प्रेत्य** = त्यागेर
**क्रियाफलं च** = कर्मको फल (स्वर्ग आदि लोकको सुख पनि)
**न स्पृहयामहे** = चाहँदैनौँ

**वाक्यार्थ–** हे प्रभु ! अब हामी मृगतृष्णा जस्तो असत्य, निरन्तर नाश भइरहने रोगको घर भएको शरीरद्वारा उपभोग गरिने राज्यसुखको कामना गर्दैनौँ। यतिमात्र होइन, सुन्नमा मात्र राम्रो लाग्ने शरीरलाई त्यागेर पाइने स्वर्ग आदि लोकको सुख भोग्ने पनि हामीलाई कुनै चाहना छैन।

**तं नः समादिशोपायं येन ते चरणाब्जयोः।**
**स्मृतिर्यथा न विरमेदपि संसरतामिह ॥ १५ ॥**

**पदार्थ–**
**येन** = जुन उपायले
**यथा** = जसरी
**इह** = यस संसारमा
**संसरतां** = घुमिरहेका
**नः** = हामीहरूको (मनबाट)
**ते** = हजुरको
**चरणाब्जयोः** = चरणकमलको
**स्मृतिः** = सम्झना
**न विरमेत्** = नहराओस्
**तं** = त्यो
**उपायं अपि** = उपाय पनि
**समादिश** = बताइदिनुहोस्

**वाक्यार्थ–** अब हामीलाई कृपा गरेर त्यस्तो उपाय बताइदिनुहोस्, जसले गर्दा हाम्रो मनबाट हजुरका चरणकमलको सम्झना कहिल्यै नहराओस्।

**कृष्णाय वासुदेवाय हरये परमात्मने।**

**प्रणतक्लेशनाशाय गोविन्दाय नमो नमः॥ १६॥**

**पदार्थ–**
**प्रणतक्लेशनाशाय** = नमस्कार गर्नेको दुःखकष्ट नाश गरिदिने
**हरये** = शरणमा आएकाहरूको सन्ताप हरण गरिदिने
**परमात्मने** = परब्रह्मस्वरूप
**वासुदेवाय** = वसुदेवनन्दन
**कृष्णाय** = प्राणीमात्रलाई मोहित पार्ने
**गोविन्दाय** = गोविन्द भगवान्‌लाई
**नमो नमः** = बारम्बार नमस्कार छ

**वाक्यार्थ–** नमस्कार गर्नेको दुःखकष्ट नाश गरिदिने, शरणमा परेकाहरूको सबै सन्ताप हरिदिने, प्राणीमात्रलाई मोहित पार्ने, परब्रह्मस्वरूप वसुदेवनन्दन भगवान् गोविन्दलाई बारम्बार नमस्कार छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**संस्तूयमानो भगवान् राजभिर्मुक्तबन्धनैः।**

**तानाह करुणस्तात शरण्यः श्लक्ष्णया गिरा॥ १७॥**

**पदार्थ–**
**तात** = हे प्रिय परीक्षित्
**मुक्तबन्धनैः** = कारागारबाट मुक्त भएका
**राजभिः** = राजाहरूद्वारा
**संस्तूयमानः** = स्तुति गरिनुभएका
**शरण्यः** = शरणमा परेकाहरूको कल्याण गर्ने
**करुणः** = दयालु
**भगवान्** = भगवान् श्रीकृष्णले
**श्लक्ष्णया** = मधुर
**गिरा** = बोलीले
**तान्** = ती राजाहरूलाई
**आह** = भन्न लाग्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! जरासन्धको कारागारबाट मुक्त भएका राजाहरूले यसप्रकार स्तुति गरिसकेपछि परमदयालु भक्तवत्सल भगवान् श्रीकृष्णले मिठो बोलीमा ती राजाहरूलाई यसो भन्न लाग्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**अद्यप्रभृति वो भूपा मय्यात्मन्यखिलेश्वरे।**

**सुदृढा जायते भक्तिर्बाढमाशंसितं तथा॥ १८॥**

**पदार्थ–**
**भूपाः** = हे राजाहरू
**आशंसितं** = (तिमीहरूद्वारा) जो इच्छा गरिएको छ
**तथा** = त्यो
**बाढं** = ठिक छ
**अद्यप्रभृति** = अबदेखि
**अखिलेश्वरे** = सबैको शासक
**आत्मनि** = आत्मस्वरूप

**मयि** = म श्रीकृष्णमा
**वः** = तिमीहरूको
**सुदृढा** = निश्चल
**भक्तिः** = प्रेम
**जायते** = हुनेछ

**वाक्यार्थ–** हे राजाहरू ! तिमीहरूले जस्तो इच्छा गरेका छौ, त्यो ठिक हो त्यसै अनुसार अबदेखि संसारको एक मात्र शासक, आत्मस्वरूप म श्रीकृष्णमा तिमीहरूको निश्चल प्रेमभक्ति हुनेछ।

**दिष्ट्या व्यवसितं भूपा भवन्त ऋतभाषिणः।**
**श्रीयैश्वर्यमदोन्नाहं पश्य उन्मादकं नृणाम्॥ १९॥**

**पदार्थ–**
**भूपाः** = हे राजाहरू
**भवन्तः** = तिमीहरू
**ऋतभाषिणः** = सत्यवादी छौ
**व्यवसितं** = (तिमीहरूद्वारा) निश्चय गरिएको कुरा
**दिष्ट्या** = अति राम्रो छ
**श्रीयैश्वर्यमदोन्नाहं** = धन-सम्पत्ति र राज्यश्रीको संवृद्धि
**नृणां** = मानिसहरूका निम्ति
**उन्मादकं** = उत्तेजनाको कारण भएको
**पश्य** = हेर

**वाक्यार्थ–** हे राजाहरू ! सत्यवादी तिमीहरूले जे निश्चय गरेका छौ, त्यो ठिकै हो। किनभने धन-सम्पत्ति र राज्यश्रीको संवृद्धि मानिसहरूलाई उन्मत्त बनाउने कारण बनेको देखिन्छ।

**हैहयो नहुषो वेनो रावणो नरकोऽपरे।**
**श्रीमदाद् भ्रंशिताः स्थानाद् देवदैत्यनरेश्वराः॥ २०॥**

**पदार्थ–**
**हैहयः** = हैहय
**नहुषः** = नहुष
**वेनः** = वेन
**रावणः** = रावण
**नरकः** = नरकासुर
**अपरे** = अरू
**देवदैत्यनरेश्वराः** = देवता, दानव र राजाहरू
**श्रीमदात्** = धनसम्पत्तिको उन्मादले
**स्थानात्** = आफ्नो पदबाट
**भ्रंशिताः** = गिरेका थिए

**वाक्यार्थ–** हैहय, नहुष, वेन, रावण, नरकासुर लगायत अन्य धेरै देवता, दैत्य र राजाहरू धनसम्पत्तिको उन्मादले उन्मत्त भएर आफ्नो राज्यपदबाट गिरेका थिए।

**भवन्त एतद् विज्ञाय देहाद्युत्पाद्यमन्तवत्।**
**मां यजन्तोऽध्वरैर्युक्ताः प्रजा धर्मेण रक्षथ॥ २१॥**

**पदार्थ–**
**भवन्तः** = तिमीहरूले
**एतत्** = यो
**उत्पाद्यं** = उत्पत्तिशील
**देहादि** = शरीर आदिलाई
**अन्तवत्** = नाशवान् हो भन्ने
**विज्ञाय** = जानेर
**युक्ताः** = संयमित बनेर
**अध्वरैः** = यज्ञहरूद्वारा
**मां** = मेरो
**यजन्तः** = पूजा गर्दै
**धर्मेण** = धर्मपूर्वक
**प्रजाः** = प्रजाहरूको
**रक्षथ** = रक्षा गर्नू

**वाक्यार्थ–** तिमीहरूले यी शरीर आदि उत्पन्न हुने र नाश हुने वस्तु हुन् भन्ने बुझेर संयमी बनी यज्ञहरू गर्दै मेरो पूजा गर्नू र धर्मपूर्वक प्रजाहरूको रक्षा गर्नू।

**सन्तन्वन्तः प्रजातन्तून् सुखं दुःखं भवाभवौ।**
**प्राप्तं प्राप्तं च सेवन्तो मच्चित्ता विचरिष्यथ॥ २२॥**

**पदार्थ–**
**प्रजातन्तून्** = वंशपरम्परा
**सन्तन्वन्तः** = अघि बढाउँदै
**सुखं दुःखं** = सुख-दुःख
**भवाभवौ** = जन्म-मृत्यु
**प्राप्तं प्राप्तं च** = जे-जे प्राप्त हुन्छ त्यो-त्यो
**सेवन्तः** = भोग गर्दै
**मच्चित्ताः** = ममा चित्त लगाएर
**विचरिष्यथ** = घुम्नू (जीवन बिताउनू)

**वाक्यार्थ–** वंशपरम्परालाई अघि बढाउँदै सुख-दुःख, जन्म-मृत्यु जे-जे प्राप्त हुन्छ, त्यसलाई उपभोग गर्नू र ममा चित्त लगाएर विचरण गर्दै जीवन बिताउनू।

**उदासीनाश्च देहादावात्मारामा धृतव्रताः।**
**मय्यावेश्य मनः सम्यङ्मामन्ते ब्रह्म यास्यथ॥ २३॥**

**पदार्थ–**
**देहादौ** = शरीर आदिमा
**उदासीनाः** = आसक्ति नभएका
**आत्मारामाः** = आफैँमा रमाउने
**धृतव्रताः च** = नियम पालन गर्ने तिमीहरूले
**मयि** = ममा
**सम्यक्** = राम्रोसँग
**मनः** = चित्त
**आवेश्य** = लगाएर
**अन्ते** = अन्तकालमा
**ब्रह्म** = परब्रह्मस्वरूप
**मां** = मलाई
**यास्यथ** = प्राप्त गर्नेछौ

**वाक्यार्थ–** शरीर र शरीर सम्बन्धी स्त्रीपुत्र आदिमा कुनै प्रकारको आसक्ति नभएका तिमीहरूले आफैँमा रमाउने, शास्त्रका नियमलाई पालन गर्ने र मनलाई नियन्त्रण गरी ममा नै लगाइरहने गऱ्यौ भने तिमीहरूले अन्तकालमा परब्रह्म परमात्मा मलाई प्राप्त गर्नेछौ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्यादिश्य नृपान् कृष्णो भगवान् भुवनेश्वरः।**
**तेषां न्ययुङ्क्त पुरुषान् स्त्रियो मज्जनकर्मणि॥ २४॥**

**पदार्थ–**
**भुवनेश्वरः** = संसारका मालिक
**भगवान् कृष्णः** = भगवान् श्रीकृष्णले
**नृपान्** = राजाहरूलाई
**इति** = यस्तो
**आदिश्य** = आदेश दिएर
**तेषां** = ती राजाहरूको
**मज्जनकर्मणि**= नुहाइ-धुवाइ गर्ने काममा
**पुरुषान्** = दासहरू र
**स्त्रियः** = दासीहरूलाई
**न्ययुङ्क्त** = खटाउनुभयो

**वाक्यार्थ–** संसारका मालिक भगवान् श्रीकृष्णले राजाहरूलाई यस्तो आदेश दिएर तिनीहरूको नुहाइ-धुवाइ गर्न प्रशस्त दास-दासीहरू खटाउनुभयो।

**सपर्यां कारयामास सहदेवेन भारत।**
**नरदेवोचितैर्वस्त्रैर्भूषणैः स्रग्विलेपनैः॥ २५॥**

**पदार्थ–**
**भारत** = हे भरतवंशी परीक्षित् (भगवान् श्रीकृष्णले)
**सहदेवेन** = (जरासन्धको छोरो) सहदेवद्वारा
**नरदेवोचितैः** = राजाहरूका निम्ति गरिने
**वस्त्रैः** = वस्त्रहरूले
**भूषणैः** = गहनाहरूले
**स्रग्विलेपनैः** = माला र चन्दनहरूले
**सपर्यां** = स्वागतसत्कार
**कारयामास** = गराउनुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! भगवान् श्रीकृष्णले जरासन्धको छोरो सहदेवलाई लगाएर राजोचित वस्त्र-आभूषण, माला, चन्दन आदिद्वारा तिनीहरूको स्वागत सत्कार गराउनुभयो।

**भोजयित्वा वरान्नेन सुस्नातान् समलङ्कृतान्।**
**भोगैश्च विविधैर्युक्तास्ताम्बूलाद्यैर्नृपोचितैः॥ २६॥**

**पदार्थ–**
**सुस्नातान्** = नुहाइ धुवाइ गरेका
**समलङ्कृतान्** = सजिसजाउ भएका (ती राजाहरूलाई)
**वरान्नेन** = मिठा-मिठा भोजनका परिकार
**भोजयित्वा** = खुवाएर
**ताम्बूलाद्यैः** = पान, सुपारी आदि
**विविधैः** = अनेक किसिमका
**नृपोचितैः** = राजाहरूका निम्ति उचित
**भोगैः च** = भोगहरूले समेत
**युक्ताः** = सन्तुष्ट गराउनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले राम्रोसँग नुहाइ-धुवाइ गरी सजिसजाउ भएका ती राजाहरूलाई मिठा-मिठा परिकार खुवाइसकेपछि पान, सुपारी आदि राजाहरूका निम्ति उचित विभिन्न भोग्य वस्तुहरूले समेत सन्तुष्ट गराउनुभयो।

**ते पूजिता मुकुन्देन राजानो मृष्टकुण्डलाः।**
**विरेजुर्मोचिताः क्लेशात् प्रावृडन्ते यथा ग्रहाः॥ २७॥**

**पदार्थ–**
**मुकुन्देन** = भगवान् मुकुन्दद्वारा
**पूजिताः** = सम्मानित गरिएका
**क्लेशात्** = दुःखबाट
**मोचिताः** = मुक्त भएका
**मृष्टकुण्डलाः** = राम्रा-राम्रा कुण्डलहरू लगाएका
**ते** = ती
**राजानः** = राजाहरू
**प्रावृडन्ते** = वर्षाको अन्तमा
**ग्रहाः** = ग्रहहरू चम्किए
**यथा** = जसरी
**विरेजुः** = शोभायमान देखिए

**वाक्यार्थ–** यसप्रकार भगवान् मुकुन्दबाट सम्मानित भएका र कारागारबाट मुक्त भएका ती राजाहरू चम्किला कुण्डल आदि गहना पहिरिंदा वर्षाकालको अन्तमा चम्किएका ताराहरू झैँ शोभायमान देखिए।

**रथान् सदश्वानारोप्य मणिकाञ्चनभूषितान्।**

**प्रीणय्य सुनृतैर्वाक्यैः स्वदेशान् प्रत्ययापयत्॥ २८॥**

**पदार्थ–**
**मणिकाञ्चनभूषितान्** = मणि र सुनले सजाइएका
**सदश्वान्** = राम्रा-राम्रा घोडाहरू भएका
**रथान्** = रथहरूमा
**आरोप्य** = बसाएर
**सुनृतैः** = मिठा-मिठा
**वाक्यैः** = वाणीहरूले
**प्रीणय्य** = खुसी गराएर
**स्वदेशान्** = आ-आफ्नो देशमा
**प्रत्ययापयत्** = फर्काइदिनुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान्ले ती राजाहरूलाई मणि र सुनले सजाइएका, राम्रा-राम्रा घोडाले युक्त भएका रथहरूमा चढाएर मिठो बोलीले खुसी गराई आ-आफ्नो देशमा फर्काइदिनुभयो।

**त एवं मोचिताः कृच्छ्रात् कृष्णेन सुमहात्मना।**

**ययुस्तमेव ध्यायन्तः कृतानि च जगत्पतेः॥ २९॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**सुमहात्मना** = परमात्मा
**कृष्णेन** = भगवान् श्रीकृष्णद्वारा
**कृच्छ्रात्** = दुःखबाट
**मोचिताः** = मुक्त गरिएका
**ते** = ती राजाहरू
**जगत्पतेः** = जगत्का मालिक भगवान् श्रीकृष्णद्वारा
**कृतानि** = गरिएका लीला र
**तं एव च** = उहाँलाई पनि
**ध्यायन्तः** = स्मरण गर्दै
**ययुः** = (आ-आफ्नो देश) गए

**वाक्यार्थ–** यसप्रकार परमात्मा भगवान् श्रीकृष्णद्वारा दुःखबाट मुक्त गरिएका ती राजाहरू भगवान्का लीला र रूपको स्मरण गर्दै आ-आफ्नो देश गए।

**जगदुः प्रकृतिभ्यस्ते महापुरुषचेष्टितम्।**

**यथान्वशासद् भगवांस्तथा चक्रुरतन्द्रिताः॥ ३०॥**

**पदार्थ–**
**ते** = ती राजाहरूले (आफ्नो देशमा गएर)
**महापुरुषचेष्टितं** = भगवान्का लीलाहरू
**प्रकृतिभ्यः** = प्रजाहरूलाई
**जगदुः** = सुनाए र
**भगवान्** = भगवान् श्रीकृष्णले
**यथा** = जस्तो
**अन्वशासत्** = आज्ञा दिनुभएको थियो
**तथा** = त्यसै गरी
**अतन्द्रिताः** = अल्छी नगरीकन
**चक्रुः** = गर्न लागे

**वाक्यार्थ–** ती राजाहरूले आ-आफ्नो देशमा पुगेर आफ्ना कर्मचारी एवं प्रजाहरूलाई भगवान्का लीलाहरू सुनाए र भगवान्को आज्ञा अनुसार अल्छी नगरीकन कर्म गर्न लागे।

**जरासन्धं घातयित्वा भीमसेनेन केशवः।**

**पार्थाभ्यां संयुतः प्रायात् सहदेवेन पूजितः॥ ३१॥**

**पदार्थ–**
**भीमसेनेन** = भीमसेनद्वारा
**जरासन्धं** = जरासन्धलाई
**घातयित्वा** = मारेर
**सहदेवेन** = जरासन्धपुत्र सहदेवद्वारा
**पूजितः** = पूजित हुनुभएका
**पार्थाभ्यां** = भीम र अर्जुनले
**संयुतः** = युक्त हुनुभएका
**केशवः** = भगवान् श्रीकृष्ण पनि
**प्रायात्** = (हस्तिनापुरतिर) हिँड्नुभयो

**वाक्यार्थ–** भीमसेनद्वारा जरासन्धलाई मार्नुभएका र जरासन्धको छोरो सहदेवद्वारा पूजित हुनुभएका भगवान् श्रीकृष्ण पनि भीम र अर्जुनलाई साथैमा लिएर हस्तिनापुरतिर हिँड्नुभयो।

**गत्वा ते खाण्डवप्रस्थं शङ्खान् दध्मुर्जितारयः।**

**हर्षयन्तः स्वसुहृदो दुर्हृदां चासुखावहाः॥ ३२॥**

**पदार्थ–**
**जितारयः** = शत्रुहरूलाई जितेका
**ते** = ती वीरहरूले
**खाण्डवप्रस्थं** = इन्द्रप्रस्थको नजिकमा
**गत्वा** = पुगेर
**स्वसुहृदः** = आफ्ना प्रियजनलाई
**हर्षयन्तः** = खुसी पार्दै
**दुर्हृदां च** = दुर्जनहरूलाई
**असुखावहाः** = दुःखी बनाउने
**शङ्खान्** = शङ्खहरू
**दध्मुः** = बजाए

**वाक्यार्थ–** शत्रुहरूलाई जितेका ती वीरहरूले इन्द्रप्रस्थ नजिकमा पुगेर प्रियजनहरूका लागि आनन्द दिने र दुर्जनहरूलाई दुःख दिने शङ्खघोष गरे।

**तच्छ्रुत्वा प्रीतमनस इन्द्रप्रस्थनिवासिनः।**

**मेनिरे मागधं शान्तं राजा चाप्तमनोरथः॥ ३३॥**

**पदार्थ–**
**तत्** = त्यो शङ्खध्वनि
**श्रुत्वा** = सुनेर
**इन्द्रप्रस्थनिवासिनः** = इन्द्रप्रस्थमा निवास गर्ने जनहरू
**प्रीतमनसः** = अत्यन्त खुसी भएर
**मागधं** = मगधराज जरासन्ध
**शान्तं** = मरिसकेको र
**राजा** = राजा युधिष्ठिरको
**आप्तमनोरथः च** = मनोकामना पूरा भएको
**मेनिरे** = सम्झे

**वाक्यार्थ–** त्यो शङ्खध्वनिलाई सुनेर इन्द्रप्रस्थमा बस्ने मानिसहरू अत्यन्त खुसी भए, किनभने उनीहरूले त्यो शङ्खघोषलाई जरासन्धको नाश र राजा युधिष्ठिरको कामना पूरा भएको सङ्केतको रूपमा सम्झे।

**अभिवन्द्याथ राजानं भीमार्जुनजनार्दनाः।**

**सर्वमाश्रावयाञ्चक्रुरात्मना यदनुष्ठितम्॥ ३४॥**

**पद्यार्थ–**
**अथ** = त्यसपछि
**भीमार्जुनजनार्दनाः** = (इन्द्रप्रस्थमा पुगेका) भीम, अर्जुन र भगवान् जनार्दनले
**राजानं** = राजा युधिष्ठिरलाई
**अभिवन्द्य** = अभिवादन गरेर
**आत्मना** = आफूहरूद्वारा
**यत्** = जे-जे
**अनुष्ठितं** = गरिएका थिए
**सर्वम्** = ती सबै वृत्तान्त
**आश्रावयाञ्चक्रुः** = सुनाउनुभयो

**वाक्यार्थ–** त्यसपछि इन्द्रप्रस्थमा पुग्नुभएका भीम, अर्जुन र श्रीकृष्णले राजा युधिष्ठिरलाई अभिवादन गर्नुभयो र आफूहरूले गरेका सबै कामहरूको वृत्तान्त सुनाउनुभयो।

**निशम्य धर्मराजस्तत् केशवेनानुकम्पितम्।**
**आनन्दाश्रुकलां मुञ्चन् प्रेम्णा नोवाच किञ्चन॥ ३५॥**

**पद्यार्थ–**
**धर्मराजः** = राजा युधिष्ठिर
**केशवेन** = भगवान् श्रीकृष्णद्वारा
**अनुकम्पितं** = अनुग्रह गरिएको
**तत्** = त्यो जरासन्धको वध भएको खबर
**निशम्य** = सुनेर
**प्रेम्णा** = प्रेमका कारण
**आनन्दाश्रुकलां** = हर्षका आँसु
**मुञ्चन्** = बगाउँदै
**किञ्चन** = केही पनि
**न उवाच** = बोलेनन्

**वाक्यार्थ–** भगवान्द्वारा अनुग्रह गरी जरासन्धको वध गरिएको वृत्तान्त सुनेर खुसी भएका राजा युधिष्ठिरले प्रेमका कारण आँखाबाट हर्षका आँसु बगाइरहे, उनले केही पनि बोलेनन्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे**
**उत्तरार्धे कृष्णाद्यागमने त्रिसप्ततितमोऽध्यायः॥ ७३॥**

राजाहरू, ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र, देवता, ऋषि, पितृ तथा अरू प्राणी एवं अनुयायीले सहितका लोकपालहरू जो-जो राजसूय यज्ञमा आएका थिए ती सबै राजा युधिष्ठिरद्वारा सम्मानित भए र उनको अनुमति लिएर आ-आफ्नो धामतर्फ गए।

**हरिदासस्य राजर्षे राजसूयमहोदयम्।**
**नैवातृप्यन् प्रशंसन्तः पिबन् मर्त्योऽमृतं यथा॥ २७॥**

**पदार्थ–**
**यथा** = जसरी
**मर्त्यः** = मनुष्य
**अमृतं** = अमृत
**पिबन्** = पिएर (तृप्त हुँदैन, त्यसै गरी)
**हरिदासस्य** = भगवान् हरिका भक्त
**राजर्षेः** = राजर्षि युधिष्ठिरको
**राजसूयमहोदयं** = राजसूय यज्ञ महोत्सवको
**प्रशंसन्तः** = प्रशंसा गरेर (कोही पनि)
**न एव अतृप्यन्** = तृप्त भएनन्

**वाक्यार्थ–** जसरी अमृत पिएर मानिसहरू कहिल्यै पनि तृप्त हुँदैनन्, त्यसै गरी भगवद्भक्त राजा युधिष्ठिरको राजसूय यज्ञमहोत्सवको प्रशंसा गरेर कोही पनि तृप्त भएनन्।

**ततो युधिष्ठिरो राजा सुहृत्सम्बन्धिबान्धवान्।**
**प्रेम्णा निवासयामास कृष्णं च त्यागकातरः॥ २८॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**त्यागकातरः** = बिछोडदेखि डराउने
**राजा** = महाराज
**युधिष्ठिरः** = युधिष्ठिरले
**सुहृत्सम्बन्धिबान्धवान्** = इष्टमित्र, नाताकुटुम्ब, बन्धुबान्धवहरूलाई र
**कृष्णं च** = भगवान् श्रीकृष्णलाई पनि
**प्रेम्णा** = प्रेमपूर्वक
**निवासयामास** = रोकेर राखे

**वाक्यार्थ–** त्यसपछि विछोडलाई सहन नसक्ने राजा युधिष्ठिरले आफ्ना इष्टमित्र, नाताकुटुम्ब, बन्धुबान्धवहरू र भगवान् श्रीकृष्णलाई समेत प्रेमपूर्वक रोकेर राखे।

**भगवानपि तत्राङ्ग न्यवात्सीत् तत्प्रियङ्करः।**
**प्रस्थाप्य यदुवीरांश्च साम्बादींश्च कुशस्थलीम्॥ २९॥**

**पदार्थ–**
**अङ्ग** = हे राजा परीक्षित्
**तत्प्रियङ्करः** = युधिष्ठिरको कल्याण चाहने
**भगवान् अपि** = भगवान् श्रीकृष्ण पनि
**साम्बादीन् च** = साम्ब आदि पुत्रहरूलाई र
**यदुवीरान् च** = यदुवीरहरूलाई
**कुशस्थलीम्** = द्वारकामा
**प्रस्थाप्य** = पठाएर
**तत्र** = त्यहीँ
**न्यवात्सीत्** = बस्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! युधिष्ठिरको कल्याण चाहने भगवान् श्रीकृष्णले पनि साम्ब आदि पुत्रहरूलाई र यदुवीरहरूलाई द्वारका पठाएर आफू चाहिँ त्यहीं बस्नुभयो।

**इत्थं राजा धर्मसुतो मनोरथमहार्णवम्।**

**सुदुस्तरं समुत्तीर्य कृष्णेनासीद् गतज्वरः॥ ३०॥**

**पदार्थ–**
**धर्मसुतः** = धर्मराजपुत्र
**राजा** = राजा युधिष्ठिर
**इत्थं** = यसप्रकार
**सुदुस्तरं** = सजिलै तर्न नसकिने
**मनोरथमहार्णवं** = (राजसूय यज्ञ सम्पन्न गर्ने) इच्छारूप समुद्रलाई
**कृष्णेन** = श्रीकृष्णको कृपाले
**समुत्तीर्य** = तरेर
**गतज्वरः** = चिन्तामुक्त
**आसीत्** = भए

**वाक्यार्थ–** धर्मराजका पुत्र राजा युधिष्ठिर यसप्रकारसँग सजिलै तर्न नसकिने राजसूय यज्ञ सम्पन्न गर्ने इच्छारूप समुद्रलाई श्रीकृष्णको कृपाले सजिलै पार गरेर चिन्तामुक्त भए।

**एकदान्तःपुरे तस्य वीक्ष्य दुर्योधनः श्रियम्।**

**अतप्यद् राजसूयस्य महित्वं चाच्युतात्मनः॥ ३१॥**

**पदार्थ–**
**एकदा** = एक दिन
**अच्युतात्मनः** = भगवान्का परमप्रेमी
**तस्य** = ती राजा युधिष्ठिरको
**अन्तःपुरे** = अन्तःपुरमा
**श्रियं** = सम्पत्ति र
**राजसूयस्य** = राजसूय यज्ञद्वारा प्राप्त भएको
**महित्वं च** = सम्मान पनि
**वीक्ष्य** = देखेर
**दुर्योधनः** = दुर्योधन
**अतप्यत्** = अत्यन्त दुःखी भयो

**वाक्यार्थ–** एक दिन भगवान्का परमप्रेमी महाराज युधिष्ठिरको अन्तःपुरको सम्पत्ति र राजसूययज्ञद्वारा प्राप्त भएको मान-सम्मान देखेर दुर्योधन अत्यन्त दुःखी भयो।

**यस्मिन् नरेन्द्रदितिजेन्द्रसुरेन्द्रलक्ष्मी-**

**र्नाना विभान्ति किल विश्वसृजोपक्लृप्ताः।**

**ताभिः पतीन् द्रुपदराजसुतोपतस्थे**

**यस्यां विषक्तहृदयः कुरुराडतप्यत्॥ ३२॥**

**यस्मिँस्तदा मधुपतेर्महिषीसहस्रं**

**श्रोणीभरेण शनकैः क्वणदङ्घ्रिशोभम्।**

**मध्ये सुचारु कुचकुङ्कुमशोणहारं**

**श्रीमन्मुखं प्रचलकुण्डलकुन्तलाढ्यम्॥ ३३॥**

**पदार्थ—**
**यस्मिन्** = जुन महलमा
**किल** = निश्चय नै
**विश्वसृजा** = विश्वकर्माद्वारा
**उपक्लृप्ताः** = सृजना गरिएका
**नाना** = विभिन्न प्रकारका
**नरेन्द्रदितिजेन्द्रसुरेन्द्रलक्ष्मीः** = नरपति, दैत्यपति र सुरपतिका भोग-उपभोगका सामग्री र सम्पत्ति
**विभान्ति** = सजिसजाउ थिए र
**ताभिः** = ती सामग्रीहरूद्वारा
**द्रुपदराजसुता** = द्रौपदीले
**पतीन्** = आफ्ना पतिहरूलाई
**उपतस्थे** = सेवा गर्दथिन्
**यस्यां** = जुन द्रौपदीमा
**विषक्तहृदयः** = चित्त आसक्त भएको
**कुरुराट्** = कुरु देशको युवराज दुर्योधन
**अतप्यत्** = अत्यन्त दुःखी बन्यो
**यस्मिन्** = जुन अन्तःपुरमा
**तदा** = त्यस समयमा
**श्रोणीभरेण** = कम्मरको भारले
**शनकैः** = बिस्तारै-बिस्तारै
**क्वणदङ्घ्रिशोभं** = बज्ने पाउजुले सुशोभित पाउ भएका
**मध्ये** = बिच भाग
**सुचारु** = ज्यादै सुन्दर भएका
**कुचकुङ्कुमशोणहारं** = स्तनमा लगाएको कुङ्कुमले गर्दा राता-राता भएका हार लगाएका
**प्रचलकुण्डलकुन्तलाढ्यं** = हल्लिँदै गरेका कुण्डल र घुम्रिएको कपालको शोभाले सुशोभित
**श्रीमन्मुखं** = चम्किलो अनुहार भएका
**मधुपतेः** = भगवान् श्रीकृष्णका
**महिषीसहस्रम्** = हजारौँ रानीहरू बसेका थिए

**वाक्यार्थ—** पाण्डवहरूका निम्ति विश्वकर्माले जुन महल बनाएका थिए, त्यसमा नरपति, दैत्यपति र सुरपतिहरूका नाना प्रकारका सम्पत्तिहरू शोभायमान थिए। यिनै सम्पत्तिहरूद्वारा रानी द्रौपदी आफ्ना पतिहरूको सेवा गर्दथिन्। त्यस समय त्यस राजभवनमा भगवान् श्रीकृष्णका हजारौँ रानीहरूसमेत बसेका थिए। कम्मरको भारका कारण बिस्तारै बिस्तारै हिँड्ने ती रानीहरूको पाउजुको छमछम आवाजले त्यो भवन झनै शोभायमान भएको थियो। रानीहरूका छाती र स्तनमा लगाइएको कुङ्कुमकले गर्दा उनीहरूले लगाएका हारसमेत राता-राता देखिएका थिए। कानमा झुलिरहेका कुण्डल र घुम्रिएका कपालले चम्किएका तिनीहरूका मुखकमलहरू अत्यन्त सुशोभित थिए। यो सब देख्दा द्रौपदीमा चित्त आसक्त भएको दुर्योधन डाहले अत्यन्त दुःखी बन्यो।

**सभायां मयक्लृप्तायां क्वापि धर्मसुतोऽधिराट्।**
**वृतोऽनुजैर्बन्धुभिश्च कृष्णेनापि स्वचक्षुषा॥ ३४॥**
**आसीनः काञ्चने साक्षादासने मघवानिव।**
**पारमेष्ठ्यश्रिया जुष्टः स्तूयमानश्च वन्दिभिः॥ ३५॥**

**पदार्थ—**
**क्व अपि** = कुनै दिन
**मयक्लृप्तायां** = मय दानवद्वारा बनाइएको
**सभायां** = सभाभवनमा
**धर्मसुतः** = धर्मराज
**अधिराट्** = महाराज युधिष्ठिर
**अनुजैः** = भाइहरूले
**बन्धुभिः च** = बन्धुबान्धवहरूले र
**स्वचक्षुषा** = आफ्ना आँखाका नानीजस्ता
**कृष्णेन अपि** = भगवान् श्रीकृष्णले समेत
**वृतः** = घेरिएर

**पारमेष्ठ्यश्रिया** = ब्रह्माजीको जस्तो ऐश्वर्यले
**जुष्टः** = युक्त भएर
**वन्दिभिः च** = वन्दीगणद्वारा
**स्तूयमानः** = प्रशंसित हुँदै
**साक्षात्** = प्रत्यक्ष
**मघवान् इव** = देवराज इन्द्र झैँ
**काञ्चने** = सुनको
**आसने** = सिंहासनमा
**आसीनः** = बसिरहेका (थिए)

**वाक्यार्थ–** कुनै दिन राजा युधिष्ठिर आफ्ना भाइ, बन्धुबान्धवहरू र आँखाका नानी झैँ प्यारा भगवान् श्रीकृष्णद्वारा घेरिएर ब्रह्माजीको जस्तो ऐश्वर्यले सुसम्पन्न भई वन्दीगणद्वारा प्रशंसित हुँदै मयदानवले बनाएको सभाभवनको सुवर्णमय सिंहासनमा देवराज इन्द्र झैँ सुशोभित भई बसेका थिए।

**तत्र दुर्योधनो मानी परीतो भ्रातृभिर्नृप।**
**किरीटमाली न्यविशदसिहस्तः क्षिपन् रुषा॥ ३६॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**तत्र** = त्यहाँ
**किरीटमाली** = मुकुट र माला लगाएको
**भ्रातृभिः** = आफ्ना भाइहरूले
**परीतः** = घेरिएको
**असिहस्तः** = हातमा तरबार लिएको
**मानी** = अभिमानी
**दुर्योधनः** = दुर्योधन
**रुषा** = रिसले
**क्षिपन्** = (द्वारपालहरूलाई) हप्काउँदै
**न्यविशत्** = प्रवेश गऱ्यो

**वाक्यार्थ–** त्यसै वेला मुकुट र मालाले सजिएको र आफ्ना भाइहरूले घेरिएको अभिमानी दुर्योधन हातमा तरबार लिएर रिसले द्वारपालहरूलाई हप्काउँदै त्यस सभाभित्र पस्यो।

**स्थलेऽभ्यगृह्णाद् वस्त्रान्तं जलं मत्वा स्थलेऽपतत्।**
**जले च स्थलवद् भ्रान्त्या मयमायाविमोहितः॥ ३७॥**

**पदार्थ–**
**मयमायाविमोहितः** = मयदानवको मायाले मोहित भएको दुर्योधन
**स्थले** = सुख्खा ठाउँमा
**जलं** = पानी भएको
**मत्वा** = मानेर
**स्थले** = त्यस्ता ठाउँमा (पानीमा लत्रिएर भिज्ला भनेर)
**वस्त्रान्तं** = कपडाका फेरहरू
**अभ्यगृह्णात्** = उचाल्न लाग्यो र
**जले च** = पानी भएको ठाउँमा चाहिँ
**स्थलवत्** = सुख्खा स्थल हो भन्ने ठानी
**भ्रान्त्या** = भ्रमले (हिँड्दा)
**अपतत्** = लड्यो

**वाक्यार्थ–** मयदावनको मायाले मोहित भएको दुर्योधन पानी नभएको सुख्खा ठाउँमा पानी भएको ठाउँ भन्ठानी लुगा स्याहार्दै हिँड्न लाग्यो भने पानी भएको ठाउँलाई सुख्खा ठाउँ भन्ठानी हिँड्दा ऊ लड्यो।

**जहास भीमस्तं दृष्ट्वा स्त्रियो नृपतयोऽपरे।**
**निवार्यमाणा अप्यङ्ग राज्ञा कृष्णानुमोदिताः॥ ३८॥**

**पदार्थ—**
**अङ्ग** = हे प्रिय परीक्षित्
**तं** = (त्यसरी हिँडिरहेको) त्यो दुर्योधनलाई
**दृष्ट्वा** = देखेर
**कृष्णानुमोदिताः** = भगवान् श्रीकृष्णबाट स्वीकृतिको सङ्केत पाएका कारण
**राज्ञा** = राजा युधिष्ठिरद्वारा
**निवार्यमाणाः अपि** = रोकिँदा-रोकिँदै पनि
**भीमः** = भीमसेन
**जहास** = हाँसे (यस्तै)
**नृपतयः** = राजाहरू
**अपरे** = अन्य
**स्त्रियः** = स्त्रीहरू (पनि हाँसे)

**वाक्यार्थ—** हे परीक्षित् ! दुर्योधनलाई त्यसरी हिँडिरहेको देखेर युधिष्ठिरले रोक्दा-रोक्दै पनि भगवान् श्रीकृष्णबाट स्वीकृतिको सङ्केत पाएका कारण भीमसेन, राजाहरू र अन्य स्त्रीहरू हाँस्न लागे।

**स व्रीडितोऽवाग्वदनो रुषा ज्वलन्निष्क्रम्य तूष्णीं प्रययौ गजाह्वयम्।**
**हाहेति शब्दः सुमहानभूत् सतामजातशत्रुर्विमना इवाभवत्।**
**बभूव तूष्णीं भगवान् भुवो भरं समुज्जिहीर्षुर्भ्रमति स्म यद्दृशा ॥ ३९ ॥**

**पदार्थ—**
**व्रीडितः** = (यसरी) लज्जित भएको
**सः** = त्यो दुर्योधन
**अवाग्वदनः** = उँधोमुख लगाएर
**रुषा** = रिसले
**ज्वलन्** = बल्दै
**तूष्णीं** = चुपचाप
**निष्क्रम्य** = सभाभवनबाट निस्किएर
**गजाह्वयं** = हस्तिनापुरतर्फ
**प्रययौ** = गयो
**सतां** = सज्जनहरूका बिचमा
**हाहा इति** = हाय हाय जस्ता
**सुमहान्** = ठुला-ठुला
**शब्दः** = शब्दहरू
**अभूत्** = गुन्जिन लागे
**अजातशत्रुः** = शत्रुविहीन राजा युधिष्ठिर
**विमनाः इव** = खिन्न जस्ता
**अभवत्** = भए
**भुवः** = पृथिवीको
**भरं** = भार
**समुज्जिहीर्षुः** = हटाउन चाहने
**भगवान्** = भगवान् श्रीकृष्ण
**तूष्णीं** = चुप
**बभूव** = लाग्नुभयो
**यद्दृशा** = जुन भगवान्को हेराइ मात्रले
**भ्रमति स्म** = (दुर्योधन) भ्रमित भएको थियो

**वाक्यार्थ—** यसरी लज्जित भएको दुर्योधन रिसले चुर भएर उँधोमुख लगाएर चुपचाप सभाभवनबाट निस्किएर हस्तिनापुरतिर लाग्यो। (यो घटना देख्दा अनर्थको कल्पनाले) सज्जनहरूका बिचमा हाहाकार मच्चिन लाग्यो। राजा युधिष्ठिरको मन पनि खिन्न भयो। जुन भगवान् श्रीकृष्णको हेराइ मात्रले दुर्योधन भ्रमित भएको थियो पृथिवीको भार हरण गर्न चाहनुहुने उहाँ भगवान् चुप लागेर बस्नुभयो।

**एतत् तेऽभिहितं राजन् यत्पृष्टोऽहमिह त्वया।**
**सुयोधनस्य दौरात्म्यं राजसूये महाक्रतौ ॥ ४० ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**त्वया** = तपाईंद्वारा
**इह** = यहाँ
**राजसूये** = राजसूय
**महाक्रतौ** = महायज्ञमा
**सुयोधनस्य** = दुर्योधन
**दौरात्म्यं** = रिसाउनुको
**यत्** = जुन कारणका बारेमा
**अहं** = म
**पृष्टः** = सोधिएको थिएँ
**एतत्** = यो सबै
**ते** = तपाईंलाई
**अभिहितम्** = बताइयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! राजसूय महायज्ञमा (अरू सबै प्रसन्न भए, तर) दुर्योधन किन प्रसन्न भएन भन्ने कुरा तपाईंले मलाई सोध्नुभएको थियो, त्यो सबै वृत्तान्त मैले बताएँ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**

**दुर्योधनमानभङ्गो नाम पञ्चसप्ततितमोऽध्यायः ॥ ७५ ॥**

# अथ षट्सप्ततितमोऽध्यायः

## शाल्व र यादवहरूबिचको युद्ध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथान्यदपि कृष्णस्य शृणु कर्माद्भुतं नृप।**
**क्रीडानरशरीरस्य यथा सौभपतिर्हतः॥ १॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**अथ** = अब
**क्रीडानरशरीरस्य** = लीला गर्नका निम्ति मनुष्यको शरीर धारण गर्नुभएका
**कृष्णस्य** = भगवान् श्रीकृष्णको
**अन्यत् अपि** = अर्को पनि
**अद्भुतं** = आश्चर्यलाग्दो
**कर्म** = काम
**शृणु** = सुन्नुहोस्
**यथा** = जसरी
**सौभपतिः** = सौभनामक विमानको मालिक (शाल्व)
**हतः** = मारिएको थियो

**वाक्यार्थ–** हे राजा परीक्षित्! अब लीला गर्नका लागि मनुष्यको शरीर धारण गर्नुभएका भगवान् श्रीकृष्णले सौभनामक विमानको मालिक शाल्वलाई कसरी मार्नुभयो भन्ने अर्को आश्चर्यलाग्दो कुरा सुन्नुहोस्।

**शिशुपालसखः शाल्वो रुक्मिण्युद्वाह आगतः।**
**यदुभिर्निर्जितः सङ्ख्ये जरासन्धादयस्तथा॥ २॥**

**पदार्थ–**
**रुक्मिण्युद्वाहे** = रुक्मिणीको विवाहमा
**आगतः** = आएको
**शिशुपालसखः** = शिशुपालको मित्र
**शाल्वः** = शाल्व
**तथा** = तथा
**जरासन्धादयः** = जरासन्ध आदि
**सङ्ख्ये** = युद्धमा
**यदुभिः** = यादवहरूद्वारा
**निर्जितः** = पराजित भएका थिए

**वाक्यार्थ–** रुक्मिणीको विवाहमा आएका शिशुपालका मित्र शाल्व र जरासन्ध आदिलाई यदुवंशीहरूले युद्धमा हराएका थिए।

**शाल्वः प्रतिज्ञामकरोच्छृण्वतां सर्वभूभुजाम्।**
**अयादवीं क्ष्मां करिष्ये पौरुषं मम पश्यत॥ ३॥**

**पदार्थ–**
**सर्वभूभुजां** = (त्यसै वेला) सम्पूर्ण राजाहरूले
**शृण्वतां** = सुन्ने गरी
**शाल्वः** = शाल्वले
**क्ष्मां** = पृथिवीलाई
**अयादवीं** = यादवरहित
**करिष्ये** = बनाउनेछु
**मम** = मेरो

**पौरुषं** = पुरुषार्थ
**पश्यत** = हेर (भनी)
**प्रतिज्ञां** = प्रतिज्ञा
**अकरोत्** = गऱ्यो

**वाक्यार्थ–** त्यसै वेला त्यस शाल्वले सम्पूर्ण राजाहरूलाई सुनाउँदै 'एक दिन म सम्पूर्ण पृथिवीलाई यादवरहित बनाउनेछु, मेरो पुरुषार्थ हेर' भन्दै प्रतिज्ञा गऱ्यो।

**इति मूढः प्रतिज्ञाय देवं पशुपतिं प्रभुम्।**
**आराधयामास नृप पांसुमुष्टिं सकृद् ग्रसन्॥ ४॥**

पदार्थ–
**नृप** = हे राजा परीक्षित्
**मूढः** = मूर्ख शाल्वले
**इति** = यस्तो
**प्रतिज्ञाय** = प्रतिज्ञा गरेर
**सकृत्** = दिनको एकपटक
**पांसुमुष्टिं** = एकमुठी धुलो (खरानी)
**ग्रसन्** = खाँदै
**देवं** = देवाधिदेव
**पशुपतिं** = पशुपतिनाथ
**प्रभुं** = भगवान्लाई
**आराधयामास** = आराधना गर्न लाग्यो

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्यो मूर्ख शाल्वले यसप्रकार प्रतिज्ञा गरेर केवल एक मुठी खरानी खाएर देवाधिदेव भगवान् पशुपतिनाथको आराधना गर्न लाग्यो।

**संवत्सरान्ते भगवानाशुतोष उमापतिः।**
**वरेणच्छन्दयामास शाल्वं शरणमागतम्॥ ५॥**

पदार्थ–
**संवत्सरान्ते** = एक वर्ष बितेपछि
**आशुतोषः** = छिट्टै प्रसन्न हुनुहुने
**भगवान्** = भगवान्
**उमापतिः** = उमापति शङ्करले
**शरणं** = शरणमा
**आगतं** = आएको
**शाल्वं** = शाल्वलाई
**वरेण** = वरद्वारा
**छन्दयामास** = (इच्छा पूर्ण गर्न) भन्नुभयो

**वाक्यार्थ–** शाल्वले एक वर्ष तपस्या गरिसकेपछि पार्वतीपति आशुतोष भगवान् शङ्करले शरणमा परेको शाल्वलाई वर माग्न भन्नुभयो।

**देवासुरमनुष्याणां गन्धर्वोरगरक्षसाम्।**
**अभेद्यं कामगं वव्रे स यानं वृष्णिभीषणम्॥ ६॥**

पदार्थ–
**सः** = त्यस शाल्वले
**देवासुरमनुष्याणां** = देवता, असुर, मनुष्य एवं
**गन्धर्वोरगरक्षसां** = गन्धर्व, सर्प र राक्षसहरूले
**अभेद्यं** = भेदन गर्न नसक्ने
**कामगं** = इच्छा अनुसार उड्ने
**वृष्णिभीषणं** = यदुवंशीहरूका लागि डर लाग्दो
**यानं** = विमान
**वव्रे** = वर माग्यो

**वाक्यार्थ–** त्यस शाल्वले देवता, असुर, मनुष्य, गन्धर्व, नाग र राक्षस आदि कसैद्वारा पनि नष्ट

नहुने र इच्छा अनुसार उड्ने तथा यदुवंशीहरूलाई तर्साउने विमान वरको रूपमा माग्यो।

**तथेति गिरिशादिष्टो मयः परपुरंजयः।**

**पुरं निर्माय शाल्वाय प्रादात् सौभमयस्मयम्॥ ७॥**

**पदार्थ–**
**तथा इति** = त्यस्तै होस् भनिसकेपछि
**गिरिशादिष्टः** = भगवान् शङ्करको आज्ञा पाएको
**परपुरंजयः** = शत्रुको नगरमाथि विजय प्राप्त गर्ने
**मयः** = मय दानवले
**अयस्मयं** = फलामले तयार भएको
**सौभं** = सौभ नामक
**पुरं** = नगरजस्तो (विमान)
**निर्माय** = बनाएर
**शाल्वाय** = शाल्वलाई
**प्रादात्** = दियो

**वाक्यार्थ–** भगवान् शङ्करले त्यस्तै होस् भन्नुभयो र उहाँको आज्ञाले शत्रुहरूको नगरमाथि विजय प्राप्त गर्ने मय दानवले फलामै-फलामको नगर जस्तो सौभनामक विमान निर्माण गरेर शाल्वलाई दियो।

**स लब्ध्वा कामगं यानं तमोधाम दुरासदम्।**

**ययौ द्वारवतीं शाल्वो वैरं वृष्णिकृतं स्मरन्॥ ८॥**

**पदार्थ–**
**सः** = त्यो
**शाल्वः** = शाल्व
**तमोधाम** = अन्धकारमय
**दुरासदं** = दुःखले प्राप्त हुने
**कामगं** = इच्छा अनुसार चल्ने
**यानं** = सौभयान
**लब्ध्वा** = पाएर
**वृष्णिकृतं** = यादवहरूले गरेको
**वैरं** = शत्रुतालाई
**स्मरन्** = सम्झिँदै
**द्वारवतीं** = द्वारका पुरीमा
**ययौ** = गयो

**वाक्यार्थ–** अन्धकारमय भएका कारण सजिलै देख्न नसकिने अनि इच्छा अनुसार चल्ने सौभनामक विमान प्राप्त गरेपछि त्यो शाल्व यादवहरूप्रतिको शत्रुतालाई सम्झिँदै द्वारका पुरीमा गयो।

**निरुध्य सेनया शाल्वो महत्या भरतर्षभ।**

**पुरीं बभञ्जोपवनान्युद्यानानि च सर्वशः॥ ९॥**

**सगोपुराणि द्वाराणि प्रासादाट्टालतोलिकाः।**

**विहारान् स विमानाग्र्यात् निपेतुः शस्त्रवृष्टयः॥ १०॥**

**पदार्थ–**
**भरतर्षभ** = हे राजा परीक्षित्
**सः** = त्यो
**शाल्वः** = शाल्वले
**महत्या** = ठुलो
**सेनया** = सेनाद्वारा
**पुरीं** = द्वारका पुरीलाई
**निरुध्य** = चारैतिरबाट घेरेर
**उपवनानि** = त्यहाँका उपवनहरू

**उद्यानानि** = बगैँचाहरू
**सगोपुराणि** = शहरका द्वारहरू सहित
**द्वाराणि** = घरका द्वारहरू
**प्रासादाट्टालतोलिकाः** = दरबार, अटाली, पर्खाल र
**विहारान् च** = क्रीडास्थल-हरूलाई
**सर्वशः** = सबै तिरबाट
**बभञ्ज** = भत्काउन लाग्यो
**विमानाग्र्यात्** = सौभ विमानको अगाडिको भागबाट (त्यति वेला)
**शस्त्रवृष्टयः** = शस्त्रहरूको वर्षा
**निपेतुः** = हुन लाग्यो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! त्यस शाल्वले द्वारका पुरीलाई आफ्ना सेनाको समूहद्वारा चारैतिरबाट घेऱ्यो र त्यसपछि त्यहाँका उपवन, बगैँचा, शहरका ढोकासहित घरहरूका द्वारहरू, दरबार, अटाली, पर्खाल र क्रीडास्थलहरू भत्काउन लाग्यो। त्यसपछि त्यो सौभ विमानको अगाडिको भागबाट शस्त्रहरूको वर्षा हुन लाग्यो।

**शिला द्रुमाश्चाशनयः सर्पा आसारशर्कराः।**
**प्रचण्डश्चक्रवातोऽभूद् रजसाच्छादिता दिशः॥ ११॥**

**पदार्थ–**
**शिलाः** = ढुङ्गाहरू
**द्रुमाः** = रुखहरू
**अशनयः** = वज्रहरू
**सर्पाः** = सर्पहरू
**आसारशर्कराः च** = असिनाहरू पनि (बर्सन लागे)
**प्रचण्डः** = भयङ्कर
**चक्रवातः** = हुरी-बतास
**अभूत्** = चल्न लाग्यो
**दिशः** = चारै दिशाहरू
**रजसा** = धुलोले
**आच्छादिताः** = ढाकिए

**वाक्यार्थ–** त्यसपछि विमानबाट ढुङ्गा, रुख, वज्र, सर्प र असिनाहरू बर्सन लागे। डरलाग्दो गरी ठुलो हुरी-बतास चल्न लाग्यो अनि चारै दिशाहरू धुलोले ढाकिए।

**इत्यर्द्यमाना सौभेन कृष्णस्य नगरी भृशम्।**
**नाभ्यपद्यत शं राजंस्त्रिपुरेण यथा मही॥ १२॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**यथा** = जसरी
**त्रिपुरेण** = त्रिपुरासुरबाट
**मही** = पृथिवीले (शान्ति पाएकी थिइनन्)
**इति** = त्यसै गरी
**सौभेन** = सौभ विमानद्वारा
**भृशं** = अत्यन्त
**अर्द्यमाना** = सताइएकी
**कृष्णस्य** = भगवान् श्रीकृष्णको
**नगरी** = द्वारका पुरीले
**शं** = सुख
**न अभ्यपद्यत** = पाइनन्

**वाक्यार्थ–** पहिला जसरी त्रिपुरासुरले सताउँदा पृथिवीले शान्ति प्राप्त गरेकी थिइनन् त्यसै गरी (शाल्वप्रयुक्त) सौभ विमानद्वारा सताइएकी भगवान् श्रीकृष्णकी द्वारका पुरीले सुख पाइनन्।

**प्रद्युम्नो भगवान् वीक्ष्य बाध्यमाना निजाः प्रजाः।**
**मा भैष्टेत्यभ्यधाद् वीरो रथारूढो महायशाः॥ १३॥**

**पदार्थ–**

**निजाः** = आफ्ना
**प्रजाः** = प्रजाहरू
**बाध्यमानाः** = पीडित भइरहेका
**वीक्ष्य** = देखेर
**रथारूढः** = रथमा चढेका
**महायशाः** = परम यशस्वी
**वीरः** = वीर
**भगवान्** = भगवान्
**प्रद्युम्नः** = प्रद्युम्नले
**मा भैष्ट इति** = नडराओ
**अभ्यधात्** = भने

**वाक्यार्थ–** आफ्ना प्रजाहरू पीडित भइरहेको देखेर परमयशस्वी वीर भगवान् प्रद्युम्नले रथमा चढेर नडराओ भने।

**सात्यकिश्चारुदेष्णश्च साम्बोऽक्रूरः सहानुजः।**
**हार्दिक्यो भानुविन्दश्च गदश्च शुकसारणौ॥ १४॥**
**अपरे च महेष्वासा रथयूथपयूथपाः।**
**निर्ययुर्दंशिता गुप्ता रथेभाश्वपदातिभिः॥ १५॥**

**पदार्थ–**

**सात्यकिः** = सात्यकि
**चारुदेष्णः** = चारुदेष्ण
**साम्बः** = साम्ब
**सहानुजः** = भाइहरूले सहित
**अक्रूरः** = अक्रूर
**हार्दिक्यः च** = हार्दिक्य र
**भानुविन्दः च** = भानुविन्द
**गदः च** = गद अनि
**शुकसारणौ** = शुक तथा सारण
**अपरे च** = अरू
**दंशिताः** = कवच लगाएका
**रथेभाश्वपदातिभिः** = रथ, हात्ती, घोडा र पैदल सेनाद्वारा
**गुप्ताः** = सुरक्षित भएका
**महेष्वासाः** = ठुला धनुर्धारी
**रथयूथपयूथपाः** = महारथी एवं सेनापतिहरू
**निर्ययुः** = शहरबाहिर निस्किए

**वाक्यार्थ–** उनको पछि-पछि सात्यकि, चारुदेष्ण, साम्ब, भाइहरूले सहित अक्रूर, हार्दिक्य र भानुविन्द, गद, शुक र सारण तथा अरू पनि ठुला धनुर्धारी महारथी एवं सेनापतिहरू शहरबाहिर निस्किए। त्यस वेला कवच लगाएका यी सबैको सुरक्षाका निम्ति रथ, हात्ती, घोडा र पैदल सिपाही सहितको ठुलो सेनासमूह पछि लागेको थियो।

**ततः प्रववृते युद्धं शाल्वानां यदुभिः सह।**
**यथासुराणां विबुधैस्तुमुलं लोमहर्षणम्॥ १६॥**

**पदार्थ–**

**ततः** = त्यसपछि
**यथा** = जसरी
**असुराणां** = दानवहरूको
**विबुधैः** = देवताहरूसँग
**तुमुलं** = घनघोर
**लोमहर्षणं** = रोमाञ्चकारी
**युद्धं** = युद्ध भएको थियो, त्यसै गरी
**शाल्वानां** = शाल्वका सेनाहरूको
**यदुभिः सह** = यादवहरूका साथमा
**प्रववृते** = युद्ध हुन लाग्यो

**वाक्यार्थ–** त्यसपछि जसरी दानवहरूको देवताहरूसँग घनघोर र रोमाञ्चकारी युद्ध भएको

थियो, त्यसै गरी शाल्वका सेनाहरूको यादवहरूका साथ भयङ्कर युद्ध हुन लाग्यो।

**ताश्च सौभपतेर्माया दिव्यास्त्रै रुक्मिणीसुतः।**
**क्षणेन नाशयामास नैशं तम इवोष्णगुः॥ १७॥**

**पदार्थ–**
**उष्णगुः** = सूर्यले
**नैशं** = रात्रिको
**तमः इव** = अन्धकारलाई झैँ
**रुक्मिणीसुतः** = रुक्मिणीका पुत्र प्रद्युम्नले
**क्षणेन** = एकै छिनमा
**सौभपतेः** = सौभपति शाल्वको
**ताः** = ती युद्धसम्बन्धी
**मायाः च** = मायाहरूलाई पनि
**दिव्यास्त्रैः** = दिव्य अस्त्रहरू प्रयोग गरेर
**नाशयामास** = नष्ट गरिदिए

**वाक्यार्थ–** जसरी सूर्यले आफ्ना किरणहरूद्वारा रात्रिको अन्धकारलाई हटाउँछन्, त्यसै गरी रुक्मिणीपुत्र प्रद्युम्नले आफ्ना दिव्य अस्त्रहरूको प्रयोग गरेर एकछिनमै सौभपति शाल्वका मायाहरूलाई नष्ट गरिदिए।

**विव्याध पञ्चविंशत्या स्वर्णपुङ्खैरयोमुखैः।**
**शाल्वस्य ध्वजिनीपालं शरैः सन्नतपर्वभिः॥ १८॥**

**पदार्थ–**
**स्वर्णपुङ्खैः** = सुनका प्वाँख र
**अयोमुखैः** = फलामका टुप्पा भएका
**सन्नतपर्वभिः** = जडान गरिएका ठाउँहरू नदेखिएका
**पञ्चविंशत्या** = पच्चीस ओटा
**शरैः** = बाणहरूले
**शाल्वस्य** = शाल्वको
**ध्वजिनीपालं** = सेनापतिलाई
**विव्याध** = घाइते बनाइदिए

**वाक्यार्थ–** अनि प्रद्युम्नले सुनका प्वाँख र फलामका टुप्पा भएका र जडान गरिएका ठाउँहरू नदेखिएका पच्चीस ओटा बाण प्रहार गरेर शाल्वको सेनापतिलाई घाइते बनाइदिए।

**शतेनाताडयच्छाल्वमेकैकेनास्य सैनिकान्।**
**दशभिर्दशभिर्नेतॄन् वाहनानि त्रिभिस्त्रिभिः॥ १९॥**

**पदार्थ–**
**शाल्वं** = शाल्वलाई
**शतेन** = सय बाणले
**अस्य** = त्यसका
**सैनिकान्** = प्रत्येक सैनिकहरूलाई
**एकैकेन** = एक-एक बाणले
**नेतॄन्** = सारथिहरूलाई
**दशभिः दशभिः** = दश-दश ओटा बाणले र
**वाहनानि** = वाहन (हात्ती, घोडा र रथ)लाई
**त्रिभिःत्रिभिः** = तीन-तीन ओटा बाणले
**अताडयत्** = प्रहार गरे

**वाक्यार्थ–** प्रद्युम्नले शाल्वलाई सय बाणले, उसका प्रत्येक सैनिकलाई एक-एक ओटा बाणले, सारथिहरूलाई दश-दश ओटा बाणले र हात्ती, घोडा र रथ आदि वाहनलाई तीन-तीन ओटा बाणले प्रहार गरे।

**तदद्भुतं महत्कर्म प्रद्युम्नस्य महात्मनः।**
**दृष्ट्वा तं पूजयामासुः सर्वे स्वपरसैनिकाः॥ २०॥**

| पदार्थ– | **महत्** = ठुलो | र शत्रुतर्फका सैनिकहरूले |
|---|---|---|
| **महात्मनः** = महापराक्रमी | **कर्म** = कार्यलाई | **तं** = ती प्रद्युम्नको |
| **प्रद्युम्नस्य** = प्रद्युम्नको | **दृष्ट्वा** = देखेर | **पूजयामासुः** = प्रशंसा गर्न लागे |
| **तत्** = त्यो | **सर्वे** = सम्पूर्ण | |
| **अद्भुतं** = आश्चर्यलाग्दो | **स्वपरसैनिकाः** = आफ्ना पट्टिका | |

**वाक्यार्थ–** महापराक्रमी प्रद्युम्नको त्यो आश्चर्यलाग्दो र महान् पराक्रमलाई देखेर आफ्ना र शत्रुतर्फका सैनिकहरूले उनको प्रशंसा गर्न लागे।

**बहुरूपैकरूपं तद् दृश्यते न च दृश्यते।**
**मायामयं मयकृतं दुर्विभाव्यं परैरभूत्॥ २१॥**

| पदार्थ– | **बहुरूपैकरूपं** = कहिले अनेक | देखिँदैनथ्यो (यसरी त्यो) |
|---|---|---|
| **मयकृतं** = मय दानवले बनाएको | रूपमा र कहिले एउटै रूपमा | **परैः** = शत्रु यादवहरूद्वारा |
| **तत्** = त्यो | **दृश्यते च** = देखिन्थ्यो (र फेरि | **दुर्विभाव्यं** = (अहिले कहाँ छ |
| **मायामयं** = मायावी सौभ | कहिले) | भनेर) पत्ता लगाउनै नसकिने |
| विमान | **न दृश्यते** = कतै पनि | **अभूत्** = भयो |

**वाक्यार्थ–** मयदानवले बनाएको त्यो मायावी सौभ विमान कहिले एकरूपमा र कहिले अनेक रूपमा देखिन्थ्यो र कहिले चाहिँ कहीँ पनि देखिँदैनथ्यो। यसले गर्दा शाल्वका शत्रु यादवहरूले अहिले त्यो विमान कहाँ छ भनी पत्ता लगाउन सकेनन्।

**क्वचिद् भूमौ क्वचिद् व्योम्नि गिरिमूर्ध्नि जले क्वचित्।**
**अलातचक्रवद् भ्राम्यत् सौभं तद् दुरवस्थितम्॥ २२॥**

| पदार्थ– | **गिरिमूर्ध्नि** = पहाडका टाकुरामा | **अलातचक्रवत्** = अगुल्टो |
|---|---|---|
| **क्वचित्** = कहिले | र कहिले | घुमाउँदा बनेको चक्र झैँ |
| **भूमौ** = भुइँमा | **जले** = पानीमा | **दुरवस्थितम्** = एक ठाउँमा |
| **क्वचित्** = कहिले | **भ्राम्यत्** = घुमिरहने | बस्दैनथ्यो |
| **व्योम्नि** = आकाशमा | **तत्** = त्यो | |
| **क्वचित्** = कहिले | **सौभं** = सौभ विमान | |

**वाक्यार्थ–** कहिले भुइँमा, कहिले आकाशमा, कहिले पहाडका टाकुरामा र कहिले पानीमा रहने

त्यो शाल्वको सौभ विमान अगुल्टो घुमाउँदा बनेको चक्रमा अगुल्टो एक ठाउँमा नरहे झैँ एक ठाउँमा बस्दैनथ्यो।

**यत्र यत्रोपलक्ष्येत ससौभः सहसैनिकः।**

**शाल्वस्ततस्ततोऽमुञ्चञ्छरान् सात्वतयूथपाः ॥ २३ ॥**

**पदार्थ–**
**ससौभः** = सौभविमानमा सवार भएको र
**सहसैनिकः** = आफ्ना सेनाले सहित भएको
**शाल्वः** = शाल्व
**यत्र यत्र** = जहाँ-जहाँ
**उपलक्ष्येत** = देखिन्थ्यो
**ततस्ततः** = त्यहाँ-त्यहाँ
**सात्वतयूथपाः** = यदुवंशी सेनापतिहरूले
**शरान्** = बाण
**अमुञ्चन्** = छोड्न लागे

**वाक्यार्थ–** सौभविमान र सेनाले सहित भएको त्यो शाल्व जहाँ-जहाँ देखिन्थ्यो त्यहीँ त्यहीँ यदुवंशी सेनापतिहरूले बाण प्रहार गर्न लागे।

**शरैरग्न्यर्कसंस्पर्शैराशीविषदुरासदैः।**

**पीड्यमानपुरानीकः शाल्वोऽमुह्यत् परेरितैः ॥ २४ ॥**

**पदार्थ–**
**अग्न्यर्कसंस्पर्शैः** = आगो र सूर्यको जस्तो ताप भएका
**आशीविषदुरासदैः** = सर्पको विष झैँ असह्य
**परेरितैः** = शत्रु यदुवीरहरूले प्रहार गरेका
**शरैः** = बाणहरूद्वारा
**पीड्यमानपुरानीकः** = विमान र सेना क्षत-विक्षत भएको
**शाल्वः** = शाल्व
**अमुह्यत्** = मूर्च्छा पर्‍यो

**वाक्यार्थ–** यदुवीरहरूद्वारा प्रहार गरिएका आगो र सूर्यको जस्तो उग्र ताप भएका तथा सर्पको विष झैँ असह्य बाणहरू लागेर शाल्वको सौभ विमान र सम्पूर्ण सेना क्षत-विक्षत भए भने स्वयं शाल्व समेत मूर्छा पर्‍यो।

**शाल्वानीकपशस्त्रौघैर्वृष्णिवीरा भृशार्दिताः।**

**न तत्यजू रणं स्वं स्वं लोकद्वयजिगीषवः ॥ २५ ॥**

**पदार्थ–**
**शाल्वानीकपशस्त्रौघैः** = शाल्वका सेनापतिहरूले प्रहार गरेका शस्त्रहरूको वर्षाले
**भृशार्दिताः** = अत्यन्त पीडित भए तापनि
**लोकद्वयजिगीषवः** = यो लोक र परलोक दुबै लोकलाई जित्न चाहने
**वृष्णिवीराः** = यदुवीरहरूले
**स्वं स्वं रणं** = आ-आफ्नो युद्ध
**न तत्यजुः** = छाडेनन्

**वाक्यार्थ–** शाल्वका सेनापतिहरूले प्रहार गरेका शस्त्रहरूको वर्षाले अत्यन्त पीडित भए तापनि यो लोक र परलोक दुबै लोकलाई जित्न चाहने यदुवीरहरूले आ-आफ्नो युद्ध छोडेनन्।

**शाल्वामात्यो द्युमान्नाम प्रद्युम्नं प्राक्प्रपीडितः।**
**आसाद्य गदया मौर्व्या व्याहत्य व्यनदद् बली॥ २६॥**

**पदार्थ–**
**प्राक्प्रपीडितः** = पहिला प्रद्युम्नद्वारा पीडित भएको
**द्युमान् नाम** = द्युमान् नाम गरेको
**बली** = महाबलशाली
**शाल्वामात्यः** = शाल्वको मन्त्रीले
**प्रद्युम्नं** = प्रद्युम्नको
**आसाद्य** = नजिकमा आएर
**मौर्व्या** = फलामले बनेको भयङ्कर
**गदया** = गदाले
**व्याहत्य** = (प्रद्युम्नलाई) प्रहार गरेर
**व्यनदत्** = गर्जना गर्न लाग्यो

**वाक्यार्थ–** पहिला प्रद्युम्नले जसलाई घाइते बनाएका थिए त्यो द्युमान् नाम गरेको महाबलशाली शाल्वको मन्त्रीले नजिकमा आएर प्रद्युम्नलाई फलामले बनेको भयङ्कर गदाले हिर्कायो र ठुलो स्वरमा गर्जना गर्न लाग्यो।

**प्रद्युम्नं गदया शीर्णवक्षःस्थलमरिन्दमम्।**
**अपोवाह रणात् सूतो धर्मविद् दारुकात्मजः॥ २७॥**

**पदार्थ–**
**धर्मवित्** = युद्धको धर्म बुझेका
**दारुकात्मजः** = दारुकका छोरा
**सूतः** = सारथि सूतले
**गदया** = गदाले
**शीर्णवक्षःस्थलं** = छाती फुटेका
**अरिन्दमं** = शत्रुमाथि दमन गर्ने
**प्रद्युम्नं** = प्रद्युम्नलाई
**रणात्** = युद्धस्थलबाट
**अपोवाह** = बाहिर निकाले

**वाक्यार्थ–** शत्रुले प्रहार गरेको गदाले लागेर छाती फुटेका शत्रुमाथि दमन गर्ने प्रद्युम्नलाई युद्धको धर्म बुझेका दारुकपुत्र सूतले झटपट युद्धस्थलबाट बाहिर निकाले।

**लब्धसंज्ञो मुहूर्तेन कार्ष्णिः सारथिमब्रवीत्।**
**अहो असाध्विदं सूत यद् रणान्मेऽपसर्पणम्॥ २८॥**

**पदार्थ–**
**मुहूर्तेन** = दुई घडीपछि
**लब्धसंज्ञः** = मूर्च्छाबाट ब्युँझिएका
**कार्ष्णिः** = कृष्णपुत्र प्रद्युम्नले
**सारथिं** = सारथि सूतलाई
**अब्रवीत्** = भन्न लागे
**अहो सूत** = हे सूत
**मे** = मलाई
**रणात्** = रणभूमिबाट
**अपसर्पणं** = भगाउने
**यत्** = जुन काम (तिमीले गर्‍यौ)
**इदं** = यो
**असाधु** = साह्रै नराम्रो भयो

**वाक्यार्थ–** एक मुहूर्तपछि जब प्रद्युम्नलाई होस आयो तब उनले सारथिलाई भने– हे सूत ! तिमीले मलाई युद्धभूमिबाट भगाउने जुन काम गर्‍यौ, त्यो साह्रै नराम्रो काम गर्‍यौ।

**न यदूनां कुले जातः श्रूयते रणविच्युतः ।**

**विना मत् क्लीबचित्तेन सूतेन प्राप्तकिल्बिषात् ॥ २९ ॥**

**पदार्थ—**
**क्लीबचित्तेन** = मन कमजोर भएको
**सूतेन** = सारथि सूतद्वारा
**प्राप्तकिल्बिषात्** = अपकीर्ति प्राप्त गरेको
**मत् विना** = मलाई छाडेर
**यदूनां** = वीर यादवहरूको
**कुले** = वंशमा
**रणविच्युतः** = युद्ध छोडेर भाग्ने
**जातः** = जन्मिएको
**न श्रूयते** = सुनिएको छैन

**वाक्यार्थ—** मन कमजोर भएको यो सारथिको कारणले मैले अपकीर्ति प्राप्त गरेँ, किनभने मलाई छाडेर वीर यदुकुलमा युद्ध छोडेर भाग्ने कुनै पुरुष जन्मेको कुरो सुनिएको छैन।

**किं नु वक्ष्येऽभिसङ्गम्य पितरौ रामकेशवौ ।**

**युद्धात् सम्यगपक्रान्तः पृष्टस्तत्रात्मनः क्षमम् ॥ ३० ॥**

**पदार्थ—**
**युद्धात्** = युद्धभूमिबाट
**सम्यक्** = राम्रैसँग
**अपक्रान्तः** = भागेको मैले
**रामकेशवौ** = बलराम र श्रीकृष्ण
**पितरौ** = यी दुई पिताहरूको
**अभिसङ्गम्य** = अगाडि पुगेर
**पृष्टः** = उहाँहरूले सोध्दा
**तत्र** = त्यहाँ
**आत्मनः** = आफूलाई
**क्षमं** = सुहाउँदो
**किं नु वक्ष्ये** = के भन्ने होला

**वाक्यार्थ—** युद्धभूमिबाट राम्रैसँग भागेको मैले ठुलाबा बलराम र पिता श्रीकृष्णको अगाडि पुगेपछि उहाँहरूले सोध्दा त्यहाँ मैले आफूसुहाउँदो के भन्ने होला ?

**व्यक्तं मे कथयिष्यन्ति हसन्त्यो भ्रातृजामयः ।**

**क्लैब्यं कथं कथं वीर तवान्यैः कथ्यतां मृधे ॥ ३१ ॥**

**पदार्थ—**
**हसन्त्यः** = उपहास गरिरहेका
**मे** = मेरा
**भ्रातृजामयः** = भाउजूहरूले
**वीर** = हे वीर
**मृधे** = युद्धमा
**अन्यैः** = शत्रुहरूले
**तव** = तिमीलाई
**कथं कथं** = कसरी
**क्लैब्यं** = नपुंसक (बनाए)
**कथ्यतां** = त्यो भन भनेर
**व्यक्तं** = अवश्य नै
**कथयिष्यन्ति** = भन्नेछन्

**वाक्यार्थ—** अवश्य पनि मेरा भाउजूहरूले मलाई जिस्क्याउँदै 'हे वीर ! युद्धमा तिमीलाई शत्रुले कसरी नपुंसक बनाए, त्यो हामीलाई पनि भन' भन्नेछन्।

**सारथिरुवाच** (सारथिले भने)

**धर्मं विजानतायुष्मन् कृतमेतन्मया विभो ।**

**सूतः कृच्छ्रगतं रक्षेद् रथिनं सारथिं रथी ॥ ३२ ॥**

पद्वार्थ–
**आयुष्मन्** = हे चिरञ्जीवी
**धर्मं** = सारथिको धर्म
**विजानता** = जान्नेवाला
**मया** = मद्वारा
**एतत्** = यो काम
**कृतं** = गरिएको हो (किनभने)
**विभो** = हे प्रभु
**सूतः** = सारथिले
**कृच्छ्रगतं** = आपत्तिमा परेको
**रथिनं** = रथीलाई अनि
**रथी** = रथीले
**सारथिं** = सारथिलाई
**रक्षेत्** = रक्षा गर्नुपर्दछ

**वाक्यार्थ–** हे चिरञ्जीवी ! सारथिको धर्म बुझेर नै मैले यो काम गरेको हुँ, किनभने हे प्रभु ! आपत्तिमा परेको वेलामा सारथिले रथीको र रथीले सारथिको रक्षा गर्नुपर्दछ।

**एतद् विदित्वा तु भवान् मयापोवाहितो रणात्।**
**उपसृष्टः परेणेति मूर्च्छितो गदया हतः॥ ३३॥**

पद्वार्थ–
**परेण** = शत्रुद्वारा
**गदया** = गदाले
**हतः** = प्रहार गरिएका र
**मूर्च्छितः** = मूर्च्छित हुनुभएको हजुर
**उपसृष्टः इति** = सङ्कटमा पर्नुभयो भन्ने
**एतत्** = यही सारथिको धर्मलाई
**विदित्वा तु** = बुझेर नै
**मया** = मद्वारा
**भवान्** = हजुर
**रणात्** = युद्धबाट
**अपोवाहितः** = भगाइनुभएको हो

**वाक्यार्थ–** शत्रुको गदाको प्रहारले हजुर मूर्च्छित भई सङ्कटमा पर्नुभएको थियो, त्यस अवस्थामा सारथिको त्यही धर्म बुझेर मैले हजुरलाई युद्धबाट भगाएको हुँ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे**
**उत्तरार्धे शाल्वयुद्धे षट्सप्ततितमोऽध्यायः॥ ७६॥**

# अथ सप्तसप्ततितमोऽध्यायः

## शाल्व वध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**स उपस्पृश्य सलिलं दंशितो धृतकार्मुकः ।**

**नय मां द्युमतः पार्श्वं वीरस्येत्याह सारथिम् ॥ १ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **सः तु** = ती प्रद्युम्नले त | **पार्श्वं** = नजिकमा |
| **सलिलं** = पानी | **सारथिं** = सारथिलाई | **नय** = लैजाऊ |
| **उपस्पृश्य** = आचमन गरेर | **मां** = मलाई | **इति** = यस्तो |
| **दंशितः** = कवच धारण गरी | **वीरस्य** = वीर | **आह** = भने |
| **धृतकार्मुकः** = धनु धारण गरेका | **द्युमतः** = द्युमान्‌को | |

**वाक्यार्थ–** त्यसपछि प्रद्युम्नले जल आचमन गरी कवच र धनु धारण गरे र सारथिसँग मलाई वीर द्युमान्‌को नजिकमा लैजाऊ भने।

**विधमन्तं स्वसैन्यानि द्युमन्तं रुक्मिणीसुतः ।**

**प्रतिहत्य प्रत्यविध्यन्नाराचैरष्टभिः स्मयन् ॥ २ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | सेनाहरूलाई | **स्मयन्** = मुस्कुराउँदै |
| **रुक्मिणीसुतः** = रुक्मिणीका पुत्र | **विधमन्तं** = प्रहार गरिरहको | **अष्टभिः** = आठ ओटा |
| प्रद्युम्नले | **द्युमन्तं** = द्युमान्‌लाई | **नाराचैः** = बाणहरूले |
| **स्वसैन्यानि** = आफ्ना | **प्रतिहत्य** = रोकेर | **प्रत्यविध्यत्** = प्रहार गरे |

**वाक्यार्थ–** आफ्ना सेनालाई धमाधम प्रहार गरिरहेको द्युमान्‌को नजिक पुगेर रुक्मिणीका पुत्र प्रद्युम्नले पहिला त्यसलाई रोकी मुस्कुराउँदै आठ ओटा बाणले प्रहार गरे।

**चतुर्भिश्चतुरो वाहान् सूतमेकेन चाहनत् ।**

**द्वाभ्यां धनुश्च केतुं च शरेणान्येन वै शिरः ॥ ३ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **एकेन** = एउटा बाणले | **धनुः च** = धनुलाई अनि |
| **चतुर्भिः** = चार ओटा बाणले | **सूतं च** = सारथिलाई | **अन्येन वै** = अर्को एक |
| **चतुरः वाहान्** = चार ओटा | **द्वाभ्यां** = दुई ओटा बाणले | **शरेण च** = बाणले |
| घोडालाई | **केतुं** = ध्वजा र | **शिरः** = द्युमान्‌को टाउको |

**अहनत्** = काटिदिए

**वाक्यार्थ–** प्रद्युम्नले चार ओटा बाणले चार ओटा घोडालाई, एउटाले सारथिलाई, दुई ओटाले ध्वजा र धनुलाई तथा अर्को एक बाणले द्युमान्को शिर नै काटिदिए।

**गदसात्यकिसाम्बाद्या जघ्नुः सौभपतेर्बलम्।**
**पेतुः समुद्रे सौभेयाः सर्वे सञ्छिन्नकन्धराः॥ ४॥**

**पदार्थ–**
**गदसात्यकिसाम्बाद्याः** = गद, सात्यकि, साम्ब आदि वीरहरूले
**सौभपतेः** = सौभपति शाल्वका
**बलं** = सेनालाई
**जघ्नुः** = प्रहार गर्न लागे
**सौभेयाः** = सौभ विमानमा बसेका
**सर्वे** = सबै सेनाहरू
**सञ्छिन्नकन्धराः** = टाउको काटिएर
**समुद्रे** = समुद्रमा
**पेतुः** = खस्न लागे

**वाक्यार्थ–** गद, सात्यकि र साम्ब आदि वीरहरूले शाल्वका सेनालाई प्रहार गर्न लागे। त्यसपछि सौभ विमानमा बसेका सबै सेनाहरू टाउको काटिएर समुद्रमा खस्न लागे।

**एवं यदूनां शाल्वानां निघ्नतामितरेतरम्।**
**युद्धं त्रिणवरात्रं तदभूत् तुमुलमुल्बणम्॥ ५॥**

**पदार्थ–**
**एवं** = यसरी
**इतरेतरं** = एकले-अर्कालाई
**निघ्नतां** = प्रहार गरिरहेका
**यदूनां** = यादवहरू र
**शाल्वानां** = शाल्वका सैनिकहरूका बिचमा
**तुमुलं** = घमासान र
**उल्बणं** = भयङ्कर
**तत्** = त्यो
**युद्धं** = युद्ध
**त्रिणवरात्रं** = सत्ताईस रातदिनसम्म
**अभूत्** = चल्यो

**वाक्यार्थ–** यसरी एकले अर्कालाई प्रहार गरिरहेका यदुवंशी र शाल्वका सैनिकहरूका बिचमा सत्ताईस रातदिनसम्म अति घमासान र भयङ्करको युद्ध चल्यो।

**इन्द्रप्रस्थं गतः कृष्ण आहूतो धर्मसूनुना।**
**राजसूयेऽथ निवृत्ते शिशुपाले च संस्थिते॥ ६॥**
**कुरुवृद्धाननुज्ञाप्य मुनींश्च ससुतां पृथाम्।**
**निमित्तान्यतिघोराणि पश्यन् द्वारवतीं ययौ॥ ७॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**धर्मसूनुना** = धर्मपुत्र युधिष्ठिरद्वारा
**आहूतः** = बोलाइनुभएका
**इन्द्रप्रस्थं** = इन्द्रप्रस्थमा

**गतः** = जानुभएका
**कृष्णः** = भगवान् श्रीकृष्ण
**राजसूये** = राजसूय यज्ञ
**निवृत्ते** = समाप्त भएपछि र
**शिशुपाले च** = शिशुपाल पनि
**संस्थिते** = संसारबाट बिदा भइसकेपछि
**अतिघोराणि** = अत्यन्त भयङ्कर
**निमित्तानि** = अपशकुनहरू
**पश्यन्** = देखेर
**ससुतां** = छोराहरूले सहित भएकी
**पृथां** = कुन्तीलाई
**कुरुवृद्धान्** = कुलका मान्यजनहरूलाई
**मुनीन् च** = ऋषिमुनिहरूलाई
**अनुज्ञाप्य** = सोधेर (म जान्छु है भनी सोधेर, आज्ञा लिएर)
**द्वारवतीं** = द्वारकापुरीमा
**ययौ** = फर्किनुभयो

**वाक्यार्थ–** यति वेला धर्मपुत्र युधिष्ठिरले बोलाएर भगवान् श्रीकृष्ण इन्द्रप्रस्थमा जानुभएको थियो। युधिष्ठिरको राजसूय यज्ञ सम्पन्न भएको थियो भने शिशुपालले संसारबाट बिदा लिइसकेको थियो। यसै बिचमा त्यहाँ भयङ्कर अपशकुनहरू देखिन थालेपछि भगवान् श्रीकृष्ण कुलका मान्यजन, ऋषिमुनि, पाण्डवहरू र कुन्तीसँग अनुमति लिएर द्वारकापुरी फर्किनुभयो।

**आह चाहमिहायात आर्यमिश्राभिसङ्गतः।**
**राजन्याश्चैद्यपक्षीया नूनं हन्युः पुरीं मम ॥ ८ ॥**

**पदार्थ–**
**आर्यमिश्राभिसङ्गतः** = पूज्य बलरामले सहित
**अहं** = म
**इह** = यहाँ (इन्द्रप्रस्थमा)
**आयातः** = आएँ
**नूनं** = निश्चय नै
**चैद्यपक्षीयाः** = शिशुपालपक्षका
**राजन्याः** = राजाहरूले
**मम** = मेरो
**पुरीं** = द्वारकापुरीमा
**हन्युः** = आक्रमण गरे होलान् भनी
**आह च** = मनमनै भन्नुभयो

**वाक्यार्थ–** बाटामा फर्किंदै गर्दा भगवान्ले मन-मनै बलरामका साथमा म इन्द्रप्रस्थमा आएपछि पक्कै पनि शिशुपाल पक्षका राजाहरूले मेरो द्वारकापुरीमा आक्रमण गरे होलान् भनी भन्नुभयो।

**वीक्ष्य तत्कदनं स्वानां निरूप्य पुररक्षणम्।**
**सौभं च शाल्वराजं च दारुकं प्राह केशवः ॥ ९ ॥**

**पदार्थ–**
(द्वारका पुगेर)
**स्वानां** = आफन्तहरूको
**तत्कदनं** = त्यस्तो सङ्कटलाई
**सौभं च** = सौभविमान र
**शाल्वराजं च** = शाल्वराजलाई पनि
**वीक्ष्य** = देखेर
**पुररक्षणं** = सहरको रक्षा गर्ने जिम्मा
**निरूप्य** = (दाजु बलरामलाई) सुम्पेर
**केशवः** = श्रीकृष्णले
**दारुकं** = सारथिलाई
**प्राह** = भन्नुभयो

**वाक्यार्थ–** द्वारका पुग्दा भगवान्ले साँच्चै नै आफन्तहरू सङ्कटमा परेको तथा सौभ विमान र शाल्व यहीँ उपस्थित भएको देख्नुभयो र सहरको रक्षा गर्ने जिम्मा दाजु बलरामलाई सुम्पेर उहाँले सारथि दारुकलाई यसो भन्नुभयो।

**रथं प्रापय मे सूत शाल्वस्यान्तिकमाशु वै ।**
**सम्भ्रमस्ते न कर्तव्यो मायावी सौभराडयम् ॥ १० ॥**

**पदार्थ–**
**सूत** = हे सारथि
**मे** = मेरो
**रथं** = रथलाई
**आशु** = छिट्टै
**शाल्वस्य** = शाल्वको
**अन्तिकं** = नजिकमा
**प्रापय** = पुऱ्याऊ
**वै** = निश्चय नै
**अयं** = यो
**सौभराट्** = सौभपति शाल्व
**मायावी** = अत्यन्त मायावी छ
तापनि
**ते** = तिमीले
**सम्भ्रमः** = आत्तिने काम
**न कर्तव्यः** = नगर्नू

**वाक्यार्थ–** हे सारथि ! मेरो रथलाई छिट्टै शाल्वको नजिकमा पुऱ्याऊ। यो शाल्व अत्यन्त मायावी छ तर पनि तिमी कत्ति नआत्तिनू।

**इत्युक्तश्चोदयामास रथमास्थाय दारुकः ।**
**विशन्तं ददृशुः सर्वे स्वे परे चारुणानुजम् ॥ ११ ॥**

**पदार्थ–**
**इति उक्तः** = यसप्रकार भगवान्को आज्ञा पाएका
**दारुकः** = सारथि दारुकले
**रथं** = रथमा
**आस्थाय** = चढेर
**चोदयामास** = (घोडालाई) कुदाउन लागे
**स्वे** = आफ्ना पक्षका र
**परे च** = शत्रुपक्षका
**सर्वे** = सबैले
**अरुणानुजं** = अरुणको भाइ गरुडको झन्डा भएको रथवाला भगवान्लाई
**विशन्तं** = (युद्धभूमिमा) प्रवेश गर्दै गरेको
**ददृशुः** = देखे

**वाक्यार्थ–** यसप्रकार भगवान्को आज्ञा पाएपछि सारथि दारुकले रथमा चढेर घोडाहरूलाई वेगले दौडाउन लागे भने भगवान्का आफ्ना र शाल्वपक्षका सबै सेनाले अरुणका भाइ गरुडको झन्डा भएको रथमा सवार हुनुभएका भगवान् श्रीकृष्ण युद्धभूमिमा प्रवेश गरेको देखे।

**शाल्वश्च कृष्णमालोक्य हतप्रायबलेश्वरः ।**
**प्राहरत् कृष्णसूताय शक्तिं भीमरवां मृधे ॥ १२ ॥**

**पदार्थ–**
**हतप्रायबलेश्वरः** = सिद्धिन लागेका सैनिकहरूको मालिक
**शाल्वः च** = शाल्वले पनि
**मृधे** = युद्धभूमिमा
**कृष्णं** = श्रीकृष्णलाई
**आलोक्य** = देखेर
**कृष्णसूताय** = कृष्णको सारथिलाई
**भीमरवां** = चर्को आवाज गर्ने
**शक्तिं** = शक्ति
**प्राहरत्** = प्रहार गऱ्यो

**वाक्यार्थ–** लगभग सेनाहरू सिद्धिन लागेको शाल्वले भगवान् श्रीकृष्णलाई उपस्थित भएको देख्यो र उहाँको सारथिमाथि चर्को आवाज गर्ने एउटा शक्ति प्रहार गऱ्यो।

**तामापतन्तीं नभसि महोल्कामिव रंहसा।**
**भासयन्तीं दिशः शौरिः सायकैः शतधाच्छिनत्॥ १३॥**

**पदार्थ–**
**रंहसा** = अति वेगले
**नभसि** = आकाशमा
**आपतन्तीं** = आइरहेको
**महोल्कां इव** = प्रचण्ड उल्का जस्तो
**दिशः** = सबै दिशा
**भासयन्तीं** = प्रकाशित गर्ने
**तां** = त्यो शक्तिलाई
**शौरिः** = भगवान् श्रीकृष्णले
**सायकैः** = बाणहरूद्वारा
**शतधा** = सयौँ टुक्रा पारी
**अच्छिनत्** = काटिदिनुभयो

**वाक्यार्थ–** प्रचण्ड उल्का जस्तो सबै दिशा प्रकाशित गर्दै अति वेगले आकाशमार्गबाट सारथितिर आइरहेको त्यो शक्तिलाई भगवान्ले बाण प्रहार गरेर सयौँ टुक्रा पारिदिनुभयो।

**तं च षोडशभिर्विद्ध्वा बाणैः सौभं च खे भ्रमत्।**
**अविध्यच्छरसन्दोहैः खं सूर्य इव रश्मिभिः॥ १४॥**

**पदार्थ–**
**तं च** = त्यस शाल्वलाई पनि
**षोडशभिः** = सोह्र ओटा
**बाणैः** = बाणले
**विद्ध्वा** = प्रहार गरेर
**खे** = आकाशमा
**भ्रमत्** = घुमिरहेको
**सौभं च** = सौभ विमानलाई समेत
**सूर्यः** = सूर्यले
**रश्मिभिः** = आफ्ना किरणहरूद्वारा
**खं इव** = आकाशलाई ढाके झैँ
**शरसन्दोहैः** = बाणको वर्षाले
**अविध्यत्** = ध्वस्त पारिदिनुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान्ले सोह्र ओटा बाणले शाल्वलाई प्रहार गर्नुभयो र आकाशमा उडिरहेको सौभ विमानलाई समेत बाणको वर्षा गरी सूर्यका किरणले आकाश ढाकेर अन्धकारलाई ध्वस्त पारे झैँ ध्वस्त पारिदिनुभयो।

**शाल्वः शौरेस्तु दोः सव्यं सशार्ङ्गं शार्ङ्गधन्वनः।**
**बिभेद न्यपतद्धस्ताच्छार्ङ्गमासीत् तदद्भुतम्॥ १५॥**

**पदार्थ–**
**शाल्वः** = शाल्वले
**शौरेः** = भगवान् श्रीकृष्णको
**सशार्ङ्गं** = शार्ङ्गधनुषले सहित भएको
**सव्यं** = देब्रे
**दोः** = हातमा
**बिभेद** = बाण प्रहार गर्‍यो (त्यस प्रहारले)
**शार्ङ्गधन्वनः तु** = शार्ङ्ग धनुषधारी श्रीकृष्णको चाहिँ
**हस्तात्** = हातबाट
**शार्ङ्गम्** = शार्ङ्ग धनुष
**न्यपतत्** = खस्यो
**तत्** = त्यो
**अद्भुतं** = ज्यादै अनौठो
**आसीत्** = भयो

**वाक्यार्थ–** शाल्वले पनि शार्ङ्गधनुषधारी भगवान् श्रीकृष्णको शार्ङ्गधनुषले सुशोभित देब्रे हातमा बाणको प्रहार गर्‍यो। त्यो प्रहारले उहाँको हातबाट शार्ङ्गधनुष फुस्केर खस्यो, यो ज्यादै अनौठो घटना भयो।

**हाहाकारो महानासीद् भूतानां तत्र पश्यताम्।**
**निनद्य सौभराडुच्चैरिदमाह जनार्दनम्॥ १६॥**

**पदार्थ–**
**तत्र** = त्यो घटना
**पश्यतां** = हेरिरहेका
**भूतानां** = सबै प्राणीहरूका बिचमा
**महान्** = ठुलो
**हाहाकारः** = (यो कसरी भयो भन्ने) हाहाकार
**आसीत्** = हुन लाग्यो (त्यसै वेला)
**सौभराट्** = शाल्वले
**उच्चैः** = ठुलो
**निनद्य** = स्वरमा गर्जना गर्दै
**जनार्दनं** = भगवान् श्रीकृष्णलाई
**इदं** = यस्तो
**आह** = भन्न लाग्यो

**वाक्यार्थ–** त्यहाँ यो अनौठो घटना देख्नेहरू सबैले यो कसरी भयो भन्दै हाहाकार गर्न लागे। त्यसै वेला सौभपति शाल्वले ठुलो स्वरमा गर्जना गर्दै भगवान् श्रीकृष्णलाई यसो भन्न लाग्यो।

**यत् त्वया मूढ नः सख्युर्भ्रातुर्भार्या हृतेक्षताम्।**
**प्रमत्तः स सभामध्ये त्वया व्यापादितः सखा॥ १७॥**

**पदार्थ–**
**मूढ** = हे मूर्ख
**यत्** = जुन
**त्वया** = तँद्वारा
**ईक्षतां** = हेर्दाहेर्दै
**नः** = हाम्रो
**सख्युः** = मित्र र
**भ्रातुः** = भाइ शिशुपालकी
**भार्या** = पत्नी रुक्मिणी
**हृता** = हरण गरिइन् र
**सभामध्ये** = सभाको बिचमा
**प्रमत्तः** = असावधान
**सः सखा** = ती हाम्रा मित्र
**त्वया** = तँद्वारा
**व्यापादितः** = मारिए

**वाक्यार्थ–** हे मूर्ख! तैँले हामी सबैले हेर्दाहेर्दै हाम्रा मित्र एवं भाइ शिशुपालकी पत्नी रुक्मिणीलाई हरण गरिस् र फेरि सभाका बिचमा हाम्रा मित्रलाई झुक्याएर मारिस्।

**तं त्वाद्य निशितैर्बाणैरपराजितमानिनम्।**
**नयाम्यपुनरावृत्तिं यदि तिष्ठेर्ममाग्रतः॥ १८॥**

**पदार्थ–**
**अद्य** = आज
**यदि** = यदि
**मम** = मेरो
**अग्रतः** = अगाडि
**तिष्ठेः** = परिस् भने
**अपराजितमानिनं** = आफूलाई कसैले जित्न नसक्ने भन्ने घमन्डी
**तं** = त्यस्तो
**त्वा तु** = तँलाई चाहिँ
**निशितैः** = तिखा-तिखा
**बाणैः** = बाणहरूद्वारा
**अपुनरावृत्तिं** = फेरि फर्केर नआउने मृत्युलोकमा
**नयामि** = पुऱ्याउनेछु

**वाक्यार्थ–** तँ आफूलाई कसैले जित्न नसक्ने भन्ने सम्झी घमन्ड गरेर हिँडेको छस्, यदि आज तँ

मेरो अगाडि परिस् भने तिखा-तिखा बाण प्रहार गरेर म तँलाई फेरि नफर्किने मृत्युलोकमा पुऱ्याउनेछु।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**वृथा त्वं कत्थसे मन्द न पश्यस्यन्तिकेऽन्तकम्।**

**पौरुषं दर्शयन्ति स्म शूरा न बहुभाषिणः॥ १९॥**

**पदार्थ–**
**मन्द** = हे मूर्ख
**त्वं** = तँ
**वृथा** = व्यर्थमा
**कत्थसे** = बकबक गरिरहेको छस्
**अन्तिके** = नजिकै आएको
**अन्तकं** = मृत्युलाई
**न पश्यसि** = देखेको छैनस्
**शूराः** = वीरहरू
**पौरुषं** = पुरुषार्थ गरेरै
**दर्शयन्ति स्म** = देखाउँछन्
**बहुभाषिणः न** = धेरै बोल्दैनन्

**वाक्यार्थ–** हे मूर्ख ! तँ व्यर्थमा बकबक गरिरहेको छस्, आफ्नो नजिकै आएको मृत्युलाई पनि तैँले देखेको छैनस्। वीरहरू त पुरुषार्थ गरेरै देखाउँछन्, धेरै बोल्दैनन्।

**इत्युक्त्वा भगवाञ्छाल्वं गदया भीमवेगया।**

**तताड जत्रौ संरब्धः स चकम्पे वमन्नसृक्॥ २०॥**

**पदार्थ–**
**इति उक्त्वा** = यति भनेर
**संरब्धः** = अत्यन्त रिसाउनुभएका
**भगवान्** = भगवान् श्रीकृष्णले
**भीमवेगया** = भयङ्कर वेग भएको
**गदया** = गदाले
**शाल्वं** = शाल्वको
**जत्रौ** = काँधको हाडमा
**तताड** = प्रहार गर्नुभयो
**सः** = (त्यसले) त्यो शाल्व
**असृक्** = रगत
**वमन्** = छाद्दै
**चकम्पे** = काम्न लाग्यो

**वाक्यार्थ–** यति भनेर अत्यन्त रिसाउनुभएका भगवान् श्रीकृष्णले भयङ्कर वेग भएको गदाले शाल्वको काँधको हाडमा प्रहार गर्नुभयो। त्यसपछि त्यो शाल्व रगद छाद्दै काम्न लाग्यो।

**गदायां सन्निवृत्तायां शाल्वस्त्वन्तरधीयत।**

**ततो मुहूर्त आगत्य पुरुषः शिरसाच्युतम्॥**

**देवक्या प्रहितोऽस्मीति नत्वा प्राह वचो रुदन्॥ २१॥**

**कृष्ण कृष्ण महाबाहो पिता ते पितृवत्सल।**

**बद्ध्वापनीतः शाल्वेन सौनिकेन यथा पशुः॥ २२॥**

**पदार्थ–**
**गदायां** = (भगवान्ले प्रहार गरेको) गदा

**सन्निवृत्तायां** = फर्किएपछि
**शाल्वः तु** = शाल्व त
**अन्तरधीयत** = अन्तरधान भयो
**ततः** = त्यसपछि
**मुहूर्ते** = दुई घडी बितेपछि
**पुरुषः** = एउटा पुरुष
**आगत्य** = आएर
**शिरसा** = शिर झुकाएर
**अच्युतं** = भगवान्लाई
**नत्वा** = नमस्कार गरेर
**रुदन्** = रुँदै
**देवक्या** = माता देवकीद्वारा
**प्रहितः अस्मि इति** = पठाइएको हुँ (उहाँले भन्नुभएको छ भन्दै)
**वचः** = वचन
**प्राह** = बोल्यो
**पितृवत्सल** = हे पितृवत्सल
**महाबाहो** = हे महाबाहु
**कृष्ण कृष्ण** = हे कृष्ण, हे कृष्ण
**यथा** = जसरी
**सौनिकेन** = कसाईद्वारा
**पशुः** = पशु (बाँधेर लगिन्छ, त्यसै गरी)
**शाल्वेन** = शाल्वद्वारा
**ते** = तिम्रा
**पिता** = पिता
**बद्ध्वा** = बाँधिएर
**अपनीतः** = लगिनुभयो

**वाक्यार्थ–** भगवान्ले प्रहार गरेको गदा फर्किएपछि शाल्व त्यहाँबाट अन्तरधान भयो। यसपछि दुई घडी बितेपछि एउटा पुरुष भगवान्को नजिक आयो र शिर निहुराएर उहाँलाई नमस्कार गऱ्यो र रुँदै-रुँदै भन्न लाग्यो– 'मलाई हजुरकी आमा देवकीले पठाउनुभएको हो, उहाँले भन्नुभएको छ– हे कृष्ण ! हे महाबाहु ! हे पितृवत्सल ! जसरी कसाईले पशुलाई बाँधेर लैजान्छ, त्यसै गरी शाल्वले तिम्रा पितालाई बाँधेर लग्यो।'

**निशम्य विप्रियं कृष्णो मानुषीं प्रकृतिं गतः।**
**विमनस्को घृणी स्नेहाद् बभाषे प्राकृतो यथा ॥ २३ ॥**

**पदार्थ–**
**विप्रियं** = दुःखद समाचार
**निशम्य** = सुनेर
**प्राकृतः यथा** = सामान्य मान्छेले झैं
**स्नेहात्** = (पिताप्रतिको) प्रेमका कारणले
**मानुषीं** = मनुष्यको जस्तो
**प्रकृतिं** = स्वभावमा
**गतः** = पुग्नुभएका
**घृणी** = दयालु
**कृष्णः** = भगवान् श्रीकृष्णले
**विमनस्कः** = अत्यन्त खिन्न हुँदै
**बभाषे** = भन्न लाग्नुभयो

**वाक्यार्थ–** त्यो दुःखद समाचार सुन्दा भगवान् साधारण मान्छे जस्तो बन्नुभयो र पिताप्रतिको स्नेहका कारण अत्यन्त खिन्न भएर भन्न लाग्नुभयो।

**कथं राममसम्भ्रान्तं जित्वाजेयं सुरासुरैः।**
**शाल्वेनाल्पीयसा नीतः पिता मे बलवान् विधिः॥ २४ ॥**

**पदार्थ–**
**सुरासुरैः** = देवता र दानव कोहीद्वारा पनि
**अजेयं** = जित्न नसकिने
**असम्भ्रान्तं** = अत्यन्त सावधान
**रामं** = बलरामलाई
**जित्वा** = जितेर
**अल्पीयसा** = थोरै बल भएको
**शाल्वेन** = शाल्वद्वारा
**मे** = मेरा
**पिता** = पिता
**कथं** = कसरी

**नीतः** = अपहरण गरिनुभयो होला
**विधिः** = साँच्चै नै भाग्य
**बलवान्** = बलशाली (हुँदो रहेछ)

**वाक्यार्थ–** साँच्चै नै भाग्य अति बलवान् हुँदो रहेछ, नत्र देवता र दानव कसैले पनि जित्न नसक्ने दाजु बलरामलाई जितेर कम बल भएको त्यस शाल्वले कसरी मेरा पितालाई अपहरण गर्न सक्थ्यो होला र ?

**इति ब्रुवाणे गोविन्दे सौभराट् प्रत्युपस्थितः।**
**वसुदेवमिवानीय कृष्णं चेदमुवाच सः॥ २५॥**

**पदार्थ–**
**गोविन्दे** = भगवान्ले
**इति** = यस्तो
**ब्रुवाणे** = भनिरहँदा
**सः** = त्यो
**सौभराट्** = शाल्वले
**वसुदेवम् इव** = वसुदेवजस्तै पुरुषलाई
**आनीय** = लिएर
**प्रत्युपस्थितः** = (त्यहीँ) उपस्थित भयो र
**कृष्णं च** = श्रीकृष्णलाई पनि
**इदं** = यसो
**उवाच** = भन्न लाग्यो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले यसो भनिरहँदा त्यो शाल्व वसुदेव जस्तै एउटा पुरुषलाई लिएर त्यहीँ उपस्थित भयो र श्रीकृष्णलाई यसो भन्न लाग्यो।

**एष ते जनिता तातो यदर्थमिह जीवसि।**
**वधिष्ये वीक्षतस्तेऽमुमीशश्चेत् पाहि बालिश॥ २६॥**

**पदार्थ–**
**एषः** = यो
**ते** = तँलाई
**जनिता** = जन्माउने
**तातः** = बाबु हो
**यदर्थम्** = जसका निम्ति
**इह** = यहाँ
**जीवसि** = तँ बाँचेको छस्
**अमुम्** = यसलाई
**ते** = तैँले
**वीक्षतः** = हेर्दाहेर्दै
**वधिष्ये** = मार्नेछु
**बालिश** = हे मूर्ख
**चेत्** = यदि
**ईशः** = तँ शक्तिसम्पन्न छस् भने
**पाहि** = (यसको) रक्षा गर्

**वाक्यार्थ–** यो तँलाई जन्माउने तेरो बाबु हो, यसैका निम्ति तँ संसारमा बाँचिरहेको छस्, तेरै अगाडि यसलाई मैले मार्नेछु। हे मूर्ख ! यदि तँ शक्तिसम्पन्न छस् भने यसको रक्षा गर्।

**एवं निर्भर्त्स्य मायावी खड्गेनानकदुन्दुभेः।**
**उत्कृत्य शिर आदाय खस्थं सौभं समाविशत्॥ २७॥**

**पदार्थ–**
**मायावी** = मायावी शाल्वले
**एवं** = यसप्रकार
**निर्भर्त्स्य** = (भगवान्लाई) धम्की दिएर
**आनकदुन्दुभेः** = वसुदेवको

**शिरः** = टाउको
**खड्गेन** = तरबारले
**उत्कृत्य** = काटेर
**आदाय** = त्यसलाई लिएर
**खस्थं** = आकाशमा रहेको
**सौभं** = सौभ विमानमा
**समाविशत्** = प्रवेश गऱ्यो

**वाक्यार्थ–** यसप्रकार मायावी शाल्वले भगवान्‌लाई धम्की दिएर तरबारले वसुदेवको टाउको काट्यो र त्यसलाई लिएर आकाशमा रहेको सौभ विमानमा प्रवेश गऱ्यो।

**ततो मुहूर्तं प्रकृतावुपप्लुतः स्वबोध आस्ते स्वजनानुषङ्गतः।**
**महानुभावस्तदबुध्यदासुरीं मायां स शाल्वप्रसृतां मयोदिताम्॥ २८॥**

**पदार्थ–**
**स्वजनानुषङ्गतः** = आफन्तप्रतिको आसक्तिका कारण
**मुहूर्तं** = दुई घडीसम्म
**प्रकृतौ** = शोकमा
**उपप्लुतः** = डुबेर
**आस्ते** = स्थित हुनुभयो
**ततः** = त्यसपछि
**स्वबोधः** = आफ्नो ज्ञानस्वरूपमा रहनुभएका
**महानुभावः** = महापुरुष
**सः** = ती भगवान् श्रीकृष्णले
**तत्** = त्यो सबै
**मयोदितां** = मयद्वारा बताइएको
**शाल्वप्रसृतां** = शाल्वले फैलाएको
**आसुरीं** = राक्षसी
**मायां** = मायाजाल हो भन्ने
**अबुध्यत्** = बुझ्नुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्ण पिता वसुदेवप्रतिको आसक्तिका कारण दुई घडीसम्म शोकमा डुब्नुभयो र त्यसपछि आफ्नो ज्ञानस्वरूपमा रहनुभएका महापुरुष भगवान् श्रीकृष्णले यो मयदानवको उपदेश अनुसार शाल्वले फैलाएको मायाजाल हो भन्ने बुझ्नुभयो।

**न तत्र दूतं न पितुः कलेवरं प्रबुद्ध आजौ समपश्यदच्युतः।**
**स्वाप्नं यथा चाम्बरचारिणं रिपुं सौभस्थमालोक्य निहन्तुमुद्यतः॥ २९॥**

**पदार्थ–**
**प्रबुद्धः** = वास्तविकतालाई बुझ्नुभएका
**अच्युतः** = अच्युत श्रीकृष्णले
**स्वाप्नं** = सपनामा देखिएका वस्तुहरू
**यथा** = झैं (ब्युँझिदा नदेखे जसरी)
**तत्र आजौ** = त्यस युद्धस्थलमा
**दूतं** = दूतलाई
**न समपश्यत्** = देख्नुभएन
**पितुः** = पिताको
**कलेवरं च** = शरीरलाई पनि
**न** = देख्नुभएन (बरु)
**अम्बरचारिणं** = आकाशमा डुल्ने
**सौभस्थं** = सौभविमानमा बसेको
**रिपुं** = शत्रु शाल्वलाई
**आलोक्य** = देखेर
**निहन्तुं** = मार्न
**उद्यतः** = तयार हुनुभयो

**वाक्यार्थ–** यसप्रकार वास्तविकतालाई बुझ्नुभएका श्रीकृष्णले ब्युँझिदा सपनामा देखिएका वस्तुहरू नदेखे झैं त्यस युद्धस्थलमा न त दूतलाई देख्नुभयो, न त पिताको शरीरलाई नै। बरु सौभविमानमा चढेर आकाशमा घुमिरहेको शत्रु शाल्वलाई देखेर उहाँ त्यसलाई मार्न तयार हुनुभयो।

**एवं वदन्ति राजर्षे ऋषयः के च नान्विताः ।**

**यत् स्ववाचो विरुध्येत नूनं ते न स्मरन्त्युत ॥ ३० ॥**

**पदार्थ–**
**राजर्षे** = हे राजा परीक्षित्
**न अन्विताः** = पूर्व र परको विचार नगर्ने
**के च** = कुनै कुनै
**ऋषयः** = ऋषिहरूले
**एवं** = यस्तो
**वदन्ति** = भन्दछन्
**उत** = तर
**ते** = तिनीहरूले
**नूनं** = निश्चय नै
**न स्मरन्ति** = यो कुरामा ख्याल गर्दैनन्
**यत्** = जुन
**स्ववाचः** = आफ्नो कथनको
**विरुध्येत** = विरुद्ध हुन्छ

**वाक्यार्थ–** हे राजा परीक्षित् ! पूर्व र परको विचार नगर्ने कुनै-कुनै ऋषिहरूले यस्तो भन्दछन्, तर तिनीहरूले यस कुरामा ख्याल गरेका छैनन्। (भगवान्‌का सम्बन्धमा यो कुरा भन्न मिल्दैन) विचारै नगरी भनिएको यो कुरा उहाँकै वचनको विरुद्ध हुन्छ।

**क्व शोकमोहौ स्नेहो वा भयं वा येऽज्ञसम्भवाः ।**

**क्व चाखण्डितविज्ञानज्ञानैश्वर्यस्त्वखण्डितः ॥ ३१ ॥**

**पदार्थ–**
**अज्ञसम्भवाः** = अज्ञानी मनुष्यमा हुने
**ये** = जे-जति
**शोकमोहौ** = शोक, मोह
**स्नेहः वा** = अथवा आसक्ति
**भयं वा** = अथवा डर
**क्व** = कहाँ
**अखण्डितविज्ञानज्ञानैश्वर्यः** = अखण्ड ज्ञान, विज्ञान र ऐश्वर्यले परिपूर्ण
**अखण्डितः तु** = अखण्डित (पूर्ण) ब्रह्मस्वरूप भगवान् श्रीकृष्ण
**क्व च** = कहाँ

**वाक्यार्थ–** अज्ञानीहरूमा रहने शोक, मोह, आसक्ति र डर कहाँ ? कहिल्यै पनि खण्डित नहुने अखण्ड ज्ञान, विज्ञान र ऐश्वर्यले परिपूर्ण भगवान् श्रीकृष्ण कहाँ ?

**यत्पादसेवोर्जितयात्मविद्यया हिन्वन्त्यनाद्यात्मविपर्ययग्रहम् ।**

**लभन्त आत्मीयमनन्तमैश्वरं कुतो नु मोहः परमस्य सद्गतेः ॥ ३२ ॥**

**पदार्थ–**
**यत्पादसेवोर्जितया** = जसका चरणकमलको सेवा गर्नाले प्राप्त भएको
**आत्मविद्यया** = आत्मविद्याद्वारा (ठुला-ठुला ऋषिमुनिहरू)
**अनादि** = परापूर्व कालदेखि चल्दै आएको
**आत्मविपर्ययग्रहं** = अनात्म शरीर आदि भावलाई
**हिन्वन्ति** = नष्ट गर्दछन् र
**आत्मीयं** = आफ्नो वास्तविक
**अनन्तं**= व्यापक
**ऐश्वरं** = ऐश्वर्यलाई
**लभन्ते** = प्राप्त गर्दछन् (त्यस्ता)
**सद्गतेः** = सज्जनहरूको मात्र गति भएका
**परमस्य** = परम पुरुषलाई
**मोहः** = मोह
**कुतः नु** = कहाँ हुनु

**वाक्यार्थ–** जसका चरणकमलको सेवा गर्नाले प्राप्त भएको आत्मविद्याद्वारा ठुला-ठुला ऋषिमुनिहरू परापूर्व कालदेखि चल्दै आएको अनात्म शरीर आदि भावलाई नाश गरेर आत्मज्ञानरूपी अनन्त ऐश्वर्य प्राप्त गर्दछन्, त्यस्ता सज्जनहरूका एक मात्र गति हुनुभएका भगवान् श्रीकृष्णलाई कहाँ मोह हुनु ?

**तं शस्त्रपूगैः प्रहरन्तमोजसा**
**शाल्वं शरैः शौरिरमोघविक्रमः ।**
**विद्ध्वाच्छिनद् वर्म धनुः शिरोमणिं**
**सौभं च शत्रोर्गदया रुरोज ह ॥ ३३ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अमोघविक्रमः** = अमोघ शक्तिसम्पन्न | गरिरहेको | **शिरोमणिं** = मुकुटलाई |
| **शौरिः** = भगवान् श्रीकृष्णले | **तं** = त्यो | **अच्छिनत्** = टुक्रा-टुक्रा पारिदिनुभयो |
| **ओजसा** = वेगले | **शाल्वं** = शाल्वलाई | **शत्रोः** = शत्रु शाल्वको |
| **शस्त्रपूगैः** = शस्त्रको समूहद्वारा | **शरैः** = बाणहरूले | **सौभं च** = सौभ विमानलाई पनि |
| **प्रहरन्तं** = आफूमाथि प्रहार | **विद्ध्वा** = प्रहार गरेर | **गदया** = गदाले |
| | **वर्म** = त्यसको कवच | **रुरोज ह** = नष्ट गरिदिनुभयो |
| | **धनुः** = धनुष र | |

**वाक्यार्थ–** त्यसपछि अमोघ शक्ति भएका भगवान् श्रीकृष्णले जोडतोडका साथ शस्त्रको वर्षा गर्दै आफूमाथि प्रहार गरिरहेको शाल्वलाई बाण प्रहार गरी घाइते बनाउनुभयो र त्यसका कवच, धनुष एवं मुकुटलाई टुक्रा-टुक्रा पारिदिनुभयो, अनि सौभ विमानलाई गदाले हिर्काएर नष्ट गरिदिनुभयो।

**तत् कृष्णहस्तेरितया विचूर्णितं**
**पपात तोये गदया सहस्रधा ।**
**विसृज्य तद्भूतलमास्थितो गदा-**
**मुद्यम्य शाल्वोऽच्युतमभ्यगाद् द्रुतम् ॥ ३४ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **कृष्णहस्तेरितया** = श्रीकृष्णका हातद्वारा चलाइएको | **विचूर्णितं** = टुक्रिएको | **विसृज्य** = छोडेर |
| **गदया** = गदाको प्रहारले | **तत्** = त्यो सौभविमान | **भूतलं** = जमिनमा |
| **सहस्रधा** = हजारौँ टुक्रामा | **तोये** = पानीमा | **आस्थितः** = आएको |
| | **पपात** = खस्यो | **शाल्वः** = शाल्वले |
| | **तत्** = त्यसलाई | **गदां** = गदा |

**उद्यम्य** = उठाएर
**द्रुतं** = वेगले
**अच्युतं** = भगवान् श्रीकृष्णतिर
**अभ्यगात्** = दौडियो

**वाक्यार्थ–** भगवान्ले प्रहार गरेको गदाद्वारा हजारौँ टुक्रा बनेको शाल्वको सौभविमान पानीमा खस्यो। त्यसपछि त्यो शाल्व विमान छाडी जमिनमा ओर्लियो र गदा उठाएर वेगले भगवान् श्रीकृष्ण भएतिर दौडियो।

**आधावतः सगदं तस्य बाहुं भल्लेन छित्त्वाथ रथाङ्गमद्भुतम्।**
**वधाय शाल्वस्य लयार्कसन्निभं बिभ्रद् बभौ सार्क इवोदयाचलः॥ ३५॥**

**पदार्थ–**
**आधावतः** = आफूतिर दौडिँदै आइरहेको
**तस्य** = त्यो शाल्वको
**सगदं** = गदासहितको
**बाहुं** = हातलाई
**भल्लेन** = भालाले
**छित्त्वा** = छिनालेर
**अथ** = त्यसपछि
**शाल्वस्य** = शाल्वको
**वधाय** = वधका निम्ति
**अद्भुतं** = अनौठो
**लयार्कसन्निभं** = प्रलयकालीन सूर्यजस्तो
**रथाङ्गं** = सुदर्शनचक्र
**बिभ्रत्** = धारण गर्नुभएका भगवान् श्रीकृष्ण
**सार्कः** = सूर्यले सहित भएको
**उदयाचलः इव** = उदयाचल पर्वत झैँ
**बभौ** = सुशोभित हुनुभयो

**वाक्यार्थ–** भगवान्ले पहिला आफूतिर दौडिँदै आइरहेको शाल्वको गदा समाएको हातलाई भालाले काटिदिनुभयो र त्यसपछि त्यसलाई मार्नका निम्ति ज्यादै अनौठो र प्रलयकालीन सूर्यजस्तो सुदर्शन चक्र धारण गर्नुभयो। त्यस वेला भगवान् सूर्यले सहित भएको उदयाचल पर्वत झैँ अति शोभायमान देखिनुभयो।

**जहार तेनैव शिरः सकुण्डलं किरीटयुक्तं पुरुमायिनो हरिः।**
**वज्रेण वृत्रस्य यथा पुरन्दरो बभूव हाहेति वचस्तदा नृणाम्॥ ३६॥**

**पदार्थ–**
**यथा** = जसरी (पहिला)
**पुरन्दरः** = इन्द्रले
**वृत्रस्य** = वृत्रासुरको शिर
**वज्रेण** = वज्रद्वारा (काटिदिएका थिए, त्यसै गरी)
**हरिः** = भगवान् श्रीकृष्णले
**तेन एव** = त्यही सुदर्शन चक्रले
**पुरुमायिनः** = मायावी शाल्वको
**सकुण्डलं** = कुण्डलसहित
**किरीटयुक्तं** = मुकुट लगाएको
**शिरः** = टाउको
**जहार** = काटिदिनुभयो
**तदा** = त्यति वेला (त्यहाँ)
**नृणां** = शाल्वपक्षका सेनाहरूको
**हाहा इति** = हाहाकार
**वचः** = शब्द
**बभूव** = भयो

**वाक्यार्थ–** जसरी पहिला देवराज इन्द्रले वज्र प्रहार गरेर वृत्रासुरको टाउको काटिदिएका थिए, त्यसै गरी भगवान् श्रीकृष्णले सुदर्शन चक्र प्रहार गरेर कुण्डल र मुकुटले सजिएको शाल्वको टाउको काटिदिनुभयो। त्यो देखेर शाल्वपक्षका सेनाहरूले ठुलो हाहाकार गर्न लागे।

**तस्मिन् निपतिते पापे सौभे च गदया हते ।**
**नेदुर्दुन्दुभयो राजन् दिवि देवगणेरिताः ॥**
**सखीनामपचितिं कुर्वन् दन्तवक्त्रो रुषाभ्यगात् ॥ ३७ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**तस्मिन्** = त्यो
**पापे** = पापी शाल्व
**निपतिते** = मारिएपछि र
**सौभे च** = सौभ विमान पनि
**गदया** = गदाद्वारा
**हते** = ध्वस्त भएपछि
**दिवि** = आकाशमा
**देवगणेरिताः** = देवताहरूले बजाएका
**दुन्दुभयः** = दुन्दुभि आदि बाजाहरू
**नेदुः** = बज्न लागे
**सखीनां** = शाल्व आदि मित्रहरूको (वधको)
**अपचितिं** = बदला
**कुर्वन्** = लिनका निम्ति
**दन्तवक्त्रः** = दन्तवक्त्र
**रुषा** = रिसाएर
**अभ्यगात्** = त्यहीँ आइपुग्यो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! यसरी पापी शाल्व मारिएपछि र गदाको प्रहारले उसको सौभ विमान ध्वस्त भएपछि आकाशमा देवताहरूद्वारा बजाइएका दुन्दुभि आदि बाजाहरू बज्न लागे। त्यसै वेला आफ्ना मित्रहरूको वधको बदला लिनका निम्ति दन्तवक्त्र रिसाउँदै त्यहीँ आइपुग्यो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**
**सौभवधो नाम सप्तसप्ततितमोऽध्यायः ॥ ७७ ॥**

# अथाष्टसप्ततितमोऽध्यायः

## दन्तवक्त्र र विदूरथको वध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**शिशुपालस्य शाल्वस्य पौण्ड्रकस्यापि दुर्मतिः।**

**परलोकगतानां च कुर्वन् पारोक्ष्यसौहृदम्॥ १॥**

**एकः पदातिः सङ्क्रुद्धो गदापाणिः प्रकम्पयन्।**

**पद्भ्यामिमां महाराज महासत्त्वो व्यदृश्यत॥ २॥**

**पदार्थ–**
**महाराज** = हे राजा परीक्षित्
**परलोकगतानां** = मरिसकेका
**शिशुपालस्य** = शिशुपालको
**शाल्वस्य च** = शाल्वको र
**पौण्ड्रकस्य अपि** = पौण्ड्रकसँगको पनि
**पारोक्ष्यसौहृदं** = पहिलाको मित्रतालाई
**कुर्वन्** = पूरा गर्न
**एकः** = एक्लै
**पदातिः** = पैदल
**सङ्क्रुद्धः** = अत्यन्त रिसाएर
**गदापाणिः** = हातमा गदा लिएको
**पद्भ्याम्** = पैतालाले हानेर
**इमां** = यो पृथिवीलाई नै
**प्रकम्पयन्** = हल्लाउँदै आइरहेको
**दुर्मतिः** = खराब बुद्धि भएको
**महासत्त्वः** = महाशक्तिशाली दन्तवक्त्र
**व्यदृश्यत** = देखा पऱ्यो

**वाक्यार्थ–** हे राजा परीक्षित्! मरिसकेका शिशुपाल, शाल्व र पौण्ड्रक आदि मित्रहरूको पहिलाको मित्रऋण चुक्ता गर्न भनी महाशक्तिशाली दुर्मति दन्तवक्त्र रिसले चुर भएर हातमा गदा लिई एक्लै पैदल नै खुट्टाको प्रहारले पृथिवीलाई नै हल्लाउँदै आइरहेको देखियो।

**तं तथायान्तमालोक्य गदामादाय सत्वरः।**

**अवप्लुत्य रथात् कृष्णः सिन्धुं वेलेव प्रत्यधात्॥ ३॥**

**पदार्थ–**
**तथा** = त्यसरी
**आयान्तं** = आइरहेको
**तं** = त्यो दन्तवक्त्रलाई
**आलोक्य** = देखेर
**कृष्णः** = भगवान् श्रीकृष्णले
**गदां** = गदा
**आदाय** = लिएर
**सत्वरः** = झटपट
**रथात्** = रथबाट
**अवप्लुत्य** = ओर्लिएर
**वेला** = किनाराले
**सिन्धुं इव** = समुद्रलाई झैँ
**प्रत्यधात्** = त्यसलाई रोकिदिनुभयो

**वाक्यार्थ–** दन्तवक्त्र त्यसरी रिसाएर आफूतिर आइरहेको देखेर भगवान् श्रीकृष्ण हातमा गदा लिई तत्काल रथबाट ओर्लिनुभयो र किनाराले समुद्रलाई रोके झैँ उहाँले त्यसलाई रोकिदिनुभयो।

**गदामुद्यम्य कारूषो मुकुन्दं प्राह दुर्मदः।**

**दिष्ट्या दिष्ट्या भवानद्य मम दृष्टिपथं गतः॥ ४॥**

**पदार्थ—**
**दुर्मदः** = घमन्डले मातेको
**कारूषः** = दन्तवक्त्रले
**गदां** = गदा
**उद्यम्य** = उठाएर
**मुकुन्दं** = श्रीकृष्णलाई
**प्राह** = भन्न लाग्यो
**दिष्ट्या दिष्ट्या** = भाग्यले गर्दा
**अद्य** = आज
**भवान्** = तँ
**मम** = मेरो
**दृष्टिपथं** = दृष्टिगोचर
**गतः** = भएको छस्

**वाक्यार्थ—** घमन्डले मातेको दन्तवक्त्रले गदा उठाएर भगवान् श्रीकृष्णलाई भन्न लाग्यो— भाग्यले गर्दा आज तँ मेरो आँखाको सामने आएको छस्।

**त्वं मातुलेयो नः कृष्ण मित्रध्रुङ् मां जिघांससि।**

**अतस्त्वां गदया मन्द हनिष्ये वज्रकल्पया॥ ५॥**

**पदार्थ—**
**कृष्ण** = हे कृष्ण
**नः** = हाम्रा
**मातुलेयः** = मामाको छोरो होस्
**मित्रध्रुक्** = मित्र शिशुपाल आदिलाई मार्ने
**त्वं** = तँ
**मां** = मलाई
**जिघांससि** = मार्न चाहन्छस्
**अतः** = त्यसकारण
**मन्द** = हे मूर्ख
**त्वां** = तँलाई म
**वज्रकल्पया** = वज्रजस्तो
**गदया** = गदाले
**हनिष्ये** = मार्नेछु

**वाक्यार्थ—** हे कृष्ण ! तँ मेरो मामाको छोरो होस् (तसर्थ तँलाई मैले मार्न त नहुने हो, तर), तैंले मेरा मित्र शिशुपाल आदिलाई मारिदिइस् र मलाई समेत मार्न खोजिरहेको छस्। अतः आज म तँलाई वज्रजस्तो कठोर गदाले हानेर मार्नेछु।

**तर्ह्यानृण्यमुपैम्यज्ञ मित्राणां मित्रवत्सलः।**

**बन्धुरूपमरिं हत्वा व्याधिं देहचरं यथा॥ ६॥**

**पदार्थ—**
**अज्ञ** = हे मूर्ख
**तर्हि** = त्यसैले
**मित्रवत्सलः** = मित्रहरूको प्रेमी म
**देहचरं** = शरीरमा लागेको
**व्याधिं** = रोगलाई
**यथा** = जस्तै गरी
**बन्धुरूपं** = भाइबन्धुरूप
**अरिं** = शत्रु तँलाई
**हत्वा** = मारेर
**मित्राणां** = मित्रहरूको
**आनृण्यं** = ऋणमुक्तिको अवस्थामा
**उपैमि** = प्राप्त हुनेछु

**वाक्यार्थ—** हे मूर्ख ! आफन्त भए तापनि आफ्नै शरीरबाट उत्पन्न भएको रोगसमान तँ मेरो शत्रु होस्। त्यसैले अब तँलाई मारेर मित्रहरूलाई अति प्रेम गर्ने म मित्रऋणबाट मुक्त हुन्छु।

**एवं रूक्षैस्तुदन् वाक्यैः कृष्णं तोत्रैरिव द्विपम्।**
**गदयाताडयन्मूर्ध्नि सिंहवद् व्यनदच्च सः॥ ७॥**

**पदार्थ—**
**सः** = त्यो दन्तवक्त्रले
**तोत्रैः** = अङ्कुशहरूले
**द्विपं इव** = हात्तीलाई (पीडित बनाए) झैँ
**एवं** = यसप्रकारका
**रूक्षैः** = रुखा
**वाक्यैः** = वचनहरूले
**कृष्णं** = श्रीकृष्णलाई
**तुदन्** = पीडित बनाउँदै
**गदया** = गदाले
**मूर्ध्नि** = टाउकोमा
**अताडयत्** = हिर्कायो र
**सिंहवत्** = सिंहले झैँ
**व्यनदत् च** = गर्जना गर्न लाग्यो

**वाक्यार्थ—** त्यसपछि त्यस दन्तवक्त्रले जसरी अङ्कुशले हिर्काएर माहुतेले हात्तीलाई पीडित बनाउँछ, त्यसै गरी अनेक रुखा वचन प्रयोग गरी श्रीकृष्णलाई पीडित बनाउँदै टाउकोमा गदाले प्रहार गऱ्यो र सिंहले झैँ गर्जना गर्न लाग्यो।

**गदयाभिहतोऽप्याजौ न चचाल यदूद्वहः।**
**कृष्णोऽपि तमहन् गुर्व्या कौमोदक्या स्तनान्तरे॥ ८॥**

**पदार्थ—**
**यदूद्वहः** = यदुकुलका संरक्षक
**कृष्णः** = भगवान् श्रीकृष्ण
**आजौ** = युद्धमा
**गदया** = गदाद्वारा
**अभिहतः अपि** = प्रहार गरिए तापनि
**न चचाल** = विचलित हुनुभएन
**गुर्व्या** = ठुलो
**कौमोदक्या** = कौमोदकी गदाले
**तं** = त्यो दन्तवक्त्रलाई
**स्तनान्तरे** = स्तनको बिच (छाती)मा
**अहन्** = हिर्काउनुभयो

**वाक्यार्थ—** यदुकुलका संरक्षक भगवान् श्रीकृष्ण दन्तवक्त्रले हानेको गदाको प्रहारले कत्ति पनि विचलित हुनुभएन, त्यसपछि उहाँले कौमोदकी गदाले त्यसको स्तनको बिच (छाती)मा हिर्काउनुभयो।

**गदानिर्भिन्नहृदय उद्वमन् रुधिरं मुखात्।**
**प्रसार्य केशबाह्वङ्घ्रीन् धरण्यां न्यपतद् व्यसुः॥ ९॥**

**पदार्थ—**
**गदानिर्भिन्नहृदयः** = गदाको प्रहारले छाती फुटेर
**व्यसुः** = प्राण उडेको दन्तवक्त्र
**मुखात्** = मुखबाट
**रुधिरं** = रगत
**उद्वमन्** = छाद्दै
**केशबाह्वङ्घ्रीन्** = कपाल, हात र खुट्टा
**प्रसार्य** = फैलाएर
**धरण्यां** = पृथिवीमा
**न्यपतत्** = लड्यो

**वाक्यार्थ—** गदाको प्रहारले छाती फुटेर प्राण उडेको दन्तवक्त्र मुखबाट रगत छाद्दै हात, खुट्टा र कपाल फैलाउँदै भुइँमा लड्यो।

**ततः सूक्ष्मतरं ज्योतिः कृष्णमाविशदद्भुतम्।**
**पश्यतां सर्वभूतानां यथा चैद्यवधे नृप ॥ १० ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**यथा** = जसरी
**चैद्यवधे** = शिशुपालको वधमा (भएको थियो, त्यसै गरी)
**ततः** = त्यो दन्तवक्त्रको शरीरबाट
**सूक्ष्मतरं** = सानो
**अद्भुतं** = आश्चर्यलाग्दो
**ज्योतिः** = ज्योति (निस्किएर)
**सर्वभूतानां** = सबै प्राणीले
**पश्यतां** = हेर्दाहेर्दै
**कृष्णं** = श्रीकृष्णमा
**आविशत्** = प्रवेश गऱ्यो

**वाक्यार्थ–** त्यसपछि हे राजा परीक्षित्! जसरी शिशुपालको वध भएको थियो, त्यसै गरी दन्तवक्त्रको शरीरबाट एउटा सानो आश्चर्य लाग्दो ज्योति निस्किएर सबैले हेर्दाहेर्दै भगवान् श्रीकृष्णमा प्रवेश गऱ्यो।

**विदूरथस्तु तद्भ्राता भ्रातृशोकपरिप्लुतः।**
**आगच्छदसिचर्माभ्यामुच्छ्वसंस्तज्जिघांसया ॥ ११ ॥**

**पदार्थ–**
**तद्भ्राता** = त्यो दन्तवक्त्रको भाइ
**विदूरथः तु** = विदूरथ चाहिँ
**भ्रातृशोकपरिप्लुतः** = दाजुको मृत्युको शोकले व्याकुल भएर
**उच्छ्वसन्** = लामो-लामो सास फेर्दै
**असिचर्माभ्यां** = तरबार र ढाल लिएर
**तज्जिघांसया** = ती श्रीकृष्णलाई मार्ने इच्छाले
**आगच्छत्** = आयो

**वाक्यार्थ–** यसपछि दन्तवक्त्रको भाइ विदूरथ दाजुको मृत्युको शोकले व्याकुल भएर श्रीकृष्णलाई मार्ने इच्छाले रिसको झोकमा लामो-लामो सास फेर्दै ढाल र तरबार लिएर त्यहीँ आइपुग्यो।

**तस्य चापततः कृष्णश्चक्रेण क्षुरनेमिना।**
**शिरो जहार राजेन्द्र सकिरीटं सकुण्डलम् ॥ १२ ॥**

**पदार्थ–**
**राजेन्द्र** = हे राजा परीक्षित्
**कृष्णः** = श्रीकृष्णले
**आपततः** = दौडेर आइरहेको
**तस्य च** = त्यो विदूरथको पनि
**सकिरीटं** = मुकुट र
**सकुण्डलं** = कुण्डल सहित भएको
**शिरः** = टाउको
**क्षुरनेमिना** = छुराको जस्तो धार भएको
**चक्रेण** = सुदर्शन चक्रले
**जहार** = काटिदिनुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! भगवान् श्रीकृष्णले पनि विदूरथ आफूतिर आइलागेको देखेर छुराको जस्तो धार भएको सुदर्शन चक्र प्रहार गरेर मुकुट र कुण्डलले सजिएको त्यसको टाउको काटिदिनुभयो।

**एवं सौभं च शाल्वं च दन्तवक्त्रं सहानुजम्।**
**हत्वा दुर्विषहानन्यैरीडितः सुरमानवैः॥ १३॥**
**मुनिभिः सिद्धगन्धर्वैर्विद्याधरमहोरगैः।**
**अप्सरोभिः पितृगणैर्यक्षैः किन्नरचारणैः॥ १४॥**
**उपगीयमानविजयः कुसुमैरभिवर्षितः।**
**वृतश्च वृष्णिप्रवरैर्विवेशालङ्कृतां पुरीम्॥ १५॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**अन्यैः** = अरू कोहीद्वारा पनि
**दुर्विषहान्** = जित्न नसकिने
**शाल्वं** = शाल्वलाई
**सहानुजं** = भाइले सहित
**दन्तवक्त्रं च** = दन्तवक्त्रलाई र
**सौभं च** = सौभ विमानलाई
**हत्वा** = नष्ट गरेर
**सुरमानवैः** = देवता र मनुष्यहरूद्वारा
**ईडितः** = पूजित हुनुभएका
**मुनिभिः** = मुनिहरूद्वारा
**सिद्धगन्धर्वैः** = सिद्ध, गन्धर्वद्वारा
**विद्याधरमहोरगैः** = विद्याधर र नागहरूद्वारा
**पितृगणैः** = पितृहरूद्वारा
**अप्सरोभिः** = अप्सराहरूद्वारा
**यक्षैः** = यक्षहरूद्वारा
**किन्नरचारणैः च** = किन्नर, चारणहरूद्वारा पनि
**उपगीयमानविजयः** = विजयको प्रशंसा गरिनुभएका
**कुसुमैः** = पुष्पहरूद्वारा
**अभिवर्षितः** = वृष्टि गरिनुभएका
**वृष्णिप्रवरैः** = यदुवीरहरूद्वारा
**वृतः** = घेरिनुभएका भगवान्
**अलङ्कृतां** = सुसज्जित
**पुरीम्** = द्वारका पुरीमा
**विवेश** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** यसप्रकार अरू कसैले पनि जित्न नसक्ने शाल्व, उसको सौभ विमान, दन्तवक्त्र र उसको भाइ विदूरथ आदि शत्रुहरूलाई समाप्त गरेर भगवान् श्रीकृष्ण आफ्नो सुन्दर द्वारकापुरीमा प्रवेश गर्नुभयो। त्यसवेला देवता र मनुष्यहरू उहाँको स्तुति गर्न लागेका थिए। मुनि, सिद्ध, गन्धर्व, विद्याधर, नाग, पितृ, अप्सरा, यक्ष, किन्नर तथा चारण आदि फूलको वर्षा गर्दै भगवान्को विजयगीत गाउन लागेका थिए भने यदुवीरहरू भगवान्को पछिपछि लागेका थिए।

**एवं योगेश्वरः कृष्णो भगवाञ्जगदीश्वरः।**
**ईयते पशुदृष्टीनां निर्जितो जयतीति सः॥ १६॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**योगेश्वरः** = योगेश्वर
**जगदीश्वरः** = संसारका मालिक
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्ण
**पशुदृष्टीनां** = अज्ञानीहरूको दृष्टिमा
**निर्जितः इति** = जरासन्धद्वारा हराइएजस्ता
**ईयते** = देखिनुहुन्छ
**सः** = (वास्तवमा) उहाँ
**जयति** = विजेता नै हुनुहुन्छ

**वाक्यार्थ–** यसप्रकार योगेश्वर, संसारका मालिक भगवान् श्रीकृष्ण अज्ञानीहरूका दृष्टिमा जरासन्ध आदिद्वारा हराइए जस्ता देखिनुहुन्छ, तर वास्तवमा उहाँ त सधैं विजेता नै हुनुहुन्छ।

**श्रुत्वा युद्धोद्यमं रामः कुरूणां सह पाण्डवैः।**
**तीर्थाभिषेकव्याजेन मध्यस्थः प्रययौ किल ॥ १७ ॥**

**पदार्थ–**
**कुरूणां** = कौरवहरूको
**पाण्डवैः सह** = पाण्डवहरूसँग
**युद्धोद्यमं** = युद्धको तयारी भएको
**श्रुत्वा** = सुनेर
**मध्यस्थः** = कुनै पक्षमा पनि नलाग्नुभएका
**रामः** = बलराम
**तीर्थाभिषेकव्याजेन** = तीर्थस्नान गर्ने बहानाले
**प्रययौ किल** = (द्वारकाबाट) हिँड्नुभयो

**वाक्यार्थ–** कौरवहरूको पाण्डवसँग युद्धको तयारी हुँदैछ भन्ने सुनेर कुनै पक्षमा नलाग्नुभएका बलराम तीर्थस्नान गर्ने वहानाले द्वारकाबाट हिँड्नुभयो।

**स्नात्वा प्रभासे सन्तर्प्य देवर्षिपितृमानवान्।**
**सरस्वतीं प्रतिस्रोतं ययौ ब्राह्मणसंवृतः॥ १८ ॥**

**पदार्थ–**
**प्रभासे** = प्रभास क्षेत्रमा
**स्नात्वा** = स्नान गरेर
**देवर्षिपितृमानवान्** = देवता, ऋषि, पितृ र मनुष्यहरूलाई
**सन्तर्प्य** = खुसी बनाएर
**ब्राह्मणसंवृतः** = बाह्मणहरूले सहित भई
**सरस्वतीं** = सरस्वती नदीको
**प्रतिस्रोतं** = मुहानतिर
**ययौ** = जानुभयो

**वाक्यार्थ–** प्रभासक्षेत्रमा पुगेर बलरामले स्नान गर्नुभयो र देवता, ऋषि, पितृ तथा मनुष्यहरूलाई तृप्त बनाउनुभयो। त्यसपछि ब्राह्मणहरूलाई साथमा लिएर उहाँ सरस्वती नदीको मुहानतिर जानुभयो।

**पृथूदकं बिन्दुसरस्त्रितकूपं सुदर्शनम्।**
**विशालं ब्रह्मतीर्थं च चक्रं प्राचीं सरस्वतीम्॥ १९॥**
**यमुनामनु यान्येव गङ्गामनु च भारत।**
**जगाम नैमिषं यत्र ऋषयः सत्रमासते॥ २० ॥**

**पदार्थ–**
**भारत** = हे भरतवंशी परीक्षित्
**पृथूदकं** = पृथूदक
**बिन्दुसरः** = बिन्दुसर
**त्रितकूपं** = त्रितकूप
**सुदर्शनं** = सुदर्शन
**विशालं** = विशालतीर्थ
**ब्रह्मतीर्थं** = ब्रह्मतीर्थ
**चक्रं** = चक्रतीर्थ र
**प्राचीं** = पूर्ववाहिनी
**सरस्वतीम् च** = सरस्वती आदि (तीर्थमा पनि जानुभयो)

**यमुनां अनु** = यमुनाका किनारमा **गङ्गां अनु च** = गङ्गाका किनारमा पनि रहेका **यानि एव** = जुन-जुन तीर्थ (रहेका थिए, तिनको दर्शन गर्दै) **नैमिषं** = नैमिषारण्य क्षेत्रमा **जगाम** = जानुभयो **यत्र** = जहाँ **ऋषयः** = ऋषिहरूले **सत्रं** = यज्ञ **आसते** = गर्न लागेका थिए

**वाक्यार्थ—** हे परीक्षित् ! त्यसपछि बलराम क्रमशः पृथूदक, बिन्दुसर, त्रितकूप, सुदर्शन, विशाल, ब्रह्मतीर्थ, चक्रतीर्थ र पूर्ववाहिनी सरस्वती आदि तीर्थमा जानुभयो। त्यसपछि उहाँ यमुना र गङ्गाका किनारमा जुन-जुन प्रसिद्ध स्थलहरू थिए, ती सबैको दर्शन गर्दै नैमिषारण्य क्षेत्रमा पुग्नुभयो जहाँ ऋषिहरूले यज्ञ गर्न लागेका थिए।

**तमागतमभिप्रेत्य मुनयो दीर्घसत्रिणः।**
**अभिनन्द्य यथान्यायं प्रणम्योत्थाय चार्चयन्॥ २१॥**

**पदार्थ—**
**तं** = ती बलराम **आगतं** = आइपुग्नुभएको **अभिप्रेत्य** = देखेर **दीर्घसत्रिणः** = लामो यज्ञ गर्न लागेका **मुनयः** = ऋषिहरूले **उत्थाय** = उठेर **अभिनन्द्य** = स्वागत-सत्कार गरी **प्रणम्य** = नमस्कार गरेर **यथान्यायं च** = मर्यादा अनुसार **अर्चयन्** = पूजा पनि गरे

**वाक्यार्थ—** बलराम आइपुग्नुभएको देखेर लामो यज्ञअनुष्ठानमा दीक्षा लिएर बसेका ऋषिहरूले आ-आफ्नो आसनबाट उठेर उहाँको स्वागत-सत्कार गरेर नमस्कार गरिसकेपछि मर्यादापूर्वक पूजा गरे।

**सोऽर्चितः सपरीवारः कृतासनपरिग्रहः।**
**रोमहर्षणमासीनं महर्षेः शिष्यमैक्षत॥ २२॥**

**पदार्थ—**
**सपरीवारः** = ब्राह्मणहरूले सहित **अर्चितः** = पूजित हुनुभएका र **कृतासनपरिग्रहः** = आसनमा बसिसक्नुभएका **सः** = ती बलरामले **महर्षेः** = महर्षि वेदव्यासका **शिष्यं** = शिष्य **रोमहर्षणं** = सूतजीलाई **आसीनं** = (उच्च आसनमा) बसेको **ऐक्षत** = देख्नुभयो

**वाक्यार्थ—** आफ्ना साथमा आएका ब्राह्मणहरूले सहित पूजित भएर आसनग्रहण गरिसकेपछि बलरामले वेदव्यासका शिष्य सूतजीलाई उच्च आसन (व्यासासन)मा बसेको देख्नुभयो।

**अप्रत्युत्थायिनं सूतमकृतप्रह्वणाञ्जलिम्।**
**अध्यासीनं च तान् विप्रांश्चुकोपोद्वीक्ष्य माधवः॥ २३॥**

**पदार्थ—**
**अप्रत्युत्थायिनं** = उठेर स्वागत-सत्कार नगर्ने

**अकृतप्रह्वणाञ्जलिं** = हात जोडेर नमस्कार नगर्ने
**तान्** = ती
**विप्रान्** = ब्राह्मणहरूभन्दा
**अध्यासीनं च** = उच्च आसनमा बसेका
**सूतं** = सूतजीलाई
**उद्वीक्ष्य** = देखेर
**माधवः** = बलराम
**चुकोप** = रिसाउनुभयो

**वाक्यार्थ–**अतिथि आउँदा उठेर स्वागत-सत्कार र नमस्कार नगर्ने तर ब्राह्मणहरूभन्दा उच्च आसनमा बस्ने सूतजीलाई देखेर बलराम रिसाउनुभयो।

**कस्मादसाविमान् विप्रानध्यास्ते प्रतिलोमजः।**
**धर्मपालांस्तथैवास्मान् वधमर्हति दुर्मतिः॥ २४॥**

**पदार्थ–**
**प्रतिलोमजः** = विपरीत जातिमा जन्मिएको
**असौ** = यो (सूत)
**धर्मपालान्** = धर्मको रक्षा गर्ने
**इमान्** = यी
**विप्रान्** = ब्राह्मणहरू र
**तथा एव** = त्यसै गरी
**अस्मान्** = हामीहरूभन्दा
**कस्मात्** = कसरी
**अध्यास्ते** = उच्च आसनमा बसिरहेको छ
**दुर्मतिः** = यो दुर्बुद्धि त
**वधं** = मारिन
**अर्हति** = योग्य छ

**वाक्यार्थ–** (अनि यसो भन्न लाग्नुभयो) प्रतिलोम जातिमा उत्पन्न भएर पनि यो धर्मको रक्षा गर्ने ब्राह्मणहरू र हामीभन्दा उच्च आसनमा कसरी बसिरहेको छ ? यो दुर्बुद्धि त मारिन योग्य छ।

**ऋषेर्भगवतो भूत्वा शिष्योऽधीत्य बहूनि च।**
**सेतिहासपुराणानि धर्मशास्त्राणि सर्वशः॥ २५॥**
**अदान्तस्याविनीतस्य वृथा पण्डितमानिनः।**
**न गुणाय भवन्ति स्म नटस्येवाजितात्मनः॥ २६॥**

**पदार्थ–**
**भगवतः** = भगवान्
**ऋषेः** = ऋषि व्यासजीको
**शिष्यः** = चेलो
**भूत्वा** = भएर
**सेतिहासपुराणानि** = इतिहाससहित पुराणहरू
**सर्वशः** = सम्पूर्ण
**धर्मशास्त्राणि च** = धर्मशास्त्रहरू
**बहूनि** = धेरै
**अधीत्य** = पढेर पनि
**अदान्तस्य** = इन्द्रिय दमन नगरेको
**अविनीतस्य** = उद्दण्ड
**नटस्य इव** = नटको झैं
**अजितात्मनः** = मनलाई वशमा नराखेको
**वृथा** = व्यर्थ
**पण्डितमानिनः** = आफैँलाई विद्वान् ठान्ने यस अभिमानीको (विद्या)
**गुणाय** = हितका निम्ति
**न भवन्ति स्म** = हुँदैन

**वाक्यार्थ–** भगवान् व्यासजीको चेलो भएर अनेक इतिहास, पुराण र धर्मशास्त्रको अध्ययन गरेको भए तापनि यसले अहिलेसम्म इन्द्रियलाई नियन्त्रण गर्न सकेको छैन। अशिष्ट यसले

आफैँलाई ठुलो विद्वान् सम्झिएको छ। जसरी नाटकका सबै क्रियाकलाप केवल अभिनयका निम्ति हुन्, त्यसै गरी यसको सारा अध्ययन देखाओटी मात्र हो। यस्ताले पढेको विद्या कसैको हितका लागि पनि हुँदैन।

**एतदर्थो हि लोकेऽस्मिन्नवतारो मया कृतः।**
**वध्या मे धर्मध्वजिनस्ते हि पातकिनोऽधिकाः॥ २७॥**

**पदार्थ—**
**हि** = निश्चय नै
**धर्मध्वजिनः** = धर्मको स्वाँग पार्नेहरू
**अधिकाः** = बढी
**पातकिनः** = पापी हुन्छन्
**ते** = तिनीहरू
**मे** = मद्वारा
**वध्याः** = मारिन योग्य हुन्छन्
**हि** = निश्चय नै
**एतदर्थः** = यस्तै दुष्टको विनाशका लागि
**मया** = मैले
**अस्मिन्** = यस
**लोके** = संसारमा
**अवतारः** = अवतार
**कृतः** = लिएको हुँ

**वाक्यार्थ—** जो मानिस केवल धर्मको स्वाँङ मात्र पार्दछन्, तिनीहरू नै झन् बढी पापी हुन्छन्। अतः तिनीहरूलाई मैले मार्नुपर्छ। यस्तैको नाशका निम्ति मैले यस संसारमा अवतार लिएको हुँ।

**एतावदुक्त्वा भगवान् निवृत्तोऽसद्वधादपि।**
**भावित्वात् तं कुशाग्रेण करस्थेनाहनत् प्रभुः॥ २८॥**

**पदार्थ—**
**भावित्वात्** = भवितव्यलाई टार्न नसकिने हुनाले
**असद्वधात् अपि** = दुष्टहरूको नाश गर्ने कामबाट समेत
**निवृत्तः** = विरत हुनुभएका
**भगवान्** = भगवान्
**प्रभुः** = बलरामले
**एतावत्** = यसप्रकार
**उक्त्वा** = भनेर
**तं** = ती सूतजीलाई
**करस्थेन** = हातमा रहेको
**कुशाग्रेण** = कुशको टुप्पोले (हानेर)
**अहनत्** = मार्नुभयो

**वाक्यार्थ—** भवितव्यलाई कसैले टार्न नसक्ने हुनाले (तीर्थयात्रामा लागेर) दुष्टहरूको वध गर्ने कार्यबाट समेत विरत हुनुभएका भगवान् बलरामले यति भनेर हातमा लिएको कुशको टुप्पोले हानी सूतजीलाई मार्नुभयो।

**हाहेति वादिनः सर्वे मुनयः खिन्नमानसाः।**
**ऊचुः सङ्कर्षणं देवमधर्मस्ते कृतः प्रभो॥ २९॥**

**पदार्थ—**
**हाहा इति** = हाय (यो के भयो) भन्दै
**वादिनः** = हाहाकार गर्दै गरेका
**खिन्नमानसाः** = चित्त व्याकुल भएका
**सर्वे** = सम्पूर्ण
**मुनयः** = मुनिहरूले
**देवं** = भगवान्
**सङ्कर्षणं** = बलरामलाई
**ऊचुः** = यसो भन्न लागे
**प्रभो** = हे प्रभु

**ते** = हजुरद्वारा
**अधर्मः** = अधर्म (गर्न नहुने काम)
**कृतः** = गरियो

**वाक्यार्थ–** सूतजी मारिनासाथ सम्पूर्ण मुनिरू हाय ! यो के अनर्थ भयो ? भन्दै हाहाकार गर्न थाले र अत्यन्त खिन्न भएर भगवान् बलरामलाई भन्न लागे– हे प्रभु ! हजुरले गर्नै नहुने काम गर्नुभयो।

**अस्य ब्रह्मासनं दत्तमस्माभिर्यदुनन्दन।**

**आयुश्चात्माक्लमं तावद् यावत् सत्रं समाप्यते॥ ३०॥**

**पदार्थ–**
**यदुनन्दन** = हे यदुनन्दन
**यावत्** = जबसम्म
**सत्रं** = यज्ञ
**समाप्यते** = पूर्ण हुन्छ
**तावत्** = तबसम्मका लागि
**अस्य** = यिनलाई
**ब्रह्मासनं** = उच्च आसन
**आत्माक्लमं** = शारीरिक दुःखकष्टले रहित
**आयुः च** = आयुसमेत
**अस्माभिः** = हामीहरूद्वारा
**दत्तम्** = दिइएको थियो

**वाक्यार्थ–** हे यदुनन्दन ! हामीहरूले नै यी सूतजीलाई उच्च आसनमा राखेका थियौँ र हाम्रो यज्ञ समाप्त नहुँदासम्मको लागि शारीरिक दुःखकष्टले रहित आयुसमेत दिएका थियौँ।

**अजानतैवाचरितस्त्वया ब्रह्मवधो यथा।**

**योगेश्वरस्य भवतो नाम्नायोऽपि नियामकः॥ ३१॥**

**पदार्थ–**
**अजानता एव** = नजान्नाले नै
**त्वया** = हजुरद्वारा
**ब्रह्मवधः** = ब्रह्महत्या
**यथा** = जस्तो
**आचरितः** = कर्म गरियो
(तापनि)
**योगेश्वरस्य** = योगेश्वर
**भवतः** = हजुरको निम्ति
**आम्नायः अपि** = वेद पनि
**न नियामकः** = शासक हुन सक्दैन

**वाक्यार्थ–** नजान्नाले नै हजुरले ब्रह्महत्यासमानको काम गर्नुभयो, तापनि योगेश्वर हजुरलाई वेदले समेत कुनै शासन लगाउन सक्दैन।

**यद्येतद् ब्रह्महत्यायाः पावनं लोकपावन।**

**चरिष्यति भवांल्लोकसङ्ग्रहोऽनन्यचोदितः॥ ३२॥**

**पदार्थ–**
**लोकपावन** = हे लोकलाई पवित्र गर्न अवतार लिनुभएका प्रभु
**यदि** = यदि
**भवान्** = हजुरले
**अनन्यचोदितः** = अर्काको प्रेरणाले नभएर स्वयं
**एतत्** = यो
**ब्रह्महत्यायाः** = ब्रह्महत्याको
**पावनं** = प्रायश्चित्त
**चरिष्यति** = गर्नुहुन्छ भने त
**लोकसङ्ग्रहः** = लोकका निम्ति शिक्षा मिल्ने थियो

**वाक्यार्थ–** लोकको कल्याणका निम्ति अवतार लिनुभएका हे प्रभु ! अर्काले नसम्झाईकन यदि हजुर आफैँले यस ब्रह्महत्याको प्रायश्चित गर्नुभयो भने त्यसबाट लोकलाई शिक्षा मिल्ने थियो।

**श्रीभगवानुवाच** (भगवान् बलरामले भन्नुभयो)

**करिष्ये वधनिर्वेशं लोकानुग्रहकाम्यया।**

**नियमः प्रथमे कल्पे यावान् स तु विधीयताम्॥ ३३॥**

**पदार्थ–**
**लोकानुग्रहकाम्यया** = लोकको कल्याणको चाहनाले
**वधनिर्वेशं तु** = यस ब्रह्महत्याको प्रायश्चित्त त
**करिष्ये** = गर्नेछु (त्यसकारण)
**प्रथमे कल्पे** = उत्तम किसिमको प्रायश्चित्तका निम्ति
**यावान्** = जे जस्तो
**नियमः** = नियम छ
**सः** = त्यो
**विधीयताम्** = बताउनुहोस्

**वाक्यार्थ–** लोकको कल्याणका निम्ति म यस ब्रह्महत्याको प्रायश्चित्त अवश्य गर्नेछु। त्यसकारण यसका निम्ति जुन सर्वश्रेष्ठ विधि छ, त्यो मलाई बताउनुहोस्।

**दीर्घमायुर्बतैतस्य सत्त्वमिन्द्रियमेव च।**

**आशासितं यत्तद् ब्रूत साधये योगमायया॥ ३४॥**

**पदार्थ–**
**बत** = फेरि (हजुरहरूद्वारा)
**एतस्य** = यी सूतको
**यत्** = जुन
**दीर्घम् आयुः** = लामो आयु
**सत्त्वम्** = बल
**इन्द्रियम् एव च** = इन्द्रियशक्ति थियो
**तत्** = त्यो सबै
**आशासितं** = चाहना गरिएको छ भने
**योगमायया** = म योगमायाद्वारा
**साधये** = पूरा गरिदिनेछु

**वाक्यार्थ–** फेरि हजुरहरूले यी सूतको लामो आयु, बल, इन्द्रियशक्ति आदि जेजे चाहनुभएको छ, त्यो मलाई भन्नुहोस्, म योगमायाद्वारा त्यो सबै पूरा गरिदिनेछु।

**ऋषय ऊचुः** (ऋषिहरूले भने)

**अस्त्रस्य तव वीर्यस्य मृत्योरस्माकमेव च।**

**यथा भवेद् वचः सत्यं तथा राम विधीयताम्॥ ३५॥**

**पदार्थ–**
**राम** = हे बलराम
**यथा** = जसो गर्दा
**तव** = हजुरको
**अस्त्रस्य** = अस्त्रको
**वीर्यस्य** = पराक्रमको
**मृत्योः च** = सूतको मृत्युको र
**अस्माकम्** = हामीहरूको
**वचः** = वाणीको
**सत्यम्** = सत्यता
**भवेत्** = सिद्ध हुन्छ
**तथा एव** = त्यस्तै
**विधीयताम्** = गर्नुहोस्

**वाक्यार्थ–** हे बलराम ! अब जसो गर्दा हजुरको अस्त्र र पराक्रम, सूतको मृत्यु र हामीहरूको वचनको सार्थकता हुन्छ, त्यस्तो कुनै उपाय गर्नुहोस्।

**श्रीभगवानुवाच** (भगवान् बलरामले भन्नुभयो)

**आत्मा वै पुत्र उत्पन्न इति वेदानुशासनम्।**

**तस्मादस्य भवेद् वक्ता आयुरिन्द्रियसत्त्ववान्॥ ३६ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **वेदानुशासनम्** = वेदको | आयु तथा इन्द्रियशक्ति र बलले |
| **आत्मा वै** = (पिताको) आत्मा नै | अनुशासन छ | सम्पन्न |
| **पुत्रः** = पुत्रका रूपमा | **तस्मात्** = त्यसकारण | **वक्ता** = वक्ता (पुराणवाचक) |
| **उत्पन्नः** = उत्पन्न हुन्छ | **अस्य** = यिनको (पुत्र) | **भवेत्** = हुनेछन् |
| **इति** = यस्तो | **आयुरिन्द्रियसत्त्ववान्** = दीर्घ | |

**वाक्यार्थ–** पिताको आत्मा नै पुत्ररूपमा उत्पन्न हुन्छ भन्ने वेदको आज्ञा छ, त्यसकारण सूतको सट्टामा यिनका छोरा दीर्घायु, इन्द्रियशक्ति र बलले सम्पन्न हुनेछन् र उनी हजुरहरूका लागि पुराणवाचक हुनेछन्।

**किं वः कामो मुनिश्रेष्ठा ब्रूताहं करवाण्यथ।**

**अजानतस्त्वपचितिं यथा मे चिन्त्यतां बुधाः॥ ३७ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **अहं** = म | **मे** = मेरो |
| **मुनिश्रेष्ठाः** = हे श्रेष्ठ मुनिहरू | **करवाणि** = पूरा गरिदिन्छु | **यथा** = जसरी |
| **वः** = हजुरहरूको | **अथ तु** = त्यसपछि | **अपचितिं** = प्रायश्चित्त (हुन्छ |
| **किं** = के | **बुधाः** = हे विद्वान्हरू | त्यो) |
| **कामः** = चाहना छ | **अजानतः** = अनजानमा गल्ती | **चिन्त्यताम्** = विचार गर्नुहोस् |
| **ब्रूत** = बताउनुहोस् | गरेको | |

**वाक्यार्थ–** हे श्रेष्ठ मुनिहरू ! यसबाहेक हजुरहरू के चाहनुहुन्छ, त्यो भन्नुहोस्, म त्यसलाई पूरा गरिदिनेछु। हे विद्वान्हरू ! अब मबाट अनजानमा भएको अपराधको प्रायश्चित्तका सम्बन्धमा पनि केही विचार गर्नुहोस्।

**ऋषय ऊचुः** (ऋषिहरूले भने)

**इल्वलस्य सुतो घोरो बल्वलो नाम दानवः।**

**स दूषयति नः सत्रमेत्य पर्वणि पर्वणि॥ ३८ ॥**

**पदार्थ—**
**इल्वलस्य** = इल्वलको
**सुतः** = छोरो
**बल्वलः नाम** = बल्वल नामको
**घोरः** = डरलाग्दो
**दानवः** = दैत्य छ
**सः** = त्यो दैत्यले
**पर्वणि पर्वणि** = हरेक पर्वमा
**एत्य** = यहाँ आएर
**नः** = हामीहरूको
**सत्रं** = यज्ञ
**दूषयति** = दूषित गरिदिन्छ

**वाक्यार्थ—** हे बलराम ! यहाँ इल्वलको छोरो बल्वल नाम गरेको एउटा दानव छ। त्यो दानवले हरेक पर्वको वेलामा यहाँ आएर हाम्रो यज्ञलाई दूषित गरिदिन्छ।

**तं पापं जहि दाशार्ह तन्नः शुश्रूषणं परम्।**
**पूयशोणितविण्मूत्रसुरामांसाभिवर्षिणम्॥ ३९॥**

**पदार्थ—**
**दाशार्ह** = हे यदुनन्दन बलराम
**पूयशोणितविण्मूत्रसुरामांसाभिवर्षिणं** = पिप, रगत, विष्टा, मूत्र, रक्सी र मासुको वर्षा गर्ने
**तं** = त्यो
**पापं** = पापीलाई
**जहि** = मार्नुहोस्
**नः** = हामीहरूका लागि
**तत्** = त्यही नै
**परं** = ठुलो
**शुश्रूषणम्** = सेवा हुनेछ

**वाक्यार्थ—** हे यदुनन्दन बलराम ! यहाँ आएर पिप, रगत, विष्टा, मूत्र, रक्सी र मासुको वर्षा गर्दै हाम्रो यज्ञलाई अपवित्र पार्ने त्यस पापीलाई मारिदिनुहोस्। त्यही नै हामीहरूलाई हजुरको ठुलो सेवा हुनेछ।

**ततश्च भारतं वर्षं परीत्य सुसमाहितः।**
**चरित्वा द्वादशमासांस्तीर्थस्नायी विशुध्यसे॥ ४०॥**

**पदार्थ—**
**ततः च** = त्यसपछि
**सुसमाहितः** = एकाग्रचित्त भएर
**तीर्थस्नायी** = तीर्थहरूमा स्नान गर्दै
**द्वादशमासान्** = बाह्र महिनासम्म
**भारतं वर्षं** = भारतवर्षलाई
**परीत्य** = प्रदक्षिणा गरेर
**चरित्वा** = घुमेपछि
**विशुध्यसे** = शुद्ध (पापबाट मुक्त) हुनुहुनेछ

**वाक्यार्थ—** त्यसपछि एकाग्रचित्त भएर तीर्थहरूमा स्नान गर्दै बाह्र महिनासम्म भारतवर्षको प्रदक्षिणा गरेपछि हजुर पापबाट मुक्त हुनुहुनेछ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे बलदेवचरिते बल्वलवधोपक्रमो नामाष्टसप्ततितमोऽध्यायः॥ ७८॥**

# अथैकोनाशीतितमोऽध्यायः

## भगवान् बलरामको तीर्थयात्रा

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**ततः पर्वण्युपावृत्ते प्रचण्डः पांशुवर्षणः।**

**भीमो वायुरभूद् राजन् पूयगन्धस्तु सर्वशः॥ १॥**

**पदार्थ—**
**राजन्** = हे राजा परीक्षित्
**ततः** = त्यसपछि
**पर्वणि** = पर्वको समय (औँशीपछिको प्रतिपदा)
**उपावृत्ते तु** = आएपछि
**पांशुवर्षणः** = धुलोको वर्षा गर्ने
**सर्वशः** = जताततैबाट
**पूयगन्धः** = दुर्गन्धमय
**प्रचण्डः** = अत्यन्त वेगवान्
**भीमः** = भयङ्कर
**वायुः** = हावाहुरी
**अभूत्** = चल्न थाल्यो

**वाक्यार्थ—** हे परीक्षित् ! पर्वको समय आएपछि अत्यन्त वेगवान्, भयङ्कर, दुर्गन्धमय अनि धुलोको वर्षा गर्ने हावाहुरी चल्न थाल्यो।

**ततोऽमेध्यमयं वर्षं बल्वलेन विनिर्मितम्।**

**अभवद् यज्ञशालायां सोऽन्वदृश्यत शूलधृक्॥ २॥**

**पदार्थ—**
**ततः** = त्यसपछि
**यज्ञशालायां** = यज्ञशालामा
**बल्वलेन** = बल्वलद्वारा
**विनिर्मितं** = रचिएको
**अमेध्यमयं** = अपवित्र वस्तुहरूको
**वर्षं** = वर्षा
**अभवत्** = भयो
**शूलधृक्** = हातमा त्रिशूल लिएको
**सः** = त्यो बल्वल पनि
**अन्वदृश्यत** = देखियो

**वाक्यार्थ—** यसपछि ऋषिहरूको यज्ञशालामा बल्वल दानवद्वारा सिर्जिएको अपवित्र वस्तुहरूको वर्षा हुन थाल्यो। त्यसपछि ऊ पनि हातमा त्रिशूल लिई देखा पऱ्यो।

**तं विलोक्य बृहत्कायं भिन्नाञ्जनचयोपमम्।**

**तप्तताम्रशिखाश्मश्रुं दंष्ट्रोग्रभ्रुकुटीमुखम्॥ ३॥**

**सस्मार मुसलं रामः परसैन्यविदारणम्।**

**हलं च दैत्यदमनं ते तूर्णमुपतस्थतुः॥ ४॥**

**पदार्थ–**
**बृहत्कायं** = विशाल शरीर भएको
**भिन्नाञ्जनचयोपमं** = कोट्याइएको गाजलको थुप्रोसमान कालो
**तप्तताम्रशिखाश्मश्रुं** = तताइएको तामासमान रातो वर्णका दाह्री, कपाल आदि भएको
**दंष्ट्रोग्रभ्रुकुटीमुखं** = ठुला दाह्रा र टेढा आँखीभौँद्वारा भयङ्कर मुख भएको
**तं** = त्यसलाई
**विलोक्य** = देखेर
**रामः** = बलरामले
**परसैन्यविदारणं** = शत्रुसेनालाई नष्ट गर्ने
**मुसलं** = मुसल र
**दैत्यदमनं** = दैत्यहरूलाई दमन गर्ने
**हलं च** = हलो पनि
**सस्मार** = सम्झिनुभयो
**ते** = ती दुबै अस्त्र
**तूर्णम्** = तत्काल
**उपतस्थतुः** = उपस्थित भए

**वाक्यार्थ–** त्यो दैत्यको शरीर अत्यन्त विशाल थियो र कोट्याइएको गाजलको थुप्रो जस्तो कालो वर्णको थियो। उसका दाह्री, कपाल आदि सबै तताइएको तामासमान रातो वर्णका थिए भने ठुलो दाह्रा र टेढा आँखीभौँद्वारा उसको मुख अत्यन्त भयानक लाग्थ्यो। त्यसलाई देखेर बलरामले शत्रुसेनालाई नष्ट गर्ने मुसल र दैत्यहरूको दमन गर्ने हलोलाई पनि सम्झिनुभयो। यसपछि तत्काल नै ती दुबै शस्त्र उपस्थित भए।

**तमाकृष्य हलाग्रेण बल्वलं गगनेचरम्।**
**मुसलेनाहनत् क्रुद्धो मूर्ध्नि ब्रह्मद्रुहं बलः॥ ५॥**

**पदार्थ–**
**क्रुद्धः** = रिसाएका
**बलः** = बलरामले
**ब्रह्मद्रुहं** = ब्राह्मणहरूको द्रोही
**गगनेचरं** = आकाशचारी
**तं** = त्यो
**बल्वलं** = बल्वललाई
**हलाग्रेण** = हलोको टुप्पोले
**आकृष्य** = तानेर
**मुसलेन** = मुसलद्वारा
**मूर्ध्नि** = शिरमा
**अहनत्** = प्रहार गर्नुभयो

**वाक्यार्थ–** अत्यन्त रिसाउनुभएका बलरामले ब्राह्मणहरूसँग द्रोह गर्ने त्यो आकाशचारी दानव बल्वललाई हलोको टुप्पाले तानी मुसलद्वारा त्यसको शिरमा प्रहार गर्नुभयो।

**सोऽपतद् भुवि निर्भिन्नललाटोऽसृक् समुत्सृजन्।**
**मुञ्चन्नार्तस्वरं शैलो यथा वज्रहतोऽरुणः॥ ६॥**

**पदार्थ–**
**निर्भिन्नललाटः** = निधार फुटेको
**सः** = त्यो बल्वल
**असृक्** = रगत
**समुत्सृजन्** = बगाउँदै
**आर्तस्वरं** = चिच्याइएको स्वर
**मुञ्चन्** = निकाल्दै
**भुवि** = भुइँमा
**अपतत्** = ढल्यो
**यथा** = जसरी
**वज्रहतः** = वज्र प्रहार गरिएको
**अरुणः** = गेरु आदि धातुद्वारा रङ्गिएको
**शैलः** = पहाड (खसेको थियो)

**वाक्यार्थ–** मुसलद्वारा निधार फुटेकाले त्यो बल्वल रगत बगाउँदै र ठुलो स्वरले चिच्याउँदै

त्यसरी नै भुइँमा ढल्यो जसरी इन्द्रको वज्रप्रहारपछि गेरु आदि धातुहरूद्वारा रङ्गिएको पहाड भुइँमा ढलेको थियो।

**संस्तुत्य मुनयो रामं प्रयुज्यावितथाशिषः।**
**अभ्यषिञ्चन् महाभागा वृत्रघ्नं विबुधा यथा॥ ७॥**

**पदार्थ–**
**महाभागाः** = महाभाग्यशाली
**मुनयः** = मुनिहरूले
**रामं** = बलरामलाई
**संस्तुत्य** = स्तुति गरी
**विबुधाः** = देवताहरूले
**वृत्रघ्नं यथा** = देवराज इन्द्रलाई झैँ
**अभ्यषिञ्चन्** = अभिषेक गरे

**वाक्यार्थ–** महाभाग्यशाली मुनिहरूले बलरामको स्तुति गरे र देवताहरूले देवराज इन्द्रलाई अभिषेक गरे झैँ उहाँको अभिषेक पनि गरे।

**वैजयन्तीं ददुर्मालां श्रीधामाम्लानपङ्कजाम्।**
**रामाय वाससी दिव्ये दिव्यान्याभरणानि च॥ ८॥**

**पदार्थ–**
**रामाय** = बलरामका लागि
**श्रीधामाम्लानपङ्कजां** = लक्ष्मीको निवास भएका ताजा कमलपुष्पले उनिएको
**वैजयन्तीं मालां** = वैजयन्ती नामक माला
**दिव्ये** = दिव्य
**वाससी** = वस्त्रहरू
**दिव्यानि** = दिव्य
**आभरणानि च** = आभूषणहरू पनि
**ददुः** = दिए

**वाक्यार्थ–** मुनिहरूले बलरामलाई लक्ष्मीको निवासस्थान भएको कमलको ताजा फूलले उनिएको वैजयन्ती माला, दिव्य वस्त्र र दिव्य आभूषणहरू पनि प्रदान गरे।

**अथ तैरभ्यनुज्ञातः कौशिकीमेत्य ब्राह्मणैः।**
**स्नात्वा सरोवरमगाद् यतः सरयूरास्रवत्॥ ९॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**तैः** = ती ऋषिहरूद्वारा
**अभ्यनुज्ञातः** = आज्ञा पाएका
**ब्राह्मणैः** = ब्राह्मणहरूसहित
**कौशिकीम्** = कौशिकी नदीमा
**एत्य** = गएर
**स्नात्वा** = स्नान गरी
**यतः** = जहाँबाट
**सरयूः** = सरयू
**आस्रवत्** = निस्कन्छिन्
**सरोवरं** = त्यो पोखरीमा
**अगात्** = जानुभयो

**वाक्यार्थ–** त्यसपछि बलराम ऋषिहरूसँग आज्ञा लिई ब्राह्मणहरूले सहित भई कौशिकी नदीमा गएर त्यहाँ स्नान गरी सरयू नदीको उद्गमस्थलमा रहेको पोखरीमा जानुभयो।

**अनुस्रोतेन सरयूं प्रयागमुपगम्य सः।**
**स्नात्वा सन्तर्प्य देवादीन् जगाम पुलहाश्रमम्॥ १०॥**

**पदार्थ—**
**सः** = ती बलराम
**सरयूं** = सरयू नदीको
**अनुस्रोतेन** = किनारै किनार
**प्रयागं** = प्रयाग
**उपगम्य** = गएर
**स्नात्वा** = स्नान गरी
**देवादीन्** = देवता आदिलाई
**सन्तर्प्य** = तर्पण गरेर
**पुलहाश्रमं** = पुलहाश्रममा
**जगाम** = जानुभयो

**वाक्यार्थ—** यसपछि बलराम सरयू नदीको किनारैकिनार यसको मूलतर्फ अगाडि बढी त्यहाँबाट प्रयाग जानुभयो र त्यहाँ स्नान गरेर देवता आदिलाई तर्पण गरी पुलहाश्रममा जानुभयो।

**गोमतीं गण्डकीं स्नात्वा विपाशां शोण आप्लुतः।**
**गयां गत्वा पितॄनिष्ट्वा गङ्गासागरसङ्गमे॥ ११॥**
**उपस्पृश्य महेन्द्राद्रौ रामं दृष्ट्वाभिवाद्य च।**
**सप्तगोदावरीं वेणां पम्पां भीमरथीं ततः॥ १२॥**
**स्कन्दं दृष्ट्वा ययौ रामः श्रीशैलं गिरिशालयम्।**
**द्रविडेषु महापुण्यं दृष्ट्वाद्रिं वेङ्कटं प्रभुः॥ १३॥**
**कामकोष्णीं पुरीं काञ्चीं कावेरीं च सरिद्वराम्।**
**श्रीरङ्गाख्यं महापुण्यं यत्र सन्निहितो हरिः॥ १४॥**
**ऋषभाद्रिं हरेः क्षेत्रं दक्षिणां मथुरां तथा।**
**सामुद्रं सेतुमगमन्महापातकनाशनम्॥ १५॥**

**पदार्थ—**
**गोमतीं** = गोमती
**गण्डकीं** = गण्डकी र
**विपाशां** = विपाशा नदीमा
**स्नात्वा** = स्नान गरी
**शोणे** = शोण नदीमा पनि
**आप्लुतः** = डुबुल्की लगाई
**गयां** = गया
**गत्वा** = गई
**पितॄन्** = पितृहरूलाई
**इष्ट्वा** = तर्पण गरी
**गङ्गासागरसङ्गमे** = गङ्गासागरको सङ्गममा गएर
**उपस्पृश्य** = स्नान, आचमन आदि गरी
**महेन्द्राद्रौ** = महेन्द्र पर्वतमा
**रामं** = परशुरामलाई
**दृष्ट्वा** = दर्शन गरी
**अभिवाद्य च** = अभिवादन गरेर
**सप्तगोदावरीं** = सप्त गोदावरी
**वेणां** = वेणा
**पम्पां** = पम्पा
**भीमरथीं** = भीमरथीमा (स्नान गर्नुभयो)
**ततः** = त्यसपछि
**स्कन्दं** = कार्त्तिकेयको
**दृष्ट्वा** = दर्शन गरी

**रामः** = बलराम
**गिरिशालयं** = शिवजीको निवासस्थान भएको
**श्रीशैलं** = श्रीशैलमा
**ययौ** = जानुभयो
**प्रभुः** = समर्थ उहाँले
**द्रविडेषु** = द्रविड प्रदेशमा
**महापुण्यं** = परमपुण्यमय
**वेङ्कटं अद्रिं** = वेङ्कटाचल भगवान्लाई
**दृष्ट्वा** = दर्शन गरी
**कामकोष्णीं पुरीं** = कामकोष्णी (कामाक्षा) पीठ
**काञ्चीं** = काञ्चीपुरी आदि दर्शन गरी
**सरिद्वरां** = श्रेष्ठ नदी
**कावेरीं च** = कावेरीमा पनि स्नान गरी
**यत्र** = जहाँ
**हरिः** = भगवान् श्रीहरि
**सन्निहितः** = नित्य रहनुभएको छ त्यस्तो
**श्रीरङ्गाख्यं** = श्रीरङ्गनामक
**महापुण्यं** = परमपुण्यमय क्षेत्रको दर्शन गर्नुभयो
**हरेः** = भगवान्को
**क्षेत्रं** = क्षेत्र
**ऋषभाद्रिं** = ऋषभ पर्वत
**तथा** = त्यसै गरी
**दक्षिणां** = दक्षिणको
**मथुरां** = मथुरा गई
**सामुद्रं** = समुद्रमा बाँधिएको
**महापातकनाशनं** = भयङ्कर पापलाई नष्ट गर्ने
**सेतुं** = सेतुबन्धमा
**अगमत्** = जानुभयो

**वाक्यार्थ–** यसपछि बलरामले गोमती, गण्डकी, विपाशा र शोण यी नदीहरूमा स्नान गर्नुभयो र गया गई उहाँले पितृहरूलाई तर्पण गर्नुभयो। यसपछि उहाँले गङ्गासागरको तटमा गई स्नान, आचमन आदि गरेर महेन्द्रपर्वतमा गई परशुरामको दर्शन र अभिवादन गर्नुभयो, त्यसपछि सप्त गोदावरी वेणा, पम्पा र भीमरथी नदीमा स्नान गर्नुभयो र कार्त्तिकेयको दर्शन गरी बलराम शिवजीको निवासस्थान भएको श्रीशैलपर्वतमा जानुभयो। यसपछि उहाँले द्रविड प्रदेशमा गई परमपुण्यमय वेङ्कटाचल भगवान्को दर्शन गर्नुभयो। यसपछि उहाँ कामाक्षा पीठ र काञ्ची पुरी आदि तीर्थ र श्रेष्ठ नदी कावेरीको दर्शन गरी भगवान् श्रीहरिको नित्य सन्निधि रहने परमपुण्यमय श्रीरङ्क्षेत्रमा पनि जानुभयो। यसपछि उहाँ श्रीहरि भगवान्को स्थान भएको ऋषभ पर्वत, दक्षिण मथुरा र महापापहरूलाई समेत नष्ट गर्ने समुद्रकिनारको सेतुबन्ध तीर्थमा पनि जानुभयो।

**तत्रायुतमदाद् धेनूर्ब्राह्मणेभ्यो हलायुधः।**
**कृतमालां ताम्रपर्णीं मलयं च कुलाचलम्॥ १६॥**
**तत्रागस्त्यं समासीनं नमस्कृत्याभिवाद्य च।**
**योजितस्तेन चाशीर्भिरनुज्ञातो गतोऽर्णवम्॥**
**दक्षिणं तत्र कन्याख्यां दुर्गां देवीं ददर्श सः॥ १७॥**

**पदार्थ–**
**हलायुधः** = हलो नै हतियार भएका बलरामले
**तत्र** = त्यहाँ (सेतुबन्धमा)
**ब्राह्मणेभ्यः** = ब्राह्मणहरूलाई
**अयुतं** = दश हजार
**धेनूः** = गाईहरू
**अदात्** = दिनुभयो
**कृतमालां** = कृतमाला र
**ताम्रपर्णीं** = ताम्रपर्णी नदीमा स्नान गरी
**कुलाचलं** = कुलपर्वतहरूमध्ये

एक
**मलयं च** = मलय पर्वतमा
(जानुभयो)
**तत्र** = त्यहाँ
**समासीनं** = रहनुहुने
**अगस्त्यं** = अगस्त्य मुनिलाई
**नमस्कृत्य** = नमस्कार र
**अभिवाद्य च** = अभिवादन पनि
गरी
**तेन** = उहाँद्वारा
**आशीर्भिः** = आशीर्वादले
**योजितः** = युक्त भई
**अनुज्ञातः च** = अनुमति समेत
प्राप्त गरी
**सः** = ती बलरामले
**दक्षिणं** = दक्षिण
**अर्णवं** = समुद्रतिर
**गतः** = जानुभएका
**तत्र** = त्यहाँ
**कन्याख्यां** = कन्या
(कन्याकुमारी) नामकी
**दुर्गां** = दुर्गा
**देवीं** = देवीलाई
**ददर्श** = दर्शन गर्नुभयो

**वाक्यार्थ–** बलरामले सेतुबन्ध तीर्थमा ब्राह्मणहरूलाई दशहजार गाईहरू दान गर्नुभयो र कृतमाला, ताम्रपर्णी नदीमा स्नान गरी उहाँ कुलपर्वतहरूमध्ये एक मलय पर्वतमा पुग्नुभयो। त्यहाँ रहनुहुने अगस्त्यमुनिलाई नमस्कार र अभिवादन गरी उहाँबाट आशीर्वाद र अनुमतिसमेत लिई उहाँ दक्षिणसमुद्रतिर लाग्नुभयो। त्यहाँ बलरामले कन्याकुमारी नामकी दुर्गा देवीको दर्शन गर्नुभयो।

**ततः फाल्गुनमासाद्य पञ्चाप्सरसमुत्तमम्।**
**विष्णुः सन्निहितो यत्र स्नात्वास्पर्शद् गवायुतम्॥ १८ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**फाल्गुनं** = फाल्गुन क्षेत्रमा
**आसाद्य** = पुगी
**यत्र** = जहाँ
**विष्णुः** = विष्णु
**सन्निहितः** = सधैँ रहनुहुन्छ, त्यस्तो
**उत्तमं** = सर्वश्रेष्ठ
**पञ्चाप्सरसं** = पञ्चाप्सरस तीर्थमा
**स्नात्वा** = स्नान गरी
**गवायुतं** = दशहजार गाई
**अस्पर्शत्** = (छुनुभयो) दान गर्नुभयो

**वाक्यार्थ–** त्यसपछि बलराम फाल्गुन क्षेत्रमा पुग्नुभयो र भगवान् विष्णु नित्य निवास गर्ने श्रेष्ठ पञ्चाप्सरसतीर्थमा स्नान गरी दशहजार गाई दान गर्नुभयो।

**ततोऽभिव्रज्य भगवान् केरलांस्तु त्रिगर्तकान्।**
**गोकर्णाख्यं शिवक्षेत्रं सान्निध्यं यत्र धूर्जटेः॥ १९ ॥**

**पदार्थ–**
**भगवान्** = भगवान् बलराम
**ततः** = त्यहाँबाट
**केरलान्** = केरल र
**त्रिगर्तकान् तु** = त्रिगर्त देशमा
**अभिव्रज्य** = पुगी (फेरि)
**यत्र** = जहाँ
**धूर्जटेः** = भगवान् शङ्करको
**सान्निध्यं** = सन्निधि रहन्छ, त्यस्तो
**गोकर्णाख्यं** = गोकर्णनामक
**शिवक्षेत्रम्** = शिवक्षेत्रमा
(पुग्नुभयो)

**वाक्यार्थ–** यसपछि भगवान् बलराम केरल र त्रिगर्त देशहरूमा जानुभयो र त्यहाँबाट भगवान्को निरन्तर सन्निधि हुने गोकर्ण नामको शिवक्षेत्रमा पुग्नुभयो।

**आर्यां द्वैपायनीं दृष्ट्वा शूर्पारकमगाद् बलः।**
**तापीं पयोष्णीं निर्विन्ध्यामुपस्पृश्याथ दण्डकम्॥ २०॥**
**प्रविश्य रेवामगमद् यत्र माहिष्मती पुरी।**
**मनुतीर्थमुपस्पृश्य प्रभासं पुनरागमत्॥ २१॥**

**पदार्थ–**
**बलः** = बलराम
**द्वैपायनीं** = द्वीपमा निवास गर्ने
**आर्यां** = आर्यदिवीलाई
**दृष्ट्वा** = दर्शन गरी
**शूर्पारकं** = शूर्पारक तीर्थमा
**अगात्** = जानुभयो
**अथ** = त्यसपछि
**तापीं** = तापी
**पयोष्णीं** = पयोष्णी
**निर्विन्ध्यां** = निर्विन्ध्या नदीमा
**उपस्पृश्य** = स्नान, आचमन गरी
**दण्डकं** = दण्डकारण्यमा
**प्रविश्य** = प्रवेश गरेर
**यत्र** = जहाँ
**माहिष्मती पुरी** = माहिष्मती नामक शहर छ
**रेवां** = रेवा (नर्मदा) नदीमा
**अगमत्** = जानुभयो (त्यहाँ)
**मनुतीर्थम्** = मनुतीर्थमा
**उपस्पृश्य** = स्नान, आचमन गरी
**पुनः** = फेरि
**प्रभासं** = प्रभास क्षेत्रमा
**आगमत्** = आइपुग्नुभयो

**वाक्यार्थ–** त्यसपछि बलरामले जलले घेरिएको द्वीप (टापू)मा निवास गर्ने आर्यदिवीको दर्शन गर्नुभयो र त्यसपछि उहाँ शूर्पारक क्षेत्रमा जानुभयो। यसपछि तापी, पयोष्णी, निर्विन्ध्या नदीहरूमा स्नान, आचमन गर्दै दण्डकारण्यक्षेत्रमा प्रवेश गर्नुभयो र त्यहाँबाट माहिष्मतीनामक शहर भएको पवित्र नर्मदानदीको तटमा पुग्नुभयो। त्यहाँबाट मनुतीर्थमा स्नान, आचमन गरी उहाँ फेरि प्रभास क्षेत्रमा नै फर्किनुभयो।

**श्रुत्वा द्विजैः कथ्यमानं कुरुपाण्डवसंयुगे।**
**सर्वराजन्यनिधनं भारं मेने हृतं भुवः॥ २२॥**

**पदार्थ–**
**द्विजैः** = ब्राह्मणहरूद्वारा
**कथ्यमानं** = भनिएको
**कुरुपाण्डवसंयुगे** = कौरव र पाण्डवहरूको युद्धमा
**सर्वराजन्यनिधनं** = सबै राजाहरूको निधन भएको कुरा
**श्रुत्वा** = सुनेर
**भुवः** = पृथिवीको
**भारं** = भार
**हृतं** = नष्ट भएको
**मेने** = ठान्नुभयो

**वाक्यार्थ–** त्यहाँ ब्राह्मणहरूले बलरामलाई कौरव र पाण्डवहरूको युद्धमा सबैजसो राजाहरू मरेको खबर सुनाए। यसबाट बलरामले पृथिवीको भार नष्ट भयो भन्ने ठान्नुभयो।

**स भीमदुर्योधनयोर्गदाभ्यां युध्यतोर्मृधे।**
**वारयिष्यन् विनशनं जगाम यदुनन्दनः॥ २३॥**

**पदार्थ–**
**सः** = ती
**यदुनन्दनः** = यदुकुलश्रेष्ठ

बलरामले
**मृधे** = युद्धमा
**गदाभ्यां** = गदाद्वारा
**युध्यतोः** = लडिरहेका
**भीमदुर्योधनयोः** = भीम र दुर्योधनको लडाइँलाई
**वारयिष्यन्** = रोक्न खोज्दै
**विनशनं** = कुरुक्षेत्रमा
**जगाम** = जानुभयो

**वाक्यार्थ–** यदुकुलश्रेष्ठ बलरामले भीम र दुर्योधन परस्पर गदायुद्ध गरिरहेको थाहा पाएर त्यसलाई रोक्न कुरुक्षेत्रमा जानुभयो।

**युधिष्ठिरस्तु तं दृष्ट्वा यमौ कृष्णार्जुनावपि।**
**अभिवाद्याभवंस्तूष्णीं किं विवक्षुरिहागतः॥ २४॥**

**पदार्थ–**
**तं** = उहाँलाई
**दृष्ट्वा तु** = देखेर
**युधिष्ठिरः** = युधिष्ठिर
**यमौ** = नकुल र सहदेव
**कृष्णार्जुनौ अपि** = श्रीकृष्ण र अर्जुनसमेतले
**अभिवाद्य** = अभिवादन गरी
**किं विवक्षुः** = के भन्न
**इह** = यहाँ
**आगतः** = आउनुभयो (भन्ने सोची)
**तूष्णीं** = चुपचाप
**अभवन्** = हुनुभयो

**वाक्यार्थ–** बलरामलाई देखेपछि महाराज युधिष्ठिर, नकुल, सहदेव, अर्जुन र भगवान् श्रीकृष्णले उहाँलाई प्रणाम गर्नुभयो र बलराम यहाँ के भन्न आइपुग्नुभयो भन्ने सोची सबै चुपचाप रहनुभयो।

**गदापाणी उभौ दृष्ट्वा संरब्धौ विजयैषिणौ।**
**मण्डलानि विचित्राणि चरन्ताविदमब्रवीत्॥ २५॥**

**पदार्थ–**
**गदापाणी** = गदा हातमा लिई
**संरब्धौ** = क्रोधयुक्त भएका
**विजयैषिणौ** = विजय चाहने
**विचित्राणि** = विचित्र
**मण्डलानि** = दाउपेचहरूलाई
**चरन्तौ** = बदलिरहेका
**उभौ** = दुबैलाई
**दृष्ट्वा** = देखेर
**इदं** = यसो
**अब्रवीत्** = भन्नुभयो

**वाक्यार्थ–** बलरामले भीम र दुर्योधन दुबैलाई हातमा गदा लिई अत्यन्त क्रुद्ध भई युद्ध गर्न थालेको देख्नुभयो। ती दुबै आ–आफ्नो विजय चाहँदै गदायुद्धका अनेक दाउपेचहरू बदलिरहेका थिए। उहाँले दुबैलाई यसो भन्नुभयो।

**युवां तुल्यबलौ वीरौ हे राजन् हे वृकोदर।**
**एकं प्राणाधिकं मन्ये उतैकं शिक्षयाधिकम्॥ २६॥**
**तस्मादेकतरस्येह युवयोः समवीर्ययोः।**
**न लक्ष्यते जयोऽन्यो वा विरमत्वफलो रणः॥ २७॥**

**पदार्थ–**
**हे राजन्** = हे राजा दुर्योधन
**हे वृकोदर** = हे भीमसेन
**युवां** = तिमीहरू दुबै
**तुल्यबलौ** = बराबर बल भएका
**वीरौ** = वीर हौ
**एकं** = एउटालाई
**प्राणाधिकं** = अधिक बलशाली
**मन्ये** = मान्दछु
**उत** = त्यस्तै
**एकं** = अर्कोलाई
**शिक्षया** = गदायुद्धको शिक्षाद्वारा
**अधिकं** = श्रेष्ठ मान्दछु
**तस्मात्** = त्यसैले
**समवीर्ययोः** = बराबर पराक्रम भएका
**युवयोः** = तिमी दुबैको
**इह** = यो युद्धमा
**एकतरस्य** = कुनै एक जनाको
**जयः** = विजय र
**अन्यः वा** = पराजय पनि
**न लक्ष्यते** = देखिँदैन
**अफलः** = व्यर्थको
**रणः** = लडाइँ
**विरमतु** = बन्द होस्

**वाक्यार्थ–** हे राजा दुर्योधन ! हे भीमसेन ! तिमीहरू दुबै बराबर बलशाली वीरहरू हौ। भीमसेनमा शारीरिक बल बढी छ भने दुर्योधनमा गदायुद्धको शिक्षा बढी देख्दछु। त्यसैले उत्तिकै पराक्रम भएका तिमी दुईको युद्धमा कुनै एक पक्षको विजय या पराजय हुने देखिएको छैन। त्यसैले यो व्यर्थको लडाइँ बन्द गर।

**न तद्वाक्यं जगृहतुर्बद्धवैरौ नृपार्थवत् ।**
**अनुस्मरन्तावन्योन्यं दुरुक्तं दुष्कृतानि च ॥ २८ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**बद्धवैरौ** = दृढ वैरभाव भएका
**अन्योन्यं** = एक-आपसका
**दुरुक्तं** = दुर्वचन र
**दुष्कृतानि च** = दुर्व्यवहारहरूलाई समेत
**अनुस्मरन्तौ** = सम्झिरहेका दुबैले
**अर्थवत्** = हितकारक
**तद्वाक्यं** = बलरामको वचनलाई
**न जगृहतुः** = ग्रहण गरेनन्

**वाक्यार्थ–** हे परीक्षित् ! ती दुबैको वैरभाव अत्यन्त दृढ भइसकेको थियो। तिनीहरू एक-आपसका दुर्वचन र दुर्व्यवहारहरूलाई सम्झिरहेका थिए। त्यसैले तिनीहरूले बलरामको हितकारक वचन मानेनन्।

**दिष्टं तदनुमन्वानो रामो द्वारवतीं ययौ ।**
**उग्रसेनादिभिः प्रीतैर्ज्ञातिभिः समुपागतः ॥ २९ ॥**

**पदार्थ–**
**रामः** = बलराम
**तत्** = यसलाई
**दिष्टं** = प्रारब्ध
**अनुमन्वानः** = ठानी
**द्वारवतीं** = द्वारकामा
**ययौ** = जानुभयो (त्यहाँ)
**प्रीतैः** = अत्यन्त प्रसन्न भएका
**उग्रसेनादिभिः** = उग्रसेन आदि
**ज्ञातिभिः** = बन्धुहरूद्वारा
**समुपागतः** = स्वागत गरिनुभयो

**वाक्यार्थ–** बलरामले त्यो लडाइँलाई प्रारब्ध ठान्नुभयो र उहाँ त्यहाँबाट द्वारका फर्किनुभयो। उहाँको आगमनबाट अत्यन्त प्रसन्न भएका उग्रसेन आदि बन्धुहरूले उहाँको स्वागत गरे।

**तं पुनर्नैमिषं प्राप्तमृषयोऽयाजयन् मुदा ।**
**क्रत्वङ्गं क्रतुभिः सर्वैर्निवृत्ताखिलविग्रहम् ॥ ३० ॥**

**पदार्थ—**
**ऋषयः** = ऋषिहरूले
**पुनः** = फेरि
**नैमिषं** = नैमिषारण्यमा नै
**प्राप्तं** = आइपुगेका
**निवृत्ताखिलविग्रहं** = सारा वैरभावलाई त्यागेका
**क्रत्वङ्गं** = यज्ञस्वरूप भएका
**तं** = ती बलरामलाई
**सर्वैः** = सबै प्रकारका
**क्रतुभिः** = यज्ञहरूद्वारा
**मुदा** = प्रसन्नतापूर्वक
**अयाजयन्** = यजन गराए

**वाक्यार्थ—** बलराम फेरि नैमिषारण्य क्षेत्रमा नै पुगेपछि ऋषिहरूले वैरभाव पूर्णतया त्यागी त्यहाँ आएका र वास्तवमा यज्ञमय शरीर भएका बलरामद्वारा अनेक प्रकारका यज्ञहरूको अनुष्ठान गराए।

**तेभ्यो विशुद्धविज्ञानं भगवान् व्यतरद् विभुः ।**
**येनैवात्मन्यदो विश्वमात्मानं विश्वगं विदुः ॥ ३१ ॥**

**पदार्थ—**
**विभुः** = सर्वसमर्थ
**भगवान्** = भगवान् बलरामले
**तेभ्यः** = तिनीहरूलाई
**विशुद्धविज्ञानं** = विशुद्ध तत्त्वज्ञान
**व्यतरत्** = प्रदान गर्नुभयो
**येन एव** = जसद्वारा नै
**आत्मनि** = आफैँभित्र
**अदः** = यो सम्पूर्ण
**विश्वं** = विश्व र
**विश्वगं** = विश्वभरि व्याप्त
**आत्मानं** = आफूलाई
**विदुः** = जाने (अनुभव गरे)

**वाक्यार्थ—** सर्वसमर्थ भगवान् बलरामले ती ऋषिहरूलाई विशुद्ध तत्त्वज्ञानको उपदेश गर्नुभयो। जुन ज्ञानबाट तिनीहरूले आफूभित्रै सम्पूर्ण विश्वलाई र सम्पूर्ण विश्वभरि आफूलाई नै व्याप्त भएको अनुभव गरे।

**स्वपत्न्यावभृथस्नातो ज्ञातिबन्धुसुहृद्वृतः ।**
**रेजे स्वज्योत्स्नयेवेन्दुः सुवासाः सुष्ठ्वलङ्कृतः ॥ ३२ ॥**

**पदार्थ—**
**स्वपत्न्या** = आफ्ना पत्नीसँगै
**अवभृथस्नातः** = (यज्ञान्तमा) अवभृथ स्नान गरेका
**ज्ञातिबन्धुसुहृद्वृतः** = बन्धुबान्धव र हितैषीहरूले युक्त भएका
**सुवासाः** = सुन्दर वस्त्र धारण गर्ने
**सुष्ठु** = राम्ररी
**अलङ्कृतः** = सिँगारिएका
**स्वज्योत्स्नया** = आफ्नो चन्द्रिकाद्वारा
**इन्दुः इव** = चन्द्रमा जैँ
**रेजे** = शोभित हुनुभयो

**वाक्यार्थ—** आफ्नी पत्नी रेवतीसँगै अवभृथस्नान सकी सुन्दर वस्त्र र आभूषणहरूद्वारा सिँगारिनुभएका बलराम आफ्ना बन्धुबान्धव र हितैषीहरूको बिचमा रहँदा किरणले युक्त चन्द्रमा

जैं सुशोभित हुनुभयो।

**ईदृग्विधान्यसङ्ख्यानि बलस्य बलशालिनः।**

**अनन्तस्याप्रमेयस्य मायामर्त्यस्य सन्ति हि ॥ ३३ ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**बलशालिनः** = परम बलशाली
**अनन्तस्य** = शेषस्वरूप
**अप्रमेयस्य** = अप्रमेय (मन, वाणीद्वारा ग्रहण गर्न नसकिने)
**मायामर्त्यस्य** = मायाद्वारा मनुष्य बन्ने
**बलस्य** = बलरामका
**ईदृग्विधानि** = यसप्रकारका
**असङ्ख्यानि** = अगणित (अनन्त) चरित्रहरू
**सन्ति** = छन्

**वाक्यार्थ–** निश्चय नै परमबलशाली शेषस्वरूप बलराम मन, वाणीद्वारा नाप्न नसकिने हुनुहुन्छ। मायाद्वारा मनुष्यशरीर धारण गर्ने उहाँका यस्ता अनन्त चरित्रहरू छन्।

**योऽनुस्मरेत रामस्य कर्माण्यद्भुतकर्मणः।**

**सायं प्रातरनन्तस्य विष्णोः स दयितो भवेत् ॥ ३४ ॥**

**पदार्थ–**
**यः** = जसले
**अद्भुतकर्मणः** = अद्भुत चरित्र भएका
**अनन्तस्य** = अनन्त
**रामस्य** = बलरामका
**कर्माणि** = चरित्रहरूलाई
**सायं** = बेलुका र
**प्रातः** = बिहान
**अनुस्मरेत** = स्मरण गर्दछ
**सः** = त्यो
**विष्णोः** = भगवान् विष्णुको
**दयितः** = प्रिय
**भवेत्** = हुन्छ

**वाक्यार्थ–** जसले अद्भुत चरित्र भएका बलरामका यस्ता लीलाहरूलाई बिहान र बेलुका स्मरण गर्दछ भने त्यो व्यक्ति भगवान् विष्णुको प्रिय हुन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**

**बलदेवतीर्थयात्रानिरूपणं नामैकोनाशीतितमोऽध्यायः ॥ ७९ ॥**

# अथाशीतितमोऽध्यायः

## भगवान् श्रीकृष्णद्वारा श्रीदामाको स्वागत

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**भगवन् यानि चान्यानि मुकुन्दस्य महात्मनः ।**
**वीर्याण्यनन्तवीर्यस्य श्रोतुमिच्छामहे प्रभो ॥ १ ॥**

**पदार्थ—**
**भगवन्** = हे भगवान् शुकदेव
**अनन्तवीर्यस्य** = अनन्त पराक्रम भएका
**महात्मनः** = महात्मा
**मुकुन्दस्य** = मुकुन्दका
**यानि** = जुन-जुन
**अन्यानि च** = अरू पनि
**वीर्याणि**= लीलाचरित्रहरू (छन्)
**प्रभो** = हे प्रभु (ती सबै)
**श्रोतुं** = सुन्न
**इच्छामि** = चाहन्छु

**वाक्यार्थ—** हे भगवान् शुकदेव ! अनन्त पराक्रम भएका महात्मा मुकुन्द भगवान्का अरू जति पनि लीलाचरित्रहरू छन्, ती सबै म सुन्न चाहन्छु ।

**को नु श्रुत्वासकृद् ब्रह्मन्नुत्तमःश्लोकसत्कथाः ।**
**विरमेत विशेषज्ञो विषण्णः काममार्गणैः ॥ २ ॥**

**पदार्थ—**
**ब्रह्मन्** = हे ब्रह्मज्ञानी शुकदेव
**काममार्गणैः** = विषयभोगको खोजी गर्दा-गर्दै
**विषण्णः** = दुःखी भएको
**विशेषज्ञः** = भगवान्को लीलारसलाई जानेको
**कः नु** = कुन चाहिँ व्यक्तिले
**उत्तमःश्लोकसत्कथाः** = पवित्रकीर्ति भएका भगवान्का सच्चरित्रहरूलाई
**असकृत्** = बारम्बार
**श्रुत्वा** = सुनेर पनि
**विरमेत** = (त्यसलाई) छोड्ला

**वाक्यार्थ—** हे श्रीशुकदेव ! विषयभोगको खोजी गर्दागर्दै दुःखी भएको र भगवान्को लीलारसबाट आनन्द लिने को त्यस्तो व्यक्ति होला जसले पवित्रकीर्ति भगवान्का सच्चरित्रहरूलाई बारम्बार सुनेर पनि त्यसलाई छाड्ला ?

**सा वाग् यया तस्य गुणान् गृणीते करौ च तत्कर्मकरौ मनश्च ।**
**स्मरेद् वसन्तं स्थिरजङ्गमेषु शृणोति तत्पुण्यकथाः स कर्णः ॥ ३ ॥**

**पदार्थ—**
**यया** = जसद्वारा
**तस्य** = ती भगवान्का
**गुणान्** = गुणहरू
**गृणीते** = ग्रहण गर्दछ भने
**सा** = त्यही

**वाक्** = वाणी हो
**तत्कर्मकरौ च** = भगवान्सम्बन्धी काम गर्ने
**करौ** = ती हात हुन्
**मनः च** = मनले चाहिँ
**स्थिरजङ्गमेषु** = स्थावर-जङ्गम सबैभित्र
**वसन्तं** = बसिरहेका परमात्मालाई
**स्मरेत्** = सम्झोस्
**तत्पुण्यकथाः** = ती भगवान्का मङ्गलमय चरित्रहरू
**शृणोति** = सुन्छ भने
**सः** = त्यही
**कर्णः** = कान हो

**वाक्यार्थ–** जुन वाणीले भगवान्का गुणहरूको कीर्तन गर्दछ त्यही असल वाणी हो, भगवान्सम्बन्धी काम गर्ने हात नै वास्तविक हात हुन्। स्थावर-जङ्गम प्राणीहरूभित्र रहने परमात्माको स्मरण गर्ने मन नै वास्तविक मन हो अनि भगवान्का मङ्गलमय चरित्रहरूलाई सुन्ने कान नै असली कान हो।

**शिरस्तु तस्योभयलिङ्गमानमेत् तदेव यत्पश्यति तद्धि चक्षुः।**
**अङ्गानि विष्णोरथ तज्जनानां पादोदकं यानि भजन्ति नित्यम्॥ ४॥**

**पदार्थ–**
**शिरः तु** = शिरले चाहिँ
**तस्य** = ती भगवान्का
**उभयलिङ्गं** = चल-अचल सबैथरी प्रतिमालाई
**आनमेत्** = प्रणाम गरोस्
**यत्** = जसले
**तदेव** = उहाँलाई नै
**पश्यति** = हेर्दछ
**तत् हि** = त्यो नै
**चक्षुः** = आँखा हो
**अथ** = त्यसै गरी
**यानि** = जसले
**विष्णोः** = भगवान् विष्णुको
**तज्जनानां** = उहाँका भक्तहरूको
**नित्यं** = सधैँ
**पादोदकं** = चरणजललाई
**भजन्ति** = लिन्छन् भने
**अङ्गानि** = तिनै अङ्गहरू हुन्

**वाक्यार्थ–** भगवान्का चल-अचल प्रतिमालाई प्रणाम गर्ने शिर नै वास्तविक शिर हो, भगवान्को दर्शन गर्ने आँखा नै वास्तविक आँखा हुन्, अनि भगवान् र उहाँका भक्तका चरणजललाई लिने अङ्गहरू नै असली अङ्गहरू हुन्।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**विष्णुरातेन सम्पृष्टो भगवान् बादरायणिः।**
**वासुदेवे भगवति निमग्नहृदयोऽब्रवीत्॥ ५॥**

**पदार्थ–**
**विष्णुरातेन** = परीक्षित्द्वारा
**सम्पृष्टः** = सोधिएका
**वासुदेवे** = वासुदेव
**भगवति** = भगवान्मा
**निमग्नहृदयः** = हृदय लीन भएका
**भगवान्** = ऐश्वर्यसम्पन्न
**बादरायणिः** = श्रीशुकदेवले
**अब्रवीत्** = भन्नुभयो

**वाक्यार्थ–** परीक्षित्ले यसरी भगवान्को सम्बन्धमा सोधेपछि ऐश्वर्यसम्पन्न श्रीशुकदेवको हृदय

भगवान् वासुदेवमा निमग्न भयो। त्यसपछि उहाँले भन्न लाग्नुभयो।

**विवरण—** माथिका श्लोकहरूमा भगवत्कथासम्बन्धी परीक्षित्को प्रश्नपछि श्रीशुकदेवले त्यसको उत्तर दिने उपक्रम गर्नुभएको वर्णन गरिएको छ। योभन्दा अघिल्ला अध्यायमा बलदेव सम्बन्धी चरित्रहरू सुनिसकेपछि परीक्षित्लाई साक्षात् भगवान्कै चरित्र सुन्ने इच्छा भयो। भगवान्को दयामय उदार चरित्र बताउने क्रममा अब श्रीशुकदेव श्रीदामाको प्रसङ्ग सम्झिँदै हुनुहुन्छ। यस प्रसङ्गमा भगवान्मा रहेका विनय, प्रेम, सद्भाव जस्ता गुणहरूको प्रकाश भएको छ। श्रीदामासँग भगवान्को आन्तरिक प्रेमसम्बन्ध, श्रीदामाको त्यागीपन एवं भगवान्ले गर्नुभएको उनको सम्मान यी सबैलाई सम्झिँदा श्रीशुकदेवको मन भगवान् वासुदेवमा निमग्न भएको छ। **निमग्नहृदयः** यो पदको अर्थ हुन्छ— भगवान्मा जसको हृदय डुबेको छ। यो पदले भगवान्मा गई चित्त पूरा हराएको या विलीन भएको अवस्थालाई सङ्केत गरेको छ। भागवतको उपदेश गर्ने क्रममा श्रीशुकदेवलाई यस्तो अवस्था जम्मा दुई पटक आएको देखिन्छ। भगवान्ले सर्वरूप धारण गरेको लीला प्रसङ्ग बताउने क्रममा उहाँका सबै इन्द्रिय अनन्त परमात्मामा लीन भएको र बल्ल बल्ल उहाँले परिश्रमपूर्वक बाहिरतिर फर्काउनुभएको बताइएको छ— **कृच्छ्रात् पुनर्लब्धबहिर्दृशिः** (भागवत १०।१२।४४)। यहाँ पनि शुकदेवको हृदय परमात्मामा विलीन भएको बताइएको छ। यी दुबै लीलामा परमात्माको विशेष दयामयता प्रकट भएको छ। भगवान्ले दुष्टदमन गरेर भक्तमाथि दया गर्दा त्यहाँ क्रूरताको अंश पनि मिसिएको छ। तर प्रेम र करुणाको आधारमा भक्तमाथि दया गरेको र स्वयं आफूलाई नै भक्तप्रति समर्पित गरिदिएको वेलामा झनै विशेषता हुन्छ। श्रीदामालीला त्यस्तै विशेष लीला हो।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**कृष्णस्यासीत् सखा कश्चिद् ब्राह्मणो ब्रह्मवित्तमः।**
**विरक्त इन्द्रियार्थेषु प्रशान्तात्मा जितेन्द्रियः॥ ६॥**

**पदार्थ—**
**कृष्णस्य** = भगवान् श्रीकृष्णका
**कश्चित्** = कुनै
**सखा** = साथी
**इन्द्रियार्थेषु** = इन्द्रियद्वारा ग्रहण गरिने विषयहरूमा
**विरक्तः** = राग नभएका
**प्रशान्तात्मा** = मन शान्त भएका
**जितेन्द्रियः** = इन्द्रिय जितेका
**ब्रह्मवित्तमः** = ब्रह्मज्ञानीहरूमध्ये श्रेष्ठ
**ब्राह्मणः** = ब्राह्मण
**आसीत्** = थिए

**वाक्यार्थ—** भगवान् श्रीकृष्णका कुनै साथी इन्द्रियद्वारा ग्रहण गरिने विषयहरूबाट विरक्त, मन शान्त भएका, इन्द्रिय जितेका र ब्रह्मज्ञानीहरूमध्ये श्रेष्ठ ब्राह्मण थिए।

**यदृच्छयोपपन्नेन वर्तमानो गृहाश्रमी।**
**तस्य भार्या कुचैलस्य क्षुत्क्षामा च तथाविधा॥ ७॥**

**पदार्थ–**
**गृहाश्रमी** = गृहस्थ (भएर पनि) उनी
**यदृच्छया** = अचानक
**उपपन्नेन** = प्राप्त भएको
वस्तुद्वारा
**वर्तमानः** = जीवन धारण गरिरहेका थिए
**कुचैलस्य** = फाटेका पुराना वस्त्र लगाउने
**तस्य** = उनकी
**भार्या च** = पत्नी पनि
**तथाविधा** = उनीजस्तै
**क्षुत्क्षामा** = भोकले दुब्लाएकी थिइन्

**वाक्यार्थ–** गृहस्थ भएर पनि उनी अचानक प्राप्त भएको वस्तुबाट जीवन निर्वाह गर्दथे, फाटेका पुराना वस्त्र लगाउँथे, अनि उनकी पत्नी पनि उनीजस्तै भोकले दुब्लाएकी थिइन्।

**पतिव्रता पतिं प्राह म्लायता वदनेन सा।**
**दरिद्रा सीदमाना सा वेपमानाभिगम्य च ॥ ८ ॥**

**पदार्थ–**
**सा** = ती
**पतिव्रता** = पतिव्रता स्त्री
**दरिद्रा** = अत्यन्त दरिद्र र
**सीदमाना च** = दुःखी पनि
थिइन्
**वेपमाना** = भोकले काम्दै
**अभिगम्य** = (श्रीदामाको) अगाडि आई
**सा** = उनले
**म्लायता** = निन्याउरो
**वदनेन** = अनुहार बनाउँदै
**पतिं** = पतिलाई
**प्राह** = भनिन्

**वाक्यार्थ–** ती पतिव्रता स्त्री अत्यन्त दरिद्र र दुःखी थिइन्। एक दिन भोकले काम्दै श्रीदामाको अगाडि आएर उनले निन्याउरो अनुहार बनाउँदै पतिलाई यसो भनिन्।

**ननु ब्रह्मन् भगवतः सखा साक्षाच्छ्रियः पतिः।**
**ब्रह्मण्यश्च शरण्यश्च भगवान् सात्वतर्षभः ॥ ९ ॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्राह्मण
**ननु** = निश्चय नै
**भगवतः** = हजुरका
**सखा** = साथी
**सात्वतर्षभः** = सात्वत वंशमा श्रेष्ठ
**भगवान्** = भगवान् श्रीकृष्ण
**साक्षात्** = साक्षात्
**श्रियः** = लक्ष्मीका
**पतिः** = स्वामी
**ब्रह्मण्यः च** = ब्राह्मणभक्त एवं
**शरण्यः च** = शरणागतवत्सल पनि हुनुहुन्छ

**वाक्यार्थ–** हे ब्राह्मण ! हजुरका साथी सात्वत वंशमा श्रेष्ठ भगवान् श्रीकृष्ण साक्षात् लक्ष्मीका स्वामी, ब्राह्मणभक्त र शरणागतवसत्सल पनि हुनुहुन्छ।

**तमुपैहि महाभाग साधूनां च परायणम्।**
**दास्यति द्रविणं भूरि सीदते ते कुटुम्बिने ॥ १० ॥**

**पदार्थ–**
**महाभाग** = हे महाभाग्यशाली
**साधूनां** = सत्पुरुषहरूका

**परायणं** = एक मात्र आश्रय
**तं** = उहाँकै
**उपैहि** = नजिक जानुहोस्
**सीदते** = दुःखी भइरहेका
**कुटुम्बिने** = गृहस्थ
**ते** = हजुरलाई
**भूरि** = धेरै
**द्रविणं च** = सम्पत्ति पनि
**दास्यति** = दिनुहुनेछ

**वाक्यार्थ–** हे महाभाग्यशाली ! हजुर सत्पुरुषहरूका एक मात्र आश्रय भएका उहाँकै नजिक जानुहोस्। दुःखी गृहस्थ हजुरलाई उहाँले धेरै धन दिनुहुनेछ।

**आस्तेऽधुना द्वारवत्यां भोजवृष्ण्यन्धकेश्वरः।**
**स्मरतः पादकमलमात्मानमपि यच्छति ॥**
**किं न्वर्थकामान् भजतो नात्यभीष्टाञ्जगद्गुरुः ॥ ११ ॥**

**पदार्थ–**
**भोजवृष्ण्यन्धकेश्वरः** = भोज, वृष्णि र अन्धकवंशका स्वामी
**जगद्गुरुः** = जगद्गुरु उहाँ
**अधुना** = अहिले
**द्वारवत्यां** = द्वारकामा
**आस्ते** = रहनुहुन्छ
**पादकमलं** = चरणकमललाई
**स्मरतः** = स्मरण गर्नेहरूका लागि
**आत्मानम् अपि** = आफैँलाई पनि
**यच्छति** = दिनुहुन्छ भने
**भजतः** = आफ्ना भक्तहरूलाई
**न अत्यभीष्टान्** = धेरै चाहन योग्य नभएका
**अर्थकामान्** = सम्पत्ति र विषयभोग दिनु
**किं नु** = के नौलो भयो र

**वाक्यार्थ–** भोज, वृष्णि र अन्धकवंशका स्वामी उहाँ अहिले द्वारकामा हुनुहुन्छ। आफ्नो चरणकमलको सम्झना गर्नेहरूका लागि उहाँले आफैँलाई समेत दिनुहुन्छ भने आफ्ना भक्तहरूलाई धेरै चाहन योग्य नभएका सम्पत्ति र विषयभोग दिनु के नौलो भयो र ?

**विवरण–** माथिको प्रसङ्गमा श्रीदामा दम्पतीमा रहेको आर्थिक दरिद्रता बताइएको छ। श्रीशुकदेवले श्रीदामाको विषयमा बताउँदै यी गृहस्थ भए पनि स्वतः प्राप्त भएका वस्तुहरूबाट गुजारा चलाउने विरक्त ब्रह्मज्ञानी थिए भनी बताउनुभएको छ। श्रीदामा भोका–नाङ्गा रहन्थे, सँगसँगै उनकी पत्नी पनि त्यही भोको–नाङ्गो जीवन बिताउँथिन्। पतिको विरक्तिपूर्ण जीवनमा पत्नी पनि रहनुले पत्नीमा श्रीदामाप्रति भएको समर्पणभावको परिचय दिएको छ। पति दरिद्र एवं असमर्थ छन् भन्दैमा उनले आफ्नो पतिको अपमान गरेकी छैनन्, पति–पत्नीको बिचमा हुने यही समर्पणभावले गृहस्थ जीवनलाई परमार्थसाधनामय बनाइदिन्छ। पैसा र सुविधाका लागि आपसमा प्रेम हुनु कुनै ठुलो कुरो होइन, यो त केवल स्वार्थी आसक्तिपूर्ण भाव हो। यदि कष्टको बिचमा पनि साथ मिल्यो भने पति–पत्नी हुनुको सार्थकता हुन्छ। भोका श्रीदामासँग भोकाएकी उनकी पत्नीले बोल्दा **महाभाग** अर्थात् हे परम सौभाग्यवान् भनी सम्बोधन गरेकी छिन्। निर्धन हुनु दुर्भाग्य होइन, अपि तु आफ्नो चरित्र र नियमबाट तल खस्किनु दुर्भाग्य एवं लज्जाको विषय हो। विपत्तिमा पनि साथ दिने यस्ती धर्मपत्नी पाएकैले श्रीदामाको जीवन परमात्मप्रेममा मुग्ध हुन सकेको हो। भोकले कामिरहेकी दरिद्रा पत्नीले मलिन अनुहार लगाउँदै आफ्ना पतिलाई भनिन्– हे पतिदेव ! हजुरका साथी साक्षात् लक्ष्मीका पति हुनुहुन्छ र उहाँ ब्राह्मणहरूको कष्टलाई तत्काल

हरण गर्नुहुन्छ। उहाँकहाँ जानुहोस्, उहाँले पक्कै पनि हजुरलाई गृहस्थ भन्ने जानी धेरै धन दिनुहुनेछ। उनी भन्छिन्– भगवान् आफ्ना भक्तहरूलाई आफ्नै स्वरूप त दिनुहुन्छ भने तुच्छ धनसम्पत्ति दिनु के नौलो भयो र ? यहाँ भगवान्सँग जीविका चलाउन पुग्ने सम्पत्ति माग्नुपर्ने सुझाव श्रीदामालाई उनकी पत्नीले दिएकी छिन्।

यस प्रसङ्गमा प्रशस्त शङ्काहरू उत्पन्न हुन्छन्। सर्वान्तर्यामी श्रीकृष्ण के आफ्ना भक्तको दुरवस्थालाई जान्नुहुन्नथ्यो ? के उहाँलाई भक्तले आफ्नो दरिद्रता बताउनुपर्दछ ? भगवान्ले भक्तको योगक्षेम वहन गर्ने प्रतिज्ञा बिर्सनुभयो ? यदि भक्तले आफ्नो जीविकाको चिन्ता आफैँ गर्नुपर्दछ भने उसले परमात्मचिन्तन कहिले गर्ने ? आदि। तर पनि यहाँ अव्यक्त रूपमा परमात्माले भक्तप्रति दया नै गर्नुभएको देखिन्छ। सबभन्दा मुख्य समस्या भक्तले दुःख पाउँदा भगवान्ले किन जोगाउनुभएन भन्ने हो। यसको उत्तर हो– भक्त विषयभोग नपाउँदा दुःखी एवं सन्तप्त हुँदै हुँदैन। भक्तिको अमृत पिएर मस्त भएको व्यक्तिले न संसारका भोगको आशा गर्दछ, न त ऊ तिनको भरमा बाँचेको नै हुन्छ। भक्तको प्राण एवं आत्मा पनि भगवान् नै भएकाले यी दुईको प्रेमसम्बन्धको विषयमा बाह्यदृष्टि भएका संसारीहरूले अड्कलबाजी गर्नुको केही अर्थ रहँदैन। यदि भक्तले दुःख पाएकै छ भनी कल्पना गर्ने हो भने पनि त्यो दुःख उसको लागि परम औषधिसमान हुन्छ। विपत्तिमा दृढतापूर्वक परमात्मस्मरण हुन्छ। सम्पत्ति प्राप्त भएपछि त्यसैको चिन्तन हुन थाल्छ। यसरी परमात्मालाई नै बिर्सनु त दरिद्र हुनुभन्दा झन् भयानक स्थिति हो। संसारका असत्य पदार्थलाई नपाउँदा यदि सत्य परमात्माको सम्झना हुन्छ भने त्यो अभाव सम्पत्तिभन्दा लाखौं गुणा बढी हितकारक हुन्छ। सम्पत्ति पाई आफैँलाई बिर्सनुभन्दा भक्त यही स्थितिमा रहन बढी मन पराउँछ र भक्तको वास्तविक हित पनि यसैमा छ। भगवान्ले भक्तको योगक्षेम वहन गर्छु भनेको उनीहरूको हित गर्छु भन्नुभएको हो, जुन काम परमात्माले गरिरहनुभएकै छ। फेरि दुःख भएन भने भक्तको उच्च महिमा कसरी प्रकाशित हुन्छ र ? दुःख एवं आपत्तिको बिचमा पनि अडिग रहनु भक्तको विशेषता हो। लोकोत्तर सामर्थ्यलाई प्रकट गरी भक्तको महत्त्व बढाउन पनि परमात्माले वेलावेलामा यस्ता परीक्षा गर्नुहुन्छ।

श्रीदामाकी पत्नीले पतिलाई भगवान्सँग सम्पत्ति अन्न आदि माग्न सुझाव दिनुले पनि केही शङ्का उत्पन्न गरेको छ। भक्तले निष्काम भावले परमात्मसेवा गर्नुपर्दछ। यदि संसारका वस्तुहरू चाहेर उसले भक्ति गऱ्यो भने त्यो भक्ति नभई व्यापार हो। उसो भए यिनले किन भगवान्सँग अन्न, वस्त्र आदि चाहिन् ? यो शङ्काको उत्तर रहस्यमय छ। भक्तहरू जब केही कसैसँग माग्नुपऱ्यो भने उनीहरू त्यो वस्तु भगवान्सँग नै माग्दछन्। भगवान् निष्काम एवं आप्तकाम हुनुभएकाले उहाँसँग जे माध्यमले सम्बन्ध राखे पनि त्यो सम्बन्ध निष्काम नै हुन्छ। भक्तले परमात्मासँग भावपूर्ण भई प्रार्थना गऱ्यो र परमात्माले मागेको वस्तु उसलाई दिनुभयो भने त्यो परमात्माबाट प्राप्त प्रसाद हुन्छ र त्यो वस्तु सांसारिक नै देखिए पनि त्यसले संसारको बन्धनमा पार्दैन। यसैले भगवान्को भक्तले **अकामः सर्वकामो वा** अर्थात् केही कामना नभए पनि वा जुनसुकै कामना भए पनि परमात्माकै सेवा गर्नुपर्दछ। यो प्रसङ्ग केवल भक्तहरूका लागि हो, अभक्त राक्षस आदिका लागि होइन। अभक्तले परमात्माबाट लौकिक वर माग्दा तिनको नाश नै भएको देखिन्छ, तर

भक्तको माग प्रेम र श्रद्धाले भरिएको हुन्छ। अभक्तहरू वस्तुको प्राप्ति भएपछि केवल त्यसकै चिन्तन गर्दछन्, तर भक्तहरू भगवान्सँग केही माग्नु अघि अनि पछि पनि वरदाता उनै परमात्माको कीर्ति गाइरहन्छन्। सानो बच्चाले आमाबाट दुध पिउन खोज्नु कहीँ अमिल्दो हुन्छ र ? त्यसैले भक्तहरूले परमात्माबाट आवश्यक वस्तुको माग गर्नु अनुचित छैन र यो कामनाले तिनलाई संसारी बनाउँदैन। जो सम्पत्ति आदिलाई भगवान्को प्रसाद सम्झी भोग गर्दछ, त्यो भक्त कसरी बन्धनमा पर्न सक्छ ? यसरी भक्तहरूले आफ्ना स्वामीसँग अत्यावश्यक वस्तुहरूको कहिलेकाहीँ माग गर्नुले तिनको अनन्यता र निष्कामतामा हानि हुँदैन। किनभने त्यो कामनाले परमात्माकै सम्झना दिलाइरहेको हुन्छ।

अर्को प्रकारले विचार गर्दा भक्तहरूले परमात्मासँग कुनै वस्तुको माग गरे भने त्यो उनीहरूको स्वार्थको कारणले मागिएको हुँदैन। भक्त परमात्माको कीर्ति सबैतिर फैलिएको देख्न र सुन्न चाहन्छन्। यदि भगवान्का भक्तहरू नै दुःखी, सन्तप्त भए भने नास्तिकहरूले त्यसलाई दृष्टान्त बनाई परमात्माको निन्दा गर्न र उहाँ भक्तवत्सल नभएको सिद्ध गर्न थाल्दछन्। भगवान्लाई यो दुर्नामबाट बचाउनकै लागि भक्त आफ्नो दुरवस्था हटाइदिन भगवान्सँग प्रार्थना गर्दछन्। यो प्रार्थनामा स्वार्थको दुर्गन्ध होइन, परमात्माको कीर्ति फैलाउने र उहाँ भक्तवत्सल भएको सिद्ध गर्ने भावको सुवास छ। के भक्तले दुःख परेको वेलामा भगवान्को अघि हात फैलाउन पाउँदैन ? उहाँ बाहेक अर्को कोसँग हात फैलाउने त ? अरूका अघि हात फैलाएर पनि भगवान्का अघि निष्काम रहनुपर्दछ भन्ने भाव पनि दूषित आग्रह हो। त्यसैले यहाँ श्रीदामाकी पत्नीले भगवान्सँग केही माग्ने चाहना गरेकी हुन्।

**स एवं भार्यया विप्रो बहुशः प्रार्थितो मृदु ।**
**अयं हि परमो लाभ उत्तमःश्लोकदर्शनम् ॥ १२ ॥**
**इति सञ्चिन्त्य मनसा गमनाय मतिं दधे ।**
**अप्यस्त्युपायनं किञ्चिद् गृहे कल्याणि दीयताम् ॥ १३ ॥**

**पदार्थ—**
**एवं** = यसप्रकार
**भार्यया** = पत्नीद्वारा
**बहुशः** = बारम्बार
**मृदु** = नम्रतापूर्वक
**प्रार्थितः** = प्रार्थना गरिएका
**सः** = ती
**विप्रः** = ब्राह्मणले
**उत्तमःश्लोकदर्शनं** = पवित्रकीर्ति भगवान्को दर्शन गर्नु
**अयं हि** = यही नै
**परमः** = सबैभन्दा ठुलो
**लाभः** = लाभ हो
**इति** = यस्तो
**मनसा** = मनले
**सञ्चिन्त्य** = विचार गरेर
**गमनाय** = जानका लागि
**मतिं** = निश्चय
**दधे** = गरे (र भने)
**कल्याणि** = हे कल्याणी
**गृहे** = घरमा
**किञ्चित्** = केही
**उपायनं** = उपहार
**अपि अस्ति** = छ कि
**दीयताम्** = देऊ

**वाक्यार्थ–** यसप्रकार पत्नीद्वारा बारम्बार नम्रतापूर्वक प्रार्थना गरिएका ती ब्राह्मणले मनमनै के सोचे भने पवित्रकीर्ति भगवान्‌को दर्शन गर्नु यही नै मानवजीवनको ठुलो लाभ हो। यसैले उनले द्वारकामा जाने निश्चय गरे र पत्नीलाई भने– हे कल्याणमयी ! घरमा केही उपहार दिने वस्तु छ भने मलाई देऊ।

**याचित्वा चतुरो मुष्टीन् विप्रान् पृथुकतण्डुलान्।**
**चैलखण्डेन तान् बद्ध्वा भर्त्रे प्रादादुपायनम्॥ १४॥**

**पदार्थ–**
**विप्रान्** = ब्राह्मणहरूबाट
**चतुरः मुष्टीन्** = चार मुठी
**पृथुकतण्डुलान्** = चिउरा
**याचित्वा** = मागेर
**चैलखण्डेन** = कपडाको टुक्राले
**तान्** = तिनलाई
**बद्ध्वा** = बाँधेर
**भर्त्रे** = पतिलाई
**उपायनं** = भगवान्‌लाई चढाउने उपहार
**प्रादात्** = दिइन्

**वाक्यार्थ–** ब्राह्मणका घरबाट चार मुठी चिउरा मागेर तिनले कपडाको टुक्राले त्यसलाई बाँधिन् अनि आफ्ना पतिलाई भगवान्‌का लागि उपहार भनी दिइन्।

**स तानादाय विप्राग्र्यः प्रययौ द्वारकां किल।**
**कृष्णसन्दर्शनं मह्यं कथं स्यादिति चिन्तयन्॥ १५॥**

**पदार्थ–**
**किल** = निश्चय नै
**तान्** = ती चार मुठी चिउरा
**आदाय** = लिएर
**विप्राग्र्यः** = ब्राह्मणश्रेष्ठ
**सः** = ती श्रीदामा
**मह्यं** = मलाई
**कृष्णसन्दर्शनं** = श्रीकृष्णको दर्शन
**कथं** = कसरी
**स्यात्** = होला भन्ने
**इति** = यस्तो
**चिन्तयन्** = विचार गर्दै
**द्वारकां** = द्वारका
**प्रययौ** = गए

**वाक्यार्थ–** त्यो चार मुठी चिउरा लिएर ती ब्राह्मणश्रेष्ठ श्रीदामा मलाई श्रीकृष्णको दर्शन कहिले होला भन्ने सोच्दै द्वारका गए।

**विवरण–** माथिका श्लोकमा श्रीदामामा रहेको अकिञ्चनपना र प्रेमभाव प्रकट भएको छ। यहाँ श्रीदामालाई आफ्नो अतिशय गरिबीको पनि खासै चिन्ता नभएको देखिन्छ। पतिव्रता पत्नीले बारम्बार आग्रह गरेपछि मात्र श्रीदामा भगवान् श्रीकृष्णकहाँ जान तयार भएका हुन्। पत्नीले भगवान्‌कहाँ गई केही सम्पत्ति ल्याउन प्रार्थना गरेकी थिइन्, तर श्रीदामा सम्पत्ति पाउने आशाले नभई केवल श्रीकृष्णको दर्शनका लागि मात्र त्यहाँ जान तयार भए। पवित्रकीर्ति परमात्माको दर्शन हुनु नै सबभन्दा ठुलो लाभ हो भन्ने सोची श्रीदामा भगवान्‌कहाँ गए। हुन पनि संसारका वस्तुहरूलाई जति महत्त्व दिए पनि आखिरमा ती असत्य वस्तु हुन्। तिनको प्राप्तिमा खुसी हुनुपर्ने केही कारण छैन, किनभने ती सबै एक दिन अवश्य बिलाउनेछन्। सत् वस्तु त परमात्मा मात्र हुनुहुन्छ। सपनाको करौडौँ रूपैँयाभन्दा जाग्रत् अवस्थाको एक रुपैयाँको बढी महत्त्व हुन्छ। ठिक

यसै गरी संसारका असत्य पदार्थहरूभन्दा परमात्मदर्शन जहिले पनि बढी मूल्यवान् हुन्छ। त्यसैले श्रीदामाको मनमा नाशवान् वस्तुहरूप्रति आसक्ति थिएन, केवल परमात्मदर्शन गर्ने इच्छा मात्र थियो। **रिक्तपाणिर्न पश्येत राजानं देवतां गुरुम्** अर्थात् खाली हात गएर राजा, देवता र गुरुहरूको दर्शन नगर्नू भन्ने नीति छ। श्रीदामा भगवान्कहाँ जाँदा आफ्नो घरमा भएको वस्तु उपहारको रूपमा लैजान चाहन्छन्। **अपि अस्ति** अर्थात् केही छ कि ? भन्ने सोधाइभित्र घरमा पक्कै केही पनि छैन होला भन्ने भाव झल्किएको छ। श्रीदामाकी पत्नी भगवान्लाई दिनका लागि चार मुठी चिउरा माग्न अर्काको घरमा पुग्छिन् र त्यसलाई एउटा कपडाको टुक्रामा बाँधी श्रीदामालाई दिन्छिन्। श्रीदामादम्पतीले स्वतः प्राप्त भएको अन्न आदिले मात्र जीविका चलाउँथे। भगवान्लाई उपहार दिनका लागि त केही माग्नै पनि पर्‍यो भनेर माग्दा चार मुठी चिउरा मिल्यो। चिउरा माग्न श्रीदामा नभई उनकी पत्नी नै गएको बताइएको छ। यसबाट श्रीदामा अयाचित वृत्तिमा रहेको पुष्टि हुन्छ। यसरी केवल कृष्णदर्शन गर्ने इच्छाले मात्र श्रीदामा भगवान्कहाँ गएको देखिन्छ।

**त्रीणि गुल्मान्यतीयाय तिस्रः कक्षाश्च सद्विजः।**
**विप्रोऽगम्यान्धकवृष्णीनां गृहेष्वच्युतधर्मिणाम्॥ १६॥**

**पदार्थ–**
**सद्विजः** = अरू ब्राह्मणहरूले सहित
**विप्रः** = ती श्रीदामा
**त्रीणि** = तीन वटा
**गुल्मानि** = छाउनी र
**तिस्रः** = तीन वटा
**कक्षाः च** = चौबाटाहरू पनि
**अतीयाय** = पार गरेर
**अच्युतधर्मिणां** = भगवद्धर्ममा निष्ठावान्
**अगम्यान्धकवृष्णीनां** = अगम्य भएका अन्धक र वृष्णिहरूका
**गृहेषु** = घरहरू भएको ठाउँमा (पुगे)

**वाक्यार्थ–** ती श्रीदामा अरू ब्राह्मणहरूले सहित भई तीन वटा छाउनी अनि तीन चौबाटाहरूलाई पनि पार गरेर भगवद्धर्मको पालन गर्ने वृष्णि र अन्धकवंशीहरूका अगम्य घरहरूमा पुगे।

**गृहं द्वयष्टसहस्राणां महिषीणां हरेर्द्विजः।**
**विवेशैकतमं श्रीमद् ब्रह्मानन्दं गतो यथा॥ १७॥**

**पदार्थ–**
**हरेः** = भगवान्का
**द्वयष्टसहस्राणां** = सोह्र हजार
**महिषीणां** = रानीहरूका
**गृहं** = घरहरू थिए
**द्विजः** = ती श्रीदामा
**ब्रह्मानन्दं** = ब्रह्मानन्दलाई
**गतः यथा** = पाए झैं
**एकतमं** = एउटा कुनै
**श्रीमत्** = ऐश्वर्यसम्पन्न घरभित्र
**विवेश** = प्रवेश गरे

**वाक्यार्थ–** त्यहाँ भगवान्का सोह्र हजार रानीहरूका घरहरू थिए। श्रीदामा तीमध्ये कुनै एउटा घरमा प्रवेश गरे र उनलाई त्यहाँ ब्रह्मानन्द प्राप्त गरे झैं भयो।

**तं विलोक्याच्युतो दूरात् प्रियापर्यङ्कमास्थितः ।**

**सहसोत्थाय चाभ्येत्य दोर्भ्यां पर्यग्रहीन्मुदा ॥ १८ ॥**

**पदार्थ–**
**प्रियापर्यङ्कं** = प्रिया रुक्मिणीको पलङ्गमा
**आस्थितः** = बसिरहनुभएका
**अच्युतः** = भगवान् श्रीकृष्ण
**दूरात्** = टाढैबाट
**तं** = ती श्रीदामालाई
**विलोक्य** = देखेर
**सहसा** = झटपट
**उत्थाय** = उठेर
**अभ्येत्य च** = नजिकै आएर
**मुदा** = प्रसन्नतापूर्वक
**दोर्भ्यां** = दुबै हातद्वारा
**पर्यग्रहीत्** = अँगाल्नुभयो

**वाक्यार्थ–** भगवान् रुक्मिणीको पलङ्गमा बसिरहनुभएको थियो। उहाँले टाढैबाट श्रीदामालाई आउँदै गरेको देख्नुभयो अनि झटपट उनको नजिकै आई दुबै हातले प्रसन्नतापूर्वक अँगालो मार्नुभयो।

**सख्युः प्रियस्य विप्रर्षेरङ्गसङ्गातिनिर्वृतः ।**

**प्रीतो व्यमुञ्चदब्बिन्दून् नेत्राभ्यां पुष्करेक्षणः ॥ १९ ॥**

**पदार्थ–**
**प्रियस्य** = आफ्ना प्रिय
**सख्युः** = साथी
**विप्रर्षेः** = ब्राह्मण श्रीदामाको
**अङ्गसङ्गातिनिर्वृतः** = अङ्कमालबाट अत्यन्त आनन्दित र
**प्रीतः** = प्रसन्न हुनुभएका
**पुष्करेक्षणः** = कमलनयन भगवान्ले
**नेत्राभ्यां** = दुबै आँखाबाट
**अब्बिन्दून्** = आँसुका थोपाहरू
**व्यमुञ्चत्** = खसाउनुभयो

**वाक्यार्थ–** आफ्ना प्रिय साथी ती श्रीदामाको अङ्कमालबाट अत्यन्त आनन्दित र प्रसन्न हुनुभएका कमलनयन भगवान्ले आफ्ना दुबै आँखाबाट आँसुका थोपाहरू खसाल्नुभयो।

**अथोपवेश्य पर्यङ्के स्वयं सख्युः समर्हणम् ।**

**उपहृत्यावनिज्यास्य पादौ पादावनेजनीः ॥ २० ॥**

**अग्रहीच्छिरसा राजन् भगवांल्लोकपावनः ।**

**व्यलिम्पद् दिव्यगन्धेन चन्दनागुरुकुङ्कुमैः ॥ २१ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**अथ** = यसपछि
**पर्यङ्के** = पलङ्गमा
**उपवेश्य** = राखेर
**स्वयं** = आफैँ
**समर्हणं** = पूजासामग्री
**उपहृत्य** = ल्याई
**सख्युः** = साथीको
**पादौ** = दुबै पाउलाई
**अवनिज्य** = पखालेर
**लोकपावनः** = सम्पूर्ण लोकलाई पवित्र गराउने
**भगवान्** = भगवान् श्रीकृष्णले
**अस्य** = यी श्रीदामाको
**पादावनेजनीः** = चरण पखालेको जललाई
**शिरसा** = शिरले

**अग्रहीत्** = ग्रहण गर्नुभयो अनि
**चन्दनागुरुकुङ्कुमैः** = चन्दन, अगुरु र कुङ्कुम आदि मिसिएको
**दिव्यगन्धेन** = दिव्य लेपद्वारा
**व्यलिम्पत्** = (श्रीदामाको शरीरमा) लेपन गर्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! यसपछि भगवान्ले उनलाई आफ्नै पलङ्गमा राखी पूजासामग्री ल्याउनुभयो र उनका दुबै पाउ पखाल्नुभयो। सम्पूर्ण लोकहरूलाई पवित्र गराउनुहुने भगवान्ले त्यो चरणजललाई आफ्नो शिरमा लगाउनुभयो र उनको शरीरमा चन्दन, अगुरु, कुङ्कुम आदि मिसिएको दिव्य गन्धको लेपन गर्नुभयो।

**धूपैः सुरभिभिर्मित्रं प्रदीपावलिभिर्मुदा।**
**अर्चित्वावेद्य ताम्बूलं गां च स्वागतमब्रवीत्॥ २२॥**

**पदार्थ–**
**मित्रं** = आफ्ना साथीलाई
**सुरभिभिः** = सुगन्धित
**धूपैः** = धूपहरूद्वारा
**प्रदीपावलिभिः** = दीपमालिका-द्वारा पनि
**अर्चित्वा** = पूजा गरेर
**मुदा** = प्रसन्नतापूर्वक
**ताम्बूलं** = पान एवं
**गां च** = गाई पनि
**आवेद्य** = समर्पित गरी
**स्वागतम्** = स्वागत छ
**अब्रवीत्** = भन्नुभयो

**वाक्यार्थ–** उहाँले आफ्ना साथीलाई सुगन्धित धूप र दीपमालिकाद्वारा पनि पूजा गर्नुभयो र खुसी हुँदै पान एवं गाई समर्पित गरी स्वागत छ भन्नुभयो।

**कुचैलं मलिनं क्षामं द्विजं धमनिसन्ततम्।**
**देवी पर्यचरत् साक्षाच्चामरव्यजनेन वै॥ २३॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**कुचैलं** = फाटेका पुराना वस्त्र लगाएका
**मलिनं** = मलिन
**क्षामं** = दुर्बल
**धमनिसन्ततं** = सम्पूर्ण नसाहरू बाहिरै देखिएका
**द्विजं** = ती ब्राह्मणलाई
**साक्षात्** = साक्षात्
**देवी** = लक्ष्मीरूपिणी रुक्मिणीले
**चामरव्यजनेन** = चमर र पङ्खाद्वारा
**पर्यचरत्** = सेवा गरिन्

**वाक्यार्थ–** फाटेका पुराना वस्त्रहरू लगाएका, शरीर पनि अत्यन्त मैलो र दुर्बल भएका ती ब्राह्मणका शरीरका सारा नसाहरू बाहिरै निस्किए झैं देखिन्थे। साक्षात् लक्ष्मीरूपिणी रुक्मिणीले चमर र पङ्खा हल्लाई ती ब्राह्मणको सेवा गरिन्।

**अन्तःपुरजनो दृष्ट्वा कृष्णेनामलकीर्तिना।**
**विस्मितोऽभूदतिप्रीत्या अवधूतं सभाजितम्॥ २४॥**

**पदार्थ—**
**अन्तःपुरजनः** = अन्तःपुरमा बस्ने मानिसहरू
**अमलकीर्तिना** = निर्मल कीर्ति भएका
**कृष्णेन** = भगवान् श्रीकृष्णद्वारा
**अतिप्रीत्या** = अत्यन्त प्रेमपूर्वक
**सभाजितं** = सेवा गरिएका
**अवधूतं** = अवधूतलाई
**दृष्ट्वा** = देखेर
**विस्मितः** = आश्चर्यचकित
**अभूत्** = भए

**वाक्यार्थ—** अन्तःपुरमा बस्ने मानिसहरू निर्मल कीर्ति भएका भगवान् श्रीकृष्णले अत्यन्त प्रेमपूर्वक ती अवधूतको सेवा गरेको देखेर आश्चर्यचकित भए।

**किमनेन कृतं पुण्यमवधूतेन भिक्षुणा।**
**श्रिया हीनेन लोकेऽस्मिन् गर्हितेनाधमेन च॥ २५॥**
**योऽसौ त्रिलोकगुरुणा श्रीनिवासेन सम्भृतः।**
**पर्यङ्कस्थां श्रियं हित्वा परिष्वक्तोऽग्रजो यथा॥ २६॥**

**पदार्थ—**
**अस्मिन्** = यो
**लोके** = लोकमा
**अवधूतेन** = नाङ्गो
**श्रिया** = सम्पत्ति
**हीनेन** = रहित
**गर्हितेन** = निन्दित र
**अधमेन च** = निकृष्ट
**अनेन** = यो
**भिक्षुणा** = मगन्तेले
**किं** = के
**पुण्यं** = पुण्य
**कृतं** = गरेछ
**यः असौ** = जुन यो भिक्षुक
**त्रिलोकगुरुणा** = तीनै लोकका गुरु
**श्रीनिवासेन** = लक्ष्मीपतिद्वारा
**सम्भृतः** = सेवित भयो र
**पर्यङ्कस्थां** = पलङ्गमा बसिरहेकी
**श्रियं** = लक्ष्मीरूपिणी रुक्मिणीलाई
**हित्वा** = छाडी
**अग्रजः यथा** = दाजु झैँ
**परिष्वक्तः** = अङ्कमाल गरियो

**वाक्यार्थ—** यो लोकमा सम्पत्तिले रहित, निन्दित र निकृष्ट यो अवधूत मगन्तेले के त्यस्तो पुण्य गरेछ, जसलाई तीनै लोकका गुरु लक्ष्मीपति श्रीकृष्णले सेवा गर्नुभयो। उहाँले पलङ्गमा बसिरहेकी रुक्मिणीलाई छाडी आफ्ना दाजुको सम्मान गरे झैँ झटपट उठी यसलाई अङ्कमाल गर्नुभयो।

**कथयाञ्चक्रतुर्गाथाः पूर्वा गुरुकुले सतोः।**
**आत्मनोर्ललिता राजन् करौ गृह्य परस्परम्॥ २७॥**

**पदार्थ—**
**राजन्** = हे राजा परीक्षित्
**परस्परं** = आपसमा
**करौ** = हात
**गृह्य** = समातेर
**गुरुकुले** = गुरुकुलमा
**सतोः** = भएका
**आत्मनोः** = आफू दुईबिचको
**पूर्वाः** = पहिलेका
**ललिताः** = सुमधुर
**गाथाः** = कथाहरू
**कथयाञ्चक्रतुः** = भन्न थाल्नुभयो

**वाक्यार्थ—** हे परीक्षित्! भगवान् श्रीकृष्ण र श्रीदामाले आपसमा हात समातेर गुरुकुलमा रहँदा

आफू दुईबिचमा भएका सुमधुर संस्मरणहरू सुनाउन थाल्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**अपि ब्रह्मन् गुरुकुलाद् भवता लब्धदक्षिणात्।**

**समावृत्तेन धर्मज्ञ भार्योढा सदृशी न वा॥ २८॥**

पदार्थ–
**धर्मज्ञ** = हे धर्म जान्ने
**ब्रह्मन्** = ब्राह्मणदेव
**लब्धदक्षिणात्** = दक्षिणा पाइसकेका
**गुरुकुलात्** = गुरुकुलबाट
**समावृत्तेन** = स्नातक बनेर फर्किसकेका
**भवता अपि** = हजुरद्वारा पनि
**सदृशी** = आफूलाई सुहाउने
**भार्या** = पत्नी
**ऊढा न वा** = विवाह गरियो कि गरिएन

**वाक्यार्थ–** हे धर्म जान्ने ब्राह्मणदेव ! गुरुकुलमा गुरुलाई गुरुदक्षिणा बुझाई स्नातकको रूपमा त्यहाँबाट फर्किएपछि हजुरले आफूलाई सुहाउने पत्नी विवाह गर्नुभयो कि गर्नुभएन ?

**प्रायो गृहेषु ते चित्तमकामविहितं तथा।**

**नैवातिप्रीयसे विद्वन् धनेषु विदितं हि मे॥ २९॥**

पदार्थ–
**विद्वन्** = हे विद्वान् ब्राह्मण
**प्रायः** = धेरैजसो
**गृहेषु** = घरमा रहँदा पनि
**ते** = हजुरको
**चित्तं** = चित्त
**अकामविहितं** = विषयभोगमा आसक्त छैन
**तथा** = त्यसै गरी
**धनेषु** = सम्पत्ति आदिमा
**न एव अतिप्रीयसे** = अत्यन्त प्रीति गर्नुहुन्न भन्ने
**हि** = निश्चय नै
**मे** = मलाई
**विदितम्** = थाहा छ

**वाक्यार्थ–** हे ब्राह्मणदेव ! धेरैजसो घरमा रहँदा पनि हजुरको चित्त विषयभोगमा आसक्त छैन, अनि हजुर सम्पत्ति आदिमा पनि त्यति धेरै प्रीति गर्नुहुन्न भन्ने मलाई निश्चित रूपमा थाहा छ।

**केचित् कुर्वन्ति कर्माणि कामैरहतचेतसः।**

**त्यजन्तः प्रकृतीर्दैवीर्यथाहं लोकसङ्ग्रहम्॥ ३०॥**

पदार्थ–
**कामैः** = विषयवासनाहरूद्वारा
**अहतचेतसः** = चित्त विक्षिप्त नभएका
**केचित्** = कोही-कोही
**दैवीः** = परमदेवको दैवी मायाबाट निर्मित
**प्रकृतीः** = वासनाहरूलाई
**त्यजन्तः** = त्याग्दै
**कर्माणि** = कर्महरू
**कुर्वन्ति** = गर्दछन्
**यथा** = जसरी
**अहं** = म
**लोकसङ्ग्रहम्** = लोकसङ्ग्रहका लागि कर्म गर्दछु

**वाक्यार्थ–** विषयवासनाबाट चित्त विक्षिप्त नभएका कोही मानिस भने परमात्माको मायाबाट

निर्मित वासनाहरूलाई त्याग्दै मैले झैँ लोकसङ्ग्रहका लागि कर्म गर्दछन्।

**कच्चिद् गुरुकुले वासं ब्रह्मन् स्मरसि नौ यतः।**
**द्विजो विज्ञाय विज्ञेयं तमसः पारमश्नुते॥ ३१॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्राह्मण
**कच्चित्** = के
**गुरुकुले** = गुरुकुलमा
**नौ** = हामी दुईको
**वासं** = बसाइलाई
**स्मरसि** = सम्झनुहुन्छ
**यतः** = जहाँबाट
**विज्ञेयं** = जान्नुपर्ने कुरा
**विज्ञाय** = जानेर
**द्विजः** = ब्राह्मण
**तमसः** = अज्ञानरूपी अन्धकारबाट
**पारं** = पार
**अश्नुते** = पाउँछ

**वाक्यार्थ–** हे ब्राह्मण ! के हजुरले हामी दुई सँगै गुरुकुलमा बसेको सम्झनुहुन्छ ? जुन गुरुकुलबाट जान्नुपर्ने कुरा जानेर ब्राह्मण अज्ञानरूपी अन्धकारबाट पार हुन्छ।

**स वै सत्कर्मणां साक्षाद् द्विजातेरिह सम्भवः।**
**आद्योऽङ्ग यत्राश्रमिणां यथाहं ज्ञानदो गुरुः॥ ३२॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय ब्राह्मण
**इह** = यो संसारमा
**यत्र** = जुन पितामा
**सम्भवः** = कसैको उत्पत्ति हुन्छ
**आद्यः** = ती पहिला गुरु हुन्
**द्विजातेः** = ब्राह्मण, क्षत्रिय र वैश्य यी द्विजातिहरूको
**सत्कर्मणां** = उपनयन आदि संस्कारहरूका कर्ता
**सः** = ती मन्त्रदाता गुरु
**वै** = निश्चय नै
**यथा** = जसरी
**अहं** = म पूज्य छु (त्यस्तै हुन्छन्)
**आश्रमिणां** = सबै आश्रमका व्यक्तिलाई
**ज्ञानदः** = ज्ञान दिने
**गुरुः** = (तेस्रा) गुरु चाहिँ
**साक्षात्** = स्वयं मेरै स्वरूप हुन्

**वाक्यार्थ–** यस संसारमा पिता नै पहिला गुरु हुन्, जहाँबाट प्राणी जन्मन्छ। यसपछि ब्राह्मण, क्षत्रिय र वैश्य यी द्विजातिलाई उपनयन आदि संस्कार आदि गरी वेद पढाउने गुरु दोस्रा हुन्, जो म जत्तिकै पूज्य हुन्छन्। सबै आश्रमका व्यक्तिहरूलाई ज्ञान दिने तेस्रा गुरु चाहिँ मेरै स्वरूप हुन्।

**नन्वर्थकोविदा ब्रह्मन् वर्णाश्रमवतामिह।**
**ये मया गुरुणा वाचा तरन्त्यञ्जो भवार्णवम्॥ ३३॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्राह्मणदेव
**इह** = यस संसारमा
**वर्णाश्रमवतां** = वर्णाश्रमयुक्त मनुष्यहरूमध्ये
**ये** = जो
**गुरुणा** = गुरुरूप
**मया** = मद्वारा
**वाचा** = उपदेश वचनको माध्यमले
**अञ्जः** = सजिलैसँग
**भवार्णवं** = संसारसमुद्रलाई
**तरन्ति** = तर्दछन्
**ननु** = निश्चय नै (तिनीहरू)
**अर्थकोविदाः** = पुरुषार्थमा कुशल छन्

**वाक्यार्थ–** हे ब्राह्मणदेव ! यस संसारमा वर्णाश्रमधर्मले युक्त व्यक्तिहरूमध्ये जो-जो गुरुरूप मेरो उपदेशको माध्यमले नै सजिलैसँग संसारसमुद्रलाई तर्दछन्, तिनीहरू नै आफ्नो पुरुषार्थमा कुशल छन्।

**नाहमिज्याप्रजातिभ्यां तपसोपशमेन वा।**
**तुष्येयं सर्वभूतात्मा गुरुशुश्रूषया यथा॥ ३४॥**

**पदार्थ–**
**सर्वभूतात्मा** = सबै प्राणीहरूको आत्मा
**अहं** = म
**यथा** = जसरी
**गुरुशुश्रूषया** = गुरुको सेवाद्वारा खुसी हुन्छु (त्यसरी)
**इज्याप्रजातिभ्यां** = यज्ञ र उपनयन-वेदाध्ययन आदिद्वारा
**तपसा** = तपस्याद्वारा
**उपशमेन वा** = उपशमद्वारा पनि
**न तुष्येयम्** = प्रसन्न हुन्नँ

**वाक्यार्थ–** सबै प्राणीहरूको आत्मा म यज्ञ आदि गृहस्थधर्म, उपनयन आदि ब्रह्मचर्य धर्म, तपस्या आदि वानप्रस्थ धर्म र उपशम आदि संन्यासधर्मबाट पनि त्यति प्रसन्न हुन्नँ, जति गुरुसेवाद्वारा प्रसन्न हुन्छु।

**अपि नः स्मर्यते ब्रह्मन् वृत्तं निवसतां गुरौ।**
**गुरुदारैश्चोदितानामिन्धनानयने क्वचित्॥ ३५॥**
**प्रविष्टानां महारण्यमपर्तौ सुमहद् द्विज।**
**वातवर्षमभूत् तीव्रं निष्ठुराः स्तनयित्नवः॥ ३६॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्राह्मणदेव
**गुरौ** = गुरुको निकटमा
**निवसतां** = सँगै बसेको वेलामा
**क्वचित्** = कुनै दिन
**गुरुदारैः** = गुरुपत्नीद्वारा
**इन्धनानयने** = दाउरा ल्याउन
**चोदितानां** = पठाइएका
**सुमहत्** = ठुलो
**महारण्यं** = जङ्गलमा
**प्रविष्टानां** = पसेको वेलामा
**द्विज** = हे ब्राह्मण !
**अपर्तौ** = मौसमविना पनि
**तीव्रं** = अत्यन्त तीव्र
**वातवर्षम्** = हावाहुरीसहित पानी
**अभूत्** = बर्सिएको थियो
**निष्ठुराः** = बेस्सरी गर्जिने
**स्तनयित्नवः** = बादलहरू (देखिएका थिए)
**नः** = हामीहरूको (हामीमाथि घटेको)
**वृत्तं** = त्यो घटना
**अपि स्मर्यते** = के सम्झनुहुन्छ

**वाक्यार्थ–** हे ब्राह्मणदेव ! हामी गुरुकुलमा सँगै बसेको वेलामा कुनै दिन हामीलाई गुरुआमाले दाउरा लिन वनमा पठाउनुभएको थियो। हामी ठुलो जङ्गलमा पस्यौँ र अचानक पानी पर्ने मौसम नै नभए पनि हावाहुरीसहित घनघोर वर्षा भयो। बादल गड्गडाउन थाल्यो। त्यो घटना तपाईं सम्झिनुहुन्छ ?

**सूर्यश्चास्तं गतस्तावत् तमसा चावृता दिशः।**
**निम्नं कूलं जलमयं न प्राज्ञायत किञ्चन॥ ३७॥**

**पदार्थ–**
**तावत्** = त्यही वेलामा
**सूर्यः च** = सूर्य पनि
**अस्तं गतः** = अस्ताए
**दिशः च** = दिशाहरू पनि
**तमसा** = अन्धकारद्वारा
**आवृताः** = ढाकिए
**जलमयं** = पानी नै पानी भयो
**निम्नं** = गहिरो ठाउँ र
**कूलं** = किनारा परेको ठाउँ
**किञ्चन** = केही पनि
**न प्राज्ञायत** = थाहा पाइएन

**वाक्यार्थ–** त्यही वेला सूर्य अस्ताए र दिशाहरू पनि अन्धकारद्वारा ढाकिए। जतातत‍ै पानी नै पानी भएकाले कुन गहिरो खाल्टो हो अनि कुन अग्लो ठाउँ हो भन्ने केही पनि थाहा पाइएन।

**वयं भृशं तत्र महानिलाम्बुभिर्निहन्यमाना मुहुरम्बुसम्प्लवे।**
**दिशोऽविदन्तोऽथ परस्परं वने गृहीतहस्ताः परिबभ्रिमातुराः॥ ३८॥**

**पदार्थ–**
**अथ** = यसपछि
**तत्र** = त्यहाँ
**महानिलाम्बुभिः** = ठुलो हुरीसहितको वर्षाले
**भृशं** = धेरै नै
**निहन्यमानाः** = चुटिएका
**वयं** = हामी
**अम्बुसम्प्लवे** = पानीले ढाकेको
**वने** = त्यो वनमा
**दिशः** = दिशा-विदिशालाई
**अविदन्तः** = थाहा नपाउनाले
**परस्परं** = आपसमा
**गृहीतहस्ताः** = हात समाई
**आतुराः** = अत्यन्त आत्तिँदै
**मुहुः** = बारम्बार
**परिबभ्रिम** = घुमिरह्यौँ

**वाक्यार्थ–** त्यसपछि त्यहाँ हामीलाई हुरीसहितको वर्षाले धेरै नै चुट्यो। पानी नै पानीले ढाकेको त्यो वनमा हामीले दिशा-विदिशा पनि थाहा पाउन सकेनौँ अनि अत्यन्त आत्तिँदै आपसमा हात समाएर वनमा बारम्बार घुमिरह्यौँ।

**एतद् विदित्वा उदिते रवौ सान्दीपनिर्गुरुः।**
**अन्वेषमाणो नः शिष्यानाचार्योऽपश्यदातुरान्॥ ३९॥**

**पदार्थ–**
**एतत्** = यो
**विदित्वा** = थाहा पाएर
**रवौ** = सूर्य
**उदिते** = उदाइसकेपछि
**नः** = हामीलाई
**अन्वेषमाणः** = खोजी गर्दै
**आचार्यः** = हाम्रा आचार्य
**सान्दीपनिः** = सान्दीपनि नामका
**गुरुः** = गुरुले
**शिष्यान्** = शिष्य हामीलाई
**आतुरान्** = अत्यन्त पीडित
**अपश्यत्** = देख्नुभयो

**वाक्यार्थ–** हामी दाउरा लिन जाँदा वनमैं बिचल्ली परेको थाहा पाई सूर्य उदाएपछि हामीलाई खोज्दै आउनुभएका हाम्रा आचार्य सान्दीपनि गुरुले हामी शिष्यहरूलाई ज्यादै दुःख पाएको देख्नुभयो।

**अहो हे पुत्रका यूयमस्मदर्थेऽतिदुःखिताः ।**
**आत्मा वै प्राणिनां प्रेष्ठस्तमनादृत्य मत्पराः ॥ ४० ॥**

**पदार्थ–**
**अहो** = अहो
**हे पुत्रकाः** = हे छोराहरू
**यूयं** = तिमीहरू
**अस्मदर्थे** = हाम्रा लागि
**अतिदुःखिताः** = ज्यादै दुःखी भयौ
**वै** = निश्चय नै
**प्राणिनां** = प्राणीहरूका लागि
**आत्मा** = शरीर
**प्रेष्ठः** = सबैभन्दा प्रिय हुन्छ
**तं** = त्यसलाई पनि
**अनादृत्य** = अनादर गरी
**मत्पराः** = हाम्रो सेवा गऱ्यौ

**वाक्यार्थ–** हे छोराहरू ! तिमीहरू हाम्रा लागि अत्यन्त पीडित भयौ। निश्चय नै सबै प्राणीहरूका लागि शरीर सबैभन्दा बढी प्रिय हुन्छ, त्यसलाई पनि वास्ता नगरी तिमीहरूले हाम्रो सेवा गऱ्यौ।

**एतदेव हि सच्छिष्यैः कर्तव्यं गुरुनिष्कृतम् ।**
**यद् वै विशुद्धभावेन सर्वार्थात्मार्पणं गुरौ ॥ ४१ ॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**यत्** = जुन
**विशुद्धभावेन** = विशुद्ध भावले
**गुरौ** = गुरुमा
**सर्वार्थात्मार्पणं** = सम्पूर्ण वस्तु र आफैँलाई पनि अर्पण गरिदिनु
**एतत् एव हि** = यही नै
**सच्छिष्यैः** = असल शिष्यहरूद्वारा
**गुरुनिष्कृतं** = गुरुको ऋण तिर्ने काम
**कर्तव्यम्** = गरिनुपर्दछ

**वाक्यार्थ–** विशुद्धभावले सम्पूर्ण वस्तु र आफैँलाई पनि गुरुमा अर्पण गरिदिनुपर्दछ। असल शिष्यहरूले गर्ने गुरुको ऋण तिर्ने काम भनेको यही हो।

**तुष्टोऽहं भो द्विजश्रेष्ठाः सत्याः सन्तु मनोरथाः ।**
**छन्दांस्ययातयामानि भवन्त्विह परत्र च ॥ ४२ ॥**

**पदार्थ–**
**भो द्विजश्रेष्ठाः** = हे श्रेष्ठ ब्राह्मणहरू
**अहं** = म
**तुष्टः** = प्रसन्न भएँ
**मनोरथाः** = इच्छाहरू
**सत्याः** = सफल
**सन्तु** = होऊन्
**इह** = यस लोकमा र
**परत्र च** = परलोकमा पनि
**छन्दांसि** = वेदहरू
**अयातयामानि** = नबिर्सने र सबैतिर सफल हुने
**भवन्तु** = होऊन्

**वाक्यार्थ–** हे श्रेष्ठ ब्राह्मणहरू ! म तिमीहरूदेखि प्रसन्न भएँ, तिमीहरूका सबै इच्छाहरू पूरा होऊन्। मसँग पढेका वेदहरू नबिर्सने र सबैतिर सफल हुने होऊन्।

**इत्थंविधान्यनेकानि वसतां गुरुवेश्मनि ।**
**गुरोरनुग्रहेणैव पुमान् पूर्णः प्रशान्तये ॥ ४३ ॥**

**पदार्थ–**
**गुरुवेश्मनि** = गुरुका घरमा
**वसतां** = बसिरहेका हाम्रा
**इत्थंविधानि** = यस्तै खालका
**अनेकानि** = अनेक घटना भए
**पुमान्** = मनुष्य
**गुरोः** = गुरुको
**अनुग्रहेण एव** = अनुग्रहले नै
**पूर्णः** = पूर्ण र
**प्रशान्तये** = परम शान्तिका लागि (योग्य पनि हुन्छ)

**वाक्यार्थ–** गुरुका घरमा बसिरहेका वेलामा हाम्रा यस्तै अनेक घटनाहरू बिते। गुरुको अनुग्रहले नै मनुष्य पूर्ण र परम शान्तिका लागि योग्य हुन्छ।

**ब्राह्मण उवाच** (ब्राह्मण श्रीदामाले भने)

**किमस्माभिरनिर्वृत्तं देवदेव जगद्गुरो ।**
**भवता सत्यकामेन येषां वासो गुरावभूत् ॥ ४४ ॥**

**पदार्थ–**
**देवदेव** = हे परमदेव
**जगद्गुरो** = हे जगद्गुरु
**येषां** = जुन हामीहरूको
**सत्यकामेन** = सत्यसङ्कल्प
**भवता** = हजुरको साथमा
**गुरौ** = गुरुकहाँ
**वासः** = निवास
**अभूत्** = भयो
**अस्माभिः** = हामीहरूद्वारा
**अनिर्वृत्तं** = गरिन बाँकी
**किम्** = के रह्यो र

**वाक्यार्थ–** हे परमदेव ! हे जगद्गुरु ! जुन हामीहरूको गुरुकुलमा सत्यसङ्कल्प हजुरसँगसँगै बसाइ भयो, त्यसपछि हामीले जीवनमा गर्नुपर्ने के नै बाँकी रह्यो र ?

**यस्यच्छन्दोमयं ब्रह्म देह आवपनं विभो ।**
**श्रेयसां तस्य गुरुषु वासोऽत्यन्तविडम्बनम् ॥ ४५ ॥**

**पदार्थ–**
**विभो** = हे सर्वव्यापक परमात्मा
**यस्य** = जसको
**देहः** = शरीर
**छन्दोमयं ब्रह्म** = वेदरूप ब्रह्म
अनि
**श्रेयसां** = कल्याण (चारै पुरुषार्थ)का
**आवपनं** = मूलस्रोत छन्
**तस्य** = त्यस्ता हजुरको
**गुरुषु** = गुरुहरूसँगको
**वासः** = निवास
**अत्यन्तविडम्बनम्** = अत्यन्त विडम्बना हो

**वाक्यार्थ–** हे सर्वव्यापक परमात्मा ! छन्दोमय सम्पूर्ण वेद अनि धर्म, अर्थ, काम र मोक्ष यी चारै पुरुषार्थ हजुरकै शरीर हुन्। यस्ता हजुर गुरुहरूकहाँ बस्नु देखावटी विडम्बना मात्र हो (केवल हामीहरू जस्तालाई शिक्षा दिनका लागि मात्र हो)।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे श्रीदामचरिते अशीतितमोऽध्यायः ॥ ८० ॥**

# अथैकाशीतितमोऽध्यायः

## भगवान्द्वारा श्रीदामालाई ऐश्वर्य प्रदान

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**स इत्थं द्विजमुख्येन सह सङ्कथयन् हरिः ।**

**सर्वभूतमनोऽभिज्ञः स्मयमान उवाच तम् ॥ १ ॥**

**पदार्थ—**
**द्विजमुख्येन सह** = ब्राह्मणश्रेष्ठ श्रीदामासँग
**इत्थं** = यसरी
**सङ्कथयन्** = सुखपूर्वक कुरा गर्दागर्दै
**सर्वभूतमनोऽभिज्ञः** = सबैका मनका कुरा जान्ने
**सः** = ती
**हरिः** = श्रीहरि भगवान्ले
**स्मयमानः** = मुस्कुराउँदै
**तं** = उनलाई
**उवाच** = भन्नुभयो

**वाक्यार्थ—** यसप्रकार ब्राह्मणश्रेष्ठ श्रीदामासँग कुरा गर्दागर्दै सबैको मनको कुरा जान्ने श्रीहरि भगवान्ले मुस्कुराउँदै उनलाई भन्नुभयो।

**ब्रह्मण्यो ब्राह्मणं कृष्णो भगवान् प्रहसन् प्रियम् ।**

**प्रेम्णा निरीक्षणेनैव प्रेक्षन् खलु सतां गतिः ॥ २ ॥**

**पदार्थ—**
**खलु** = निश्चय नै
**सतां गतिः** = सत्पुरुषहरूका एक मात्र आश्रय
**ब्रह्मण्यः** = ब्राह्मणहरूका भक्त
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्णले
**प्रेम्णा** = प्रेमपूर्वक
**निरीक्षणेन** = हेराइले
**प्रेक्षन् एव** = हेर्दै
**प्रहसन्** = हाँस्दै
**प्रियं** = ती आफ्ना प्यारा
**ब्राह्मणम्** = ब्राह्मण श्रीदामालाई (भन्नुभयो)

**वाक्यार्थ—** सत्पुरुषहरूका एक मात्र आश्रय अनि ब्राह्मणहरूका अत्यन्त भक्त भगवान् श्रीकृष्णले प्रेमपूर्वक हेर्दै, मन्द हाँस्दै ती आफ्ना प्यारा साथी ब्राह्मण श्रीदामालाई यसो भन्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**किमुपायनमानीतं ब्रह्मन् मे भवता गृहात् ।**

**अण्वप्युपाहृतं भक्तैः प्रेम्णा भूर्येव मे भवेत् ॥**

**भूर्यप्यभक्तोपहृतं न मे तोषाय कल्पते ॥ ३ ॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्राह्मण
**भवता** = हजुरद्वारा
**गृहात्** = घरबाट
**मे** = मेरा लागि
**किं** = के
**उपायनं** = उपहार
**आनीतं** = ल्याइएको छ
**भक्तैः** = भक्तहरूद्वारा
**प्रेम्णा** = प्रेमपूर्वक
**उपाहृतं** = ल्याइएको
**अणु अपि** = थोरै पनि
**मे** = मेरा लागि
**भूरि एव** = धेरै नै
**भवेत्** = हुन्छ
**अभक्तोपहृतं** = अभक्तद्वारा ल्याइएको
**भूरि अपि** = धेरै वस्तु पनि
**मे** = मेरो
**तोषाय** = सन्तुष्टिका लागि
**न कल्पते** = समर्थ हुँदैन

**वाक्यार्थ–** हे ब्राह्मण ! हजुरले घरबाट मेरा लागि के उपहार ल्याउनुभएको छ ? मेरा लागि भक्तहरूले प्रेमपूर्वक ल्याएको थोरै पनि धेरै हुन्छ भने अभक्तले ल्याएको धेरै वस्तुले पनि मलाई सन्तुष्ट गराउन सक्दैन।

**पत्रं पुष्पं फलं तोयं यो मे भक्त्या प्रयच्छति ।**
**तदहं भक्त्युपहृतमश्नामि प्रयतात्मनः ॥ ४ ॥**

**पदार्थ–**
**यः** = जसले
**भक्त्या** = भक्तिपूर्वक
**मे** = मलाई
**पत्रं** = पात
**पुष्पं** = फूल
**फलं** = फल
**तोयं** = जल
**प्रयच्छति** = चढाउँछ
**प्रयतात्मनः** = पवित्र अन्तःकरण भएको व्यक्तिको
**भक्त्युपहृतं** = भक्तिपूर्वक ल्याएको
**तत्** = त्यो उपहारलाई
**अहं** = म
**अश्नामि** = खान्छु

**वाक्यार्थ–** जसले मलाई पात, फूल, फल, जल आदि जे पनि भक्तिपूर्वक चढाउँछ भने पवित्र अन्तःकरण भएको त्यसले भक्तिपूर्वक अर्पण गरेको वस्तुलाई म स्वीकार गर्दछु।

**इत्युक्तोऽपि द्विजस्तस्मै व्रीडितः पतये श्रियः ।**
**पृथुकप्रसृतिं राजन् न प्रायच्छदवाङ्मुखः ॥ ५ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**इति** = यस्तो
**उक्तः अपि** = भनिए पनि
**व्रीडितः** = अत्यन्त लजाएका
**अवाङ्मुखः** = उँधो मुन्टो लगाएका
**द्विजः** = ती ब्राह्मणले
**श्रियः पतये** = लक्ष्मीपति
**तस्मै** = ती भगवान् श्रीकृष्णलाई
**पृथुकप्रसृतिं** = चिउराको पोको
**न प्रायच्छत्** = दिएनन्

**वाक्यार्थ–** हे परीक्षित् ! श्रीकृष्णले यसो भन्दा पनि ती ब्राह्मण लाजले उँधो मुन्टो लगाई बसिरहे। साक्षात् लक्ष्मीपति भगवान् श्रीकृष्णलाई उनले त्यो चिउराको पोको दिएनन् (दिन सकेनन्) ।

**सर्वभूतात्मदृक् साक्षात् तस्यागमनकारणम्।**
**विज्ञायाचिन्तयन्नायं श्रीकामो माभजत् पुरा॥ ६॥**
**पत्न्याः पतिव्रतायास्तु सखा प्रियचिकीर्षया।**
**प्राप्तो मामस्य दास्यामि सम्पदोऽमर्त्यदुर्लभाः॥ ७॥**

**पदार्थ–**
**साक्षात्** = साक्षात्
**सर्वभूतात्मदृक्** = सम्पूर्ण प्राणीहरूको अन्तःकरणका भावलाई जान्ने भगवान्ले
**तस्य** = तिनको
**आगमनकारणं** = आउनुको कारणलाई
**विज्ञाय** = जानेर
**अचिन्तयत्** = विचार गर्नुभयो
**अयं** = यी
**सखा** = मेरा साथीले
**पुरा** = आजभन्दा पहिले
**श्रीकामः** = सम्पत्तिको चाहनाले
**मा** = मलाई
**न अभजत्** = सेवा गरेका छैनन्
**पतिव्रतायाः** = पतिव्रता
**पत्न्याः** = पत्नीको
**प्रियचिकीर्षया** = प्रिय गर्ने इच्छाले
**मां** = मकहाँ
**प्राप्तः** = आएका हुन्
**अस्य तु** = यिनका लागि
**अमर्त्यदुर्लभाः** = देवदुर्लभ
**सम्पदः** = सम्पत्तिहरू
**दास्यामि** = दिनेछु

**वाक्यार्थ–** सम्पूर्ण प्राणीहरूको अन्तःकरणका भावहरूलाई साक्षात् जान्ने भगवान्ले श्रीदामा आफूकहाँ आउनुको कारण बुझिहाल्नुभयो। उहाँले के विचार गर्नुभयो भने यी मेरा साथीले आजभन्दा पहिले कहिल्यै पनि सम्पत्तिको चाहनाले मेरो सेवा गरेका थिएनन्। आज चाहिँ आफ्नी पतिव्रता पत्नीको प्रियकार्य गर्ने इच्छाले यी मकहाँ आएका छन्। यसैले यिनलाई अब म देवदुर्लभ ऐश्वर्य प्रदान गर्नेछु।

**इत्थं विचिन्त्य वसनाच्चीरबद्धान् द्विजन्मनः।**
**स्वयं जहार किमिदमिति पृथुकतण्डुलान्॥ ८॥**

**पदार्थ–**
**इत्थं** = यस्तो
**विचिन्त्य** = विचार गरेर
**द्विजन्मनः** = ब्राह्मणको
**वसनात्** = कपडाबाट
**चीरबद्धान्** = कपडाको टुक्रोमा बाँधिएका
**पृथुकतण्डुलान्** = चिउराहरूलाई
**इदं किं** = यो के हो त
**इति** = यसो भन्दै
**स्वयं** = आफैँ
**जहार** = थुत्नुभयो

**वाक्यार्थ–** यस्तो विचार गरेर भगवान् श्रीकृष्णले ती श्रीदामा ब्राह्मणको कपडाभित्रबाट कपडाको टुक्रामा बाँधिएको चिउराको पोको आफैँ थुत्नुभयो।

**विवरण–** यस श्लोकमा भगवान्ले श्रीदामालाई कृपा गर्न उनको हातबाट चिउराको पोको खोसेर लिनुभएको बताइएको छ। भगवान् सबै प्राणीहरूको मनोभावलाई जान्नुहुन्थ्यो। उहाँलाई श्रीदामादम्पतीको दुरवस्था अनि पत्नीको प्रेरणाले श्रीदामा आफ्नो नजिक आउनुको कारण पनि

थाहा थियो। भगवान् परम दयालु हुनुहुन्छ, आफ्ना भक्तहरूलाई सुख दिने उहाँको स्वभाव छ। उसो भए अहिलेसम्म भगवान्ले किन श्रीदामादम्पतीलाई कृपा गर्नुभएन त ? किनभने यो उनीहरूको प्रारब्धको अधीन कर्मव्यवस्था थियो। भगवान्को कृपा सबैतिर समानरूपले बर्सिएको छ, तर त्यसलाई प्राप्त गर्न उहाँप्रति समर्पित हुने र त्यसलाई आत्मसात् गर्ने परिश्रमको खाँचो छ। व्यक्तिले स्वयं परिश्रम गरेविना परमात्माबाट बर्सिने कृपालाई आफूभित्र उतार्न सक्दैन। यसैले परमात्माको उपासना, आराधना आदि गर्ने विधान शास्त्रहरूमा बताइएको छ। मानिसले अलिकति जल र अलिकति फल चढाउँदैमा जगत्पति परमात्मालाई केही हुँदैन ? तर यो श्रद्धा एवं समर्पणले ऊ स्वयं भगवत्कृपाबाट लाभान्वित हुन्छ। त्यसैले आफ्नो सम्मान गराउन नभई भक्तको कल्याण गर्नका लागि नै भगवान्को तिनको पूजा स्वीकार गर्नुहुन्छ। श्रीदामा सङ्कोचका कारण भगवान्लाई आफूले ल्याएको वस्तु दिन लजाइरहेका छन्। तर उनले केही समर्पण नगरेसम्म उनको पुरानो कर्मदोषको प्रतिबन्ध हट्न सक्दैन। साक्षात् लक्ष्मीपतिलाई चार मुठी चिउरा कसरी अर्पण गरूँ ? भन्ने सङ्कोच श्रीदामामा रहेको छ। भक्तले भगवान्लाई आफूसँग भएको वस्तु चढाउने हो, यसमा उसले लजाउनुहुँदैन। परमात्मकृपा प्राप्त हुनुभन्दा अघि भक्तमा के नै उत्तम वस्तु हुन्छन् र ? ऊसँग भएका मन, इन्द्रिय आदि सबै संसारको दोषद्वारा मलिन भएका हुन्छन्। यिनलाई भगवान्को अघि अर्पण गर्न लजाउने हो भने भगवत्कृपा कसरी प्राप्त हुन्छ र ? त्यसैले भक्तले सङ्कोच गरिरहँदा पनि भगवान् तिनीहरूभित्र रहेका वस्तुहरूलाई जस्ताको तस्तै स्वीकार गरी प्रसन्न हुनुहुन्छ र भक्तमाथि कृपाप्रसाद बर्साउनुहुन्छ। श्रीदामाले चिउराको पोकोलाई कपडाभित्र लुकाएका थिए, तर भगवान्ले सबै जानिहाल्नुभयो र त्यसलाई उहाँले आफैँ थुत्नुभयो। यसरी यहाँ भक्तमाथि कृपा बर्साउन चाहने भगवान्को आतुरता अनि भगवान्लाई यस्तो तुच्छ वस्तु कसरी चढाऊँ भनी भक्तमा भएको सङ्कोचको स्थिति देखाइएको छ।

**नन्वेतदुपनीतं मे परमप्रीणनं सखे ।**

**तर्पयन्त्यङ्ग मां विश्वमेते पृथुकतण्डुलाः ॥ ९ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सखे** = हे मित्र | **परमप्रीणनं** = अत्यन्त प्रिय | **मां** = मलाई |
| **ननु** = निश्चय नै | **उपनीतं** = उपहार ल्यायौ | **विश्वं** = सारा संसारलाई नै |
| **एतत्** = यो | **अङ्ग** = हे प्रिय | **तर्पयन्ति** = तृप्त गर्दछन् |
| **मे** = मलाई | **एते** = यी | |
| | **पृथुकतण्डुलाः** = चिउराहरूले | |

**वाक्यार्थ–** हे मित्र ! यो त तिमीले मलाई अत्यन्तै प्रिय लाग्ने उपहार ल्यायौ। हे प्रिय ! यी चिउराले मलाई मात्र नभई सारा संसारलाई नै तृप्त गर्दछन्।

**इति मुष्टिं सकृज्जग्ध्वा द्वितीयां जग्धुमाददे ।**

**तावच्छ्रीर्जगृहे हस्तं तत्परा परमेष्ठिनः ॥ १० ॥**

**पदार्थ—**
**इति** = यसो भन्दै
**सकृत्** = एकपटक
**मुष्टिं** = एक मुट्ठी चिउरा
**जग्ध्वा** = खाएर
**द्वितीयां** = अर्को मुट्ठी पनि
**जग्धुं** = खान
**आददे** = लिनुभयो
**तावत्** = त्यसै वेलामा
**तत्परा** = भगवत्परायण
**श्रीः** = लक्ष्मीजीले
**परमेष्ठिनः** = भगवान्‌को
**हस्तं** = हात
**जगृहे** = समात्नुभयो

**वाक्यार्थ—** यसो भन्दै भगवान्‌ले एक मुट्ठी चिउरा खाएर अर्को मुट्ठी पनि खान हातमा लिनुभयो, तर त्यसै वेलामा भगवत्परायणा लक्ष्मीरूपिणी रुक्मिणीले भगवान्‌को हात च्याप्प समात्नुभयो।

**विवरण—** यस श्लोकमा रुक्मिणीलाई **तत्परा** र भगवान्‌लाई चाहिँ **परमेष्ठी** भनिएबाट विशेष तात्पर्य प्रकट भएको छ। **तत्परा** शब्दले लक्ष्मीजी भगवान्‌लाई छोडेर अरू कहीँ रहन सक्नुहुन्न भन्ने अर्थ बुझाएको छ। जब भगवान्‌ले श्रीदामाको एक मुट्ठी चिउरा खानुभयो, तब विश्वात्मा उहाँ तृप्त हुँदा विश्व नै तृप्त भयो। यसरी विश्वभरिका सबै प्राणीहरूलाई भोजनद्वारा तृप्त बनाएको पुण्य उनलाई प्राप्त भयो। भगवान् **परमेष्ठी** अर्थात् कर्मफलको विभाग गर्ने विधाता पनि हुनुहुन्छ। श्रीदामाको जीवनमा रहेको निर्धनताको कारण सञ्चित भएको सम्पूर्ण सञ्चित कर्मलाई भगवान्‌ले संसारलाई तृप्त बनाएको यही पुण्यद्वारा नष्ट गरिदिनुभयो। आफ्ना भक्तहरूका लागि भगवान् आफू स्वयंलाई त अर्पण गर्नुहुन्छ भने सामान्य ऐश्वर्यको के कुरा ? प्रेमको एक मुट्ठी चिउराबाट प्रसन्न बन्नुभएका भगवान्‌ले श्रीदामालाई सम्पूर्ण समृद्धि दिइसकेपछि अर्को मुट्ठी चिउरा पनि खानुभएको भए उहाँले आफ्नी अर्धाङ्गिनी रुक्मिणीसमेत उनकै सेवामा अर्पण गरिदिन सक्नुहुन्थ्यो। लक्ष्मीरूपा रुक्मिणी **तत्परा** अर्थात् केवल भगवत्परायणा छिन्। परमेष्ठी अर्थात् भाग्यविधाता भगवान्‌ले श्रीदामालाई सम्पूर्ण ऐश्वर्यप्रदान गरेको कुरा लक्ष्मीजीलाई सह्य छ, तर आफूलाई समेत उनकै सेवामा लगाइदिने कुरा उनलाई सह्य छैन। त्यसैले भगवान्‌को दयामयतालाई बुझेकी लक्ष्मीरूपा रुक्मिणीले अर्को मुठी चिउरा खान लाग्दा भगवान्‌को हात च्याप्पै समातिन् र आफूहरूले पनि प्रसाद पाउनुपर्ने बताइन्। प्रेमी भक्तको श्रद्धापूर्वकको समर्पणलाई ग्रहण गर्न लाग्दा लक्ष्मीजीले बिचमा हात समाती रोक्नुको यही रहस्य यहाँ सूचित भएको छ।

**एतावतालं विश्वात्मन् सर्वसम्पत्समृद्धये।**
**अस्मिँल्लोकेऽथवामुष्मिन् पुंसस्त्वत्तोषकारणम्॥ ११॥**

**पदार्थ—**
**विश्वात्मन्** = हे विश्वात्मा भगवान्
**पुंसः** = प्राणीका लागि
**अस्मिन्** = यस
**लोके** = लोकमा
**अथवा** = अथवा
**अमुष्मिन्** = परलोकमा समेत
**सर्वसम्पत्समृद्धये** = सबैथरी समृद्धि प्राप्त गर्नका लागि
**त्वत्तोषकारणं** = हजुरको सन्तुष्टिको कारण भएको
**एतावता** = यत्ति (एक मुठी चिउराबाट नै)
**अलम्** = पर्याप्त छ

**वाक्यार्थ—** हे भगवान् ! प्राणीहरूलाई यो लोक वा परलोकका सबैथरी समृद्धिहरू प्राप्त गर्नका लागि प्रेमपूर्वकको एक मुठी चिउरा नै पर्याप्त छ, किनभने त्यतिबाट नै विश्वात्मा हजुर प्रसन्न हुनुहुन्छ।

**विवरण—** माथिका श्लोकहरूमा भगवान्ले चिउराको पोको आफ्नो हातमा पर्नेबित्तिकै त्यसबाट एक फाँको लगाइहाल्नुभयो भनी बताइएको छ। परमात्मा राम्रा वस्तुहरूको होइन, शुद्ध भावको भोको हुनुहुन्छ। उहाँलाई खुसी गराउने वस्तु भनेकै हृदयभित्रको निष्कपट प्रेम एवं समर्पण हो। भावपूर्वक अर्पण गरेका वस्तुहरू नराम्रा भए पनि परमात्माले प्रेमपूर्वक त्यसलाई ग्रहण गर्नुहुन्छ। उहाँले श्रीदामाद्वारा ल्याइएको चिउरा असाध्यै मिठो मानी खानुभयो। एक मुठी खाई अर्को मुठी चिउरा खान लाग्दा रुक्मिणीले हात समात्नुभएको यहाँ बताइएको छ। भगवान्ले भक्तको श्रद्धालाई स्वीकार गरिरहँदा लक्ष्मीले किन बिचमा बिथोल्नुभयो ? भन्ने शङ्का हुन सक्छ। यसको उत्तर के हो भने भगवान्ले एक फाँको चिउरा खाँदा नै श्रीदामालाई यो लोक र परलोकको समृद्धिले युक्त बनाइदिइसक्नुभएको थियो। भगवान्की नित्य सहचरी एवं ऐश्वर्यकी अधिष्ठात्री लक्ष्मी भगवान्को कृपा कसरी बर्सिन्छ भन्ने जान्नुहुन्थ्यो। एक फाँको चिउरा खाँदैमा त सम्पूर्ण समृद्धि यिनीमाथि बर्साइदिइसक्नुभयो भने अर्को पटक पनि चिउरा खानुभयो भने त मैले समेत भगवान्लाई छाडी यी ब्राह्मणकै सेवा गर्नुपर्ला भन्ने आशङ्काले लक्ष्मीले हात समात्नुभएको थियो। पहिलोपटक श्रीदामाको आगमन हुँदा उनलाई फाटेको कपडा लगाएका, मैला, दुब्ला, पातला र कामिरहेका देख्ने रुक्मिणीसहितका रानीहरूलाई शिक्षा दिनकै लागि पनि भगवान्ले सारा ऐश्वर्य श्रीदामालाई सुम्पने विचार गर्नुभएको हो। यही भगवान्को मनोभाव बुझी रुक्मिणीले भगवान्को हात समाउनुभयो र आफूहरूले पनि प्रसाद पाउनुपर्ने धारणा राख्नुभयो। यसरी सानो निहुँमा पनि भगवान्ले भक्तमाथि ठुलो कृपा बर्साउनुहुन्छ भन्ने कुरा यहाँ देखाइएको छ।

**ब्राह्मणस्तां तु रजनीमुषित्वाच्युतमन्दिरे ।**
**भुक्त्वा पीत्वा सुखं मेने आत्मानं स्वर्गतं यथा ॥ १२ ॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **ब्राह्मणः तु** = ब्राह्मण श्रीदामा चाहिँ | **तां** = त्यो | **पीत्वा** = पिई |
| **अच्युतमन्दिरे** = श्रीकृष्णको भवनमा | **रजनीम्** = रात | **आत्मानं** = आफूलाई |
| | **उषित्वा** = बसी | **स्वर्गतं** = स्वर्ग लोकमा पुगेको |
| | **सुखं** = सुखपूर्वक | **यथा** = समान |
| | **भुक्त्वा** = खाई | **मेने** = माने |

**वाक्यार्थ—** श्रीदामाले त्यो रात भगवान् श्रीकृष्णकै महलमा बिताए। सुखपूर्वक खानपान गरी बसेका उनले आफूलाई स्वर्ग लोकमा पुगेको झैं ठाने।

**श्वोभूते विश्वभावेन स्वसुखेनाभिवन्दितः ।**
**जगाम स्वालयं तात पथ्यनुव्रज्य नन्दितः ॥ १३ ॥**

**पदार्थ—**
**तात** = हे प्रिय परीक्षित्
**श्वोभूते** = भोलिपल्ट भएपछि
**स्वसुखेन** = आत्माराम
**विश्वभावेन** = विश्वकै भरण गर्ने भगवान्द्वारा
**अभिवन्दितः** = अभिवादन गरिएका
**नन्दितः** = अत्यन्त प्रसन्न भएका उनी
**पथि** = बाटोमा
**अनुव्रज्य** = निस्किई
**स्वालयं** = आफ्नो घरतिर
**जगाम** = गए

**वाक्यार्थ—** हे परीक्षित् ! भोलिपल्ट भएपछि आत्माराम एवं सम्पूर्ण संसारका पालक भगवान्द्वारा अभिवादन गरिएका र अत्यन्त प्रसन्न भएका ती श्रीदामा बाटोमा निस्किई आफ्नो घरतिर गए।

**स चालब्ध्वा धनं कृष्णान्न तु याचितवान् स्वयम्।**
**स्वगृहान् व्रीडितोऽगच्छन्महद्दर्शननिर्वृतः॥ १४॥**

**पदार्थ—**
**महद्दर्शननिर्वृतः** = भगवान्को दर्शनबाट आनन्दित भएका
**सः च** = उनी पनि
**कृष्णात्** = श्रीकृष्णबाट
**धनं** = सम्पत्ति
**अलब्ध्वा** = नपाई
**स्वयं तु** = आफैँले पनि
**न याचितवान्** = मागेनन्
**व्रीडितः** = अलि-अलि लजाई
**स्वगृहान्** = आफ्नो घरतिर
**अगच्छत्** = गए

**वाक्यार्थ—** भगवान् श्रीकृष्णको दर्शन पाउनाले अत्यन्त आनन्दित भएका श्रीदामाले भगवान्बाट कुनै सम्पत्ति पनि पाएनन् उनले आफैँ केही माग्न पनि सकेनन्। त्यसैले उनी अलि-अलि लजाउँदै घरतिर गए।

**अहो ब्रह्मण्यदेवस्य दृष्टा ब्रह्मण्यता मया।**
**यद् दरिद्रतमो लक्ष्मीमाश्लिष्टो बिभ्रतोरसि॥ १५॥**

**पदार्थ—**
**अहो** = आश्चर्य
**मया** = मद्वारा
**ब्रह्मण्यदेवस्य** = ब्राह्मणभक्त भगवान्को
**ब्रह्मण्यता** = ब्राह्मणहरूप्रतिको प्रेम
**दृष्टा** = देखियो
**यत्** = किनभने
**दरिद्रतमः** = अत्यन्त दरिद्र म
**उरसि** = वक्षस्थलमा
**लक्ष्मीम्** = लक्ष्मी
**बिभ्रता** = राख्नुहने भगवान्द्वारा
**आश्लिष्टः** = अङ्कमाल गरिएँ

**वाक्यार्थ—** अहो ! आश्चर्य छ, मैले आज ब्राह्मणभक्त भगवान् श्रीकृष्णको ब्राह्मणहरूप्रतिको प्रेम प्रत्यक्ष अनुभव गरेँ। आफ्नो वक्षस्थलमा स्वयं लक्ष्मीलाई राख्नुहुने उहाँले अत्यन्त निर्धन मलाई अङ्कमाल गर्नुभयो।

**क्वाहं दरिद्रः पापीयान् क्व कृष्णः श्रीनिकेतनः।**
**ब्रह्मबन्धुरिति स्माहं बाहुभ्यां परिरम्भितः॥ १६॥**

**पदार्थ—**
**दरिद्रः** = निर्धन
**पापीयान्** = अत्यन्त पापी
**अहं** = म
**क्व** = कहाँ
**श्रीनिकेतनः** = लक्ष्मीपति
**कृष्णः** = श्रीकृष्ण
**क्व** = कहाँ
**अहं** = म
**ब्रह्मबन्धुः इति स्म** = ब्राह्मण हो भन्ने भावनाले नै
**बाहुभ्यां** = दुबै हातद्वारा
**परिरम्भितः** = अङ्कमाल गरिएँ

**वाक्यार्थ—** निर्धन एवं अत्यन्त पापी म कहाँ ? अनि साक्षात् लक्ष्मीपति श्रीकृष्ण कहाँ ? तर पनि यो ब्राह्मण हो भन्ने भावनाको कारणले नै भगवान्‌ले मलाई दुबै हातले अङ्कमाल गर्नुभयो।

**निवासितः प्रियाजुष्टे पर्यङ्के भ्रातरो यथा।**
**महिष्या वीजितः श्रान्तो बालव्यजनहस्तया ॥ १७ ॥**

**पदार्थ—**
**प्रियाजुष्टे** = प्रिया रुक्मिणीसँगै बसिरहेको
**पर्यङ्के** = आफ्नो पलङ्गमा
**भ्रातरः यथा** = दाजु झैँ
**निवासितः** = बसाइएँ
**श्रान्तः** = थाकेको म
**बालव्यजनहस्तया** = हातमा पङ्खा लिएकी
**महिष्या** = रानी रुक्मिणीद्वारा
**वीजितः** = हम्काइएँ

**वाक्यार्थ—** रुक्मिणीसँगै आफू बसिरहेको पलङ्गमा नै भगवान्‌ले आफ्नो दाजुलाई झैँ मलाई राख्नुभयो। थाकेको मलाई हातमा पङ्खा लिएकी रानी रुक्मिणीले नै पङ्खाले हम्किदिनुभयो।

**शुश्रूषया परमया पादसंवाहनादिभिः।**
**पूजितो देवदेवेन विप्रदेवेन देववत् ॥ १८ ॥**

**पदार्थ—**
**विप्रदेवेन** = ब्राह्मणहरूलाई देवता मान्ने
**देवदेवेन** = सर्वश्रेष्ठ देवता भगवान्‌द्वारा
**पादसंवाहनादिभिः** = पाउ दबाउने आदि
**परमया** = अत्यन्त श्रेष्ठ
**शुश्रूषया** = सेवाद्वारा
**देववत्** = देवता झैँ
**पूजितः** = पूजित भएँ

**वाक्यार्थ—** ब्राह्मणहरूलाई देवतासमान मान्ने देवाधिदेव भगवान्‌ले पाउ दबाउने आदि अनेकथरी सेवा गरेर मलाई देवतालाई झैँ सत्कार गर्नुभयो।

**स्वर्गापवर्गयोः पुंसां रसायां भुवि सम्पदाम्।**
**सर्वासामपि सिद्धीनां मूलं तच्चरणार्चनम् ॥ १९ ॥**

**पदार्थ—**
**तच्चरणार्चनम्** = उहाँको चरणसेवा नै
**पुंसां** = मानिसहरूका लागि
**स्वर्गापवर्गयोः** = स्वर्ग र मोक्षको
**रसायां** = रसातल र
**भुवि** = पृथिवीमा हुने
**सम्पदां** = सबैथरी सम्पत्तिको
**सर्वासां** = सबै प्रकारका
**सिद्धीनां अपि** = सिद्धिहरूको पनि
**मूलम्** = मूल हो

**वाक्यार्थ–** मानिसहरूका लागि स्वर्ग र मोक्षप्राप्ति, रसातल र पृथिवी आदि लोकहरूमा हुने अनन्त ऐश्वर्यप्राप्ति र सबैथरी सिद्धिहरूको प्राप्तिका लागि पनि भगवान्को चरणसेवा नै मूल हो।

**अधनोऽयं धनं प्राप्य माद्यन्नुच्चैर्न मां स्मरेत्।**
**इति कारुणिको नूनं धनं मेऽभूरि नाददात्॥ २०॥**

**पदार्थ–**
**नूनं** = निश्चय नै
**कारुणिकः** = दयालु भगवान्ले
**अयं** = यो
**अधनः** = निर्धन ब्राह्मण
**धनं** = धन
**प्राप्य** = पाएर
**उच्चैः** = बेस्सरी
**माद्यन्** = मात्तिई
**मां** = मलाई
**न स्मरेत्** = नसम्झेला
**इति** = यस्तो सोची
**मे** = मलाई
**अभूरि** = थोरै पनि
**धनं** = सम्पत्ति
**न अददात्** = दिनुभएन

**वाक्यार्थ–** निश्चय नै दयालु भगवान्ले यो निर्धन ब्राह्मणले धन प्राप्त गर्‍यो भने बेस्सरी मात्तिई मलाई समेत बिर्सला भन्ने सोची मलाई थोरै पनि सम्पत्ति दिनुभएन।

**विवरण–**माथिका श्लोकहरूमा श्रीदामाले भगवान्को कृपा र प्रेमप्रति सद्भाव व्यक्त गरेका छन्। श्रीदामा अयाचितवृत्तिका व्यक्ति थिए। उनले नमागीकन स्वतः प्राप्त हुने वस्तुहरूबाट जीविका चलाउने नियम बनाएका थिए। भगवान् श्रीकृष्णले उनको ठुलो स्वागत-सम्मान आदि गरे पनि तत्काल श्रीदामालाई कत्ति पनि धन दिनुभएन। भगवान्ले नदिएपछि श्रीदामाले पनि आफैँले सम्पत्ति मागेनन्। श्रीदामा लजाएका थिए र महापुरुषको दर्शनबाट खुसी भएका थिए। श्रीदामालाई भगवान्ले अन्तर्यामी हुनुभएकाले उहाँले आफ्नो समस्या बुझ्नुहुनेछ र मलाई केही धन दिएरै पठाउनुहुनेछ भन्ने आशा गरेका थिए। भगवान्ले जब उनले थाहा पाउने गरी केही दिनुभएन त्यसपछि उनलाई आफ्नो विचारको सम्झना भयो। सबैका आत्मा एवं सम्पूर्ण पदार्थहरूको रूपमा पनि देखिनुभएका परमात्मासँग केही सम्पत्ति आदिको अपेक्षा गर्नु लाजको कुरा होइन र? जसले प्राणीहरूलाई निःशुल्क रूपमा जगत्का सम्पूर्ण पदार्थ, यिनलाई भोग गर्ने इन्द्रिय अनि स्वयं व्यक्तित्व नै प्रदान गर्नुभएको छ, त्यस्ता सर्वदाता परमात्मालाई फेरि क्षुद्र सम्पत्ति दिनका लागि पुकार्नु राम्रो होइन। यसबाट व्यक्ति अकृतज्ञ भएको र जति दिँदा पनि असन्तुष्ट नै रहने खालको भएको बुझिन्छ। आफूमा पनि यस्तै विचार आएको देखी श्रीदामा आफैँसँग लजाएका छन्। उनले सम्पत्तिको अभावमा पनि **महद्दर्शननिर्वृतः** अर्थात् महापुरुषहरूकै दर्शनबाट चित्त बुझाएका छन्। यसबाट के थाहा पाउन सकिन्छ भने उनको मनमा अनेक विचारहरू उठ्दै थिए। के भगवान्ले मन नपराएकोले आफूलाई केही नदिनुभएको त होइन? भन्ने शङ्का आफैँ हटाउँदै उनी भन्छन्– यसो हुन सक्दैन, किनभने भगवान्ले मलाई स्वयं आफ्नै पलङ्मा राखी मेरो सेवा गर्नुभयो। भगवान् त ब्राह्मणहरूलाई देवतासमान मान्ने स्वभावको हुनुहुन्छ। जसको चरणसेवाद्वारा भोग र मोक्ष दुबै पाइन्छ, त्यस्ता परमात्माले मेरो चरणसेवा गर्नु नै सबैभन्दा ठुलो सम्मान हो। उसो भए उहाँले अलिकति पनि सम्पत्ति किन दिनुभएन त? भन्ने मनको शङ्का हटाउँदै उनी भन्छन्–

सम्पत्ति प्राप्त गरेर म नमात्तिऊँ भन्ने उद्देश्यले केही नदिनुभएको हुनुपर्दछ। धन प्राप्त भएपछि मत्त हुँदै यसले मलाई बिर्सन सक्छ, यसरी सम्पत्तिको मदमा परमात्मालाई बिर्सनुभन्दा निर्धन रहनु नै कल्याणकारक छ भन्ने सम्झी मप्रति दया गर्ने परमात्माले मलाई सम्पत्ति दिनुभएन भन्ने श्रीदामाको भाव हो।

यस प्रसङ्गबाट सांसारिक विषयहरूको थोरै पनि अभिलाषाले मानिसलाई कति दुःख दिन्छ भन्ने शिक्षा समेत पाइन्छ। श्रीदामाले अहिलेसम्मको पूरा जीवन निर्धन भई बिताएका थिए। नमागीकन प्राप्त भएका वस्तुमा आश्रित रहँदा उनको मनमा अनेक कामनाहरूको चुलबुल थिएन। उनी शान्त थिए र सम्पूर्ण हृदयले सर्वात्मा परमात्माका भक्त पनि थिए। जब पत्नीको दुरवस्था अनि हार्दिक प्रार्थनाको कारण उनको मनमा भगवान्ले केही दिइहाल्नुहुन्छ कि ? भन्ने भावना आयो तब त्यसको अप्राप्तिमा उनको मन केही विचलित भयो। केही पनि इच्छा नै राखिएन भने केही वस्तु नपाउँदा पनि व्यक्ति दुःखी हुँदैन, तर थोरै इच्छा राखिएको छ भने पनि त्यसको अप्राप्तिमा व्यक्ति दुःखी हुन्छ। यसरी विषयहरूमा जति आसक्ति या कामना गरिन्छ, त्यसको अप्राप्तिमा त्यति बढी दुःखी हुने पनि निश्चित नै छ। कामनाको प्रवेश भएपछि भगवान्का भक्तहरूको मन पनि विचलित हुन्छ र त्यसलाई धेरै सम्झाइ-बुझाई गरेपछि मात्र मनलाई आफ्नो नियन्त्रणमा लिन सकिन्छ। गीतामा पनि भगवान्ले विषयहरूको चिन्तनले नै काम, क्रोध आदिलाई बढाउँदै लैजाने र विषयको चिन्तन नै सर्वनाशको कारण हुने बताउनुभएको छ (श्रीमद्भगवद्गीता २।५६)। यसरी भक्तको हृदयमा सांसारिक पदार्थहरूको कामनाले प्रवेश पाउनुहुँदैन भन्ने शिक्षा दिनका लागि पनि भगवान्ले श्रीदामालाई प्रत्यक्ष सम्पत्ति नदिई कामनाको दुःख अनुभव गराइदिनुभएको थियो। यहाँ श्रीदामाले अलिकति कामना राख्दा त्यसको अप्राप्तिद्वारा उनको मनमा भएको विचलन हटाउन उनले धेरै सम्झाइ-बुझाई गर्नुपरेको देखाई यही तथ्य प्रकट गर्न खोजिएको छ।

**इति तच्चिन्तयन्नन्तः प्राप्तो निजगृहान्तिकम्।**
**सूर्यानलेन्दुसङ्काशैर्विमानैः सर्वतो वृतम्॥ २१॥**
**विचित्रोपवनोद्यानैः कूजद्द्विजकुलाकुलैः।**
**प्रोत्फुल्लकुमुदाम्भोजकह्लारोत्पलवारिभिः॥ २२॥**
**जुष्टं स्वलङ्कृतैः पुम्भिः स्त्रीभिश्च हरिणाक्षिभिः।**
**किमिदं कस्य वा स्थानं कथं तदिदमित्यभूत्॥ २३॥**
**एवं मीमांसमानं तं नरा नार्योऽमरप्रभाः।**
**प्रत्यगृह्णन् महाभागं गीतवाद्येन भूयसा॥ २४॥**

पदार्थ— | इति = यसप्रकार | अन्तः = मनमनै

**चिन्तयन्** = चिन्तन गर्दै हिँडिरहँदा
**सर्वतः** = चारैतिरबाट
**सूर्यानलेन्दुसङ्काशैः** = सूर्य, चन्द्र र अग्निसमान चम्किला
**विमानैः** = अनेक महलहरूद्वारा
**कूजद्द्विजकुलाकुलैः** = कराइरहेका अनेक पक्षीहरूले व्याप्त भएको
**प्रोत्फुल्लकुमुदाम्भोजकह्लारोत्पल-वारिभिः** = कुमुद (रक्तकमल), अम्भोज (दिनमा मात्र फुल्ने कमल), कह्लार (श्वेत कमल) पानीमा ढकमक्क फुलिरहेको
**विचित्रोपवनोद्यानैः** = पोखरीसहितको विचित्र उपवन र उद्यानहरूद्वारा समेत
**वृतं** = घेरिएको
**तत्** = त्यो
**निजगृहान्तिकं** = आफ्नो घरको नजिक
**प्राप्तः** = पुगे
**स्वलङ्कृतैः** = राम्ररी सिँगारिएका
**पुम्भिः** = पुरुषहरू र
**हरिणाक्षिभिः** = कमलनयनी
**स्त्रीभिः च** = स्त्रीहरूद्वारा
**जुष्टं** = सेवित भएको
**इदं** = यो
**किं** = के हो
**कस्य वा** = कसको
**स्थानं** = निवासस्थान हो
**तत्** = त्यस्तो ठाउँ
**इदं** = यस्तो
**कथं** = कसरी
**अभूत्** = भयो
**इति एवं** = यसप्रकार
**मीमांसमानं** = विचार गरिरहेका
**तं** = ती
**महाभागं** = महाभाग्यशाली श्रीदामालाई
**अमरप्रभाः** = देवस्त्रीसमान चम्किला
**नार्यः** = नारीहरू र
**नराः** = पुरुषहरूले
**भूयसा** = ठुलो
**गीतवाद्येन** = गाना-बजानाद्वारा
**प्रत्यगृह्णन्** = स्वागत गरे

**वाक्यार्थ–** यसप्रकार श्रीदामा श्रीकृष्णको विषयमा मनमनै चिन्तन गर्दै हिँडिरहेका थिए, त्यही वेलामा उनी अकस्मात् सूर्य, चन्द्र र अग्निसमान चम्किला महलहरूद्वारा चारैतिरबाट घेरिएको आफ्नो घरको नजिक पुगे। त्यो सम्पूर्ण क्षेत्र पोखरीसहितका विचित्र उपवन तथा उद्यानहरूद्वारा युक्त थियो। त्यहाँ अनेक प्रकारका पक्षीहरू कराइरहेका थिए भने पानीमाथि कुमुद, अम्भोज कह्लार आदि कमलहरू फुलिरहेका थिए। राम्ररी सिँगारिएका पुरुष र कमलनयनी स्त्रीहरूद्वारा घेरिएका चम्किला महलहरू देख्दा उनलाई यो के होला जस्तो लाग्यो। त्यसपछि यो कसको ठाउँ होला भन्ने विचार आयो र पछि आफ्नै वासस्थान सम्झी त्यस्तो ठाउँ यस्तो कसरी भयो होला भन्ने सोच आयो। यस्ता विचारमा मग्न भइरहेका ती महाभाग्यशाली श्रीदामालाई देवस्त्रीसमानका नारी एवं अनेक पुरुषहरूले ठुलो गीतवाद्यको साथमा स्वागत गरे।

**पतिमागतमाकर्ण्य पत्न्युद्धर्षातिसम्भ्रमा।**
**निश्चक्राम गृहात् तूर्णं रूपिणी श्रीरिवालयात्॥ २५॥**

**पदार्थ–**
**पतिम्** = आफ्ना पति
**आगतम्** = आएको
**आकर्ण्य** = सुनेर
**उद्धर्षा** = अत्यन्त हर्षित भएकी
**अतिसम्भ्रमा** = हड्बडाएकी
**पत्नी** = श्रीदामाकी पत्नी
**रूपिणी** = सुन्दरी
**श्रीः** = लक्ष्मी
**आलयात् इव** = (कमलवनको) निवासबाट आए जस्तै
**तूर्णं** = झटपट
**गृहात्** = घरबाट
**निश्चक्राम** = निस्किन्

**वाक्यार्थ—** श्रीदामाकी पत्नीले जब आफ्ना पति आएको सुनिन्, तब अत्यन्त हर्षित भई उनी हड्बडाइन्। त्यसपछि कमलवनको निवासस्थानबाट सर्वाङ्गसुन्दरी लक्ष्मी बाहिर आए झैँ उनी घरबाट बाहिर निस्किन्।

**पतिव्रता पतिं दृष्ट्वा प्रेमोत्कण्ठाश्रुलोचना।**

**मीलिताक्ष्यनमद् बुद्ध्या मनसा परिषस्वजे॥ २६॥**

**पदार्थ—**
**पतिं** = पतिलाई
**दृष्ट्वा** = देखेर
**प्रेमोत्कण्ठाश्रुलोचना** = प्रेमद्वारा उत्कण्ठित भई आँखाभरि आँसु लिएकी
**मीलिताक्षी** = आँखा चिम्लिएकी
**पतिव्रता** = ती पतिव्रताले
**बुद्ध्या** = बुद्धिद्वारा (निश्चयपूर्वक)
**अनमत्** = प्रणाम गरिन् र
**मनसा** = मनमनै
**परिषस्वजे** = अङ्कमाल गरिन्

**वाक्यार्थ—** आफ्ना पतिलाई देखेर ती पतिव्रताका आँखाभरि प्रेमद्वारा उत्कण्ठित आँसु आए र त्यसलाई रोक्न उनले आँखा चिम्लिन्। उनले आफ्ना पतिलाई बुद्धिद्वारा प्रणाम गरिन् र मनमनै अङ्कमाल गरिन्।

**पत्नीं वीक्ष्य विस्फुरन्तीं देवीं वैमानिकीमिव।**

**दासीनां निष्ककण्ठीनां मध्ये भान्तीं स विस्मितः॥ २७॥**

**पदार्थ—**
**वैमानिकीम्** = आकाशचारी
**देवीं इव** = देवस्त्री झैँ
**विस्फुरन्तीं** = चम्किरहेकी
**निष्ककण्ठीनां** = घाँटीमा हार लगाएका
**दासीनां** = दासीहरूको
**मध्ये** = बिचमा
**भान्तीं** = प्रकाशित भइरहेकी
**पत्नीं** = पत्नीलाई
**वीक्ष्य** = देखेर
**सः** = ती श्रीदामा
**विस्मितः** = आश्चर्यचकित भए

**वाक्यार्थ—** श्रीदामाले आफ्नी पत्नीलाई आकाशचारी देवस्त्री झैँ चम्किरहेकी देखे। घाँटीमा हार लगाएका अनेक दासीहरूको बिचमा चम्किरहेकी पत्नीलाई देखेर श्रीदामा आश्चर्यचकित भए।

**प्रीतः स्वयं तया युक्तः प्रविष्टो निजमन्दिरम्।**

**मणिस्तम्भशतोपेतं महेन्द्रभवनं यथा॥ २८॥**

**पदार्थ—**
**प्रीतः** = प्रसन्न भई
**तया** = ती पत्नीद्वारा
**युक्तः** = युक्त भएर
**स्वयं** = साक्षात्
**महेन्द्रभवनं यथा** = इन्द्रको महल झैँ
**मणिस्तम्भशतोपेतं** = सयौँ मणिमय खम्बाहरूले युक्त भएको
**निजमन्दिरं** = आफ्नो महलमा
**प्रविष्टः** = प्रवेश गरे

**वाक्यार्थ—** पत्नीलाई साथ लिएर अत्यन्त प्रसन्न भई श्रीदामा इन्द्रको महल जस्तै सयौँ मणिमय

खम्बाहरूले युक्त भएको आफ्नो महलमा प्रवेश गरे।

**पयःफेननिभाः शय्या दान्ता रुक्मपरिच्छदाः।**
**पर्यङ्का हेमदण्डानि चामरव्यजनानि च ॥ २९ ॥**
**आसनानि च हैमानि मृदूपस्तरणानि च।**
**मुक्तादामविलम्बीनि वितानानि द्युमन्ति च ॥ ३० ॥**

**पदार्थ–**
**पयःफेननिभाः** = दुधको फिँजसमान
**शय्याः** = बिछ्यौनाहरू
**दान्ताः** = हात्तीको दाँतबाट बनेका
**रुक्मपरिच्छदाः** = सुन मोरिएका
**पर्यङ्काः** = पलङ्गहरू
**हेमदण्डानि** = सुनका दण्ड भएका
**चामरव्यजनानि च** = चामर र पङ्खाहरू
**मृदूपस्तरणानि च** = कोमल आसनले युक्त
**हैमानि च** = सुवर्णमय
**आसनानि** = सिंहासनहरू
**मुक्तादामविलम्बीनि** = मोतीका माला झुलिरहेका
**द्युमन्ति** = चम्किला
**वितानानि च** = चँदुवाहरू पनि थिए

**वाक्यार्थ–** त्यहाँ हात्तीको दाँतबाट बनेका र सुनले मोरिएका अनेक पलङ्गहरू थिए, जसमा दुधको फिँजसमान सेता र चम्किला बिछ्यौना ओछ्याइएका थिए। त्यहाँका चामर, पङ्खा आदि पनि सुनकै दण्डले युक्त थिए। सुवर्णमय सिंहासनहरूमा कोमल आसन ओछ्याइएको थियो। तिनमा मोतीका माला झुलिरहेका र चम्किला चँदुवाहरू टाँगिएका थिए।

**स्वच्छस्फटिककुड्येषु महामारकतेषु च।**
**रत्नदीपा भ्राजमाना ललनारत्नसंयुताः ॥ ३१ ॥**

**पदार्थ–**
**महामारकतेषु** = पन्ना मिसिएको
**स्वच्छस्फटिककुड्येषु च** = स्वच्छ स्फटिकमणिद्वारा निर्मित भित्ताहरूमा
**ललनारत्नसंयुताः** = स्त्रीमूर्तिले सहित
**रत्नदीपाः** = रत्नमय दीपहरू
**भ्राजमानाः** = जगमगाइरहेका थिए

**वाक्यार्थ–** स्फटिकमणिद्वारा निर्मित भित्ताहरूमा पन्ना जडिएको थियो भने त्यहाँ रहेका स्त्रीमूर्तिहरूको हातमा रत्नमय दीपहरू जगमगाइरहेका थिए।

**विलोक्य ब्राह्मणस्तत्र समृद्धीः सर्वसम्पदाम्।**
**तर्कयामास निर्व्यग्रः स्वसमृद्धिमहैतुकीम् ॥ ३२ ॥**

**पदार्थ–**
**ब्राह्मणः** = ती ब्राह्मणले
**तत्र** = त्यहाँ
**सर्वसम्पदां** = सबैथरी ऐश्वर्यहरूको
**समृद्धीः** = भरिभराउ

| | | |
|---|---|---|
| **विलोक्य** = देखेर | **अहैतुकीम्** = विना कारणको | **तर्कयामास** = विचार गरे |
| **निर्व्यग्रः** = गम्भीर भई | **स्वसमृद्धिं** = आफ्नो समृद्धिलाई | |

**वाक्यार्थ–** ती ब्राह्मण श्रीदामाले आफ्नो घरमा सबैथरी ऐश्वर्यहरू भरिभराउ भएको देखे। आफ्नो यो विना कारण समृद्धि भएको विषयमा उनले गम्भीरतापूर्वक विचार गरे।

**नूनं बतैतन्मम दुर्भगस्य शश्वद्दरिद्रस्य समृद्धिहेतुः।**
**महाविभूतेरवलोकतोऽन्यो नैवोपपद्येत यदूत्तमस्य॥ ३३॥**

| पदार्थ– | | |
|---|---|---|
| **नूनं बत** = निश्चय नै | **समृद्धिहेतुः** = समृद्धिको कारण | भगवान्को |
| **दुर्भगस्य** = अभागी | **एतत्** = यो | **अवलोकतः** = हेराइभन्दा |
| **शश्वद्दरिद्रस्य** = नित्य दरिद्र | **महाविभूतेः** = सम्पूर्ण ऐश्वर्यले युक्त | **अन्यः** = अरू |
| **मम** = मेरो | **यदूत्तमस्य** = यदुश्रेष्ठ | **न एव उपपद्येत** = कुनै उपायबाट पनि हुन सक्दैन |

**वाक्यार्थ–** अभागी एवं नित्यदरिद्र भएको मेरो यो समृद्धिको कारण सम्पूर्ण ऐश्वर्यले युक्त यदुश्रेष्ठ श्रीकृष्ण भगवान्को हेराइबाहेक अरू केही हुन सक्दैन।

**विवरण–** यस प्रसङ्गमा श्रीदामाले आफ्नो घरमा अचानक आएको समृद्धि भगवान्कै कृपा हो भनी पत्ता लगाएका छन्। भगवान्ले आफूलाई प्रत्यक्ष रूपमा केही नदिएकोमा मनलाई सम्झाइबुझाइ गरिरहेका श्रीदामाले आफ्नो घर भएको ठाउँमा पुग्दा त्यहाँ त सुवर्णमय बस्ती बसेको देखे। श्रीदामाबाट खोसी भगवान् श्रीकृष्णले एक मुट्ठी चिउरा खानेबित्तिकै श्रीदामाका सम्पूर्ण पुराना दोषहरू हटिसकेका थिए। सम्पूर्ण ब्रह्माण्ड जसका पेटभित्र छ, त्यस्ता परमात्मालाई तृप्त गर्नुले सम्पूर्ण ब्रह्माण्डभरिका प्राणीहरूलाई भरपेट भोजन गराएको पुण्य उनलाई प्राप्त भयो। अनि जुन रात श्रीदामा अच्युतमन्दिर अर्थात् भगवान् श्रीकृष्णको घरमा सुतेका थिए, त्यही रात भगवान्को रहस्यमयी कृपाशक्तिले काम गऱ्यो र रातारात उनको घर भएको गाउँ नै समृद्धिले परिपूर्ण भयो। यहाँ श्रीदामाको घर सुवर्णमय अन्य घरहरूद्वारा घेरिएको भनी बताइएको छ। श्रीदामासँग प्रसन्न हुनुभएका भगवान्ले अरूलाई पनि विनाप्रयास समृद्ध बनाउनुभयो ? भन्ने शङ्का हुन्छ। भगवान्को कृपा नै कस्तो छ भने एउटा भक्तले गरेको सेवाबाट प्रसन्न भई उहाँ सबैको हित गरिदिनुहुन्छ। श्रीदामासँगै उनका छिमेकीहरूको पनि कल्याण गरिदिनुले भगवान्को यही उदारतालाई सिद्ध गर्दछ। यसो हुनुमा श्रीदामाको मनोभावले पनि काम गरेको बुझिन्छ। श्रीदामाको बस्ती निर्धन गाउँ थियो भन्ने कुरा त्यहाँ उनीहरूले खान नपाएबाट नै स्पष्ट हुन्छ। भगवान्का लागि उपहार दिन अन्न माग्न जाँदा उनकी पत्नीले जम्मा चार मुठी चिउरा भेट्नुले पनि यो कुराको पुष्टि गर्दछ। निर्धन भए तापनि तीमध्येकै कसैले कहिलेकाहीँ केही न केही दिएकै भरमा श्रीदामादम्पतीको अहिलेसम्मको गुजारा चलेको थियो। यसरी यतिका समयसम्म आफूलाई जसोतसो बचाउने छिमेकीहरूको बिचमा आफू एक्लै मात्र सुवर्णमय भवनमा बस्न श्रीदामा पक्कै पनि स्वीकार गर्दैनथे। यसैले भक्तको मनोभावलाई बुझी भगवान्ले तिनीहरूलाई

पनि समृद्ध बनाइदिनुभयो। फेरि जुन चिउराको मुट्ठीबाट भगवान् श्रीदामासँग प्रसन्न हुनुभएको थियो, त्यो पनि उनलाई अरूले नै दिएका थिए। यसरी श्रीदामासँगै समृद्धिमा अरू छिमेकीहरूको पनि अधिकार हुन गएको थियो।

सबैरितबाट समृद्धि नै समृद्धिले भरिएको आफ्नो बस्ती एवं घरलाई देखेपछि श्रीदामाले यस्तो कसरी भयो ? भन्ने विचार गरे। भक्तहरूले भगवत्प्रसादस्वरूप प्राप्त गरेको समृद्धि र अभक्त (दानव)ले कठोर तपस्याको बलमा प्राप्त गरेको समुन्नतिमा यही अन्तर हुन्छ। भक्त सम्पत्ति देख्दा पनि त्यसप्रति व्यग्र अर्थात् उत्ताउलो हुँदैन, ऊ त्यसमा वरदाता परमात्माको कृपालाई अनुभव गर्न थाल्दछ। आसुरी स्वभावका व्यक्तिहरू भने थोरै सम्पत्तिको प्राप्तिमा पनि मात्तिई परमात्मालाई बिर्सन्छन्। यहाँ श्रीदामाले नआत्तिई विचार गरे र विना कारण सम्पत्ति प्राप्त हुनुमा भगवत्कृपा नै कारण हो भन्ने पत्ता लगाइहाले। उनले आफूलाई अभागी र निरन्तरको दरिद्र भनेका छन्। यसको अर्थ सम्पत्ति प्राप्त हुनु अघि धनले दरिद्र भएको अनि परमात्मदर्शनपछि उहाँले प्रत्यक्ष रूपमा केही नदिएको देखी विचारको दरिद्र भएको भन्ने हुन्छ। भगवान् र उहाँको कृपामाथि नै शङ्का गरी आफूले फर्किंदा बाटोभरि गरेको कल्पना पनि विचारको सङ्कीर्णता या दरिद्रता नै थियो। यसरी आफ्नो सङ्कीर्ण एवं शङ्कालु सोचप्रति नै असन्तुष्टिको भाव यहाँ व्यक्त भएको छ। परमात्मा अनन्त वैभवका स्वामी हुनुहुन्छ। उहाँको एक मात्र कृपादृष्टि पनि वैभव प्रदान गर्न पर्याप्त छ। यसरी भगवान्‌को कृपादृष्टिका कारणले नै आफूले विनाकारण यति समृद्धि पाएको अनुभव श्रीदामाले प्रकट गरेका छन्।

**नन्वब्रुवाणो दिशते समक्षं याचिष्णवे भूर्यपि भूरिभोजः।**
**पर्जन्यवत् तत् स्वयमीक्षमाणो दाशार्हकाणामृषभः सखा मे ॥ ३४ ॥**

**पदार्थ–**
**ननु** = निश्चय नै
**स्वयं** = आफैँले
**तत्** = त्यसलाई
**पर्जन्यवत्** = बादलले झैँ
**ईक्षमाणः** = हेर्दै
**भूरिभोजः** = अनन्त ऐश्वर्यसम्पन्न
**दाशार्हकाणां** = यदुकुलका
**ऋषभः** = श्रेष्ठ
**मे** = मेरा
**सखा** = साथीले
**समक्षं** = अगाडिबाट
**अब्रुवाणः** = नभनेर नै
**याचिष्णवे** = याचकलाई
**भूरि अपि** = धेरै नै ऐश्वर्य
**दिशते** = प्रदान गर्नुहुन्छ

**वाक्यार्थ–** यदुकुलश्रेष्ठ भगवान् अनन्त ऐश्वर्यसम्पन्न हुनुहुन्छ, त्यसैले उहाँले आफूले भक्तलाई वरको रूपमा दिने ऐश्वर्य अत्यन्त थोरै देख्नुहुन्छ र वर्षाकालको बादलले झैँ चुपचाप याचक भक्तहरूलाई धेरै ऐश्वर्य प्रदान गर्नुहुन्छ।

**विवरण–** यस श्लोकमा श्रीदामाले भगवान्‌को कृपा कसरी बर्सिन्छ भन्ने अनुभव व्यक्त गरेका छन्। भगवान्‌ले आफ्ना भक्तहरूका सम्पूर्ण इच्छाहरू पूरा गर्नुहुन्छ, तर उहाँ अरू सामान्य दाताहरू जस्तो प्रचार गरी त्यसलाई प्रकट गर्नुहुन्न। भगवान् नबोलीकन नै कृपा बर्साउने स्वभावको हुनुहुन्छ। भगवान्‌ले संसारमा कहिल्यै पनि आफ्नो उदारता, सर्वशक्तिमत्ता आदि गुणहरूलाई

प्रत्यक्ष रूपमा प्रकट गर्नुभएको छैन। सम्पूर्ण संसारको रचना गरेर पनि परमात्माले व्यक्त रूपमा कहीँ आफ्नो उपस्थिति जनाउनुभएको छैन। उहाँ सधैँ गुप्त रहिरहनुहुन्छ। यसैलाई उपनिषद्मा **परोक्षप्रिया इव हि देवाः** (ऐतरेयोपनिषद् १।३।१४) अर्थात् परमात्मा परोक्षप्रिय हुनुहुन्छ भनी बताइएको छ। परमात्माले नै सबैको हृदयभित्र रही सबैलाई यथास्थानमा प्रेरित र निर्देशित गर्दै सबै व्यवहार चलाइरहनुभएको छ, तर प्राणी सीमित अभिमान एवं अज्ञानको वशमा परी सारा संसारलाई मैले नै चलाएको हुँ भन्ने ठान्दछ। यसरी अनाहकमा व्यक्तिहरूले अभिमान गरिरहँदा पनि वास्तविक जगत्सञ्चालक परमात्मा भने चुपचाप बसिरहनुभएको छ, किनभने आफ्नो काम भन्दै हिँड्ने उहाँको स्वभाव छैन। अज्ञानमा मस्त भएका प्राणीहरूको आपसी अभिमानको तमासा हेर्न उहाँलाई मजा लाग्दो हो, अथवा असत्य जगत्का असत्य व्यवहारमा के रुचि लिनु भन्ने उपेक्षाको भाव भएकाले हो, अहिलेसम्म परमात्माले आफ्नो सर्वशक्तिमत्तालाई प्राणीहरूको सामु देखाउनुभएको छैन। विवेकी मनुष्यहरूले उहाँको गोप्य रहस्यलाई आफ्नै बुद्धि एवं साधनाको बलले अनुभव गर्दछन्। यसका लागि श्रद्धा–भक्तिले भरिएको दृष्टिको खाँचो पर्दछ। यदि श्रद्धाको आँखाले जगत्को व्यवस्थालाई हेर्ने हो भने त्यहाँ रहस्यमय कृपाशक्तिको झल्को सहजै पाइन्छ, जुन शक्तिले प्राणीहरूको प्राण, मन, शरीर एवं सारा सृष्टिलाई अभूतपूर्व कौशलले सञ्चालित गरिरहेको छ। यहाँ पनि श्रद्धाको दृष्टि भएकाले श्रीदामाले आफ्नो समृद्धिमा भगवान्को कृपा नै कारण भएको तथ्यलाई देखेका छन्।

यहाँ भगवान्को कृपालाई बादलले पानी बर्साए झैँ भनिएको छ। जसरी बादलले डाँडापाखा, खेतबारी, खोलानाला, समुद्र जताततै पानी बर्साउँछ, त्यसै गरी भगवान्को कृपा पनि सबैतिर समान रूपले बर्सिन्छ। जो अनन्त सामर्थ्यले युक्त हुन्छ, प्राणीहरूले मागेका ठुलाभन्दा ठुला कुरा पनि उसका लागि सामान्य वस्तु हुन्छन्। परमात्मा अनन्त आनन्द एवं वैभवले परिपूर्ण हुनुभएकाले सकाम व्यक्तिहरूले गर्ने ठुलाभन्दा ठुला प्रार्थनाहरू पूरा गर्दा पनि उहाँलाई ती सबै वस्तुहरू अत्यन्त सामान्य छन् भन्ने लाग्दछ। फेरि भक्तको प्रेमपूर्ण भजन चाहिँ उहाँलाई अत्यन्त बढी जस्तो लाग्दछ। त्यत्रो भजनको साटो म यति तुच्छ विषयहरू कसरी दिऊँ भन्ने सङ्कोचका कारण परमात्मा आफूले दिएको भन्ने थाहा नै नहुने गरी ती वस्तुहरू प्रदान गर्नुहुन्छ, जसरी कृषक सुतेको वेलामा बादलले चुपचाप पानी बर्साउँछ। भक्तको भजनलाई धेरै अनि उसलाई दिइने वस्तु चाहिँ अत्यन्त कम देखी भगवान् सधैँ अप्रकट रूपमा नै ती वस्तुहरू प्रदान गर्नुहुन्छ। यसरी यहाँ श्रीदामाले भगवत्कृपा पानी बर्से झैँ बर्सिने भाव प्रकट गरेका छन्।

**किञ्चित् करोत्युर्वपि यत् स्वदत्तं सुहृत्कृतं फल्वपि भूरिकारी।**
**मयोपनीतां पृथुकैकमुष्टिं प्रत्यग्रहीत् प्रीतियुतो महात्मा॥ ३५॥**

**पदार्थ–**
**यत्** = जुन
**स्वदत्तं** = आफूले दिएको वस्तुलाई
**उरु अपि** = धेरै भए पनि
**किञ्चित्** = थोरै मात्र
**करोति** = गर्दछन् (मान्नुहुन्छ)
**सुहृत्कृतं** = आफ्ना भक्तले दिएको

**फल्गु अपि** = अत्यन्त सानो वस्तुलाई पनि
**भूरिकारी** = धेरै ठान्नुहुन्छ
**प्रीतियुतः** = प्रेमयुक्त
**महात्मा** = उदारहृदय भएका उहाँले
**मया** = मद्वारा
**उपनीतां** = लगिएको
**पृथुकैकमुष्टिं** = एक मुठी चिउरा
**प्रत्यग्रहीत्** = स्वीकार गरिदिनुभयो (खाइदिनुभयो)

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण भक्तहरूप्रति प्रेमी र उदारहृदय भएका हुनुहुन्छ। उहाँले आफ्ना भक्तले दिएको सानो उपहारलाई पनि धेरै ठान्नुहुन्छ र आफूले दिएको वर भने धेरै भए पनि थोरै ठान्नुहुन्छ। उहाँले मैले लगेको एक मुठी चिउरा प्रेमपूर्वक खाइदिनुभयो।

**तस्यैव मे सौहृदसख्यमैत्री दास्यं पुनर्जन्मनि जन्मनि स्यात्।**
**महानुभावेन गुणालयेन विषज्जतस्तत्पुरुषप्रसङ्गः॥ ३६॥**

**पदार्थ–**
**मे** = मेरो
**पुनः** = फेरि
**जन्मनि जन्मनि** = जन्मौं जन्ममा
**तस्य एव** = उहाँसँगै
**सौहृदसख्यमैत्री** = सौहार्द, सख्य, मित्रता र
**दास्यं** = सेवकभावसमेत
**स्यात्** = होस्
**गुणालयेन** = सम्पूर्ण सद्गुणहरूका खानी
**महानुभावेन** = उदारहृदय श्रीकृष्णसँग
**विषज्जतः** = प्रेम गरिरहँदा
**तत्पुरुषप्रसङ्गः** = उहाँकै भक्तहरूको सत्सङ्ग पाइयोस्

**वाक्यार्थ–** मेरो फेरि पनि जन्मौं जन्ममा श्रीकृष्णसँग सौहार्द, सख्य र मित्रताको सम्बन्ध भइरहोस्। त्यसै गरी सधैं उहाँकै सेवा गर्न पाइरहूँ। सारा सद्गुणहरूका एक मात्र खानी उहाँसँगै प्रेम गर्दा उहाँका प्रेमी भक्तहरूको सत्सङ्ग पनि प्राप्त भइरहोस्।

**भक्ताय चित्रा भगवान् हि सम्पदो राज्यं विभूतीर्न समर्थयत्यजः।**
**अदीर्घबोधाय विचक्षणः स्वयं पश्यन् निपातं धनिनां मदोद्भवम्॥ ३७॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**धनिनां** = धनीहरूको
**मदोद्भवं** = धनमदद्वारा उत्पन्न
**निपातं** = पतनलाई
**पश्यन्** = देखेर
**स्वयं** = स्वयं
**विचक्षणः** = परमज्ञानी
**अजः** = अजन्मा
**भगवान्** = भगवान्ले
**अदीर्घबोधाय** = दूरदर्शी नभएका
**भक्ताय** = भक्तलाई
**चित्राः** = अनेक प्रकारका
**सम्पदः** = सम्पत्ति
**राज्यं** = राज्य र
**विभूतीः** = ऐश्वर्यहरू पनि
**न समर्थयति** = प्रदान गर्नुहुन्न

**वाक्यार्थ–** धनसम्पत्तिले युक्त अनेक व्यक्तिहरू त्यसको मदद्वारा पतन भएको कुरा भगवान्लाई थाहा छ। त्यसैले उहाँले दूरदर्शी विवेकदृष्टि नभएको आफ्नो भक्तलाई कहिल्यै पनि सम्पत्ति, राज्य र ऐश्वर्य प्रदान गर्नुहुन्न।

**विवरण–** माथिका श्लोकहरूमा श्रीदामाले भगवान्सँग नै आफ्नो सम्बन्ध भइरहोस् र उहाँमा

भक्ति लागिरहोस् भनी प्रार्थना गरेका छन्। श्रीदामा आफूलाई विषयहरूको कामनाले नछाडेकाले अहिल्यै मुक्त भइहाल्ने आशामा छैनन्। उनी भन्छन्— हरेक जन्ममा मेरो सम्बन्ध परमात्मासँग नै भइरहोस्। साक्षात् परमात्मा आफ्ना मित्र भएकोमा भाग्यको अनुभव गर्दै श्रीदामा बारम्बार परमात्मालाई नै साथीको रूपमा पाउन प्रार्थना गर्दछन्। सौहृद, सख्य र मैत्री यी तीन ओटै समान अर्थ दिने शब्द हुन्, यी तीनै ओटा पदको प्रयोग गरिएबाट केवल भगवान्लाई मात्र साथी बनाउन खोज्ने श्रीदामाको अतिशय आतुरता प्रकट भएको छ। उनले भगवान्को सेवक हुन पाऊँ भनी मागेका छन्। भगवान्को भक्ति माग्नुको कारण खुलाउँदै उनी भन्छन्— भगवान् आफ्ना असली भक्तहरूलाई ऐश्वर्य, समृद्धि आदि कहिल्यै दिनुहुन्न। सम्पत्ति आदिको प्राप्तिपछि त्यसैमा ध्यान गई मदसमेत चढ्दछ। यसरी अधःपतन हुने देखी भगवान् आफ्ना असली भक्तहरूलाई कहिल्यै पनि सम्पत्तिको झन्झटमा फसाउनुहुन्न। ममा दृढ भक्ति नभएकाले मेरो चित्त बाहिरी विषयहरूको आशामा लाग्यो र मलाई भगवान्ले बाहिरी विषयहरू दिनुभयो, अब म भुलेर पनि यी पदार्थहरूको आसक्तिमा फस्दिनँ, अब त म परमात्माबाट केवल भक्ति मात्र चाहन्छु भन्ने भाव श्रीदामाले व्यक्त गरेका छन्। यहाँ श्रीदामाले आफ्नो भक्तिमा अपूर्णता भएकोले नै भगवान्ले आफूलाई सम्पत्ति दिनुभएको धारणा राखे तापनि वास्तवमा चाहिँ उनी पूर्ण भक्त नै हुन्। भक्तहरू विनयी हुने हुँदा उनीहरूले नम्रतावश यस्ता प्रार्थनाहरू गर्दछन्, अथवा अरू संसारी व्यक्तिहरूका तर्फबाट यस्ता प्रार्थनाहरू गर्दछन्। भगवान्ले उनको प्रेम अपूर्ण भएकाले होइन, अपि तु भक्तको योगक्षेम वहन गर्ने आफ्नो प्रतिज्ञा पूरा गर्नकै लागि श्रीदामामाथि कृपा गर्नुभएको हो। यसरी यहाँ भक्तको लागि सम्पूर्ण समृद्धि अर्पण गरिदिने भगवान्को दयामयता अनि सम्पत्ति प्राप्त हुँदा आफूमा कामनाको प्रवेश भयो कि भन्ने ठानी सजग हुने भक्तको परमात्मप्रेम उजागर भएको छ।

**इत्थं व्यवसितो बुद्ध्या भक्तोऽतीव जनार्दने।**
**विषयान् जायया त्यक्ष्यन् बुभुजे नातिलम्पटः॥ ३८॥**

**पदार्थ—**
**इत्थं** = यसप्रकार
**बुद्ध्या** = मनमनै
**व्यवसितः** = निश्चय गरेका
**जनार्दने** = भगवान् श्रीकृष्णमा
**अतीव** = अत्यन्त
**भक्तः** = भक्त र
**नातिलम्पटः** = वासनाको वशमा नभएका उनले
**विषयान्** = विषयहरूलाई
**त्यक्ष्यन्** = त्याग्ने इच्छा गर्दै
**जायया** = पत्नीको साथ
**बुभुजे** = तिनको भोग गरे

**वाक्यार्थ—** भगवान् श्रीकृष्णका अत्यन्त भक्त ती श्रीदामाले मनमनै यस्तो निश्चय गरी विषयहरूको आसक्तिले शून्य भई तिनलाई त्याग गर्ने इच्छाले पत्नीसँग विषयको उपभोग गरे।

**तस्य वै देवदेवस्य हरेर्यज्ञपतेः प्रभोः।**
**ब्राह्मणाः प्रभवो दैवं न तेभ्यो विद्यते परम्॥ ३९॥**

**पदार्थ—**
**वै** = निश्चय नै
**देवदेवस्य** = देवताका पनि देवता
**यज्ञपतेः** = यज्ञपति
**प्रभोः** = भगवान्
**तस्य** = ती
**हरेः** = श्रीहरिको
**प्रभवः** = प्रभु
**दैवं** = इष्टदेव
**ब्राह्मणाः** = ब्राह्मणहरू हुन्
**तेभ्यः परं** = तिनीहरूभन्दा पर
**न विद्यते** = केही छैन

**वाक्यार्थ—** भगवान् श्रीकृष्ण देवताका पनि देवता, यज्ञपति र सर्वसमर्थ हुनुहुन्छ, तैपनि उहाँका लागि प्रभु एवं इष्टदेवहरू ब्राह्मणहरू नै हुन्। यसैले ब्राह्मणहरूभन्दा पर केही छैन।

**एवं स विप्रो भगवत्सुहृत् तदा दृष्ट्वा स्वभृत्यैरजितं पराजितम्।**
**तद्ध्यानवेगोद्ग्रथितात्मबन्धनस्तद्धाम लेभेऽचिरतः सतां गतिम्॥ ४०॥**

**पदार्थ—**
**एवं** = यसप्रकार
**तदा** = त्यस समयमा
**भगवत्सुहृत्** = भगवान्का साथी
**सः** = ती
**विप्रः** = ब्राह्मणले
**स्वभृत्यैः** = आफ्ना भक्तहरूद्वारा
**अजितं** = अजित भगवान् पनि
**पराजितं** = पराजित भएको
**दृष्ट्वा** = देखेर
**तद्ध्यानवेगोद्ग्रथितात्मबन्धनः** = उहाँको ध्यानको वेगद्वारा संसारबन्धनलाई नष्ट गरी
**अचिरतः** = चाँडै नै
**सतां** = सज्जनहरूको
**गतिं** = गति भएको
**तद्धाम** = उहाँको स्वरूपलाई
**लेभे** = प्राप्त गरे

**वाक्यार्थ—** यसप्रकार त्यस वेला भगवान्का साथी ती ब्राह्मणले अजित भगवान् पनि आफ्ना भक्तहरूसँग पराजित हुनुहँदोरहेछ भन्ने जाने। भगवान्को दृढतापूर्वक चिन्तन गर्नाले उनको संसारबन्धन पुरै नष्ट भयो र उनले चाँडै नै सज्जनहरूद्वारा पाउन योग्य एक मात्र भगवत्स्वरूपलाई प्राप्त गरे।

**एतद् ब्रह्मण्यदेवस्य श्रुत्वा ब्रह्मण्यतां नरः।**
**लब्धभावो भगवति कर्मबन्धाद् विमुच्यते॥ ४१॥**

**पदार्थ—**
**ब्रह्मण्यदेवस्य** = ब्राह्मणहरूलाई नै देवता मान्ने भगवान्को
**एतत्** = यस्तो
**ब्रह्मण्यतां** = ब्राह्मणभक्तिलाई
**श्रुत्वा** = सुनेर
**भगवति** = भगवान्मा
**लब्धभावः** = प्रेमभाव प्राप्त गरेको
**नरः** = व्यक्ति
**कर्मबन्धात्** = कर्मबन्धनबाट
**विमुच्यते** = मुक्त हुन्छ

**वाक्यार्थ—** ब्राह्मणहरूलाई नै देवता मान्ने भगवान् श्रीकृष्णको ब्राह्मणभक्तिको यो चरित्रलाई सुनेर भगवान्मा प्रेमभाव प्राप्त गर्ने व्यक्ति कर्मबन्धनबाट मुक्त हुन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे पृथुकोपाख्यानं नामैकाशीतितमोऽध्यायः॥ ८१॥**

# अथ द्व्यशीतितमोऽध्यायः

## भगवान् श्रीकृष्णबाट गोप-गोपिनीहरूलाई अध्यात्मज्ञानको उपदेश

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथैकदा द्वारवत्यां वसतो रामकृष्णयोः ।**

**सूर्योपरागः सुमहानासीत् कल्पक्षये यथा ॥ १ ॥**

**पदार्थ–**
**अथ** = यसपछि
**एकदा** = एक दिन
**रामकृष्णयोः** = बलराम र श्रीकृष्ण
**द्वारवत्यां** = द्वारकामै
**वसतोः** = बसिरहेको समयमा
**कल्पक्षये** = कल्पको अन्तमा
**यथा** = झैँ
**सुमहान्** = अत्यन्त ठुलो
**सूर्योपरागः** = सूर्यग्रहण
**आसीत्** = भयो (लाग्यो)

**वाक्यार्थ–** बलराम र श्रीकृष्ण द्वारकामैं बसिरहेको वेलामा एक दिन कल्पको अन्त्य समयमा लागे झैँ अत्यन्त ठुलो सूर्यग्रहण लाग्यो।

**तं ज्ञात्वा मनुजा राजन् पुरस्तादेव सर्वतः ।**

**समन्तपञ्चकं क्षेत्रं ययुः श्रेयोविधित्सया ॥ २ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**मनुजाः** = मानिसहरूले
**पुरस्तात् एव** = पहिले नै
**तं** = त्यो सूर्यग्रहणलाई
**ज्ञात्वा** = जानेर
**श्रेयोविधित्सया** = कल्याणको इच्छाले
**सर्वतः** = सबैतिरबाट
**समन्तपञ्चकं** = समन्तपञ्चक (भन्ने)
**क्षेत्रं** = ठाउँमा
**ययुः** = गए

**वाक्यार्थ–** हे परीक्षित् ! त्यो ग्रहण लाग्ने कुरा थाहा पाई मानिसहरू सबैतिरबाट आफ्नो कल्याणको इच्छाले समन्तपञ्चक भन्ने ठाउँमा गए।

**निःक्षत्रियां महीं कुर्वन् रामः शस्त्रभृतां वरः ।**

**नृपाणां रुधिरौघेण यत्र चक्रे महाह्रदान् ॥ ३ ॥**

**पदार्थ–**
**यत्र** = जुन ठाउँमा
**शस्त्रभृतां** = शस्त्रधारीहरूमध्ये
**वरः** = श्रेष्ठ
**रामः** = परशुरामले
**महीं** = पृथिवीलाई
**निःक्षत्रियां** = क्षत्रियरहित
**कुर्वन्** = बनाउँदै
**नृपाणां** = राजाहरूका
**रुधिरौघेण** = रगतको भेलले
**महाह्रदान्** = ठुला पोखरीहरू
**चक्रे** = बनाउनुभएको थियो

**वाक्यार्थ–** त्यस समन्तपञ्चक भन्ने ठाउँमा शस्त्रधारीहरूमध्ये श्रेष्ठ परशुरामले सम्पूर्ण पृथिवीलाई क्षत्रियरहित बनाउने क्रममा अनेकौँ राजाका रगतद्वारा ठुला पोखरीहरू बनाउनुभएको थियो।

**ईजे च भगवान् रामो यत्रास्पृष्टोऽपि कर्मणा।**
**लोकं सङ्ग्राहयन्नीशो यथान्योऽघापनुत्तये॥ ४॥**

**पदार्थ–**
**यत्र च** = जहाँ
**कर्मणा** = कर्मद्वारा
**अस्पृष्टः** = नछोइने
**ईशः अपि** = सर्वसमर्थ भएर पनि
**भगवान्** = भगवान्
**रामः** = परशुरामले
**लोकं** = सामान्य जनतालाई
**सङ्ग्राहयन्** = शिक्षा दिँदै
**अन्यः** = अरू सामान्य व्यक्तिले
**अघापनुत्तये** = पापनाशका लागि
**यथा** = जस्तै
**ईजे** = यज्ञ गर्नुभयो

**वाक्यार्थ–** भगवान् परशुराम कर्मद्वारा अस्पृष्ट सर्वसमर्थ ईश्वर हुनुहुन्थ्यो, तर पनि उहाँले सामान्य जनतालाई धर्मको शिक्षा दिनका लागि पापनाशका लागि अनेक यज्ञहरू गर्नुभयो।

**महत्यां तीर्थयात्रायां तत्रागन् भारतीः प्रजाः।**
**वृष्णयश्च तथाक्रूरवसुदेवाहुकादयः॥ ५॥**
**ययुर्भारत तत्क्षेत्रं स्वमघं क्षपयिष्णवः।**
**गदप्रद्युम्नसाम्बाद्याः सुचन्द्रशुकसारणैः॥ ६॥**
**आस्तेऽनिरुद्धो रक्षायां कृतवर्मा च यूथपः।**
**ते रथैर्देवधिष्ण्याभैर्हयैश्च तरलप्लवैः॥ ७॥**
**गजैर्नदद्भिरभ्राभैर्नृभिर्विद्याधरद्युभिः।**
**व्यरोचन्त महातेजाः पथि काञ्चनमालिनः॥ ८॥**

**पदार्थ–**
**भारत** = हे भरतवंशी परीक्षित्
**तत्र** = त्यहाँ
**महत्यां** = ठुलो
**तीर्थयात्रायां** = तीर्थयात्रामा
**स्वं** = आफ्नो
**अघं** = पापलाई
**क्षपयिष्णवः** = नष्ट गर्न चाहने
**भारतीः** = भारतवर्षका
**प्रजाः** = जनताहरू
**अगन्** = गए
**तथा** = त्यसै गरी
**अक्रूरवसुदेवाहुकादयः** = अक्रूर, वसुदेव, आहुक (उग्रसेन) आदि
**गदप्रद्युम्नसाम्बाद्याः** = गद, प्रद्युम्न र साम्ब आदि
**वृष्णयः च** = वृष्णिहरू पनि
**तत्** = त्यो
**क्षेत्रं** = ठाउँमा
**ययुः** = गए
**सुचन्द्रशुकसारणैः** = सुचन्द्र, शुक, सारण आदिले सहित
**अनिरुद्धः** = अनिरुद्ध
**रक्षायां** = द्वारकाको रक्षामा

**आस्ते** = रहेका थिए
**कृतवर्मा च** = कृतवर्मा चाहिँ
**यूथपः** = तीर्थयात्रीसमूहका रक्षक थिए
**काञ्चनमालिनः** = सुनको माला लगाएका
**ते** = ती
**महातेजाः** = महातेजस्वीहरू
**देवधिष्ण्याभैः** = देवताका विमान झैँ चम्किला
**रथैः** = रथहरूद्वारा
**तरलप्लवैः** = अत्यन्त छिटो दौडने
**हयैः च** = घोडाहरूद्वारा
**अभ्राभैः** = मेघसमान
**नदद्भिः** = गर्जिरहेका
**गजैः** = हात्तीहरूद्वारा
**विद्याधरद्युभिः** = विद्याधरसमान कान्ति भएका
**नृभिः** = मानिसहरूद्वारा
**पथि** = बाटोमा
**व्यरोचन्त** = सुशोभित भए

**वाक्यार्थ–** हे परीक्षित् ! त्यो ठुलो तीर्थयात्राको अवसरमा आफ्नो पापलाई नष्ट गर्न चाहने भारतवर्षका जनताहरू अनि गद, प्रद्युम्न, अनिरुद्ध, अक्रूर, वसुदेव, उग्रसेन आदि सारा वृष्णिवंशीहरू पनि त्यो क्षेत्रमा गए। सुचन्द्र, शुक, सारणले सहित अनिरुद्ध द्वारकाको रक्षामा खटिएका थिए। त्यो तीर्थयात्रीसमूहको रक्षक चाहिँ कृतवर्मा थिए। सुनको माला लगाएका ती महातेजस्वी वृष्णिहरू देवताका विमान झैँ चम्किला रथ, अत्यन्त छिटो दौडने घोडा, मेघसमान गर्जिरहेका हात्ती तथा विद्याधरसमान कान्ति भएका मानिसहरूद्वारा पनि सुशोभित थिए।

**दिव्यस्रग्वस्त्रसन्नाहाः कलत्रैः खेचरा इव ।**
**तत्र स्नात्वा महाभागा उपोष्य सुसमाहिताः ॥ ९ ।**
**ब्राह्मणेभ्यो ददुर्धेनूर्वासःस्रग्रुक्ममालिनीः ।**
**रामह्रदेषु विधिवत् पुनराप्लुत्य वृष्णयः ॥ १० ॥**
**ददुः स्वन्नं द्विजाग्र्येभ्यः कृष्णे नो भक्तिरस्त्विति ।**
**स्वयं च तदनुज्ञाता वृष्णयः कृष्णदेवताः ॥ ११ ॥**
**भुक्त्वोपविविशुः कामं स्निग्धच्छायाङ्घ्रिपाङ्घ्रिषु ।**
**तत्रागतांस्ते ददृशुः सुहृत्सम्बन्धिनो नृपान् ॥ १२ ॥**

**पदार्थ–**
**दिव्यस्रग्वस्त्रसन्नाहाः** = दिव्य माला र वस्त्र धारण गरेका
**कलत्रैः** = पत्नीहरूद्वारा
**खेचराः इव** = आकाशचारी देवतासमानका
**सुसमाहिताः** = एकाग्र मन भएका
**महाभागाः** = महाभाग्यशाली तिनीहरूले
**तत्र** = त्यहाँ
**स्नात्वा** = स्नान गरी
**उपोष्य** = (ग्रहणको सूतकमा) उपवास बसी
**ब्राह्मणेभ्यः** = ब्राह्मणहरूलाई
**वासःस्रग्रुक्ममालिनीः** = कपडा, माला र सुनका हारहरू पहिराइएका
**धेनूः** = गाईहरू
**ददुः** = दिए
**पुनः** = फेरि

**वृष्णयः** = वृष्णि (यदुवंशी)हरू
**रामह्रदेषु** = परशुरामद्वारा निर्मित पोखरीमा
**विधिवत्** = विधिपूर्वक
**आप्लुत्य** = (ग्रहणमोक्षको) स्नान गरेर
**द्विजाग्र्येभ्यः** = श्रेष्ठ ब्राह्मणहरूलाई
**नः** = हाम्रो
**कृष्णे** = कृष्णमा
**भक्तिः** = भक्ति
**अस्तु इति** = होस् भन्ने कामनाले
**स्वन्नं** = उत्कृष्ट अन्न
**ददुः** = दान गरे
**स्वयं च** = आफैँ पनि
**तदनुज्ञाताः** = ब्राह्मणहरूद्वारा आज्ञा पाएका
**कृष्णदेवताः** = कृष्णलाई नै देवता मान्ने
**वृष्णयः** = वृष्णिहरूले
**भुक्त्वा** = भोजन गरी
**स्निग्धच्छायाङ्घ्रिपाङ्घ्रिषु** = शीतल छायादार वृक्षहरूको फेदमा
**कामं** = आनन्दपूर्वक
**उपविविशुः** = बसे
**ते** = तिनीहरूले
**तत्र** = त्यहाँ
**आगतान्** = आएका
**सुहृत्सम्बन्धिनः** = प्रिय आफन्त
**नृपान्** = राजाहरूलाई
**ददृशुः** = देखे

**वाक्यार्थ–** ती वृष्णिहरूले दिव्यमाला र वस्त्र धारण गरेका थिए र पत्नीहरूद्वारा शोभित हुँदा उनीहरू आकाशचारी देवतासमान देखिन्थे। महाभाग्यशाली तिनीहरूले तीर्थक्षेत्रमा पुग्नेबित्तिकै एकाग्र मन गरी स्नान गरे र ग्रहणको सूतकको उपवास गरी ब्राह्मणहरूलाई कपडा, माला र सुनका हारहरूले सुसज्जित अनेक गाईहरू दान गरे। ग्रहणमोक्ष भइसकेपछि ती वृष्णिहरूले परशुरामद्वारा निर्मित पोखरीहरूमा विधिपूर्वक स्नान गरे र भगवान् कृष्णमा आफ्नो भक्ति लागोस् भन्ने इच्छा गरी ब्राह्मणहरूलाई उत्कृष्ट अन्नहरू दान गरे। श्रीकृष्ण नै देवता भएका ती वृष्णिहरूले ब्राह्मणहरूको आज्ञा लिई भोजन गरे र उनीहरू शीतल छायादार वृक्षहरूको फेदमा आनन्दपूर्वक बसे। तिनीहरूले त्यहाँ आएका आफ्ना प्रिय आफन्त राजाहरूलाई पनि देखे।

**मत्स्योशीनरकौशल्यविदर्भकुरुसृञ्जयान्।**
**काम्बोजकैकयान् मद्रान् कुन्तीनानर्तकेरलान्॥ १३॥**
**अन्यांश्चैवात्मपक्षीयान् परांश्च शतशो नृप।**
**नन्दादीन् सुहृदो गोपान् गोपीश्चोत्कण्ठिताश्चिरम्॥ १४॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**मत्स्योशीनरकौशल्यविदर्भकुरु-सृञ्जयान्** = मत्स्य, उशीनर, कोशल, विदर्भ, कुरु, सृञ्जय आदि देशका राजाहरूलाई
**काम्बोजकैकयान्** = कम्बोज र केकयका राजाहरूलाई
**मद्रान्** = मद्रनरेश
**कुन्तीन्** = कुन्तीभोज
**आनर्तकेरलान् एव** = आनर्त र केरलका राजाहरूलाई
**नन्दादीन्** = नन्द आदि
**सुहृदः** = अत्यन्त हितैषी
**गोपान्** = गोपहरूलाई
**चिरं** = लामो समयदेखि
**उत्कण्ठिताः** = कृष्णको दर्शन गर्न उत्कण्ठित भएका
**गोपीः च** = गोपिनीहरूलाई
**अन्यान् च** = अरू पनि
**आत्मपक्षीयान्** = आफ्ना पक्षका
**शतशः** = सयौँ
**परान् च** = शत्रुपक्षीय राजाहरूलाई पनि देखे

**वाक्यार्थ–** हे परीक्षित् ! त्यहाँ मत्स्य, उशीनर, कोशल, विदर्भ, कुरु, सृञ्जय, कम्बोज, केकय, मद्र, कुन्ती, आनर्त, केरल आदि अनेक देशका राजाहरू जम्मा भएका थिए। त्यहाँ यदुवंशीहरूका आफ्ना पक्ष एवं शत्रुपक्षका सयौं राजाहरू थिए। त्यसै गरी यदुहरूका अत्यन्त हितैषी नन्द आदि गोपहरू र श्रीकृष्णको दर्शन गर्न लामो समयदेखि उत्कण्ठित भएका गोपिनीहरू पनि त्यहाँ आएका थिए। ती वृष्णिहरूले यी सबैलाई देखे।

**अन्योन्यसन्दर्शनहर्षरंहसा प्रोत्फुल्लहृद्वक्त्रसरोरुहश्रियः।**
**आश्लिष्य गाढं नयनैः स्रवज्जला हृष्यत्त्वचो रुद्धगिरो ययुर्मुदम् ॥ १५ ॥**

**पदार्थ–**
**अन्योन्यसन्दर्शनहर्षरंहसा** = एक-अर्कालाई देखी हर्षको वेग बढ्नाले
**प्रोत्फुल्लहृद्वक्त्रसरोरुहश्रियः** = फुलेका कमल झैं प्रसन्न हृदय र चम्किला अनुहार भएका
**नयनैः** = आँखाहरूबाट
**स्रवज्जलाः** = आँसु खसिरहेका
**हृष्यत्त्वचः** = रोमाञ्चित भइरहेका
**रुद्धगिरः** = वाणी रोकिएका
तिनीहरू
**गाढं** = बेस्सरी
**आश्लिष्य** = आलिङ्गन गरी
**मुदं** = प्रसन्नतामा
**ययुः** = पुगे

**वाक्यार्थ–** एक-अर्कालाई देखेपछि उनीहरूमा हर्षको वेग बढ्यो र उनीहरूको हृदय एवं अनुहार फुलेका कमल झैं प्रसन्न देखिन थाले। आँखाबाट हर्षका आँसु खसालिरहेका, अङ्गप्रत्यङ्ग रोमाञ्चित भइरहेका र वाणीसमेत रोकिएका तिनीहरू एक-अर्कालाई आलिङ्गन गरी अत्यन्त प्रसन्न भए।

**स्त्रियश्च संवीक्ष्य मिथोऽतिसौहृदस्मितामलापाङ्गदृशोऽभिरेभिरे।**
**स्तनैः स्तनान् कुङ्कुमपङ्करूषितान् निहत्य दोर्भिः प्रणयाश्रुलोचनाः ॥ १६ ॥**

**पदार्थ–**
**प्रणयाश्रुलोचनाः** = प्रेमको आँसुले आँखा भरिएका
**स्त्रियः च** = स्त्रीहरूले पनि
**मिथः** = एक-अर्कालाई
**संवीक्ष्य** = देखेर
**अतिसौहृदस्मितामलापाङ्गदृशः** = अत्यन्त प्रेम, मन्द मुस्कान र निर्मल कटाक्षले युक्त भई
**कुङ्कुमपङ्करूषितान्** = कुङ्कुम-चूर्ण लेपन गरिएका
**स्तनान्** = स्तनहरूलाई
**स्तनैः** = स्तनहरूद्वारा
**निहत्य** = प्रताडित गर्दै
**दोर्भिः** = हातहरूले
**अभिरेभिरे** = आलिङ्गन गरे

**वाक्यार्थ–** गोपिनी र प्रेमको आँसुले आँखा भरिएका यदुवंशी स्त्रीहरूले एक-अर्कालाई देखे। अत्यन्त प्रेम, मन्द मुस्कान र निर्मल कटाक्षले युक्त भएका तिनीहरूले हातहरूद्वारा एक-अर्कालाई बेस्सरी आलिङ्गन गरे। त्यस समयमा कुङ्कुमचूर्ण लेपन गरिएका उनीहरूका स्तनहरू आपसमा ठोक्किएका थिए।

**ततोऽभिवाद्य ते वृद्धान् यविष्ठैरभिवादिताः।**

**स्वागतं कुशलं पृष्ट्वा चक्रुः कृष्णकथा मिथः॥ १७॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**यविष्ठैः** = कनिष्ठहरूद्वारा
**अभिवादिताः** = अभिवादन गरिएका
**ते** = तिनीहरूले
**वृद्धान्** = ज्येष्ठ व्यक्तिहरूलाई
**अभिवाद्य** = अभिवादन गरी
**स्वागतं** = स्वागत र
**कुशलं** = सन्चो-बिसन्चो
**पृष्ट्वा** = सोधी
**मिथः** = आपसमा
**कृष्णकथाः** = कृष्णकथा
**चक्रुः** = गर्न थाले

**वाक्यार्थ–** यसपछि आफूभन्दा कनिष्ठ व्यक्तिद्वारा अभिवादन गरिएका ती सबैले आफूभन्दा ज्येष्ठ व्यक्तिहरूलाई अभिवादन गरे र एक-आपसमा स्वागत गरी सन्चो-बिसन्चोबारे प्रश्न गरे। त्यसपछि उनीहरूले श्रीकृष्णको विषयमा चर्चा गर्न थाले।

**पृथा भ्रातॄन् स्वसॄर्वीक्ष्य तत्पुत्रान् पितरावपि।**

**भ्रातृपत्नीर्मुकुन्दं च जहौ सङ्कथया शुचः॥ १८॥**

**पदार्थ–**
**पृथा च** = कुन्तीले पनि
**भ्रातॄन्** = आफ्ना भाइहरू
**स्वसॄः** = बहिनीहरू
**तत्पुत्रान्** = तिनीहरूका छोराहरू
**पितरौ** = माता-पिता
**भ्रातृपत्नीः** = भाउजूहरू र
**मुकुन्दं अपि** = श्रीकृष्णलाई समेत
**वीक्ष्य** = देखेर
**सङ्कथया** = प्रेमपूर्वक बातचितद्वारा
**शुचः** = दुःख
**जहौ** = त्यागिन्

**वाक्यार्थ–** कुन्तीले पनि आफ्ना भाइ, बहिनी, तिनका छोरा, माता-पिता, भाउजूहरू र श्रीकृष्णलाई समेत देखिन् र परस्परमा प्रेमपूर्वक वार्तालाप गरी आफ्ना सारा दुःख त्यागिन्।

**कुन्त्युवाच** (कुन्तीले भनिन्)

**आर्य भ्रातरहं मन्ये आत्मानमकृताशिषम्।**

**यद्वा आपत्सु मद्वार्तां नानुस्मरथ सत्तमाः॥ १९॥**

**पदार्थ–**
**आर्य** = श्रेष्ठ
**भ्रातः** = हे भाइ
**अहं** = म
**आत्मानं** = आफूलाई
**अकृताशिषं** = अभागी
**मन्ये** = मान्दछु
**यत् वै** = किनभने
**सत्तमाः** = (तिमीजस्ता) श्रेष्ठ व्यक्तिहरूले समेत
**आपत्सु** = आपत्कालमा
**मद्वार्तां** = मेरो कुरा पनि
**न अनुस्मरथ** = सम्झिएनौ

**वाक्यार्थ–** हे श्रेष्ठ भाइ वसुदेव ! म अत्यन्त अभागी छु जस्तो लाग्छ, किनभने तिमीजस्ता श्रेष्ठ

व्यक्तिहरूले समेत अनेक आपत्तिको समयमा पनि मेरो सम्झना पनि गरेनौ।

**सुहृदो ज्ञातयः पुत्रा भ्रातरः पितरावपि।**
**नानुस्मरन्ति स्वजनं यस्य दैवमदक्षिणम्॥ २०॥**

**पदार्थ—**
**यस्य** = जसको
**दैवं** = भाग्य
**अदक्षिणं** = उल्टो हुन्छ
**स्वजनं** = त्यो स्वजनलाई
**सुहृदः** = उसका हितैषी
**ज्ञातयः** = सम्बन्धी
**पुत्राः** = छोरा
**भ्रातरः** = दाजुभाइ र
**पितरौ अपि** = मातापिताले समेत
**न अनुस्मरन्ति** = सम्झिँदैनन्

**वाक्यार्थ—** जसको भाग्य उल्टो हुन्छ, त्यस्ता व्यक्तिलाई उसका आफ्नै हितैषी, सम्बन्धी, छोरा, मातापिता र दाजुभाइहरूले समेत वास्ता गर्दैनन्।

**वसुदेव उवाच** (वसुदेवले भन्नुभयो)

**अम्ब मास्मानसूयेथा दैवक्रीडनकान् नरान्।**
**ईशस्य हि वशे लोकः कुरुते कार्यतेऽथवा॥ २१॥**

**पदार्थ—**
**अम्ब** = हे बहिनी कुन्ती
**अस्मान्** = हामी
**दैवक्रीडनकान्** = भाग्यका खेलौना जस्ता
**नरान्** = मानिसलाई
**मा असूयेथाः** = दोषी नमान
**हि** = निश्चय नै
**लोकः** = सम्पूर्ण संसार
**ईशस्य** = ईश्वरकै
**वशे** = वशमा रही
**कुरुते** = काम गर्दछ
**अथवा** = अथवा
**कार्यते** = गराइन्छ

**वाक्यार्थ—** हे बहिनी कुन्ती ! हामी सबै मानिसहरू त भाग्यका खेलौना हौँ, त्यसैले हामीलाई दोषी नमान। यो सम्पूर्ण संसारका प्राणीहरू ईश्वरकै वशमा रही कुनै पनि काम गर्दछन् वा गराइन्छन्।

**कंसप्रतापिताः सर्वे वयं याता दिशं दिशम्।**
**एतर्ह्येव पुनः स्थानं दैवेनासादिताः स्वसः॥ २२॥**

**पदार्थ—**
**स्वसः** = हे बहिनी कुन्ती
**सर्वे** = सबै
**वयं** = हामीहरू
**कंसप्रतापिताः** = कंसबाट पीडित भई
**दिशं दिशं** = चारैतर्फ
**याताः** = भागेका थियौँ
**पुनः** = फेरि
**दैवेन एव** = भाग्यद्वारा नै
**एतर्हि** = यही
**स्थानं** = स्थानमा
**आसादिताः** = ल्याइपुऱ्याइयौँ

**वाक्यार्थ—** हे कुन्ती ! पहिले हामी सबै कंसबाट पीडित भई चारैतर्फ भागेका थियौँ। अहिले

फेरि भाग्यकै कारणले यही स्थानमा ल्याइपुऱ्याइएका छौं।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**वसुदेवोग्रसेनाद्यैर्यदुभिस्तेऽर्चिता नृपाः।**

**आसन्नच्युतसन्दर्शपरमानन्दनिर्वृताः॥ २३॥**

**पदार्थ–**
**वसुदेवोग्रसेनाद्यैः** = वसुदेव, उग्रसेन आदि
**यदुभिः** = यदुवंशीहरूद्वारा
**अर्चिताः** = सत्कार गरिएका
**ते** = ती
**नृपाः** = राजाहरू
**अच्युतसन्दर्शपरमानन्दनिर्वृताः** = श्रीकृष्णको दर्शनद्वारा परमानन्दमा मग्न भएका
**आसन्** = थिए

**वाक्यार्थ–** वसुदेव, उग्रसेन आदि यदुवंशीहरूद्वारा सत्कार गरिएका ती सम्पूर्ण राजाहरू पनि भगवान् श्रीकृष्णको दर्शन गरी परम आनन्दमा मग्न भएका थिए।

**भीष्मो द्रोणोऽम्बिकापुत्रो गान्धारी ससुता तथा।**

**सदाराः पाण्डवाः कुन्ती सृञ्जयो विदुरः कृपः॥ २४॥**

**कुन्तीभोजो विराटश्च भीष्मको नग्नजिन्महान्।**

**पुरुजिद् द्रुपदः शल्यो धृष्टकेतुः सकाशिराट्॥ २५॥**

**दमघोषो विशालाक्षो मैथिलो मद्रकेकयौ।**

**युधामन्युः सुशर्मा च ससुता बाह्लिकादयः॥ २६॥**

**राजानो ये च राजेन्द्र युधिष्ठिरमनुव्रताः।**

**श्रीनिकेतं वपुः शौरेः सस्त्रीकं वीक्ष्य विस्मिताः॥ २७॥**

**पदार्थ–**
**राजेन्द्र** = हे राजा परीक्षित्
**भीष्मः** = भीष्म
**द्रोणः** = द्रोणाचार्य
**अम्बिकापुत्रः** = अम्बिकापुत्र धृतराष्ट्र
**ससुता** = छोराले सहित
**गान्धारी** = गान्धारी
**तथा** = त्यसै गरी
**सदाराः** = पत्नी सहित
**पाण्डवाः** = पाण्डवहरू
**कुन्ती** = कुन्ती
**सृञ्जयः** = सृञ्जय
**विदुरः** = विदुर
**कृपः** = कृपाचार्य
**कुन्तीभोजः** = कुन्तीभोज
**विराटः च** = विराट
**भीष्मकः** = भीष्मक
**महान्** = श्रेष्ठ
**नग्नजित्** = नग्नजित्
**पुरुजित्** = पुरुजित्
**द्रुपदः** = द्रुपद
**शल्यः** = शल्य
**सकाशिराट्** = काशीका राजा सहित
**धृष्टकेतुः** = धृष्टकेतु
**दमघोषः** = दमघोष

| | | |
|---|---|---|
| **विशालाक्षः** = विशालाक्ष | **बाह्लिकादयः** = बाह्लिक आदि | **सस्त्रीकं** = अर्धाङ्गिनीले सहित |
| **मैथिलः** = मिथिलाधीश | **ये च** = जो | **श्रीनिकेतं** = लक्ष्मीकै निवास भएको |
| **मद्रकेकयौ** = मद्र र केकय देशका राजा | **युधिष्ठिरम् अनुव्रताः** = युधिष्ठिरको अनुसरण गर्ने | **वपुः** = सुन्दर शरीरलाई |
| **युधामन्युः** = युधामन्यु | **राजानः** = राजाहरू (थिए, ती सबै) | **वीक्ष्य** = देखेर |
| **सुशर्मा च** = सुशर्मा | **शौरेः** = श्रीकृष्णको | **विस्मिताः** = आश्चर्यचकित भए |
| **ससुताः** = छोराहरूले सहित | | |

**वाक्यार्थ–** हे राजा परीक्षित् ! भीष्म, द्रोणाचार्य, धृतराष्ट्र, छोराहरू सहित गान्धारी, पत्नी सहित पाण्डव, कुन्ती, सृञ्जय, विदुर, कृपाचार्य, कुन्तीभोज, विराट, भीष्मक, नग्नजित्, पुरुजित्, द्रुपद, शल्य, काशीका राजा, धृष्टकेतु, दमघोष, विशालाक्ष, मिथिलाधीश, मद्र तथा केकय देशका राजा, युधामन्यु, सुशर्मा, छोराहरू सहित बाह्लिक आदि जो जो युधिष्ठिरका अनुयायी राजाहरू थिए तिनीहरू सबै अर्धाङ्गिनी रुक्मिणीले सहित भएको र लक्ष्मीकै निवासस्थान भएको भगवान्‌को सुन्दर शरीर देखेर अत्यन्त आश्चर्यचकित भए।

**अथ ते रामकृष्णाभ्यां सम्यक् प्राप्तसमर्हणाः।**
**प्रशशंसुर्मुदा युक्ता वृष्णीन् कृष्णपरिग्रहान्॥ २८॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अथ** = त्यसपछि | **प्राप्तसमर्हणाः** = सत्कार गरिएका | **कृष्णपरिग्रहान्** = श्रीकृष्णका स्वजन |
| **रामकृष्णाभ्यां** = बलराम र श्रीकृष्णद्वारा | **ते** = ती राजाहरूले | **वृष्णीन्** = वृष्णिवंशीहरूलाई |
| **सम्यक्** = राम्ररी | **मुदा** = प्रसन्नताले | **प्रशशंसुः** = प्रशंसा गरे |
| | **युक्ताः** = युक्त भई | |

**वाक्यार्थ–** त्यसपछि बलराम र श्रीकृष्णद्वारा राम्ररी सत्कार गरिएका ती राजाहरूले अत्यन्त प्रसन्न भई श्रीकृष्णका स्वजन वृष्णिवंशीहरूको प्रशंसा गरे।

**अहो भोजपते यूयं जन्मभाजो नृणामिह।**
**यत्पश्यथासकृत् कृष्णं दुर्दर्शमपि योगिनाम्॥ २९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अहो** = अहो | **नृणां** = मानिसहरूमध्ये | पनि |
| **भोजपते** = हे भोजराज उग्रसेन | **जन्मभाजः** = सफल जन्म भएका हुनुहुन्छ | **दुर्दर्शम्** = देख्न नसकिने |
| **यूयं** = हजुरहरू | **यत्** = किनभने | **कृष्णं** = श्रीकृष्णलाई |
| **इह** = यहाँ जन्मने | **योगिनाम् अपि** = योगीहरूद्वारा | **असकृत्** = बारम्बार |
| | | **पश्यथ** = देखिरहनुहुन्छ |

**वाक्यार्थ–** हे भोजराज उग्रसेन ! संसारमा जन्मने मानिसहरूमध्ये हजुरहरूको जन्म सफल छ।

किनभने योगीहरूद्वारा पनि देख्न नसकिने भगवान् श्रीकृष्णलाई हजुरहरू बारम्बार देख्नुहुन्छ।

**यद्विश्रुतिः श्रुतिनुतेदमलं पुनाति**
**पादावनेजनपयश्च वचश्च शास्त्रम्।**
**भूः कालभर्जितभगापि यदङ्घ्रिपद्म-**
**स्पर्शोत्थशक्तिरभिवर्षति नोऽखिलार्थान्॥ ३०॥**
**तद्दर्शनस्पर्शनानुपथप्रजल्प-**
**शय्यासनाशनसयौनसपिण्डबन्धः।**
**येषां गृहे निरयवर्त्मनि वर्ततां वः**
**स्वर्गापवर्गविरमः स्वयमास विष्णुः॥ ३१॥**

**पदार्थ–**
**यद्विश्रुतिः** = जसको कीर्ति
**श्रुतिनुता** = वेदद्वारा प्रशंसित छ
**पादावनेजनपयः च** = चरण पखालिएको जल र
**शास्त्रं** = वेदरूप
**वचः च** = वाणीले पनि
**इदं** = यो
**अलं** = सम्पूर्ण संसारलाई
**पुनाति** = पवित्र गराउँछ
**कालभर्जितभगा अपि** = समयको प्रभावद्वारा सौभाग्यहीन भएकी
**भूः** = पृथिवी पनि
**यदङ्घ्रिपद्मस्पर्शोत्थशक्तिः** = जसको चरणस्पर्श हुनाले शक्तिसञ्चार भएर
**नः** = हाम्रा लागि
**अखिलार्थान्** = सबै मनोरथहरूलाई
**अभिवर्षति** = पूर्ण गर्छिन्
**तद्दर्शनस्पर्शनानुपथप्रजल्पशय्यासनाशनसयौनसपिण्डबन्धः** = (हजुरहरूलाई) त्यस्ता श्रीकृष्णको दर्शन, स्पर्श, सँगै हिँडाइ, बातचित, सुताइ, बसाइ, खुवाइ, वैवाहिक सम्बन्ध आदि शरीरको सम्बन्ध छ
**निरयवर्त्मनि** = नरकको द्वार भएको प्रवृत्ति मार्गमा
**वर्ततां** = रहिरहेका
**येषां** = जो
**वः** = हजुरहरूको
**गृहे** = घरमा
**स्वर्गापवर्गविरमः** = स्वर्ग र मोक्षको इच्छालाई समेत हटाइदिने
**विष्णुः** = भगवान् विष्णु
**स्वयं** = स्वयम्
**आस** = प्रकट हुनुभएको छ

**वाक्यार्थ–** जसको कीर्ति वेदद्वारा प्रशंसित छ र जसको चरण पखालेको जल र वेदरूप वाणीले पनि समस्त संसारलाई पवित्र गराउँछ; पृथिवी समयको प्रभावद्वारा सौभाग्यहीन भएकी थिइन्, तर जसको चरणस्पर्शलाई पाएर उनमा फेरि शक्तिसञ्चार भएको छ र हाम्रा लागि उनी सबै चाहिएका वस्तुहरू प्रदान गर्दछिन्, हजुरहरू त्यस्ता श्रीकृष्णको दर्शन गर्नुहुन्छ, उहाँको स्पर्श, सँगसँगै हिँडाइ, बातचित, सुताइ, बसाइ, खुवाइ र वैवाहिक सम्बन्ध आदि अनेक प्रकारका शारीरिक सम्बन्धहरू पनि हजुरहरूलाई प्राप्त छन्। यद्यपि हजुरहरू नरकको द्वार भएको प्रवृत्तिमार्गमा रहिरहनुभएको छ, तर हजुरहरूको घरमा स्वयं भगवान् विष्णु प्रकट हुनुभएको छ,

जसलाई पाइसकेपछि स्वर्ग र मोक्षको समेत इच्छा हुँदैन।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**नन्दस्तत्र यदून् प्राप्तान् ज्ञात्वा कृष्णपुरोगमान्।**
**तत्रागमद् वृतो गोपैरनःस्थार्थैर्दिदृक्षया॥ ३२॥**

**पदार्थ–**
**नन्दः** = नन्दले
**तत्र** = त्यहाँ
**कृष्णपुरोगमान्** = श्रीकृष्ण आदि
**यदून्** = यदुवंशीहरूलाई
**प्राप्तान्** = आएका
**ज्ञात्वा** = जानेर
**अनःस्थार्थैः** = गाडामा सामान राखेका
**गोपैः** = गोपहरूद्वारा
**वृतः** = युक्त भई
**दिदृक्षया** = श्रीकृष्णलाई हेर्ने इच्छाले
**तत्र** = त्यहाँ
**आगमत्** = आए

**वाक्यार्थ–** नन्दले पनि त्यहाँ श्रीकृष्ण समेतका यदुवंशीहरू आएको थाहा पाए। आफ्ना सारा सामानहरू गाडामा राखेर गोपहरूले युक्त भई श्रीकृष्णको दर्शन गर्ने इच्छाले उनी त्यहाँ आए।

**तं दृष्ट्वा वृष्णयो हृष्टास्तन्वः प्राणमिवोत्थिताः।**
**परिषस्वजिरे गाढं चिरदर्शनकातराः॥ ३३॥**
**वसुदेवः परिष्वज्य सम्प्रीतः प्रेमविह्वलः।**
**स्मरन् कंसकृतान् क्लेशान् पुत्रन्यासं च गोकुले॥ ३४॥**

**पदार्थ–**
**चिरदर्शनकातराः** = लामो समयदेखि नदेखनाले उत्कण्ठित भएका
**वृष्णयः** = वृष्णि (यदु)हरूले
**तं** = ती नन्दलाई
**दृष्ट्वा** = देखेर
**तन्वः** = प्राणहीन शरीरहरू
**प्राणं इव** = प्राणलाई प्राप्त गरेर उठे झैं
**उत्थिताः** = उठे
**हृष्टाः** = अत्यन्त प्रसन्न भई
**गाढं** = बेस्सरी
**परिषस्वजिरे** = अङ्कमाल गरे
**कंसकृतान्** = कंसले गरेका
**क्लेशान्** = अत्याचारहरूलाई
**गोकुले** = गोकुलमा
**पुत्रन्यासं च** = छोरो राखिएको घटनालाई
**स्मरन्** = सम्झँदै
**प्रेमविह्वलः** = प्रेमले विह्वल भएका
**वसुदेवः** = वसुदेवले
**परिष्वज्य** = अङ्कमाल गरी
**सम्प्रीतः** = अत्यन्त प्रसन्न भए

**वाक्यार्थ–** नन्द आदिलाई लामो समयदेखि नदेखेको हुनाले यदुवंशीहरू अत्यन्त उत्कण्ठित भएका थिए, त्यसैले उनलाई देख्नेबित्तिकै उनीहरू प्रसन्नतापूर्वक त्यसै गरी जऱ्याकजुरुक उठे, जसरी प्राणहीन शरीरमा प्राणसञ्चार भएपछि त्यो उठ्दछ। यसपछि उनीहरूले नन्द आदिलाई बेस्सरी अङ्कमाल गरे, वसुदेवले पनि कंसले गरेका अत्याचारहरूलाई र आफ्नो छोरो गोकुलमा

लगी राखिएको घटनालाई सम्झिँदै प्रेमले विह्वल भएर नन्दलाई अङ्कमाल गरे र अत्यन्त प्रसन्न भए।

**कृष्णरामौ परिष्वज्य पितरावभिवाद्य च।**
**न किञ्चनोचतुः प्रेम्णा साश्रुकण्ठौ कुरूद्वह ॥ ३५॥**
**तावात्मासनमारोप्य बाहुभ्यां परिरभ्य च।**
**यशोदा च महाभागा सुतौ विजहतुः शुचः ॥ ३६॥**

**पदार्थ–**
**कुरूद्वह** = हे कुरुवंशी परीक्षित्
**कृष्णरामौ** = बलराम र कृष्णले
**पितरौ** = माता-पितालाई
**अभिवाद्य** = अभिवादन गरेर
**परिष्वज्य च** = अङ्कमाल समेत गरे र
**प्रेम्णा** = प्रेमद्वारा
**साश्रुकण्ठौ** = आँसुले गला अवरुद्ध भएका मातापिता
**किञ्चन** = केही पनि
**न ऊचतुः** = बोल्न सकेनन्
**महाभागा** = महाभाग्यशाली
**यशोदा च** = यशोदाले पनि
**तौ** = ती दुई
**सुतौ** = छोराहरूलाई
**आत्मासनं** = आफ्नै काखमा
**आरोप्य** = राखेर
**बाहुभ्यां च** = दुबै हातले
**परिरभ्य** = अङ्कमाल गरी
**शुचः** = सबै शोक
**विजहतुः** = त्यागिन्

**वाक्यार्थ–** हे परीक्षित्! बलराम र श्रीकृष्णले पनि माता-पिता यशोदा र नन्दलाई अभिवादन गरी परस्पर अङ्कमाल पनि गरे। प्रेमका आँसुले गला अवरुद्ध भएकाले उनीहरूले केही पनि बोल्न सकेनन्। महाभाग्यशाली यशोदाले पनि ती दुई छोराहरूलाई काखमा राखेर दुबै हातले अङ्कमाल गरिन् र सबै शोक त्यागिन्।

**रोहिणी देवकी चाथ परिष्वज्य व्रजेश्वरीम्।**
**स्मरन्त्यौ तत्कृतां मैत्रीं बाष्पकण्ठ्यौ समूचतुः ॥ ३७॥**
**का विस्मरेत वां मैत्रीमनिवृत्तां व्रजेश्वरि।**
**अवाप्याप्यैन्द्रमैश्वर्यं यस्या नेह प्रतिक्रिया ॥ ३८॥**

**पदार्थ–**
**अथ च** = त्यसपछि
**रोहिणी** = रोहिणी र
**देवकी** = देवकीले
**व्रजेश्वरीम्** = व्रजकी मालिक्नी यशोदालाई
**परिष्वज्य** = अङ्कमाल गरी
**तत्कृतां** = उनले गरेको
**मैत्रीं** = मैत्रीपूर्ण उपकारलाई
**स्मरन्त्यौ** = सम्झिँदै
**बाष्पकण्ठ्यौ** = गद्गद कण्ठ भई
**समूचतुः** = भने
**व्रजेश्वरि** = हे व्रजकी मालिक्नी यशोदा
**ऐन्द्रम्** = इन्द्रको
**ऐश्वर्यं** = ऐश्वर्यलाई
**अवाप्य अपि** = पाएर पनि
**यस्याः** = जसको

| | | |
|---|---|---|
| **इह** = यहाँ | **वां** = हामीबिचको | **का** = कसले |
| **प्रतिक्रिया** = प्रत्युपकार | **अनिवृत्तां** = कहिल्यै नटुट्ने | **विस्मरेत** = बिर्सन सक्ला |
| **न** = गर्न सकिँदैन | **मैत्रीम्** = मित्रतालाई | |

**वाक्यार्थ–** त्यसपछि रोहिणी र देवकीले यशोदालाई अङ्कमाल गरे। उनीहरूले यशोदाले गरेको मैत्रीपूर्ण उपकारलाई सम्झिँदै गद्गद कण्ठ भई भने– हे यशोदा ! हामीबिचको यो मित्रता कहिल्यै टुट्न सक्दैन, प्रत्युपकारद्वारा ऋण चुकाउन पनि नसकिने यो हाम्रो स्नेहलाई इन्द्रकै ऐश्वर्य पाएर पनि हामी कहिल्यै भुल्न सक्दैनौँ।

**एतावदृष्टपितरौ युवयोः स्म पित्रोः**
**सम्प्रीणनाभ्युदयपोषणपालनानि।**
**प्राप्योषतुर्भवति पक्ष्म ह यद्वदक्ष्णो-**
**र्न्यस्तावकुत्र च भयौ न सतां परः स्वः॥ ३९॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **एतौ** = यी दुई कृष्ण र बलराम | **प्राप्य** = पाएर |
| **यद्वत्** = जसरी | **अदृष्टपितरौ** = आफ्ना पितामातालाई देख्नै नपाए पनि | **ऊषतुः स्म** = बसेका थिए |
| **अक्ष्णोः** = दुबै आँखाको रक्षक | | **सतां** = सज्जनहरूका लागि |
| **पक्ष्म** = परेला | **अकुत्र च भयौ** = निर्भय भई | **परः** = पराइ र |
| **ह** = निश्चय नै | **पित्रोः** = पितासमान हजुर दुईकै | **स्वः** = आफन्त |
| **भवति** = हुन्छ | **सम्प्रीणनाभ्युदयपोषणपालनानि** = प्रेम, विभिन्न उत्सव (हित-चिन्तन) र पालनपोषण | **न** = हुँदैनन् |
| **युवयोः** = हजुर दुईमा | | |
| **न्यस्तौ** = राखिएका | | |

**वाक्यार्थ–** जसरी परेलाद्वारा आँखा सुरक्षित हुन्छ, त्यसै गरी हजुर दुई नन्द र यशोदाको भरमा छोडिएका यी कृष्ण-बलराम सुरक्षित भए। आफ्ना पितामातालाई देख्नै नपाए पनि यिनीहरू निर्भय भई हजुर दुईलाई नै पितामाता मानेर बसेका थिए र यिनीहरूले हजुरहरूको प्रेम, हितचिन्तन र पालनपोषण पनि पाएका थिए। किनभने हजुरहरूजस्ता सज्जनका लागि कोही आफन्त र पराइ हुँदैनन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**गोप्यश्च कृष्णमुपलभ्य चिरादभीष्टं**
**यत्प्रेक्षणे दृशिषु पक्ष्मकृतं शपन्ति।**
**दृग्भिर्हृदीकृतमलं परिरभ्य सर्वा-**
**स्तद्भावमापुरपि नित्ययुजां दुरापम्॥ ४०॥**

**पदार्थ–**
**सर्वाः** = सबै
**गोप्यः च** = गोपिनीहरूले पनि
**यत्प्रेक्षणे** = जसलाई हेर्दा
**दृशिषु** = आँखामा
**पक्ष्मकृतं** = परेला बनाउने विधातालाई
**शपन्ति** = धिक्कार्दथे
**चिरात्** = लामो समयदेखि
**अभीष्टं** = चाहना गरिएका
**कृष्णं** = श्रीकृष्णलाई
**उपलभ्य** = पाएर
**दृग्भिः** = आँखाहरूद्वारा
**हृदीकृतं** = हृदयमा पुऱ्याइएका उहाँलाई
**अलं** = पूर्णरूपले
**परिरभ्य** = अङ्कमाल गरी
**नित्ययुजां अपि** = नित्ययुक्त रहने योगीहरूलाई पनि
**दुरापं** = अप्राप्य
**तद्भावं** = भगवान्‌कै भावलाई
**आपुः** = प्राप्त गरे

**वाक्यार्थ–** गोपिनीहरू श्रीकृष्णको दर्शन गर्दा आँखामा परेला बनाउने विधातालाई धिक्कार्दथे। धेरै समय अघिदेखि देख्न चाहना गरिएका त्यस्ता श्रीकृष्णलाई पाएर उनीहरूले आँखाको माध्यमले उहाँलाई हृदयमा पुऱ्याए र त्यहीँ पूर्णरूपले अङ्कमाल गरे, यसबाट उनीहरूले नित्ययुक्त योगीहरूले पनि प्राप्त गर्न नसक्ने भगवद्‌भावलाई प्राप्त गरे।

**विवरण–** यस श्लोकमा भगवान् श्रीकृष्ण र गोपिनीहरूबिच देखादेख भएको बताइएको छ। अक्रूरले वृन्दावनबाट श्रीकृष्णलाई लिएर गइसकेपछि भगवान् श्रीकृष्ण र गोपिनीहरूबिच भेट भएको थिएन। यस बिचमा भगवान् श्रीकृष्ण ठुला-ठुला राजपरिवारहरूलाई सहयोग-सल्लाह दिने अनि अनेक दुष्ट शासकहरूलाई दमन गर्ने विशिष्ट भूमिकामा पुगिसक्नुभएको थियो। उनीहरूले बर्सौंसम्म श्रीकृष्णलाई नै सम्झिँदै दिनरात बिताएका थिए र श्रीकृष्ण आउने प्रतीक्षामा हरेक नयाँ दिनको स्वागत गरेका थिए। श्रीकृष्णले भने स्वयं आफू नआई कहिले उद्धव त कहिले बलरामलाई पठाई गोपिनीहरूलाई प्रेमसन्देश सुनाइरहनुभएको थियो। गोपिनीहरू र श्रीकृष्णको प्रेमको विषयमा विशेष प्रकारका रहस्यहरू रहेका छन्। सामान्य प्रेममा पनि प्रेमीहरू एक-आपसमा छुट्टिन सक्दैनन्, उनीहरूलाई एक विना अर्कोलाई बाँच्न गाह्रो परेको देखिन्छ, तर गोपिनीहरू र श्रीकृष्णले पनि यसबिचमा कहिल्यै एक-अर्कालाई भेट्न प्रयास गरेको देखिँदैन। मथुरामा रहनुहुने श्रीकृष्ण रथबाट केही घण्टामा नै पुग्न सकिने नजिकैको वृन्दावनमा कहिल्यै फर्किनुभएन। वृन्दावनमा उहाँले सर्वाधिक प्रेम गरेका गोपिनीहरूलाई भेट्न उहाँले कहिल्यै समय निकाल्नुभएन। के उहाँ तिनै श्रीकृष्ण हुनुहुन्थ्यो ? जसले गोपिनीहरूलाई महारासका क्रममा आफूले उनीहरूको प्रेमको ऋण जन्मौं लगाएर पनि तिर्न नसक्ने बताउनुभएको थियो ? यता गोपिनीहरूले पनि नजिकै रहेको मथुरामा पुगी श्रीकृष्णदर्शन गर्ने प्रयास गरेको देखिँदैन। आफ्ना प्रियलाई पाइन्छ भनेर कतिपय प्रेमीहरू संसारै पनि छाड्न तयार हुन्छन् भने गोपिनीहरू केही समय वृन्दावनलाई छाडी मथुरासम्म जान किन सकेनन् ? के उनीहरू तिनै गोपिनी थिए ? जसलाई श्रीकृष्णविनाको एक निमेष पनि युगौं बितेसमानको लाग्थ्यो र प्राण नै निस्कन लागे झैं हुन्थ्यो। यदि त्यसै हो भने यिनीहरूले त्यति लामो समय श्रीकृष्णविना घरबारमा कसरी बिताए ?

गोपिनीहरू त श्रीकृष्णको इसारामा चल्ने अनि उहाँको सुखमा सुखी हुने स्वभावका थिए, उनीहरूले आफ्नो पूर्ण अस्तित्व श्रीकृष्णलाई चढाइसकेकाले ती सबै गोपिनीहरू आफ्नो

नियन्त्रणमा होइन, श्रीकृष्णकै नियन्त्रणमा थिए। श्रीकृष्ण सामान्य भूमिकाबाट ठुला राजनेताको भूमिकामा पुगेपछि गोपिनीहरूले उहाँको इसाराविना कसरी श्रीकृष्णलाई भेट्न सक्थे र ? फेरि श्रीकृष्णले वृन्दावनबाट जाने क्रममा आफू छिट्टै आइहाल्छु पनि त भन्नुभएको थियो। यति मात्र नभई उद्धव आदिलाई सन्देश दिने क्रममा पनि श्रीकृष्णले गोपिनीहरूलाई आफू राजपाटको झमेला मिलाएर छिट्टै नै गोपिनीहरूकहाँ आइहाल्ने बताउनुभएको थियो। यसरी हरेकपटक श्रीकृष्णले आफू नै वृन्दावन आइहाल्छु भनेर बताउँदा बताउँदै गोपिनीहरूले आफैँ ढिपी गरी पहिल्यै मथुरा पुग्न सकेनन्, वृन्दावनमा नै रही प्रतीक्षा गरिरहे। श्रीकृष्णविना उनीहरूलाई आँखा झिम्क्याउन गाह्रो हुने पनि अवश्य हो, तर प्रतीक्षा गर्नुबाहेक अरू कुनै उपाय नभएपछि के गर्नु ? श्रीकृष्णको विरहमा उनीहरू मर्न पनि सक्दैनथे, यसो गर्दा एउटा त श्रीकृष्णको घोर दुर्नाम हुन्थ्यो भने अर्को उनीहरूको जीवन स्वयं उनीहरूकहाँ नभई श्रीकृष्णको नियन्त्रणमा थियो। अनेक पटक **त्वयि धृतासवः** अर्थात् श्रीकृष्णमा नै प्राण अडिएका **भवदायुषां** अर्थात् श्रीकृष्ण नै आयु भएका भन्ने बताई गोपिनीहरूले आफ्नो जीवन श्रीकृष्णको इसारामा चल्दछ भनी बताएका छन्। गोपिनीहरूको जीवन श्रीकृष्णका लागि थियो, त्यसैले विरहको जति वेदना भए पनि उनीहरू श्रीकृष्णका लागि भनेर युगौँ युग पनि बाँच्न तयार थिए। गोपिनीहरूको विशेषता के हो भने उनीहरूले आफ्ना लागि नभई प्रियतम श्रीकृष्णका लागि नै उहाँसित प्रेम गरेका छन्। आफ्नो स्वार्थ या आनन्दका लागि उनीहरूको प्रेम थिएन। हजारौँ रानीहरूसँग विवाह गरी यदुवंशका मालिक बनेर मथुरा अनि द्वारकामा रमाइरहनुभएका श्रीकृष्णका अघि गोपिनीहरू तँछाडमछाड गर्दै जानुको के अर्थ हुन्थ्यो र ? त्यसरी बिचमा जाँदा श्रीकृष्णको व्यक्तित्व अनि कार्यक्रममा बाधा आई उहाँलाई त्यसले दुःख हुन पनि त सक्दथ्यो ? गोपिनीहरू आफ्ना कारणले श्रीकृष्णलाई दुःख हुने कल्पना पनि गर्न सक्दैनथे। त्यसैले बदलिँदो परिस्थितिमा उनीहरू श्रीकृष्णलाई भेट्न मथुरा वा द्वारका कहीँ गएनन्, व्रजमण्डलमा नै बसिरहे।

यस सूर्यग्रहण स्नानको प्रसङ्गमा भने गोकुल र यदुकुलका बिच अचानक भेट भयो। यसै वेला श्रीकृष्ण र गोपिनीहरूको पनि देखादेख भयो। यसरी विधिको रहस्यमय विधानले गोपिनी र श्रीकृष्णलाई उनीहरू दुबै बस्ने ठाउँमा होइन, अपि तु परदेशमा भेटायो। श्लोकमा आएको **कृष्णं उपलभ्य** भन्ने पदले अचानक श्रीकृष्णसँग भेट भएको तर्फ सङ्केत गरेको छ। गोपिनीहरू नन्द–यशोदा आदिसँगै थिए, त्यसैले पहिले नन्द आदिसँग नै श्रीकृष्णको मिलन–भलाकुसारी भयो। प्राणैदेखि श्रीकृष्णलाई चाहने गोपिनीहरूलाई त्यति समय पर्खन पनि असाध्यै अप्ठ्यारो भयो भन्ने अर्थ **चिरात् अभीष्टम्** भन्ने पदले बुझाएको छ। उनीहरू श्रीकृष्णविना आँखा झिम्क्याउन पनि गाह्रो मान्थे र परेला बनाउने विधातालाई गाली गर्थे। यस्तो आतुरता हुँदा पनि बाहिर सबैको अघि श्रीकृष्णसँग प्रेमपूर्ण मिलन सम्भव थिएन। त्यसैले उनीहरूले **हृदीकृतं परिरभ्य** अर्थात् आँखाको माध्यमले हृदयभित्र पुऱ्याइएका श्रीकृष्णलाई भित्रभित्रै अङ्कमाल गरे र **तद्भावं** अर्थात् श्रीकृष्णकै भावमा पुगे। यसरी गोपिनी र श्रीकृष्णको हार्दिक मिलन भएको प्रसङ्ग यस श्लोकमा बताइएको छ।

**भगवांस्तास्तथाभूता विविक्त उपसङ्गतः ।**
**आश्लिष्यानामयं पृष्ट्वा प्रहसन्निदमब्रवीत् ॥ ४१ ॥**

**पदार्थ–**
**भगवान्** = भगवान् श्रीकृष्ण
**विविक्ते** = एकान्तमा
**उपसङ्गतः** = तिनीहरूसँग मिली
**तथाभूताः** = उत्कण्ठित भएका
**ताः** = तिनीहरूलाई
**आश्लिष्य** = अङ्कमाल गरी
**अनामयं** = कुशलमङ्गल
**पृष्ट्वा** = सोधी
**प्रहसन्** = हाँस्दै
**इदं** = सो
**अब्रवीत्** = भन्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले एकान्तमा गोपिनीहरूसँग भेटघाट गर्नुभयो र अत्यन्त उत्कण्ठित भएका तिनीहरूलाई अङ्कमाल गर्नुभयो। उहाँले गोपिनीहरूसँग कुशलमङ्गल सोधी हाँस्दै सो भन्नुभयो।

**अपि स्मरथ नः सख्यः स्वानामर्थचिकीर्षया ।**
**गतांश्चिरायिताञ्छत्रुपक्षक्षपणचेतसः ॥ ४२ ॥**
**अप्यवध्यायथास्मान् स्विदकृतज्ञाविशङ्कया ।**
**नूनं भूतानि भगवान् युनक्ति वियुनक्ति च ॥ ४३ ॥**

**पदार्थ–**
**सख्यः** = हे साथी गोपिनीहरू
**स्वानां** = आफन्तहरूको
**अर्थचिकीर्षया** = प्रयोजन पूरा गर्ने इच्छाले
**गतान्** = गएका र
**शत्रुपक्षक्षपणचेतसः** = त्यहीँ शत्रुलाई नष्ट गर्न चित्त लाग्नाले
**चिरायितान्** = आउन ढिला भएका
**नः** = हामीलाई
**अपि स्मरथ** = के तिमीहरू सम्झिन्छौ
**नूनं** = निश्चय नै
**भगवान्** = भगवान्ले नै
**भूतानि** = प्राणीहरूलाई
**युनक्ति** = जोड्नुहुन्छ र
**वियुनक्ति च** = छुट्याउनुहुन्छ
**अकृतज्ञाविशङ्कया** = कृतघ्न भन्ने आशङ्काले
**अपि स्वित्** = के
**अस्मान्** = हामीलाई
**अवध्यायथ** = सम्झना गर्दथ्यौ

**वाक्यार्थ–** हे साथी गोपिनीहरू ! आफन्तहरूको प्रयोजन पूरा गर्न म तिमीहरूबाट टाढा भएको थिएँ र त्यहीँ शत्रुहरूलाई नष्ट गर्नतिरै चित्त लाग्नाले आउन ढिला गरेँ। के तिमीहरू मलाई सम्झिन्थ्यौ ? प्राणीहरूलाई एक-अर्कालाई जोड्ने र छुट्याउने त भगवान् नै हुनुहुन्छ, के तिमीहरूले मलाई कृतघ्न ठानी सम्झना गर्ने गर्दथ्यौ त ?

**वायुर्यथा घनानीकं तृणं तूलं रजांसि च ।**
**संयोज्याक्षिपते भूयस्तथा भूतानि भूतकृत् ॥ ४४ ॥**

**पदार्थ–**
**यथा** = जसरी
**वायुः** = वायुले

| | | |
|---|---|---|
| **घनानीकं** = बादलसमूह | पनि | **तथा** = त्यसै गरी |
| **तृणं** = घाँस | **संयोज्य** = आपसमा जोडी | **भूतकृत्** = संसार रचयिताले पनि |
| **तूलं** = कपास | **भूयः** = फेरि | **भूतानि** = प्राणीहरूलाई |
| **रजांसि च** = धुलोका कणलाई | **आक्षिपते** = छुट्याइदिन्छ | (जोड्ने र छुट्याउने गर्नुहुन्छ) |

**वाक्यार्थ–** जसरी वायुले बादल, घाँस, कपास र धुलोका कणहरूलाई आपसमा जोडी फेरि छुट्याइदिन्छ, त्यसै गरी भगवान्ले पनि प्राणीहरूलाई एक-आपसमा जोड्ने र छुट्याउने गर्नुहुन्छ।

**मयि भक्तिर्हि भूतानाममृतत्वाय कल्पते।**
**दिष्ट्या यदासीन्मत्स्नेहो भवतीनां मदापनः॥ ४५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **दिष्ट्या** = सौभाग्यवश | **आसीत्** = भएको छ | **भूतानां** = प्राणीहरूको |
| **भवतीनां** = तिमीहरूको | **यत्** = किनभने | **अमृतत्वाय** = मोक्षका लागि |
| **मदापनः** = मलाई प्राप्त गराउने | **हि** = निश्चय नै | **कल्पते** = साधन हुन्छ |
| **मत्स्नेहः** = मप्रतिको प्रेम | **मयि** = ममा | |
| | **भक्तिः** = भक्ति (शुद्ध प्रेम) | |

**वाक्यार्थ–** यो सौभाग्यको कुरो हो कि, तिमीहरूलाई मलाई पाउने साधन भएको मेरो प्रेम प्राप्त भएको छ, किनभने मप्रतिको भक्ति नै प्राणीहरूको लागि मोक्षको साधन हुन्छ।

**विवरण–** यस प्रसङ्गमा भगवान् श्रीकृष्णले आफूले लामो समयसम्म गोपिनीहरूसँग भेट नगरेकोमा चिन्तित भएका उनीहरूलाई सम्झाउनुभएको छ। श्रीकृष्णले दुष्टहरूलाई नाश गर्न लाग्दा धेरै ढिलो भएको भनी माफ मागे झैं गर्नुभएको छ। श्रीकृष्णले हे गोपिनीहरू ! के तिमीहरूले मलाई सम्झिन्थ्यौ ? भनेर सोध्नुको कुनै अर्थ छैन, किनभने उहाँकै लागि जीवन बिताउने गोपिनीहरूलाई भेट्न एक पटक पनि नआएकाले स्वयं श्रीकृष्णले नै गोपिनीहरूलाई कति सम्झिनुहुन्थ्यो भन्ने सन्देह छ। गोपिनीहरूको यही मनोभावलाई बुझी श्रीकृष्णले तिमीहरूले मलाई कृतघ्न र निठुरी भन्यौ कि ? भनी प्रश्न गर्नुभएको छ। गोपिनीहरूको दृढ श्रीकृष्णप्रेम र लामो प्रतीक्षाप्रति सहानुभूति राख्नेहरूको आरोप के छ भने श्रीकृष्णले गोपिनीहरूको सम्पूर्ण प्रेम एवं समर्पणलाई लिई एकपटक पनि मुख नदेखाउनुले उहाँ कृतघ्न हुन सम्भव छ। तर यो प्रेमको रिस हो र यसमा प्रेमीप्रति अझै पनि पूर्णरूपले समर्पित भएको भावको झल्को पाइन्छ। श्रीकृष्णले उत्तर दिँदा पहिले त संयोग-वियोग विधिले नै गराउने भन्दै त्यसमा विधिलाई नै दोष दिनुभएको छ। तर यी सबै कुरा बताउँदा पनि गोपिनीहरूको चित्त नबुझेकाले उहाँले आफ्नै मुखले आफ्नो ईश्वरीयताको वर्णन गर्नुपरेको छ। यो भूमिकामा आएर उहाँले आफूले गोपिनीहरूलाई नभेटेको तात्पर्य अर्थ्याउनुभएको छ।

भगवान्का भक्तहरू भन्छन्– गोपिनीहरूलाई लामो समयसम्म नभेट्नु भगवान्को दोष होइन, गुण नै हो। भक्ति बढाउन र भक्तको महिमा प्रकाशित गर्नकै लागि भगवान् भक्तसँग छुट्टिए झैं गर्नुहुन्छ, वास्तवमा त सबैका आत्मा श्रीकृष्णले पूरै छाडिदिएका भए गोपिनीहरू बाँच्न

पनि कसरी सम्भव हुन्थ्यो र ? बाहिरबाट हेर्दा श्रीकृष्ण निष्ठुर भएको देखिए पनि यो उहाँको लीला मात्र हो। यदि श्रीकृष्णविरहमा यति बढी दुःखी नभएका भए, अनि दिनरात श्रीकृष्णमय भई उहाँलाई सम्झिँदै नबिताएका भए गोपिनीहरू प्रेमका आदर्श थिए भन्ने कसरी थाहा हुन्थ्यो ? श्रीकृष्णविरहमा गोपिनीहरूको श्रीकृष्णप्रति प्रेम यति धेरै बढेको थियो कि उनीहरू सधैँ श्रीकृष्णभावनामा डुबिरहन्थे। श्रीकृष्णलाई आफ्नै रूपमा हृदयभित्र नित्य प्राप्त गराउने स्नेह उनीहरूभित्र थियो। यसरी हेर्दा गोपिनीहरूसँग वियोग भएकै थिएन किनभने विरहको वेलामा हुने निरन्तर सम्झनाको कारणले उहाँ आन्तरिक रूपमा सधैँ गोपिनीहरूसँगै हुनुहुन्थ्यो। यदि श्रीकृष्णले जीवनभरि मिलनको आनन्द मात्र चखाउनुभएको भए उनीहरूको प्रेम यति विकसित हुने थिएन। श्रीकृष्णलाई पनि आफ्ना अन्तरङ्ग प्रेमीहरूसँग छुट्टिनुपर्दा अवश्य कष्ट हुन्थ्यो होला। उहाँ सबै प्राणीहरूका अन्तर्यामी भएकाले तीभित्रका वेदनाहरूलाई पनि स्पष्ट थाहा पाउनुहुन्थ्यो। यसरी गोपिनीहरूको क्षण-क्षणको विरह वेदनालाई अनुभव गरेर पनि श्रीकृष्ण उनीहरूसँग छुट्टिनुमा केही विशेष कारण त अवश्य हुनुपर्दछ। उहाँले गोपिनीहरूलाई प्रेम नगर्ने पनि होइन, किनभने उद्धव, बलराम आदिको माध्यमले उहाँले बाहिरी रूपमा पनि गोपिनीहरूको खबर लिइरहनुहुन्थ्यो। श्रीकृष्ण सामान्य प्रेमीहरूजस्तै प्रेमीसँग हाँसखेल गरी रमाइरहने स्वभावको हुनुहुन्नथ्यो, उहाँलाई त आफूलाई प्रेम गर्ने गोपिनीहरूको प्रेमको उच्च आदर्शलाई जगत्सामु प्रकट गर्नु थियो, जुन कुरा विरह अवस्थामा बाहेक अरू वेलामा प्रकट हुँदैनथ्यो। फेरि सामुन्नेमा रहिरहँदा सधैँ प्रियतमको स्मरण हुँदैन र उनलाई बिर्सिइन्छ। तर विरहको अवस्थामा त व्यक्ति निरन्तर प्रेमीको चिन्तनमा डुबिरहेको हुन्छ। श्रीकृष्णविरहको कारणले गोपिनीहरूले झन् आन्तरिक रूपमा उहाँलाई पाए, यो प्राप्ति शारीरिक निकटताभन्दा कैयौँ गुणा बढी आत्मिक मिलनरूप थियो। यसैलाई श्रीकृष्णले श्लोकमा आफूलाई प्राप्त गराउने स्नेह भन्नुभएको छ। यसरी यहाँ गोपिनी र श्रीकृष्णको वियोग के कारणले आवश्यक थियो भनी श्रीकृष्णले बताउनुभएको छ।

**अहं हि सर्वभूतानामादिरन्तोऽन्तरं बहिः।**
**भौतिकानां यथा खं वार्भूर्वायुर्ज्योतिरङ्गनाः॥ ४६॥**

**पदार्थ–**
**अङ्गनाः** = हे सुन्दरी गोपिनीहरू
**यथा** = जसरी
**भौतिकानां** = सारा भौतिक पदार्थहरूको (आदि अन्तमा)
**खं** = आकाश
**वाः** = जल
**भूः** = पृथिवी
**वायुः** = वायु
**ज्योतिः** = तेज हुन्छन्
**हि** = निश्चय नै
**सर्वभूतानां** = सम्पूर्ण प्राणीहरूको
**आदिः** = आदि
**अन्तः** = अन्तमा
**अन्तरं** = भित्र
**बहिः** = बाहिर समेत
**अहम्** = म नै व्याप्त छु

**वाक्यार्थ–** हे सुन्दरी गोपिनीहरू ! जसरी घैँटो आदि भौतिक पदार्थहरूमा आकाश, जल, वायु, पृथिवी र तेज व्याप्त हुन्छन् त्यसै गरी सम्पूर्ण प्राणीहरूको आदि, अन्त, भित्र र बाहिर समेत म नै व्याप्त छु।

**एवं ह्येतानि भूतानि भूतेष्वात्मात्मना ततः।**
**उभयं मय्यथ परे पश्यताभातमक्षरे॥ ४७॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**हि** = निश्चय नै
**भूतेषु** = सम्पूर्ण पदार्थहरूमा (कार्यरूप शरीरहरूमा)
**एतानि** = यी
**भूतानि** = पृथिवी, जल आदि
**आत्मना** = कारणरूपले (रहेका छन्)
**आत्मा** = जीवात्मा समेत (त्यसै गरी रहेको छ)
**अथ** = त्यसैले
**ततः** = यी दुबैभन्दा
**परे** = पर रहेको
**मयि** = म
**अक्षरे** = अक्षर ब्रह्ममा
**उभयं** = यी दुबैलाई
**आभातं** = कल्पित
**पश्यत** = देख

**वाक्यार्थ–** यसप्रकार जसरी सबै कार्यरूप शरीर आदिमा पृथिवी, जल आदि भौतिक पदार्थ कारणरूपले विद्यमान हुन्छन्, त्यसै गरी हरेक शरीरमा जीवात्मा समेत रहेको हुन्छ। अक्षर ब्रह्म चाहिँ यी दुबैभन्दा पर रहेको छ, त्यो अक्षर ब्रह्म म नै हुँ र यसैमा भोक्ता र भोग्यरूप सम्पूर्ण प्रपञ्च कल्पित छ भनी बुझ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अध्यात्मशिक्षया गोप्य एवं कृष्णेन शिक्षिताः।**
**तदनुस्मरणध्वस्तजीवकोशास्तमध्यगन्॥ ४८॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**अध्यात्मशिक्षया** = आत्मतत्त्वको ज्ञान दिई
**कृष्णेन** = श्रीकृष्णद्वारा
**शिक्षिताः** = शिक्षित भएका
**तदनुस्मरणध्वस्तजीवकोशाः** = उहाँको वास्तविक रूपलाई बुझ्नाले जीवभाव नष्ट भएका
**गोप्यः** = गोपिनीहरूले
**तं** = उहाँलाई
**अध्यगन्** = प्राप्त गरे

**वाक्यार्थ–** यसप्रकार भगवान् श्रीकृष्णले गोपिनीहरूलाई आत्मतत्त्वको ज्ञान प्रदान गर्नुभयो। यसबाट उनीहरूले श्रीकृष्णको वास्तविक स्वरूपलाई बुझे र यही ज्ञानद्वारा उनीहरूको जीवभाव नष्ट भयो। यसरी उनीहरूले आफ्नै आत्मस्वरूप श्रीकृष्णलाई प्राप्त गरे।

**विवरण–** माथिका श्लोकहरूमा भगवान् श्रीकृष्णले गोपिनीहरूलाई आत्मतत्त्व सम्बन्धी उपदेश गरेपछि गोपिनीहरूको जीवकोश ध्वस्त भयो भनी बताइएको छ। श्रीकृष्णविरहमा विचलित भइरहेका गोपिनीहरूलाई भगवान्ले आफ्नो सर्वव्यापक अस्तित्वको ज्ञान दिनुभएको छ। सम्पूर्ण प्राणीहरूको आदि र अन्त परमात्मा नै हुनुहुन्छ। जसरी माटोबाट उत्पन्न अनि माटोमा नै बिलाउने घैंटो माटो नै सिद्ध हुन्छ, त्यसै गरी आत्माबाट उत्पन्न भई त्यहीँ हराउने सम्पूर्ण जगत् पनि आत्मरूप नै हो भन्ने सिद्ध हुन्छ। सम्पूर्ण प्राणीहरूमा आत्मा अर्थात् परमात्मा नै भोक्ता जीवात्माको रूपमा भित्र पस्नुभएको छ। सर्वव्यापक परमात्मा कहीँ भित्र पस्न र निस्कन कहाँ

सम्भव छ र ? त्यसैले यो प्रवेश भनेको घैँटोभित्र आकाश पस्नु जैँ मात्र हो। आकाशको जति भागमा घैँटो कल्पित छ, त्यति भागलाई घटाकाश भनिन्छ, यो घैँटोको पनि अधिष्ठान हो, तर घैँटोभित्र पसेको आकाश भन्ने व्यवहार हुन्छ। यसै गरी सर्वव्यापक आत्माको जति भागमा अन्तःकरणरूप उपाधिको कल्पना हुन्छ, त्यसैलाई भोक्ता जीव भनिन्छ। अन्तःकरण आदि उपाधिका धर्महरूद्वारा युक्त हुने हुनाले यो भोक्ता भाव आत्माको असली स्वरूप होइन। उपनिषद्मा पनि **आत्मेन्द्रियमनोयुक्तं भोक्तेत्याहुर्मनीषिणः** (कठोपनिषद् १।३।४) अर्थात् आत्मा, इन्द्रिय र मन मिलेर भोक्ता बन्दछ भनी यही कुराको पुष्टि गरिएको छ। यसरी शब्द, स्पर्श आदि विषयहरूले युक्त यो सम्पूर्ण जगत् आत्माको भोग्य हो भने आत्मा पनि इन्द्रिय, अन्तःकरण आदि उपाधिको माध्यमले त्यसको भोक्ता हो। भोक्ता चेतन तत्त्व नभए भोग्य जगत्‌को के प्रयोजन ? जगत्‌मा अनेक थरी वस्तु रहनुको केही अर्थ रहँदैन र ती वस्तु भए पनि नभए सरह नै हुन्छन्, जबसम्म भोक्ता आत्माले तिनलाई विषय गर्दैन। यसरी भोक्ता आत्माको भोगद्वारा नै विषयहरूको सत्ता सिद्ध हुन्छ। यसैलाई जैमिनि मुनिले **शेषः परार्थत्वात्** (मीमांसासूत्र ३।१।२) अर्थात् आत्माको भोगका लागि हुने भएकाले जगत् आत्माको शेष हो भने आत्मा शेषी हो भन्नुभएको छ। यसरी भोग्य जगत् भोक्तामा अडिएको छ भने ऊ स्वयं चाहिँ कहाँ अडिएको छ ? यसको उत्तर हो, अक्षर परमात्मामा नै भोक्तृत्वभाव कल्पित भएकाले यो त्यहीँ अडिएको छ। वास्तवमा भोग्य पदार्थ अनि भोक्ता आत्माको रूपमा पनि देखिने एउटै परमतत्त्व भएकाले ती दुबै त्यही परम सत्तामा अडिएका छन्। यसैलाई श्लोकमा **उभयं** अर्थात् ती दुबैलाई **अक्षरे** अर्थात् अक्षर परब्रह्ममा **आभातं** अर्थात् कल्पित भएको जगत् भनी उपदेश दिइएको छ।

यहाँ गोपिनीहरूलाई अध्यात्मशिक्षा अर्थात् शरीरभित्र रहने साक्षी चेतनतत्त्वको विषयमा ज्ञान दिएर भगवान्‌ले शास्त्रहरूको प्रतिज्ञालाई पनि सत्य बनाउनुभएको छ। भगवद्गीतामा भगवान्‌ले **ददामि बुद्धियोगं तम्** (१०।१०) अर्थात् प्रीतिपूर्वक आफ्नो भजन गर्ने र सधैँ आफ्नो चिन्तनमा नै समय बिताउने अनन्य भक्तहरूलाई ज्ञानप्रदान गर्दछु भनी बताउनुभएको छ। सामान्य व्यवहारमा पनि आफ्नो गोप्य रहस्य या भित्री स्वरूप आफ्ना अन्तरङ्ग मानिसहरूसँग मात्र प्रकट गरिन्छ। भगवान्‌का भक्तहरू नै उहाँका सबैभन्दा बढी अन्तरङ्ग हुन्। त्यसैले तिनीहरूलाई भगवान्‌को यथार्थ स्वरूपको ज्ञान नहुने कुरै भएन। यद्यपि यी गोपिनीहरू श्रुतिरूपा थिए र भगवत्तत्त्वलाई पूरा जान्दथे। त्यसैले त्यस्ता ज्ञानीहरूलाई उपदेशको आवश्यकता थिएन, तर मर्यादा स्थापनाका लागि भगवान्‌ले यसो गर्नुभएको हो। गोपिनीहरू परम ज्ञानवती भए तापनि तिनीहरू अत्यधिक प्रेमका कारणले श्रीकृष्णको ईश्वरत्वलाई नै भुल्ने गरी गाढभावमा पुग्थे। त्यस वेला उनीहरूले श्रीकृष्णप्रति प्रकट गरेका भावहरू हेर्दा सामान्य मानिसलाई त्यसमा अज्ञानी मानिसले गर्ने आसक्तिको शङ्का हुन सक्दछ। यहाँ गोपिनीहरूलाई **तदनुस्मरणध्वस्तजीवकोशाः** भनिएको छ। यसको अर्थ निरन्तर रूपमा परमात्मचिन्तन गर्नाले गोपिनीहरूको जीवकोश अर्थात् लिङ्गशरीर ध्वस्त भएको थियो भन्ने हुन्छ। **तं अध्यगन्** यो शब्दको अर्थ श्रीकृष्णलाई पाए भन्ने हुन्छ। ज्ञानी गोपिनीहरूले **अखिलदेहिनामन्तरात्मदृक्** अर्थात् सम्पूर्ण प्राणीरूका अन्तर्यामी भन्ने त पहिल्यै जानिरहेकै थिए। त्यसैले यसको अर्थ श्रीकृष्णको उपदेशपछि यी गोपिनीहरूको

शरीरबन्धन तत्काल निवृत्त भयो र पहिल्यै ज्ञानद्वारा लिङ्गशरीर नष्ट भइसकेका उनीहरू स्थूल शरीरलाई पनि छाडी तत्काल श्रीकृष्णमय भए भन्ने हुन्छ। कसैको मतमा भने गोपिनीहरू भगवान्को नित्य लीलासहचरी हुन् र तिनीहरूलाई आफूसमान केवल मायाशक्तिको भरमा मात्र उत्पन्न गरेकाले तिनीहरूमा लिङ्गशरीरको सम्भावना छैन। यसरी विचार गर्दा जीवकोश शब्दको अर्थ गोपिनीहरूको जीवनलाई गम्लङ्ग ढाक्ने विरहभाव भन्ने हुन्छ। आफ्नै रूपमा परमात्मालाई बुझेपछि कृष्णविरह कसरी सम्भव हुन्थ्यो र ? त्यसैले तिनले विरह फाले र श्रीकृष्णलाई सदाका लागि पाए। गोपिनीहरूको समूहमा साधना आदिको बलले माथिल्लो अवस्थामा पुगेकाले तत्त्वज्ञान नभइसकेका कोही गोपिनी पनि थिए भनेर मान्ने हो भने यो उपदेशपछि उनीहरूमा ज्ञान उत्पन्न भएको र त्यसद्वारा अज्ञान नष्ट भई उनीहरूको जीवकोश अर्थात् लिङ्ग शरीर पनि तत्काल ध्वस्त भएको मान्न सकिन्छ। यो मतमा भने **तं अध्यगन्** यो शब्दको अर्थ उनीहरूले अन्तर्यामी आत्माकै रूपमा श्रीकृष्णलाई बुझे भन्ने हुन्छ।

**आहुश्च ते नलिननाभ पदारविन्दं**
**योगेश्वरैर्हृदि विचिन्त्यमगाधबोधैः।**
**संसारकूपपतितोत्तरणावलम्बं**
**गेहञ्जुषामपि मनस्युदियात् सदा नः॥ ४९॥**

**पदार्थ—**
**ते च** = तिनीहरूले
**आहुः** = भने
**नलिननाभ** = नाभिमा कमल धारण गर्ने हे भगवान्
**अगाधबोधैः** = अगाध (ज्यादै धेरै) ज्ञान भएका
**योगेश्वरैः** = योगेश्वरहरूले पनि
**हृदि** = हृदयभित्र
**विचिन्त्यं** = चिन्तन गर्न योग्य
**संसारकूपपतितोत्तरणावलम्बं** = संसाररूपी कुवामा खसेकाहरूको उद्धार गर्ने एक मात्र साधन भएको
**पदारविन्दं** = हजुरको चरणकमल
**गेहञ्जुषां** = घरव्यवहारमै रहेका
**नः** = हाम्रो
**मनसि अपि** = मनमा पनि
**सदा** = निरन्तर
**उदियात्** = उदाइरहोस्

**वाक्यार्थ—** गोपिनीहरूले भने— हे कमलनाभ भगवान्! हजुरको चरण अगाध ज्ञान भएका योगेश्वरहरूले पनि आफ्नो हृदयभित्र चिन्तन गर्न योग्य छ। त्यसै गरी यही नै संसाररूपी कुवामा खसेकाहरूलाई उद्धार गर्ने एक मात्र साधन हो। हामीहरू घरव्यवहारमै फसेका छौँ, तर पनि हाम्रो मनमा हजुरको चरणकमल निरन्तर उदाइरहोस्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**
**वृष्णिगोपसङ्गमो नाम द्व्यशीतितमोऽध्यायः॥ ८२॥**

# अथ त्र्यशीतितमोऽध्यायः

## भगवान्‌का पटरानीहरूको द्रौपदीसँगको संवाद

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तथानुगृह्य भगवान् गोपीनां स गुरुर्गतिः।**

**युधिष्ठिरमथापृच्छत् सर्वांश्च सुहृदोऽव्ययम्॥ १॥**

**पदार्थ–**
**गोपीनां** = गोपिनीहरूका
**गुरुः** = गुरु र
**गतिः** = एक मात्र प्राप्तव्य
**सः** = ती
**भगवान्** = भगवान् श्रीकृष्णले
**तथा** = त्यसप्रकार
**अनुगृह्य** = अनुग्रह गरी
**अथ** = यसपछि
**युधिष्ठिरं** = युधिष्ठिरलाई
**सर्वान्** = सबै
**सुहृदः च** = अरू आफन्तहरूलाई पनि
**अव्ययं** = कुशलमङ्गल
**अपृच्छत्** = सोध्नुभयो

**वाक्यार्थ–** गोपिनीहरूका गुरु र एक मात्र प्राप्तव्य भएका भगवान्‌ले पहिला गोपिनीहरूलाई अनुग्रह गर्नुभयो र यसपछि उहाँले युधिष्ठिर एवं अरू बान्धवहरूसँग कुशलमङ्गल सोध्नुभयो।

**त एवं लोकनाथेन परिपृष्टाः सुसत्कृताः।**

**प्रत्यूचुर्हृष्टमनसस्तत्पादेक्षाहतांहसः॥ २॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**तत्पादेक्षाहतांहसः** = उहाँको चरणकमलको दर्शन गर्नाले पाप नष्ट भएका र
**लोकनाथेन** = जगन्नाथ भगवान्‌द्वारा
**परिपृष्टाः** = सोधिएका
**सुसत्कृताः** = सत्कार गरिएका
**हृष्टमनसः** = प्रसन्न मन भएका
**ते** = तिनीहरूले
**प्रत्यूचुः** = भने

**वाक्यार्थ–** ती राजाहरूको सम्पूर्ण पाप भगवान्‌को चरणकमलको दर्शन गर्नाले नै नष्ट भइसकेको थियो। जगन्नाथ भगवान्‌ले यस प्रकार कुशलमङ्गल सोधी सत्कार गरेपछि अरु प्रसन्न भएका उनीहरूले यसो भने।

**कुतोऽशिवं त्वच्चरणाम्बुजासवं महन्मनस्तो मुखनिःसृतं क्वचित्।**

**पिबन्ति ये कर्णपुटैरलं प्रभो देहम्भृतां देहकृदस्मृतिच्छिदम्॥ ३॥**

**पदार्थ–**
**प्रभु** = हे प्रभु
**ये** = जो व्यक्ति
**देहकृदस्मृतिच्छिदं** = बारम्बार जन्ममृत्युको कारण भएको अज्ञानरूपी विस्मृतिलाई नष्ट गर्ने
**महन्मनस्तः** = महापुरुषहरूको मनभित्रबाट
**क्वचित्** = कहिलेकाहीँ
**मुखनिःसृतं** = मुखको माध्यमले निस्कने

**त्वच्चरणाम्बुजासवं** = हजुरको चरणकमलको रस
**कर्णपुटैः** = कानरूपी दुनाद्वारा
**अलं** = तृप्त हुने गरी
**पिबन्ति** = पिउँछन्
**देहम्भृतां** = त्यस्ता देहधारी प्राणीहरूको
**अशिवं** = अकल्याण
**कुतः** = कसरी हुन सक्छ

**वाक्यार्थ–** हे प्रभु ! अज्ञानरूपी विस्मृति नै अनन्त जन्ममृत्युको कारण हो र यसलाई हजुरको चरणकमलको रसले नष्ट गर्न सक्दछ। महापुरुषहरूको मनमा गुप्त रहने यो रस कहिलेकाहीँ मुखको माध्यमले बाहिर निस्कन्छ, जो व्यक्तिले कानरूपी दुनाद्वारा तृप्त हुने गरी यस रसलाई पिउँछन्, त्यस्ता व्यक्तिको अकल्याण कसरी हुन सक्दछ र ?

**हित्वात्मधामविधुतात्मकृतत्र्यवस्थ-**
**मानन्दसम्प्लवमखण्डमकुण्ठबोधम् ।**
**कालोपसृष्टनिगमावन आत्तयोग-**
**मायाकृतिं परमहंसगतिं नताः स्म ॥ ४ ॥**

**पदार्थ–**
**आत्मधामविधुतात्मकृतत्र्यवस्थं** = आफ्नो स्वरूपको प्रकाशले आफैँमा कल्पित भएका जाग्रत्, स्वप्न, सुषुप्ति यी तीन अवस्थालाई
**हित्वा** = त्याग गरेर
**कालोपसृष्टनिगमावने** = कालद्वारा नष्ट भएका वेदको रक्षा गर्न
**आत्तयोगमायाकृतिं** = मायाद्वारा शरीर धारण गर्नुहुने
**आनन्दसम्प्लवं** = परमानन्दमय
**अखण्डं** = अखण्ड
**अकुण्ठबोधं** = नित्यज्ञानस्वरूप
**परमहंसगतिं** = श्रेष्ठ ज्ञानीहरूका एक मात्र गति (हजुरलाई)
**नताः स्म** = नमस्कार गर्दछौँ

**वाक्यार्थ–** हे भगवान् ! आफ्नो स्वरूपको प्रकाशले आफैँमा कल्पित भएका जाग्रत्, स्वप्न, सुषुप्ति यी तीन अवस्थालाई ध्वस्त गर्नुहुने, कालद्वारा नष्ट भएका वेदलाई रक्षा गर्न मायाद्वारा शरीर धारण गर्नुहुने, केवल परमानन्दमय, अखण्ड, नित्यज्ञानस्वरूप र श्रेष्ठ ज्ञानीहरूका पनि एक मात्र गति हुनुभएका हजुरलाई हामी नमस्कार गर्दछौँ।

**ऋषिरुवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युत्तमःश्लोकशिखामणिं जने-**
**ष्वभिष्टुवत्स्वन्धककौरवस्त्रियः ।**
**समेत्य गोविन्दकथा मिथोऽगृणं-**
**स्त्रिलोकगीताः शृणु वर्णयामि ते ॥ ५ ॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**जनेषु** = मानिसहरूले
**उत्तमःश्लोकशिखामणिं** = पवित्र कीर्ति भएकाहरूमध्ये सर्वश्रेष्ठ भगवान्लाई

**अभिष्टुवत्सु** = स्तुति गरिरहँदा
**अन्धककौरवस्त्रियः** = अन्धक र कुरुवंशका स्त्रीहरूले
**समेत्य** = जम्मा भई
**मिथः** = परस्परमा
**त्रिलोकगीताः** = तीनै लोकमा गाइएका
**गोविन्दकथाः** = गोविन्दका चरित्रहरू
**अगृणन्** = वर्णन गरे
**ते** = तपाईंलाई
**वर्णयामि** = म बताउँछु
**शृणु** = सुन्नुहोस्

**वाक्यार्थ–** यसप्रकार सबै मानिसहरूले पवित्रकीर्ति भएका महापुरुषहरूमध्ये सर्वश्रेष्ठ भगवान्‌को स्तुति गरिरहँदा अन्धक र कुरुवंशका स्त्रीहरूले पनि जम्मा भई परस्परमा तीनै लोकमा प्रसिद्ध गोविन्द भगवान्‌का पावन चरित्रहरूको वर्णन गरे। म तपाईंलाई बताउँछु, सुन्नुहोस्।

**द्रौपद्युवाच** (द्रौपदीले भनिन्)

**हे वैदर्भ्यच्युतो भद्रे हे जाम्बवति कौशले।**
**हे सत्यभामे कालिन्दि शैब्ये रोहिणि लक्ष्मणे॥ ६॥**
**हे कृष्णपत्न्य एतन्नो ब्रूत वो भगवान् स्वयम्।**
**उपयेमे यथा लोकमनुकुर्वन् स्वमायया॥ ७॥**

**पदार्थ–**
**हे वैदर्भि** = हे रुक्मिणी
**भद्रे** = हे भद्रा
**हे जाम्बवति** = हे जाम्बवती
**कौशले** = हे सत्या
**हे सत्यभामे** = हे सत्यभामा
**कालिन्दि** = हे कालिन्दी
**शैब्ये** = हे शैब्या
**रोहिणि** = हे रोहिणी
**लक्ष्मणे** = हे लक्ष्मणा
**हे कृष्णपत्न्यः** = हे कृष्णपत्नीहरू
**स्वमायया** = आफ्नो मायाद्वारा
**लोकं** = सांसारिक रीतिलाई
**अनुकुर्वन्** = अनुकरण गर्दै
**भगवान्** = भगवान्
**अच्युतः** = श्रीकृष्णले
**स्वयं** = आफैँले
**यथा** = जसरी
**वः** = तपाईंहरूलाई
**उपयेमे** = विवाह गर्नुभयो
**एतत्** = यो
**नः** = हामीलाई
**ब्रूत** = बताउनुहोस्

**वाक्यार्थ–** हे रुक्मिणी ! हे भद्रा ! हे जाम्बवती ! हे सत्या ! हे सत्यभामा ! हे कालिन्दी ! हे शैब्या ! हे रोहिणी ! हे लक्ष्मणा ! हे कृष्णपत्नीहरू ! आफ्नो मायाद्वारा संसारको रीतिलाई अनुकरण गर्दै भगवान् श्रीकृष्णले तपाईंहरूलाई कसरी विवाह गर्नुभयो, त्यो कुरा हामीलाई बताउनुहोस्।

**रुक्मिण्युवाच** (रुक्मिणीले भनिन्)

**चैद्याय मार्पयितुमुद्यतकार्मुकेषु**
**राजस्वजेयभटशेखरिताङ्घ्रिरेणुः।**

**निन्ये मृगेन्द्र इव भागमजावियूथात्**
**तच्छ्रीनिकेतचरणोऽस्तु ममार्चनाय ॥ ८ ॥**

**पदार्थ–**
**चैद्याय** = शिशुपालका लागि
**मा** = मलाई
**अर्पयितुम्** = अर्पण गर्न
**उद्यतकार्मुकेषु** = धनु उठाई बसेका
**राजसु** = राजाहरूको बिचमा
**अजेयभटशेखरिताङ्घ्रिरेणुः** = अजेय वीरहरूका शिरमाथि जसका चरणको धुलो शोभित हुन्छन् त्यस्ता भगवान्ले
**अजावियूथात्** = भेडाको बथानबाट
**मृगेन्द्रः** = सिंहले
**भागं इव** = आफ्नो भागलाई हरण गरे झैं
**निन्ये** = लैजानुभयो
**तच्छ्रीनिकेतचरणः** = लक्ष्मीको निवास भएको त्यस्तो भगवान्को चरण
**मम** = मेरो
**अर्चनाय** = सेवा गर्नका लागि
**अस्तु** = होस्

**वाक्यार्थ–** शिशुपालसँग मेरो विवाह गर्न तयारी भइरहेको थियो। अनेक राजाहरू धनु उठाई बसेका थिए। जसको चरणको धुलो अजेय वीरहरूका मस्तकमाथि पनि सुशोभित हुन्छ त्यस्ता भगवान्ले ती राजाहरूको बिचबाट मलाई त्यसै गरी हरण गरेर लैजानुभयो जसरी भेडाको बथानबाट सिंहले आफ्नो भाग ग्रहण गर्दछ। त्यस्ता भगवान्को चरणलाई मैले सधैँ सेवा गरिरहन पाऊँ।

**सत्यभामोवाच** (सत्यभामाले भनिन्)

**यो मे सनाभिवधतप्तहृदा ततेन**
**लिप्ताभिशापमपमार्ष्टुमुपाजहार ।**
**जित्वर्क्षराजमथ रत्नमदात् स तेन**
**भीतः पितादिशत मां प्रभवेऽपि दत्ताम् ॥ ९ ॥**

**पदार्थ–**
**यः** = जसले
**सनाभिवधतप्तहृदा** = सहोदर भाइ प्रसेन मर्नाले दुःखी हृदय भएका
**मे** = मेरा
**ततेन** = पिता (सत्राजित्)द्वारा
**लिप्ताभिशापं** = लगाइएको आरोपलाई
**अपमार्ष्टुम्** = हटाउन
**ऋक्षराजं** = ऋक्षराज जाम्बवान्लाई
**जित्वा** = जितेर
**रत्नं** = स्यमन्तक मणि
**उपाजहार** = ल्याउनुभयो र
**अदात्** = (मेरै पितालाई) दिनुभयो
**अथ** = त्यसपछि
**तेन** = यसबाट
**भीतः** = डराएका
**सः** = ती
**पिता** = मेरा पिताले
**दत्ताम् अपि** = अरू कसैलाई दिने प्रतिज्ञा गरिएकी भए पनि
**मां** = मलाई
**प्रभवे** = प्रभु श्रीकृष्णकै लागि
**आदिशत** = अर्पण गर्नुभयो

**वाक्यार्थ–** आफ्ना सहोदर भाइ प्रसेन मर्नाले दुःखी भएका मेरा पिता सत्राजित्ले भगवान्लाई नै मणि चोरेको आरोप लगाउनुभयो। त्यसलाई हटाउन भगवान्ले जाम्बवान्लाई जिती त्यो मणि ल्याउनुभयो र मेरै पितालाई दिनुभयो। यसबाट डराउनुभएका मेरा पिताले अरू कसैलाई दिने प्रतिज्ञा गरिएकी भए पनि मलाई श्रीकृष्णकै लागि अर्पण गर्नुभयो।

**जाम्बवत्युवाच** (जाम्बवतीले भनिन्)

**प्राज्ञाय देहकृदमुं निजनाथदेवं**
**सीतापतिं त्रिणवहान्यमुनाभ्ययुध्यत्।**
**ज्ञात्वा परीक्षित उपाहरदर्हणं मां**
**पादौ प्रगृह्य मणिनाहममुष्य दासी॥ १०॥**

**पदार्थ–**
**देहकृत्** = मेरो शरीरका जन्मदाता पिताले
**निजनाथदेवं** = आफ्ना एक मात्र इष्टदेव
**सीतापतिं** = सीतापति श्रीरामस्वरूप
**अमुं** = यी श्रीकृष्णलाई
**प्राज्ञाय** = नचिन्नाले
**अमुना** = यी भगवान् श्रीकृष्णसँग
**त्रिणवहानि** = सत्ताईस दिनसम्म
**अयुध्यत्** = युद्ध गर्नुभयो
**परीक्षितः** = परीक्षा पूरा भएपछि
**ज्ञात्वा** = (भगवान् भन्ने) जानेर
**पादौ** = दुबै चरणलाई
**प्रगृह्य** = समातेर
**मणिना** = मणिको साथमा
**मां** = मलाई समेत
**अर्हणं** = उपहार
**उपाहरत्** = चढाउनुभयो
**अहं** = त्यस्ती म
**अमुष्य** = उहाँकी
**दासी** = सेविका हुँ

**वाक्यार्थ–** मेरा पिताले आफ्ना एक मात्र इष्टदेव श्रीरामस्वरूप श्रीकृष्णलाई नचिन्नाले उहाँसँग सत्ताईस दिनसम्म युद्ध गर्नुभयो। त्यो परीक्षा पूरा भइसकेपछि उहाँले बल्ल भगवान्लाई चिन्नुभयो र श्रीकृष्णका दुबै चरण समाती मणिको साथमा मलाई समेत उपहारको रूपमा चढाउनुभयो। त्यस्ती म उनै भगवान्की सेविका हुँ।

**कालिन्द्युवाच** (कालिन्दीले भनिन्)

**तपश्चरन्तीमाज्ञाय स्वपादस्पर्शनाशया।**
**सख्योपेत्याग्रहीत् पाणिं योऽहं तद्गृहमार्जनी॥ ११॥**

**पदार्थ–**
**स्वपादस्पर्शनाशया** = भगवान्को चरणस्पर्श गर्ने इच्छाले
**तपः** = तपस्या
**चरन्तीम्** = गरिरहेकी मलाई
**आज्ञाय** = जानेर
**यः** = जसले
**सख्या** = साथी अर्जुनसँग
**उपेत्य** = आई
**पाणिं** = हात
**अग्रहीत्** = स्वीकार गर्नुभयो
**अहं** = म
**तद्गृहमार्जनी** = त्यस्ता भगवान्को घर बढार्ने सेविका हुँ

**वाक्यार्थ–** म भगवान् श्रीकृष्णकै चरणस्पर्श गर्ने इच्छाले तपस्या गरिरहेकी थिएँ। मेरो भावनालाई बुझेर उहाँ आफ्ना साथी अर्जुन सहित मेरो नजिक आउनुभयो र उहाँले मेरो हात स्वीकार गर्नुभयो। त्यस्ती म भगवान्को घर बढार्ने सेविका हुँ।

**मित्रविन्दोवाच** (मित्रविन्दाले भनिन्)

**योो मां स्वयंवर उपेत्य विजित्य भूपान्**
**निन्ये श्वयूथगमिवात्मबलिं द्विपारिः।**
**भ्रातॄंश्च मेऽपकुरुतः स्वपुरं श्रियौक-**
**स्तस्यास्तु मेऽनुभवमङ्घ्र्यवनेजनत्वम्॥ १२॥**

**पदार्थ–**
**यः** = जो
**स्वयंवरे** = स्वयंवरमा
**उपेत्य** = पुगी
**भूपान्** = राजाहरूलाई र
**अपकुरुतः** = बाण प्रहार गरिरहेका
**मे** = मेरा
**भ्रातॄन् च** = भाइहरूलाई समेत
**विजित्य** = जिती
**द्विपारिः** = सिंहले
**श्वयूथगं** = कुकुरको बथानको बिचमा रहेको
**आत्मबलिं इव** = आफ्नो भागलाई झैँ
**मां** = मलाई
**श्रियौकः** = लक्ष्मीको निवास भएको
**स्वपुरं** = आफ्नो द्वारिकापुरी
**निन्ये** = लैजानुभयो
**मे** = मेरो (लागि)
**अनुभवं** = जन्मौँ जन्म
**तस्य** = उहाँकै
**अङ्घ्र्यवनेजनत्वं** = चरण पखाल्ने सेवा
**अस्तु** = प्राप्त भइरहोस्

**वाक्यार्थ–** मेरो स्वयंवर भइरहेको ठाउँमा अकस्मात् भगवान् पुग्नुभयो र उहाँले त्यहाँका सबै राजाहरूलाई अनि बाण प्रहार गरिरहेका मेरा भाइहरूलाई पनि जिती मलाई त्यसै गरी हरण गर्नुभयो जसरी कुकुरको बथानबिचमा रहेको आफ्नो भागलाई सिंहले हरण गर्दछ। उहाँले मलाई लक्ष्मीको निवास भएको आफ्नो द्वारिकापुरीमा लैजानुभयो। मलाई जन्मौँ जन्मसम्म पनि त्यस्ता भगवान्को चरण पखाल्ने सौभाग्य प्राप्त भइरहोस्।

**सत्योवाच** (सत्याले भनिन्)

**सप्तोक्षणोऽतिबलवीर्यसुतीक्ष्णशृङ्गान्**
**पित्रा कृतान् क्षितिपवीर्यपरीक्षणाय।**
**तान् वीरदुर्मदहनस्तरसा निगृह्य**
**क्रीडन् बबन्ध ह यथा शिशवोऽजतोकान्॥ १३॥**

**पदार्थ—**
**पित्रा** = मेरा पिताद्वारा
**क्षितिपवीर्यपरीक्षणाय** = राजाहरूको पराक्रमलाई परीक्षा गर्न
**कृतान्** = तयार गरिएका
**अतिबलवीर्यसुतीक्ष्णशृङ्गान्** = ज्यादै बलिया र तिखा सिङ् भएका
**वीरदुर्मदहनः** = वीरहरूको अभिमानलाई नष्ट गरिदिने
**तान्** = ती
**सप्तोक्षणः** = सात साँढेहरूलाई
**तरसा** = वेगपूर्वक
**निगृह्य** = नियन्त्रित गरी
**क्रीडन्** = ख्यालख्यालमा
**ह** = नै
**बबन्ध** = बाँध्नुभयो
**यथा** = जसरी
**शिशवः** = बच्चाहरू
**अजतोकान्** = साना पाठीहरूलाई (बाँध्छन्)

**वाक्यार्थ—** मेरा पिताले राजाहरूको पराक्रमलाई परीक्षा गर्न ज्यादै बलिया र तिखा सिङ भएका सात ओटा साँढेहरू तयार गरेर राख्नुभएको थियो। ठुला वीरहरूका अभिमान नष्ट गरिदिने ती सातै ओटा साँढेलाई भगवान्ले वेगपूर्वक एकसाथ नियन्त्रणमा लिनुभयो र ख्यालख्यालमा तिनलाई त्यसै गरी बाँधिदिनुभयो जसरी बच्चाहरूले साना पाठीहरूलाई बाँधिदिन्छन्।

**य इत्थं वीर्यशुल्कां मां दासीभिश्चतुरङ्गिणीम्।**
**पथि निर्जित्य राजन्यान् निन्ये तद्दास्यमस्तु मे ॥ १४ ॥**

**पदार्थ—**
**यः** = जसले
**इत्थं** = यसप्रकार
**वीर्यशुल्कां** = पराक्रम नै मोल भएकी
**मां** = मलाई
**पथि** = बाटोमा विघ्न गर्न आउने
**राजन्यान्** = राजाहरूलाई समेत
**निर्जित्य** = जिती
**दासीभिः** = अनेक दासीहरू र
**चतुरङ्गिणीम्** = चतुरङ्गिणी सेनाका साथ (द्वारिकापुरी)
**निन्ये** = लैजानुभयो
**मे** = मलाई
**तद्दास्यं** = त्यस्ता भगवान्को सेवा
**अस्तु** = प्राप्त भइरहोस्

**वाक्यार्थ—** यसप्रकार भगवान् श्रीकृष्णले पराक्रम नै मोल भएकी मलाई जित्नुभयो र बाटोमा विघ्न गर्न आउने अरू राजाहरूलाई समेत परास्त गरिदिनुभयो। यसपछि उहाँले अनेक दासी र चतुरङ्गिणी सेनाका साथ मलाई द्वारिकापुरी लिएर जानुभयो। त्यस्ता भगवान्को सेवा मलाई सधैँ प्राप्त भइरहोस्।

**भद्रोवाच** (भद्राले भनिन्)

**पिता मे मातुलेयाय स्वयमाहूय दत्तवान्।**
**कृष्णे कृष्णाय तच्चित्तामक्षौहिण्या सखीजनैः ॥ १५ ॥**

**पदार्थ—**
**कृष्णे** = हे द्रौपदी
**मे** = मेरा
**पिता** = पिताले
**स्वयं** = आफैँ
**आहूय** = बोलाई
**तच्चित्तां** = उनै भगवान्मा (सानैदेखि) मन लागेकी मलाई
**अक्षौहिण्या** = अक्षौहिणी सेना र

**सखीजनैः** = सखीहरूसँगै
**मातुलेयाय** = मामाका छोरा
**कृष्णाय** = कृष्णलाई
**दत्तवान्** = दिनुभयो

**वाक्यार्थ–** हे द्रौपदी ! श्रीकृष्ण मेरा मामाका छोरा हुनुहुन्थ्यो र उहाँमा मेरो मन सानैदेखि लागेको थियो। त्यसैले मेरा पिताले आफैँ श्रीकृष्णलाई बोलाई अक्षौहिणी सेना र अनेकौँ सखीहरूसँगै मलाई दिनुभयो।

**अस्य मे पादसंस्पर्शो भवेज्जन्मनि जन्मनि ।**
**कर्मभिर्भ्राम्यमाणाया येन तच्छ्रेय आत्मनः ॥ १६ ॥**

**पदार्थ–**
**कर्मभिः** = कर्महरूको कारण
**भ्राम्यमाणायाः** = संसारमा घुमिरहेकी
**मे** = मेरो
**जन्मनि जन्मनि** = जन्मौँ जन्मसम्म
**अस्य** = उहाँको
**पादसंस्पर्शः** = चरणस्पर्श
**भवेत्** = प्राप्त होस्
**येन** = जसद्वारा
**आत्मनः** = आफ्नो (जीवको)
**तत्** = त्यो (वास्तविक)
**श्रेयः** = कल्याण हुन्छ

**वाक्यार्थ–** कर्महरूका कारण संसारचक्रमा बारम्बार घुमिरहे तापनि हरेक जन्मपिच्छे मलाई भगवान्कै चरणस्पर्श प्राप्त होस्, जसको चरणसेवाबाट जीवको वास्तविक कल्याण हुन्छ।

**लक्ष्मणोवाच** (लक्ष्मणाले भनिन्)

**ममापि राज्ञ्यच्युतजन्मकर्म श्रुत्वा मुहुर्नारदगीतमास ह ।**
**चित्तं मुकुन्दे किल पद्महस्तया वृतः सुसम्मृश्य विहाय लोकपान् ॥ १७ ॥**

**पदार्थ–**
**राज्ञि** = हे रानी द्रौपदी
**नारदगीतं** = नारदद्वारा गाइएको
**अच्युतजन्मकर्म** = भगवान्को जन्म र चरित्रलाई
**मुहुः** = बारम्बार
**श्रुत्वा** = सुनेर
**किल** = त्यसै गरी
**पद्महस्तया** = (कमल हातमा लिएकी) लक्ष्मीद्वारा
**सुसम्मृश्य** = अत्यन्त विचार गरी
**लोकपान्** = लोकपालहरूलाई
**विहाय** = छाडी
**वृतः** = भगवान् नै वरण गरिनुभयो
**ह** = निश्चय नै (यस्तो विचार गरेर)
**मम अपि** = मेरो पनि
**चित्तं** = मन
**मुकुन्दे** = मुकुन्दमा
**आस** = लाग्यो

**वाक्यार्थ–** हे रानी द्रौपदी ! देवर्षि नारदद्वारा गाइएको भगवान्को जन्म र चरित्र सम्बन्धी कथा बारम्बार सुनेर अनि लक्ष्मीजीले अत्यन्त विचार गरी अरू सारा लोकपालहरूलाई छाडी भगवान्लाई नै रोजिन् भन्ने यस्तो विचार गरेर पनि मेरो मन मुकुन्दमा नै लाग्यो।

**ज्ञात्वा मम मतं साध्वि पिता दुहितृवत्सलः ।**
**बृहत्सेन इति ख्यातस्तत्रोपायमचीकरत् ॥ १८ ॥**

**पदार्थ–**
**साध्वि** = हे पतिव्रता द्रौपदी
**मम** = मेरो
**मतं** = भावनालाई
**ज्ञात्वा** = बुझेर
**बृहत्सेनः इति** = बृहत्सेन यो नामले
**ख्यातः** = प्रसिद्ध
**दुहितृवत्सलः** = पुत्रीवत्सल
**पिता** = पिताले
**तत्र** = यस विषयमा
**उपायम्** = उपाय
**अचीकरत्** = रच्नुभयो

**वाक्यार्थ–** हे द्रौपदी ! मलाई अत्यन्त प्रेम गर्नुहुने बृहत्सेन नामले प्रसिद्ध मेरा पिताले मेरो भावनालाई बुझेर यस विषयमा एउटा उपाय रच्नुभयो।

**यथा स्वयंवरे राज्ञि मत्स्यः पार्थेप्सया कृतः ।**
**अयं तु बहिराच्छन्नो दृश्यते स जले परम् ॥ १९ ॥**

**पदार्थ–**
**राज्ञि** = हे रानी द्रौपदी
**यथा** = जसरी
**स्वयंवरे** = तिम्रो स्वयंवरमा
**पार्थेप्सया** = अर्जुनको चाहनाले
**मत्स्यः** = भेदन गरिने माछोको आकृति
**कृतः** = बनाइराखिएको थियो
**सः तु** = त्यो माछो
**बहिः** = बाहिरबाट मात्र
**आच्छन्नः** = ढाकिएको थियो
**परं** = तर
**अयं** = यो चाहिँ
**जले** = कलशको जलमा मात्र
**दृश्यते** = देखिन्थ्यो

**वाक्यार्थ–** हे द्रौपदी ! जसरी तिम्रो स्वयंवरमा तिम्रा पिताले अर्जुनको चाहनाले मत्स्यभेदनको आयोजना गर्नुभएको थियो, त्यसै गरी मेरा पिताले मत्स्यभेदनको आयोजना गर्नुभएको थियो। तिम्रो स्वयंवरमा राखिएको माछो केवल बाहिरबाट मात्र ढाकिएको थियो (खम्बामा आँखा अड्याई हेर्दा बिचबाट अलि अलि देखिन्थ्यो) तर मेरो स्वयंवरमा राखिएको माछोको त केवल तल राखिएको कलशको जलमा मात्र छाया देख्न सकिन्थ्यो।

**श्रुत्वैतत् सर्वतो भूपा आययुर्मत्पितुः पुरम् ।**
**सर्वास्त्रशस्त्रतत्त्वज्ञाः सोपाध्यायाः सहस्रशः ॥ २० ॥**

**पदार्थ–**
**एतत्** = यस्तो
**श्रुत्वा** = सुनेर
**सर्वास्त्रशस्त्रतत्त्वज्ञाः** = सबै अस्त्र शस्त्रको रहस्यलाई जान्ने
**सोपाध्यायाः** = गुरुहरूसहित
**सहस्रशः** = हजारौँ
**भूपाः** = राजाहरू
**सर्वतः** = चारैतर्फबाट
**मत्पितुः** = मेरा पिताको
**पुरं** = शहरमा
**आययुः** = आए

**वाक्यार्थ–** यस्तो सुनेर सबै अस्त्र शस्त्रको रहस्य जान्ने हजारौँ राजाहरू आफ्ना गुरुहरूले सहित भई चारैतिरबाट मेरा पिताको शहरमा आइपुगे।

**पित्रा सम्पूजिताः सर्वे यथावीर्यं यथावयः।**

**आददुः सशरं चापं वेद्धुं पर्षदि मद्धियः॥ २१॥**

**पदार्थ–**

**यथावीर्यं** = पराक्रम अनुसार र
**यथावयः** = उमेर अनुसार
**पित्रा** = मेरा पिताद्वारा
**सम्पूजिताः** = सत्कार गरिएका
**मद्धियः** = ममा मन लगाएका
**सर्वे** = सबै राजाहरूले
**पर्षदि** = स्वयंवरसभामा
**वेद्धुं** = लक्ष्यवेधन गर्न
**सशरं** = बाणले सहित भएको
**चापं** = धनु
**आददुः** = हातमा लिए

**वाक्यार्थ–** मेरा पिताले सबै राजाहरूलाई उनीहरूको पराक्रम र उमेर अनुसार स्वागत-सत्कार गर्नुभयो। स्वयंवरसभामा मलाई लैजान चाहने ती सबै राजाहरूले लक्ष्यवेधनका लागि बाणले सहित भएको धनु हातमा लिए।

**आदाय व्यसृजन् केचित् सज्यं कर्तुमनीश्वराः।**

**आकोटि ज्यां समुत्कृष्य पेतुरेकेऽमुनाहताः॥ २२॥**

**पदार्थ–**

**सज्यं कर्तुम्** = ताँदो चढाउन
**अनीश्वराः** = असमर्थ भएका
**केचित्** = कुनै राजाहरूले
**आदाय** = (धनुलाई) लिएर
**व्यसृजन्** = छोडिदिए
**अमुना** = यसद्वारा (ताँदो उछिट्टिएर)
**आहताः** = प्रताडित भएका
**एके** = कुनै राजाहरूले
**आकोटि** = अर्को टुप्पोसम्म
**ज्यां** = डोरीलाई
**समुत्कृष्य** = खिचेर (मात्र)
**पेतुः** = ढले

**वाक्यार्थ–** कुनै राजाहरूले त्यस धनुमा ताँदो चढाउनै सकेनन्, त्यसैले उनीहरूले धनुलाई लिनेबित्तिकै छोडिदिए। कुनै राजाहरूले चाहिँ धनुको एक छेउदेखि अर्को छेउसम्म डोरी खिचे। तर डोरी खिच्दा-खिच्दै ताँदो उछिट्टिएर लाग्नाले उनीहरू त्यहीँ ढले।

**सज्यं कृत्वापरे वीरा मागधाम्बष्ठचेदिपाः।**

**भीमो दुर्योधनः कर्णो नाविन्दंस्तदवस्थितिम्॥ २३॥**

**पदार्थ–**

**अपरे** = अरू
**मागधाम्बष्ठचेदिपाः** = मगधराज जरासन्ध, अम्बष्ठनरेश र शिशुपाल
**भीमः** = भीम
**दुर्योधनः** = दुर्योधन
**कर्णः** = कर्ण
**वीराः** = यस्ता वीरहरूले
**सज्यं कृत्वा** = ताँदो चढाएर पनि
**तदवस्थितिं** = माछो भएको ठाउँलाई
**न अविन्दन्** = थाहा पाउनै सकेनन्

**वाक्यार्थ–** अरू मगधराज जरासन्ध, अम्बष्ठनरेश, शिशुपाल, भीम, दुर्योधन, कर्ण जस्ता वीरहरूले चाहिँ ताँदो त चढाए तर माछो कहाँ रहेको छ भन्ने थाहा पाउनै सकेनन्।

**मत्स्याभासं जले वीक्ष्य ज्ञात्वा च तदवस्थितिम् ।**
**पार्थो यत्तोऽसृजद् बाणं नाच्छिनत् पस्पृशे परम् ॥ २४ ॥**

**पदार्थ–**
**जले** = कलशको जलमा
**मत्स्याभासं** = माछोको छायालाई
**वीक्ष्य** = देखेर
**तदवस्थितिम् च** = त्यसको अवस्थितिलाई
**ज्ञात्वा** = जानेर
**यत्तः** = एकाग्र भएका
**पार्थः** = अर्जुनले
**बाणं** = बाण
**असृजत्** = छोडे
**परं** = तर (त्यसले)
**न अच्छिनत्** = छिनाउन सकेन (माछोलाई झार्न सकेन)
**पस्पृशे** = छोयो मात्रै

**वाक्यार्थ–** कलशको जलमा माछोको छायालाई देखेर अर्जुनले त्यो माछो रहेको स्थानलाई पत्ता लगाए र एकाग्र भई उनले बाण पनि छोडे। उनको बाणले माछोलाई छोयो तर झार्न सकेन।

**राजन्येषु निवृत्तेषु भग्नमानेषु मानिषु ।**
**भगवान् धनुरादाय सज्यं कृत्वाथ लीलया ॥ २५ ॥**
**तस्मिन् सन्धाय विशिखं मत्स्यं वीक्ष्य सकृज्जले ।**
**छित्त्वेषुणापातयत् तं सूर्ये चाभिजिति स्थिते ॥ २६ ॥**

**पदार्थ–**
**भग्नमानेषु** = मानमर्दन भएका
**मानिषु** = अभिमानी
**राजन्येषु** = राजाहरू
**निवृत्तेषु** = फर्किसकेपछि
**अथ** = त्यसपछि
**भगवान्** = भगवान् श्रीकृष्णले
**धनुः** = धनु
**आदाय** = लिएर
**लीलया** = ख्यालख्यालमा
**सज्यं कृत्वा** = ताँदो चढाएर
**तस्मिन्** = त्यस धनुमा
**विशिखं** = बाण
**सन्धाय** = सन्धान गरेर
**जले** = जलमा
**सकृत्** = एकपटक
**मत्स्यं** = माछोलाई
**वीक्ष्य** = हेरेर
**सूर्ये च** = सूर्य
**अभिजिति** = अभिजित् नक्षत्रमा
**स्थिते** = रहेको वेलामा
**इषुणा** = बाणले
**छित्त्वा** = वेधन गरी
**तं** = त्यो माछोलाई
**अपातयत्** = झारिदिनुभयो

**वाक्यार्थ–** मानमर्दन भएका अभिमानी राजाहरू त्यहाँबाट फर्किए। यसपछि भगवान् श्रीकृष्णले धनु उठाउनुभयो र त्यसमाथि ख्यालख्यालमै ताँदो चढाइदिनुभयो। उहाँले त्यसमा बाणसन्धान गरेर तल कलशको जलमा माछोको छायालाई एकपटक हेर्नुभयो र सूर्य अभिजित् नक्षत्रमा रहेको वेलामा बाणद्वारा माछोलाई वेधन गरी त्यसलाई झारिदिनुभयो।

**दिवि दुन्दुभयो नेदुर्जयशब्दयुता भुवि ।**
**देवाश्च कुसुमासारान् मुमुचुर्हर्षविह्वलाः ॥ २७ ॥**

**पदार्थ—**
**दिवि** = आकाशमा
**दुन्दुभयः** = दुन्दुभिहरू
**नेदुः** = बज्न थाले
**जयशब्दयुताः** = जयजयकारको शब्द गरिरहेका
**हर्षविह्वलाः** = हर्षविह्वल भएका
**देवाः च** = देवताहरूले पनि
**भुवि** = पृथिवीमा
**कुसुमासारान्** = पुष्पवृष्टि
**मुमुचुः** = गराए

**वाक्यार्थ—** लक्ष्यवेधन भइसकेपछि आकाशमा दुन्दुभिहरू बज्न थाले र देवताहरूले भगवान्को जयजयकार गर्दै हर्षविह्वल भएर पृथिवीमा दिव्य पुष्पहरूको वृष्टि गर्न थाले।

**तद् रङ्गमाविशमहं कलनूपुराभ्यां**
**पद्भ्यां प्रगृह्य कनकोज्वलरत्नमालाम्।**
**नूत्ने निवीय परिधाय च कौशिकाग्र्ये**
**सव्रीडहासवदना कवरीधृतस्रक्॥ २८॥**

**पदार्थ—**
**कवरीधृतस्रक्** = चुल्ठोमा फूलको माला गुथिएकी
**सव्रीडहासवदना** = लज्जाले सहित हँसिलो अनुहार भएकी
**अहं** = म (लक्ष्मणा)
**कलनूपुराभ्यां** = बजिरहेका पाउजूले युक्त
**पद्भ्यां** = पाउले
**कनकोज्वलरत्नमालां** = सुनद्वारा उज्वल भएको रत्नमालालाई
**प्रगृह्य** = हातमा लिई
**नूत्ने** = नयाँ नयाँ
**कौशिकाग्र्ये** = उत्तम रेशमी वस्त्र
**निवीय** = लगाएर
**परिधाय च** = त्यसमाथि मेखलासमेत बाँधेर
**तत् रङ्गं** = त्यो स्वयंवरसभामा
**आविशम्** = पसेँ

**वाक्यार्थ—** त्यस वेला म चुल्ठोमा फूलको माला लगाएर लजालु किसिमले हाँस्दै पाउमा लगाएका पाउजु बजाउँदै मेखला भएको उत्तम रेशमी वस्त्र लगाएर सुनले उज्यालो बनेको रत्नमाला हातमा लिई त्यो स्वयंवरसभामा प्रवेश गरेँ।

**उन्नीय वक्त्रमुरुकुन्तलकुण्डलत्विड्**
**गण्डस्थलं शिशिरहासकटाक्षमोक्षैः।**
**राज्ञो निरीक्ष्य परितः शनकैर्मुरारे-**
**रंसेऽनुरक्तहृदया निदधे स्वमालाम्॥ २९॥**

**पदार्थ—**
**उरुकुन्तलकुण्डलत्विड्गण्ड-स्थलं** = घना घुमौरा कपाल र कानका कुण्डलद्वारा दुबै गाला उज्वल भएको
**वक्त्रं** = मुखलाई
**उन्नीय** = थौरै उठाएर
**शनकैः** = बिस्तारै
**शिशिरहासकटाक्षमोक्षैः** = शीतल हाँसो र कर्के नजरद्वारा
**परितः** = ओरिपरि रहेका
**राज्ञः** = राजाहरूलाई

**निरीक्ष्य** = हेरेर
**अनुरक्तहृदया** = भगवान्मा मन लागेकी मैले
**मुरारेः** = श्रीकृष्णकै
**अंसे** = गलामा
**स्वमालां** = आफूले लिएको वरमालालाई
**निदधे** = राखिदिएँ

**वाक्यार्थ–** घुमौरा घना कपाल र कानका चम्किला कुण्डलद्वारा दुबै गालाहरू उज्वल भएका थिए। यस्तो आफ्नो मुखलाई थोरै उठाई मैले शीतल हाँसो र अलिअलि कर्के नजरद्वारा ती ओरिपरि रहेका राजाहरूलाई हेरेँ। मेरो मन पहिल्यैदेखि भगवान्मा अनुरक्त भइसकेको थियो, त्यसैले मैले हातको वरमाला उहाँकै गलामा पहिऱ्याइदिएँ।

**तावन्मृदङ्गपटहाः शङ्खभेर्यानकादयः।**
**निनेदुर्नटनर्तक्यो ननृतुर्गायका जगुः॥ ३०॥**

**पदार्थ–**
**तावत्** = त्यसै समयमा
**शङ्खभेर्यानकादयः** = शङ्ख, भेरी, नगडा आदि
**मृदङ्गपटहाः** = मृदङ्ग र दमाहा बाजाहरू
**निनेदुः** = बज्न थाले
**नटनर्तक्यः** = नट र नर्तकीहरू
**ननृतुः** = नाच्न थाले
**गायकाः** = गायकहरूले
**जगुः** = गाउन थाले

**वाक्यार्थ–** त्यसै समयमा शङ्ख, भेरी, नगडा, मृदङ्ग र दमाहा आदि बाजाहरू बज्न थाले भने नट र नर्तकीहरू नाच्न थाले, यसै गरी गायकहरूले गाउन थाले।

**एवं वृते भगवति मयेशे नृपयूथपाः।**
**न सेहिरे याज्ञसेनि स्पर्धन्तो हृच्छयातुराः॥ ३१॥**

**पदार्थ–**
**याज्ञसेनि** = हे द्रौपदी
**एवं** = यसप्रकार
**मया** = मद्द्वारा
**भगवति** = भगवान्
**ईशे** = सर्वसमर्थ श्रीकृष्ण
**वृते** = वरण गरिनुभएपछि
**हृच्छयातुराः** = कामपीडित भएका
**स्पर्धन्तः** = भगवान्सँग सेखी गर्ने
**नृपयूथपाः** = अनेकौँ राजाहरूले
**न सेहिरे** = यो कुरा सहेनन्

**वाक्यार्थ–** हे द्रौपदी ! यसप्रकार मैले सर्वसमर्थ भगवान् श्रीकृष्णलाई वरण गरेपछि त्यहाँ रहेका कामपीडित भएका र भगवान्सँग सेखी गर्ने अनेक राजाहरूले मेरो स्वयंवरलाई सहन सकेनन्।

**मां तावद् रथमारोप्य हयरत्नचतुष्टयम्।**
**शार्ङ्गमुद्यम्य सन्नद्धस्तस्थावाजौ चतुर्भुजः॥ ३२॥**

**पदार्थ–**
**तावत्** = त्यही वेलामा
**चतुर्भुजः** = चतुर्भुज भगवान्ले
**मां** = मलाई
**हयरत्नचतुष्टयं** = श्रेष्ठ चार घोडाले युक्त

**रथं** = आफ्नो रथमा
**आरोप्य** = बसाई
**शार्ङ्गम्** = शार्ङ्ग धनु
**उद्यम्य** = उठाएर
**आजौ** = युद्धमा
**सन्नद्धः** = तत्पर भई
**तस्थौ** = बस्नुभयो

**वाक्यार्थ–** त्यही वेलामा चतुर्भुज भगवान् श्रीकृष्णले मलाई श्रेष्ठ चार घोडाहरूले सहित भएको आफ्नो रथमा राख्नुभयो र शार्ङ्ग धनु उठाई ती राजाहरूसँग युद्ध गर्न तयार हुनुभयो।

**दारुकश्चोदयामास काञ्चनोपस्करं रथम्।**
**मिषतां भूभुजां राज्ञि मृगाणां मृगराडिव॥ ३३॥**

**पदार्थ–**
**राज्ञि** = हे रानी द्रौपदी
**दारुकः** = दारुकले चाहिँ
**मिषतां** = हेरिरहेका
**भूभुजां** = राजाहरूको बिचैबाट
**मृगाणां** = मृगहरूको बिचबाट
**मृगराड् इव** = सिंहले झैं
**काञ्चनोपस्करं** = सुवर्णमय
**रथं** = रथलाई
**चोदयामास** = (द्वारकातिर) हाँके

**वाक्यार्थ–** हे रानी द्रौपदी ! भगवान्का सारथि दारुकले चाहिँ ती सबै राजाहरूले हेर्दा-हेर्दै सुवर्णमय भगवान्को रथलाई द्वारकातिर हाँके, जसरी मृगहरूको बिचबाट सिंहले आफ्नो भाग लिएर जान्छ।

**तेऽन्वसज्जन्त राजन्या निषेद्धुं पथि केचन।**
**संयत्ता उद्धृतेष्वासा ग्रामसिंहा यथा हरिम्॥ ३४॥**

**पदार्थ–**
**संयत्ताः** = युद्धमा तत्पर
**उद्धृतेष्वासाः** = धनु उठाएका
**ते** = ती
**केचन** = केही
**राजन्याः** = राजाहरूले
**ग्रामसिंहाः** = कुकुरहरूले
**हरिम् यथा** = सिंहलाई झैं
**पथि** = बाटोमा भगवान्लाई
**निषेद्धुं** = रोक्न
**अन्वसज्जन्त** = पछि पछि दौडिए

**वाक्यार्थ–** ती केही राजाहरू हातमा धनु उठाउँदै गाउँका कुकुरहरूले सिंहलाई रोक्न खोजे झैं बाटोमा भगवान् श्रीकृष्णलाई रोक्न उहाँको पछि पछि दौडिए।

**ते शार्ङ्गच्युतबाणौघैः कृत्तबाह्वङ्घ्रिकन्धराः।**
**निपेतुः प्रधने केचिदेके सन्त्यज्य दुद्रुवुः॥ ३५॥**

**पदार्थ–**
**शार्ङ्गच्युतबाणौघैः** = शार्ङ्गधनुबाट बर्सिएका बाणहरूबाट
**कृत्तबाह्वङ्घ्रिकन्धराः** = हात, खुट्टा र गर्धन काटिएका
**ते** = ती
**केचित्** = कोही राजाहरू
**प्रधने** = युद्धस्थलमा
**निपेतुः** = ढले
**एके** = कोही चाहिँ
**सन्त्यज्य** = (युद्ध) छोडी
**दुद्रुवुः** = भागे

**वाक्यार्थ–** शार्ङ्गधनुबाट बर्सिएका बाणहरूबाट केही राजाहरूको हात, खुट्टा र गर्धनसमेत काटियो र उनीहरू युद्धस्थलमैं ढले। केही राजाहरू चाहिँ बिचमै युद्ध छाडी भागे।

**ततः पुरीं यदुपतिरत्यलङ्कृतां**
**रविच्छदध्वजपटचित्रतोरणाम्।**
**कुशस्थलीं दिवि भुवि चाभिसंस्तुतां**
**समाविशत् तरणिरिव स्वकेतनम्॥ ३६॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**यदुपतिः** = यदुपति श्रीकृष्ण
**रविच्छदध्वजपटचित्रतोरणां** = सूर्यको प्रकाशलाई नै छेक्ने गरी ध्वजा, पताका, चित्र र तोरण टाँगिएको
**अत्यलङ्कृतां** = अत्यन्त सजाइएको
**दिवि** = स्वर्गमा
**भुवि च** = पृथिवीमा पनि
**अभिसंस्तुतां** = प्रशंसा गरिएको
**स्वकेतनं** = आफ्नो निवास भएको
**कुशस्थलीं** = द्वारका
**पुरीं** = पुरीमा
**तरणिः इव** = सूर्यले झैं
**समाविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** अनेकौं ध्वजा, पताका, चित्र र तोरणहरूद्वारा सूर्यको प्रकाशलाई नै छेक्ने गरी विशेषरूपले सजाइएको र स्वर्ग र पृथिवीमा समेत प्रशंसा गरिएको द्वारका पुरीमा यदुपति भगवान् श्रीकृष्ण सूर्य झैं प्रवेश गर्नुभयो।

**पिता मे पूजयामास सुहृत्सम्बन्धिबान्धवान्।**
**महार्हवासोऽलङ्कारैः शय्यासनपरिच्छदैः॥ ३७॥**

**पदार्थ–**
**मे** = मेरा
**पिता** = पिताले
**महार्हवासोऽलङ्कारैः** = बहुमूल्य वस्त्र र आभूषणहरूद्वारा
**शय्यासनपरिच्छदैः** = शय्या, आसन र विविध सामग्रीहरूद्वारा
**सुहृत्सम्बन्धिबान्धवान्** = हितैषी र सम्बन्धित बन्धुबान्धवहरूलाई
**पूजयामास** = पूजा गर्नुभयो

**वाक्यार्थ–** मेरा पिताले पनि आफ्नो हितैषी, स्वजन बन्धुबान्धवहरूलाई बहुमूल्य वस्त्र र आभूषणहरू तथा शय्या, आसन र अन्य विविध सामग्रीहरूद्वारा सत्कार गर्नुभयो।

**दासीभिः सर्वसम्पद्भिर्भटेभरथवाजिभिः।**
**आयुधानि महार्हाणि ददौ पूर्णस्य भक्तितः॥ ३८॥**

**पदार्थ–**
**पूर्णस्य** = पूर्ण भगवान्का लागि
**भक्तितः** = भक्तिपूर्वक (मेरा पिताले)
**दासीभिः** = दासीहरूले
**सर्वसम्पद्भिः** = सबै प्रकारका सम्पत्तिहरूले
**भटेभरथवाजिभिः** = सैनिक, हात्ती, रथ र घोडाले सहित

**महार्हाणि** = बहुमूल्य
**आयुधानि** = अस्त्रशस्त्रहरू
**ददौ** = अर्पण गर्नुभयो

**वाक्यार्थ–** यद्यपि भगवान् परिपूर्ण हुनुहुन्छ तर पनि मेरा पिताले भगवान्लाई अनेक दासी, सबै प्रकारका सम्पत्ति, अनेक सैनिक, हात्ती, घोडाहरू र सँगसँगै बहुमूल्य अस्त्रशस्त्रहरू पनि भक्तिपूर्वक दिनुभयो।

**आत्मारामस्य तस्येमा वयं वै गृहदासिकाः।**
**सर्वसङ्गनिवृत्त्याद्धा तपसा च बभूविम ॥ ३९ ॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**इमाः** = यी
**वयं** = हामीहरू
**सर्वसङ्गनिवृत्त्या** = सबै आसक्तिलाई छाड्नाले र
**तपसा च** = तपस्या गर्नाले
**अद्धा** = साक्षात्
**तस्य** = ती
**आत्मारामस्य** = आत्माराम भगवान्का
**गृहदासिकाः** = घरका सेविका
**बभूविम** = भएका छौँ

**वाक्यार्थ–** पूर्वजन्ममा सबै आसक्तिलाई छाडी अनेक तपस्याहरू गर्नाले यी हामीहरू साक्षात् आत्माराम भगवान्का घरका सेविकाहरू हुन पाएका छौँ।

**महिष्य ऊचुः** (महारानीहरूले भने)

**भौमं निहत्य सगणं युधि तेन रुद्धा**
**ज्ञात्वाथ नः क्षितिजये जितराजकन्याः।**
**निर्मुच्य संसृतिविमोक्षमनुस्मरन्तीः**
**पादाम्बुजं परिणिनाय य आप्तकामः ॥ ४० ॥**

**पदार्थ–**
**अथ** = यसै गरी
**क्षितिजये** = पृथिवी विजय गर्ने क्रममा
**जितराजकन्याः** = जितिएका राजाका कन्याहरूलाई
**तेन** = त्यो भौमासुरद्वारा
**रुद्धाः** = बन्दी बनाइएका भन्ने
**ज्ञात्वा** = थाहा पाएर
**युधि** = युद्धमा
**सगणं** = सेनासहित
**भौमं** = भौमासुरलाई
**निहत्य** = मारेर
**संसृतिविमोक्षं** = संसार-बन्धनबाट मुक्त गराउने
**पादाम्बुजं** = भगवान्को चरणकमल
**अनुस्मरन्तीः** = चिन्तन गरिरहेका
**नः** = हामीहरूलाई
**निर्मुच्य** = छुटाई
**यः** = जो
**आप्तकामः** = मनोरथ पूर्ण भएका भगवान् श्रीकृष्णले
**परिणिनाय** = पाणिग्रहण गर्नुभयो

**वाक्यार्थ–** पृथिवी विजय गर्ने क्रममा भौमासुरले सारा राजाहरूलाई जिती तिनका कन्या

हामीहरूलाई बन्दी बनाएको थियो। यो कुरा थाहा पाएर भगवान्ले युद्ध गरी सेनासहित भौमासुरलाई नष्ट गरिदिनुभयो। हामी सबै कन्याहरू संसारबन्धनबाट मुक्त गराउने साधन भएको भगवान्को चरणकमलकै चिन्तन गरिरहेका थियौँ। मनोरथ पूर्ण भएका भगवान्ले पनि हामी सबैलाई बन्धनबाट छुटाई हामीहरूसँग विवाह गर्नुभयो।

**न वयं साध्वि साम्राज्यं स्वाराज्यं भौज्यमप्युत।**
**वैराज्यं पारमेष्ठ्यं च आनन्त्यं वा हरेः पदम्॥ ४१॥**

**पदार्थ–**
**साध्वि** = हे पतिव्रता द्रौपदी
**वयं** = हामीहरू
**साम्राज्यं** = पृथिवीको साम्राज्य
**स्वाराज्यं** = स्वर्गको राज्य
**भौज्यं** = अनेक भोग
**अपि उत** = यसै गरी
**वैराज्यं** = अणिमा आदि ऐश्वर्य
**पारमेष्ठ्यं** = ब्रह्माजीको पद
**आनन्त्यं च** = मोक्ष
**हरेः** = भगवान्को
**पदं वा** = सालोक्य आदि मुक्तिलाई पनि
**न** = चाहँदैनौँ

**वाक्यार्थ–** हे पतिव्रता द्रौपदी ! हामीहरू पृथिवीको साम्राज्य, स्वर्गको राज्य, अनेक भोग, अणिमा आदि ऐश्वर्य, ब्रह्माजीको पद, मोक्ष अथवा भगवान्को पद मानिने सालोक्य आदि मुक्तिलाई पनि चाहँदैनौँ।

**कामयामह एतस्य श्रीमत्पादरजः श्रियः।**
**कुचकुङ्कुमगन्धाढ्यं मूर्ध्ना वोढुं गदाभृतः॥ ४२॥**
**व्रजस्त्रियो यद् वाञ्छन्ति पुलिन्द्यस्तृणवीरुधः।**
**गावश्चारयतो गोपाः पादस्पर्शं महात्मनः॥ ४३॥**

**पदार्थ–**
**व्रजस्त्रियः** = व्रजका गोपिनीहरू
**गावः** = गाई
**चारयतः** = चराइरहेका
**गोपाः** = गोपहरू
**पुलिन्द्यः** = भिल्लिनीहरू
**तृणवीरुधः** = घाँस र बुट्यानहरूले समेत
**महात्मनः** = उदारचरित्र श्रीकृष्णको
**यत्** = जुन
**पादस्पर्शं** = चरणस्पर्शलाई
**वाञ्छन्ति** = चाहन्छन् (त्यही)
**श्रियः** = लक्ष्मीजीको
**कुचकुङ्कुमगन्धाढ्यं** = स्तनमा लागेको कुङ्कुमको गन्धले युक्त
**गदाभृतः** = गदाधारी
**एतस्य** = तिनै भगवान् श्रीकृष्णको
**श्रीमत्पादरजः** = श्रीयुक्त चरणको धुलोलाई (हामी)
**मूर्ध्ना** = शिरले
**वोढुं** = धारण गर्न
**कामयामहे** = चाहन्छौँ

**वाक्यार्थ–** व्रजका गोपिनीहरू, गाई चराउने गोपहरू, भिल्लिनीहरू र त्यहाँका घाँस, पात र बुट्यानले समेत उदारचरित्र भगवान् श्रीकृष्णको जुन चरणस्पर्शलाई चाहन्छन्, हामीहरू पनि

लक्ष्मीका स्तनमा लिप्त कुङ्कुमको सुगन्धले युक्त तिनै भगवान् श्रीकृष्णका श्रीयुक्त चरणको धुलोलाई आफ्नो शिरमा धारण गर्न चाहन्छौँ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे**

**उत्तरार्धे त्र्यशीतितमोऽध्यायः ॥ ८३ ॥**

# अथ चतुरशीतितमोऽध्यायः

## वसुदेवको यज्ञमहोत्सव

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**श्रुत्वा पृथा सुबलपुत्र्यथ याज्ञसेनी**
**माधव्यथ क्षितिपपत्न्य उत स्वगोप्यः।**
**कृष्णेऽखिलात्मनि हरौ प्रणयानुबन्धं**
**सर्वा विसिस्म्युरलमश्रुकलाकुलाक्ष्यः॥ १॥**

**पदार्थ—**
**अखिलात्मनि** = सम्पूर्ण प्राणीका आत्मस्वरूप
**हरौ** = भगवान् श्रीहरिरूप
**कृष्णे** = श्रीकृष्णमा
**प्रणयानुबन्धं** = (पत्नीहरूको) परम प्रेम भएको
**श्रुत्वा** = सुनेर
**पृथा** = कुन्ती
**सुबलपुत्री** = सुबलपुत्री गान्धारी
**अथ** = त्यसै गरी
**याज्ञसेनी** = द्रौपदी
**माधवी** = सुभद्रा
**अथ** = अनि
**क्षितिपपत्न्यः** = अरू राजाका पत्नीहरू
**उत** = त्यसै गरी
**स्वगोप्यः** = भगवान्का आफ्ना गोपिनीहरू
**सर्वाः** = यी सबै
**अश्रुकलाकुलाक्ष्यः** = आँखाभरि आँसु पारी
**अलं** = पूर्णतः
**विसिस्म्युः** = विस्मित भए

**वाक्यार्थ—** सम्पूर्ण प्राणीका आत्मस्वरूप भगवान् श्रीकृष्णमा ती सबै श्रीकृष्णका पत्नीहरूको गहिरो एकनासको प्रेम रहेको जानेर त्यहाँ रहेका कुन्ती, गान्धारी, द्रौपदी, सुभद्रा एवं अन्य राजाका पत्नीहरू र भगवान्का प्रियतमा गोपिनीहरूसमेत आँखाभरि आँसु पारी अत्यन्त विस्मित भए।

**इति सम्भाषमाणासु स्त्रीभिः स्त्रीषु नृभिर्नृषु।**
**आययुर्मुनयस्तत्र कृष्णरामदिदृक्षया॥ २॥**

**पदार्थ—**
**इति** = यसरी
**नृभिः** = पुरुषहरूले
**नृषु** = पुरुषहरूसँग
**स्त्रीभिः** = स्त्रीहरूले
**स्त्रीषु** = स्त्रीहरूसँग
**सम्भाषमाणासु** = कुरा गरिरहेको वेलामा
**मुनयः** = मुनिहरू
**कृष्णरामदिदृक्षया** = श्रीकृष्ण र बलरामलाई हेर्ने इच्छाले
**तत्र** = त्यहाँ
**आययुः** = आइपुगे

**वाक्यार्थ—** यसप्रकार पुरुषहरूले पुरुषसँग र स्त्रीहरूले स्त्रीसँग एक-आपसमा कुराकानी

गरिरहेकै समयमा ऋषिमुनिहरू श्रीकृष्ण र बलरामको दर्शन गर्ने इच्छाले त्यहाँ आइपुगे।

**द्वैपायनो नारदश्च च्यवनो देवलोऽसितः।**
**विश्वामित्रः शतानन्दो भरद्वाजोऽथ गौतमः॥ ३॥**
**रामः सशिष्यो भगवान् वसिष्ठो गालवो भृगुः।**
**पुलस्त्यः कश्यपोऽत्रिश्च मार्कण्डेयो बृहस्पतिः॥ ४॥**
**द्वितस्त्रितश्चैकतश्च ब्रह्मपुत्रास्तथाङ्गिराः।**
**अगस्त्यो याज्ञवल्क्यश्च वामदेवादयोऽपरे॥ ५॥**

**पदार्थ–**
**द्वैपायनः** = द्वैपायन
**नारदः** = नारद
**च्यवनः** = च्यवन
**देवलः** = देवल
**असितः** = असित
**विश्वामित्रः** = विश्वामित्र
**शतानन्दः** = शतानन्द
**भरद्वाजः** = भरद्वाज
**अथ** = त्यसै गरी
**गौतमः** = गौतम
**सशिष्यः** = शिष्यहरूले सहित
**भगवान्** = भगवान्
**रामः** = परशुराम
**वसिष्ठः** = वसिष्ठ
**गालवः** = गालव
**भृगुः** = भृगु
**पुलस्त्यः** = पुलस्त्य
**कश्यपः** = कश्यप
**अत्रिः** = अत्रि
**मार्कण्डेयः** = मार्कण्डेय
**बृहस्पतिः** = बृहस्पति
**द्वितः च** = द्वित
**त्रितः च** = त्रित
**एकतः च** = एकत
**ब्रह्मपुत्राः च** = ब्रह्माजीका सनक आदि पुत्रहरू
**तथा** = त्यसै गरी
**अङ्गिराः** = अङ्गिरा
**अगस्त्यः** = अगस्त्य
**याज्ञवल्क्यः** = याज्ञवल्क्य
**अपरे** = अरू
**वामदेवादयः च** = वामदेव आदि मुनिहरू पनि आए

**वाक्यार्थ–** त्यहाँ द्वैपायन, नारद, च्यवन, देवल, असित, विश्वामित्र, शतानन्द, भरद्वाज, गौतम यी ऋषिहरू, यसै गरी आफ्ना शिष्यहरू सहित भगवान् परशुराम, वसिष्ठ, गालव, भृगु, पुलस्त्य, कश्यप, अत्रि, मार्कण्डेय, बृहस्पति, द्वित, त्रित र एकत यी ऋषिहरू पनि आए। यसै गरी ब्रह्माजीका पुत्रहरू सनक, सनन्दन, सनातन र सनत्कुमार, अङ्गिरा ऋषि, अगस्त्य, याज्ञवल्क्य र वामदेव आदि अरू मुनिहरू समेत त्यहाँ आइपुगे।

**तान् दृष्ट्वा सहसोत्थाय प्रागासीना नृपादयः।**
**पाण्डवाः कृष्णरामौ च प्रणेमुर्विश्ववन्दितान्॥ ६॥**

**पदार्थ–**
**विश्ववन्दितान्** = सबैद्वारा वन्दना गरिएका
**तान्** = ती मुनिहरूलाई
**दृष्ट्वा** = देखेर
**प्रागासीनाः** = पहिलेदेखि बसेका

**नृपादयः** = राजाहरू
**पाण्डवाः** = पाण्डवहरू
**कृष्णरामौ च** = श्रीकृष्ण र बलराम पनि
**सहसा** = झटपट
**उत्थाय** = उठेर
**प्रणेमुः** = प्रणाम गरे

**वाक्यार्थ–** सबैद्वारा वन्दना गरिएका ती ऋषिमुनिहरूलाई देख्नेबित्तिकै त्यस सभामा पहिलेदेखि बसेका राजाहरू, पाण्डवहरू एवं श्रीकृष्ण र बलरामले समेत झटपट उठेर तिनीहरूलाई प्रणाम गरे।

**तानानर्चुर्यथा सर्वे सहरामोऽच्युतोऽर्चयत्।**
**स्वागतासनपाद्यार्घ्यमाल्यधूपानुलेपनैः॥ ७॥**

**पदार्थ–**
**स्वागतासनपाद्यार्घ्यमाल्यधूपानुलेपनैः** = स्वागत, आसन, पाद्य, अर्घ्य, फूलको माला, धूप र चन्दन आदिद्वारा
**यथा** = विधिपूर्वक
**सर्वे** = सबैले
**तान्** = ती ऋषिहरूलाई
**आनर्चुः** = पूजा गरे
**सहरामः** = बलरामले सहित
**अच्युतः** = भगवान् श्रीकृष्णले पनि
**अर्चयत्** = (उहाँहरूको) पूजा गर्नुभयो

**वाक्यार्थ–** ती सबैले त्यहाँ आएका ऋषिहरूलाई स्वागत, आसन, पाद्य, अर्घ्य, फूलको माला, धूप, चन्दन आदिद्वारा विधिपूर्वक पूजा गरे। यसै गरी बलरामसहित भगवान् श्रीकृष्णले पनि उहाँहरूको पूजा गर्नुभयो।

**उवाच सुखमासीनान् भगवान् धर्मगुप्तनुः।**
**सदसस्तस्य महतो यतवाचोऽनुशृण्वतः॥ ८॥**

**पदार्थ–**
**धर्मगुप्तनुः** = धर्मरक्षाकै लागि शरीर धारण गर्ने
**भगवान्** = भगवान् श्रीकृष्ण
**यतवाचः** = (आफ्नो) बोली नियन्त्रित गरी
**अनुशृण्वतः** = भगवान्कै कुरा सुनिरहेको
**महतः** = विशाल
**तस्य** = त्यो
**सदसः** = सभाको बिचमा
**सुखं** = सुखपूर्वक
**आसीनान्** = बसेका ऋषिहरूलाई
**उवाच** = भन्नुभयो

**वाक्यार्थ–** धर्मरक्षाकै लागि शरीरधारण गर्नुहुने भगवान् श्रीकृष्णले मौन भएर आफूले भनेको कुरा सुनिरहेको विशाल सभाको बिचमा सुखपूर्वक बसेका ती ऋषिहरूलाई यसो भन्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**अहो वयं जन्मभृतो लब्धं कार्त्स्न्येन तत्फलम्।**
**देवानामपि दुष्प्रापं यद् योगेश्वरदर्शनम्॥ ९॥**

**पदार्थ—**
**अहो** = अहो
**जन्मभृतः** = मनुष्यजन्म धारण गर्ने
**वयं** = हामीहरू (धन्य छौँ, हामीहरूद्वारा)
**कात्स्न्र्येन** = पूर्णतया
**तत्फलं** = त्यो जन्मधारणको फल
**लब्धं** = पाइयो
**यत्** = किनभने
**योगेश्वरदर्शनं** = योगेश्वर ऋषिहरूको दर्शन
**देवानाम् अपि** = देवताहरूको लागि पनि
**दुष्प्रापम्** = दुष्प्राप्य छ

**वाक्यार्थ—** अहो ! मनुष्यजन्म पाएर हामीहरू धन्य भएका छौँ। आज हामीले मनुष्यजन्मको फल पूरै पायौँ, किनभने देवताहरूलाई समेत दुर्लभ योगेश्वरहरूको दर्शन हामीलाई प्राप्त भएको छ।

**किं स्वल्पतपसां नृणामर्चायां देवचक्षुषाम्।**
**दर्शनस्पर्शनप्रश्नप्रह्वपादार्चनादिकम्॥ १०॥**

**पदार्थ—**
**स्वल्पतपसां** = थोरै तपस्या भएका
**अर्चायां** = पूजाको समयमा मात्र
**देवचक्षुषां** = मूर्तिमा देवता देख्ने
**नृणां** = मानिसहरूका लागि
**दर्शनस्पर्शनप्रश्नप्रह्वपादार्चना-दिकं** = हजुरहरूको दर्शन, स्पर्श, बातचित, प्रणाम, चरणस्पर्श आदि
**किम्** = के प्राप्त हुन्थ्यो

**वाक्यार्थ—** जो व्यक्तिहरू केवल पूजाको समयमा मात्र मूर्तिमा देवतालाई देख्दछन्, सबैतिर देख्दैनन्। त्यसै गरी जो व्यक्तिहरू थोरै तपस्या भएका छन्, तिनीहरूलाई हजुरहरू जस्ताको दर्शन, स्पर्श, बातचित, प्रणाम, चरणस्पर्श आदि सौभाग्य कसरी प्राप्त हुन सक्छ र ?

**न ह्यम्मयानि तीर्थानि न देवा मृच्छिलामयाः।**
**ते पुनन्त्युरुकालेन दर्शनादेव साधवः॥ ११॥**

**पदार्थ—**
**हि** = निश्चय नै
**तीर्थानि** = तीर्थहरू
**अम्मयानि** = जलमय मात्र
**न** = हुँदैनन्
**देवाः** = देवताहरू
**मृच्छिलामयाः** = माटो र ढुङ्गाका मूर्ति मात्र
**न** = हुँदैनन्
**ते** = तिनीहरूले
**उरुकालेन** = लामो समयसम्मको सेवाबाट मात्र
**पुनन्ति** = (व्यक्तिलाई) पवित्र गर्दछन् भने
**साधवः** = साधुहरूले चाहिँ
**दर्शनात् एव** = केवल दर्शनबाट नै पवित्र गर्दछन्

**वाक्यार्थ—** तीर्थहरू केवल जलमय मात्र हुँदैनन्, त्यसै गरी देवताहरू माटो र ढुङ्गाका मात्र हुँदैनन्। ती सबैले लामो समयसम्मको सेवाबाट मात्र व्यक्तिलाई पवित्र बनाउँछन् भने साधुहरूले त केवल दर्शनबाट नै पवित्र बनाउँछन्।

**नाग्निर्न सूर्यो न च चन्द्रतारका न भूर्जलं खं श्वसनोऽथ वाङ्मनः।**
**उपासिता भेदकृतो हरन्त्यघं विपश्चितो घ्नन्ति मुहूर्तसेवया॥ १२॥**

**पदार्थ–**
**भूः** = पृथिवी
**जलं** = जल
**खं** = आकाश
**श्वसनः** = वायु
**अथ** = त्यसै गरी
**वाक्** = वाणी
**मनः** = मन समेत
**उपासिताः** = उपासना गरिएका यी सबैले
**भेदकृतः** = भेदबुद्धि गर्ने व्यक्तिको
**अघं** = पाप (अज्ञान)लाई
**न हरन्ति** = नष्ट गर्न सक्दैनन् (यसै गरी)
**अग्निः न** = अग्निले सक्दैनन्
**सूर्यः न** = सूर्यले सक्दैनन्
**चन्द्रतारकाः च न** = चन्द्र र ताराहरूले पनि सक्दैनन्
**विपश्चितः** = ब्रह्मज्ञानी ऋषिहरूले चाहिँ
**मुहूर्तसेवया** = एक मुहूर्तको सेवाबाट मात्र
**घ्नन्ति** = नष्ट गरिदिन्छन्

**वाक्यार्थ–** उपासना गरिएका अग्नि, सूर्य, चन्द्रमा, तारा, पृथिवी, जल, आकाश, वाणी र मन यी सबैले भेदबुद्धिपूर्वक उपासना गर्ने व्यक्तिको पाप (अज्ञान)लाई नष्ट गर्न सक्दैनन्, तर आफूलाई ब्रह्मभन्दा अभिन्न रूपमा बुझेका ज्ञानीहरूले चाहिँ एक मुहूर्तको सत्सङ्गबाट मात्रै पनि अज्ञानलाई नष्ट गरिदिन्छन्।

**यस्यात्मबुद्धिः कुणपे त्रिधातुके स्वधीः कलत्रादिषु भौम इज्यधीः।**
**यत्तीर्थबुद्धिः सलिले न कर्हिचिज्जनेष्वभिज्ञेषु स एव गोखरः॥ १३॥**

**पदार्थ–**
**यस्य** = जसको
**कुणपे** = मूर्दासमान
**त्रिधातुके** = वात, पित्त र कफबाट निर्मित शरीरमा
**आत्मबुद्धिः** = आत्मबुद्धि हुन्छ
**कलत्रादिषु** = पत्नी आदिमा
**स्वधीः** = आफ्नो भन्ने बुद्धि हुन्छ
**भौमे** = पृथिवीका ढुङ्गा, माटोको प्रतिमामा मात्र
**इज्यधीः** = पूज्य देवताभाव हुन्छ
**सलिले** = जलमा मात्र
**यत्तीर्थबुद्धिः** = जसको तीर्थबुद्धि हुन्छ
**कर्हिचित्** = कहिल्यै पनि
**अभिज्ञेषु** = आत्मज्ञानी
**जनेषु** = महापुरुषहरूमा
**न** = होइन
**सः एव** = त्यो नै
**गोखरः** = पशुहरूमा पनि निन्दित गधासमान हो

**वाक्यार्थ–** वात, पित्त र कफ यी तीन धातु मिलेर बनेको शरीर मूर्दासमानको छ, तर जसले यसमा आत्मबुद्धि गर्दछ, त्यही मान्छेको पत्नी, पुत्र आदिमा आफ्नो भन्ने बुद्धि हुन्छ। जो व्यक्ति आत्मज्ञानी महापुरुषहरूमा नभई ढुङ्गा, माटोको प्रतिमामा मात्र देवताको भाव राख्दछ र जलमा मात्र तीर्थबुद्धि गर्दछ, त्यो व्यक्ति पशुहरूमा पनि निन्दित गधासमान हो।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**निशम्येत्थं भगवतः कृष्णस्याकुण्ठमेधसः।**
**वचो दुरन्वयं विप्रास्तूष्णीमासन् भ्रमद्धियः॥ १४॥**

**पदार्थ–**
**इत्थं** = यसप्रकार
**अकुण्ठमेधसः** = नित्यज्ञानसम्पन्न

| | | |
|---|---|---|
| **भगवतः** = भगवान् | **वचः** = वचनलाई | **विप्राः** = ती ऋषिहरू |
| **कृष्णस्य** = श्रीकृष्णको | **निशम्य** = सुनेर | **तूष्णीम्** = चुपचाप |
| **दुरन्वयं** = तात्पर्य बुझ्नै नसकिने | **भ्रमद्धियः** = बुद्धि भ्रान्त भएका | **आसन्** = रहे |

**वाक्यार्थ–** यसरी नित्यज्ञानसम्पन्न भगवान् श्रीकृष्णको तात्पर्य बुझ्नै नसकिने किसिमको रहस्यमय वचन सुनेर बुद्धि भ्रान्त भएका ती सारा ऋषिहरू चुप लागिरहे।

**चिरं विमृश्य मुनय ईश्वरस्येशितव्यताम्।**

**जनसङ्ग्रह इत्यूचुः स्मयन्तस्तं जगद्गुरुम्॥ १५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **मुनयः** = मुनिहरूले | **चिरं** = धेरै कालसम्म | (तिनीहरूले) |
| **ईश्वरस्य** = सर्वसमर्थ भगवान्को | **विमृश्य** = विचार गरी | **तं** = ती |
| **ईशितव्यतां** = कर्मपरतन्त्र जीवको झैं व्यवहारलाई | **जनसङ्ग्रहः इति** = लोकलाई शिक्षा दिनको लागि हो भन्ने बुझेर | **जगद्गुरुं** = जगद्गुरु श्रीकृष्णलाई |
| | **स्मयन्तः** = मुस्कुराउँदै | **ऊचुः** = यसो भने |

**वाक्यार्थ–** ती सम्पूर्ण ऋषिहरूले भगवान् श्रीकृष्णले सर्वसमर्थ ईश्वर भएर पनि कर्मपरतन्त्र जीवहरूले झैं व्यवहार गरिरहेको देखे र उनीहरूले धेरै समयसम्म विचार गरिसकेपछि भगवान्को त्यस्तो व्यवहार लोकलाई शिक्षा दिनको लागि हो भन्ने बुझे। त्यसपछि उनीहरूले मुस्कुराउँदै जगद्गुरु श्रीकृष्णलाई यसो भने।

**मुनय ऊचुः** (मुनिहरूले भने)

**यन्मायया तत्त्वविदुत्तमा वयं विमोहिता विश्वसृजामधीश्वराः।**

**यदीशितव्यायति गूढ ईहया अहो विचित्रं भगवद्विचेष्टितम्॥ १६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यन्मायया** = जसको मायाद्वारा | **वयं** = हामी ऋषिहरूसमेत | **ईशितव्यायति** = कर्मपरतन्त्र जीव झैं आचरण गर्नुहुन्छ |
| **विश्वसृजां** = विश्वका सृष्टिकर्ता प्रजापतिहरूमध्ये | **विमोहिताः** = मोहित भएका छौं | **अहो** = आश्चर्य |
| **अधीश्वराः** = श्रेष्ठ मरीचि आदि | **यत्** = जुन मायाकै | **भगवद्विचेष्टितं** = भगवान्को चेष्टा |
| **तत्त्वविदुत्तमाः** = तत्त्वज्ञानीहरू-मध्ये श्रेष्ठ | **ईहया** = चेष्टाद्वारा | **विचित्रम्** = विचित्र छ |
| | **गूढः** = गुप्त भई | |

**वाक्यार्थ–** हजुरको मायाद्वारा नै मरीचि आदि श्रेष्ठ प्रजापतिहरू र सर्वश्रेष्ठ तत्त्वज्ञानी हामीहरू पनि मोहित भएका छौं। मायाद्वारा नै मनुष्यका झैं चेष्टा गरी हजुर आफूलाई लुकाउनुहुन्छ र कर्मपरतन्त्र जीव झैं आचरण गर्नुहुन्छ। अहो ! भगवान्को चेष्टा विचित्र र आश्चर्यमय छ।

**अनीह एतद् बहुधैक आत्मना सृजत्यवत्यत्ति न बध्यते यथा।**
**भौमैर्हि भूमिर्बहुनामरूपिणी अहो विभूम्नश्चरितं विडम्बनम्॥ १७॥**

**पदार्थ–**
**यथा हि** = जसरी
**भौमैः** = पृथिवीका घैंटो आदि पदार्थहरूद्वारा
**भूमिः** = एउटै पृथिवी
**बहुनामरूपिणी** = अनेक नाम र रूपवाली (हुन्छिन्, त्यस्तै)
**एकः** = एक र
**अनीहः** = इच्छाशून्य परमात्मा
**आत्मना** = आफैँले
**एतत्** = यो संसारलाई
**बहुधा** = अनेक रूपमा
**सृजति** = रच्नुहुन्छ
**अवति** = पालन गर्नुहुन्छ र
**अत्ति** = संहार गर्नुहुन्छ
**न बध्यते** = तर यसबाट बाँधिनुहुन्न
**अहो** = आश्चर्य
**विभूम्नः** = परमात्माको
**विडम्बनं** = देखावटी
**चरितम्** = चरित्र छ

**वाक्यार्थ–** जसरी एउटै पृथिवी घैंटो, आरी आदि अनेक नाम-रूपमा देखिन्छिन्, त्यसै गरी परमात्मा पनि इच्छाशून्य र एक मात्र भएर पनि आफैँले अनेक रूपमा यो संसारको सृष्टि, स्थिति र संहार गर्नुहुन्छ, तर यो कर्मबाट उहाँ चाहिँ बाँधिनुहुन्न। अहो ! परमात्माको सबै चरित्र मायाद्वारा देखावटी रूपमा प्रकट भएको छ।

**अथापि काले स्वजनाभिगुप्तये बिभर्षि सत्त्वं खलनिग्रहाय च।**
**स्वलीलया वेदपथं सनातनं वर्णाश्रमात्मा पुरुषः परो भवान्॥ १८॥**

**पदार्थ–**
**अथ** = यद्यपि (हजुर)
**परः** = परम
**पुरुषः** = पुरुष हुनुहुन्छ (कर्मबन्धनले रहित भएका हजुरका लागि आफ्नो स्वार्थ भन्ने केही पनि छैन तर पनि)
**काले** = समय-समयमा
**स्वजनाभिगुप्तये** = आफ्ना भक्तहरूको रक्षाका लागि
**खलनिग्रहाय च** = दुष्टहरूलाई निग्रह गर्नका लागि
**वर्णाश्रमात्मा** = वर्णधर्म र आश्रमधर्मरूप
**भवान्** = हजुर
**सत्त्वं** = सत्त्वमय शरीर
**बिभर्षि** = धारण गर्नुहुन्छ
**स्वलीलया** = आफ्नो लीलाद्वारा
**सनातनं** = सनातन
**वेदपथं अपि** = वेदमार्गलाई पनि (रक्षा गर्नुहुन्छ)

**वाक्यार्थ–** हे भगवान् ! यद्यपि हजुर परम पुरुष हुनुहुन्छ र कर्मबन्धनले रहित पनि हुनुहुन्छ। यसैले हजुरका लागि आफ्नो स्वार्थ भन्ने केही पनि छैन तर पनि समय-समयमा आफ्ना भक्तहरूको रक्षा र दुष्टहरूको निग्रहका लागि वर्णधर्म र आश्रमधर्मरूप हजुरले सत्त्वमय शरीर धारण गर्नुहुन्छ र आफ्ना लीलाद्वारा सनातन वेदमार्गको पनि रक्षा गर्नुहुन्छ।

**ब्रह्म ते हृदयं शुक्लं तपःस्वाध्यायसंयमैः।**
**यत्रोपलब्धं सद् व्यक्तमव्यक्तं च ततः परम्॥ १९॥**

**पदार्थ–**
**ते** = हजुरको
**शुक्लं** = विशुद्ध

**हृदयं** = हृदय
**ब्रह्म** = वेद नै हो
**यत्र** = जहाँ
**तपःस्वाध्यायसंयमैः** = तपस्या, स्वाध्याय र संयमद्वारा
**व्यक्तं** = कार्यरूप सम्पूर्ण जगत्
**अव्यक्तं** = कारण पञ्चमहाभूत आदि
**ततः परं** = त्यो भन्दा पर रहेको
**सत् च** = सन्मात्र ब्रह्मतत्त्व समेत
**उपलब्धम्** = उपलब्ध हुन्छ

**वाक्यार्थ–** हे भगवान् ! हजुरको आन्तरिक विशुद्ध रूप भनेको वेद नै हो। त्यही वेदमा तपस्या, स्वाध्याय र संयम आदि सद्गुणद्वारा, कार्यप्रपञ्च, कारणरूप पञ्चमहाभूत र ती दुबैभन्दा पर रहेको सद्रूप केवल ब्रह्मतत्त्व समेत उपलब्ध हुन्छ।

**तस्माद् ब्रह्मकुलं ब्रह्मन् शास्त्रयोनेस्त्वमात्मनः।**
**सभाजयसि सद्धाम तद्ब्रह्मण्याग्रणीर्भवान्॥ २०॥**

**पदार्थ–**
**तस्मात्** = त्यसैले
**ब्रह्मन्** = हे भगवान्
**त्वं** = हजुर
**शास्त्रयोनेः** = शास्त्रका एक मात्र कारण
**आत्मनः** = आफ्नो
**सद्धाम** = श्रेष्ठ निवासस्थान भएका
**ब्रह्मकुलं** = ब्राह्मणहरूलाई
**सभाजयसि** = सत्कार गर्नुहुन्छ
**तत्** = त्यसैले
**भवान्** = हजुर
**ब्रह्मण्याग्रणीः** = ब्राह्मणभक्तहरू- मध्ये सर्वश्रेष्ठ हुनुहुन्छ

**वाक्यार्थ–** हे भगवान् ! हजुर नै वेद आदि सम्पूर्ण शास्त्रका एक मात्र कारण हुनुहुन्छ र ब्राह्मणहरूले नै आफूभित्र हजुरको स्वरूपलाई अनुभव गर्दछन्। त्यसैले हजुरले ब्राह्मणहरूलाई सत्कार गर्नुहुन्छ र यसैले हजुर सर्वश्रेष्ठ ब्राह्मणभक्त हुनुहुन्छ।

**अद्य नो जन्मसाफल्यं विद्यायास्तपसो दृशः।**
**त्वया सङ्गम्य सद्गत्या यदन्तः श्रेयसां परः॥ २१॥**

**पदार्थ–**
**यत्** = जुन हजुर
**श्रेयसां** = कल्याणहरूको
**परः** = परम
**अन्तः** = अवधि हुनुहुन्छ
**त्वया** = त्यस्ता हजुरसँग
**सङ्गम्य** = भेटघाट गर्नाले र
**सद्गत्या** = सङ्गत गर्नाले
**अद्य** = आज
**नः** = हामीहरूको
**विद्यायाः** = ज्ञानको
**तपसः** = तपस्याको
**दृशः** = दर्शनको र
**जन्मसाफल्यम्** = जन्मको समेत सफलता प्राप्त भएको छ

**वाक्यार्थ–** हजुर नै कल्याणका परम अवधि हुनुहुन्छ। यस्ता हजुरसँग भेटघाट गर्दा र सङ्गत गर्दा आज हामीहरूको ज्ञान, तपस्या, दर्शन र मनुष्यजन्म समेत पूर्णरूपमा सफल बनेको छ।

**नमस्तस्मै भगवते कृष्णायाकुण्ठमेधसे।**
**स्वयोगमाययाच्छन्नमहिम्ने परमात्मने॥ २२॥**

**पदार्थ—**
**स्वयोगमाययाच्छन्नमहिम्ने** = आफ्नो योगमायाद्वारा अनन्त महिमालाई लुकाउनुहुने
**अकुण्ठमेधसे** = नित्यज्ञान सम्पन्न
**परमात्मने** = परमात्मा
**भगवते** = सर्वसमर्थ
**तस्मै** = त्यस्ता
**कृष्णाय** = श्रीकृष्णलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ—** आफ्नो योगमायाद्वारा अनन्त महिमालाई लुकाउनुहुने र नित्यज्ञानसम्पन्न यस्ता सर्वसमर्थ श्रीकृष्ण परमात्मालाई नमस्कार छ।

**न यं विदन्त्यमी भूपा एकारामाश्च वृष्णयः।**
**मायाजवनिकाच्छन्नमात्मानं कालमीश्वरम्॥ २३॥**

**पदार्थ—**
**आत्मानं** = सबैका आत्मा (भएर पनि)
**मायाजवनिकाच्छन्नं** = मायाको आवरणद्वारा ढाकिनुभएका
**कालं** = कालस्वरूप
**ईश्वरं** = ईश्वर
**यं** = जुन श्रीकृष्णलाई
**अमी** = यी
**भूपाः** = राजाहरू र
**एकारामाः** = एउटै घरमा बस्ने
**वृष्णयः च** = वृष्णिहरूले पनि
**न विदन्ति** = जान्दैनन्

**वाक्यार्थ—** सबैका आत्मा भएर पनि भगवान् मायाको आवरणद्वारा ढाकिनुभएको छ। उहाँ नै कालस्वरूप पनि हुनुहुन्छ। यस्ता श्रीकृष्ण भगवान्‌लाई यी सम्पूर्ण राजाहरू र एउटै घरमा बस्ने वृष्णिहरूले पनि बुझ्न सकेका छैनन्।

**यथा शयानः पुरुष आत्मानं गुणतत्त्वदृक्।**
**नाममात्रेन्द्रियाभातं न वेद रहितं परम्॥ २४॥**
**एवं त्वा नाममात्रेषु विषयेष्विन्द्रियेहया।**
**मायया विभ्रमच्चित्तो न वेद स्मृत्युपप्लवात्॥ २५॥**

**पदार्थ—**
**यथा** = जसरी
**गुणतत्त्वदृक्** = गुण (स्वप्न)लाई नै वास्तविक सम्झिने
**शयानः** = सुतिरहेको
**पुरुषः** = व्यक्तिले
**नाममात्रेन्द्रियाभातं** = नाम मात्रको इन्द्रियद्वारा मनमा देखिएका
**आत्मानं** = (स्वप्न अवस्थाकै) शरीरलाई (देखदछ)
**परं** = यो भन्दा पर रहेको
**रहितं** = स्वप्नरहित जाग्रत् स्वरूपलाई
**न वेद** = जान्न सक्दैन
**एवं** = यसै गरी
**नाममात्रेषु** = नाम मात्रका
**विषयेषु** = विषयहरूमा
**इन्द्रियेहया** = इन्द्रियको आसक्तिरूप
**मायया** = मायाद्वारा
**विभ्रमच्चित्तः** = चित्त मोहित भएको व्यक्तिले
**स्मृत्युपप्लवात्** = विवेकशक्ति नष्ट भएकाले
**त्वा** = आत्मस्वरूप हजुरलाई
**न वेद** = जान्न सक्दैनन्

**वाक्यार्थ–** जसरी सुतिरहेको व्यक्तिले स्वप्नलाई नै वास्तविक सम्झन्छ र काल्पनिक इन्द्रियद्वारा मनमा देखिएका आफ्ना अनेकथरी शरीरलाई वास्तविक ठान्दछ र स्वप्नभन्दा परको जाग्रत्कालको शरीरलाई बिर्सिएको हुन्छ, ठिक यसै गरी काल्पनिक विषयहरूमा इन्द्रियको आसक्तिरूपी मायाद्वारा चित्त मोहित भएका व्यक्तिहरूको पनि विवेकशक्ति नष्ट हुन्छ र उनीहरूले वास्तविक आत्मस्वरूप हजुरलाई बुझ्न सक्दैनन्।

**विवरण–** यस प्रसङ्गमा परमात्माको वास्तविक स्वरूपलाई उहाँसँगै बस्ने व्यक्तिहरूले र राजा आदिले समेत बुझ्न सकेका छैनन् भनी ऋषिहरूले बताएका छन्। वृष्णिहरू भगवान्सँग एउटै घरमा बस्छन्, तर उनीहरूमध्ये उहाँको ईश्वरीयताको सम्बन्धमा कमैलाई मात्र थाहा छ। यहाँ **एकारामा** भन्ने शब्द प्रयोग गरी अति नजिक भएकाले परमात्माको उपेक्षा हुन गएको तर्फ सङ्केत गरिएको छ। जब कुनै पनि वस्तुसँग अत्यन्त नजिक भइन्छ भने त्यसको महत्त्व कम हुन्छ। भगवान् पनि एउटै घरमा हुनुभएकाले होला, वृष्णिवंशका धेरैले श्रीकृष्णको वास्तविक रूपमा त्यति ध्यान दिएका थिएनन्। उनीहरूले बाहिरी शरीरको रूपमा मात्र उहाँलाई चिनेका थिए। उनीहरूले श्रीकृष्णलाई बाहिर–बाहिर मात्र बुझेका तर यथार्थ रूपमा बुझ्न नसकेकोलाई श्लोकमा स्वप्नसँग तुलना गरिएको छ। श्लोकमा प्रयोग गरिएको **गुणतत्त्वदृक्** शब्दले स्वप्नावस्थाका अयथार्थ वस्तुहरूलाई यथार्थ रूपमा नै ठान्ने व्यक्ति भन्ने अर्थ बुझाएको छ। सपना देख्दा व्यक्ति आफ्नै मनभित्र रहेका वासनाहरूलाई मूर्तरूपमा आफैँले कल्पना गरी तिनको भोग गरिरहेको हुन्छ। स्वप्नमा चेतन व्यक्ति जम्मा एउटा हुन्छ, तर त्यही एउटै व्यक्ति अनेक प्राणीहरूको रूपमा कल्पित भई सारा व्यवहारलाई प्रकाशित गरिरहेको हुन्छ। ऊ आफैँ कहिले बाघ, कहिले पक्षी, कहिले मान्छे बन्दै विचित्र रूपमा फेरिइरहेको हुन्छ। आफैँलाई नै वासनामय तैजस जगत्को रूपमा बनाई त्यसको उपभोग पनि गरिरहेको त्यो व्यक्तिलाई आफू स्वप्नभन्दा अलग यसको द्रष्टा हुँ भन्ने थाहा हुँदैन। त्यस वेलामा व्यक्ति स्वाप्निक इन्द्रियहरूबाट ग्रहण गरिने आफ्नो काल्पनिक रूपलाई नै आफू भन्ने सोचिरहेको हुन्छ। ढोका बन्द गरेर सुरक्षित रूपले बिस्तरामा सुतिरहेको व्यक्ति एकाएक वनको एकान्तमा बाघले लखेटिरहेको आफूलाई देख्दछ। यहाँ सामान्यतया तीन ओटा चेतन हुन्छन्, एउटा सपनाको आफू, एउटा लखेट्ने बाघ, अनि एउटा चाहिँ यो सबै घटनालाई जानिरहने साक्षी आत्मा। यीमध्ये साक्षी आत्माको चेतनाद्वारा नै पहिलेका दुबै चेतनावान् भइरहेका हुन्छन्। यदि चेतनाको दृष्टिले भन्ने हो भने स्वप्नमा लखेट्ने र लखेटिने दुबै आफू नै हो भने उपाधिको दृष्टिले भन्दा ती दुबै आफू नभई त्यसको प्रकाशक मात्र आफू हो। यसरी सपनामा व्यक्ति आफू स्वयं साक्षी भए पनि त्यसलाई भुली सपनाभित्र पात्रको रूपमा आफ्नो कल्पना गर्दछ, त्यसै गरी संसारस्वप्नमा पात्र भई पहिले जीवले पनि आफू यो संसारस्वप्नको द्रष्टा परमात्मा नै हुँ भनी बुझ्न सकेको छैन। संसारस्वप्न सामूहिक हो र त्यसको कारण माया हो भने दैनिक देखिने स्वप्न वैयक्तिक हो र यसको कारण व्यष्टि अविद्या हो। सपनाबाट जागेपछि त्यसको नाश हुन्छ भने ज्ञानद्वारा जागेपछि यो संसारस्वप्नको पनि नाश हुन्छ। यो अनादिमायाको निद्रा हो, यसैद्वारा चित्त भ्रान्त भइरहेको व्यक्ति विवेकशक्ति हराएकाले आफूलाई यहीँभित्रको पात्र ठान्न ठाल्दछ। यसरी आफूलाई अनेक काल्पनिक पात्रहरूको रूपमा

जानिरहेको जीवले यसका द्रष्टा वास्तविक आत्मा हजुरलाई बिर्सिन्छ भनी श्लोकमा संसार स्वप्नलाई प्रकाशित गर्ने आत्माको रूपमा श्रीकृष्णको स्तुति गरिएको छ।

**तस्याद्य ते ददृशिमाङ्घ्रिमघौघमर्ष-**
**तीर्थास्पदं हृदि कृतं सुविपक्वयोगैः।**
**उत्सिक्तभक्त्युपहताशयजीवकोशा**
**आपुर्भवद्गतिमथोऽनुगृहाण भक्तान्॥ २६॥**

**पदार्थ–**
**अद्य** = आज
**तस्य** = त्यस्ता
**ते** = हजुरको
**अघौघमर्षतीर्थास्पदं** = पापसमूहलाई नष्ट गरिदिने तीर्थमयी गङ्गाको पनि आश्रय भएको
**सुविपक्वयोगैः** = योगसिद्ध भइसकेकाहरूद्वारा पनि
**हृदि कृतं** = हृदयमा धारण गरिने
**अङ्घ्रिम्** = चरणलाई
**ददृशिम** = हामीले देख्यौँ
**उत्सिक्तभक्त्युपहताशयजीव-कोशाः** = निरन्तर बढिरहेको भक्तिद्वारा नष्ट भएको अन्तःकरणरूप जीवकोश नष्ट भएका भक्तहरूले
**भवद्गतिम्** = हजुरको (भगवद्) भावलाई
**आपुः** = प्राप्त गरे
**अथो** = त्यसैले
**भक्तान्** = भक्तहरूलाई
**अनुगृहाण** = अनुग्रह गर्नुहोस्

**वाक्यार्थ–** हजुरको चरण सारा पापलाई नष्ट गरिदिने तीर्थमयी गङ्गाको पनि एक मात्र आश्रय हो। योगसिद्ध भएका महापुरुषहरू पनि यसलाई आफ्नो हृदयभित्र धारण गर्दछन्। यस्तो चरणलाई हामीले दर्शन गर्‍यौँ। जो व्यक्तिहरू निरन्तर बढिरहेको हजुरको भक्तिद्वारा अन्तःकरणरूपी जीवकोशलाई नष्ट गर्दछन् तिनीहरूले मात्र भगवद्भावलाई प्राप्त गर्दछन्। त्यसैले हे भगवान्! आफ्ना भक्तहरूमाथि अनुग्रह गर्नुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्यनुज्ञाप्य दाशार्हं धृतराष्ट्रं युधिष्ठिरम्।**
**राजर्षे स्वाश्रमान् गन्तुं मुनयो दधिरे मनः॥ २७॥**

**पदार्थ–**
**राजर्षे** = हे राजर्षि परीक्षित्
**इति** = यसप्रकार
**दाशार्हं** = यदुश्रेष्ठ श्रीकृष्णसँग
**धृतराष्ट्रं** = धृतराष्ट्रसँग र
**युधिष्ठिरं** = युधिष्ठिरसँग
**अनुज्ञाप्य** = अनुमति लिई
**मुनयः** = ती मुनिहरूले
**स्वाश्रमान्** = आ-आफ्ना आश्रममा
**गन्तुं** = जान
**मनः** = मन
**दधिरे** = गरे

**वाक्यार्थ–** हे राजर्षि परीक्षित्! यसप्रकार ती मुनिहरूले श्रीकृष्ण, धृतराष्ट्र र युधिष्ठिरसँग अनुमति लिई आ-आफ्ना आश्रममा जाने विचार गरे।

**तद् वीक्ष्य तानुपव्रज्य वसुदेवो महायशाः।**
**प्रणम्य चोपसङ्गृह्य बभाषेदं सुयन्त्रितः॥ २८॥**

**पदार्थ–**
**महायशाः** = महायशस्वी
**वसुदेवः** = वसुदेवले
**तत्** = यस्तो
**वीक्ष्य** = देखी
**तान्** = ती मुनिहरूको
**उपव्रज्य** = नजिक गई
**प्रणम्य** = प्रणाम गरी
**उपसङ्गृह्य च** = तिनको चरण समातेर
**सुयन्त्रितः** = नम्रतापूर्वक
**इदं** = यसो
**बभाषे** = भन्नुभयो

**वाक्यार्थ–** महायशस्वी वसुदेवले मुनिहरूलाई जान खोजेको देख्नुभयो र उहाँले मुनिहरूको नजिक गई प्रणाम गरेर तिनको चरण समाती नम्रतापूर्वक यसो भन्नुभयो।

**वसुदेव उवाच** (वसुदेवले भन्नुभयो)

**नमो वः सर्वदेवेभ्य ऋषयः श्रोतुमर्हथ।**
**कर्मणा कर्मनिर्हारो यथा स्यान्नस्तदुच्यताम्॥ २९॥**

**पदार्थ–**
**सर्वदेवेभ्यः** = सर्वदेवस्वरूप
**वः** = हजुरहरूलाई
**नमः** = नमस्कार छ
**ऋषयः** = हे ऋषिहरू
**श्रोतुं** = मेरो कुरा सुन्न
**अर्हथ** = योग्य हुनुहुन्छ
**कर्मणा** = कर्मद्वारा
**यथा** = जुन उपायले
**नः** = हाम्रो
**कर्मनिर्हारः** = कर्मको नाश
**स्यात्** = हुन्छ
**तत्** = त्यो उपाय
**उच्यताम्** = बताउनुहोस्

**वाक्यार्थ–** हे सर्वदेवमय ऋषिहरू! हजुरहरूलाई नमस्कार छ। मेरो एउटा प्रार्थना सुन्नुहोस्। कर्मद्वारा जुन उपायले हाम्रो कर्मको नाश हुन्छ त्यो उपाय बताउनुहोस्।

**नारद उवाच** (नारदले भन्नुभयो)

**नातिचित्रमिदं विप्रा वसुदेवो बुभुत्सया।**
**कृष्णं मत्वार्भकं यन्नः पृच्छति श्रेय आत्मनः॥ ३०॥**

**पदार्थ–**
**विप्राः** = हे ऋषिहरू
**इदं** = यो
**अतिचित्रम्** = अत्यन्त आश्चर्य
**न** = होइन
**यत्** = किनभने
**वसुदेवः** = वसुदेवले
**कृष्णं** = श्रीकृष्णलाई
**अर्भकं** = सामान्य बालक
**मत्वा** = सम्झेकाले
**आत्मनः** = आफ्नो
**श्रेयः** = कल्याणको मार्ग
**बुभुत्सया** = जान्ने इच्छाले
**नः** = हामीसँग
**पृच्छति** = सोध्दै हुनुहुन्छ

**वाक्यार्थ–** हे ऋषिहरू! यो अत्यन्त आश्चर्यको विषय होइन, किनभने वसुदेवले भगवान्

श्रीकृष्णलाई सामान्य बालक सम्झेकाले नै उहाँ आफ्नो कल्याणको मार्ग जान्ने इच्छाले हामीसँग त्यस विषयमा प्रश्न गरिरहनुभएको छ।

**सन्निकर्षोऽत्र मर्त्यानामनादरणकारणम्।**
**गाङ्गं हित्वा यथान्याम्भस्तत्रत्यो याति शुद्धये॥ ३१॥**

**पदार्थ–**
**अत्र** = यस संसारमा
**सन्निकर्षः** = नजिक रहनु नै
**मर्त्यानां** = मानिसहरूको
**अनादरणकारणं** = अनादरको कारण हो
**यथा** = जसरी
**गाङ्गं** = गङ्गाजललाई
**हित्वा** = छाडी
**तत्रत्यः** = गङ्गाको नजिक बस्ने व्यक्ति
**शुद्धये** = शुद्धिका लागि
**अन्याम्भः** = अरू तीर्थको जल भएतिर
**याति** = जान्छ

**वाक्यार्थ–** यस संसारमा नजिक रहनु अनादरको कारण हो। किनभने गङ्गाको नजिक बस्ने व्यक्ति पनि आत्मशुद्धिका लागि गङ्गाजल छाडी अरू तीर्थको जल भएतिर लाग्दछ।

**यस्यानुभूतिः कालेन लयोत्पत्त्यादिनास्य वै।**
**स्वतोऽन्यस्माच्च गुणतो न कुतश्चन रिष्यति॥ ३२॥**
**तं क्लेशकर्मपरिपाकगुणप्रवाहैरव्याहतानुभवमीश्वरमद्वितीयम्।**
**प्राणादिभिः स्वविभवैरुपगूढमन्यो मन्येत सूर्यमिव मेघहिमोपरागैः॥ ३३॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**यस्य** = जुन भगवान्को
**अनुभूतिः** = ज्ञान
**कालेन** = समयद्वारा
**अस्य** = यस संसारको
**लयोत्पत्त्यादिना** = लय, उत्पत्ति आदिबाट
**स्वतः** = स्वयं
**अन्यस्मात् च** = अरू कुनै कारणले वा
**गुणतः** = नयाँ गुणहरूको उत्पत्तिद्वारा समेत
**कुतश्चन** = यी कुनै पनि कारणले
**न रिष्यति** = नष्ट हुँदैन
**क्लेशकर्मपरिपाकगुणप्रवाहैः** = राग आदि क्लेश, त्यसद्वारा हुने कर्म, त्यसबाट उत्पन्न हुने सुखदुःख र सत्त्व आदि गुणहरूको प्रवाहद्वारा
**प्राणादिभिः** = प्राण आदि
**स्वविभवैः** = आफ्नै कार्यहरूद्वारा
**अव्याहतानुभवं** = कहिल्यै नढाकिने ज्ञानस्वरूप हुनुभएका
**अद्वितीयं** = अद्वितीय
**तं** = त्यस्ता
**ईश्वरं** = ईश्वरलाई
**अन्यः** = अर्को (अज्ञानी) व्यक्तिले
**मेघहिमोपरागैः** = बादल, तुषारपात र ग्रहण आदिद्वारा
**सूर्यम् इव** = सूर्य ढाकिए झैँ
**उपगूढं** = ढाकिएको
**मन्येत** = मान्ला

**वाक्यार्थ–** समयको प्रभावद्वारा भएको संसारको उत्पत्ति, लय आदिबाट, स्वतः, अरू कुनै कारणले या नयाँ गुणहरूको उत्पत्तिद्वारा समेत भगवान्को नित्यज्ञानशक्ति कहिल्यै नष्ट हुँदैन।

अज्ञानी व्यक्तिले कहिल्यै नढाकिने ज्ञानशक्ति भएका भगवान्‌लाई पनि राग आदि क्लेश, त्यसद्वारा हुने कर्म, त्यसबाट उत्पन्न हुने सुखदुःख र सत्त्व आदि गुणहरूको प्रभावद्वारा त्यसै गरी आफ्नै कार्य भएका प्राण आदिद्वारा ढाकिएको ठान्दछ जसरी सूर्य बादल, तुषारपात र ग्रहण आदिद्वारा ढाकिए झैँ देखिन्छ।

**विवरण—** यस प्रसङ्गमा देवर्षि नारदले श्रीकृष्णलाई अज्ञानीहरूले नै सामान्य मनुष्य ठान्दछन् भनी बताउनुभएको छ। वसुदेवले ऋषिहरूलाई कर्मबन्धनबाट छुट्न के के गर्नुपर्ला ? भनी सोध्नुभएको छ। कर्मबन्धनबाट छुट्ने सबैभन्दा सजिलो साधन भनेको भक्ति हो। साक्षात् परमात्मा श्रीकृष्ण, जसको चिन्तन गर्नाले मात्र कर्मबन्धबाट तत्काल छुट्कारा मिल्दछ, त्यस्ता भगवान् साथमा हुँदा पनि अरू साधनको भर पर्नु राम्रो होइन। आखिर कर्म गरेर पनि त्यसको फल ईश्वरमा अर्पण गरी उहाँको प्रसन्नताले नै कर्मबन्धन हट्ने हो। यसरी कर्मको परम्पराले परमात्मालाई रिझाउनुभन्दा निरन्तर प्रेमपूर्ण चिन्तनले उहाँलाई खुसी पार्न सजिलो छ। यसैलाई भगवान्‌ले गीता (११।५४)मा **भक्त्या त्वनन्यया शक्यः** अर्थात् अनन्य भक्तिद्वारा मलाई पाउन सकिन्छ भनी बताउनुभएको छ। यसरी छोटो बाटोबाट परमात्मालाई खुसी पार्न सकिने हुँदाहुँदै लामो बाटो रोज्नु मूर्खता पनि हो। नारद भन्नुहुन्छ— निरन्तर नजिक भएका कारणले वसुदेवले श्रीकृष्णलाई ईश्वर नभई सामान्य मानव ठानेका छन्। यसलाई नीतिशास्त्रमा **अतिपरिचयात् अवज्ञा** अर्थात् अति चिनजान भएपछि बेवास्ता हुन्छ भनी बताइएको छ। जसरी गङ्गानजिक बस्ने मानिस सर्वतीर्थमयी गङ्गालाई छाडी तीर्थस्नान र दर्शन गर्न अरू नदीतिर दौडिन्छ, त्यसै गरी साक्षात् परमात्मालाई छाडी कर्महरूको भर पर्नु पनि परमात्मामा अविश्वासकै कारणले हो।

श्रीकृष्णको विषयमा बताउँदै नारद भन्नुहुन्छ— उहाँ सर्वरूप अनि सर्वसमर्थ अद्वितीय ईश्वर हुनुहुन्छ। उहाँमा कर्म आदिको बन्धन छैन। योगसूत्र (१।२४)मा पनि **क्लेशकर्म-विपाकाशयैरपरामृष्टः पुरुषविशेषः ईश्वरः** अर्थात् कर्म, क्लेश आदिको बन्धनले नछोइने पुरुषविशेष नै ईश्वर हो भनिएको छ। प्रस्तुत श्लोकमा श्रीकृष्णलाई क्लेश, कर्म आदि नभएको बताइएको छ। यहाँ क्लेश भनेर राग-द्वेष आदि क्लेशहरूलाई लिनुपर्दछ। योगशास्त्रमा अविद्या, अस्मिता, राग, द्वेष र अभिनिवेश (मृत्युभय) गरी पाँच प्रकारका क्लेश हुन्छन् भनिएको छ। यसरी आत्मामा क्रमशः अज्ञान, अहङ्कार, राग, द्वेष र मृत्युभय गरी पाँचै प्रकारका क्लेश नरहेको थाहा हुन्छ। **कर्म** भनेर शुभ, अशुभ र मिश्र गरी सबैथरी कर्महरूलाई लिनुपर्दछ। **परिपाक** शब्दको अर्थ कर्महरूको परिपाक भएर उत्पन्न हुने फललाई लिइन्छ। यसरी शुभ कर्मको फल सुख र अशुभ कर्मको फल दुःख यी दुबै परमात्मामा नरहने सिद्ध हुन्छ। **गुणप्रवाह** शब्दको अर्थ सत्त्व आदि गुणहरूको प्रवाह हो। जीव गुणको प्रवाह अनुसार काम गर्दछ भने परमात्मामा गुणहरूको प्रवाहरूप वासना पनि छैन भन्ने यसको अर्थ हुन्छ। यसरी परमात्मा नित्य प्रकाशमान विलक्षण स्वभावका भएर पनि अज्ञानीहरूका लागि भने आफ्नै कार्यहरूद्वारा ढाकिए झैँ हुनुभएको छ। यहाँ परमात्मा ढाकिए झैँ हुनुमा बादल, तुषारपात र ग्रहण गरी तीन दृष्टान्त दिइएको छ। जसरी बादलले सूर्यलाई छेक्न सक्दैन, न तुषारोले सूर्यलाई ढाक्न सक्छ न ग्रहणले त्यसलाई छोप्न सक्छ। यदि राहुको छाया, बादल र तुषारोले सूर्यलाई ढाक्ने हो भने ती स्वयं कहाँबाट प्रकाशित

हुन्छन् त ? किनभने राहु आदि त केवल ग्रहणको वेलामा सूर्य आदिको प्रकाश पाएर मात्र देखिन्छन्, अरू वेलामा तिनको अस्तित्व नै सिद्ध हुँदैन। यसरी आफ्ना प्रकाशक सूर्यलाई तिनले कसरी ढाक्न सक्छन् र ? त्यसै गरी परमात्माबाट नै प्रकाशित भएको संसारले आफ्ना कारण एवं प्रकाशक परमात्मालाई कसरी ढाक्न सक्छ। अज्ञानीहरूले बादलले सूर्यलाई ढाक्यो भन्ने व्यवहार गरे झैं संसारधर्मद्वारा परमात्मा ढाकिनुभयो या छोइनुभयो भन्नु पनि अज्ञान नै हो। त्यसैले श्रीकृष्णलाई शरीर आदि स्वीकार गरेको भरमा त्यसको सम्बन्धले युक्त भएको सामान्य मानिस मान्न मिल्दैन, उहाँ त सबै उपाधिहरूका पनि आधार परमात्मा नै हुनुहुन्छ भनी नारदले यहाँ श्रीकृष्णको स्वरूप बताउनुभएको छ।

**अथोचुर्मुनयो राजन्नाभाष्यानकदुन्दुभिम् ।**
**सर्वेषां शृण्वतां राज्ञां तथैवाच्युतरामयोः ॥ ३४ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**अथ** = यसपछि
**मुनयः** = मुनिहरूले
**सर्वेषां** = सबै
**राज्ञां** = राजाहरूले
**शृण्वतां** = सुनिरहँदा
**तथा एव** = त्यसै गरी
**अच्युतरामयोः** = बलराम र श्रीकृष्णको अघि
**आनकदुन्दुभिम्** = वसुदेवलाई
**आभाष्य** = सम्बोधन गरी
**ऊचुः** = यसो भने

**वाक्यार्थ–** हे परीक्षित् ! यसपछि मुनिहरूले भगवान् श्रीकृष्ण, बलराम र अरू सबै राजाहरूको सामने तिनीहरूले सुन्ने गरी वसुदेवलाई सम्बोधन गर्दै भन्न लागे।

**कर्मणा कर्मनिर्हार एष साधु निरूपितः ।**
**यच्छ्रद्धया यजेद् विष्णुं सर्वयज्ञेश्वरं मखैः ॥ ३५ ॥**

**पदार्थ–**
**यत्** = जुन
**सर्वयज्ञेश्वरं** = यज्ञपुरुष
**विष्णुं** = भगवान् विष्णुलाई
**मखैः** = यज्ञहरूद्वारा
**श्रद्धया** = श्रद्धापूर्वक
**यजेत्** = पूजन गरिन्छ
**एषः** = यो नै
**साधु** = राम्रो
**कर्मणा** = कर्मद्वारा
**कर्मनिर्हारः** = कर्म नाश गर्ने उपाय हो भनेर
**निरूपितः** = बताइएको छ

**वाक्यार्थ–** यज्ञपुरुष भगवान् विष्णुलाई अनेक यज्ञहरूद्वारा श्रद्धापूर्वक पूजन गर्नुपर्दछ। यो नै कर्महरूद्वारा कर्मलाई नष्ट गर्ने सर्वश्रेष्ठ उपाय हो भनी बताइएको छ।

**चित्तस्योपशमोऽयं वै कविभिः शास्त्रचक्षुषा ।**
**दर्शितः सुगमो योगो धर्मश्चात्ममुदावहः ॥ ३६ ॥**

**पदार्थ–**
**अयं वै** = यो नै
**कविभिः** = ज्ञानीहरूद्वारा

| | | |
|---|---|---|
| **शास्त्रचक्षुषा** = शास्त्रको दृष्टिले | **सुगमः** = सजिलो | अनुभूति गराउने |
| **चित्तस्य** = चित्तको | **योगः** = योग | **धर्मः च** = धर्मसमेत |
| **उपशमः** = शान्तिको उपाय | **आत्ममुदावहः** = आत्मानन्दको | **दर्शितः** = देखाइयो |

**वाक्यार्थ–** ज्ञानीहरूले शास्त्रको दृष्टिद्वारा चित्तशान्तिको उपाय, आत्मानन्दको अनुभूति गराउने धर्म र सजिलो योगसाधनको रूपमा समेत यही कुरा बताएका छन्।

**अयं स्वस्त्ययनः पन्था द्विजातेर्गृहमेधिनः।**
**यच्छ्रद्धयाप्तवित्तेन शुक्लेनेज्येत पूरुषः॥ ३७॥**

| **पदार्थ–** | | |
|---|---|---|
| **यत्** = जुन | **श्रद्धया** = श्रद्धापूर्वक | **द्विजातेः** = द्विजातिका लागि |
| **शुक्लेन** = सेतो (न्यायपूर्वक) | **पूरुषः** = परमात्मा | **स्वस्त्ययनः** = कल्याणकारक |
| **आप्तवित्तेन** = कमाइएको सम्पत्तिले | **इज्येत** = सेवित हुनुहुन्छ | **पन्था** = मार्ग हो |
| | **अयं** = यो नै | |
| | **गृहमेधिनः** = गृहस्थ | |

**वाक्यार्थ–** न्यायपूर्वक कमाइएको सम्पत्तिले श्रद्धापूर्वक परमात्माको सेवा गर्नुपर्दछ। गृहस्थ द्विजातिहरूका लागि यो नै कल्याणकारक मार्ग हो।

**विवरण–** यस प्रसङ्गमा कर्महरूद्वारा कर्मनाश हुने विधि भनेको श्रद्धापूर्वक परमात्माको आराधना गर्नु नै हो भनी ऋषिहरूले बताउनुभएको छ। वेद आदि शास्त्रहरूमा अधिकारीको स्तर अनुसार परमात्मालाई प्राप्त गर्ने अनेक मार्गहरू बताइएका छन्। जो व्यक्ति यो लोक र परलोकका फलभोगदेखि पूर्णरूपमा विरक्त एवं दृढनिश्चयी छन्, त्यस्ता व्यक्तिहरूका लागि ज्ञानमार्ग उपयुक्त छ। यस्तो विरक्त शिष्यले गुरुबाट सम्पूर्ण जगत्भ्रमको अधिष्ठानको रूपमा आत्मतत्त्व रहेको बुझी त्यही रूपमा ऊ स्थित हुन्छ र कृतकृत्य बन्दछ। अलि कम विरक्त एवं प्रेमप्रधान व्यक्तिहरूका लागि भक्ति मार्ग उपयुक्त हुन्छ। यसमा व्यक्ति आफ्नै आत्मस्वरूप सर्वाधार परमात्मासँग व्यक्तिगत प्रेमसम्बन्ध राखी दिनरात उहाँकै चिन्तन गरी सम्पूर्ण संसार एवं आफैँलाई बिर्सन्छ र परमात्मभावमा प्राप्त हुन्छ। विषयमा आसक्ति भएका प्रवृत्तिप्रधान व्यक्तिहरूका लागि कर्ममार्ग उपयुक्त हुन्छ। यसमा व्यक्ति शास्त्रीय कर्महरूको अनुष्ठान गर्दै त्यसको फल परमात्मालाई अर्पण गरेर बिस्तारै चित्तशुद्धि गर्दछ र पछि ज्ञानद्वारा मोक्ष प्राप्त गर्दछ। यीमध्ये ज्ञान र भक्ति असङ्ग परमात्मभावमा पुऱ्याउने मुख्य साधन हुन् भने कर्म यी दुबैका लागि गौण साधन हो। तर प्रवृत्तिप्रधान व्यक्तिहरूको हृदय केही नगरीकन सन्तुष्ट हुँदैन। उनीहरूलाई न तत्त्वज्ञानको उपदेशमा पूरा विश्वास हुन सक्छ, न त परमात्माप्रति दृढ भक्ति नै। यस्ता व्यक्तिहरूलाई कर्म नै आवश्यक हुन्छ, त्यसैले वेदमा यस्ता अधिकारीको बाहुल्यलाई विचार गरी धेरै भागमा कर्मकै चर्चा गरिएको छ। अतः कर्म गर्नुको तात्पर्य पनि आफ्नो अहंको सन्तुष्टि नभई आत्माको अकर्तृत्वबोध या अकर्ता आत्मभावमा पुग्नु नै हो। जे मन पऱ्यो त्यही कर्म गरेर होइन, अपि तु शास्त्रीय कर्म गर्दै त्यसको फल परमात्मालाई अर्पण गरेर नै व्यक्ति शुद्धचित्त बन्न सक्छ, त्यही

भएर श्लोकमा घरव्यवहारमा आसक्त रहेको पुरुषको कल्याणकारक बाटो भनेर कर्ममार्गलाई लिइएको छ। यहाँ सेतो सम्पत्तिद्वारा आर्जन गरिएको सम्पत्तिले परमात्मसेवा गर्नुपर्दछ भनिएको छ। सेतो धन भनेर वर्णधर्म अनुसारका सत्कर्म गरी प्राप्त भएको उचित धनलाई भनिएको हो। यज्ञ गर्नु-गराउनु, दान लिनु-दिनु, पढ्नु-पढाउनु यी ब्राह्मणका छ ओटा कर्महरू हुन्। यी छमध्ये पनि तीन ओटा कर्म ब्राह्मणत्वको रक्षाका लागि हुन् भने तीन ओटा कर्म चाहिँ जीविकाका लागि हुन्। पढाउनु, यज्ञ गराउनु र दान लिनु यी कर्मबाट अर्जित धन ब्राह्मणका लागि स्वच्छ धन हो। यसै गरी क्षत्रियको स्वधर्म अनुसार युद्धमा शत्रुलाई विजय गर्दा, प्रजासँग कर उठाउँदा र दोष अनुसारका दण्ड दिँदा प्राप्त हुने धन उसका लागि सेतो धन हो। कृषिकर्म, गाई आदि वस्तुहरूको पालन अनि व्यापार यी वैश्यका मुख्य स्वधर्म हुन्, त्यसैले यसबाट आर्जन गरिएको सम्पत्ति वैश्यका लागि सेतो धन हुन्छ भने अरूको सेवा, नोकरी आदिबाट प्राप्त धन शूद्रका लागि सेतो धन हुन्छ। आफ्नो स्वधर्मलाई त्याग गरेर अरूको वृत्तिलाई अपनाई कमाइएको धनलाई उत्तम मानिँदैन। अंशबण्डामा प्राप्त, आफ्ना मित्रहरूले प्रीतिपूर्वक दिएको उपहार अनि ससुरा आदिले दिएको धन चाहिँ सबै वर्णका व्यक्तिहरूलाई ग्राह्य हुन्छ। यसरी शुक्ल अर्थात् शुद्ध धनद्वारा परमात्माको सेवा, यज्ञ, दान आदि गर्नु र त्यसको फल परमात्मालाई अर्पण गर्नु नै कर्मबाट कर्मबन्धनको नाश हुने उपाय हो भनी यहाँ बताइएको छ।

**वित्तैषणां यज्ञदानैर्गृहैर्दारसुतैषणाम्।**
**आत्मलोकैषणां देव कालेन विसृजेद् बुधः॥**
**ग्रामे त्यक्तैषणाः सर्वे ययुर्धीरास्तपोवनम्॥ ३८॥**

**पदार्थ–**
**देव** = हे वसुदेव
**बुधः** = बुद्धिमान् व्यक्तिले
**यज्ञदानैः** = यज्ञ र दानद्वारा
**वित्तैषणां** = धनको इच्छालाई
**गृहैः** = गृहस्थ धर्मद्वारा
**दारसुतैषणां** = पत्नी र पुत्रको इच्छालाई र
**कालेन** = समयको प्रभावद्वारा (सबै भोग नष्ट हुन्छन् भन्ने विचारले)
**आत्मलोकैषणां** = पुण्यलोक-हरूको इच्छालाई
**विसृजेत्** = त्यागिदेओस्
**ग्रामे** = घर-गाउँमा रहेर
**त्यक्तैषणाः** = सबैथरी इच्छालाई त्यागिदिएका
**सर्वे** = सबै
**धीराः** = धीर व्यक्तिहरू
**तपोवनं** = तपोवनमा
**ययुः** = जान्थे

**वाक्यार्थ–** हे वसुदेव ! बुद्धिमान् व्यक्तिले यज्ञ र दानद्वारा धनको इच्छालाई, गृहस्थ धर्मद्वारा पत्नी र पुत्रको इच्छालाई, त्यसै गरी समयको प्रभावद्वारा सबै भोग नष्ट हुन्छन् भन्ने विचारले पुण्यलोकहरूको इच्छालाई समेत त्यागिदिनुपर्दछ। किनभने सबै धीर व्यक्तिहरू घर-गाउँमा रहँदा नै सबैथरी इच्छालाई नष्ट गरेर मात्र तपोवनमा जाने गर्दथे।

**विवरण–** यहाँ तीन प्रकारका एषणा वित्तैषणा, दारसुतैषणा र आत्मलोकैषणाको उल्लेख गरी तिनीहरूलाई त्याग्ने उपायको पनि उल्लेख गरिएको छ। एषणा वा इच्छाहरूलाई त्यागनका लागि

कर्महरूलाई साधनका रूपमा प्रस्तुत गरिएको छ। ती तीन प्रकारका इच्छामध्ये सम्पत्तिको इच्छाचाहिँ यज्ञ, दान आदिद्वारा सीमित एवं नियन्त्रित गर्नुपर्दछ। सन्तानको इच्छालाई विवाह, पुत्रोत्पादन आदिद्वारा पूरा गर्नुपर्दछ भने लोकहरूमा जाने इच्छालाई केही समयपछि यी नष्ट हुन्छन् भन्ने भावनाद्वारा नियन्त्रित गर्नुपर्दछ। यसरी तीनै इच्छाहरूलाई त्याग्न सकिन्छ भन्ने कुरा यहाँ बताउन खोजिएको छ।

**ऋणैस्त्रिभिर्द्विजो जातो देवर्षिपितॄणां प्रभो।**
**यज्ञाध्ययनपुत्रैस्तान्यनिस्तीर्य त्यजन् पतेत्॥ ३९॥**

**पदार्थ—**
**प्रभो** = हे प्रभु
**द्विजः** = ब्राह्मण, क्षत्रिय र वैश्य
**देवर्षिपितॄणां** = देवता, ऋषि र पितृहरूको
**त्रिभिः** = तीनथरी
**ऋणैः** = ऋणले सहित भएर
**जातः** = जन्मिएको हुन्छ
**यज्ञाध्ययनपुत्रैः** = यज्ञ, शास्त्रको अध्ययन र पुत्रजन्मद्वारा
**तानि** = ती ऋणलाई
**अनिस्तीर्य** = नतिरी
**त्यजन्** = कर्म त्याग्ने व्यक्ति
**पतेत्** = पतित हुन्छ

**वाक्यार्थ—** हे वसुदेव ! ब्राह्मण, क्षत्रिय र वैश्य यी द्विजहरूमा जन्मजात नै देवता, ऋषि र पितृहरूको तीनथरी ऋण रहेको हुन्छ। यज्ञ, शास्त्रको अध्ययन र पुत्रजन्मद्वारा यी तीन ऋणलाई चुक्ता नगरी कर्म त्याग्ने मानिस पतित हुन्छ।

**विवरण—** यस प्रसङ्गमा तीन प्रकारका ऋणहरू चुक्ता गरिसकेपछि मात्र इच्छाहरूको त्याग हुन सक्छ भनी बताइएको छ। यहाँ शास्त्रीय कर्महरूका अधिकारी भएका ब्राह्मण, क्षत्रिय र वैश्य यी तीन वर्णका मानिसहरूले जन्मिँदैमा तीन किसिमका ऋणहरू बोकेर आएका हुन्छन् भनिएको छ। जसरी मानिसले व्यवहार चलाउनका लागि पछि लिने ऋणहरू समयमा नै अनिवार्य चुकाउनुपर्दछ, यदि ऋण चुकाएन भने उसमाथि व्याजको भारी पनि बढ्दै जान्छ र केही धरौटी आदि भए त्यो जफत हुन्छ, त्यसै गरी जन्मिँदा मानिसले सूक्ष्म रूपमा विभिन्न किसिमका ऋणहरूलाई लिएर आएको हुन्छ, अनि जीवनभरिको समयमा त्यसलाई चुक्ता गरिसक्नुपर्दछ। ती ऋणहरू हुन्— देवऋण, ऋषिऋण र पितृऋण।

मानिसलाई देवताहरूले जे दिएका छन् त्यो प्राप्त भएबापत मानिसलाई लागेको ऋण देवऋण हो। प्रकृतिले सारा प्राणीहरूलाई यथायोग्य जीवन, भोजन, परिवेश आदि निःशुल्क दिएकी छिन्। मानिसले आफ्नो व्यवहारमा थोरै पानी, थोरै हावा अनि थोरै बिजुली पनि अरूलाई निःशुल्क दिनसकेको छैन, तर प्रकृतिबाट यो सबै निःशुल्क रूपमा मानिसलाई प्राप्त छ। नदीको पानी, सूर्यको प्रकाश अनि वायुमण्डलको हावा लिन कसैलाई कसैको रोकावट छैन। यसको अर्थ मानिसले यिनीहरूको मनपरी प्रयोग गर्न पाउँछ भन्ने चाहिँ होइन। यी सबैका अधिष्ठाता देवताहरूलाई प्रसन्न पारी भोग गर्दा मात्र त्यसले राम्रो फल दिन्छ। बाहिरी पदार्थहरूलाई मात्र नभई देवताहरूले हाम्रा इन्द्रियहरूलाई पनि शक्ति दिइरहेका हुन्छन्। मानिसले आफैँलाई ठुलो ठानी बिर्सनु अलग कुरा हो, तर इन्द्रियका अनुग्राहक देवताविना यसका इन्द्रियहरू बेकम्मा

हुन्छन्। हातका देवता इन्द्र, पाउका विष्णु, आँखाका सूर्य आदि गरी सम्पूर्ण देवताहरूलाई सम्झिने र प्रसन्न पार्ने जिम्मा पनि विवेकशील प्राणी भएकाले मानिसकै हो। शास्त्रविधि अनुसारका यज्ञ, दान, पूजा आदि गर्नाले देवताहरू प्रसन्न हुन्छन्, देवऋण चुकाउनु भनेको यही हो।

मानिसलाई राम्रो बाटो देखाई व्यवस्थित एवं सत्यनिष्ठ जीवन बिताउन सिकाउने क्रममा ऋषिहरूले अनेकौँ शास्त्रहरूको रचना गरेका छन्। यी शास्त्रका उपदेशहरू गाई–गोरु या पक्षीहरूका लागि होइन, मान्छेकै लागि बनाइएका हुन्। यदि मानिसले शास्त्रहरूले अध्ययन गरेन र पूर्खाहरूले युगौँयुगदेखि मानिसकै लागि भनेर संरक्षण गर्दै आएको ज्ञानपरम्पराको अपहेलना गऱ्यो भने यी शास्त्रहरू एवं ऋषिहरूको पनि अपहेलना हुन जान्छ, यसैलाई ऋषिऋण भन्दछन्। शास्त्रहरूको अध्ययन गरी जीवन त्यस अनुसार बिताउने अनि आगामी पिँढीमा पनि त्यो ज्ञानको आलोक फैलाउने कामले ऋषिऋण चुक्ता हुन्छ।

पितृऋण भनेको वंशपरम्पराप्रतिको उत्तरदायित्व हो। अहिलेसम्म क्रमशः चलिआएको वंशपरम्परालाई व्यक्तिले मोहवश या झन्झट मानेर अघि बढाएन भने त्यो परम्परा टुट्ने हुनाले त्यसो गर्दा पितृऋण लाग्दछ। पितृऋणलाई शास्त्रीय रीतिले असल सन्तानको उत्पादन गरेर चुकाउनुपर्दछ। यो संसारलाई सुन्दर बनाइराख्नु हरेक व्यक्तिको कर्तव्य हो, यसका लागि उसले कर्तव्यनिष्ठ सन्तति उत्पन्न गर्नुपर्दछ र त्यस्तो सन्ततिको हातमा संसारलाई छोडिदिनुपर्दछ। केवल सन्तान जन्माएर मात्र पितृऋणबाट छुट्कारा मिल्दैन, उनीहरूलाई उच्च जीवनपद्धतिको परिपालना गर्दै जीवनयापन गर्न सक्ने पारिवारिक एवं सामाजिक वातावरणको पनि सिर्जना गर्नुपर्छ। आफ्ना पुर्खाहरूले संरक्षित गर्दै आएको उच्च आदर्शलाई आफ्नो जीवनमा उतार्ने सन्तान जन्माएर मात्र पितृऋणबाट छुट्न सकिन्छ। कमाउन, खान र बच्चा जन्माउन मात्र लागिपर्ने नयाँ पिँढीले संसारलाई आदर्श जीवनपद्धतिको आधारमा चलाउँदैन, उल्टै अनादि परम्परालाई नै ध्वस्त पारिदिन्छ। त्यसैले त्यस्ता सन्तान जन्माउनु र नजन्माउनुमा शास्त्रीय दृष्टिले खासै केही अन्तर छैन। यसरी सत्कर्महरूको परिपालन, सत् शास्त्रको अध्ययन र असल सन्तानको उत्पादनद्वारा तीन किसिमका ऋणबाट मुक्त भएपछि मात्र व्यक्ति परम पुरुषार्थको अधिकारी हुन्छ।

**त्वं त्वद्य मुक्तो द्वाभ्यां वै ऋषिपित्रोर्महामते।**
**यज्ञैर्देवर्णमुन्मुच्य निर्ऋणोऽशरणो भव॥ ४०॥**

**पदार्थ–**
**महामते** = हे परमबुद्धिमान् वसुदेव
**अद्य** = आजसम्म
**वै** = निश्चय नै
**ऋषिपित्रोः** = ऋषि र पितृको
**द्वाभ्यां** = दुई ऋणबाट
**मुक्तः** = मुक्त भइसकेका
**त्वं तु** = तपाईंले
**यज्ञैः** = यज्ञहरूद्वारा
**देवर्णम्** = देवऋणलाई
**उन्मुच्य** = चुकाई
**निर्ऋणः** = ऋणरहित र
**अशरणः** = (शरणरहित) गृहत्यागी
**भव** = बन्नुहोस्

**वाक्यार्थ–** हे परमबुद्धिमान् वसुदेव! तपाईं आजसम्म ऋषिऋण र पितृऋणबाट मुक्त

भइसक्नुभएको छ। अब अनेक यज्ञहरूद्वारा देवऋणलाई पनि चुकाई तपाईं सबै ऋणबाट मुक्त भएर गृहत्यागी बन्नुहोस्।

**वसुदेव भवान् नूनं भक्त्या परमया हरिम्।**
**जगतामीश्वरं प्रार्चः स यद् वां पुत्रतां गतः॥ ४१॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **ईश्वरं** = नियन्ता | **यत्** = त्यसैले |
| **वसुदेव** = हे वसुदेव | **हरिम्** = हरि भगवान्लाई | **सः** = उहाँ |
| **भवान्** = तपाईंले | **परमया** = परम | **वां** = तपाईंहरूको |
| **नूनं** = निश्चय नै | **भक्त्या** = भक्तिद्वारा | **पुत्रतां** = पुत्र |
| **जगतां** = सम्पूर्ण संसारका | **प्रार्चः** = अर्चना गर्नुभएको थियो | **गतः** = बन्नुभएको छ |

**वाक्यार्थ–** हे वसुदेव ! तपाईंले सम्पूर्ण संसारका नियन्ता हरि भगवान्लाई पक्कै पनि परम भक्तिपूर्वक अर्चना गर्नुभएको थियो त्यसैले भगवान् तपाईंहरू दुईको पुत्र बन्नुभएको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति तद्वचनं श्रुत्वा वसुदेवो महामनाः।**
**तानृषीनृत्विजो वव्रे मूर्ध्नानम्य प्रसाद्य च॥ ४२॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **वसुदेवः** = वसुदेवले | **ऋषीन्** = ऋषिहरूलाई |
| **इति** = यसप्रकार | **मूर्ध्ना** = शिर झुकाई | **ऋत्विजः** = यज्ञको ऋत्विक्को रूपमा |
| **तद्वचनं** = ती ऋषिहरूको वचन | **आनम्य** = प्रणाम गरेर | **वव्रे** = वरण गर्नुभयो |
| **श्रुत्वा** = सुनेर | **प्रसाद्य च** = खुसी गराई | |
| **महामनाः** = उदारचित्त भएका | **तान्** = ती | |

**वाक्यार्थ–** उदारचित्त भएका वसुदेवले ऋषिहरूको वचन सुनेर शिर झुकाई प्रणाम गर्नुभयो र तिनीहरूलाई प्रसन्न गराई यज्ञको ऋत्विक्को रूपमा वरण गर्नुभयो।

**त एनमृषयो राजन् वृता धर्मेण धार्मिकम्।**
**तस्मिन्नयाजयन् क्षेत्रे मखैरुत्तमकल्पकैः॥ ४३॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **ऋषयः** = ऋषिहरूले | **उत्तमकल्पकैः** = उत्तम सामग्रीले सहित |
| **राजन्** = हे राजा परीक्षित् | **तस्मिन्** = त्यो | **मखैः** = यज्ञहरूद्वारा |
| **धर्मेण** = धर्मपूर्वक | **क्षेत्रे** = तीर्थक्षेत्रमा | **अयाजयन्** = यजन गराए |
| **वृताः** = वरण गरिएका | **धार्मिकम्** = धार्मिक | |
| **ते** = ती | **एनम्** = यी वसुदेवलाई | |

**वाक्यार्थ–** हे परीक्षित् ! धर्मपूर्वक वरण गरिएका ती ऋषिहरूले धर्मपरायण वसुदेवलाई त्यसै तीर्थक्षेत्रमा अनेक उत्तम सामग्रीहरूले युक्त श्रेष्ठ यज्ञहरूको अनुष्ठान गराए।

**तद्दीक्षायां प्रवृत्तायां वृष्णयः पुष्करस्रजः।**

**स्नाताः सुवाससो राजन् राजानः सुष्ठ्वलङ्कृताः॥ ४४॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**तद्दीक्षायां** = त्यो यज्ञको दीक्षाविधि
**प्रवृत्तायां** = सुरु भएपछि
**वृष्णयः** = वृष्णिहरू
**स्नाताः** = स्नान गरी
**सुवाससः** = सुन्दर वस्त्र पहिरी
**पुष्करस्रजः** = कमलका मालाले शोभित भए
**राजानः** = राजाहरू पनि
**सुष्ठु** = राम्ररी
**अलङ्कृताः** = सिँगारिए

**वाक्यार्थ–** हे परीक्षित् ! त्यस यज्ञको दीक्षाविधि सुरु भएपछि सारा वृष्णिहरूले स्नान गरी सुन्दर वस्त्र पहिरिए र कमलका मालाहरू धारण गरे। त्यसै गरी अन्य राजाहरू पनि राम्ररी सजिए।

**तन्महिष्यश्च मुदिता निष्ककण्ठ्यः सुवाससः।**

**दीक्षाशालामुपाजग्मुरालिप्ता वस्तुपाणयः॥ ४५॥**

**पदार्थ–**
**निष्ककण्ठ्यः** = सुवर्णमय हार पहिरिएका
**सुवाससः** = सुन्दर वस्त्र धारण गरेका
**आलिप्ताः** = (शरीरमा चन्दन आदिको अङ्गराग) लेपन गरेका
**मुदिताः** = अत्यन्त प्रसन्न
**तन्महिष्यः च** = ती वृष्णिवंशी स्त्रीहरूले पनि
**वस्तुपाणयः** = माङ्गलिक सामग्रीहरू हातमा लिई
**दीक्षाशालां** = दीक्षाशालामा
**उपाजग्मुः** = (आइपुगे) प्रवेश गरे

**वाक्यार्थ–** वृष्णिवंशी स्त्रीहरूले पनि सुन्दर वस्त्र र सुवर्णमय हार पहिरिएका थिए भने अङ्ग-अङ्गमा चन्दनलेप लगाएका थिए। हातमा माङ्गलिक सामग्रीहरू लिँदै अत्यन्त प्रसन्न भएका तिनीहरू दीक्षाशालाभित्र प्रवेश गरे।

**नेदुर्मृदङ्गपटहशङ्खभेर्यानकादयः।**

**ननृतुर्नटनर्तक्यस्तुष्टुवुः सूतमागधाः॥**

**जगुः सुकण्ठ्यो गन्धर्व्यः सङ्गीतं सहभर्तृकाः॥ ४६॥**

**पदार्थ–**
**मृदङ्गपटहशङ्खभेर्यानकादयः** = मृदङ्ग, पटह, शङ्ख, भेरी र आनकजस्ता बाजाहरू
**नेदुः** = बज्न थाले
**नटनर्तक्यः** = नट र नर्तकीहरू
**ननृतुः** = नाच्न थाले
**सूतमागधाः** = सूत, मागध आदि
**तुष्टुवुः** = स्तुति गर्न थाले
**सहभर्तृकाः** = पतिले सहित भएका
**सुकण्ठ्यः** = मिठो स्वर भएका

| | | |
|---|---|---|
| **गन्धर्व्यः** = गन्धर्वपत्नीहरूले | **सङ्गीतं** = मिठो गीत | **जगुः** = गाउन थाले |

**वाक्यार्थ–** त्यो समयमा मृदङ्ग, पटह, शङ्ख, भेरी र आनक जस्ता बाजाहरू बज्न थाले, नट र नर्तकीहरू नाच्न थाले, सूत र मागध आदिले स्तुति गर्न थाले भने आ–आफ्ना पतिले सहित भएका मिठो स्वर भएका गन्धर्वपत्नीहरूले गाउन थाले।

**तमभ्यषिञ्चन् विधिवदक्तमभ्यक्तमृत्विजः।**
**पत्नीभिरष्टादशभिः सोमराजमिवोडुभिः॥ ४७॥**

| | | |
|---|---|---|
| पदार्थ– | **अष्टादशभिः** = अठार | दलेका |
| **ऋत्विजः** = ऋत्विक्हरूले | **पत्नीभिः** = पत्नीहरूले सहित | **तं** = ती वसुदेवलाई |
| **उडुभिः** = ताराहरूले सहित | **अक्तम्** = गाजल लगाएका | **विधिवत्** = विधिपूर्वक |
| **सोमराजम् इव** = चन्द्रमालाई झैँ | **अभ्यक्तम्** = सबै अङ्गमा नौनी | **अभ्यषिञ्चन्** = अभिषेक गरे |

**वाक्यार्थ–** ती ऋत्विक्हरूले आँखामा गाजल लगाएका र सबै अङ्गमा नौनी दलेका अठार पत्नीहरूले सहित वसुदेवलाई महाभिषेकको विधिद्वारा अभिषेक गरे, जसरी पहिले ताराहरूसहित चन्द्रमाको अभिषेक भएको थियो।

**ताभिर्दुकूलवलयैर्हारनूपुरकुण्डलैः।**
**स्वलङ्कृताभिर्विबभौ दीक्षितोऽजिनसंवृतः॥ ४८॥**

| | | |
|---|---|---|
| पदार्थ– | **दुकूलवलयैः** = सुन्दर साडी र | **स्वलङ्कृताभिः** = राम्ररी सजिएका |
| **दीक्षितः** = दीक्षित भएकाले | बालाहरूद्वारा | **ताभिः** = ती पत्नीहरूको बिचमा |
| **अजिनसंवृतः** = मृगचर्म धारण | **हारनूपुरकुण्डलैः** = बहुमूल्य हार, | **विबभौ** = सुशोभित हुनुभयो |
| गरेका वसुदेव | पाउजु र कुण्डलहरूद्वारा | |

**वाक्यार्थ–** यज्ञविधिमा दीक्षित भएका वसुदेवले मृगचर्म धारण गर्नुभएको थियो भने उहाँका पत्नीहरू चाहिँ सुन्दर साडी, बाला, बहुमूल्य हार, पाउजु, कर्णकुण्डल आदि आभूषणद्वारा राम्ररी सजिएका थिए। यसबाट वसुदेव अत्यन्त सुशोभित देखिनुभयो।

**तस्यर्त्विजो महाराज रत्नकौशेयवाससः।**
**ससदस्या विरेजुस्ते यथा वृत्रहणोऽध्वरे॥ ४९॥**

| | | |
|---|---|---|
| पदार्थ– | **ससदस्याः** = सदस्यहरूले सहित | **विरेजुः** = सुशोभित भए |
| **महाराज** = हे राजा परीक्षित् | **तस्य** = ती वसुदेवका | **यथा** = जसरी |
| **रत्नकौशेयवाससः** = रत्न र | **ते** = ती | **वृत्रहणः** = इन्द्रको |
| रेशमी वस्त्र लगाएका | **ऋत्विजः** = ऋत्विक्हरू | **अध्वरे** = यज्ञमा (भएका थिए) |

**वाक्यार्थ–** हे परीक्षित् ! वसुदेवका यज्ञका सबै ऋत्विक् र सदस्यहरूले अनेक रत्न र रेशमी वस्त्रहरू धारण गरेका थिए। यसबाट तिनीहरू इन्द्रको यज्ञमा वरण भएका ब्राह्मणहरू झैं सुशोभित भए।

**तदा रामश्च कृष्णश्च स्वैः स्वैर्बन्धुभिरन्वितौ ।**
**रेजतुः स्वसुतैर्दारैर्जीवेशौ स्वविभूतिभिः ॥ ५० ॥**

**पदार्थ–**
**तदा** = त्यस समयमा
**स्वैः स्वैः** = आ-आफ्ना
**बन्धुभिः** = बान्धवहरूद्वारा
**अन्वितौ** = युक्त भएका
**जीवेशौ** = जीवहरूका ईश्वर
**रामः च** = बलराम र
**कृष्णः च** = श्रीकृष्णसमेत
**स्वविभूतिभिः** = आफ्ना ऐश्वर्य
**स्वसुतैः** = आफ्ना पुत्र तथा
**दारैः** = आफ्ना पत्नीहरूसँगै
**रेजतुः** = सुशोभित हुनुभयो

**वाक्यार्थ–** त्यस समयमा सबै जीवहरूका ईश्वर भगवान् श्रीकृष्ण र बलराम आ-आफ्ना बन्धुबान्धव, पुत्र, ऐश्वर्य तथा पत्नीहरूद्वारा युक्त हुँदा झनै सुशोभित हुनुभयो।

**ईजेऽनुयज्ञं विधिना अग्निहोत्रादिलक्षणैः ।**
**प्राकृतैर्वैकृतैर्यज्ञैर्द्रव्यज्ञानक्रियेश्वरम् ॥ ५१ ॥**

**पदार्थ–**
**अनुयज्ञं** = हरेक यज्ञपिच्छे
**अग्निहोत्रादिलक्षणैः** = अग्निहोत्र आदि
**प्राकृतैः** = प्राकृत
**वैकृतैः** = वैकृत
**यज्ञैः** = यज्ञहरूद्वारा
**द्रव्यज्ञानक्रियेश्वरं** = यज्ञीय द्रव्य, त्यसका मन्त्र र क्रियाविधि सबैका स्वामी भगवान्लाई
**विधिना** = विधिपूर्वक
**ईजे** = पूजा गर्नुभयो

**वाक्यार्थ–** वसुदेवले हरेक यज्ञपिच्छे अग्निहोत्र आदि प्राकृत, वैकृत यज्ञविधिद्वारा यज्ञीय द्रव्य, त्यसमा प्रयोग हुने द्रव्य, यज्ञीय क्रियाका पनि एक मात्र स्वामी भगवान् श्रीकृष्णलाई विधिपूर्वक पूजा गर्नुभयो।

**अथर्त्विग्भ्योऽददात् काले यथाम्नातं स दक्षिणाः ।**
**स्वलङ्कृतेभ्योऽलङ्कृत्य गोभूकन्या महाधनाः ॥ ५२ ॥**

**पदार्थ–**
**अथ** = यसपछि
**सः** = ती वसुदेवले
**स्वलङ्कृतेभ्यः** = राम्ररी सजिएका
**ऋत्विग्भ्यः** = ब्राह्मणहरूलाई
**काले** = उचित समयमा
**महाधनाः** = बहुमूल्य
**गोभूकन्याः** = गाई, जमिन र कन्याहरू समेत
**अलङ्कृत्य** = सजाएर
**यथाम्नातं** = विधिले बताए अनुसार
**दक्षिणाः** = दक्षिणाहरू
**अददात्** = दिनुभयो

**वाक्यार्थ–** यसपछि उचित समयमा वसुदेवले ती राम्ररी सजिएका ब्राह्मणहरूलाई बहुमूल्य गाई, जमिन र कन्याहरूलाई सजाएर विधिपूर्वक दक्षिणाको रूपमा दिनुभयो।

**पत्नीसंयाजावभृथ्यैश्चरित्वा ते महर्षयः।**

**सस्नू रामह्रदे विप्रा यजमानपुरःसराः॥ ५३॥**

**पदार्थ–**
**पत्नीसंयाजावभृथ्यैः** = पत्नी-संयाज र अवभृथ स्नान सम्बन्धी कर्म
**चरित्वा** = गरेर
**ते** = ती
**यजमानपुरःसराः** = यजमानलाई अघि लगाई
**महर्षयः** = महर्षि
**विप्राः** = ब्राह्मणहरूले
**रामह्रदे** = परशुरामद्वारा निर्मित पोखरीमा
**सस्नुः** = स्नान गरे

**वाक्यार्थ–** यसपछि ती महर्षि ब्राह्मणहरूले ती यजमान वसुदेवलाई पत्नीसंयाज र अवभृथ स्नान सम्बन्धी अवशिष्ट कर्म पनि सम्पन्न गराए अनि उहाँलाई अघि लगाई आफूहरूले पनि परशुरामद्वारा निर्मित पोखरीमा स्नान गरे।

**स्नातोऽलङ्कारवासांसि वन्दिभ्योऽदात् तथा स्त्रियः।**

**ततः स्वलङ्कृतो वर्णानाश्वभ्योऽन्नेन पूजयत्॥ ५४॥**

**पदार्थ–**
**स्नातः** = अवभृथ स्नान सकी वसुदेवले
**वन्दिभ्यः** = वन्दना गर्नेहरूलाई
**अलङ्कारवासांसि** = गहना र वस्त्रहरू
**अदात्** = दिनुभयो
**तथा** = त्यसै गरी
**स्त्रियः** = उहाँका पत्नीहरूले (पनि दान गरे)
**ततः** = त्यसपछि
**स्वलङ्कृतः** = राम्ररी सजिई उहाँले
**आश्वभ्यः** = कुकुरदेखि
**वर्णान्** = ब्राह्मणसम्मका वर्णहरूलाई
**अन्नेन** = भोजनद्वारा
**पूजयत्** = खुसी गराउनुभयो

**वाक्यार्थ–** वसुदेव तथा उहाँका पत्नीहरूले अवभृथ स्नान सकी वन्दना गर्नेहरूलाई गहना र वस्त्रहरू दान गर्नुभयो। यसपछि वस्त्रपरिधान आदिद्वारा राम्ररी सजिई उहाँले कुकुरदेखि ब्राह्मणसम्मका सबै प्राणीहरूलाई अन्नभोजन गराई खुसी गराउनुभयो।

**बन्धून् सदारान् ससुतान् पारिबर्हेण भूयसा।**

**विदर्भकोशलकुरून् काशिकेकयसृञ्जयान्॥ ५५॥**

**सदस्यर्त्विक्सुरगणान् नृभूतपितृचारणान्।**

**श्रीनिकेतमनुज्ञाप्य शंसन्तः प्रययुः क्रतुम्॥ ५६॥**

**पदार्थ–**
**भूयसा** = धेरै
**पारिबर्हेण** = उपहार सामग्रीद्वारा
**सदारान्** = पत्नीसहित
**ससुतान्** = पुत्रले सहित
**बन्धून्** = बन्धुहरूलाई
**विदर्भकोशलकुरून्** = विदर्भ, कोशल र कुरुदेशका राजाहरूलाई

**काशिकेकयसृञ्जयान्** = काशी, केकय र सृञ्जय देशका राजाहरूलाई
**सदस्यर्त्विक्सुरगणान्** = सदस्य, ऋत्विक् र देवताहरूलाई
**नृभूतपितृचारणान्** = मनुष्य, भूत, पितृ र चारणहरूलाई सत्कार गरे (त्यसपछि)
**श्रीनिकेतं** = लक्ष्मीपति भगवान्सँग
**अनुज्ञाप्य** = आज्ञा लिई
**क्रतुं** = यज्ञलाई
**शंसन्तः** = प्रशंसा गर्दै
**प्रययुः** = ती सबै गए

**वाक्यार्थ–** वसुदेवले धैरैथरी उपहारसामग्रीद्वारा पत्नी र पुत्रले सहित आफ्ना सबै बन्धुहरूलाई सत्कार गर्नुभयो। यसै गरी उहाँले विदर्भ, कोशल, कुरु, काशी, केकय, सृञ्जय आदि देशका राजाहरूलाई, यज्ञमा वरण गरिएका ऋत्विक्, सदस्य र देवताहरूलाई अनि मनुष्य, भूत, पितृ र चारणहरूलाई समेत उपहारद्वारा सन्तुष्ट गर्नुभयो। यसपछि यी सबै लक्ष्मीपति भगवान्सँग आज्ञा लिई यज्ञको प्रशंसा गर्दै आफ्नो स्थानतिर फर्किए।

**धृतराष्ट्रोऽनुजः पार्था भीष्मो द्रोणः पृथा यमौ।**
**नारदो भगवान् व्यासः सुहृत्सम्बन्धिबान्धवाः॥ ५७॥**
**बन्धून् परिष्वज्य यदून् सौहृदात् क्लिन्नचेतसः।**
**ययुर्विरहकृच्छ्रेण स्वदेशांश्चापरे जनाः॥ ५८॥**

**पदार्थ–**
**सौहृदात्** = प्रेमका कारण
**क्लिन्नचेतसः** = आर्द्र हृदय भएका
**धृतराष्ट्रः** = धृतराष्ट्र
**अनुजः** = भाइ विदुर
**पार्थाः** = कुन्तीपुत्र युधिष्ठिर, भीम र अर्जुन
**भीष्मः** = भीष्म
**द्रोणः** = द्रोणाचार्य
**पृथा** = कुन्ती
**यमौ** = जुम्ल्याहा नकुल र सहदेव
**नारदः** = देवर्षि नारद
**भगवान् व्यासः** = भगवान् व्यास
**अपरे** = अरू
**सुहृत्सम्बन्धिबान्धवाः** = हितैषी र सम्बन्धित बन्धुबान्धव
**जनाः च** = व्यक्तिहरूले
**बन्धून्** = आफ्ना बन्धु
**यदून्** = यदुवंशीहरूलाई
**परिष्वज्य** = अङ्कमाल गरी
**विरहकृच्छ्रेण** = विरहव्यथा युक्त भई
**स्वदेशान्** = आफ्नो देशमा
**ययुः** = गए

**वाक्यार्थ–** धृतराष्ट्र, विदुर, युधिष्ठिर, भीम, अर्जुन, भीष्मपितामह, द्रोणाचार्य, कुन्ती, नकुल, सहदेव, नारद, भगवान् व्यास र अन्य हितैषी सम्बन्धी बान्धवहरूले आफ्ना बन्धु यादवहरूसँग स्नेहार्द्र चित्तले अङ्कमाल गरे र आपसमा छुट्टिनुपर्दा विरहव्यथा युक्त भई ती आ–आफ्ना देशतिर लागे।

**नन्दस्तु सह गोपालैर्बृहत्या पूजयार्चितः।**
**कृष्णरामोग्रसेनाद्यैर्न्यवात्सीद् बन्धुवत्सलः॥ ५९॥**

**पदार्थ–**
**कृष्णरामोग्रसेनाद्यैः** = श्रीकृष्ण, बलराम र उग्रसेन आदिद्वारा

**बृहत्या** = (ठुलो) विशेषरूपको
**पूजया** = सेवाद्वारा
**अर्चितः** = सत्कार गरिएका
**बन्धुवत्सलः** = बन्धुहरूलाई प्रेम गर्ने
**नन्दः तु** = नन्द चाहिँ
**गोपालैः सह** = गोपहरूसँग
**न्यवात्सीत्** = त्यहीँ बसे

**वाक्यार्थ–** श्रीकृष्ण, बलराम र उग्रसेन आदि यदुहरूले नन्दलाई विशेष सामग्रीहरूद्वारा सत्कार गरे। आफ्ना बन्धुहरूलाई प्रेम गर्ने नन्द पनि केही समय गोपहरूसँग त्यहीँ बसे।

**वसुदेवोऽञ्जसोत्तीर्य मनोरथमहार्णवम्।**
**सुहृद्वृतः प्रीतमना नन्दमाह करे स्पृशन्॥ ६०॥**

**पदार्थ–**
**मनोरथमहार्णवं** = मनोरथरूपी महासागरलाई
**अञ्जसा** = सजिलैसँग
**उत्तीर्य** = तरी
**प्रीतमनाः** = प्रसन्न मन भएका
**सुहृद्वृतः** = बन्धुबान्धवले सहित
**वसुदेवः** = वसुदेवले
**नन्दं** = नन्दलाई
**करे** = हातमा
**स्पृशन्** = समाती
**आह** = यसो भन्नुभयो

**वाक्यार्थ–** वसुदेवले पनि आफ्नो ठुलो मनोरथरूपी महासागरलाई सजिलै पार गर्नुभयो। यसबाट अत्यन्त प्रसन्न भएका र सबै बन्धुबान्धवले सहित उहाँले नन्दको हात समातेर यसो भन्नुभयो।

**वसुदेव उवाच** (वसुदेवले भन्नुभयो)

**भ्रातरीशकृतः पाशो नृणां यः स्नेहसंज्ञितः।**
**तं दुस्त्यजमहं मन्ये शूराणामपि योगिनाम्॥ ६१॥**

**पदार्थ–**
**भ्रातः** = हे भाइ नन्द
**नृणां** = मनुष्यहरूका लागि
**यः** = जुन
**स्नेहसंज्ञितः** = स्नेह नामको
**ईशकृतः** = ईश्वरद्वारा रचित
**पाशः** = पाशो छ
**तं** = त्यसलाई
**अहं** = म
**शूराणां** = ठुला ठुला
**योगिनां अपि** = योगीहरूका लागि पनि
**दुस्त्यजं** = त्याग्न नसकिने
**मन्ये** = ठान्दछु

**वाक्यार्थ–** हे नन्द ! ईश्वरले मनुष्यहरूलाई बाँध्नका लागि स्नेह नामको पाशो बनाउनुभएको छ। त्यसलाई त्याग्न त ठुला शूरवीर योगीहरू पनि सक्दैनन् भन्ने म ठान्दछु।

**अस्मास्वप्रतिकल्पेयं यत् कृताज्ञेषु सत्तमैः।**
**मैत्र्यर्पिताफला वापि न निवर्तेत कर्हिचित्॥ ६२॥**

**पदार्थ–**
**कृताज्ञेषु** = अकृतज्ञ
**अस्मासु** = हामीहरूमा
**सत्तमैः** = सत्पुरुषहरूमध्ये श्रेष्ठ हजुरद्वारा
**अप्रतिकल्पा** = अनुपम
**इयं** = यो
**मैत्री** = मित्रता
**अर्पिता** = प्रदान गरिएको छ

**अफला वा अपि** = प्रत्युपकार-शून्य भएर पनि
**यत्** = यो मित्रताबाट (सद्भाववश)
**कर्हिचित्** = कहिल्यै पनि
**न निवर्तेत** = (हजुर) हट्नुहुन्न

**वाक्यार्थ–** हामी अकृतज्ञ भए पनि सत्पुरुषहरूमध्ये श्रेष्ठ हजुरले हामीलाई अनुपम मित्रता प्रदान गर्नुभएको छ। हामी कुनै पनि प्रत्युपकारले यसको फल दिन सक्दैनौँ, तर पनि हजुरले केवल सद्भाववश यसलाई वहन गरिरहनुभएको छ।

**प्रागकल्पाच्च कुशलं भ्रातर्वो नाचराम हि।**

**अधुना श्रीमदान्धाक्षा न पश्यामः पुरः सतः॥ ६३॥**

**पदार्थ–**
**भ्रातः** = हे भाइ नन्द
**हि** = निश्चय नै
**प्राक्** = पहिले (कारागारमा बन्द भएका वेला हामीले)
**अकल्पात् च** = सामर्थ्य नहुनाले
**वः** = हजुरहरूको
**कुशलं** = प्रिय
**न आचरामः** = गर्न सकेनौँ
**अधुना** = अहिले चाहिँ
**श्रीमदान्धाक्षाः** = सम्पत्तिको मदले अन्धो भएका कारण
**पुरः** = आफ्नै अघि
**सतः** = रहनुभएका हजुरलाई
**न पश्यामः** = देखेका छैनौँ

**वाक्यार्थ–** हे नन्द ! पहिले कारागारमा बन्द भएका वेला सामर्थ्य नभएकाले हामीले हजुरको केही प्रिय गर्न सकेनौँ, अहिले चाहिँ सम्पत्तिको मदले अन्धो भएकाले हामीले आफ्नै अगाडि रहेका हजुरलाई पनि राम्ररी देख्न सकेका छैनौँ।

**मा राज्यश्रीरभूत् पुंसः श्रेयस्कामस्य मानद।**

**स्वजनानुत बन्धून् वा न पश्यति ययान्धदृक्॥ ६४॥**

**पदार्थ–**
**मानद** = हे सबैलाई सम्मान गर्ने नन्द
**श्रेयस्कामस्य** = कल्याण चाहने
**पुंसः** = व्यक्तिका लागि
**राज्यश्रीः** = राज्यलक्ष्मीको प्राप्ति
**मा अभूत्** = कहिल्यै नहोस्
**यया** = जसद्वारा
**अन्धदृक्** = अन्धो भएको उसले
**स्वजनान्** = आफन्तहरूलाई
**उत** = अरू
**बन्धून् वा** = बन्धुहरूलाई समेत
**न पश्यति** = देख्दैन

**वाक्यार्थ–** हे सबैलाई सम्मान गर्ने नन्द ! कल्याण चाहने व्यक्तिलाई कहिल्यै पनि राज्यलक्ष्मीको प्राप्ति नहोस्, किनभने यसद्वारा अन्धो भएको व्यक्तिले आफ्ना स्वजन या बन्धुबान्धव कसैलाई पनि देख्दैन।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं सौहृदशैथिल्यचित्त आनकदुन्दुभिः।**

**रुरोद तत्कृतां मैत्रीं स्मरन्नश्रुविलोचनः॥ ६५॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**सौहृदशैथिल्यचित्तः** = प्रेमद्वारा

हृदय पग्लिएका
**अश्रुविलोचनः** = आँखाभरि आँसु भएका
**आनकदुन्दुभिः** = वसुदेवले
**तत्कृतां** = ती नन्दले गरेको
**मैत्रीं** = मित्रताको व्यवहारलाई
**स्मरन्** = सम्झिँदै
**रुरोद** = रुनुभयो

**वाक्यार्थ–** यसप्रकार नन्दसँग कुरा गर्दागर्दै वसुदेवको हृदय प्रेमद्वारा पग्लियो। उहाँले नन्दले गरेको मित्रताको व्यवहारलाई सम्झिँदै आँखाभरि आँसु पारेर रुन थाल्नुभयो।

**नन्दस्तु सख्युः प्रियकृत् प्रेम्णा गोविन्दरामयोः।**
**अद्य श्व इति मासांस्त्रीन् यदुभिर्मानितोऽवसत्॥ ६६॥**

**पदार्थ–**
**यदुभिः** = यदुहरूद्वारा
**मानितः** = सम्मानित भएका
**सख्युः** = साथी वसुदेवको
**प्रियकृत्** = प्रिय गर्ने
**नन्दः तु** = नन्द चाहिँ
**गोविन्दरामयोः** = श्रीकृष्ण र बलरामको
**प्रेम्णा** = प्रेमका कारण
**अद्य श्वः इति** = आज भोलि गर्दै
**त्रीन्** = तीन
**मासान्** = महिनासम्म
**अवसत्** = त्यहीँ बसे

**वाक्यार्थ–** आफ्ना साथी वसुदेवलाई प्रसन्न गर्नका लागि एवं श्रीकृष्ण र बलरामप्रतिको प्रेमका कारण पनि यदुवंशीहरूद्वारा सम्मानित नन्द आज-भोलि गर्दागर्दै तीन महिनासम्म त्यहीँ बसे।

**ततः कामैः पूर्यमाणः सव्रजः सहबान्धवः।**
**परार्ध्याभरणक्षौमनानानर्घ्यपरिच्छदैः॥ ६७॥**
**वसुदेवोग्रसेनाभ्यां कृष्णोद्धवबलादिभिः।**
**दत्तमादाय पारिबर्हं यापितो यदुभिर्ययौ॥ ६८॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**वसुदेवोग्रसेनाभ्यां** = वसुदेव र उग्रसेनद्वारा
**कृष्णोद्धवबलादिभिः** = श्रीकृष्ण, बलराम र उद्धवद्वारा पनि
**परार्ध्याभरणक्षौमनानानर्घ्य-परिच्छदैः** = अमूल्य आभूषण, रेशमी वस्त्र र अनेक प्रकारका उत्तम सामग्रीहरूद्वारा
**कामैः** = अनेक भोगहरूद्वारा
**पूर्यमाणः** = तृप्त गरिएका
**सव्रजः** = व्रजवासीहरू र
**सहबान्धवः** = बन्धुहरूले सहित नन्द
**दत्तं** = दिइएको
**पारिबर्हं** = उपहारसामग्रीलाई
**आदाय** = लिएर
**यदुभिः** = यदुहरूद्वारा
**यापितः** = बिदा गरिएपछि
**ययौ** = (घरतिर) गए

**वाक्यार्थ–** यसपछि वसुदेव, उग्रसेन, श्रीकृष्ण, बलराम र उद्धव आदिले अमूल्य आभूषण, रेशमी वस्त्र र अनेक प्रकारका उत्तम सामग्रीहरू एवं अनेक भोगहरूद्वारा नन्दलाई तृप्त गरे। सारा व्रजवासी एवं बन्धुहरूले सहित भएका नन्द उनीहरूद्वारा दिइएको उपहारसामग्री लिई बिदा भएर घरतिर लागे।

**नन्दो गोपाश्च गोप्यश्च गोविन्दचरणाम्बुजे।**

**मनः क्षिप्तं पुनर्हर्तुमनीशा मथुरां ययुः॥ ६९॥**

**पदार्थ—**
**गोविन्दचरणाम्बुजे** = श्रीकृष्ण भगवान्‌को चरणकमलमा
**क्षिप्तं** = दिइएको
**मनः** = मनलाई
**पुनः** = फेरि
**हर्तुम्** = (त्यहाँबाट) हटाउन
**अनीशाः** = नसकेका
**नन्दः** = नन्द
**गोपाः च** = गोपहरू र
**गोप्यः च** = गोपिनीहरूसमेत
**मथुरां** = मथुरातिर
**ययुः** = गए

**वाक्यार्थ—** नन्द, गोपहरू र गोपिनीहरूको चित्त भगवान् श्रीकृष्णको चरणकमलमा लागिसकेको थियो। आफ्नो मनलाई त्यहाँबाट हटाउनै नसकी तिनीहरू मथुरातिर गए।

**बन्धुषु प्रतियातेषु वृष्णयः कृष्णदेवताः।**

**वीक्ष्य प्रावृषमासन्नां ययुर्द्वारवतीं पुनः॥ ७०॥**

**पदार्थ—**
**कृष्णदेवताः** = श्रीकृष्ण नै देवता भएका
**वृष्णयः** = यदुवंशीहरू
**बन्धुषु** = आफ्ना बन्धु
**प्रतियातेषु** = बिदा भइसकेपछि
**प्रावृषं** = वर्षाऋतुलाई
**आसन्नां** = नजिकै आउन लागेको
**वीक्ष्य** = जानेर
**पुनः** = फेरि
**द्वारवतीं** = द्वारकामा
**ययुः** = गए

**वाक्यार्थ—** यदुवंशीहरूका एक मात्र देवता भगवान् श्रीकृष्ण नै हुनुहुन्थ्यो। आफ्ना बन्धुहरू घरतिर फर्किएपछि उनीहरू पनि वर्षा ऋतु नजिकिएको ठानेर द्वारकामा फर्किए।

**जनेभ्यः कथयाञ्चक्रुर्यदुदेवमहोत्सवम्।**

**यदासीत् तीर्थयात्रायां सुहृत्सन्दर्शनादिकम्॥ ७१॥**

**पदार्थ—**
**यदुदेवमहोत्सवं** = यदुदेव वसुदेवको यज्ञमहोत्सव र
**तीर्थयात्रायां** = तीर्थयात्रामा
**यत्** = जुन
**सुहृत्सन्दर्शनादिकं** = बन्धु-बान्धवहरूसँग भेटघाट
**आसीत्** = भएको थियो (त्यो सबै)
**जनेभ्यः** = द्वारकावासीहरूलाई
**कथयाञ्चक्रुः** = बताए

**वाक्यार्थ—** उनीहरूले फर्किएर द्वारकावासीहरूलाई वसुदेवको यज्ञमहोत्सव अनि तीर्थयात्रामा आफ्ना बन्धुबान्धवहरूसँग भएको भेटघाटको विषयमा पनि बताए।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**

**तीर्थयात्रानुवर्णनं नाम चतुरशीतितमोऽध्यायः॥ ८४॥**

# अथ पञ्चाशीतितमोऽध्यायः

## भगवान् श्रीकृष्णले आफ्ना मरेका छ जना दाजुहरूलाई फर्काएर ल्याउनु

**श्रीबादरायणिरुवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथैकदात्मजौ प्राप्तौ कृतपादाभिवन्दनौ ।**

**वसुदेवोऽभिनन्द्याह प्रीत्या सङ्कर्षणाच्युतौ ॥ १ ॥**

**पदार्थ—**
**अथ** = त्यसपछि
**एकदा** = एक दिन
**प्राप्तौ** = नजिक आएका
**कृतपादाभिवन्दनौ** = चरणमा वन्दना गरेका
**आत्मजौ** = आफ्ना दुई पुत्र
**सङ्कर्षणाच्युतौ** = बलराम र श्रीकृष्णलाई
**प्रीत्या** = प्रीतिपूर्वक
**अभिनन्द्य** = अभिनन्दन गरी
**वसुदेवः** = वसुदेवले
**आह** = भन्नुभयो

**वाक्यार्थ—** एक दिन नजिकमा आएर आफ्नो चरणमा वन्दना गरेका प्यारा छोरा बलराम र श्रीकृष्णलाई प्रेमपूर्वक अभिनन्दन गरी वसुदेवले भन्नुभयो।

**मुनीनां स वचः श्रुत्वा पुत्रयोर्धामसूचकम् ।**

**तद्वीर्यैर्जातविश्रम्भः परिभाष्याभ्यभाषत ॥ २ ॥**

**पदार्थ—**
**सः** = ती वसुदेवले
**पुत्रयोः** = आफ्ना दुबै छोराको
**धामसूचकं** = महिमालाई सूचित गर्ने
**मुनीनां** = ऋषिहरूको
**वचः** = वचनलाई
**श्रुत्वा** = सुनेर
**तद्वीर्यैः** = तिनका पराक्रमहरूद्वारा
**जातविश्रम्भः** = विश्वस्त समेत भएर
**परिभाष्य** = प्रेमपूर्वक सम्बोधन गरी
**अभ्यभाषत** = यसो भन्नुभयो

**वाक्यार्थ—** वसुदेवले ऋषिहरूको मुखबाट आफ्ना दुबै छोराहरूको महिमाको सम्बन्धमा सुनेपछि ती दुईका अहिलेसम्मका पराक्रमहरूलाई समेत विचार गरी उहाँको मनमा यी भगवान् हुन् भन्ने दृढ विश्वास उत्पन्न भयो। त्यसैले उहाँले दुबैलाई प्रेमपूर्वक सम्बोधन गरी यसो भन्नुभयो।

**कृष्ण कृष्ण महायोगिन् सङ्कर्षण सनातन ।**

**जाने वामस्य यत् साक्षात् प्रधानपुरुषौ परौ ॥ ३ ॥**

**पदार्थ—**
**महायोगिन्** = महायोगी
**कृष्ण कृष्ण** = हे कृष्ण
**सनातन** = नित्य
**सङ्कर्षण** = हे बलराम
**अस्य** = यो संसारको

| | | |
|---|---|---|
| **यत्** = जुन | रहेका छन् | **वां** = हजुर दुईलाई नै |
| **साक्षात्** = वास्तविक कारण | **परौ** = त्यो भन्दा पनि पर रहेका | **जाने** = ठान्दछु |
| **प्रधानपुरुषौ** = प्रकृति र पुरुष | ईश्वररूप | |

**वाक्यार्थ–** हे महायोगी श्रीकृण ! हे सनातन बलराम ! यो संसारको वास्तविक कारणका रूपमा रहेका प्रकृति र पुरुषभन्दा पनि पर रहनुहुने ईश्वरका रूपमा म हजुर दुईलाई नै ठान्दछु।

**यत्र येन यतो यस्य यस्मै यद् यद् यथा यदा।**
**स्यादिदं भगवान् साक्षात् प्रधानपुरुषेश्वरः॥ ४॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **यथा** = जसरी | **प्रधानपुरुषेश्वरः** = प्रकृति, पुरुष |
| **यत्र** = जहाँ | **यदा** = जहिले | त्यो भन्दा पर ईश्वररूप |
| **येन** = जसद्वारा | **यत् यत्** = जुन जुन वस्तु | **भगवान्** = भगवान् हजुर नै |
| **यतः** = जहाँबाट | **स्यात्** = उत्पन्न भएको छ | हुनुहुन्छ |
| **यस्य** = जसको सम्बन्धले | **इदं** = यो सबै | |
| **यस्मै** = जसका लागि | **साक्षात्** = साक्षात् | |

**वाक्यार्थ–** यो संसारमा जहाँ जसद्वारा, जहाँबाट, जसको सम्बन्धले, जसका लागि, जसरी, जहिले जुन जुन वस्तु उत्पन्न भएका छन् ती सबैको कारणरूप प्रकृति, पुरुष र ती दुबैभन्दा पर रहेका साक्षात् ईश्वर पनि हजुर नै हुनुहुन्छ।

**एतन्नानाविधं विश्वमात्मसृष्टमधोक्षज।**
**आत्मनानुप्रविश्यात्मन् प्राणो जीवो बिभर्ष्यजः॥ ५॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **एतत्** = यो | **अजः** = अजन्मा हजुरले नै |
| **अधोक्षज** = हे इन्द्रियले नेभट्ने | **नानाविधं** = अनेक प्रकारको | **प्राणः** = प्राण र |
| **आत्मन्** = परमात्मा | **विश्वं** = विश्वभित्र | **जीवः** = जीवात्माको रूपमा |
| **आत्मसृष्टं** = आफैँद्वारा | **आत्मना** = आत्मरूपले | **बिभर्षि** = (यसलाई) धारण |
| रचिएको | **अनुप्रविश्य** = प्रवेश गरी | गर्नुहुन्छ |

**वाक्यार्थ–** हे इन्द्रियातीत परमात्मा ! स्वयं अजन्मा भएर पनि आफैँद्वारा रचिएको यो अनेक प्रकारको विश्वभित्र हजुर आत्मरूपले प्रवेश गर्नुहुन्छ र जीवात्मा र प्राणको रूपमा यसलाई धारण गर्नुहुन्छ।

**विवरण–** यस प्रसङ्गमा सम्पूर्ण संसारलाई उत्पन्न गर्ने अनि यसभित्र पसी पोषण-धारण गर्ने पनि परमात्मा नै हुनुहुन्छ भनी वसुदेवले श्रीकृष्ण-बलरामको स्तुति गर्नुभएको छ। कर्मद्वारा चित्त शुद्ध भइसकेपछि मात्र व्यक्ति परमात्मदर्शनको अधिकारी बन्दछ। वसुदेवले पनि कर्मानुष्ठान गरिसकेपछि चित्त शुद्ध भएकाले ऋषिहरूको उपदेश अनुसार परमात्मतत्त्वलाई बुझ्नुभएको छ।

तीर्थसेवा, यज्ञको अनुष्ठान र महापुरुषको सदुपदेशबाट वसुदेव शुद्धचित्त बन्नुभएको छ र उहाँलाई श्रीकृष्णको ईश्वरीय स्वरूपको ज्ञान भएको छ।

संसारका पदार्थ त अनेक कारणहरूबाट उत्पन्न हुन्छन्, जस्तै— कुमालेबाट घैँटो अनि डकर्मी-सिकर्मीबाट घर आदि। त्यसैले यहाँ परमात्मा यी सबैका कारण कसरी हुनुभयो भन्ने शङ्का हुन्छ। त्यसको उत्तरमा श्लोकमा जहाँ जसरी जे-जे उत्पन्न भए पनि त्यो सबै परमात्मरूप नै भएकाले उहाँबाट नै उत्पन्न भएको हो भनी बताइएको छ। यहाँ सात ओटै विभक्ति र छ ओटै कारकको नाम लिइएको छ। **यत्र** अर्थात् जहाँ भन्ने शब्दले अधिकरण कारक एवं सप्तमी विभक्तिलाई बुझाउँछ, **येन** भन्ने शब्दले कर्ता र करण दुबै कारकलाई अनि तृतीया विभक्तिलाई बुझाउँछ। **यतः** अर्थात् जसबाट भन्ने शब्दले अपादान कारक र पञ्चमी विभक्ति अनि **यस्मै** अर्थात् जसका लागि भन्ने शब्दले सम्प्रदान कारक र चतुर्थी विभक्तिलाई बुझाउँछ। **यस्य** अर्थात् जसको भन्ने शब्दले सम्बन्ध अर्थ र षष्ठी विभक्तिलाई जनाउँछ। दुई ओटा **यत्** पदमध्ये एउटाले प्रयोज्य कर्ता अनि अर्कोले कर्मकारकलाई बुझाउँछन्। यसरी जहाँ जुन वस्तु जसद्वारा, जसबाट, जसका लागि, जसको सम्बन्धले जुन रूपमा उत्पन्न भए पनि त्यो परमात्माबाट नै उत्पन्न भएको हो किनभने सबै रूपमा त परमात्मा नै हुनुहुन्छ भन्ने यसको अर्थ हो। **इदं भगवान्** अर्थात् यो सबै भगवान् नै हुनुहुन्छ भन्ने अंशले यही अर्थलाई पुष्ट गर्दछ।

परमात्माले केवल सृष्टि मात्र गर्ने होइन, यो संसारको धारण, पोषण पनि उहाँले नै गर्नुभएको छ भनी अर्को श्लोकमा बताइएको छ। **आत्मसृष्टम्** अर्थात् आफैँले रचना गरेका अनेक पदार्थ एवं प्राणीहरूभित्र **आत्मना** अर्थात् जीवरूपले पसी परमात्माले नै संसारलाई चलाइरहनुभएको छ। **अजः** अर्थात् परमात्मा यद्यपि स्वरूपतः अजन्मा नै हुनुहुन्छ तर अन्तःकरण आदि उपाधिलाई लिएर जीवको रूपमा चाहिँ उत्पन्न हुन सक्नुहुन्छ। उपनिषद्मा संसारको रचना पछि यसको विभाग गर्नका लागि परमात्माले जीवरूपमा प्रवेश गर्ने सङ्कल्प गर्नुभएको प्रसङ्ग आउँछ। **अनेन जीवेनात्मनानुप्रविश्य नामरूपे व्याकरवाणि** (छान्दोग्योपनिषद् ६।३।२) अर्थात् जीवात्माको रूपले शरीरभित्र पसी नाम र रूपलाई विभक्त गर्छु भन्ने सोची परमात्मा शरीरभित्र पस्नुभएको छ। अनि प्रश्नोपनिषद् (६।४)मा चाहिँ **स प्राणमसृजत** अर्थात् शरीरभित्र जीवरूपले प्रवेश गर्न अनि त्यहाँबाट निस्कन पनि मुख्य सहयोगीको रूपमा परमात्माले प्राणको सृष्टि गर्नुभएको हो भनी बताइएको छ। परमात्मा प्राणको माध्यमले जीवरूपले शरीरमा पस्ने र प्राणसँगै जीव पनि निस्कने व्यवस्था शास्त्रहरूमा प्रतिपादित छ। यसरी प्राण र जीवको नित्य सम्बन्ध छ। प्राण क्रियाशक्ति हो भने जीव ज्ञानशक्तिरूप हो। यी दुबै परमात्मामा कल्पित हुन् तर औपाधिक रूपद्वारा नै परमात्माले संसार चलाउनुहुन्छ। यसरी हरेक प्राणीहरूभित्र जीव अनि प्राण बनी पसेर तिनलाई अड्याउने या धारण गर्ने पनि परमात्मा नै हुनुहुन्छ भनी यहाँ बताइएको छ।

**प्राणादीनां विश्वसृजां शक्तयो याः परस्य ताः।**
**पारतन्त्र्याद् वैसादृश्याद् द्वयोश्चेष्टैव चेष्टताम्॥ ६॥**

**पदार्थ—**
**विश्वसृजां** = संसार सृष्टि गर्ने
**प्राणादीनां** = क्रियाशक्तिरूप प्राण आदिको
**याः** = जुन जुन
**शक्तयः** = शक्तिहरू छन्
**ताः** = ती सबै
**परस्य** = परमात्माकै हुन्
**पारतन्त्र्यात्** = प्राण आदि परतन्त्र भएकाले
**द्वयोः** = अचेतन प्राण आदि र परमात्मा यी दुईका बिच
**वैसादृश्यात्** = विरुद्ध स्वभाव भएकाले
**चेष्टतां** = चेष्टा गरिरहेका तिनीहरूमा
**चेष्टा एव** = केवल चेष्टा मात्र हो (चैतन्यशक्ति होइन)

**वाक्यार्थ—** संसारको सृष्टि गर्ने क्रियाशक्तिरूप समष्टि प्राण आदिका सबै शक्तिहरू परमात्माका हुन्। प्राण आदि परतन्त्र छन् र ती सबै चेतन परमात्माभन्दा विरुद्ध जड स्वभावका छन्। त्यसैले प्राण आदिमा चेष्टा देखिए तापनि तिनीहरूमा त्यो बाहिरी रूपमा मात्र देखिएको हो, वास्तवमा चैतन्यशक्ति परमात्माको नै हो।

**विवरण—** प्राण आदि नै जगत्लाई धारण गर्ने अनि तिनका कारण पनि हुन्छन् भने प्राण आदिभन्दा अतिरिक्त ईश्वरलाई किन जगत्को कर्ता मान्ने ? भन्ने शङ्काको उत्तर यस श्लोकमा दिइएको छ। यहाँ प्राण भनेर समष्टि प्राणरूप सूत्रात्मा हिरण्यगर्भलाई लिनुपर्दछ। समष्टि प्राणरूप हिरण्यगर्भ पनि जगत्कारण हुन् तर तिनीहरूमा रहेको सृष्टि गर्ने शक्ति परमात्माको नै शक्ति हो। यिनको उत्पत्ति पनि परमात्माबाट नै भएको हो। त्यसैले बाहिरी रूपमा जगत्स्रष्टा भनिने हिरण्यगर्भ आदि वास्तवमा सृष्टिकर्ता होइनन्, यो शक्ति त परमात्माको नै हो। समष्टि प्राणलाई किन कारण नमान्ने ? भन्ने शङ्काको समाधानमा भनिन्छ, **पारतन्त्र्यात्** अर्थात् ती परतन्त्र भएकाले। कार्य गर्नमा जो स्वतन्त्र हुन्छ, त्यसलाई नै कर्ता भनिन्छ। यसैलाई पाणिनीय अष्टाध्यायी (१।४।५४)मा **स्वतन्त्रः कर्ता** भनिएको छ। काम गर्ने शक्ति चेतनमा हुन्छ, जड पदार्थमा हुँदैन। त्यसैले **शक्तयः** अर्थात् सृष्टि, स्थिति आदिको शक्ति केवल परमात्मामा मात्र हुन सक्छ। प्राण आदि त परतन्त्र छन्। परमात्माद्वारा सञ्चालित भएर मात्र चल्ने हुनाले यी परतन्त्र वस्तुहरू जगत्कारण बन्न सक्दैनन्। निसानालाई वेधन गर्ने शक्ति बाणमा होइन, बाण चलाउने मानिसमा नै रहेको हुन्छ। मानिसले सञ्चालन गरे अनुसार नै बाणले लक्ष्यलाई वेधन गर्दछ। यहाँ बाणले वेधन गरेको देखिए तापनि त्यो बाण मानिसबाट नै सञ्चालित भएको छ, त्यसै गरी परमात्माबाट नै शक्ति प्राप्त गरी हिरण्यगर्भ आदि जगत्कारण बन्दछन्। ईश्वर र प्राण आदि आ-आफैँ स्वतन्त्र पनि त हुन सक्छन् ? भन्ने शङ्कामा भनिन्छ— **द्वयोः वैसादृश्यात्** अर्थात् ईश्वर र प्राण दुबै असमान भएकाले एउटा जस्तै अर्को हुन सम्भव छैन। परमात्मा चेतन छ भने प्राण अचेतन छ। अचेतन वस्तु आफैँ स्वतन्त्र भएको कहीँ पनि देखिँदैन, अपि तु चेतनतत्त्वकै अधीनमा रहेको देखिन्छ। त्यसकारण परमात्मालाई स्वतन्त्र कारण एवं प्राणलाई त्यसको अधीनमा रहेको मान्नुपर्दछ।

**द्वयोः वैसादृश्यात्** यो पदावलीको अर्को पनि अर्थ हुन्छ। जगत्कारणको रूपमा सिद्ध गर्न खोजिएको प्राण आदिमध्ये हरेकको आ-आफ्नै कार्य एवं विशेषताहरू छन्। **द्वयोः** अर्थात् तीमध्ये जम्मा दुई पनि एउटै स्वभाव एवं कार्यका छैनन्। **वैसादृश्य** अर्थात् कार्य एवं स्वभाव भिन्न-भिन्न भएकाले तिनले एकआपसमा मिली जगत्लाई कसरी उत्पन्न गर्न सक्छन् ? आ-आफ्ना भिन्न भिन्न विषयतर्फ प्रवृत्त हुने इन्द्रिय, प्राण आदि विरोधी भएकाले आफैँ एक आपसमा मिली

जगत्कारण हुन सक्दैनन्। त्यसैले एउटा चेतनको नियन्त्रणमा रहेर नै यिनले एउटै कार्यलाई उत्पन्न गर्न सक्दछन्। यिनीहरूमा देखिएको चेष्टा पनि परमात्माकै शक्तिद्वारा भएको हो। यसैले जगत्कारण चेतन परमात्मा नै हुनुहुन्छ भनी यहाँ सिद्ध गरिएको छ।

**कान्तिस्तेजः प्रभा सत्ता चन्द्राग्न्यर्कर्क्षविद्युताम्।**
**यत् स्थैर्यं भूभृतां भूमेर्वृत्तिर्गन्धोऽर्थतो भवान्॥ ७॥**

**पदार्थ–**
**अर्थतः** = परमार्थतः
**चन्द्राग्न्यर्कर्क्षविद्युतां** = चन्द्र, अग्नि, सूर्य, नक्षत्र र विद्युत्को (क्रमशः)
**कान्तिः** = कान्ति
**तेजः** = तेज
**प्रभा** = प्रभा
**सत्ता** = सत्ता
**भूभृतां** = पहाडहरूको
**यत्** = जुन
**स्थैर्यं** = स्थिरता छ
**भूमेः** = पृथिवीको
**वृत्तिः** = धारण शक्ति र
**गन्धः** = गन्धरूपी विशेष गुण पनि
**भवान्** = हजुर नै हुनुहुन्छ

**वाक्यार्थ–** चन्द्रमाको कान्ति, अग्निको तेज, सूर्यको प्रभा, नक्षत्र र विद्युत्को चमकरूपी सत्ता यी सबै हजुर नै हुनुहुन्छ। यसै गरी पहाडहरूमा रहेको स्थिरता, पृथिवीमा रहेको धारण शक्ति र गन्धरूपी विशेष गुण समेत हजुर नै हुनुहुन्छ।

**तर्पणं प्राणनमपां देव त्वं ताश्च तद्रसः।**
**ओजः सहो बलं चेष्टा गतिर्वायोस्तवेश्वर॥ ८॥**

**पदार्थ–**
**देव** = हे भगवान्
**त्वं** = हजुर नै
**अपां** = जलको
**तर्पणं** = तृप्त गर्ने र
**प्राणनं** = जीवन दिने शक्ति
**ताः** = त्यो जल र
**तद्रसः च** = त्यसमा रहने रस पनि हुनुहुन्छ
**ईश्वर** = हे भगवान्
**ओजः** = इन्द्रियशक्ति
**सहः** = अन्तःकरणको शक्ति
**बलं** = शरीरको बल र
**वायोः** = वायुको
**चेष्टा** = हल्लिने चेष्टा र
**गतिः** = आउने-जाने गति पनि
**तव** = हजुरकै हो

**वाक्यार्थ–** हे भगवान्! जलमा तृप्त गर्ने र जीवन रक्षा गर्ने जुन शक्ति छ त्यस रूपमा हजुर नै हुनुहुन्छ। जलमा रहेको रस र स्वयं जल समेत हजुर नै हुनुहुन्छ। इन्द्रिय, अन्तःकरण र शरीरमा रहेका अनेक प्रकारका शक्तिहरू र वायुको चेष्टा एवं गति समेत सबै हजुरका नै शक्ति हुन्।

**दिशां त्वमवकाशोऽसि दिशः खं स्फोट आश्रयः।**
**नादो वर्णस्त्वमोङ्कार आकृतीनां पृथक्कृतिः॥ ९॥**

**पदार्थ–**
**त्वं** = हजुर नै
**दिशां** = दिशाहरूको
**अवकाशः** = खाली ठाउँ
**दिशः** = दिशास्वरूप पनि
**असि** = हुनुहुन्छ

**खं** = आकाश
**आश्रयः** = त्यसमा आश्रित भएको
**स्फोटः** = स्फोट (शब्दतन्मात्रा)
**नादः** = पश्यन्तीरूप ध्वनि
**ओङ्कारः** = मध्यमारूप ध्वनि
**वर्णः** = उच्चारण गरिने ध्वनि
**आकृतीनां** = पदार्थहरूको
**पृथक्कृतिः** = छुट्टाछुट्टै नाम
**त्वम्** = हजुर नै हुनुहुन्छ

**वाक्यार्थ–** हे भगवान् ! हजुर नै दशै दिशा र त्यसबिचको खाली ठाउँरूपसमेत हुनुहुन्छ। हजुर नै आकाश र त्यसमा रहेका स्फोट हुनुहुन्छ भने नादरूप पश्यन्ती, ओङ्काररूप मध्यमा, अनेक वर्णरूप वैखरी र पदार्थहरूलाई बताउने छुट्टाछुट्टै नामपदहरू पनि हजुर नै हुनुहुन्छ।

**विवरण–** यस श्लोकमा दिक्, आकाश एवं शब्द तन्मात्रा आदिको रूपमा परमात्माको स्तुति गरिएको छ। पूर्व, पश्चिम आदि सबै दिशाहरू परमात्मामा नै कल्पित भएका हुन्। तिनका लागि **अवकाशः** अर्थात् खाली ठाउँ प्रदान गर्ने पनि परमात्मा नै हुनुहुन्छ। दिशाहरू कुनै निश्चित वस्तु होइनन्, यिनलाई चेतन तत्त्वले जसरी अवकाश दिन्छ, त्यसै गरी यिनीहरू सिद्ध हुन्छन्। चेतन तत्त्वको आधारमा नै दिशाहरूको कल्पना हुन्छ। व्यक्ति जहाँ अवस्थित हुन्छ, त्यहाँबाट नै दिशाको गणना हुन्छ। एक ठाउँमा बस्दा पूर्वतर्फ रहेको पहाड अर्को ठाउँमा बस्दा पश्चिमतर्फ पर्न सक्छ। यसबाट दिशाहरूलाई सिद्ध गर्ने पनि चेतन आत्मतत्त्व हो भन्ने सिद्ध हुन्छ। यहाँ अवकाश अनि शब्दतन्मात्रा आदिको रूपमा पनि परमात्मा नै हुनुहुन्छ। यस्तै **स्फोट** भनेर परा वाणीरूपी चित् तत्त्वलाई लिनुपर्दछ। **स्फुटति प्रकाशतेऽर्थो यस्मात्** अर्थात् जहाँबाट अर्थ अभिव्यक्त हुन्छ, त्यस्तो चेतन ब्रह्मतत्त्वलाई स्फोट भनिएको छ। परा वाक्को स्थान मेरुदण्डको सुरुवात हुने मूलाधार चक्रको प्रदेश हो। त्यहाँ ज्योतिर्मय लिङ्ग आकाशमा जीवकला रहेको हुन्छ। यही चेतन तत्त्वलाई **परा वाक्** भनी तन्त्रशास्त्रहरूमा बताइएको छ। **नादः** भन्ने शब्दले वाणीको पश्यन्ती रूपलाई बुझाएको छ। वाणीको **परा** र **पश्यन्ती** स्वरूप मनको पनि विषय होइन, केवल **मध्यमा** रूपलाई मात्र मनले सोच्न सक्छ भन्ने शब्दशास्त्रीहरूको सिद्धान्त पाइन्छ। मानसिक जप, अथवा मानसिक तर्क आदिमा शब्दको जुन रूप प्रयुक्त हुन्छ, त्यही नै त्यसको **मध्यमावस्था** हो। यसलाई श्लोकमा आएको **ओङ्कारः** यो शब्दले जनाएको छ। घाँटीबाट बाहिर निस्कने शब्द सबैभन्दा बाहिरी **बैखरी** अवस्था हो र इन्द्रिय आदिको पनि यो विषय हुन्छ। यसलाई श्लोकमा **वर्ण** भनी बताइएको छ। अक्षर, मात्रा आदिको विभाग अनि अनेक भाषाका अनेक शब्दप्रयोग आदिको विभाग मुख्यतः यही बाह्य अवस्थामा मात्र हुन्छ, भित्री शब्दतत्त्व समान रहन्छ। यसरी यहाँ व्यक्त-अव्यक्त शब्दतत्त्वको रूपमा परमात्माको स्तुति गरिएको छ।

**इन्द्रियं त्विन्द्रियाणां त्वं देवाश्च तदनुग्रहः।**
**अवबोधो भवान् बुद्धेर्जीवस्यानुस्मृतिः सती॥ १०॥**

**पदार्थ–**
**त्वं** = हजुर नै
**इन्द्रियं** = इन्द्रिय
**इन्द्रियाणां तु** = इन्द्रियहरूका
**देवाः** = अधिष्ठाता देवता
**तदनुग्रहः च** = तिनीहरूका विषय प्रकाशन शक्ति हुनुहुन्छ
**भवान्** = हजुर नै
**बुद्धेः** = बुद्धिको

**अवबोधः** = ज्ञानशक्ति
**जीवस्य** = जीवको
**सती** = विशुद्ध
**अनुस्मृतिः** = स्मृतिशक्ति पनि
हुनुहुन्छ

**वाक्यार्थ–** हे भगवान् ! हजुर नै सम्पूर्ण इन्द्रियरूप, तिनका अधिष्ठाता र तिनका विषय प्रकाशन गर्ने शक्तिस्वरूप समेत हुनुहुन्छ। हजुर नै बुद्धिको ज्ञानशक्ति र जीवात्माको विशुद्ध स्मृतिशक्ति पनि हुनुहुन्छ।

**भूतानामसि भूतादिरिन्द्रियाणां च तैजसः।**
**वैकारिको विकल्पानां प्रधानमनुशायिनाम्॥ ११॥**

**पदार्थ–**
**भूतानां** = प्राणीहरूका लागि
**भूतादिः** = प्राणीहरूको कारण (तामस अहङ्कार)
**असि** = हुनुहुन्छ
**इन्द्रियाणां च** = इन्द्रियहरूका लागि
**तैजसः** = तैजस (तिनको कारण राजस अहङ्कार) र
**विकल्पानां** = इन्द्रियका अधिष्ठाता देवताहरूको लागि
**वैकारिकः** = सात्त्विक अहङ्कार
**अनुशायिनां** = जीवहरूको
**प्रधानम्** = संसारको कारणभूत माया समेत हुनुहुन्छ

**वाक्यार्थ–** हे भगवान् ! हजुर नै सम्पूर्ण प्राणीहरूका कारण तामस अहङ्काररूप हुनुहुन्छ, इन्द्रियहरूको कारण राजस अहङ्कार र इन्द्रियका अधिष्ठाता देवताहरूको कारण सात्त्विक अहङ्काररूप हजुर नै हुनुहुन्छ। यसै गरी जीवहरूका लागि संसार रचना गर्ने माया शक्ति समेत हजुर नै हुनुहुन्छ।

**नश्वरेष्विह भावेषु तदसि त्वमनश्वरम्।**
**यथा द्रव्यविकारेषु द्रव्यमात्रं निरूपितम्॥ १२॥**

**पदार्थ–**
**यथा** = जसरी
**द्रव्यविकारेषु** = माटो आदि द्रव्यका विकार भएका पदार्थमा
**द्रव्यमात्रं** = माटो आदि द्रव्य नै
**निरूपितं** = व्याप्त रहेको देखिन्छ (त्यसै गरी)
**इह** = यो संसारमा
**नश्वरेषु** = नाशवान्
**भावेषु** = पदार्थहरूमा
**त्वं** = हजुर नै
**तत्** = त्यो कारणरूप
**अनश्वरं** = अविनाशी तत्त्व
**असि** = हुनुहुन्छ

**वाक्यार्थ–** जसरी द्रव्यका विकार भएका संसारका सारा पदार्थहरूमा द्रव्य नै व्याप्त देखिन्छ, त्यसै गरी नाशवान् सारा पदार्थहरूमा ती सबैका कारणरूप अविनाशी हजुर नै व्याप्त हुनुहुन्छ।

**सत्त्वं रजस्तम इति गुणास्तद्वृत्तयश्च याः।**
**त्वय्यद्धा ब्रह्मणि परे कल्पिता योगमायया॥ १३॥**

**पदार्थ–**
**सत्त्वं** = सत्त्व
**रजः** = रज

**तमः** = तम
**इति** = यी
**गुणाः** = गुणहरू र
**याः** = जति पनि
**तद्वृत्तयः च** = तिनका वृत्तिहरू छन्
**अद्धा** = निश्चय नै
**त्वयि** = हजुर
**परे ब्रह्मणि** = परब्रह्ममा
**योगमायया** = योगमायाद्वारा
**कल्पिताः** = कल्पित भएका हुन्

**वाक्यार्थ–** सत्त्व, रज र तम यी तीनै गुण एवं यसका जति पनि महत्तत्त्व आदि वृत्तिहरू छन्, ती सबै निश्चय नै परब्रह्म परमात्मारूप हजुरमा योगमायाद्वारा कल्पित भएका हुन्।

**तस्मान्न सन्त्यमी भावा यर्हि त्वयि विकल्पिताः।**
**त्वं चामीषु विकारेषु ह्यन्यदाव्यावहारिकः॥ १४॥**

**पदार्थ–**
**तस्मात्** = त्यसैले
**अमी** = यी
**भावाः** = पदार्थहरू
**न सन्ति** = छैनन्
**यर्हि** = जब
**त्वयि** = हजुरमा
**विकल्पिताः** = कल्पित हुन्छन्
**त्वं च** = हजुर समेत (तब)
**अमीषु** = यी
**विकारेषु** = विकारहरूमा
**हि** = निश्चय नै (कारणरूपमा अवगत हुनुहुन्छ)
**अन्यदा** = विकल्पको निवृत्ति भएको वेलामा
**अव्यावहारिकः** = व्यवहारभिन्न परमार्थ (अद्वितीय सत्स्वरूप) हुनुहुन्छ

**वाक्यार्थ–** संसारका सारा पदार्थहरू वास्तवमा छैनन्, तर जब यी हजुरमा कल्पित हुन्छन्, तब सत्य झैँ देखिन्छन् र हजुर पनि यिनमा कारणरूपले अनुगत झैँ हुनुहुन्छ, तर विकल्पको निवृत्ति भएपछि पारमार्थिक अवस्थामा त केवल हजुर मात्र अद्वितीय सत्स्वरूप रहनुहुन्छ।

**गुणप्रवाह एतस्मिन्नबुधास्त्वखिलात्मनः।**
**गतिं सूक्ष्मामबोधेन संसरन्तीह कर्मभिः॥ १५॥**

**पदार्थ–**
**एतस्मिन्** = यो
**गुणप्रवाहे** = गुणप्रवाहरूप संसारमा
**अखिलात्मनः** = सबैका आत्मा भगवान्को
**सूक्ष्मां** = सूक्ष्म (संसारभन्दा पर)
**गतिं** = वास्तविक स्वरूपलाई
**अबुधाः तु** = नजान्ने अज्ञानीहरू चाहिँ
**इह** = यो संसारमै
**अबोधेन** = अज्ञानजन्य अभिमान (अहंबुद्धि)द्वारा
**कर्मभिः** = अनेक कर्महरूको बन्धनले
**संसरन्ति** = (जन्म र मृत्युको चक्रमा) घुमिरहन्छन्

**वाक्यार्थ–** यो सम्पूर्ण संसार सत्त्व आदि तीन गुणहरूकै प्रवाह हो। सर्वात्मा भगवान् चाहिँ संसारभन्दा पर हुनुहुन्छ। उहाँको वास्तविक स्वरूपलाई नजान्ने अज्ञानीहरू चाहिँ शरीर आदिमै अहंबुद्धि गर्दछन् र त्यसद्वारा अनेक कर्महरू गर्दै जन्म र मृत्युको चक्रमा घुमिरहन्छन्।

**यदृच्छया नृतां प्राप्य सुकल्पामिह दुर्लभाम्।**
**स्वार्थे प्रमत्तस्य वयो गतं त्वन्माययेश्वर॥ १६॥**

**पदार्थ–**
**ईश्वर** = हे भगवान्
**यदृच्छया** = सौभाग्यवश
**इह** = यो संसारमा
**सुकल्पां** = सबैथरी सामर्थ्यले युक्त
**दुर्लभां** = अत्यन्त दुर्लभ
**नृतां** = मनुष्य शरीर
**प्राप्य** = पाएर
**त्वन्मायया** = हजुरको मायाद्वारा
**स्वार्थे** = वास्तविक लाभबाट
**प्रमत्तस्य** = विचलित भएको मेरो
**वयः** = उमेर
**गतम्** = बित्यो

**वाक्यार्थ–** हे भगवान् ! मैले यस संसारमा सौभाग्यवश इन्द्रिय, विवेक आदि सबैथरी सामर्थ्यले युक्त भएको दुर्लभ मनुष्यशरीर पाएको थिएँ तर हजुरको मायाद्वारा आफ्नो वास्तविक पारमार्थिक कल्याणदेखि विमुख भएको मेरो उमेर व्यर्थमा बित्यो।

**असावहं ममैवैते देहे चास्यान्वयादिषु ।**
**स्नेहपाशैर्निबध्नाति भवान् सर्वमिदं जगत् ॥ १७ ॥**

**पदार्थ–**
**भवान्** = हजुर
**इदं** = यो
**सर्वम्** = सम्पूर्ण
**जगत्** = संसारलाई
**देहे** = शरीरमा
**असौ** = यही
**अहं** = म हुँ (भन्ने अहंबुद्धिद्वारा)
**अस्य च** = यो शरीरसम्बन्धी
**अन्वयादिषु** = पुत्रपरिवार आदिमा
**एते** = यी
**मम एव** = मेरा नै हुन् (भन्ने ममबुद्धि आदि)
**स्नेहपाशैः** = स्नेहका पाशहरूद्वारा
**निबध्नाति** = बाँध्नुहुन्छ

**वाक्यार्थ–** हे भगवान् ! हजुर नै सारा संसारका प्राणीहरूलाई शरीरमा यही म हुँ भन्ने बुद्धि, अनि शरीर सम्बन्धी पुत्र परिवारहरूमा यी मेरा नै हुन् भन्ने बुद्धि आदि स्नेहपाशद्वारा बाँध्नुहुन्छ।

**युवां न नः सुतौ साक्षात् प्रधानपुरुषेश्वरौ ।**
**भूभारक्षत्रक्षपण अवतीर्णौ तथात्थ ह ॥ १८ ॥**

**पदार्थ–**
**भूभारक्षत्रक्षपणे** = पृथिवीका भारसमानका क्षत्रियहरूलाई नष्ट गर्न
**अवतीर्णौ** = अवतीर्ण भएका
**युवां** = हजुर दुई
**साक्षात्** = साक्षात्
**प्रधानपुरुषेश्वरौ** = प्रकृति र जीवहरूका पनि स्वामी हुनुहुन्छ
**नः** = हाम्रा
**सुतौ** = छोरा मात्र
**न** = हुनुहुन्न
**ह** = निश्चय नै
**तथा** = यस्तै कुरा
**आत्थ** = भन्नुभएको थियो

**वाक्यार्थ–** पृथिवीका भारसमानका क्षत्रियहरूलाई नष्ट गर्न अवतीर्ण भएका हजुर दुई केवल हाम्रा छोरा नभई साक्षात् प्रकृति र पुरुषका पनि स्वामी हुनुहुन्छ। यही कुरा (हजुरले जन्मको समयमा पनि) भन्नुभएको थियो।

**तत् ते गतोऽस्म्यरणमद्य पदारविन्द-**
**मापन्नसंसृतिभयापहमार्तबन्धो ।**

**एतावतालमलमिन्द्रियलालसेन**

**मर्त्यात्मदृक् त्वयि परे यदपत्यबुद्धिः ॥ १९ ॥**

**पदार्थ—**
**आर्तबन्धो** = हे दुःखीहरूका मित्र
**तत्** = त्यसैले
**अद्य** = आज
**ते** = हजुरको
**आपन्नसंसृतिभयापहं** = शरणमा आएकाहरूको संसारभयलाई नष्ट गर्ने
**पदारविन्दम्** = चरणकमलको
**अरणम्** = शरणमा
**गतः** = गएको
**अस्मि** = छु
**एतावता** = अहिलेसम्मको
**इन्द्रियलालसेन** = इन्द्रियको भोगवासनाबाट
**अलं अलं** = पुग्यो पुग्यो
**यत्** = जुन वासनाको कारण
**मर्त्यात्मदृक्** = मरणशील शरीरमा आत्मबुद्धि
**त्वयि** = हजुर
**परे** = परमात्मामा
**अपत्यबुद्धिः** = पुत्रबुद्धि समेत भएको छ

**वाक्यार्थ—** दुःखीहरूका मित्र हे भगवान् ! हजुरको चरणकमलले शरणमा आएकाहरूको संसारभयलाई नष्ट गर्दछ। आज म त्यही चरणकमलको शरणमा आएको छु। मेरो अहिलेसम्मको इन्द्रियहरूको भोगवासनाबाट अब म अघाएँ। यही वासनाको कारण मरणशील शरीरमा आत्मबुद्धि र साक्षात् परमात्मा हजुरमा पुत्रबुद्धि समेत भएको छ।

**सूतीगृहे ननु जगाद भवानजो नौ**

**सञ्जज्ञ इत्यनुयुगं निजधर्मगुप्त्यै ।**

**नानातनूर्गगनवद् विदधज्जहासि**

**को वेद भूम्न उरुगाय विभूतिमायाम् ॥ २० ॥**

**पदार्थ—**
**ननु** = निश्चय नै
**अजः** = अजन्मा भएर पनि
**निजधर्मगुप्त्यै** = आफूद्वारा प्रवर्तित धर्मको संरक्षणका लागि
**अनुयुगं** = युगैपिच्छे
**नौ** = तिमी दुईबाट
**सञ्जज्ञे इति** = उत्पन्न हुन्छु भनेर
**भवान्** = हजुरले
**सूतीगृहे** = सूतिकागृहमा
**जगाद** = बताउनुभएको थियो
**उरुगाय** = हे अनन्तकीर्ति भगवान् (हजुर)
**गगनवत्** = आकाशले झैं
**नानातनूः** = अनेक रूपलाई
**विदधन्** = स्वीकार गर्दै
**जहासि** = छोड्नुहुन्छ
**भूम्नः** = सर्वव्यापक परमात्माको
**विभूतिमायां** = ऐश्वर्यमय योगमायालाई
**कः** = कसले
**वेद** = जान्न सक्छ

**वाक्यार्थ—** हे भगवान् ! हजुरले जन्म लिने वेला प्रसूतिगृहमा नै हामीलाई म अजन्मा भएर पनि आफैँद्वारा प्रवर्तित धर्ममर्यादाको संरक्षण गर्नका लागि हरेक युगमा हामी तिमीहरू दुईको पुत्र बनेर अवतार लिन्छौँ भनी बताउनुभएको थियो। हे अनन्तकीर्ति भगवान् ! जसरी आकाशमा

उपाधि अनुसार अनेकरूपता देखिन्छ त्यसै गरी हजुर पनि मायाद्वारा अनेक स्वरूप धारण गर्दै त्यसलाई छोड्दै गर्नुहुन्छ। सर्वव्यापक हजुरको ऐश्वर्यमय योगमायालाई कसले जान्न सक्दछ र ?

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**आकर्ण्येत्थं पितुर्वाक्यं भगवान् सात्वतर्षभः।**

**प्रत्याह प्रश्रयानम्रः प्रहसञ्श्लक्ष्णया गिरा॥ २१॥**

| **पदार्थ–** | **आकर्ण्य** = सुनेर | **प्रश्रयानम्रः** = नम्रतापूर्वक झुकेर |
|---|---|---|
| **इत्थं** = यसप्रकारको | **सात्वतर्षभः** = यदुकुलश्रेष्ठ | **श्लक्ष्णया** = मधुर |
| **पितुः** = पिताको | **भगवान्** = भगवान्ले | **गिरा** = वाणीद्वारा |
| **वाक्यं** = वचनलाई | **प्रहसन्** = हाँस्दै | **प्रत्याह** = भन्नुभयो |

**वाक्यार्थ–** आफ्ना पिताको यस्तो वचन सुनेपछि यदुकुलश्रेष्ठ भगवान् श्रीकृष्ण मन्द मुस्कुराउनुभयो र नम्रतापूर्वक झुकेर उहाँले मधुर वाणीले यसो भन्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**वचो वः समवेतार्थं तातैतदुपमन्महे।**

**यन्नः पुत्रान् समुद्दिश्य तत्त्वग्राम उदाहृतः॥ २२॥**

| **पदार्थ–** | **समवेतार्थं** = युक्तियुक्त | **समुद्दिश्य** = उद्देश्य गरेर |
|---|---|---|
| **तात** = हे पिताजी | **उपमन्महे** = मान्दछौँ | **तत्त्वग्राम** = ब्रह्मज्ञान |
| **एतत्** = यो | **यत्** = किनभने | **उदाहृतः** = बताउनुभयो |
| **वः** = हजुरको | **पुत्रान्** = हजुरका छोरा | |
| **वचः** = वचनलाई | **नः** = हामीलाई | |

**वाक्यार्थ–** हे पिताजी ! हजुरको यो वचनलाई हामी पूर्णतः युक्तियुक्त मान्दछौँ, किनभने हजुरले आफ्ना छोराहरूका लागि तत्त्वज्ञानको उपदेश गर्नुभएको छ।

**अहं यूयमसावार्य इमे च द्वारकौकसः।**

**सर्वेऽप्येवं यदुश्रेष्ठ विमृश्याः सचराचरम्॥ २३॥**

| **पदार्थ–** | **इमे** = यी | **एवं** = यसै गरी |
|---|---|---|
| **यदुश्रेष्ठ** = हे यदुश्रेष्ठ पिताजी | **द्वारकौकसः च** = द्वारकावासी प्रजाहरूसमेत | **विमृश्याः** = विचार गर्न योग्य छन् |
| **अहं** = म | | |
| **यूयं** = हजुरहरू | **सचराचरं** = चर अचर प्राणीहरू | |
| **असौ आर्य** = यी मान्य बलराम | **सर्वे अपि** = सबै पनि | |

**वाक्यार्थ–** हे यदुश्रेष्ठ पिताजी ! म, हजुरहरू, मेरा दाइ बलराम, द्वारकावासी सम्पूर्ण प्रजाहरू र सम्पूर्ण चराचर जगत्का प्राणीहरूलाई पनि यसै गरी ब्रह्मरूपमा विचार गर्नुपर्दछ।

**आत्मा ह्येकः स्वयंज्योतिर्नित्योऽन्यो निर्गुणो गुणैः।**
**आत्मसृष्टैस्तत्कृतेषु भूतेषु बहुधेयते ॥ २४ ॥**
**खं वायुर्ज्योतिरापो भूस्तत्कृतेषु यथाशयम्।**
**आविस्तिरोऽल्पभूर्येको नानात्वं यात्यसावपि ॥ २५ ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**एकः** = अद्वितीय
**स्वयंज्योतिः** = स्वयंप्रकाश
**नित्यः** = नित्य
**निर्गुणः** = निर्गुण
**आत्मा** = आत्मा
**आत्मसृष्टैः** = आफूद्वारा सिर्जिएका
**गुणैः** = गुणहरूद्वारा
**तत्कृतेषु** = ती गुणहरूद्वारा उत्पन्न
**भूतेषु** = पदार्थहरूमा
**अन्यः** = पृथक् पृथक् झैं
**बहुधा** = अनेक झैं
**इयते** = देखिन्छ
**खं** = आकाश
**वायुः** = वायु
**ज्योतिः** = तेज
**आपः** = जल
**भूः** = पृथिवी यी पदार्थहरू
**तत्कृतेषु** = यिनका कार्य घट आदिमा (देखिए झैं)
**एकः अपि** = अद्वितीय भएर पनि
**असौ** = यो आत्मा
**यथाशयं** = उपाधिहरूको भेदले
**आविस्तिरोऽल्पभूरि** = प्रकट हुने, हराउने, थोरै र धेरै हुने आदि
**नानात्वं** = अनेक भावमा पनि
**याति** = प्राप्त हुन्छ

**वाक्यार्थ–** यद्यपि आत्मतत्त्व अद्वितीय, स्वयंप्रकाश, नित्य र निर्गुण छ, तर ऊ आफूमा नै गुणहरूको सृष्टि गर्दछ र ती गुणहरूद्वारा उत्पन्न भएका पञ्चमहाभूतहरूमा भिन्न भिन्न अनेक रूपले देखिन्छ। जसरी आकाश, वायु, तेज, जल र पृथिवी यी महाभूतहरू घैंटो आदि आ–आफ्ना कार्यमा कार्य अनुसार अनेक रूपमा देखिन्छन्, त्यसै गरी अद्वितीय आत्मा पनि उपाधिहरूको भेदले कहिले प्रकट, कहिले तिरोहित, कहिले धेरै र कहिले थोरै गरी अनेक भावमा प्राप्त हुन्छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं भगवता राजन् वसुदेव उदाहृतम्।**
**श्रुत्वा विनष्टनानाधीस्तूष्णीं प्रीतमना अभूत् ॥ २६ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**एवं** = यसप्रकार
**भगवता** = भगवान्द्वारा
**उदाहृतम्** = बताइएको कुरा
**श्रुत्वा** = सुनेर
**विनष्टनानाधीः** = भेदबुद्धि नष्ट भएका
**प्रीतमनाः** = प्रसन्न भएका
**वसुदेवः** = वसुदेव
**तूष्णीं** = मौन
**अभूत्** = हुनुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! भगवान् श्रीकृष्णको यो वचनलाई सुनेर वसुदेवको भेदबुद्धि नष्ट भयो। उहाँ अत्यन्त आनन्दमा मग्न भएर मौन हुनुभयो।

**अथ तत्र कुरुश्रेष्ठ देवकी सर्वदेवता ।**

**श्रुत्वानीतं गुरोः पुत्रमात्मजाभ्यां सुविस्मिता ॥ २७ ॥**

**कृष्णरामौ समाश्राव्य पुत्रान् कंसविहिंसितान् ।**

**स्मरन्ती कृपणं प्राह वैक्लव्यादश्रुलोचना ॥ २८ ॥**

**पदार्थ–**
**कुरुश्रेष्ठ** = हे कुरुश्रेष्ठ परीक्षित्
**अथ** = त्यसपछि
**तत्र** = त्यहाँ
**आत्मजाभ्यां** = पुत्रहरूद्वारा
**गुरोः** = गुरु सान्दीपनीको
**पुत्रं** = छोरालाई
**आनीतं** = मृत्युबाट फर्काइएको
**श्रुत्वा** = सुनेर
**सुविस्मिता** = विस्मित भएकी
**सर्वदेवता** = सर्वदेवरूपिणी
**देवकी** = देवकीले
**कंसविहिंसितान्** = कंसद्वारा मारिएका
**पुत्रान्** = आफ्ना छोराहरूलाई
**स्मरन्ती** = सम्झिँदै
**वैक्लव्यात्** = दीनताका कारण
**अश्रुलोचना** = आँखाभरि आँसु पारेर
**कृष्णरामौ** = श्रीकृष्ण र बलरामलाई
**समाश्राव्य** = सुनाउँदै
**कृपणं** = करुणस्वरले
**प्राह** = भन्नुभयो

**वाक्यार्थ–** हे परीक्षित् ! आफ्ना छोराहरूले सान्दीपनी गुरुका मरेका छोरालाई पनि फर्काएर ल्याए भन्ने सुनेर विस्मित भएकी सर्वदेवस्वरूपिणी देवकीले त्यही वेलामा कंसले मारेका आफ्ना छोराहरूलाई सम्झेर अत्यन्त कष्टका कारण आँखाभरि आँसु पारी श्रीकृष्ण र बलरामलाई सम्बोधन गर्दै करुण स्वरले यसो भन्नुभयो।

**देवक्युवाच** (देवकीले भन्नुभयो)

**राम रामाप्रमेयात्मन् कृष्ण योगेश्वरेश्वर ।**

**वेदाहं वां विश्वसृजामीश्वरावादिपूरुषौ ॥ २९ ॥**

**पदार्थ–**
**अप्रमेयात्मन्** = अनन्त शक्ति भएका
**राम** = लोकलाई आनन्द दिने
**राम** = हे बलराम
**योगेश्वरेश्वर** = योगेश्वरहरूका पनि ईश्वर
**कृष्ण** = हे कृष्ण
**अहं** = म
**वां** = हजुर दुईलाई नै
**विश्वसृजां** = विश्वस्रष्टा प्रजापतिहरूका
**ईश्वरौ** = ईश्वर
**आदिपूरुषौ** = आदिपुरुष
**वेद** = जान्दछु

**वाक्यार्थ–** लोकलाई आनन्द दिने अनन्त शक्तिसम्पन्न हे बलराम ! योगेश्वरहरूका पनि ईश्वर हे श्रीकृष्ण ! म हजुरहरू दुबैलाई विश्वस्रष्टा प्रजापतिहरूका पनि पति आदिपुरुष मान्दछु।

**कालविध्वस्तसत्त्वानां राज्ञामुच्छास्त्रवर्तिनाम् ।**

**भूमेर्भारायमाणानामवतीर्णौ किलाद्य मे ॥ ३० ॥**

**पदार्थ—**
**कालविध्वस्तसत्त्वानां** = कालको प्रभावले सद्गुणहरू नष्ट भएका
**उच्छास्त्रवर्तिनां** = शास्त्रलाई उल्लङ्घन गर्ने आचरण भएका
**भूमेः** = पृथिवीका
**भारायमाणानां** = भारसमान भएका
**राज्ञां** = राजाहरूको (नाशका लागि)
**किल** = निश्चय नै
**अद्य** = अहिले
**मे** = मेरो गर्भबाट
**अवतीर्णौ** = उत्पन्न हुनुभएको हो

**वाक्यार्थ—** कालको प्रभावद्वारा सारा सद्गुणहरू नष्ट भएका, शास्त्रलाई उल्लङ्घन गरी आफ्नो इच्छा अनुसार आचरण गर्ने, पृथिवीका भारसमान भएका राजाहरूलाई नष्ट गर्न अहिले हजुरहरू दुबै मेरो गर्भबाट उत्पन्न हुनुभएको हो।

**यस्यांशांशांशभागेन विश्वोत्पत्तिलयोदयाः।**
**भवन्ति किल विश्वात्मंस्तं त्वाद्याहं गतिं गता॥ ३१॥**

**पदार्थ—**
**विश्वात्मन्** = हे विश्वात्मा
**किल** = निश्चय नै
**यस्य** = जसको
**अंशांशांशभागेन** = अंश (पुरुष) को अंश (माया)को पनि अंश (मायाका गुण)द्वारा
**विश्वोत्पत्तिलयोदयाः** = संसारको सृष्टि, स्थिति र प्रलय
**भवन्ति** = हुन्छन्
**अद्य** = आज
**अहं** = म
**तं** = त्यस्ता
**त्वा** = हजुरको
**गतिं** = शरणमा
**गता** = आएकी छु

**वाक्यार्थ—** हे विश्वात्मा ! हजुरको अंशसमानको पुरुष, त्यसको पनि अंश माया र त्यसका पनि अंश भएका तीन गुणहरूको थोरै भागबाट मात्र सम्पूर्ण संसारको सृष्टि, स्थिति र प्रलय हुन्छ। आज म त्यस्ता हजुरको शरणमा आएकी छु।

**चिरान्मृतसुतादाने गुरुणा कालचोदितौ।**
**आनिन्यथुः पितृस्थानाद् गुरवे गुरुदक्षिणाम्॥ ३२॥**
**तथा मे कुरुतं कामं युवां योगेश्वरेश्वरौ।**
**भोजराजहतान् पुत्रान् कामये द्रष्टुमाहृतान्॥ ३३॥**

**पदार्थ—**
**चिरात्** = धेरै समय अघि नै
**मृतसुतादाने** = मरेको छोरालाई ल्याउन
**गुरुणा** = सान्दीपनी गुरुद्वारा र
**कालचोदितौ** = यमराजद्वारा समेत प्रेरित भएर
**गुरवे** = गुरुका लागि
**पितृस्थानात्** = पितृहरूको स्थान यमलोकबाट
**गुरुदक्षिणां** = पुत्ररूप गुरुदक्षिणा
**आनिन्यथुः** = ल्याउनुभएको थियो
**योगेश्वरेश्वरौ** = योगेश्वरका पनि ईश्वर
**युवां** = हजुर दुईले
**तथा** = त्यसै गरी
**मे** = मेरो

| | | |
|---|---|---|
| **कामं** = इच्छालाई | कंसद्वारा मारिएका | **द्रष्टुं** = हेर्न |
| **कुरुतम्** = पूरा गर्नुहोस् | **पुत्रान्** = छोराहरूलाई | **कामये** = चाहन्छु |
| **भोजराजहतान्** = भोजराज | **आहृतान्** = फेरि फर्काइएका | |

**वाक्यार्थ–** सान्दीपनी गुरुका छोरा धेरै पहिले मरेका थिए। गुरुको प्रेरणा र यमराजको समेत इच्छा अनुसार हजुर दुईले ती गुरुपुत्रलाई गुरुदक्षिणाको रूपमा यमलोकबाट ल्याइदिनुभएको थियो। योगेश्वरहरूका पनि ईश्वर हजुरहरू दुबैले त्यसै गरी मेरो इच्छालाई पनि पूरा गर्नुहोस्। कंसले नष्ट गरेका मेरा छोराहरूलाई फर्काइदिनुहोस्, म तिनीहरूलाई हेर्न चाहन्छु।

**ऋषिरुवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं सञ्चोदितौ मात्रा रामः कृष्णश्च भारत।**

**सुतलं संविविशतुर्योगमायामुपाश्रितौ ॥ ३४ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **सञ्चोदितौ** = प्रेरित भएका | **उपाश्रितौ** = आश्रय लिई |
| **भारत** = हे भरतवंशी परीक्षित् | **रामः** = बलराम र | **सुतलं** = सुतल लोकमा |
| **एवं** = यसप्रकार | **कृष्णः च** = श्रीकृष्णले | **संविविशतुः** = प्रवेश गर्नुभयो |
| **मात्रा** = माता देवकीद्वारा | **योगमायां** = योगमायाको | |

**वाक्यार्थ–** हे परीक्षित्! यसप्रकार आफ्नी माता देवकीको प्रेरणाद्वारा बलराम र श्रीकृष्णले योगमायाको आश्रय लिई सुतल लोकमा प्रवेश गर्नुभयो।

**तस्मिन् प्रविष्टावुपलभ्य दैत्यराड् विश्वात्मदैवं सुतरां तथात्मनः।**

**तद्दर्शनाह्लादपरिप्लुताशयः सद्यः समुत्थाय ननाम सान्वयः॥ ३५॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | नै आत्मा र इष्टदेवलाई | हृदय परिपूर्ण भएका |
| **दैत्यराड्** = दैत्यराज बलिले | **तस्मिन्** = त्यहाँ | **सान्वयः** = सपरिवार उनले |
| **सुतरां** = अकस्मात् | **प्रविष्टौ** = प्रवेश गरेका | **सद्यः** = झटपट |
| **आत्मनः** = आफ्ना | **उपलभ्य** = देखेर | **समुत्थाय** = उठेर |
| **तथा** = त्यसै गरी | **तद्दर्शनाह्लादपरिप्लुताशयः** = | **ननाम** = प्रणाम गरे |
| **विश्वात्मदैवं** = सम्पूर्ण संसारका | उहाँहरूको दर्शनको खुसीले | |

**वाक्यार्थ–** दैत्यराज बलिले आफ्नो भवनमा सम्पूर्ण संसारका नै आत्मा, इष्टदेव र आफ्ना भगवान्लाई प्रवेश गरेको देखे। उहाँहरूको दर्शन गर्नाले परमानन्दले हृदय परिपूर्ण भएका उनले परिवारसहित झटपट उठेर उहाँहरूलाई प्रणाम गरे।

**तयोः समानीय वरासनं मुदा निविष्टयोस्तत्र महात्मनोस्तयोः।**

**दधार पादाववनिज्य तज्जलं सवृन्द आब्रह्म पुनद्यदम्बु ह॥ ३६॥**

**पदार्थ–**
**मुदा** = प्रसन्नतापूर्वक
**तयोः** = ती दुईलाई
**वरासनं** = श्रेष्ठ आसन
**समानीय** = ल्याइदिएपछि
**तत्र** = त्यहाँ
**निविष्टयोः** = बस्नुभएका
**तयोः** = उहाँहरू दुबै
**महात्मनोः** = महात्माहरूको
**पादौ** = चरण
**अवनिज्य** = पखालेर
**यत्** = जुन
**अम्बु** = जलले
**ह** = निश्चय नै
**आब्रह्म** = ब्रह्मादेखि सम्पूर्ण जगत्लाई
**पुनत्** = पवित्र गर्दछ
**तत्** = त्यो
**जलं** = जललाई
**सवृन्दः** = सपरिवार (बलिले)
**दधार** = (शिरमा) धारण गरे

**वाक्यार्थ–** बलिले प्रसन्नतापूर्वक श्रीकृष्ण र बलराम दुबैलाई श्रेष्ठ आसन प्रदान गरे। उहाँहरू दुबै त्यहाँ बसिसकेपछि उनले चरण पखालेर ब्रह्मादेखि सम्पूर्ण जगत्लाई पवित्र गर्ने त्यस जललाई सपरिवार शिरमा धारण गरे।

**समर्हयामास स तौ विभूतिभिर्महार्हवस्त्राभरणानुलेपनैः।**
**ताम्बूलदीपामृतभक्षणादिभिः स्वगोत्रवित्तात्मसमर्पणेन च॥ ३७॥**

**पदार्थ–**
**सः** = उनले
**तौ** = उहाँहरू दुबैलाई
**विभूतिभिः** = अनेक ऐश्वर्यद्वारा
**महार्हवस्त्राभरणानुलेपनैः** = बहुमूल्य वस्त्र, आभूषण र चन्दन आदिद्वारा
**ताम्बूलदीपामृतभक्षणादिभिः** = ताम्बूल, दीप एवं अमृतसमान मिठा भोजनहरूद्वारा
**स्वगोत्रवित्तात्मसमर्पणेन च** = आफ्ना समस्त परिवार, धन र शरीरलाई समेत समर्पण गरेर
**समर्हयामास** = पूजा गरे

**वाक्यार्थ–** बलिले श्रीकृष्ण र बलरामलाई अनन्त ऐश्वर्य अर्पण गरे। उनले बहुमूल्य वस्त्र, आभूषण, चन्दन, ताम्बूल, दीप एवं अमृतसमान भोजन आदि सामग्री र त्यसै गरी आफ्ना सम्पूर्ण परिवार, धन र आफैँलाई पनि भगवान्मा समर्पण गरेर उहाँहरूको पूजा गरे।

**स इन्द्रसेनो भगवत्पदाम्बुजं बिभ्रन्मुहुः प्रेमविभिन्नया धिया।**
**उवाच हानन्दजलाकुलेक्षणः प्रहृष्टरोमा नृप गद्गदाक्षरम्॥ ३८॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**ह** = निश्चय नै
**आनन्दजलाकुलेक्षणः** = हर्षको आँसुद्वारा आँखा भरिएका
**प्रहृष्टरोमा** = रोमाञ्चित भएका
**सः** = ती
**इन्द्रसेनः** = बलिले
**प्रेमविभिन्नया** = प्रेमद्वारा विह्वल भएको
**धिया** = मनले
**भगवत्पदाम्बुजं** = भगवान्को चरणलाई
**बिभ्रन्** = धारण गर्दै
**गद्गदाक्षरं** = गद्गद स्वरले
**मुहुः** = बारम्बार
**उवाच** = स्तुति गरे

**वाक्यार्थ–** हे राजा परीक्षित्! राजा बलिका दुबै आँखा हर्षाश्रुद्वारा भरिएका थिए र उनी रोमाञ्चित भइरहेका थिए। प्रेमद्वारा विह्वल भएको मनले शिरमाथि भगवान्को चरणलाई धारण गर्दै उनले गद्गद भएको स्वरद्वारा बारम्बार भगवान्को स्तुति गरे।

**बलिरुवाच** (बलिले भने)

**नमोऽनन्ताय बृहते नमः कृष्णाय वेधसे ।**

**साङ्ख्ययोगवितानाय ब्रह्मणे परमात्मने ॥ ३९ ॥**

**पदार्थ–**
**बृहते** = (सम्पूर्ण भूमण्डललाई धारण गर्ने) सर्वव्यापक
**अनन्ताय** = अनन्त
**वेधसे** = जगत्का निर्माता
**कृष्णाय** = श्रीकृष्णलाई
**नमः** = नमस्कार छ
**साङ्ख्ययोगवितानाय** = साङ्ख्य र योगका प्रवर्तक
**ब्रह्मणे** = ब्रह्मस्वरूप
**परमात्मने** = परमात्मालाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** सम्पूर्ण भूमण्डललाई धारण गर्ने सर्वव्यापक अनन्तरूप सङ्कर्षणलाई नमस्कार छ। सम्पूर्ण जगत्का रचयिता भगवान् श्रीकृष्णलाई नमस्कार छ। साङ्ख्य एवं योगशास्त्रका प्रवर्तक परब्रह्म परमात्मालाई नमस्कार छ।

**दर्शनं वां हि भूतानां दुष्प्रापं चाप्यदुर्लभम् ।**

**रजस्तमःस्वभावानां यन्नः प्राप्तौ यदृच्छया ॥ ४० ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**वां** = हजुरहरूको
**दर्शनं** = दर्शन
**भूतानां** = प्राणीहरूका लागि
**दुष्प्रापं च** = दुर्लभ छ
**अदुर्लभम् अपि** = सुलभ पनि छ
**यत्** = किनभने
**रजस्तमःस्वभावानां** = रजोगुणी र तमोगुणी स्वभाव भएका
**नः** = हामीहरूद्वारा
**यदृच्छया** = सहजरूपमा नै
**प्राप्तौ** = प्राप्त हुनुभयो

**वाक्यार्थ–** हजुरहरूको दर्शन सामान्य प्राणीहरूलाई अत्यन्त दुर्लभ छ तर (हजुरहरूको कृपा भयो भने त्यो अत्यन्त) सुलभ पनि छ। किनभने रजोगुणी र तमोगुणी स्वभाव भएका हामीहरूले पनि आज हजुरहरूकै कृपाद्वारा हजुरहरूको दर्शन प्राप्त गरेका छौं।

**दैत्यदानवगन्धर्वाः सिद्धविद्याध्रचारणाः ।**

**यक्षरक्षःपिशाचाश्च भूतप्रमथनायकाः ॥ ४१ ॥**

**विशुद्धसत्त्वधाम्न्यद्धा त्वयि शास्त्रशरीरिणि ।**

**नित्यं निबद्धवैरास्ते वयं चान्ये च तादृशाः ॥ ४२ ॥**

**केचनोद्बद्धवैरेण भक्त्या केचन कामतः ।**

**न तथा सत्त्वसंरब्धाः सन्निकृष्टाः सुरादयः ॥ ४३ ॥**

**पदार्थ–**
**दैत्यदानवगन्धर्वाः** = दैत्य, दानव र गन्धर्वहरू

**सिद्धविद्याध्रचारणाः** = सिद्ध, विद्याधर र चारणहरू
**यक्षरक्षःपिशाचाः च** = यक्ष, राक्षस र पिशाचहरू
**भूतप्रमथनायकाः** = भूत र प्रमथगणहरू
**विशुद्धसत्त्वधाम्नि** = विशुद्ध सत्त्वस्वरूप
**शास्त्रशरीरिणि** = वेदमय शरीर हुनुहुने
**त्वयि** = हजुरमा
**अद्धा** = निश्चय नै
**नित्यं** = सधैँ
**निबद्धवैराः** = वैरभाव गर्ने
**ते** = ती
**वयं च** = हामीहरू समेत
**अन्ये** = अरू
**तादृशाः च** = तीजस्तै प्राणीहरू पनि
**केचन** = कोही
**उद्बद्धवैरेण** = अत्यन्त दृढ वैरभावद्वारा
**केचन** = कोही
**भक्त्या** = भक्तिद्वारा र
**कामतः** = कोही कामनाद्वारा नै हजुरलाई प्राप्त गर्दछन्
**सत्त्वसंरब्धाः** = सत्त्वगुणी स्वभावका
**सन्निकृष्टाः** = नजिकै रहने
**सुरादयः** = देवताहरूले
**तथा** = यति सजिलै
**न** = प्राप्त गर्दैनन्

**वाक्यार्थ–** हे भगवान् ! हजुरको स्वरूप विशुद्ध सत्त्वमय र वेदमय छ तर दैत्य, दानव, गन्धर्व, सिद्ध, विद्याधर, चारण, यक्ष, राक्षस, पिशाच, भूत, प्रमथगण यी सबै हजुरसँग दृढतापूर्वक द्वेषबुद्धि गर्दछन्। यस्ता हामीहरूमध्ये धेरैजसोले अत्यन्त दृढ वैरभावद्वारा हजुरलाई प्राप्त गरेका छौँ भने कसैले भक्ति अनि कसैले चाहिँ कामनाद्वारा प्राप्त गरेका छन्। हामीले जति सजिलैसँग हजुरलाई प्राप्त गऱ्यौँ, त्यति सजिलै सत्त्वगुणी एवं हजुरका निकट गइरहने देवताहरूले समेत हजुरलाई प्राप्त गरेका छैनन्।

**इदमित्थमिति प्रायस्तव योगेश्वरेश्वर।**
**न विदन्त्यपि योगेशा योगमायां कुतो वयम्॥ ४४॥**

पदार्थ–
**योगेश्वरेश्वर** = हे योगेश्वरहरूका पनि ईश्वर
**प्रायः** = प्रायः जसो
**तव** = हजुरको
**योगमायां** = योगमायालाई
**योगेशाः अपि** = योगेश्वरहरूले पनि
**इदं इत्थं इति** = यो यस्तै हो भनेर
**न विदन्ति** = जान्दैनन् भने
**वयं** = हामीहरू
**कुतः** = कसरी जान्न सक्छौँ

**वाक्यार्थ–** हे योगेश्वरहरूका पनि ईश्वर ! हजुरको योगमायालाई श्रेष्ठ योगेश्वरहरूले पनि यो यस्तै हो भनी जान्न सक्दैनन् भने हामीहरूले कसरी जान्न सक्दछौँ र ?

**तन्नः प्रसीद निरपेक्षविमृग्ययुष्मत्-**
**पादारविन्दधिषणान्यगृहान्धकूपात्।**
**निष्क्रम्य विश्वशरणाङ्घ्र्युपलब्धवृत्तिः**
**शान्तो यथैव उत सर्वसखैश्चरामि॥ ४५॥**

**पदार्थ–**
**तत्** = त्यसैले
**नः** = हामीमाथि
**प्रसीद** = प्रसन्न हुनुहोस्
**निरपेक्षविमृग्ययुष्मत्पादारविन्द-धिषणान्यगृहान्धकूपात्** = निष्काम पुरुषहरूद्वारा चाहना गरिने हजुरको चरणकमलभन्दा भिन्न घरपरिवाररूपी अँध्यारो कुवाबाट
**निष्क्रम्य** = निस्किएर
**विश्वशरणाङ्घ्र्युपलब्धवृत्तिः** = संसारैका आश्रय भएका हजुरका चरणको सेवा गरेर
**शान्तः** = शान्त भई
**यथा** = जसरी
**एकः** = एक्लै
**उत** = अथवा
**सर्वसखैः** = सर्वहितैषी सन्तहरूसँग
**चरामि** = रहन सकूँ

**वाक्यार्थ–** हे भगवान् ! ममाथि प्रसन्न हुनुहोस्। हजुरको चरणकमलको चाहना निष्काम पुरुषहरू पनि गर्दछन्। त्यसभन्दा भिन्न घरपरिवाररूपी अँध्यारो कुवाबाट निस्किएर सबैलाई आश्रय दिने हजुरका चरणको सेवा गरेर मुनि जीवन धारण गरी म एक्लै शान्तिपूर्वक रहन सकूँ अथवा हजुरका भक्तहरूको साथ रहन सकूँ।

**शाध्यस्मानीशितव्येश निष्पापान् कुरु नः प्रभो ।**
**पुमान्यच्छ्रद्धयातिष्ठंश्चोदनाया विमुच्यते ॥ ४६ ॥**

**पदार्थ–**
**ईशितव्येश** = सम्पूर्ण जगत्का नियन्ता भगवान्
**अस्मान्** = हामीहरूलाई
**शाधि** = आज्ञा दिनुहोस्
**प्रभो** = हे प्रभु
**नः** = हामीहरूलाई
**निष्पापान्** = निष्पाप
**कुरु** = बनाउनुहोस्
**यत्** = हजुरको आज्ञालाई
**श्रद्धया** = श्रद्धापूर्वक
**अतिष्ठन्** = पालन गर्नाले
**पुमान्** = व्यक्ति
**चोदनायाः** = विधिनिषेधको बन्धनबाट
**विमुच्यते** = मुक्त हुन्छ

**वाक्यार्थ–** हे भगवान् ! हजुर सम्पूर्ण जगत्का नियन्ता हुनुहुन्छ। त्यसैले उपयुक्त आज्ञा दिई हामीलाई निष्पाप बनाउनुहोस्। किनभने जो व्यक्ति श्रद्धापूर्वक हजुरको आज्ञालाई पालन गर्दछ, त्यो व्यक्ति विधिनिषेधरूप संसारबन्धनबाट मुक्त हुन्छ।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**आसन् मरीचेः षट्पुत्रा ऊर्णायां प्रथमेऽन्तरे ।**
**देवाः कं जहसुर्वीक्ष्य सुतं यभितुमुद्यतम् ॥ ४७ ॥**
**तेनासुरीमगन् योनिमधुनावद्यकर्मणा ।**
**हिरण्यकशिपोर्जाता नीतास्ते योगमायया ॥ ४८ ॥**
**देवक्या उदरे जाता राजन् कंसविहिंसिताः ।**
**सा ताञ्छोचत्यात्मजान् स्वांस्त इमेऽध्यासतेऽन्तिके ॥ ४९ ॥**

पदार्थ—
**राजन्** = हे राजा बलि
**प्रथमे** = पहिलो
**अन्तरे** = स्वायम्भुव मन्वन्तरमा
**मरीचेः** = मरीचिकी
**ऊर्णायां** = ऊर्णा नामकी पत्नीमा
**षट्पुत्राः** = छ पुत्रहरू
**आसन्** = भएका थिए
**सुतां** = आफ्नी पुत्री वाग्देवीसँग
**यभितुं** = समागम गर्न
**उद्यतं** = तयार भएका
**कं** = ब्रह्माजीलाई
**वीक्ष्य** = देखेर
**देवाः** = यी देवताहरूले
**जहसुः** = उपहास गरे
**तेन** = त्यही
**अवद्यकर्मणा** = उपहासरूप निन्दित कर्मबाट
**आसुरीम्** = आसुरी
**योनिं** = योनिमा
**अगन्** = गए र
**हिरण्यकशिपोः** = हिरण्यकशिपुका पुत्रका रूपमा
**जाताः** = उत्पन्न भए
**अधुना** = अहिले
**योगमायया** = योगमायाद्वारा
**नीताः** = ल्याइएका
**ते** = तिनीहरू
**देवक्याः** = देवकीको
**उदरे** = गर्भबाट
**जाताः** = उत्पन्न भए
**कंसविहिंसिताः** = कंसबाट मृत्युमा प्राप्त भए
**सा** = ती देवकीले
**तान्** = ती
**स्वान्** = आफ्ना
**आत्मजान्** = छोराहरूलाई
**शोचती** = सम्झी शोक गरिरहनुभएको छ
**इमे** = यिनीहरू
**ते** = तिम्रो
**अन्तिके** = निकट
**अध्यासते** = रहेका छन्

**वाक्यार्थ—** हे दैत्यराज बलि ! स्वायम्भुव नामक पहिलो मन्वन्तरमा प्रजापति मरीचिकी ऊर्णा नामकी पत्नीका छ पुत्रहरू भए। ब्रह्माजीले मोहवश आफ्नी पुत्री वाग्देवीसँग समागम गर्न तयार भएको वेलामा यी देवताहरूले ब्रह्माजीलाई उपहास गरे र आफ्नो उपहास गर्ने अपराधको दण्डको रूपमा ब्रह्माजीको श्रापबाट तिनीहरू आसुरी योनिमा पुगी हिरण्यकशिपुका पुत्रहरूका रूपमा उत्पन्न भएका थिए। त्यसपछि तिनीहरूलाई योगमायाले देवकीको गर्भमा राखिदिइन् र त्यहाँबाट जन्मिनेबित्तिकै कंसले तिनलाई मारिदिए। माता देवकी अहिले पनि आफ्ना ती पुत्रहरूलाई सम्झिई शोक गरिहनुभएको छ र ती पुत्रहरू अहिले तिम्रा नजिकमा छन्।

**इत एतान् प्रणेष्यामो मातृशोकापनुत्तये।**
**ततः शापाद् विनिर्मुक्ता लोकं यास्यन्ति विज्वराः॥ ५०॥**
**स्मरोद्गीथः परिष्वङ्गः पतङ्गः क्षुद्रभृद् घृणी।**
**षडिमे मत्प्रसादेन पुनर्यास्यन्ति सद्गतिम्॥ ५१॥**

पदार्थ—
**मातृशोकापनुत्तये** = माता देवकीको शोक नष्ट गर्न
**इतः** = यहाँबाट
**एतान्** = यिनीहरूलाई
**प्रणेष्यामः** = लिएर जानेछौँ
**ततः** = त्यसपछि
**शापात्** = (ब्रह्माको) श्रापबाट
**विनिर्मुक्ताः** = मुक्त भएका
**विज्वराः** = दुःखरहित यिनीहरू
**लोकं** = आफ्नो लोकमा
**यास्यन्ति** = जानेछन्
**स्मरोद्गीथः** = स्मर र उद्गीथ
**परिष्वङ्गः** = परिष्वङ्ग
**पतङ्गः** = पतङ्ग

| | | |
|---|---|---|
| **क्षुद्रभृत्** = क्षुद्रभृत् | **षट्** = छ भाइहरू | **सद्गतिं** = सद्गतिमा |
| **घृणी** = घृणी | **मत्प्रसादेन** = मेरो कृपाद्वारा | **यास्यन्ति** = प्राप्त हुनेछन् |
| **इमे** = यी | **पुनः** = फेरि | |

**वाक्यार्थ–** हे बलि ! आफ्नी माता देवकीको शोकलाई नष्ट गर्न हामीले यिनीहरूलाई यहाँबाट लिएर जानेछौँ। त्यसपछि ब्रह्माजीको श्रापबाट मुक्त भई सुखी भएका यिनीहरू आफ्नो लोकमा जानेछन्। स्मर, उद्गीथ, परिष्वङ्ग, पतङ्ग, क्षुद्रभृत् र घृणी यी छ भाइहरू मेरो कृपाद्वारा पुनः सद्गतिमा प्राप्त हुनेछन्।

**इत्युक्त्वा तान् समादाय इन्द्रसेनेन पूजितौ।**
**पुनर्द्वारवतीमेत्य मातुः पुत्रानयच्छताम्॥ ५२॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **तान्** = तिनीहरूलाई | **मातुः** = माता देवकीलाई |
| **इति उक्त्वा** = यसो भनी | **समादाय** = लिएर | **पुत्रान्** = ती पुत्रहरू |
| **इन्द्रसेनेन** = बलिद्वारा | **पुनः** = फेरि | **अयच्छताम्** = प्रदान गर्नुभयो |
| **पूजितौ** = पूजित भएका | **द्वारवतीम्** = द्वारकामा | |
| श्रीकृष्ण र बलरामले | **एत्य** = आएर | |

**वाक्यार्थ–** महाराज बलिले श्रीकृष्ण र बलराम दुबैको पूजा गरे। यसपछि ती छ भाइलाई नै लिएर श्रीकृष्ण र बलराम द्वारकामा फर्किनुभयो र आफ्नी माता देवकीलाई ती पुत्रहरू प्रदान गर्नुभयो।

**तान् दृष्ट्वा बालकान् देवी पुत्रस्नेहस्नुतस्तनी।**
**परिष्वज्याङ्कमारोप्य मूर्ध्न्यजिघ्रदभीक्ष्णशः॥ ५३॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **बालकान्** = आफ्ना | **आरोप्य** = राखेर |
| **पुत्रस्नेहस्नुतस्तनी** = पुत्रस्नेहबाट | बालकहरूलाई | **अभीक्ष्णशः** = बारम्बार |
| स्तन रसाइरहेकी | **दृष्ट्वा** = देखेर | **मूर्ध्नि** = शिरमा |
| **देवी** = माता देवकीले | **परिष्वज्य** = अङ्कमाल गरी | **अजिघ्रत्** = सुँघ्नुभयो |
| **तान्** = ती | **अङ्कं** = काखमा | |

**वाक्यार्थ–** पुत्रस्नेहको कारण माता देवकीका स्तन रसाइरहेका थिए। आफ्ना बालकहरूलाई मृत्युबाट फर्किएको देखी अङ्कमाल गरी उहाँले सबैलाई आफ्नो काखमा राख्नुभयो र बारम्बार शिरमा सुँघ्नुभयो।

**अपाययत् स्तनं प्रीता सुतस्पर्शपरिप्लुता।**
**मोहिता मायया विष्णोर्यया सृष्टिः प्रवर्तते॥ ५४॥**

**पदार्थ–**
**यया** = जसद्वारा
**सृष्टिः** = सृष्टि
**प्रवर्तते** = चल्दछ (त्यस्ती)
**विष्णोः** = भगवान् विष्णुको
**मायया** = मायाशक्तिद्वारा
**मोहिता** = मोहित भएकी
**सुतस्पर्शपरिप्लुता** = छोराहरूको स्पर्शद्वारा हृदय पग्लिएकी
**प्रीता** = अत्यन्त प्रसन्न देवकीले
**स्तनं** = स्तन
**अपाययत्** = पिलाउनुभयो

**वाक्यार्थ–** भगवान् विष्णुको जुन मायाद्वारा नै सम्पूर्ण सृष्टि चल्दछ त्यो मायाद्वारा मोहित भएकी देवकीको आफ्ना छोराहरूको स्पर्शबाट हृदय पग्लियो र अत्यन्त प्रसन्न भएकी उहाँले ती सबैलाई स्तनपान गराउनुभयो।

**पीत्वामृतं पयस्तस्याः पीतशेषं गदाभृतः।**
**नारायणाङ्गसंस्पर्शप्रतिलब्धात्मदर्शनाः॥ ५५॥**
**ते नमस्कृत्य गोविन्दं देवकीं पितरं बलम्।**
**मिषतां सर्वभूतानां ययुर्धाम दिवौकसाम्॥ ५६॥**

**पदार्थ–**
**गदाभृतः** = गदाधारी भगवान् श्रीकृष्णले
**पीतशेषं** = पिएर बाँकी रहेको
**तस्याः** = ती देवकीको
**अमृतं** = अमृतसमान
**पयः** = दुध
**पीत्वा** = पिएर
**नारायणाङ्गसंस्पर्शप्रतिलब्धात्मदर्शनाः** = श्रीकृष्णको अङ्गस्पर्शलाई पाएर आत्मसाक्षात्कार प्राप्त भएका
**ते** = तिनीहरूले
**गोविन्दं** = श्रीकृष्ण भगवान्
**देवकीं** = माता देवकी
**पितरं** = पिता वसुदेव
**बलं** = बलरामलाई पनि
**नमस्कृत्य** = नमस्कार गरी
**सर्वभूतानां** = सम्पूर्ण प्राणीहरूले
**मिषतां** = हेर्दाहेर्दै
**दिवौकसां** = देवताहरूको
**धाम** = लोकमा
**ययुः** = गए

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले पिएर बाँकी रहेको देवकीको स्तनबाट निःसृत अमृतमय दुधलाई पिउनाले र श्रीकृष्णको अङ्गस्पर्शलाई पाउनाले ती छ भाइलाई आत्मसाक्षात्कार भयो। ती सबैले भगवान् श्रीकृष्ण, माता देवकी, पिता वसुदेव र बलरामलाई नमस्कार गरे र सबै प्राणीहरूले हेर्दाहेर्दै उनीहरू देवताहरूको लोकमा गए।

**तं दृष्ट्वा देवकी देवी मृतागमननिर्गमम्।**
**मेने सुविस्मिता मायां कृष्णस्य रचितां नृप॥ ५७॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**तं** = त्यो
**मृतागमननिर्गमं** = मरेका छोराहरूको आगमन र गमनलाई
**दृष्ट्वा** = देखेर
**सुविस्मिता** = अत्यन्त विस्मित
**देवकी** = देवकी
**देवी** = देवीले
**कृष्णस्य** = श्रीकृष्णद्वारा
**रचितां** = रचिएको
**मायां** = माया
**मेने** = ठान्नुभयो

**वाक्यार्थ–** हे परीक्षित्! मरेका आफ्ना छोराहरू अकस्मात् आएको र तत्काल नै देवलोकतिर

गएको समेत देखी देवकी देवी अत्यन्त विस्मित हुनुभयो। उहाँले यसलाई भगवान् श्रीकृष्णले रचेको माया ठान्नुभयो।

**एवंविधान्यद्भुतानि कृष्णस्य परमात्मनः।**

**वीर्याण्यनन्तवीर्यस्य सन्त्यनन्तानि भारत॥ ५८॥**

**पदार्थ–**
**भारत** = हे भरतवंशी परीक्षित्
**अनन्तवीर्यस्य** = अनन्त पराक्रम भएका
**कृष्णस्य** = श्रीकृष्ण
**परमात्मनः** = भगवान्का
**एवंविधानि** = यस्ता प्रकारका
**अद्भुतानि** = अद्भुत
**अनन्तानि** = अनन्त
**वीर्याणि** = लीलाचरित्रहरू
**सन्ति** = रहेका छन्

**वाक्यार्थ–** हे परीक्षित्! भगवान् श्रीकृष्णको पराक्रम अनन्त छ। उहाँका यस्ता अद्भुत लीलाचरित्रहरू अनन्त रहेका छन्।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**य इदमनुशृणोति श्रावयेद् वा मुरारे-**

**श्चरितममृतकीर्तेर्वर्णितं व्यासपुत्रैः।**

**जगदघभिदलं तद्भक्तसत्कर्णपूरं**

**भगवति कृतचित्तो याति तत्क्षेमधाम॥ ५९॥**

**पदार्थ–**
**यः** = जसले
**व्यासपुत्रैः** = व्यासपुत्र शुकदेवद्वारा
**वर्णितं** = वर्णन गरिएको
**जगदघभित्** = संसारका सम्पूर्ण पापलाई नष्ट गर्ने
**तद्भक्तसत्कर्णपूरं** = भगवद्भक्तहरूका कानलाई आनन्दित गर्ने
**अमृतकीर्तेः** = अनन्त कीर्ति भएका
**मुरारेः** = भगवान् श्रीकृष्णको
**इदं** = यो
**चरितं** = चरित्रलाई
**अलं** = पूर्णतया
**अनुशृणोति** = सुन्दछ
**श्रावयेत् वा** = अथवा सुनाउँछ, त्यो
**भगवति** = भगवान्मा
**कृतचित्तः** = चित्त लागी
**तत्क्षेमधाम** = उहाँको मङ्गलमय पदमा
**याति** = प्राप्त हुन्छ

**वाक्यार्थ–** व्यासपुत्र शुकदेवद्वारा वर्णन गरिएको अनन्तकीर्ति भगवान् श्रीकृष्णको चरित्र संसारभरका सम्पूर्ण पापहरूलाई नष्ट गर्न समर्थ छ, यस चरित्रले भगवद्भक्तहरूका कानलाई आनन्द प्रदान गर्दछ। जसले यस चरित्रलाई पूर्णतया सुन्दछ अथवा सुनाउँछ त्यो व्यक्तिको चित्त भगवान्मा लाग्दछ र उसले भगवान्को मङ्गलमय पदलाई प्राप्त गर्दछ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**

**मृताग्रजानयनं नाम पञ्चाशीतितमोऽध्यायः॥ ८५॥**

# अथ षडशीतितमोऽध्यायः

## सुभद्रा–हरण

**राजोवाच** (राजा परीक्षित्‌ले भन्नुभयो)

**ब्रह्मन् वेदितुमिच्छामः स्वसारं रामकृष्णयोः ।**

**यथोपयेमे विजयो या ममासीत् पितामही ॥ १ ॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्रह्मज्ञानी शुकदेव
**या** = जो
**मम** = मेरी
**पितामही** = हजुरआमा
**आसीत्** = हुनुहुन्थ्यो
**रामकृष्णयोः** = भगवान् बलराम र श्रीकृष्णकी
**स्वसारं** = बहिनी सुभद्रालाई
**विजयः** = मेरा पितामह अर्जुनले
**यथा** = जुन प्रकारले
**उपयेमे** = विवाह गर्नुभयो त्यो
**वेदितुं** = जान्न
**इच्छामः** = चाहन्छौँ

**वाक्यार्थ–** हे ब्रह्मज्ञानी शुकदेव ! भगवान् श्रीकृष्ण र बलरामकी बहिनी सुभद्रा मेरी हजुरआमा हुनुहुन्थ्यो। मेरा पितामह अर्जुनले उहाँसँग जसरी विवाह गर्नुभयो, म त्यो प्रसङ्ग सुन्न चाहन्छु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अर्जुनस्तीर्थयात्रायां पर्यटन्नवनीं प्रभुः ।**

**गतः प्रभासमशृणोन्मातुलेयीं स आत्मनः ॥ २ ॥**

**दुर्योधनाय रामस्तां दास्यतीति न चापरे ।**

**तल्लिप्सुः स यतिर्भूत्वा त्रिदण्डी द्वारकामगात् ॥ ३ ॥**

**पदार्थ–**
**प्रभुः** = परमवीर
**अर्जुनः** = अर्जुन
**तीर्थयात्रायां** = तीर्थयात्राको क्रममा
**अवनीं** = पृथिवीभर
**पर्यटन्** = भ्रमण गर्दै
**प्रभासं** = प्रभास क्षेत्रमा
**गतः** = पुगे
**सः** = उनले
**आत्मनः** = आफ्नी
**मातुलेयीं** = मामाकी छोरी सुभद्राको विषयमा
**अशृणोत्** = सुने
**रामः** = बलरामले
**तां** = तिनलाई
**दुर्योधनाय** = दुर्योधनका लागि
**दास्यति** = दिन खोज्दैछन्
**अपरे च** = अरूले चाहिँ
**न इति** = होइन भन्ने सुनेर
**तल्लिप्सुः** = तिनलाई चाहँदै
**सः** = ती अर्जुन
**त्रिदण्डी** = त्रिदण्डी
**यतिः** = संन्यासी
**भूत्वा** = भएर
**द्वारकां** = द्वारका
**अगात्** = गए

**वाक्यार्थ–** परमवीर अर्जुन तीर्थयात्राको क्रममा पृथिवीभर भ्रमण गर्दै प्रभास क्षेत्रमा पुगेका थिए,

त्यही वेलामा उनले आफ्नी मामाकी छोरी सुभद्रालाई बलराम दुर्योधनसँग विवाह गरिदिन खोज्दैछन्, अरूले चाहिँ होइन भन्ने सुने। त्यस्तो थाहा पाई सुभद्रालाई पाउने इच्छाले अर्जुन त्रिदण्डी संन्यासीको वेष धारण गरी द्वारकामा गए।

**तत्र वै वार्षिकान् मासानवात्सीत् स्वार्थसाधकः।**
**पौरैः सभाजितोऽभीक्ष्णं रामेणाजानता च सः॥ ४॥**

**पदार्थ–**
**अजानता** = अर्जुन भन्ने नजान्ने
**रामेण** = बलरामद्वारा
**पौरैः च** = पुरवासीहरूद्वारा पनि
**अभीक्ष्णं** = निरन्तर
**सभाजितः** = सेवा गरिएका
**स्वार्थसाधकः** = स्वार्थसिद्ध गर्न खोज्ने
**सः** = तिनी
**वै** = निश्चय नै
**तत्र** = त्यहाँ
**वार्षिकान्** = वर्षाकालका
**मासान्** = चार महिना
**अवात्सीत्** = बसे

**वाक्यार्थ–** बलरामले तिनलाई अर्जुन भनी चिन्नुभएन। त्यसैले उहाँले र अन्य द्वारकाका बासिन्दाहरूले पनि उनको निरन्तर सेवा गरिरहे। आफ्नो स्वार्थ सिद्ध गर्न खोज्ने तिनी वर्षाकालका चार महिनासम्म द्वारकामैं बसे।

**एकदा गृहमानीय आतिथ्येन निमन्त्र्य तम्।**
**श्रद्धयोपहृतं भैक्ष्यं बलेन बुभुजे किल॥ ५॥**

**पदार्थ–**
**किल** = निश्चय नै
**एकदा** = एकपटक
**आतिथ्येन** = अतिथिसत्कारको विधानले
**तं** = उनलाई
**निमन्त्र्य** = निमन्त्रण गरी
**गृहं** = घरमा
**आनीय** = ल्याई
**बलेन** = बलरामद्वारा
**श्रद्धया** = श्रद्धापूर्वक
**उपहृतं** = अर्पण गरिएको
**भैक्ष्यं** = भिक्षाभोजनलाई
**बुभुजे** = ग्रहण गरे

**वाक्यार्थ–** एकपटक बलरामले तिनलाई अतिथिसत्कारको विधानले घरमा निमन्त्रण गर्नुभयो र श्रद्धापूर्वक भिक्षाभोजन दिनुभयो। तिनले पनि त्यो भोजनलाई ग्रहण गरे।

**सोऽपश्यत् तत्र महतीं कन्यां वीरमनोहराम्।**
**प्रीत्युत्फुल्लेक्षणस्तस्यां भावक्षुब्धं मनो दधे॥ ६॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ (अर्जुनले)
**वीरमनोहरां** = वीरहरूको मनलाई समेत हरण गर्ने
**महतीं** = ठुली भइसकेकी
**कन्यां** = कन्यालाई
**अपश्यत्** = देखे
**प्रीत्युत्फुल्लेक्षणः** = प्रेमले आँखा प्रफुल्लित भएका
**सः** = उनले
**तस्यां** = तिनमा
**भावक्षुब्धं** = कन्याप्राप्तिको कामनाले क्षुब्ध भएको
**मनः** = मन
**दधे** = लगाए

**वाक्यार्थ–** भोजनको समयमा अर्जुनले वीरहरूको मनलाई समेत हरण गर्ने विवाहयोग्य उमेरकी युवती सुभद्रालाई देखे। प्रेमका कारण आँखा प्रफुल्लित भएका उनले ती सुभद्रालाई पाउने इच्छाले क्षुब्ध भएको मन उनैतिर लगाए।

**सापि तं चकमे वीक्ष्य नारीणां हृदयंगमम्।**

**हसन्ती व्रीडितापाङ्गी तन्न्यस्तहृदयेक्षणा ॥ ७ ॥**

**पदार्थ–**
**नारीणां** = नारीहरूको
**हृदयंगमं** = मनलाई हरण गरिदिने
**वीक्ष्य** = (अर्जुनलाई) देखेर
**तन्न्यस्तहृदयेक्षणा** = उनैमा हृदय र नजर दुबै लागेकी
**हसन्ती** = हाँसिरहेकी
**व्रीडितापाङ्गी** = लजालु कर्के नजर भएकी
**सा अपि** = उनले पनि
**तं** = ती अर्जुनलाई
**चकमे** = चाहिन्

**वाक्यार्थ–** नारीहरूको मनलाई हरण गरिदिने अर्जुनलाई देखेर सुभद्राले पनि आफ्नो हृदय र नजर दुबै उनैतिर लगाइन्। लजालु कर्के नजर भएकी र मन्द मुस्कुराइरहेकी उनले पनि मनमनै तिनै अर्जुनलाई पति बनाउने चाहना गरिन्।

**तां परं समनुध्यायन्नन्तरं प्रेप्सुरर्जुनः।**

**न लेभे शं भ्रमच्चित्तः कामेनातिबलीयसा ॥ ८ ॥**

**पदार्थ–**
**तां** = ती सुभद्रालाई
**परं** = अत्यन्त
**समनुध्यायन्** = चिन्तन गरिरहेका
**अन्तरं** = हरण गर्ने अवसरलाई
**प्रेप्सुः** = खोजिरहेका
**अतिबलीयसा** = अत्यन्त बलिष्ठ
**कामेन** = कामनाद्वारा
**भ्रमच्चित्तः** = चित्त विक्षिप्त भइरहेका
**अर्जुनः** = अर्जुनले
**शं** = शान्ति
**न लेभे** = पाएनन्

**वाक्यार्थ–** यसपछि अर्जुनले निरन्तर रूपमा उनै सुभद्राको चिन्तन गर्न थाले र कहिले सुभद्रालाई हरण गरूँ भनी अवसर खोज्न थाले। यसप्रकार अत्यन्त बलिष्ठ कामनाद्वारा चित्त विक्षिप्त भएका अर्जुनले शान्ति पाएनन्।

**महत्यां देवयात्रायां रथस्थां दुर्गनिर्गताम्।**

**जहारानुमतः पित्रोः कृष्णस्य च महारथः ॥ ९ ॥**

**रथस्थो धनुरादाय शूरांश्चारुन्धतो भटान्।**

**विद्राव्य क्रोशतां स्वानां स्वभागं मृगराडिव ॥ १० ॥**

**पदार्थ—**
**पित्रोः** = माता-पिता देवकी र वसुदेवको
**कृष्णस्य च** = कृष्णको समेत
**अनुमतः** = अनुमति लिएका
**रथस्थः** = रथमा चढेका
**महारथः** = ती महारथी अर्जुनले
**धनुः** = धनु
**आदाय** = लिएर
**महत्यां** = विशाल
**देवयात्रायां** = देवयात्राको समयमा
**दुर्गनिर्गतां** = द्वारकाको किल्लाबाट निस्किएकी
**रथस्थां** = रथमा चढेकी उनलाई
**आरुन्धतः** = रोक्न प्रयास गरिरहेका
**शूरान्** = शूर
**भटान् च** = सैनिकहरूलाई
**विद्राव्य** = तितरवितर पारी
**स्वानां** = (सुभद्राका) आफन्तहरू
**क्रोशतां** = चिच्याइरहँदा नै
**मृगराट्** = सिंहले
**स्वभागं इव** = आफ्नो भागलाई झैँ (सुभद्रालाई)
**जहार** = हरण गरे

**वाक्यार्थ—** देवकी, वसुदेव र श्रीकृष्णसँग अनुमति लिएका महारथी अर्जुनले विशाल देवयात्राको समयमा द्वारकाको किल्लाबाट बाहिर निस्किएकी सुभद्रालाई रथमा रहेकै अवस्थामा त्यहाँबाट हरण गरे। ती अर्जुन आफ्नो धनु लिई रथमा चढेका थिए र आफूलाई रोक्न प्रयास गर्ने सारा शूरवीर सैनिकहरूलाई तितरवितर पारी सुभद्राका वरिपरि रहेका सारा आफन्तहरूले चिच्याउँदै हेर्दाहेर्दै उनले सिंहले आफ्नो भागलाई हरण गरे झैँ सुभद्रालाई हरण गरे।

**तच्छ्रुत्वा क्षुभितो रामः पर्वणीव महार्णवः।**
**गृहीतपादः कृष्णेन सुहृद्भिश्चान्वसाम्यत॥ ११॥**

**पदार्थ—**
**तत्** = त्यो (सुभद्राको हरण भएको)
**श्रुत्वा** = सुनेर
**पर्वणि** = पूर्णिमाको दिन
**महार्णवः इव** = समुद्र झैँ
**क्षुभितः** = क्षुब्ध हुनुभएका
**सुहृद्भिः** = आफन्तहरूद्वारा
**कृष्णेन च** = श्रीकृष्णद्वारा समेत
**गृहीतपादः** = चरण समातिनुभएका
**रामः** = बलराम
**अन्वसाम्यत** = शान्त हुनुभयो

**वाक्यार्थ—** अर्जुनले सुभद्रा हरण गरेको सुनेर बलराम पूर्णिमाको दिन समुद्र क्षुब्ध भए झैँ क्षुब्ध हुनुभयो। श्रीकृष्ण र अन्य आफन्तहरूले चरण समाती अनुनय गरिसकेपछि उहाँ बल्ल शान्त हुनुभयो।

**प्राहिणोत् पारिबर्हाणि वरवध्वोर्मुदा बलः।**
**महाधनोपस्करेभरथाश्वनरयोषितः॥ १२॥**

**पदार्थ—**
**बलः** = बलरामले
**मुदा** = प्रसन्नतापूर्वक
**वरवध्वोः** = वरवधूका लागि
**महाधनोपस्करेभरथाश्वनर-योषितः** = धेरै धन, सामग्री, हात्ती, रथ, घोडा र दासदासी समेत
**पारिबर्हाणि** = उपहार सामग्री
**प्राहिणोत्** = पठाउनुभयो

**वाक्यार्थ–** यसपछि प्रसन्न हुनुभएका बलरामले वर र वधूका लागि धेरै धन, सामग्री, हात्ती, रथ, घोडा र अन्य दासदासी समेत अनेक उपहारहरू पठाउनुभयो।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**कृष्णस्यासीद् द्विजश्रेष्ठः श्रुतदेव इति श्रुतः।**

**कृष्णैकभक्त्या पूर्णार्थः शान्तः कविरलम्पटः॥ १३॥**

**पदार्थ–**
**कृष्णैकभक्त्या** = केवल कृष्णभक्तिबाट
**पूर्णार्थः** = आफ्ना सबै इच्छा पूर्ण भएको ठान्ने
**शान्तः** = शान्त
**कविः** = ज्ञानी
**अलम्पटः** = विरक्त
**श्रुतदेवः इति** = श्रुतदेव नामले
**श्रुतः** = प्रख्यात
**कृष्णस्य** = कृष्णका (भक्त)
**द्विजश्रेष्ठः** = कुनै श्रेष्ठ ब्राह्मण
**आसीत्** = थिए

**वाक्यार्थ–** श्रुतदेव नाम गरेका भगवान् श्रीकृष्णका भक्त श्रेष्ठ ब्राह्मण थिए। परमशान्त, ज्ञानी र विरक्त उनी आफ्ना सबै इच्छाहरू केवल कृष्णभक्तिबाट नै पूरा भएको ठान्दथे।

**स उवास विदेहेषु मिथिलायां गृहाश्रमी।**

**अनीहयाऽऽगताहार्यनिर्वर्तितनिजक्रियः॥ १४॥**

**पदार्थ–**
**अनीहया** = केही उद्योग नगरीकन
**आगताहार्यनिर्वर्तितनिजक्रियः** = प्राप्त भएको भोजनद्वारा जीविका जसोतसो चलाइरहेका
**गृहाश्रमी** = गृहस्थ
**सः** = उनी
**विदेहेषु** = विदेह क्षेत्रको
**मिथिलायां** = मिथिला नगरीमा
**उवास** = बस्दथे

**वाक्यार्थ–** शरीर रक्षाका लागि कुनै पनि प्रयत्न नगर्ने, जस्तो अन्न प्राप्त हुन्छ त्यसैद्वारा आफ्नो जीवनयात्रा चलाउने ती गृहस्थ ब्राह्मण विदेह क्षेत्रको मिथिलानगरीमा बस्दथे।

**यात्रामात्रं त्वहरहर्दैवादुपनमत्युत।**

**नाधिकं तावता तुष्टः क्रियाश्चक्रे यथोचिताः॥ १५॥**

**पदार्थ–**
**दैवात् तु** = दैववश
**अहरहः** = प्रतिदिन
**यात्रामात्रं** = शरीररक्षा गर्न मात्र भोजन
**उपनमति** = प्राप्त हुन्थ्यो
**उत** = त्यो भन्दा
**अधिकं** = बढी
**न** = होइन
**तावता** = त्यतिबाट नै
**तुष्टः** = सन्तुष्ट उनले
**यथोचिताः** = उचित
**क्रियाः** = कर्महरू
**चक्रे** = गरे

**वाक्यार्थ–** प्रारब्धवश प्रतिदिन उनलाई केवल शरीररक्षाका लागि मात्र अलिकति भोजन

मिल्दथ्यो, त्यो भन्दा बढी होइन। उनी त्यसैमा सन्तुष्ट भई उचित कर्महरू गर्दथे।

**तथा तद्राष्ट्रपालोऽङ्ग बहुलाश्व इति श्रुतः।**
**मैथिलो निरहम्मान उभावप्यच्युतप्रियौ॥ १६॥**

**पदार्थ—**
**अङ्ग** = हे प्रिय परीक्षित्
**तथा** = त्यसै गरी
**तद्राष्ट्रपालः** = उनका देशका राजा
**बहुलाश्वः इति** = बहुलाश्व नामले
**श्रुतः** = प्रख्यात
**मैथिलः** = मैथिल वंशका
**निरहम्मानः** = अहङ्काररहित थिए
**उभौ अपि** = दुबै नै
**अच्युतप्रियौ** = श्रीकृष्ण भगवान्‌का प्यारा थिए

**वाक्यार्थ—** हे परीक्षित्! यसै गरी त्यो देशका बहुलाश्व नामका मैथिल वंशी राजा पनि अहङ्काररहित भगवद्भक्त थिए। यी दुबै भगवान् श्रीकृष्णका प्यारा भक्त थिए।

**तयोः प्रसन्नो भगवान् दारुकेणाहृतं रथम्।**
**आरुह्य साकं मुनिभिर्विदेहान् प्रययौ प्रभुः॥ १७॥**

**पदार्थ—**
**तयोः** = ती दुबैमाथि
**प्रसन्नः** = प्रसन्न हुनुभएका
**प्रभुः** = सर्वसमर्थ
**भगवान्** = श्रीकृष्ण भगवान्
**दारुकेण** = दारुकद्वारा
**आहृतं** = ल्याइएको
**रथं** = रथमा
**आरुह्य** = चढेर
**मुनिभिः साकं** = मुनिहरूसँग
**विदेहान्** = विदेह नगरीतर्फ
**प्रययौ** = लाग्नुभयो

**वाक्यार्थ—** सर्वसमर्थ भगवान् श्रीकृष्ण ती दुबै भक्तहरूमाथि प्रसन्न हुनुहुन्थ्यो, त्यसैले दारुकद्वारा ल्याइएको रथमा चढी उहाँ मुनिहरूलाई समेत लिएर विदेह नगरीतर्फ लाग्नुभयो।

**नारदो वामदेवोऽत्रिः कृष्णो रामोऽसितोऽरुणिः।**
**अहं बृहस्पतिः कण्वो मैत्रेयश्च्यवनादयः॥ १८॥**

**पदार्थ—**
**नारदः** = नारद
**वामदेवः** = वामदेव
**अत्रिः** = अत्रि
**कृष्णः** = कृष्णद्वैपायन व्यास
**रामः** = परशुराम
**असितः** = असित
**आरुणिः** = आरुणि
**अहं** = म शुकदेव
**बृहस्पतिः** = बृहस्पति
**कण्वः** = कण्व
**मैत्रेयः** = मैत्रेय र
**च्यवनादयः** = च्यवन आदि ऋषिहरू थिए

**वाक्यार्थ—** भगवान् श्रीकृष्णसँग देवर्षि नारद, वामदेव, अत्रि, कृष्णद्वैपायन व्यास, परशुराम, असित, आरुणि, बृहस्पति, कण्व, मैत्रेय र च्यवन आदि ऋषिहरू थिए र साथै म शुकदेव पनि त्यहीँ थिएँ।

**तत्र तत्र तमायान्तं पौरा जानपदा नृप।**
**उपतस्थुः सार्घ्यहस्ता ग्रहैः सूर्यमिवोदितम्॥ १९॥**

**पदार्थ—**
**नृप** = हे राजा परीक्षित्
**ग्रहैः** = अन्य ग्रहहरूका साथ
**उदितं** = उदाएका
**सूर्यम् इव** = सूर्यलाई (अर्घ्य दिए) झैं
**तत्र तत्र** = ती-ती ठाउँमा
**आयान्तं** = आइपुगेका
**तं** = ती भगवान्लाई
**जानपदाः** = ग्रामवासी
**पौराः** = नगरवासी प्रजाहरूले
**सार्घ्यहस्ताः** = उपहार सामग्रीहरू हातमा लिई
**उपतस्थुः** = उपस्थित भए

**वाक्यार्थ—** हे परीक्षित्! अनेक ग्रहहरूका साथ सूर्य उदाए झैं अनेक ऋषिहरूका साथ ती-ती ठाउँमा आइपुग्नुभएका भगवान्लाई त्यहाँका ग्रामवासी र नगरवासी प्रजाहरूले हातमा अनेक उपहार सामग्री लिएर सत्कार गरे।

**आनर्तधन्वकुरुजाङ्गलकङ्कमत्स्य-**
**पाञ्चालकुन्तिमधुकेकयकोशलार्णाः।**
**अन्ये च तन्मुखसरोजमुदारहास-**
**स्निग्धेक्षणं नृप पपुर्दृशिभिर्नृनार्यः॥ २०॥**

**पदार्थ—**
**नृप** = हे राजा परीक्षित्
**आनर्तधन्वकुरुजाङ्गलकङ्कमत्स्य-पाञ्चालकुन्तिमधुकेकयकोश-लार्णाः** = आनर्त, धन्व, कुरुजाङ्गल, कङ्क, मत्स्य, पाञ्चाल, कुन्ति, मधु, केकय, कोशल, अर्ण आदि देशका
**अन्ये** = अरू पनि
**नृनार्यः च** = नरनारीहरूले
**दृशिभिः** = आँखाद्वारा
**उदारहासस्निग्धेक्षणं** = प्रसन्न हाँसो र प्रेमपूर्ण हेराइ भएका
**तन्मुखसरोजं** = भगवान्को मुखकमललाई
**पपुः** = पिए

**वाक्यार्थ—** हे परीक्षित्! आनर्त, धन्व, कुरुजाङ्गल, कङ्क, मत्स्य, पाञ्चाल, कुन्ति, मधु, केकय, कोशल, अर्ण आदि देशका र अन्य नरनारीहरूले पनि उन्मुक्त हाँसो र प्रेमपूर्ण हेराइले युक्त भगवान्को मुखकमललाई हेरिरहे।

**तेभ्यः स्ववीक्षणविनष्टतमिस्रदृग्भ्यः**
**क्षेमं त्रिलोकगुरुरर्थदृशं च यच्छन्।**
**शृण्वन् दिगन्तधवलं स्वयशोऽशुभघ्नं**
**गीतं सुरैर्नृभिरगाच्छनकैर्विदेहान्॥ २१॥**

**पदार्थ—**
**स्ववीक्षणविनष्टतमिस्रदृग्भ्यः** = आफ्नो (श्रीकृष्णको) दर्शनबाट अज्ञानदृष्टि नष्ट भएका
**तेभ्यः** = ती प्रजाहरूलाई
**क्षेमं** = परमकल्याण र
**अर्थदृशं च** = तत्त्वज्ञान समेत
**यच्छन्** = प्रदान गर्दै
**सुरैः** = देवताहरूद्वारा
**नृभिः** = मनुष्यहरूद्वारा
**गीतं** = गाइएको
**दिगन्तधवलं** = समस्त दिशालाई उज्वल बनाउने
**अशुभघ्नं** = अशुभ नष्ट गर्ने
**स्वयशः** = आफ्नो कीर्तिकथा
**शृण्वन्** = सुन्दै
**त्रिलोकगुरुः** = तीनै लोकका गुरु भगवान्
**शनकैः** = बिस्तारै
**विदेहान्** = विदेह नगरीतर्फ
**अगात्** = लाग्नुभयो

**वाक्यार्थ—** भगवान् श्रीकृष्णको दर्शन गर्नाले ती सारा प्रजाहरूको अज्ञानदृष्टि नष्ट भएको थियो। त्यसैले भगवान् तिनलाई आफ्नो दृष्टिको माध्यमले परमकल्याण र तत्त्वज्ञान प्रदान गर्दै हुनुहुन्थ्यो। देवता र मनुष्यहरूद्वारा समेत गाइएको सारा संसारको दिग्दिगन्तसम्म उज्वल बनाउने र अशुभलाई नष्ट गर्ने आफ्नो कीर्तिकथा सुन्दै भगवान् बिस्तारै विदेह नगरीतर्फ लाग्नुभयो।

**तेऽच्युतं प्राप्तमाकर्ण्य पौरा जानपदा नृप।**
**अभीयुर्मुदितास्तस्मै गृहीतार्हणपाणयः॥ २२॥**

**पदार्थ—**
**नृप** = हे राजा परीक्षित्
**अच्युतं** = भगवान् श्रीकृष्ण
**प्राप्तं** = आइपुग्नुभएको
**आकर्ण्य** = सुनेर
**मुदिताः** = अत्यन्त प्रसन्न भएका
**गृहीतार्हणपाणयः** = हातमा पूजाका सामग्रीहरू लिएका
**ते** = ती
**पौराः** = नगरवासी र
**जानपदाः** = ग्रामवासी प्रजाहरू
**तस्मै** = ती भगवान् श्रीकृष्णको सत्कारका लागि
**अभीयुः** = अगाडि बढे

**वाक्यार्थ—** हे परीक्षित्! भगवान् श्रीकृष्ण आइपुग्नुभएको सुनेर नगरवासी र ग्रामवासी सबै प्रजाहरू अत्यन्त प्रसन्न भए। उनीहरू आ-आफ्ना हातमा पूजाका सामग्री लिएर भगवान्को सत्कारका लागि अगाडि बढे।

**दृष्ट्वा त उत्तमश्लोकं प्रीत्युत्फुल्लाननाशयाः।**
**कैर्धृताञ्जलिभिर्नेमुः श्रुतपूर्वांस्तथा मुनीन्॥ २३॥**

**पदार्थ—**
**उत्तमश्लोकं** = पवित्रकीर्ति हुनुभएका भगवान्लाई
**तथा** = त्यसै गरी
**श्रुतपूर्वान्** = नाम मात्र सुनिएका
**मुनीन्** = ती मुनिहरूलाई समेत
**दृष्ट्वा** = देखेर
**प्रीत्युत्फुल्लाननाशयाः** = अत्यन्त प्रसन्न अनुहार र मन भएका
**ते** = ती प्रजाहरूले
**धृताञ्जलिभिः** = अञ्जलि बाँधेर
**कैः** = शिरहरूद्वारा
**नेमुः** = प्रणाम गरे

**वाक्यार्थ—** पवित्रकीर्ति भगवान् र नाम मात्र सुनिएका ती ऋषिहरूलाई समेत देखेर सारा

प्रजाहरूको अनुहार र मन अत्यन्त प्रसन्न भयो। तिनीहरूले दुबै हात जोडी शिर झुकाई सबैलाई प्रणाम गरे।

**स्वानुग्रहाय सम्प्राप्तं मन्वानौ तं जगद्गुरुम्।**
**मैथिलः श्रुतदेवश्च पादयोः पेततुः प्रभोः॥ २४॥**

**पदार्थ—**
**तं** = ती
**जगद्गुरुं** = जगद्गुरु भगवान्लाई
**स्वानुग्रहाय** = आफूमाथि अनुग्रह गर्न
**सम्प्राप्तं** = आउनुभएको
**मन्वानौ** = ठानिरहेका
**मैथिलः** = मिथिलाका राजा बहुलाश्व
**श्रुतदेवः च** = श्रुतदेव ब्राह्मण पनि
**प्रभोः** = भगवान्को
**पादयोः** = चरणमा
**पेततुः** = परे

**वाक्यार्थ—** जगद्गुरु भगवान् श्रीकृष्ण आफूमाथि अनुग्रह गर्नकै लागि आउनुभएको हो भन्ने ठानिरहेका मिथिलाका राजा बहुलाश्व र श्रुतदेव ब्राह्मण दुबैले भगवान्को चरणमा प्रणाम गरे।

**न्यमन्त्रयेतां दाशार्हमातिथ्येन सह द्विजैः।**
**मैथिलः श्रुतदेवश्च युगपत् संहताञ्जली॥ २५॥**

**पदार्थ—**
**संहताञ्जली** = दुबै हात जोडिरहेका
**मैथिलः** = मिथिलाका राजा बहुलाश्व
**श्रुतदेवः च** = श्रुतदेवले पनि
**युगपत्** = एकै पटक
**द्विजैः सह** = ऋषिहरूका साथमा
**दाशार्हम्** = भगवान् श्रीकृष्णलाई
**आतिथ्येन** = अतिथिसत्कारका लागि
**न्यमन्त्रयेताम्** = निमन्त्रित गरे

**वाक्यार्थ—** दुबै हात जोडिरहेका मिथिलाका राजा बहुलाश्व र श्रुतदेव ब्राह्मणले ऋषिहरूका साथमा भगवान्लाई आतिथ्यग्रहण गर्नका लागि एकै पटक निमन्त्रित गरे।

**भगवांस्तदभिप्रेत्य द्वयोः प्रियचिकीर्षया।**
**उभयोराविशद् गेहमुभाभ्यां तदलक्षितः॥ २६॥**

**पदार्थ—**
**द्वयोः** = राजा र ब्राह्मण दुबैको
**प्रियचिकीर्षया** = प्रिय गर्ने इच्छाले
**तत्** = त्यो दुबैको प्रार्थनालाई
**अभिप्रेत्य** = स्वीकार गरी
**भगवान्** = भगवान् श्रीकृष्णले
**तत्** = त्यो (दुबैतिर एकसाथ गएको) कुरा
**उभाभ्यां** = दुबैद्वारा
**अलक्षितः** = थाहा नपाइने भएर
**उभयोः** = दुबैको
**गेहं** = घरमा
**आविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ—** भगवान् श्रीकृष्णले बहुलाश्व राजा र श्रुतदेव ब्राह्मण यी दुबैलाई प्रसन्न बनाउन

चाहनुभयो र उहाँले दुबैको प्रार्थनालाई एकैपटक स्वीकार्नुभयो। उहाँ दुबैले थाहा नपाउने गरी एकैपटक ती दुबैको घरमा प्रवेश गर्नुभयो।

**श्रोतुमप्यसतां दूरान् जनकः स्वगृहागतान्।**
**आनीतेष्वासनाग्र्येषु सुखासीनान् महामनाः॥ २७॥**
**प्रवृद्धभक्त्या उद्धर्षहृदयास्राविलेक्षणः।**
**नत्वा तदङ्घ्रीन् प्रक्षाल्य तदपो लोकपावनीः॥ २८॥**
**सकुटुम्बो वहन् मूर्ध्ना पूजयाञ्चक्र ईश्वरान्।**
**गन्धमाल्याम्बराकल्पधूपदीपार्घ्यगोवृषैः॥ २९॥**

**पदार्थ—**
**प्रवृद्धभक्त्या** = निरन्तर बढिरहेको भक्तिद्वारा
**उद्धर्षहृदयास्राविलेक्षणः** = अत्यन्त हर्षित हृदय र हर्षको आँसुले भरिएका आँखा भएका
**महामनाः** = उदारचित्त
**जनकः** = बहुलाश्व जनकले
**असतां** = दुराचारीहरूका लागि
**श्रोतुम् अपि** = सुन्न पनि
**दूरान्** = दुर्लभ
**स्वगृहागतान्** = आफ्नै घरमा आएका
**आसनाग्र्येषु** = श्रेष्ठ आसनहरू
**आनीतेषु** = ल्याएपछि
**सुखासीनान्** = सुखपूर्वक त्यहाँ बसेका तिनीहरूलाई
**नत्वा** = नमस्कार गरी
**तदङ्घ्रीन्** = ती श्रीकृष्ण र मुनिहरूको चरणलाई
**प्रक्षाल्य** = पखाली
**सकुटुम्बः** = परिवारले सहित
**लोकपावनीः** = संसारलाई पवित्र गर्ने
**तदपः** = त्यो जललाई
**मूर्ध्ना** = शिरले
**वहन्** = धारण गर्दै
**गन्धमाल्याम्बराकल्पधूपदीपार्घ्य-गोवृषैः** = चन्दन, माला, वस्त्र, अलङ्कार, धूप, दीप, अर्घ्य, गाई, गोरु आदि उपहारहरूद्वारा
**ईश्वरान्** = भगवत्स्वरूप श्रीकृष्ण र ऋषिहरूलाई
**पूजयाञ्चक्रे** = पूजा गरे

**वाक्यार्थ—** दुराचारी पुरुषहरूद्वारा नाम सुन्न समेत नपाइने श्रेष्ठ ऋषिहरू आफ्नै घरमा आउनुभएको र स्वागतार्थ ल्याइएका श्रेष्ठ आसनमा आनन्दपूर्वक बस्नुभएको देखेर उदारमना राजा बहुलाश्वको हृदय अत्यन्त हर्षित भयो र उनका आँखाबाट हर्षका आँसु बग्न थाले। निरन्तर बढिरहेको भक्तिद्वारा युक्त भई उनले ती सारा ऋषिहरूलाई नमस्कार गरी उहाँहरूको चरणलाई पखाले र सम्पूर्ण संसारलाई पवित्र गर्ने त्यो जललाई आफन्तसहित शिरमा धारण गरे। यसपछि उनले भगवत्स्वरूप ती ऋषिहरूलाई चन्दन, माला, वस्त्र, अलङ्कार, धूप, दीप, अर्घ्य, गाई, गोरु आदि उपहारहरू समर्पण गरी पूजा गरे।

**वाचा मधुरया प्रीणन्निदमाहान्नतर्पितान्।**
**पादावङ्कगतौ विष्णोः संस्पृशञ्छनकैर्मुदा॥ ३०॥**

**पदार्थ–**
**अन्नतर्पितान्** = भोजनद्वारा तृप्त भएका ऋषिहरूलाई
**प्रीणन्** = प्रसन्न गर्दै
**अङ्कगतौ** = आफ्ना काखमा रहेका
**विष्णोः** = श्रीकृष्णका
**पादौ** = दुबै पाउलाई
**शनकैः** = बिस्तारै
**संस्पृशन्** = सुम्सुम्याउँदै
**मधुरया** = मधुर
**वाचा** = वाणीद्वारा
**मुदा** = आनन्दपूर्वक
**इदं** = यसो
**आह** = भने

**वाक्यार्थ–** सारा ऋषिहरू भोजनद्वारा तृप्त भइसकेपछि भगवान् श्रीकृष्णका दुबै पाउलाई आफ्नो काखमा राखी बिस्तारै सुम्सुम्याउँदै राजाले मधुर वाणीले भगवान् श्रीकृष्णलाई यसो भने।

**राजोवाच** (राजा बहुलाश्वले भने)

**भवान् हि सर्वभूतानामात्मा साक्षी स्वदृग् विभो।**
**अथ नस्त्वत्पदाम्भोजं स्मरतां दर्शनं गतः॥ ३१॥**

**पदार्थ–**
**विभो** = हे भगवान्
**भवान्** = हजुर
**हि** = निश्चय नै
**सर्वभूतानां** = सम्पूर्ण प्राणीहरूका
**आत्मा** = अन्तरात्मा
**साक्षी** = साक्षी र
**स्वदृक्** = स्वयंप्रकाश हुनुहुन्छ
**अथ** = त्यसैले
**त्वत्पदाम्भोजं** = हजुरको चरणकमललाई
**स्मरतां** = सम्झिरहने
**नः** = हामीहरूलाई
**दर्शनं** = हजुरको दर्शन
**गतः** = प्राप्त भयो

**वाक्यार्थ–** हे भगवान्! हजुर सम्पूर्ण प्राणीहरूका अन्तरात्मा, साक्षी र स्वयंप्रकाश हुनुहुन्छ। त्यसैले निरन्तर हजुरको चरणकमललाई सम्झिरहने हामीलाई हजुरको दर्शन प्राप्त भयो।

**स्ववचस्तदृतं कर्तुमस्मद्दृग्गोचरो भवान्।**
**यदात्थैकान्तभक्तान् मे नानन्तः श्रीरजः प्रियः॥ ३२॥**

**पदार्थ–**
**मे** = मलाई
**एकान्तभक्तान्** = आफ्ना अनन्य भक्तहरूभन्दा
**अनन्तः** = बलराम
**श्रीः** = लक्ष्मी
**अजः** = ब्रह्मा पनि
**प्रियः न** = प्रिय छैनन् भनी
**यत्** = जे
**आत्थ** = भन्नुभएको थियो
**तत्** = त्यो
**स्ववचः** = आफ्नो वचनलाई
**ऋतं** = सत्य
**कर्तुम्** = गर्न
**भवान्** = हजुर
**अस्मद्दृग्गोचरः** = हाम्रो आँखाद्वारा देखिनुभएको हो

**वाक्यार्थ–** हे भगवान्! हजुरले आफूलाई बलराम, लक्ष्मी र ब्रह्माभन्दा पनि आफ्ना अनन्य भक्तहरू नै बढी प्रिय हुन्छन् भनी बताउनुभएको थियो। त्यही वचनलाई सत्य सिद्ध गर्न हजुर हाम्रो आँखाद्वारा देखिनुभएको हो।

**को नु त्वच्चरणाम्भोजमेवंविद् विसृजेत् पुमान् ।**
**निष्किञ्चनानां शान्तानां मुनीनां यस्त्वमात्मदः ॥ ३३ ॥**

**पदार्थ–**
**यः** = जुन
**त्वं** = हजुर
**निष्किञ्चनानां** = अकिञ्चन (अन्य कुनै आश्रय नभएका)
**शान्तानां** = शान्त
**मुनीनां** = मुनिहरूलाई
**आत्मदः** = आफ्नो स्वरूपै प्रदान गर्नुहुन्छ
**एवंवित्** = यस्तो जान्ने
**कः नु** = कुन चाहिँ
**पुमान्** = व्यक्तिले
**त्वच्चरणाम्भोजं** = हजुरको चरणकमललाई
**विसृजेत्** = छोड्ला र

**वाक्यार्थ–** हे भगवान् ! हजुर अन्य कुनै आश्रय नभएका शान्त मुनिहरूलाई आफ्नो स्वरूप नै प्रदान गर्नुहुन्छ। हजुरको कृपालाई जान्ने कुन चाहिँ व्यक्तिले हजुरको चरणकमललाई छोड्ला र ?

**योऽवतीर्य यदोर्वंशे नृणां संसरतामिह ।**
**यशो वितेने तच्छान्त्यै त्रैलोक्यवृजिनापहम् ॥ ३४ ॥**

**पदार्थ–**
**यः** = जसले
**यदोः** = यदुको
**वंशे** = कुलमा
**अवतीर्य** = अवतार लिई
**इह** = यो संसारमा
**संसरतां** = घुमिरहेका
**नृणां** = मनुष्यहरूका लागि
**तच्छान्त्यै** = तिनीहरूको शान्तिका लागि
**त्रैलोक्यवृजिनापहं** = तीनै लोकको पापलाई नष्ट गर्न सक्ने
**यशः** = कीर्ति
**वितेने** = फैलाउनुभयो

**वाक्यार्थ–** जन्ममृत्युरूप संसारचक्रमा घुमिरहेका संसारका सारा प्राणीहरूको संसारबन्धनलाई नष्ट गर्नका लागि हजुरले यदुकुलमा अवतार लिई तीनै लोकको पापराशिलाई नष्ट गर्न सक्ने आफ्नो कीर्ति फैलाउनुभयो।

**नमस्तुभ्यं भगवते कृष्णायाकुण्ठमेधसे ।**
**नारायणाय ऋषये सुशान्तं तप ईयुषे ॥ ३५ ॥**

**पदार्थ–**
**सुशान्तं** = शान्तिपूर्वक
**तपः** = तपस्या
**ईयुषे** = गरिरहेका
**नारायणाय** = नारायण
**ऋषये** = ऋषिलाई
**अकुण्ठमेधसे** = नित्यज्ञानसम्पन्न
**भगवते** = भगवान्
**कृष्णाय** = श्रीकृष्ण
**तुभ्यं** = हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** हे भगवान् ! हजुर नित्यज्ञानसम्पन्न हुनुहुन्छ र नारायण ऋषिको रूपमा शान्तिपूर्वक तपस्या समेत गर्नुहुन्छ। त्यस्ता श्रीकृष्ण भगवान्लाई नमस्कार छ।

**दिनानि कतिचिद् भूमन् गृहान् नो निवस द्विजैः ।**
**समेतः पादरजसा पुनीहीदं निमेः कुलम् ॥ ३६ ॥**

**पदार्थ–**
**भूमन्** = हे सर्वव्यापक भगवान्
**द्विजैः** = ब्राह्मणहरूद्वारा
**समेतः** = सहित भई
**कतिचित्** = केही
**दिनानि** = दिनसम्म
**नः** = हाम्रो
**गृहान्** = घरमा
**निवस** = बस्नुहोस्
**पादरजसा** = आफ्नो चरणधूलिद्वारा
**इदं** = यो
**निमेः** = निमिको
**कुलं** = कुललाई
**पुनीहि** = पवित्र गर्नुहोस्

**वाक्यार्थ–** हे सर्वव्यापक भगवान् ! यी ऋषिहरूले सहित भई हजुर केही दिनसम्म हाम्रो घरमा बस्नुहोस्। आफ्नो चरणधूलिद्वारा निमिको यो कुललाई पवित्र गरिदिनुहोस्।

**इत्युपामन्त्रितो राज्ञा भगवांल्लोकभावनः।**
**उवास कुर्वन् कल्याणं मिथिलानरयोषिताम्॥ ३७॥**

**पदार्थ–**
**राज्ञा** = राजाद्वारा
**इति** = यसप्रकार
**उपामन्त्रितः** = प्रार्थना गरिएका
**लोकभावनः** = संसारका जीवनदाता
**भगवान्** = श्रीकृष्ण
**मिथिलानरयोषितां** = मिथिलावासी नरनारीहरूको
**कल्याणं** = कल्याण
**कुर्वन्** = गर्दै
**उवास** = बस्नुभयो

**वाक्यार्थ–** राजा बहुलाश्वले यसप्रकार प्रार्थना गरेपछि सम्पूर्ण संसारका जीवनदाता भगवान् श्रीकृष्ण मिथिलावासी नरनारीहरूको कल्याण गर्दै केही समय त्यहीँ रहनुभयो।

**श्रुतदेवोऽच्युतं प्राप्तं स्वगृहाञ्जनको यथा।**
**नत्वा मुनीन् सुसंहृष्टो धुन्वन् वासो ननर्त ह॥ ३८॥**

**पदार्थ–**
**ह** = निश्चय नै
**श्रुतदेवः** = श्रुतदेव ब्राह्मण
**स्वगृहान्** = आफ्ना घरमा
**प्राप्तं** = आउनुभएका
**अच्युतं** = भगवान्लाई (देखेर)
**यथा** = जसरी
**जनकः** = राजा (प्रसन्न भएका थिए, त्यसै गरी)
**सुसंहृष्टः** = प्रसन्न भई
**मुनीन्** = मुनिहरूलाई
**नत्वा** = नमस्कार गरेर
**वासः** = कपडा
**धुन्वन्** = हल्लाउँदै
**ननर्त** = नाच्न थाले

**वाक्यार्थ–** जसरी भगवान्को आगमनद्वारा बहुलाश्व प्रसन्न भएका थिए त्यसै गरी श्रुतदेव ब्राह्मण पनि आफ्नो घरमा भगवान् आइपुग्नुभएको देखेर अत्यन्त प्रसन्न भए। उनले सबै मुनिहरूलाई नमस्कार गरे र साह्रै खुसी भएर उनी आफ्नो कपडा हल्लाउँदै नाच्न थाले।

**तृणपीठबृसीष्वेतानानीतेषूपवेश्य सः।**
**स्वागतेनाभिनन्द्याङ्घ्रीन् सभार्योऽवनिजे मुदा॥ ३९॥**

**पदार्थ–**
**सः** = तिनले
**एतान्** = यी ऋषिहरूलाई

**आनीतेषु** = स्वागतका लागि ल्याइएका
**तृणपीठबृसीषु** = घाँस राखिएको पिर्का र कुशासनहरूमा
**उपवेश्य** = राखेर
**स्वागतेन** = स्वागतद्वारा
**अभिनन्द्य** = अभिनन्दन गरी
**सभार्यः** = पत्नीसहित भई
**मुदा** = प्रसन्नतापूर्वक
**अङ्घ्रीन्** = सबैको चरणलाई
**अवनिजे** = प्रक्षालन गरे

**वाक्यार्थ–** श्रुतदेव ब्राह्मणले सम्पूर्ण ऋषिहरूलाई स्वागत गरी घाँस राखिएको पिर्का र कुशासनहरूमा राखेर अभिनन्दन गरे अनि अत्यन्त प्रसन्नतापूर्वक पत्नीले सहित भई उनले ती सबैको चरण प्रक्षालन गरे।

**तदम्भसा महाभाग आत्मानं सगृहान्वयम्।**
**स्नापयाञ्चक्र उद्धर्षो लब्धसर्वमनोरथः॥ ४०॥**

**पदार्थ–**
**उद्धर्षः** = अत्यन्त हर्षित र
**लब्धसर्वमनोरथः** = सम्पूर्ण मनोरथ पूर्ण भएका
**महाभागः** = महाभाग्यशाली श्रुतदेवले
**तदम्भसा** = त्यो चरण पखालेको जलद्वारा
**सगृहान्वयं** = घरपरिवारसहित
**आत्मानं** = आफूलाई
**स्नापयाञ्चक्रे** = सेचन गरे

**वाक्यार्थ–** श्रुतदेव ब्राह्मण आफ्ना सम्पूर्ण मनोरथ पूर्ण हुनाले अत्यन्त हर्षित थिए। महाभाग्यशाली तिनले ऋषिहरूको चरण पखालेको जलले आफू र आफ्ना घरपरिवारलाई पनि सेचन गरे।

**विवरण–** यस प्रसङ्गमा श्रुतदेव ब्राह्मणले आफ्नो घरमा ऋषिहरूसहित भगवान् पाल्नु हुँदा ज्यादै प्रसन्न भई उहाँहरूको सेवा गरेको वर्णन गरिएको छ। श्रुतदेवले भगवान् आफ्नो घरमा आउनुभएको प्रसन्नतामा मस्त भएर **वासः धुन्वन्** अर्थात् कपडा हल्लाउँदै नाच्न थालेको बताइएको छ। भगवान्‌को आगमनबाट जो व्यक्ति यति प्रसन्न भई संसारैलाई बिर्सन सक्छ, त्यसकै घरमा भगवान् आउनुहुन्छ। जबसम्म व्यक्तिले परमात्मदर्शनमा आनन्दको उद्रेकलाई अनुभव गर्न सक्दैन, तबसम्म आनन्दस्वरूप परमात्मा प्रकट हुनुको केही अर्थ रहँदैन। त्यसैले मनमा यति व्यग्रता उत्पन्न नभईकन परमात्मा प्रकट हुनुहुन्न पनि। उहाँलाई पूर्ण समर्पणको भावले मात्र प्रत्यक्ष अनुभव गर्न सकिन्छ। श्रुतदेवले परमात्माको दर्शनद्वारा आफ्ना सबै इच्छाहरू पूरा भएको सम्झेका छन्।

**फलार्हणोशीरशिवामृताम्बुभिर्मृदा सुरभ्या तुलसीकुशाम्बुजैः।**
**आराधयामास यथोपपन्नया सपर्यया सत्त्वविवर्धनान्धसा॥ ४१॥**

**पदार्थ–**
**फलार्हणोशीरशिवामृताम्बुभिः** = फल, चन्दन, उशीर (विशेष प्रकारको तृण) र निर्मल मधुर जलद्वारा
**सुरभ्या** = सुगन्धित
**मृदा** = माटोद्वारा
**तुलसीकुशाम्बुजैः** = तुलसी, कुश र कमल आदि फूलद्वारा

**सत्त्वविवर्धनान्धसा** = सत्त्वगुणलाई बढाउने अन्नद्वारा
**यथोपपन्नया** = अनायास प्राप्त भएको
**सपर्यया** = पूजासामग्रीद्वारा
**आराधयामास** = सबैको आराधना गरे

**वाक्यार्थ—** ती श्रुतदेवले फल, चन्दन, उशीर, निर्मल एवं मधुर जल, सुगन्धित माटो, तुलसी, कुश, कमल एवं सत्त्वगुणलाई बढाउने अन्न आदि अनायास प्राप्त पूजासामग्री-हरूद्वारा ती सम्पूर्ण अभ्यागतहरूको आराधना गरे।

**स तर्कयामास कुतो ममान्वभूद् गृहान्धकूपे पतितस्य सङ्गमः।**
**यः सर्वतीर्थास्पदपादरेणुभिः कृष्णेन चास्यात्मनिकेतभूसुरैः॥ ४२॥**

**पदार्थ—**
**यः** = जुन
**कृष्णेन** = भगवान् श्रीकृष्णसँग
**अस्य** = उहाँका
**सर्वतीर्थास्पदपादरेणुभिः** = सम्पूर्ण तीर्थरूप चरणधूलि भएका
**आत्मनिकेतभूसुरैः च** = भगवान्का निवासस्थान समान ऋषिहरूसँग
**सङ्गमः** = समागम छ
**गृहान्धकूपे** = घरव्यवहारको अँध्यारो कुवामा
**पतितस्य** = खसेको
**मम** = मेरा निम्ति
**कुतः** = कसरी
**अन्वभूत्** = प्राप्त हुन गयो भनी
**सः** = ती श्रुतदेवले
**तर्कयामास** = विचार गरे

**वाक्यार्थ—** श्रुतदेवले के विचार गरे भने घरव्यवहारको अँध्यारो कुवामा खसेको मलाई भगवान् श्रीकृष्णसँग र उहाँका निवासस्थान भएका ऋषिहरूसँग मिल्ने अवसर कसरी प्राप्त भयो? किनभने यी ऋषिहरूको चरणको धुलो नै तीर्थसमान हुन्छ।

**विवरण—** यस प्रसङ्गमा श्रुतदेवले भगवान्को दर्शन गर्ने सौभाग्य मलाई कसरी प्राप्त भयो भनी कल्पना गरेका छन्। भक्तहरू स्वभावतः विनयी हुन्छन्। उनीहरू आफूमा दोषहरू रहेका देख्छन् अनि अरूमा गुणै गुण भरिएको देख्छन्। यो हीनताको नभई नम्रताको भाव हो। यो भावले मानिसलाई व्यर्थको घमन्ड, आत्मप्रशंसा आदि दुर्गुणबाट जोगाउँछ। यहाँ श्रुतदेवले यही नम्रताको भावमा आफूलाई घरमा आसक्त भनी बताएका छन्। जो संसारमा पूरा आसक्ति गर्दछ त्यसलाई त मोहको अँध्यारोले छोपिदिएको हुन्छ र त्यो आफूले अत्यधिक आसक्ति गरेको छु भन्ने पनि थाहा पाउँदैन। जब व्यक्ति हृदयभित्रैदेखि आफूले अति आसक्ति गरी गल्ती गरेको अनुभव गर्दछ तब ऊ त्यो कमजोरीलाई झुक्किएर पनि फेरि अँगाल्दैन। त्यसैले भक्तहरूले भनिरहे तापनि उनीहरूमा आसक्ति या मोह रहेको हुँदैन। भक्तहरू विशाल हृदयका हुने हुनाले उनीहरू परमात्माको प्रार्थना गर्दा सबै संसारभरिका प्राणीहरूको तर्फबाट उनीहरूकै व्यवहार या भावनालाई लिई उहाँको स्तुति गर्दछन्। यस्तो स्तुति गर्नाले अर्को के पनि फाइदा हुन्छ भने यसले संसारमा आसक्त भएका व्यक्तिहरूलाई भरोसा दिन्छ। प्रह्लाद, श्रुतदेव, नारद जस्ता भक्तहरूले पनि आफूलाई मोहमा फसेको भनी बताउँदा अरू मोही व्यक्तिहरूलाई आफू पनि उनीहरूजस्तै रहेकाले भक्त हुन सक्ने आशा पलाउँछ। नत्र विषयी व्यक्ति सङ्कोचका कारणले नै परमात्माको

नजिक नगईकनै समय नष्ट गरिरहन्छ। यसरी भक्तहरूले संसारी व्यक्तिको हितका लागि उनीहरूको तर्फबाट पनि परमात्माको स्तुति गर्दछन्। अर्को कुरा, भक्तहरू अहिलेसम्म आफ्नो जन्म भएबाट के अनुमान लगाउँछन् भने मैले पहिले एकपटक पनि परमात्माको भावपूर्ण प्रार्थना गरिनछु, त्यसैले मेरो फेरि संसारमा जन्म भएको छ। एउटा भक्त प्रार्थना गर्दै भन्छ **वपुः प्रादुर्भावात् अनुमितम्** अर्थात् मेरो पुनर्जन्म भएकाले के अनुमान हुन्छ भने मैले **न क्षणमपि भवन्तं प्रणतवान्** अर्थात् एक क्षण पनि हजुरलाई प्रणाम गरिनछु। यो मेरो पुरानो अपराधलाई क्षमा गरिदिनुहोस् भनी भक्त भगवान्सँग प्रार्थना गर्दछन्, त्यही भावमा यहाँ श्रुतदेवले आफू भगवान्को भक्त भएर पनि पुरानो गल्तीलाई सम्झिँदै आफूलाई मोहमा फसेको भनी बताएका हुन् भन्ने बुझिन्छ। तपस्वी ऋषिहरू परमात्माका निवासस्थान हुन्। उनीहरूको र साक्षात् परमात्माकै दर्शन गर्ने आफूमा योग्यता नभए पनि परमात्माकै कृपाको कारणले यो सम्भव भएको ठानी श्रुतदेवले भक्तहरूमा अनिवार्य रहने नम्रताको सद्गुणलाई प्रकट गरेका छन्। त्यसैले यो भक्तिप्रति अविश्वास नभई परमात्माको कृपामा पूर्ण विश्वास अनि आफूमा रहेको नम्रताको अभिव्यक्ति हो।

**सूपविष्टान् कृतातिथ्याञ्छ्रुतदेव उपस्थितः।**
**सभार्यस्वजनापत्य उवाचाङ्घ्र्यभिमर्शनः॥ ४३॥**

**पदार्थ–**
**सभार्यस्वजनापत्यः** = आफ्ना पत्नी र स्वजनहरूले सहित
**उपस्थितः** = सेवामा उपस्थित
**अङ्घ्र्यभिमर्शनः** = चरण दबाइरहेका
**श्रुतदेवः** = श्रुतदेवले
**सूपविष्टान्** = आनन्दपूर्वक बसेका
**कृतातिथ्यान्** = आतिथ्य सत्कार गरिएका तिनीहरूलाई
**उवाच** = भने

**वाक्यार्थ–** जब सबै ऋषिहरू श्रुतदेवको आतिथ्यलाई स्वीकार गरी आनन्दपूर्वक बसे, तब आफ्ना पत्नी, स्वजन र पुत्रहरूले सहित भई उनीहरूको सेवामा उपस्थित भएका उनले उनीहरूको चरण दबाउँदै यसो भने।

**श्रुतदेव उवाच** (श्रुतदेवले भने)

**नाद्य नो दर्शनं प्राप्तः परं परमपूरुषः।**
**यर्हीदं शक्तिभिः सृष्ट्वा प्रविष्टो ह्यात्मसत्तया॥ ४४॥**

**पदार्थ–**
**परमपूरुषः** = परमपुरुष परमात्मा
**अद्य** = आज मात्र
**नः** = हामीलाई
**दर्शनं** = दर्शन दिन
**प्राप्तः** = आउनुभएको भन्ने
**न** = होइन
**परं** = परन्तु
**यर्हि** = जब
**शक्तिभिः** = आफ्ना शक्तिहरूद्वारा
**इदं** = यो जगत्लाई
**सृष्ट्वा** = सृष्टि गरी
**आत्मसत्तया** = आफ्नो सत्ताद्वारा
**प्रविष्टः** = प्रवेश गर्नुभयो
**हि** = निश्चय नै (त्यही वेलादेखि नै उहाँ नित्य प्राप्त हुनुहुन्छ)

**वाक्यार्थ–** हामीलाई आज मात्र परमपुरुष परमात्माको दर्शन प्राप्त भएको हो भन्ने होइन। जब भगवान्‌ले आफ्ना शक्तिद्वारा सम्पूर्ण जगत्‌लाई सृष्टि गरी आत्मसत्ताको रूपमा यहाँभित्र प्रवेश गर्नुभयो त्यसै वेलादेखि उहाँको दर्शन हामीलाई हुन थालेको हो।

**यथा शयानः पुरुषो मनसैवात्ममायया।**
**सृष्ट्वा लोकं परं स्वाप्नमनुविश्यावभासते॥ ४५॥**

**पदार्थ–**
**यथा** = जसरी
**शयानः** = सुतिरहेको
**पुरुषः** = व्यक्तिले
**मनसा** = मनद्वारा
**आत्ममायया एव** = आफ्नो कल्पनाबाट नै
**परं** = जाग्रत्‌भन्दा भिन्न
**स्वाप्नं** = स्वप्नको
**लोकं** = संसारलाई
**सृष्ट्वा** = रचना गरी
**अनुविश्य** = त्यहींभित्र पसेर
**अवभासते** = देखिन्छ

**वाक्यार्थ–** जसरी सुतिरहेको व्यक्तिले मनमनै केवल कल्पनाबाट मात्र जाग्रत्‌भन्दा भिन्न स्वप्नसंसारलाई रचना गर्दछ र आफूसमेत त्यही स्वप्नभित्र प्रवेश गरी प्रकट हुन्छ, त्यसै गरी हजुर संसारको सृष्टि गरी यसभित्र प्रकट हुनुभएको छ।

**विवरण–** यस प्रसङ्गमा श्रुतदेवले भगवान्‌को स्तुति गर्दै उहाँले आज मात्र आफूलाई दर्शन दिनुभएको होइन, अपितु सम्पूर्ण संसारको रूपमा प्रकट हुने सर्वरूप उहाँले नित्य दर्शन दिइरहनुभएको छ भनी बताएका छन्। आफ्नो सत्ताद्वारा सम्पूर्ण पदार्थहरूभित्र पसी तिनलाई सत्तावान् बताउने परमात्मा कहिले अदृश्य हुनुहुन्थ्यो र? यहाँ श्रीकृष्णलाई शरीररूपमा नभई सर्वान्तर्यामी तत्त्वको रूपमा वर्णन गरिएको छ। श्रीकृष्ण केवल एउटा शरीर मात्र हुनुहुन्न। जसरी मानिसहरूसँग भेटघाट गर्नका लागि उनीहरूको शरीरको नजिक हुनै पर्दछ, तर परमात्मा सर्वरूप हुनुभएकाले शरीररूपमा पाउनु मात्र उहाँलाई भेट्नु होइन, उहाँ त आफ्नै आत्माको रूपमा हुनुहुन्छ। यहाँ श्रुतदेवले स्वप्नको दृष्टान्तद्वारा परमात्मतत्त्वलाई बताएका छन्। स्वप्नमा व्यक्ति आफ्नै कल्पनाद्वारा पहाड, नक्षत्र, आकाश, सूर्य आदि सम्पूर्ण पदार्थहरूको सृष्टि गर्दछ अनि ती जड वस्तुहरूलाई प्रकाशित गर्न चेतन रूपमा त्यहाँभित्र आफैँ प्रवेश गर्दछ। संसारको सृष्टि गर्ने जुन तत्त्व हो, त्यहाँभित्र जीवरूपले प्रवेश गरी यसको व्यवहारलाई प्रकाशित गर्ने पनि उही नै तत्त्व हो। श्लोकमा जगत्‌को रचना हुनुलाई स्वप्नकल्पनाको दृष्टान्तद्वारा बताइएको छ। जसरी जीवले देख्ने प्रतिदिनको स्वप्नमा ऊ आफ्नो सङ्कल्प अनुसारका पदार्थहरूको सृष्टि गरेर त्यसभित्रै पस्छ, अनि त्यहाँका सुख-दुःखको भोग गर्दै यी सारा व्यवहारहरूलाई आफ्नै सत्ताले प्रकाशित गरिरहेको हुन्छ, यसै गरी यो संसार पनि परमात्माको स्वप्नकल्पना नै हो। वेदान्तदर्शनमा जगत्‌लाई पनि ईश्वरको स्वप्न नै भनिएको छ। यद्यपि स्वप्नका पदार्थ प्रतिदिन जाग्रत्‌मा आएपछि बाधित हुन्छन्, अनि जाग्रत्‌का पदार्थहरू चाहिँ जीवनभरि नै रहिरहन्छन्, त्यसैले मानिसलाई पहाड, नदी, समुद्र आदि सम्पूर्ण पदार्थ नित्य एवं स्थिर झैँ लाग्छन्, तर यो बाहिरी वस्तुहरूको साम्राज्य पनि स्वप्नकल्पना नै हो। स्वप्नको समयमा पनि त्यतिखेरका वस्तुहरू सत्तावान् लाग्दछन्,

इन्द्रियहरूले तिनको भोग गर्दा जाग्रत्मा झैं इन्द्रियहरूमा पूर्ण तृप्ति पनि हुन्छ, तर त्यहाँबाट जागेपछि तिनको केही अस्तित्व रहँदैन, त्यस्तै यो जाग्रत्रूपी निद्राबाट जागिसकेपछि यो जाग्रत्को पनि केही अस्तित्व रहँदैन। जाग्रत् र स्वप्नमा फरक कति मात्र छ भने स्वप्नको रचना गर्ने प्रमाता जीव हो भने जाग्रत्का पदार्थको कल्पना गर्ने चाहिँ मायायुक्त ब्रह्म या ईश्वर हो। सपनालाई बाधित गर्न यसको अधिष्ठान प्रमाता जीवलाई जाने पुग्दछ भने जाग्रत्का पदार्थको बाध गर्न भने परमात्माकै अनुभव गर्नुपर्दछ। त्यो अनुभव नहुन्जेल मायाको निद्रामा निदाइरहेको हुने हुनाले संसार सत्य झैं प्रतीति भइरहेको मात्र हो। वास्तवमा दुबै सपना नै हुन्।

यहाँ के शङ्का हुन्छ भने सपना त मनभित्र देखिन्छ, यसैले बाहिर देखिने संसार कसरी स्वप्नसमान मिथ्या हुन सक्छ ? यसको उत्तरमा भनिन्छ, जाग्रत्का पदार्थहरू पनि विराट् पुरुषको शरीरभित्र देखिने भएकाले यी पनि मिथ्या नै हुन्। जसरी परिच्छिन्न मनभित्र बाहिरका व्यापक वस्तुहरू आकाश, समुद्र आदि छिर्न नसके पनि देखिएकाले यी वास्तविक होइनन्, त्यस्तै परमात्मा पनि सच्चिदानन्दघन हुनुहुन्छ, उहाँभित्र कुनै वस्तु छिर्न नसके पनि देखिएका छन्। यसैले यी वस्तुहरू मिथ्या हुन्। वेदान्तशास्त्र एवं तत्त्वदर्शी जीवन्मुक्तहरूको अनुभवमा जाग्रत्को संसार र स्वप्न संसारबिच रहेको फरक भनेको सपना र सपनाभित्रको उपसपना यतिमात्रको फरक हो। कुनै व्यक्ति सपना देखिरहेको छ। त्यहाँ ऊ आफूलाई एउटा सामान्य घरभित्र सुती अर्को सपना देखिरहेको अनुभव गर्दछ। झुपडीमा सुतेकाले आफ्ना कामनालाई तृप्त गर्न ऊ सपनाभित्रको पनि सपनामा अर्को भव्य महलको कल्पना गर्दछ अनि त्यो दोस्रो सपनाबाट ब्युँझिसकेपछि वास्तविक सपनामा चाहिँ त्यो महल, आदिको भोग असत्य भएको र आफू झुपडीभित्र रहने सामान्य व्यक्ति भएकै अनुभव गर्दछ। वास्तवमा भन्ने हो भने झुपडीमा सुत्नु, अनि त्यहाँभित्र पनि सपनामा अर्को महलमा विहार गरेको देख्नु यी दुबै सपना नै हुन्। स्वप्न अवस्थामा रहिरहँदा त्यो व्यक्तिले आफूलाई वास्तविक रूपमा झुपडीभित्र रहेको ठान्दछ र महलको स्वप्न चाहिँ काल्पनिक भएको मान्दछ, तर यथार्थ वस्तुस्थितिमा त्यसको झुपडी र महल दुबै असत्य एवं काल्पनिक हुन्। ठिक यसै गरी अनादि मायाको निद्रामा सुतिरहेको जीवले पनि यो जाग्रत्मा देखिएका काल्पनिक पदार्थलाई सत्य एवं यहाँभित्र देखिने स्वप्नलाई काल्पनिक ठानेको छ। यसैलाई माण्डूक्यकारिका (१।१६)मा भनिएको छ— **अनादिमायया सुप्तो यदा जीवः प्रबुध्यते, अजमनिद्रमस्वप्नमद्वैतं बुद्ध्यते तदा** अर्थात् जुन दिन यो व्यक्ति साँच्चिकै ज्ञानमा जाग्दछ भने उसले आफूलाई अजन्मा अनि मायाको निद्राले रहित परमात्माकै रूपमा अनुभव गर्दछ।

यसरी यहाँ जाग्रत् पनि ईश्वरको सपना भएको र जीवले स्वप्नमा काल्पनिक पदार्थहरू जन्माई तिनलाई प्रकाशित गरे झैं परमात्माले पनि कल्पनाद्वारा संसारका पदार्थहरू बनाई चेतन रूपले यसभित्र छिरेर यी पदार्थहरूलाई प्रकाशित गरिरहनुभएको बताइएको छ।

**शृण्वतां गदतां शश्वदर्चतां त्वाभिवन्दताम्।**
**नृणां संवदतामन्तर्हृदि भास्यमलात्मनाम्॥ ४६॥**

**पदार्थ–**
**शृण्वतां** = कथा श्रवण गर्ने
**गदतां** = कीर्तन गर्ने
**शश्वत्** = निरन्तर
**अर्चतां** = पूजा गर्ने
**त्वा** = हजुरलाई
**अभिवन्दतां** = स्तुति गर्ने
**संवदतां** = परस्पर चर्चा गर्ने
**अमलात्मनां** = निर्मल अन्तःकरण भएका
**नृणां** = मनुष्यहरूको
**अन्तर्हृदि** = हृदयभित्र
**भासि** = प्रकट हुनुहुन्छ

**वाक्यार्थ–** हे भगवान् ! जो व्यक्ति हजुरको कथा श्रवण गर्दछन्, कीर्तन गर्दछन्, निरन्तर हजुरको पूजा गर्दछन्, हजुरको स्तुति गर्दछन् र एक–आपसमा हजुरकै चर्चा गर्दछन् भने त्यस्ता निर्मल अन्तःकरण हुने मनुष्यहरूको हृदयभित्र हजुर प्रकट हुनुहुन्छ।

**हृदिस्थोऽप्यतिदूरस्थः कर्मविक्षिप्तचेतसाम् ।**
**आत्मशक्तिभिरग्राह्योऽप्यन्त्युपेतगुणात्मनाम् ॥ ४७ ॥**

**पदार्थ–**
**कर्मविक्षिप्तचेतसां** = कर्मद्वारा चित्त विक्षिप्त भएकाहरूका लागि
**हृदिस्थः अपि** = हृदयभित्रै भए तापनि
**अतिदूरस्थः** = हजुर अत्यन्त टाढा हुनुहुन्छ
**उपेतगुणात्मनां** = भगवद्भक्तिरूपी गुणले युक्त अन्तःकरण भएकाहरूका लागि
**आत्मशक्तिभिः** = अन्तःकरणका वृत्तिद्वारा
**अग्राह्यः अपि** = अग्राह्य भए पनि
**अन्ति** = निकटमा हुनुहुन्छ

**वाक्यार्थ–** हे भगवान् ! जसको चित्त लौकिक, वैदिक आदि अनेक कर्मवासनाद्वारा निरन्तर विक्षिप्त भइरहन्छ, त्यस्ता व्यक्तिहरूका हृदयभित्रै रहेर पनि हजुर तिनीहरूभन्दा अत्यन्त टाढा हुनुहुन्छ। (यद्यपि हजुर अन्तःकरणका वृत्तिहरूद्वारा अग्राह्य हुनुहुन्छ, तर पनि) जसको चित्त भगवद्भक्तिद्वारा युक्त छ, त्यस्ता व्यक्तिहरूको लागि भने हजुर त्यहीँभित्र नित्य प्राप्त हुनुहुन्छ।

**विवरण–** यस प्रसङ्गमा परमात्मालाई टाढाभन्दा टाढा अनि नजिकभन्दा नजिक रहनुभएको भनी स्तुति गरिएको छ। परमात्मा हृदयभित्र नै हुनुहुन्छ, कहीँ बाहिर होइन, तर बहिर्दृष्टि भएका मानिसहरू परमात्मालाई बाहिर–बाहिर खोज्न हिँड्छन् र कहीँ पनि पाउँदैनन्। बरु प्रकाशगतिले उँड्दै गए टाढा–टाढाका ताराहरूसम्म पुग्न सकिएला, या केही समयमा नै पृथ्वीको चक्कर लगाउन सकिएला, तर बाहिर कहीँ पनि परमात्मा प्रत्यक्ष रूपमा नहुनुभएकाले उहाँलाई त्यहाँ जति खोजे पनि पाउन सकिँदैन। अनेक संसारी कर्म एवं तिनको फलको कामनाले गर्दा जसको चित्त निरन्तर विक्षिप्त भइरहन्छ, त्यस्ता व्यक्तिहरू बाहिर मात्र हेर्छन्, भित्र हेर्न सक्दैनन्। त्यस्ताका लागि परमात्मा टाढाभन्दा टाढा हुनुहुन्छ। तर निरन्तर परमात्माको गुणचिन्तनले युक्त अन्तर्मुख मन भएकाहरूका लागि भने परमात्मा अत्यन्त नजिक नै हुनुहुन्छ। पुष्पदन्ताचार्यले शिवमहिम्नःस्तोत्र (२९)मा भगवान् शिवको स्तुति गर्ने क्रममा उहाँलाई **नेदिष्ठ** अर्थात् सबैभन्दा नजिक एवं **दविष्ठ** अर्थात् सबैभन्दा टाढा रहेको भनी स्तुति गर्नुभएको छ। ईशावास्योपनिषद् (५)मा पनि परमात्मालाई **तद् दूरे तद्वन्तिके** अर्थात् उहाँ टाढाभन्दा टाढा एवं नजिकमा सबभन्दा नजिक

हुनुहुन्छ भनिएको छ। कुनै पनि वस्तु एकैचोटि टाढा र नजिक हुन सक्दैन। तर अधिकारीको भेद अनुसार परमात्मा दुबै रूप हुनुहुन्छ। जो विक्षिप्त मन भएका व्यक्तिहरू छन्, तिनका लागि परमात्मा अत्यन्त टाढा हुनुहुन्छ भने जो अन्तर्मुख अधिकारी छन्, तिनीहरूका लागि सबभन्दा नजिक हुनुहुन्छ। आफ्नै हृदयभित्र त्यसको प्रकाशक आत्मा बनी रहने परमात्माभन्दा नजिक अर्को को नै हुन सम्भव छ र? आफूभन्दा नजिक अर्को कोही व्यक्ति पनि हुँदैन। जो इन्द्रियहरूको प्रयोगविना पनि साक्षात् प्रत्यक्ष भइरहन्छ त्यो आत्मा हो। आफन्त एवं परिवारलाई आफ्नो सबभन्दा नजिक भनिए तापनि तिनीहरू कहिल्यै पनि आफूजत्तिकै नजिक एवं अन्तरङ्ग हुन सक्दैनन्।

**नमोऽस्तु तेऽध्यात्मविदां परात्मने अनात्मने स्वात्मविभक्तमृत्यवे।**
**सकारणाकारणलिङ्गमीयुषे स्वमाययासंवृतरुद्धदृष्टये ॥ ४८ ॥**

**पदार्थ–**
**अध्यात्मविदां** = आत्मज्ञानी-हरूका
**परात्मने** = परमात्मस्वरूप
**अनात्मने** = शरीर आदिलाई नै आत्मा मान्नेहरूका लागि
**स्वात्मविभक्तमृत्यवे** = भेदबुद्धि-द्वारा प्राप्त हुने मृत्युरूप
**सकारणाकारणलिङ्गं** = प्रकृति, महत्तत्त्व यी दुबै उपाधिलाई
**ईयुषे** = नियन्त्रित गर्ने
**स्वमायया** = आफ्नो मायाद्वारा
**असंवृतरुद्धदृष्टये** = आफूबाहेक अरू सबैको ज्ञानदृष्टिलाई ढाकिदिने
**ते** = हजुरलाई
**नमः** = नमस्कार
**अस्तु** = छ

**वाक्यार्थ–** हे भगवान्! हजुर आत्मज्ञानीहरूका लागि परमात्मस्वरूप हुनुहुन्छ। जो व्यक्ति शरीर आदिलाई नै आत्मा ठान्दछन्, त्यस्ता अज्ञानीहरूका लागि हजुर भेदबुद्धिद्वारा प्राप्त हुने संसारचक्ररूपी मृत्युको रूपमा हुनुहुन्छ। महत्तत्त्व आदि कार्य र प्रकृतिरूप कारण यी सबैका नियामक हजुर नै हुनुहुन्छ। आफ्नो मायाशक्तिद्वारा आफूबाहेक अरू सबैको ज्ञानदृष्टिलाई ढाकिदिनुहुने हजुरलाई म नमस्कार गर्दछु।

**स त्वं शाधि स्वभृत्यान् नः किं देव करवामहे।**
**एतदन्तो नृणां क्लेशो यद् भवानक्षिगोचरः ॥ ४९ ॥**

**पदार्थ–**
**देव** = हे भगवान्
**सः** = त्यस्ता
**त्वं** = हजुरले
**नः** = हामी
**स्वभृत्यान्** = हजुरका सेवकहरूलाई
**शाधि** = आज्ञा दिनुहोस्
**किं** = के
**करवामहे** = गरौँ
**यत्** = जब
**भवान्** = हजुर
**अक्षिगोचरः** = देखिनुहुन्छ
**नृणां** = मनुष्यहरूको
**क्लेशः** = सम्पूर्ण दुःख
**एतदन्तः** = त्यही वेलामा समाप्त हुन्छ

**वाक्यार्थ–** हे भगवान्! हामी सबै हजुरका सेवकहरू हौँ। हामी के गरौँ? हजुरले आज्ञा

दिनुहोस्। मानिसहरूको सम्पूर्ण दुःख त्यसै समयमा समाप्त हुन्छ, जब हजुरको दर्शन प्राप्त हुन्छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तदुक्तमित्युपाकर्ण्य भगवान् प्रणतार्तिहा।**

**गृहीत्वा पाणिना पाणिं प्रहसंस्तमुवाच ह॥ ५०॥**

**पदार्थ–**

**ह** = निश्चय नै
**इति** = यसप्रकार
**तदुक्तम्** = उनको वचनलाई
**उपाकर्ण्य** = सुनेर
**प्रणतार्तिहा** = शरणागतहरूको दुःखलाई नष्ट गर्ने
**भगवान्** = भगवान्‌ले
**पाणिना** = आफ्ना हातले
**पाणिं** = उनको हातलाई
**गृहीत्वा** = समाएर
**प्रहसन्** = हाँस्दै
**तं** = ती श्रुतदेवलाई
**उवाच** = भन्नुभयो

**वाक्यार्थ–** यसप्रकार श्रुतदेवको वचनलाई सुनेर शरणमा आएका भक्तहरूको दुःखलाई नष्ट गर्ने भगवान्‌ले आफ्ना हातले श्रुतदेवका दुबै हातलाई समातेर हाँस्दै यसो भन्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**ब्रह्मंस्तेऽनुग्रहार्थाय सम्प्राप्तान् विद्ध्यमून् मुनीन्।**

**सञ्चरन्ति मया लोकान् पुनन्तः पादरेणुभिः॥ ५१॥**

**पदार्थ–**

**ब्रह्मन्** = हे ब्राह्मण श्रुतदेव
**अमून्** = यी
**मुनीन्** = मुनिहरूलाई
**ते** = तिमीमाथि
**अनुग्रहार्थाय** = अनुग्रह गर्नकै लागि
**सम्प्राप्तान्** = यहाँ आएका भन्ने
**विद्धि** = जान
**पादरेणुभिः** = आफ्ना चरणको धुलोद्वारा
**लोकान्** = सम्पूर्ण लोकलाई
**पुनन्तः** = पवित्र गर्दै यिनीहरू
**मया** = मसँग
**सञ्चरन्ति** = विचरण गर्दछन्

**वाक्यार्थ–** हे ब्राह्मण श्रुतदेव! यी सम्पूर्ण ऋषिमुनिहरू तिमीमाथि अनुग्रह गर्नकै लागि यहाँ आएका हुन् भन्ने बुझ। यी सबै मुनिहरू आफ्ना चरणको धुलोद्वारा सम्पूर्ण लोकलाई पवित्र गर्दै मसँग विचरण गर्दछन्।

**देवाः क्षेत्राणि तीर्थानि दर्शनस्पर्शनार्चनैः।**

**शनैः पुनन्ति कालेन तदप्यर्हत्तमेक्षया॥ ५२॥**

**पदार्थ–**

**देवाः** = देवताहरू
**क्षेत्राणि** = पुण्य क्षेत्रहरू
**तीर्थानि** = तीर्थस्थलहरू
**दर्शनस्पर्शनार्चनैः** = दर्शन, स्पर्श र पूजाद्वारा
**शनैः** = बिस्तारै
**कालेन** = धेरै समयपछि मात्र
**पुनन्ति** = पवित्र गर्दछन्
**तत् अपि** = त्यो पवित्रता पनि
**अर्हत्तमेक्षया** = सन्तहरूको दृष्टिबाट मात्रै प्राप्त हुन्छ

**वाक्यार्थ–** देवताहरू, पुण्यक्षेत्रहरू र तीर्थस्थलहरूले दर्शन, स्पर्श र पूजाद्वारा बिस्तारै बिस्तारै धेरै दिनमा मात्र पवित्र गर्दछन्, तर तिनीहरूमा रहेको पवित्रता शक्ति पनि सन्तहरूको दृष्टिबाट मात्रै प्राप्त हुन्छ।

**ब्राह्मणो जन्मना श्रेयान् सर्वेषां प्राणिनामिह।**
**तपसा विद्यया तुष्ट्या किमु मत्कलया युतः॥ ५३॥**

**पदार्थ–**
**इह** = यस संसारमा
**सर्वेषां** = सबै
**प्राणिनाम्** = प्राणीहरूमध्ये
**ब्राह्मणः** = ब्राह्मण
**जन्मना** = जन्मजात नै
**श्रेयान्** = श्रेष्ठ छ
**तपसा** = तपस्या
**विद्यया** = शास्त्रज्ञान
**तुष्ट्या** = सन्तुष्टि र
**मत्कलया** = मेरो भक्तिद्वारा
**युतः** = युक्त छ भने त
**किमु** = झन् के कुरा

**वाक्यार्थ–** यस संसारमा सबै प्राणीहरूमध्ये ब्राह्मण जन्मबाट नै सर्वश्रेष्ठ छ। तपस्या, शास्त्रज्ञान, सन्तोष र मेरो भक्ति समेत छ भने त झन् के कुरा ?

**न ब्राह्मणान्मे दयितं रूपमेतच्चतुर्भुजम्।**
**सर्ववेदमयो विप्रः सर्वदेवमयो ह्यहम्॥ ५४॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**मे** = मेरो
**एतत्** = यो
**चतुर्भुजम्** = चतुर्भुज
**रूपम्** = रूपसमेत
**ब्राह्मणात्** = ब्राह्मणभन्दा
**दयितं** = बढी प्रिय
**न** = छैन
**विप्रः** = ब्राह्मण
**सर्ववेदमयः** = सम्पूर्ण वेदमय छ
**अहं** = म
**सर्वदेवमयः** = सर्वदेवमय छु

**वाक्यार्थ–** मेरो यो चतुर्भुज रूपसमेत मलाई ब्राह्मणहरू भन्दा बढी प्रिय छैन। किनभने ब्राह्मण वेदमय छन् र म सर्वदेवमय छु।

**दुष्प्रज्ञा अविदित्वैवमवजानन्त्यसूयवः।**
**गुरुं मां विप्रमात्मानमर्चादाविज्यदृष्टयः॥ ५५॥**

**पदार्थ–**
**अर्चादौ** = केवल मूर्तिमा मात्र
**इज्यदृष्टयः** = पूज्यदृष्टि गर्ने
**असूयवः** = दोषदृष्टि भएका
**दुष्प्रज्ञाः** = विकृत बुद्धि भएकाहरू
**एवं** = यस्तो रहस्यलाई
**अविदित्वा एव** = नजान्नाले नै
**मां** = मेरा स्वरूप भएका
**गुरुं** = जगत्का नै गुरु
**आत्मानं** = आत्मस्वरूप
**विप्रं** = ब्राह्मणलाई
**अवजानन्ति** = तिरस्कार गर्दछन्

**वाक्यार्थ–** जो व्यक्तिहरू केवल मूर्ति आदिमा नै पूज्य दृष्टि गर्दछन् र अरूतिर दोषदृष्टि गर्दछन्

यस्ता विकृत बुद्धि भएका व्यक्तिहरूले मात्र यो रहस्यलाई नबुझी मेरा स्वरूप भएका सम्पूर्ण संसारका नै गुरु आत्मस्वरूप ब्राह्मणहरूलाई तिरस्कार गर्दछन्।

**चराचरमिदं विश्वं भावा ये चास्य हेतवः।**
**मद्रूपाणीति चेतस्याधत्ते विप्रो मदीक्षया॥ ५६॥**

**पदार्थ–**
**मदीक्षया** = मेरो साक्षात्कारद्वारा
**विप्रः** = ब्राह्मणले
**इदं** = यो
**चराचरं** = चर, अचर
**विश्वं** = सम्पूर्ण ब्रह्माण्ड
**ये** = जुन जुन
**अस्य** = यो संसारका
**भावाः** = भावहरू छन्
**हेतवः च** = तिनका कारणहरू समेत सबैलाई
**मद्रूपाणि इति** = मेरै स्वरूप हुन् भनी
**चेतसि** = चित्तमा
**आधत्ते** = धारण गर्दछन्

**वाक्यार्थ–** ब्राह्मणहरू मेरो स्वरूपको साक्षात्कारद्वारा सम्पूर्ण चराचर जगत्, यसमा भएका अनेक भाव एवं यिनका कारण भएका प्रकृति आदि सबै पदार्थहरूलाई भगवान्कै स्वरूप हुन् भनी हृदयबाट निश्चय गर्दछन्।

**विवरण–** यस प्रसङ्गमा भगवान्ले ब्राह्मणहरूको प्रशंसा गर्नुभएको छ। ब्राह्मणहरू स्वभावतः पवित्र एवं सन्तुष्ट हृदय भएका हुन्छन्। **ज्ञानं विज्ञानमास्तिक्यं ब्रह्मकर्मस्वभावजम्** अर्थात् ज्ञान, विज्ञान र परमात्माप्रतिको अटल विश्वास ब्राह्मणहरूको स्वाभाविक धर्म हो। यस्ता स्वधर्मनिष्ठ ब्राह्मणहरूको यहाँ प्रशंसा गरिएको हो। मेरो कलाले युक्त ब्राह्मण झन् प्रशंसनीय हुन्छन् भनी भगवान्ले यहाँ बताउनुभएको छ। यहाँ कलाको अर्थ उपासना हो। गत्यर्थक धातु ज्ञानार्थक पनि हुने भएकाले **कल गतौ** धातुबाट बनेको कला शब्दले परमात्माको ज्ञान या चिन्तन भन्ने अर्थ बुझाउँछ। यसरी स्वतः नै पूज्य ब्राह्मण यदि परमात्माको उपासक छ भने त्यो झन् पूज्य हुन्छ। भगवान्ले यहाँ प्रशंसाको क्रममा आफ्नो चतुर्भुज रूपभन्दा पनि ब्राह्मण नै आफूलाई प्रिय भएको बताउनुभएको छ। तपस्वी ब्राह्मणहरू भगवान्लाई आफ्नो शरीरभन्दा पनि बढी प्रिय लाग्छन् भन्ने कुरा अन्यत्र पनि बताइएको छ। जय-विजयले सनक आदिको अपमान गरेको वेलामा आफ्ना सेवकको तर्फबाट माफी माग्दै भगवान्ले **छिन्द्यां स्वबाहुमपि वः प्रतिकूलवृत्तिम्** अर्थात् हजुरहरूको प्रतिकूल आचरण गर्‍यो भने म आफ्नै बाहु पनि छिनाइदिन सक्छु भनी बताउनुभएको छ।

भगवान्ले ब्राह्मणहरूको अत्यधिक प्रशंसा गरेबाट उहाँले ब्राह्मणहरूलाई उनीहरूको स्वधर्मको महत्तासमेत सम्झाइदिनुभएको छ। ब्राह्मणहरूको स्वधर्म भनेको सत् शास्त्रहरूको अध्ययन गर्नु र संसारभर त्यसको आलोकलाई छरिदिनु हो। तपस्या, भक्ति र ज्ञान यिनका नित्य साथी हुन्। एकान्तमा बस्ने र भिक्षा मागेर खाने भए तापनि यिनीहरूभित्र ज्ञान-वैराग्यको उच्चता रहेको हुन्छ। आन्तरिक उच्चताकै कारणले गर्दा उच्च आसनमा बस्ने सम्राट्हरू पनि यिनका अगाडि झुकेका देखिन्छन्। ब्राह्मणहरू जबसम्म उच्च जीवनमूल्यको अनुसरण गर्दै रहन्छन् र समाजलाई त्यसको आलोकले प्रकाशित गरिरहन्छन्, तबसम्म धर्म एवं नीतिमाथि केही सङ्कट

आउन सक्दैन। त्यसैले धर्मरक्षाका लागि अवतीर्ण भगवान्ले ब्राह्मणहरूको सम्पत्ति भएको सनातन ज्ञानपरम्पराको पनि प्रचार गर्नुहुन्छ र ब्राह्मणहरूको स्वयं सम्मान गरी तिनको उच्चतालाई समाजमा स्थापित गर्नुहुन्छ। यहाँ पनि भगवान्ले स्वयं ब्राह्मणहरूको सम्मान गर्नुभएको छ। अनि तिनमा रहनुपर्ने स्वाभाविक गुणहरूको विषयमा पनि बताइदिनुभएको छ। जब ब्राह्मणहरू आफ्नो तपस्या, शास्त्रनिष्ठा, श्रद्धा आदिले परिपूर्ण भएको जीवनलाई भन्दा बाहिरी उन्नतिमा रहनुलाई राम्रो ठान्न थाल्दछन्, तब उनीहरूबाट त्याग एवं संयमको उच्च जीवनमूल्य पनि खस्किँदै जान्छ। यसको अभावमा उनीहरू समाजबाट सम्मान पनि पाउन सक्दैनन्। परम्परागत रूपमा धर्मको रक्षा गर्दै आएको यो वर्णले धर्मलाई छाडिदियो भने समाजमा तत्काल नै कुनै अर्को वर्णले यो क्षतिलाई पूरा गर्न सक्दैन। यसबाट धर्मको प्रचारमा असर पुग्छ र सामान्य जनता धर्मबाट विमुख हुन पुग्दछन्। यसरी धर्मको रक्षा या हानि हुनुमा ब्राह्मणहरू नै सबैभन्दा प्रमुख कारण सिद्ध हुन्छन्। तपस्या, संयम आदि नै ब्राह्मणको धर्म अर्थात् ब्राह्मणत्व हो, त्यसको रक्षा अर्थात् पालनाबाट मात्र वैदिक धर्मको रक्षा सम्भव छ। श्रीशङ्कराचार्य गीताभाष्यको सुरुमा लेख्नुहुन्छ— **ब्राह्मणत्वस्य हि रक्षणेन रक्षितः स्याद् वैदिको धर्मः** अर्थात् ब्राह्मणत्वको रक्षाबाट मात्र वैदिक धर्मको रक्षा सम्भव छ। यसरी यहाँ भगवान्ले ब्राह्मणहरूको उच्च चारित्रिक विशेषतालाई देखाई तिनीहरूको महत्त्व प्रकट गर्नुभएको छ।

**तस्माद् ब्रह्मऋषीनेतान् ब्रह्मन् मच्छ्रद्धयार्चय।**
**एवं चेदर्चितोऽस्म्यद्धा नान्यथा भूरिभूतिभिः॥ ५७॥**

**पदार्थ—**
**ब्रह्मन्** = हे ब्राह्मण श्रुतदेव
**तस्मात्** = त्यसैले
**एतान्** = यी
**ब्रह्मऋषीन्** = ब्रह्मर्षिहरूलाई
**मच्छ्रद्धया** = मेरै समान श्रद्धाले
**अर्चय** = पूजा गर
**एवं चेत्** = यसो हुँदा
**अद्धा** = निश्चय नै
**अर्चितः** = पूजित
**अस्मि** = हुनेछु
**अन्यथा** = नत्र
**भूरिभूतिभिः** = अनेकौं ऐश्वर्यद्वारा पनि
**न** = होइन

**वाक्यार्थ—** हे श्रुतदेव ! त्यसैले यी सम्पूर्ण ब्रह्मर्षिहरूलाई तिमी मेरै स्वरूप सम्झी पूर्ण श्रद्धाले पूजा गर। यसबाट मात्र म पूर्णतः पूजित हुनेछु, धेरै ऐश्वर्यहरू मात्र चढाएर मेरो पूजा हुँदैन।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**स इत्थं प्रभुणादिष्टः सहकृष्णान् द्विजोत्तमान्।**
**आराध्यैकात्मभावेन मैथिलश्चाप सद्गतिम्॥ ५८॥**

**पदार्थ—**
**इत्थं** = यसप्रकार
**प्रभुणा** = प्रभु श्रीकृष्णद्वारा
**आदिष्टः** = आदिष्ट भएपछि
**सहकृष्णान्** = भगवान् श्रीकृष्णसहित
**द्विजोत्तमान्** = श्रेष्ठ मुनिहरूलाई
**एकात्मभावेन** = एकात्मभावले
**आराध्य** = आराधना गरी

**सः** = ती श्रुतदेव र
**मैथिलः च** = मिथिलानरेश
बहुलाश्वले पनि
**सद्गतिम्** = सद्गति
**आप** = प्राप्त गरे

**वाक्यार्थ–** यसप्रकार भगवान्को आदेश पाएर श्रुतदेवले श्रीकृष्णसहित ती सम्पूर्ण श्रेष्ठ मुनिहरूलाई एकात्मभावले आराधना गरे र सद्गति प्राप्त गरे। यसै गरी मिथिलाका राजा बहुलाश्वले पनि सद्गति प्राप्त गरे।

**एवं स्वभक्तयो राजन् भगवान् भक्तभक्तिमान्।**
**उषित्वादिश्य सन्मार्गं पुनर्द्वारवतीमगात्॥ ५९॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**एवं** = यसप्रकार
**भक्तभक्तिमान्** = भक्तहरूका भक्त
**भगवान्** = भगवान्
**उषित्वा** = मिथिलामा बसी
**स्वभक्तयोः** = आफ्ना दुबै भक्तहरूलाई
**सन्मार्गं** = सन्मार्गको
**आदिश्य** = उपदेश गरी
**पुनः** = फेरि
**द्वारवतीम्** = द्वारकातिर
**अगात्** = जानुभयो

**वाक्यार्थ–** हे परीक्षित्! यसप्रकार भक्तहरूका भक्त भगवान्ले मिथिलामा बसी आफ्ना दुबै भक्तहरूलाई सन्मार्गको उपदेश गर्नुभयो र त्यसपछि द्वारकानगरीतिर जानुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**
**श्रुतदेवानुग्रहो नाम षडशीतितमोऽध्यायः॥ ८६॥**

# अथ सप्ताशीतितमोऽध्यायः

## वेदस्तुति

**परीक्षिदुवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**ब्रह्मन् ब्रह्मण्यनिर्देश्ये निर्गुणे गुणवृत्तयः ।**

**कथं चरन्ति श्रुतयः साक्षात् सदसतः परे ॥ १ ॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे भगवान्
**साक्षात्** = स्पष्ट रूपमा
**सदसतः** = सत् र असत्देखि (कार्यरूप जगत् र कारण मायादेखि)
**परे** = पर रहेका
**अनिर्देश्ये** = देखाउन नसकिने
**निर्गुणे** = गुणले रहित
**ब्रह्मणि** = ब्रह्ममा
**गुणवृत्तयः** = गुणलाई विषय गर्ने
**श्रुतयः** = वेदहरू
**कथं** = कसरी
**चरन्ति** = प्रवृत्त हुन्छन्

**वाक्यार्थ–** हे भगवान् ! सत् र असत्देखि (कार्यरूप जगत् र कारण मायादेखि) पर रहेको देखाउन नसकिने निर्गुण ब्रह्ममा गुणलाई विषय गर्ने वेदहरू कसरी प्रवृत्त हुन्छन् ?

**विवरण–** यस श्लोकमा राजाले श्रीशुकदेवसँग वेदहरूले ब्रह्मतत्त्व कसरी बताउँछन् भनी सोधेका छन्। यहाँ एउटै वेदलाई पनि कर्म, उपासना र ज्ञानकाण्ड गरी तीन भागमा कल्पना गरेर वेदहरू भन्ने बहुवचनको प्रयोग गरिएको छ। सामान्यतया हेर्दा कर्मकाण्डले स्वर्ग आदि लोकमा पुऱ्याउने कर्महरूको, उपासनाकाण्डले अनेक देवतासम्बन्धी उपासनाको अनि ज्ञानकाण्डले चाहिँ परमात्मतत्त्वको प्रतिपादन गर्दछन्, तर वेदको परम तात्पर्य भने अद्वितीय ब्रह्मलाई बताउनु नै हो। कर्मद्वारा चित्तशुद्धि, उपासनाद्वारा विक्षेप आदि आन्तरिक प्रतिबन्धकहरूको निवारण भएपछि मात्र ज्ञानको उपदेश गर्नुको सार्थकता हुने भएकाले ज्ञानभन्दा अघि वेदले कर्म र उपासनालाई बताएको हो। वास्तवमा कर्म एवं उपासनाको पनि परम लक्ष्य अद्वितीय परमात्मतत्त्वको बोध नै हो। वेदको तात्पर्यको विषयमा उपदेश गरी भगवान् मिथिलाबाट द्वारकातिर फर्कनुभयो। परीक्षित् राजालाई भने सन्मार्ग अर्थात् वेदहरूले अद्वितीय ब्रह्मलाई बुझाउँछन् भन्ने विषयमा सन्देह भयो। सन्मार्गको व्याख्या गर्दै श्रीधर स्वामी लेख्नुहुन्छ– **सतां स्वतःप्रमाणभूतानां वेदानां मार्गं ब्रह्मपरत्वम्** अर्थात् स्वतः प्रमाण भएका वेदहरू कसरी ब्रह्मपरक छन् ?

वेदान्तशास्त्र अनुसार वेदहरू अपौरुषेय भएकाले सर्वोच्च प्रमाण हुन् अनि अरू कुनै प्रमाणान्तरको अपेक्षा गर्न नपर्ने हुनाले पनि यिनीहरू स्वतः प्रमाण हुन्। ज्ञानार्थक **विद्** धातुबाट **वेद** शब्द बन्दछ, यसको अर्थ ज्ञान या ज्ञानको साधन भन्ने हुन्छ। वेदको लक्षण गर्दै भनिएको छ– **धर्मब्रह्मप्रतिपादकं अपौरुषेयं वाक्यं वेदः** अर्थात् धर्म र ब्रह्मलाई प्रतिपादित गर्ने अपौरुषेय वाक्य नै वेद हो। संसारका सामान्य प्रमाणहरूले बाह्य लौकिक वस्तुहरूलाई मात्र अनुभव गराउन सक्छन्। जुन वस्तुहरू लौकिक सीमाक्षेत्रभित्र पर्दैनन्, तिनको ज्ञान वेदबाट हुन्छ। उदाहरणका

रूपमा धर्म-अधर्मलाई लिन सकिन्छ। प्राणीहरूलाई राम्रा-नराम्रा योनिहरूमा जन्माउने तत्त्वलाई धर्म-अधर्म भनिन्छ। यो सूक्ष्म वस्तु भएकाले इन्द्रियहरूले यसलाई ग्रहण गर्न सक्दैनन्। यसलाई जान्न वेदकै सहारा लिनुपर्दछ। त्यसैले भनिएको छ— **धर्मं जिज्ञासमानानां प्रमाणं परमं श्रुतिः** (मनुस्मृति २।१३) अर्थात् धर्मलाई जान्न खोज्नेहरूका लागि वेद नै परम प्रमाण हो। सम्पूर्ण संसारको उत्पत्ति जहाँबाट हुन्छ, त्यही ब्रह्मतत्त्व हो। प्राणीका इन्द्रियहरू सृष्टिभित्रका पदार्थहरूलाई देख्न सक्छन्, तर यसका स्रष्टा परमात्मालाई जान्न तिनीहरू समर्थ हुँदैनन्। यसका लागि पनि वेदकै सहारा लिनुपर्दछ। यसरी संसारमा अरू प्रमाणले बताउन नसक्ने पदार्थहरूको यथार्थ ज्ञान पनि वेदप्रमाणबाट मात्र हुन सक्दछ। भनिएको पनि छ— **प्रत्यक्षेणानुमित्या वा यस्तूपायो न बुद्ध्यते, एनं विदन्ति वेदेन तस्माद् वेदस्य वेदता** अर्थात् प्रत्यक्ष र अनुमान प्रमाणले विषय गर्न नसक्ने वस्तुलाई वेदले बताइदिन्छ, यही वेदको महत्ता हो। अरूले नबुझाएको कुरा बुझाउने भएकाले वेदलाई अपूर्व प्रमाण भनिन्छ। वेदको प्रशंसा गर्दै भनिएको छ— **चातुर्वर्ण्यं त्रयो लोकाश्चत्वारश्चाश्रमाः पृथक्, भूतं भव्यद् भविष्यञ्च सर्वं वेदात् प्रसिध्यति** (मनुस्मृति १२।९७) अर्थात् चारै वर्ण, तीनै लोक, चार आश्रम अनि भूत, भविष्य एवं वर्तमान सबै पदार्थहरूको ज्ञान वेदबाट मात्र हुन्छ। यसप्रकार वेद त्यस्तो ज्ञानराशि हो, जसले व्यक्त, अव्यक्त सम्पूर्ण पदार्थहरूलाई प्रकाशित गरिदिन्छ।

वेदवाक्यलाई पाँच भागमा विभक्त गरिएको छ। ती पाँच भाग हुन्— **विधि**, **मन्त्र**, **नामधेय**, **निषेध** र **अर्थवाद**। विधि भन्नाले लिङ् र लोट् लकार अनि तव्यत् प्रत्यय अन्तमा हुने क्रियाबोधक वाक्य हुन्। जस्तै— **अग्निहोत्रं जुहुयात् स्वर्गकामः** अर्थात् स्वर्ग जान चाहने व्यक्तिले अग्निहोत्र यज्ञ गरोस् भन्दा **जुहुयात्** भन्ने विधिलिङ्को क्रियापद प्रयोग गरिएको छ। त्यसैले यो विधिवाक्य हो। **मन्त्र** भन्नाले यज्ञीय प्रयोगको प्रक्रिया एवं अर्थ सम्झाउने वाक्य हुन्। **नामधेय** भनेर यज्ञका नामहरू बताइएका वाक्यहरूलाई बुझिन्छ भने निषेध भनेका कुनै पनि कुराबाट निवृत्त गर्ने वाक्यहरू हुन्। **ब्राह्मणो न हन्तव्यः** अर्थात् ब्राह्मणलाई मार्नु हुँदैन, **मा हिंस्यात् सर्वभूतानि** अर्थात् कुनै पनि प्राणीलाई नमार, अनि **स्वाध्यायप्रवचनाभ्यां न प्रमदितव्यम्** अर्थात् पढ्न पढाउनमा कहिल्यै अल्छी नगर भन्ने जस्ता वाक्यहरूले निषिद्ध आचरणबाट निवृत्त गर्दछन्। त्यसैले यस्ता वाक्यलाई निषेधवाक्य भन्दछन्। **अर्थवाद** वाक्यचाहिँ दुई प्रकारको हुन्छ, एउटा **विधिशेष अर्थवाद** र अर्को **निषेधशेष अर्थवाद**। **प्राशस्त्यनिन्दान्यतरपरं वाक्यमर्थवादः** अर्थात् प्रशंसा र निन्दामध्ये कुनै एक बताउने वाक्यलाई अर्थवाद भनिन्छ। अर्थवाद वाक्यको आफ्नो कुनै अलग तात्पर्य हुँदैन, अपितु यसले विधि र निषेध वाक्यले बताएको अर्थलाई नै पुष्टि गर्दछ। प्रशंसापरक वाक्यले विधि वाक्यको अर्थलाई पुष्टि गर्दछ भने निन्दा वाक्यले चाहिँ निषेधपरक अर्थलाई बुझाउँछ। अर्थवादले कुनै पनि कुरालाई धेरै बढाएर भन्ने हुनाले यसले भनेको जस्ताको तस्तै प्रमाण नभई विधि र निषेधको अङ्ग या शेषको रूपमा नै यो प्रमाण हुन्छ। अज्ञानी रहनुहुन्न भन्ने बताउन शास्त्रमा अनेक ठाउँमा अज्ञानको निन्दा गरिएका निषेध अर्थवाद पाइन्छन्। **असूर्या नाम ते लोका अन्धेन तमसावृताः** अर्थात् घोर अन्धकारबाट ढाकिएका नीच योनिहरूमा अज्ञानी व्यक्ति जाकिइरहन्छ भन्ने वचनको तात्पर्य अज्ञानको निन्दामा रहेको छ। त्यसै गरी **स स्वराड्**

**भवति सम्राड् भवति** अर्थात् आत्मज्ञ व्यक्ति सम्पूर्ण संसारको सम्राट् अनि आफू नै आफ्नो राजा हुन्छ भन्ने वचनको तात्पर्य ज्ञानको प्रशंसा या विधिमा छ। यसरी पाँच ज्ञानमध्ये विधि र निषेध वाक्य मुख्य हुन्छन्, अर्थवाद वाक्यले विधि–निषेध दुबैको अर्थ बुझाउन सघाउँछन् भने नामधेय र मन्त्र वाक्यले विधिद्वारा प्रतिपादित कर्म आदिको विषयमा बताउँछन्। यसप्रकार वेदवाक्यहरू पाँच प्रकारका छन्।

वेद नित्य ज्ञानस्वरूप त हुँदै हो साथसाथै यसको शब्दरूप पनि अपौरुषेय हो भन्ने शास्त्रीय मान्यता छ। पूर्वमीमांसकहरू वेद परमात्माबाट पनि उत्पन्न नभएकाले यो अपौरुषेय हो, सृष्टिकालमा विधाताले यसको रोकिएको सम्प्रदायलाई फेरि चलाइदिनुभएको मात्र हो, त्यसैले यो शब्दरूपमा पनि नित्य हो भन्ने मान्दछन्। वेदान्तीहरू भने परमात्माबाट उत्पन्न हुँदाहुँदै पनि वेद अपौरुषेय भएको धारणा राख्छन्। सामान्यतया पुरुषबाट रचिएको पौरुषेय अनि पुरुषबाट नरचिएको अपौरुषेय हो भन्ने लाग्छ, तर दार्शनिक रूपमा यस्तो अर्थ होइन। यदि पुरुषले उच्चारण गरेको नै पौरुषेय हो भन्ने हो भने त मनमनै भनिएका या कल्पना गरिएका श्लोक या भावनाहरू सबै अपौरुषेय एवं परम प्रमाण हुने भए। यसकारण स्वजातीय पुरानो उच्चारणको अपेक्षा नगरी नयाँ तरिकाले उच्चारण गर्नु या बनाउनु नै पौरुषेयताको लक्षण हो। यद्यपि स्मृति, पुराण आदिका कथावस्तु पनि पुराना कल्पका प्रसिद्ध कथाहरू हुने गर्दछन्, तर तिनको प्रतिपादन या लेखन शैली पुरानो शैलीकै अनुसार हुँदैन। हरेक कल्पमा वेदव्यासले आफ्नै तरिकाले यी आख्यानहरूलाई सङ्ग्रह गर्ने हुनाले पुराण आदि पौरुषेय हुन्। तर वेद चाहिँ पूर्व कल्पमा जसरी उच्चारण गरिएको थियो, अहिले पनि त्यसै गरी उच्चारण गरिएको हो। यसका अक्षर, मात्रा आदि सबै सनातनरूपले उही छन्। सर्वज्ञ परमात्माले पुरानो उच्चारणको अनुसार नै आफ्नो निःश्वासबाट वेदको प्रवर्तन गर्नुभएको हो। यो परमात्माको स्वाभाविक वाणी हो। त्यसैले परम पुरुष परमात्माले उच्चारण गर्दा पनि यो अपौरुषेय नै रहेको हो। वेदान्त परिभाषामा अपौरुषेयत्वको लक्षण यसप्रकार गरिएको छ– **सजातीयोच्चारणापेक्षोच्चारणविषयत्वम्** अर्थात् पुरानो उच्चारण अनुसार नै पछि पनि उच्चारण गरिनु वेदको अपौरुषेयता हो। उसो भए वेदमन्त्रका अनेक ऋषिहरू द्रष्टा कसरी भए त ? भन्ने शङ्का हुन सक्छ। यसको उत्तर हो, ऋषिहरूले वेदमन्त्रलाई रचेका नभई ध्यानावस्थामा साक्षात्कार गरेका हुन्। वेद नित्य शब्द हो। **भूः, भुवः** आदि व्याहृतिको उच्चारण गरेर नै बाहिरी पृथिवी आदि लोकको सृजना भएको हो। सृष्टिमा यो शब्द सदा गुन्जिइरहन्छ। जो व्यक्ति तपस्या, संयम आदि साधनाको बलले समर्थ भएको हुन्छ उसले एकाग्र मनले हृदयभित्र नित्य अनाहत नादको रूपमा यसको साक्षात्कार गर्दछ। ऋषिहरूले पनि आ–आफ्ना संस्कार अनुसारका यिनै नित्य शब्दहरूलाई हृदयभित्र उपलब्ध गर्दै शिष्य–प्रशिष्यलाई पढाएका हुन्। त्यसैले सबैले उच्चारण गर्दा गर्दै पनि वेद अपौरुषेय हो।

अपौरुषेय भएकाले वेदमा पुरुष सम्बन्धी दोषहरूको सम्भावना छैन। पुरुष सम्बन्धी दोष भनेका भ्रम, प्रमाद, विप्रलिप्सा र करणापाटव गरी चार प्रकारका दोषहरू हुन्। भ्रम भनेको अयथार्थ ज्ञान हो। व्यक्तिले आफूलाई जतिसुकै बुद्धिमान् सम्झे पनि अनि आफ्नो अनुभवमा जति धेरै विश्वास गरे पनि त्यसका इन्द्रियहरूले कहिलेकाहीँ भ्रमवश अयथार्थ वस्तुको दर्शन

गराइदिन्छन् र ऊ त्यसलाई सत्य मान्दछ। डोरीमा सर्प, आकाशमा निलोपन आदि यस्ता भ्रम हुन्, जसले पुरुषको ज्ञान कुनै न कुनै रूपमा त्रुटिपूर्ण हुन्छ नै भनी सिद्ध गर्दछन्। प्रमाद भनेको असावधानी या अल्छी गर्नु हो। यसबाट पनि पुरुषको ज्ञान अपूर्ण हुन्छ। विप्रलिप्सा भनेको लोभ या कपट स्वभाव हो। यसले गर्दा व्यक्ति आफ्नो अनुभव यथार्थ रूपमा अरूलाई खुलस्त अभिव्यक्त गर्न सक्दैन। करणापाटव भनेको इन्द्रियहरू समर्थ नहुनु हो, यसकारणले पनि व्यक्तिको ज्ञान अपूर्ण हुने र उसले बताएको कुरा अप्रामाणिक हुने हुन्छ। यसरी चारै प्रकारका दोषले नछोइने हुनाले वेदको वचन स्वतःप्रमाण हो र योभन्दा माथि अर्को कुनै प्रमाण हुँदैन।

यहाँ राजा परीक्षित्‌ले वेदहरूले परमात्मतत्त्व बताउने सम्बन्धमा जिज्ञासा राखेका छन्। अपौरुषेय एवं परम प्रमाण भए तापनि वेदहरू आखिर त्रिगुणमय संसारकै अन्तर्गत छन्। मन, वचन आदिले विषय गर्न नसक्ने परम तत्त्वलाई वेदवचनले पनि विषय गर्न सक्दैनन्, किनभने त्रिगुणमय संसारभित्र पर्ने वस्तुले गुणातीत ब्रह्मलाई ग्रहण गर्न सम्भव छैन। ब्रह्मतत्त्व सत् र असत् अर्थात् कार्य र कारणभन्दा पर रहेकाले पनि यसलाई कुनै पनि रूपमा किटान गरी बताउन सम्भव छैन। त्यसैले ब्रह्मलाई **अनिर्देश्य** भनिएको छ। कुनै पनि वस्तु निर्देश्य हुन अर्थात् यो यस्तै हो भनी निश्चित रूपमा बताइदिनका लागि त्यसमा जाति, गुण, क्रिया र सम्बन्ध हुनै पर्दछ। **घटत्वाद् घटः** भन्दा घटत्व जातिद्वारा घटको निश्चय हुन्छ। ब्रह्म अद्वितीय तत्त्व भएकाले त्यसमा कुनै जाति छैन, त्यसैले यो जातिद्वारा निर्देश्य हुन सक्दैन। चिसो पानी, तातो आगो आदि भन्दा चिसो, तातो गुणद्वारा पदार्थहरूको बोध हुन्छ। निर्गुण ब्रह्ममा कुनै गुण नहुने भएकाले त्यो गुणद्वारा निर्देश्य पनि हुन सक्दैन। जो हिँडिरहेको छ त्यो राम हो भन्दा हिँड्नुरूप क्रियाद्वारा रामको निश्चय भएको छ, तर ब्रह्म निष्क्रिय भएकाले त्यसलाई क्रियाद्वारा पनि निर्देश गर्न सकिँदैन। बाटो छेउको घर भन्दा बाटोको सम्बन्धद्वारा घरको ज्ञान भयो, तर ब्रह्म असङ्ग भएकाले त्यो कसैसँग पनि सम्बन्धित छैन, त्यसैले सम्बन्धद्वारा पनि ब्रह्मको निर्देश या निश्चय गर्न सम्भव छैन। यसरी कुनै पनि रूपले बताउन नसकिने निरपेक्ष आत्मतत्त्वलाई वेदले कसरी विषय गर्न सक्दछ भनी यहाँ जिज्ञासा राखिएको हो।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**बुद्धीन्द्रियमनःप्राणान् जनानामसृजत् प्रभुः।**

**मात्रार्थं च भवार्थं च आत्मनेऽकल्पनाय च॥ २॥**

**पदार्थ—**

**प्रभुः** = सर्वसमर्थ भगवान्‌ले
**भवार्थं** = धर्मको अनुष्ठानका लागि
**मात्रार्थं** = अर्थप्राप्तिका लागि
**आत्मने च** = विषयभोग (काम)का लागि
**अकल्पनाय च** = मोक्षका लागि पनि
**जनानां** = प्राणीहरूको
**बुद्धीन्द्रियमनःप्राणान् च** = बुद्धि, इन्द्रिय, मन र प्राणहरूलाई
**असृजत्** = सृष्टि गर्नुभयो

**वाक्यार्थ–** भगवान्ले प्राणीहरूले धर्म, अर्थ, विषयको उपभोग र मोक्ष प्राप्त गरून् भनी बुद्धि, इन्द्रिय, मन र प्राणको सृष्टि गर्नुभयो।

**विवरण–** यस श्लोकमा भगवान्ले धर्म, अर्थ, काम र मोक्ष चारै पुरुषार्थको सिद्धिका लागि प्राणीहरूका इन्द्रिय आदि सृष्टि गर्नुभयो भनी श्रीशुकदेवले बताउनुभएको छ। राजा परीक्षित्ले निर्गुण ब्रह्मतत्त्वलाई वेदहरूले कसरी प्रतिपादित गर्दछन् ? भनी सोध्नुभएको थियो, त्यसको उत्तरमा भगवान्ले इन्द्रिय आदिको सृष्टि भएको कुरा बताउनु कत्तिको प्रासङ्गिक होला ? सामान्य दृष्टिले हेर्दा यहाँ एक थरी सोधिएकोमा अर्को थरी उत्तर दिए जस्तो देखिन्छ। तर आचार्यहरूले श्रीशुकदेवको भनाइको तात्पर्यलाई निकालेर यसको भित्री आशयलाई व्याख्या गर्नुभएको छ।

सर्वसमर्थ भगवान्ले प्राणीहरूले पुरुषार्थ गर्न सकून् भनी बुद्धि, इन्द्रिय, मन र प्राणको सृष्टि गर्नुभयो। पुरुषार्थ चार प्रकारका मानिएका छन्– धर्म, अर्थ, काम र मोक्ष। यहाँ पनि **मात्रार्थं, भवार्थं, आत्मने र अकल्पनाय** यी चार शब्दहरूले चार पुरुषार्थलाई नै बुझाउँछन्। **मीयन्ते इति** अर्थात् जो प्रमाणहरूद्वारा विषय गरिन्छन् या सिद्ध हुन्छन्, ती वस्तुहरू मात्रा हुन्। यो पदले संसारका सम्पूर्ण पदार्थहरूलाई जनाउँछ। संसारभरिका सबै पदार्थहरूमध्ये सबैभन्दा महत्त्वपूर्ण सम्पत्ति नै हुन्छ, त्यसैले यहाँ मात्रा भन्ने शब्दले अर्थरूप पुरुषार्थलाई बुझाउँछ। **भव** शब्दको शाब्दिक अर्थ उत्पत्ति या जन्म भन्ने हुन्छ। जन्मको हेतुभूत कर्मलाई पनि भव शब्दले जनाउँछ। कर्म अनुसार नै प्राणीहरूका शरीर आदिको उत्पत्ति हुन्छ। राम्रो कर्मद्वारा राम्रो योनि अनि नराम्रा कर्मद्वारा नीच योनिको प्राप्ति हुन्छ। यसरी मानिस, देवता आदि उच्च योनिहरूमा हुने जन्मलाई लिँदा भव शब्दले यसको हेतु भएको शुभ कर्म या धर्मलाई बुझाउँछ। **आत्मने** शब्दको अर्थ यो लोक-परलोकमा घुमी ती-ती फलहरूको उपभोग गर्ने जीव भनी गरिएको छ। अनेक थरी विषयहरूको भोग गर्ने हुनाले यो आत्मने भन्ने पदले कामरूप पुरुषार्थलाई बुझाएको छ। **अकल्पनाय** यो शब्दको अर्थ हुन्छ, संसार कल्पनाले रहित हुनका लागि। यसले ज्ञानद्वारा संसारको कल्पनालाई बाधित गरी आत्मरूपमा अवस्थित हुने मोक्षरूपी परम पुरुषार्थलाई बुझाएको छ। **जनानां** अर्थात् मानिसहरूका लागि क्रमशः धर्म, अर्थ, काम र मोक्ष यी चार पुरुषार्थ सिद्ध गराउन परमात्माले मन, बुद्धि आदिको रचना गर्नुभयो। **मात्रा** अर्थात् पदार्थहरूको प्रमिति अर्थात् यथार्थ ज्ञान गर्नका लागि बुद्धिको आवश्यकता हुन्छ। भव अर्थात् शुभ कर्म गर्नका लागि इन्द्रियहरूको आवश्यकता परिहाल्छ। आत्मने अर्थात् लोकान्तर आदिमा गई विषयभोग गर्न, त्यसको आनन्द लिन मन चाहिन्छ नै, किनभने वासनायुक्त मन नभईकन कुनै पनि फलभोग हुन सक्दैन। अकल्पनाय अर्थात् मोक्षका लागि प्राण अर्थात् जीवनको आवश्यकता परिहाल्छ। जीवनको प्रयोजन बताउँदै भनिएको छ, तत्त्वजिज्ञासा गर्नका लागि प्राणधारण गर्नुपर्दछ। यसरी चार पुरुषार्थको प्राप्तिका लागि क्रमशः बुद्धि, इन्द्रिय, मन र प्राणको प्रमुख प्रयोजन रहेको बुझ्न सकिन्छ। मात्राको अर्थ श्रुति भन्ने पनि गरिएको पाइन्छ। **मीयन्ते गुणकार्याणि गुणातीतं च याभिः** अर्थात् जसद्वारा त्रिगुणमय संसारमा अनेक प्रकारका कर्महरूको र गुणातीत आत्माको पनि ज्ञान हुन्छ, त्यो श्रुतिलाई मात्रा भनिन्छ। मात्रार्थ पदको अर्थ हुन्छ, वेदलाई धारण गर्नका लागि। अर्थात् वेदार्थलाई बुझ्नका लागि नै परमात्माले बुद्धिको रचना गर्नुभएको हो। **भव** भनेको लोकान्तर

प्राप्तिरूप अभ्युदय हो। **अग्निहोत्रं जुहुयात् स्वर्गकामः** अर्थात् स्वर्ग जान चाहने व्यक्तिले अग्निहोत्र यज्ञ गरोस् भन्ने बुझ्नुको सार्थकता अग्निहोत्र गरी स्वर्गसम्म पुग्नुमा नै छ। अग्निहोत्रका लागि समर्थ इन्द्रियहरूको आवश्यकता हुन्छ। यसैले **भव** अर्थात् अभ्युदय फल भएको धर्म अनुष्ठानका लागि इन्द्रियहरूको सृष्टि भयो। लोकान्तरगमनको सार्थकता त्यहाँका दिव्य फलहरूलाई भोग्नुमा नै छ। त्यसैले आत्मने अर्थात् जीवले दिव्य स्वर्गीय फल भोग्नका लागि मनको सृष्टि भएको हो। अकल्पनाय शब्दको अर्थ हो, मोक्ष। कर्मफल भोग्दा भोग्दा त्यसको अपूर्णता अनि क्षणिकतालाई बुझेर व्यक्ति बिस्तारै विरक्त बन्दै जान्छ र अन्तमा मोक्ष प्राप्त गर्दछ। यसरी विचारपूर्वक मोक्षसम्म पुग्नका लागि प्राण अर्थात् जीवनको अनिवार्य आवश्यकता पर्दछ।

दोस्रो प्रकारले अर्थ गर्दा भने श्लोकमा आएका मात्रार्थ आदि चारै पदहरू वेद अनि तत्प्रतिपादित कर्म आदिसँगै क्रमशः सम्बन्धित रहेका देखिन्छन्। वेदमा मुख्यतया संसारका फलभोग एवं तिनका साधन यज्ञादिको प्रतिपादन गर्ने कर्मभाग अनि ती सबैको अनित्यता बताई आत्मज्ञानको उपदेश गर्ने ज्ञानभाग गरी दुई भाग हुन्छन्। वेदको अध्ययन गर्दा मानिसले कर्मभाग र ज्ञानभाग दुबैको अर्थ बुझ्दछ। मात्रार्थ भन्ने पदले दुबै प्रकारका वेद मन्त्रहरूको अर्थ बुझ्नुलाई जनाएको छ। सबै अर्थ बुझे तापनि व्यक्तिको चित्त वासनाग्रस्त हुने हुनाले उसले पहिले स्वर्ग आदि लोकमा पुऱ्याउने कर्महरूकै अनुसरण गर्दछ, यसैलाई यहाँ भवार्थ यो पदले बताएको छ। कर्मको फल भनेको दिव्य लोकहरूको भोग गर्नु हो, यसैलाई आत्मने शब्दले बताएको छ। अनादि कालदेखि बारम्बार दिव्य भोगहरू भोग्दा पनि जब पूर्ण तृप्ति हुँदैन, तब भने परमात्माको कृपाले मानिस आफूले कामनाको वशमा परी व्यर्थमा नै यो लोक-परलोकमा आउजाउ गरेको र दुःख पाएको भन्ने सम्झिन पुग्छ। यसपछि भने संसारबाट विरक्त भएको व्यक्ति पहिले अध्ययन गरेकै वेदको ज्ञानखण्डलाई सम्झिन्छ र त्यसको अनुसरणद्वारा मोक्ष प्राप्त गर्दछ।

यहाँ वेदले निर्गुण ब्रह्मलाई कसरी बताउँछन् ? भनी गरिएको जिज्ञासाको प्रस्तुत श्लोकबाट उत्तर आयो कि आएन भन्ने शङ्का हुन्छ। श्रीधर स्वामी लेख्नुहुन्छ– **सगुणमेव सच्चिदानन्दं भगवन्तं श्रुतयः प्रतिपादयन्ति** अर्थात् श्रुतिहरूले सगुण सच्चिदानन्द परमात्मालाई नै प्रतिपादन गर्दछन्। श्लोकमा प्राणीहरूका लागि बुद्धि, मन, इन्द्रिय आदिको सृष्टि भएको बताइएबाट ती बुद्धि, इन्द्रिय आदिले सगुण ब्रह्मलाई विषय गर्न सक्छन् भन्ने तात्पर्य निस्कन्छ। वेद वाक् वा वाणीरूप हो, प्राणवायुको सहायताले वागिन्द्रियद्वारा यसको उच्चारण हुन्छ अनि यसलाई सुनेर अर्थ बुझ्नका लागि चाहिँ श्रवण इन्द्रिय, मन आदिको आवश्यकता पर्दछ। यसरी वेद र इन्द्रिय प्राण आदिको सम्बन्ध रहेको छ। अरु ऋग्वेदलाई वाक्‌रूप, यजुर्वेदलाई मनरूप अनि सामवेदलाई प्राणरूप भनी बताइएको समेत पाइन्छ– **ऋचं वाचं प्रपद्ये मनो यजुः साम प्राणं प्रपद्ये।** यसप्रकार वाक् आदि कर्मेन्द्रिय अनि प्राणको माध्यमले उच्चरित हुने र श्रवण इन्द्रिय र मनको माध्यमले अर्थ बुझिने वेदले पहिले सगुण ब्रह्मलाई नै विषय गर्दछ। निर्गुण ब्रह्म त मन र वाणीको विषय हुन सक्दैन। यसैलाई उपनिषद्मा **अचिन्त्यं अव्ययपदेश्यम्** अर्थात् चिन्तन गर्न पनि नसकिने अनि निश्चित रूपमा बताउन पनि नसकिने भनिएको छ। यसैले वेदले निर्गुण ब्रह्मको विषयमा जति बताए पनि त्यो पहिले शुद्धसत्त्वमय मायाविशिष्ट ईश्वरकहाँ नै पुग्दछ।

ब्रह्मलाई बताउँदा वेदमा दुई प्रकारका वाक्यहरू आउँछन्, एउटा विधिपरक अनि अर्को निषेधपरक। विधिपरक प्रतिपादनले ब्रह्मलाई यस्तो छ अथवा यस्तै हो भनी बताउँछ भने निषेधमुख प्रतिपादनले चाहिँ यस्तो छैन या यस्तो होइन भनी अकरण भाषामा ब्रह्मलाई बुझाउँछ। यहाँ **विज्ञानमानन्दं ब्रह्म, यः सर्वज्ञः स सर्ववित्** इत्यादि सम्पूर्ण वाक्यहरूले ब्रह्म चित्ज्ञान र आनन्दस्वरूप छ, यो सर्वज्ञ र अझै विशेष रूपले सबै संसारलाई जान्दछ भनी विधिपरक करण शैलीले ब्रह्मलाई बुझाएका छन्। यसै गरी **अस्थूलमनण्वह्रस्वम्** (बृहदारण्यकोपनिषद् ३।८।८) **अशब्दमस्पर्शमरूपम्** (कठोपनिषद् १।३।१५) आदि वाक्यहरूले चाहिँ ब्रह्म ठुलो, सानो, छोटो, लामो केही छैन अनि यसमा शब्द, स्पर्श, रूप आदि पनि छैनन् भनी निषेधपरक अकरण शैलीमा ब्रह्मलाई बुझाएका छन्। दुबै प्रकारका वाक्यहरूलाई उद्धृत गर्दै श्रीधरस्वामीले विधिपरक वाक्यहरू लक्षणाद्वारा ब्रह्ममा पर्यवसित हुने अनि निषेधपरक वाक्यहरू चाहिँ सोझै ब्रह्ममा पर्यवसित हुने बताउनुभएको छ। ब्रह्म सत्, चित् र आनन्दस्वरूप छ भन्दा यो वाक्यले पहिले मायाविशिष्ट ब्रह्मलाई नै बुझाउँछ। यसरी ब्रह्मलाई प्रतिपादन गर्ने सबै वाक्यहरूले अभिधा वृत्तिले ईश्वरलाई नै विषय गर्दछन्। जब **तत् त्वमसि** अर्थात् त्यही तिमी हौ जस्ता महावाक्यहरूले जीव र ईश्वरको अभेद प्रतिपादन गर्छन् तब सर्वज्ञ ईश्वरसँग अल्पज्ञ जीवको अभेद सम्भव नहुने अनुपपत्ति आइपर्दछ। जीव र ईश्वरलाई अभिन्न बनाउनका लागि ईश्वरबाट पनि चैतन्य अंश अनि जीवबाट पनि चैतन्य अंश मात्र लिनुपर्दछ। दुबैमा विरोधी रूपले रहेका सर्वज्ञत्व अनि अल्पज्ञत्व आदि उपाधिहरूलाई चाहिँ छोडिदिनुपर्दछ। श्रीशङ्कराचार्य लेख्नुहुन्छ– **एतावुपाधी परजीवयोस्तयोः सम्यङ्निरासे न परो न जीवः** (विवेकचूडामणि, २४६) अर्थात् परमात्मा र जीवात्माका यी दुबै विरोधी उपाधिहरूलाई छाडिदिएपछि न परमात्मा न जीवात्मा नै रहन्छ, केवल चैतन्य ब्रह्मतत्त्व मात्र अवशिष्ट रहन्छ। यसलाई जहदजहल्लक्षणा भन्दछन्। अलिकति अंश छाडी, अलिकति अंशलाई लिएर अर्थ बुझ्ने लक्षणा नै जहदजहल्लक्षणा हो। जीव र ईश्वरको अभिधार्थमा अभेद हुन नसकेपछि लक्ष्यार्थमा अभेद गर्नुपर्ने प्रक्रिया रहेको छ। यसैलाई श्रीधर स्वामी लेख्नुहुन्छ– **तच्च प्रकारान्तरेणाघटमानं ब्रह्मणि पर्यवसानं गमयति** अर्थात् जीव र ईश्वरको अभेद अरू कुनै पनि प्रकारले घट्न या मिल्न नसक्ने हुनाले ती दुबैको तात्पर्य ब्रह्ममा पर्यवसित हुन्छ। जीवलाई र ईश्वरलाई आ–आफ्नो रूपले बताउने वाक्यहरूको पनि अन्तिम अर्थ भने अद्वितीय ब्रह्म नै हुन्छ। यसरी विधिपरक वाक्यले पहिले इन्द्रिय, वाणी आदिले विषय गर्न सकिने सगुण ईश्वरलाई बताएर फेरि तात्पर्य निकाल्ने क्रममा चाहिँ त्यही ईश्वरमा तिनै सर्वज्ञत्व, आनन्दरूपत्व आदि उपाधिहरूको निषेध गरी निर्गुण ब्रह्मलाई बुझाउँछन्। यसलाई बुझाउन राजहंसको दृष्टान्त दिन सकिन्छ। जसरी राजहंसले दुध र पानी घोलिएको मिश्रणमा नै चुच्चो गाड्छ, तर त्यहाँबाट केवल दुध–दुधको अंशलाई मात्र लिई पानी छाडिदिन्छ, त्यसै गरी वेदवाक्यले पनि पहिले ब्रह्म र माया मिसिएको सगुण ईश्वरलाई नै विषय गरी पछि तात्पर्य निकाल्ने क्रममा भने त्रिगुणमय मायालाई छाडी निर्गुण ब्रह्मलाई मात्र ग्रहण गर्दछ।

निषेधपरक वाक्यहरूको विषयमा बताउँदै श्रीधर स्वामी लेख्नुहुन्छ– **अस्थूलादिवाक्यानां तु साक्षादुपाधिनिषेधेन निर्गुण एव पर्यवसानम्** अर्थात् **अस्थूलमनणु** आदि निषेधपरक वाक्यहरूले

त ब्रह्ममा सिधै ठुलो–सानो आदि उपाधिलाई निषेध गर्ने हुनाले यिनले चाहिँ अभिधा वृत्तिद्वारा नै ब्रह्मलाई बुझाउँछन्। सगुण ईश्वरलाई ग्रहण गराउने वेलामा त इन्द्रिय, मन आदिको उपयोग भयो, तर निर्गुण ब्रह्मलाई बुझाउँदा यिनको उपयोग कहाँ र कसरी हुन्छ ? भन्ने जिज्ञासा उठाउँदै वंशीधरले भावार्थदीपिकाप्रकाश टीकामा यसको विस्तृत व्याख्या गर्नुभएको छ। उहाँ लेख्नुहुन्छ– **अतन्निरसने श्रुतिप्रतिपादनम्** अर्थात् ब्रह्ममा नभएका उपाधिहरूको निषेध गर्दै वेदले ब्रह्मलाई बुझाउँछ। उपाधिहरूको निषेध गर्न त्यहाँ पहिले उपाधि अवश्य पनि रहेको हुनुपर्दछ। अध्यारोप अर्थात् उपाधिहरूको आरोप विना अपवाद अर्थात् तिनको निषेध हुन सक्दैन। **अस्थूलमनणु** अर्थात् ब्रह्म ठुलो पनि छैन अनि सानो पनि छैन, **अशब्दमस्पर्शमरूपम्** अर्थात् ब्रह्ममा शब्द, स्पर्श, रूप आदि केही पनि छैन भनेर निषेध गर्नका लागि त्यहाँ ठुला–साना अनि शब्द, स्पर्श आदि उपाधि अवश्य नै चाहिन्छ। यी सारा उपाधिहरूको उत्पत्ति मन, बुद्धि आदिको कारणले नै हुन्छ। अनि यिनको ग्रहण पनि इन्द्रिय आदिद्वारा नै हुने गर्दछ। त्यसैले **तदर्थं बुद्ध्यादीन् असृजत** अर्थात् उपाधिहरूको आरोप गर्नका लागि बुद्धि आदिको रचना गर्नुभयो। यसप्रकार विधिपरक वाक्यले बुद्धि, इन्द्रिय आदिद्वारा ग्रहण गरिने सगुण ब्रह्मलाई बुझाएर पछि त्यसको निषेध गरी परम्पराद्वारा निर्गुण ब्रह्मलाई बुझाउने अनि निषेधपरक वाक्यले चाहिँ ईश्वरमा उपाधिहरूको निषेध गरी सिधै ब्रह्मलाई बुझाउने हुनाले वेदवाक्यले निर्गुण ब्रह्मलाई विषय गर्न सक्छन्।

**सैषा ह्युपनिषद् ब्राह्मी पूर्वेषां पूर्वजैर्धृता।**

**श्रद्धया धारयेद् यस्तां क्षेमं गच्छेदकिञ्चनः॥ ३॥**

**पदार्थ–**

**सा एषा** = त्यो यो
**ब्राह्मी उपनिषत्** = ब्रह्मको ज्ञान गराउने उपनिषद्
**पूर्वेषां पूर्वजैः** = पूर्वजहरूको पनि पूर्वजद्वारा
**धृता** = धारण गरिएको छ
**हि** = निश्चय नै
**यः** = जसले
**तां** = त्यो उपनिषद् ज्ञानलाई
**श्रद्धया** = श्रद्धापूर्वक
**धारयेत्** = धारण गर्दछ, उसले
**अकिञ्चनः** = अकिञ्चन (माया र मायाको कार्यदेखि मुक्त) भएर
**क्षेमं** = मोक्षलाई
**गच्छेत्** = प्राप्त गर्दछ

**वाक्यार्थ–** जसले पूर्वजहरूका पनि पूर्वज (सनक आदि ऋषि)हरूद्वारा धारण गरिएको यो ब्रह्मको ज्ञान गराउने उपनिषद्लाई श्रद्धापूर्वक धारण गर्दछ, त्यो व्यक्तिले माया र मायाको कार्य भूत एवं भौतिक प्रपञ्चको बाध गरी मोक्षलाई प्राप्त गर्दछ।

**विवरण–** यस श्लोकमा वेदहरूले गरेको परमात्माको स्तुतिलाई ब्राह्मी उपनिषद् भनिएको छ। गुरुपराम्पराद्वारा प्राप्त यस उपदेशलाई जसले हृदयङ्गम गर्दछ, त्यस व्यक्तिले परम कल्याण प्राप्त गर्दछ भनी श्रीशुकदेवले यसको महत्त्व गाउनुभएको छ। ब्राह्मी शब्दको अर्थ हुन्छ, ब्रह्मपरा अर्थात् ब्रह्मलाई प्रतिपादन गर्ने। उपनिषद् स्त्रीलिङ्गी शब्द भएकाले त्यसको विशेषणको रूपमा ब्राह्मी भन्ने स्त्रीलिङ्गी पदकै प्रयोग गरिएको छ। वेदको ज्ञानकाण्ड भागलाई उपनिषद् भनिन्छ भने यो पुराणको स्तोत्र कसरी उपनिषद् भयो भन्ने शङ्का हुन सक्छ। यसका लागि उपनिषद् शब्दको अर्थ

बुझ्नु आवश्यक छ।

उप र नि उपसर्गले युक्त **सद्लृ** धातुमा क्विप् प्रत्ययको संयोजनबाट उपनिषद् शब्द बन्दछ। सद्लृ धातुका तीन अर्थ हुन्छन्– विशरण, गति र अवसादन। यसको अर्थ कम गर्नु, पुऱ्याइदिनु र नष्ट गरिदिनु भन्ने हुन्छ। **उप** उपसर्गको चाहिँ नजिक भन्ने अर्थ हुन्छ भने **नि** उपसर्गको अर्थ पूर्णतया या निश्चयपूर्वक भन्ने हुन्छ। उपनिषद् भनेको सर्वोच्च विद्या भएकाले यसलाई प्राप्त गर्न विरक्त अधिकारी पूर्ण समर्पणको भावले गुरुको नजिक जानुपर्दछ र दृढतापूर्वक उहाँको सेवा गर्दै निष्ठापूर्वक यसलाई ग्रहण गर्नुपर्दछ। मुण्डकोपनिषद् (१।२।१२)मा पनि **तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत्** अर्थात् त्यो तत्त्व जान्नका लागि मुमुक्षु व्यक्ति गुरुकहाँ समर्पित भई जाओस् भनी आदेश दिइएको छ। भगवत्पाद श्रीशङ्कराचार्य भाष्यमा लेख्नुहुन्छ– **उपसद्य उपगम्य तन्निष्ठतया ये शीलयन्ति** अर्थात् गुरुकहाँ उपसन्न भई श्रद्धापूर्वक नजिक गई जसले निष्ठापूर्वक यसलाई लिन खोज्दछन्, तिनै व्यक्तिहरूले मात्र यो विद्याको वास्तविक लाभ प्राप्त गर्दछन्। यसरी उप उपसर्गले गुरुको नजिक रहनुलाई जनाएको छ भने नि उपसर्गले निष्ठापूर्वक वेदान्तश्रवणलाई सूचित गरेको छ। **सद्लृ** धातुका तीन अर्थमध्ये एउटा हुन्छ, **तनू करोति** अर्थात् कम गर्दछ। यसले अविद्यालाई कम गर्ने अर्थ दिन्छ। अर्को **गमयति** अर्थात् पुऱ्याउँछ भन्ने अर्थले चाहिँ जीवलाई ब्रह्मभावमा पुऱ्याइदिने अर्थ बुझाउँछ। त्यस्तै **अवसादयति** अर्थात् नष्ट गरिदिन्छ भन्ने अर्थले अज्ञान र त्यसको कार्य प्रमातृत्व आदिलाई पूर्णतः नष्ट गरिदिने बुझाएको छ। यसरी अज्ञान कम गराउने, ब्रह्मभावमा पुऱ्याइदिने अनि अज्ञान एवं त्यसको कार्यलाई पूर्णतः नष्ट गरिदिने सामर्थ्य त ब्रह्मविद्या अर्थात् ब्रह्मको अपरोक्ष साक्षात्कारमा मात्र छ। त्यसैले उपनिषद् शब्दले वास्तवमा ब्रह्मज्ञानलाई नै बुझाउँछ। यसरी अखण्डाकार वृत्तिमा चढेको ब्रह्मको प्रतिभास नै उपनिषद् हो जसले अज्ञान नष्ट गरी ब्रह्म बनाइदिन्छ। उसो भए ग्रन्थलाई पनि किन उपनिषद् भनिन्छ त ? यसको उत्तरमा श्रीशङ्कराचार्य लेख्नुहुन्छ– **तादर्थ्याद् ग्रन्थोऽपि उपनिषद्** अर्थात् ब्रह्मविद्यालाई प्रतिपादन गर्ने भएकाले ग्रन्थलाई पनि उपनिषद् भनिएको हो। यसै अनुसार ब्रह्मविद्यालाई बताउने वेदस्तुतिलाई पनि उपनिषद् भनिएको हो।

यस श्लोकमा उपनिषद्का सम्पूर्ण लक्षणहरू वेदस्तुतिमा रहेको देखाइएको छ। सबभन्दा पहिले त उपनिषद् भनेको ब्रह्मलाई प्रतिपादन गर्ने शास्त्र हो। केनोपनिषद् (४।७)मा अध्यात्म, अधिदैव आदि रूपमा ब्रह्मतत्त्वलाई बताइसकेपछि यही उपदेश नै ब्राह्मी उपनिषद् हो भनिएको छ। **ब्राह्मीं वाव त उपनिषदमब्रूम** अर्थात् तिमीलाई मैले मन आदिको प्रेरक र प्रकाशकको रूपमा ब्राह्मी उपनिषद्को उपदेश गरिसकेँ। प्रस्तुत श्लोकमा पनि ब्राह्मी यो पद आएको छ। यसले यो वेदस्तुतिमा ब्रह्मतत्त्वको वर्णन गरिएको छ भन्ने जनाउँछ। अरु वेदस्तुतिमा त्यो तत्त्वलाई प्राप्त गर्ने साधनको पनि वर्णन गरिएको छ। शास्त्रहरूले ब्रह्मलाई मात्र बताएर पुग्दैन, तिनले त्यो तत्त्व प्राप्त गर्ने विधान पनि सिकाउनुपर्दछ। त्यसैले केनोपनिषद् (४।८)मा ब्राह्मी उपनिषद्को उपदेशपछि त्यसलाई प्राप्त गर्ने साधनहरू पनि बताइएका छन्। **तस्यै तपो दमः कर्मेति प्रतिष्ठा वेदाः सर्वाङ्गानि सत्यमायतनम्, तस्यै** अर्थात् त्यस ब्रह्म विद्यालाई प्राप्त गर्नका लागि तपस्या, दम, सत्कर्म, अङ्गसहित वेदको अध्ययन र सत्य आदि साधन हुन्। यसरी तत्त्व एवं त्यसलाई पाउने

साधन पनि बताइएकाले वेदस्तुति पूर्ण उपनिषद् हो।

उपनिषद् शब्दमा उप उपसर्गले गुरुको नजिकमा जानुलाई जनाउँछ, श्लोकमा पनि **पूर्वेषां पूर्वजैः धृता** यो पदावलीले गुरुपरम्पराको सङ्केत गरेको छ। **नि** उपसर्गले निष्ठापूर्वकको वेदान्तश्रवणलाई जनाउँछ भने श्लोकमा पनि **श्रद्धया धारयेत्** यो पदले श्रद्धापूर्वक वेदान्तको उपदेशलाई धारण गर्नू भन्ने त्यही अर्थलाई बुझाएको छ। **अकिञ्चनः** शब्दको अर्थ हुन्छ, माया एवं त्यसका कार्य सम्पूर्ण उपाधिहरूलाई नष्ट गरेर। यसले **सद्लृ** धातुको अविद्या र त्यसको कार्यलाई निरस्त गर्ने भन्ने अर्थलाई बुझाएको छ। **क्षेमं गच्छेत्** शब्दको अर्थ हुन्छ, ब्रह्मस्वरूप मोक्षलाई प्राप्त गर्दछ। यसले सद्लृ धातुको पुऱ्याइदिने भन्ने अर्थलाई बुझाएको छ। यसरी उपनिषद् शब्दमा आउने सम्पूर्ण पदहरूको अर्थलाई यस श्लोकले बताएको छ।

**अत्र ते वर्णयिष्यामि गाथां नारायणान्विताम्।**
**नारदस्य च संवादमृषेर्नारायणस्य च ॥ ४ ॥**

**पदार्थ–**
**अत्र** = यहाँ
**ते** = तपाईंलाई
**नारदस्य च** = देवर्षि नारदको र
**ऋषेः** = ऋषि
**नारायणस्य च** = नारायणको पनि
**संवादं** = संवाद भएको
**नारायणान्वितां** = नारायणसँग सम्बन्धित
**गाथां** = चरित्रको
**वर्णयिष्यामि** = वर्णन गर्नेछु

**वाक्यार्थ–** म यहाँ तपाईंलाई देवर्षि नारद र नारायण ऋषिको संवाद भएको भगवान् नारायणसँग सम्बन्धित चरित्रको वर्णन गर्नेछु।

**एकदा नारदो लोकान् पर्यटन् भगवत्प्रियः।**
**सनातनमृषिं द्रष्टुं ययौ नारायणाश्रमम् ॥ ५ ॥**

**पदार्थ–**
**एकदा** = एक दिन
**भगवत्प्रियः** = भगवान्का प्यारा
**नारदः** = देवर्षि नारद
**लोकान्** = लोकहरू
**पर्यटन्** = घुम्दै
**सनातनं** = सनातन
**ऋषिं** = ऋषि नारायणलाई
**द्रष्टुं** = दर्शन गर्नका लागि
**नारायणाश्रमं** = नारायणको आश्रममा
**ययौ** = जानुभयो

**वाक्यार्थ–** एक दिन भगवान्का प्यारा भक्त देवर्षि नारद लोक-लोकान्तरमा घुम्दै सनातन ऋषि नारायणको दर्शन गर्न नारायणको आश्रममा जानुभयो।

**यो वै भारतवर्षेऽस्मिन् क्षेमाय स्वस्तये नृणाम्।**
**धर्मज्ञानशमोपेतमाकल्पादास्थितस्तपः ॥ ६ ॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**यः** = जुन भगवान्
**अस्मिन्** = यो
**भारतवर्षे** = भारतवर्षमा
**नृणां** = मनुष्यहरूको

**स्वस्तये** = कल्याणका लागि र
**क्षेमाय** = मोक्षका लागि
**आकल्पात्** = कल्पको प्रारम्भदेखि नै
**धर्मज्ञानशमोपेतं** = धर्मज्ञान र वैराग्यले युक्त
**तपः** = तपस्या
**आस्थितः** = गरेर बस्नुभएको छ

**वाक्यार्थ–** जुन भगवान् नारायण भारतवर्ष (बदरिकाश्रम)मा मनुष्यहरूको कल्याण र मोक्षका लागि कल्पको सुरुवातदेखि नै धर्मज्ञान र वैराग्यले सहित भएर तपस्या गरेर बस्नुभएको छ।

**तत्रोपविष्टमृषिभिः कलापग्रामवासिभिः।**
**परीतं प्रणतोऽपृच्छदिदमेव कुरूद्वह ॥ ७ ॥**

**पदार्थ–**
**कुरूद्वह** = हे कुरुवंशी परीक्षित्
**प्रणतः** = नम्र भएका नारदले
**तत्र** = त्यहाँ
**कलापग्रामवासिभिः** = कलाप नाम गरेको गाउँमा बस्ने
**ऋषिभिः** = ऋषिहरूद्वारा
**परीतं** = घेरिएर
**उपविष्टम्** = बस्नुभएका नारायणलाई
**इदं एव** = यही कुरो
**अपृच्छत्** = सोध्नुभयो

**वाक्यार्थ–** हे परीक्षित् ! भगवान् नारायण कलापग्राममा बस्ने ऋषिहरूद्वारा घेरिएर रहनुभएको थियो। नारदले उहाँलाई विनम्रतापूर्वक प्रणाम गर्दै यही कुरो सोध्नुभयो।

**तस्मै ह्यवोचद् भगवानृषीणां शृण्वतामिदम्।**
**यो ब्रह्मवादः पूर्वेषां जनलोकनिवासिनाम् ॥ ८ ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**जनलोकनिवासिनां** = जनलोकमा बस्ने
**पूर्वेषां** = पूर्वजहरू सनक आदिका बिच
**यः** = जुन
**ब्रह्मवादः** = ब्रह्मचर्चा (सम्पन्न भएको थियो, त्यही)
**भगवान्** = भगवान् नारायणले
**ऋषीणां** = ऋषिहरूले
**शृण्वतां** = सुन्दा-सुन्दै
**तस्मै** = ती नारदलाई
**इदम्** = यो कुरा
**अवोचत्** = भन्नुभयो

**वाक्यार्थ–** जनलोकमा निवास गर्ने पूर्वजहरू सनक आदिका बिच जुन ब्रह्मचर्चा भएको थियो, त्यही ब्रह्मचर्चा सुन्नका लागि अत्यन्त उत्सुक ऋषिहरूका बिच भगवान् नारायणले देवर्षि नारदलाई बताउनुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीनारायणले भन्नुभयो)

**स्वायम्भुव ब्रह्मसत्रं जनलोकेऽभवत् पुरा।**
**तत्रस्थानां मानसानां मुनीनामूर्ध्वरेतसाम् ॥ ९ ॥**

**पदार्थ–**
**स्वायम्भुव** = हे ब्रह्मपुत्र नारद
**पुरा** = पहिले

**जनलोके** = जनलोकमा
**तत्रस्थानां** = त्यहाँ बस्ने
**मानसानां** = ब्रह्माजीका
मानसपुत्र
**ऊर्ध्वरेतसां** = ऊर्ध्वरेता
**मुनीनां** = सनक आदि
मुनिहरूको
**ब्रह्मसत्रं** = ब्रह्मचर्चा
**अभवत्** = भयो

**वाक्यार्थ–** हे नारद ! पहिले जनलोकमा बस्ने ब्रह्माजीका मानसपुत्र ऊर्ध्वरेता सनक आदि मुनिहरूको बिचमा ब्रह्मचर्चा भएको थियो।

**श्वेतद्वीपं गतवति त्वयि द्रष्टुं तदीश्वरम्।**
**ब्रह्मवादः सुसंवृत्तः श्रुतयो यत्र शेरते॥**
**तत्र हायमभूत् प्रश्नस्त्वं मां यमनुपृच्छसि॥ १०॥**

**पदार्थ–**
**त्वयि** = तिमी
**तदीश्वरं** = त्यहाँका अधिष्ठाता अनिरुद्ध भगवान्लाई
**द्रष्टुं** = हेर्नका लागि
**श्वेतद्वीपं** = श्वेतद्वीप
**गतवति** = गएको वेलामा
**ब्रह्मवादः** = यो ब्रह्मचर्चा
**सुसंवृत्तः** = सम्पन्न भएको थियो
**यत्र** = जुन ब्रह्मचर्चामा
**श्रुतयः** = वेदहरू पनि
**शेरते** = मौन रहन्छन्
**तत्र** = त्यहाँ
**ह** = निश्चय नै
**त्वं** = तिमी
**मां** = मलाई
**यं** = जुन प्रश्न
**अनुपृच्छसि** = सोध्दै छौ
**अयं** = यही
**प्रश्नः** = प्रश्न
**अभूत्** = भएको थियो

**वाक्यार्थ–** हे नारद ! तिमी श्वेतद्वीपमा त्यहाँका अधिष्ठाता भगवान्को दर्शन गर्न भनी गएको वेलामा यो ब्रह्मसम्बन्धी चर्चा भएको थियो, जुन ब्रह्मचर्चामा वेदहरूसमेत चुपचाप बसेका थिए। यहाँ तिमीले मलाई जे सोधेका छौ, यही प्रश्न त्यहाँ उठेको थियो।

**तुल्यश्रुततपःशीलास्तुल्यस्वीयारिमध्यमाः।**
**अपि चक्रुः प्रवचनमेकं शुश्रूषवोऽपरे॥ ११॥**

**पदार्थ–**
**तुल्यश्रुततपःशीलाः** = शास्त्रको ज्ञान, तपस्या र शील बराबर भएका
**तुल्यस्वीयारिमध्यमाः अपि** = शत्रु, मित्र र उदासीन भन्ने भावबाट माथि उठेका भएर पनि
**एकं** = एक जनालाई
**प्रवचनं** = प्रवक्ता
**चक्रुः** = बनाए
**अपरे** = अरूहरू
**शुश्रूषवः** = श्रोताहरू थिए

**वाक्यार्थ–** ती सनक आदि चारै कुमारहरू तपस्या, शास्त्रज्ञान र शीलमा बराबर थिए। उनीहरूलाई आफ्नो, पराइ र उदासीन भन्ने भाव पनि थिएन। तर पनि एक सनन्दनलाई प्रवक्ता बनाई अरू सबै सुन्न बसेका थिए।

**सनन्दन उवाच** (सनन्दनले भन्नुभयो)

**स्वसृष्टमिदमापीय शयानं सह शक्तिभिः।**
**तदन्ते बोधयाञ्चक्रुस्तल्लिङ्गैः श्रुतयः परम्॥ १२॥**
**यथा शयानं सम्राजं वन्दिनस्तत्पराक्रमैः।**
**प्रत्यूषेऽभ्येत्य सुश्लोकैर्बोधयन्त्यनुजीविनः॥ १३॥**

**पदार्थ–**
**यथा** = जसरी
**अनुजीविनः** = सेवक
**वन्दिनः** = स्तुतिपाठकहरूले
**प्रत्यूषे** = प्रातःकालमा
**अभ्येत्य** = नजिक गएर
**शयानं** = सुतिरहेका
**सम्राजं** = चक्रवर्ती राजालाई
**सुश्लोकैः** = मिठा वचनले गाइएका
**तत्पराक्रमैः** = ती राजाका पराक्रमहरूद्वारा
**बोधयन्ति** = जगाउँछन्
**श्रुतयः** = वेदहरूले पनि
**स्वसृष्टं** = आफूले सृष्टि गरेको
**इदं** = यो जगत्लाई
**आपीय** = आफूमा लीन गरेर
**शक्तिभिः सह** = आफ्ना शक्तिहरूका साथ
**शयानं** = सुतिरहनुभएका
**परं** = परमात्मालाई
**तदन्ते** = त्यो प्रलयकालको अन्तमा
**तल्लिङ्गैः** = उहाँका पराक्रमसूचक वचनहरूद्वारा
**बोधयाञ्चक्रुः** = जागा गराउन लागे

**वाक्यार्थ–** जसरी राजाको स्तुतिपाठ गर्ने वन्दीहरूले प्रातःकालमा राजा सुतेको ठाउँमा गई मिठा वचनद्वारा राजाको पराक्रमको वर्णन गरेर उनलाई जगाउँछन्, त्यसै गरी आफूले सृष्टि गरेको सम्पूर्ण संसारलाई आफैँमा लीन गराएर आफ्ना शक्तिहरूका साथ सुत्नुभएका परमात्मालाई वेदहरूले उहाँका पराक्रमसूचक स्तुतिवाक्यहरूद्वारा जगाउन लागे।

**विवरण–** यस प्रसङ्गमा वेदस्तुतिको उपक्रम बताइएको छ। प्रलयकालमा भगवान्ले आफैँले सृजना गरेको यो विश्वब्रह्माण्डलाई आफैँमा संहार गर्नुहुन्छ। प्रलयका लागि उहाँले कुनै प्रयास गरिरहनुपर्दैन, किनभने यो विश्वप्रपञ्च परमात्माको केवल कल्पना मात्र भएकाले उहाँले आफ्नो इच्छालाई संवरण गर्नेबित्तिकै यसको विनाश भइहाल्दछ। संसारका प्राणीहरूलाई यहाँभित्रका वस्तु जति ठोस एवं स्थिर लागे तापनि ती सबै परमात्माका कल्पना हुन्। **अस्य च सुप्तं महाप्रलयः** अर्थात् परमात्मा सुत्नु नै महाप्रलय हो। त्यसैले दृश्य जगत् प्रपञ्चलाई आफैँमा लीन गरी परमात्मा आफू मात्र बाँकी रहनुहुन्छ। उहाँमा रहेका सृष्टि, स्थिति आदि शक्तिहरू पनि प्रलयकालमा उहाँमा लीन भएका हुन्छन्। जब यो प्रलयकाल समाप्त हुने वेला हुन्छ, तब श्रुतिहरू परमात्मालाई प्रतिपादन गर्ने मन्त्रहरूद्वारा उहाँको स्तुति गर्दछन्। यहाँ शङ्का हुन्छ, प्रलयकालमा सम्पूर्ण संसार लीन भएपछि वेदहरू कसरी बाँकी रहेर तिनले परमात्माको स्तुति गर्ने ? यसको उत्तरमा भनिन्छ– **सृष्टिसमये प्रथमनिःश्वासभूताः श्रुतयः** अर्थात् प्रलयको अन्तमा सृष्टि सुरु हुने वेलामा जब परमात्माले पहिलो सास फेर्नुहुन्छ, त्यही सास नै वेदवाणी हो। ऋक्, यजु, साम र अथर्व गरी यी चारै वेदहरू परमात्माका निःश्वासरूप हुन् भनेर वेदले नै बताएको छ–

**निःश्वासितमेतद् यद् ऋग्वेदः यजुर्वेदः सामवेदोऽथर्ववेदः**। यसरी परमात्माका निःश्वासरूप वेदवचनले **तल्लिङ्गैः** अर्थात् परमात्मालाई प्रतिपादन गर्ने वाक्यहरूद्वारा उहाँको स्तुति गर्दछन्। यसको दृष्टान्तको रूपमा यहाँ वन्दना गर्नेहरूले राजाको स्तुति गर्नुलाई बताइएको छ। जसरी राजालाई प्रातःकालमा वन्दीहरूले उनको स्तुति गाउँदै जगाउँछन्, त्यसै गरी वेदहरू पनि परमात्माका सेवक भएकाले तिनले मधुर स्तुतिवचनहरूद्वारा उहाँलाई जगाउँछन्।

यो वेदस्तुतिको चर्चा सर्वप्रथम जनलोकमा भएको थियो। प्रलयको अन्तमा वेदहरूले परमात्मतत्त्वलाई कसरी बताउँछन्, त्यही अनुसार यहाँ सनन्दनले परमात्मतत्त्वको वर्णन गर्नुभएको छ। वेदको प्रतिपादनलाई आधार बनाइएको हुनाले यहाँ अरू पौराणिक स्तोत्रहरूमा भन्दा बढी नै वैदिक भाषाको प्रयोग गरिएको छ। यद्यपि चार ओटै कुमारहरू सबै पूर्णतः ज्ञानी हुनुहुन्थ्यो, तर शास्त्रपरम्पराको रक्षाका लागि उहाँहरूमध्ये कहिले एउटा अनि कहिले अर्को प्रवक्ता भएर तत्त्वचर्चा चलिरहन्थ्यो। यसपटक जनलोकको ब्रह्मसत्रमा सनन्दन प्रवक्ता अनि अरू तीन भाइ श्रोता हुनुहुन्थ्यो। यहाँ चौधदेखि एकचालीस श्लोकसम्म जम्मा अट्ठाईस श्लोकहरूमा वेदस्तुति बताइएको छ। यसमा वेदका अनेक प्रकारका मन्त्रहरूले आ–आफ्नो भाव छुट्टाछुट्टै रूपमा प्रकट गरेका छन्। यसरी मुख्य अठ्ठाईस प्रकारका वेदमन्त्रहरूद्वारा परमात्माप्रतिको भाव यहाँ अभिव्यक्त भएको छ। श्रीधर स्वामीले हरेक श्लोकमा वेदमन्त्रहरूको उद्धरण दिँदै यी श्लोकहरूको व्याख्या गर्नुभएको छ। उहाँले समष्टि रूपमा भागवतमा टीका लेख्नुअघि वेदस्तुतिको प्रकरणमा पहिल्यै व्याख्या लेख्नुभएको थियो भन्ने विद्वान्हरूको भनाइ छ। उहाँले आफ्ना इष्टदेव श्रीनृसिंहको स्मरण गर्दै प्रतिज्ञापूर्वक वेदस्तुतिप्रकरणको व्याख्या गर्नुभएको देख्दा पहिले पृथक् रूपमा लेखिएको यो व्याख्यालाई पछि सम्पूर्ण भागवतको व्याख्या गर्ने वेलामा यहींभित्र समाहित गरिदिएको प्रतीत हुन्छ। उहाँले आफ्ना इष्टदेवलाई यहाँ जुन श्लोकद्वारा नमस्कार गर्नुभयो, भागवतको प्रारम्भमा पनि त्यही स्तुतिपद्यको उल्लेख छ। श्रीधरी टीकामा वेदस्तुति प्रकरणको उत्कृष्ट व्याख्या गरिएको छ। बृहद्वैष्णवतोषिणी टीकाकार सनातन गोस्वामीले भने वेदस्तुतिका श्लोकहरूलाई श्रीकृष्णलीलाकै तात्पर्यमा अर्थ्याउनुभएको छ। यहाँ अनेक प्रकारका गोपिनीहरू नै श्रुतिहरू हुन् र तिनले आ–आफ्नो भाव अनुसार परमात्मालाई बताउँछन् भन्ने उहाँको व्याख्याको तात्पर्य रहेको छ।

**श्रुतय ऊचुः** (वेदहरूले भने)

**जय जय जह्यजामजित दोषगृभीतगुणां**
**त्वमसि यदात्मना समवरुद्धसमस्तभगः।**
**अगजगदोकसामखिलशक्त्यवबोधक ते**
**क्वचिदजयात्मना च चरतोऽनुचरेन्निगमः॥ १४॥**

पदार्थ– | **अखिलशक्त्यवबोधक** = | अन्तर्यामीरूपले सम्पूर्ण

शक्तिहरूलाई जगाउने
**अजित** = हे अजित भगवान्
**जय जय** = हजुरको जय जय होस्
**दोषगृभीतगुणां** = जीवहरूको आनन्दरूपतालाई ढाक्न तीन गुण धारण गर्ने
**अगजगदोकसां** = स्थावर र जङ्गम सबैथरी जीवहरूको
**अजां** = अविद्यालाई
**जहि** = नाश गर्नुहोस्
**यत्** = किनभने
**त्वं** = हजुर
**आत्मना** = स्वरूपले नै
**समवरुद्धसमस्तभगः** = सम्पूर्ण ऐश्वर्यहरूलाई प्राप्त गरेको
**असि** = हुनुहुन्छ
**क्वचित्** = कहीं (सृष्टिको समयमा)
**अजया** = मायाद्वारा
**आत्मना च** = आफ्नो स्वरूप (सत्, चित् र आनन्द स्वरूप) द्वारा समेत
**चरतः** = रहनुहुने
**ते** = हजुरलाई
**निगमः** = वेदले
**अनुचरेत्** = प्रतिपादन गर्दछ

**वाक्यार्थ–** अन्तर्यामीरूपले सम्पूर्ण शक्तिहरूलाई जगाउने हे अजित भगवान् ! हजुरको जय जय होस्। स्थावर र जङ्गम सबैथरी जीवहरूको आनन्दरूपतालाई ढाक्न अनेक गुण धारण गरे झैं गर्ने यस अविद्यालाई नाश गरिदिनुहोस्। हजुर स्वरूपतः नै सबैथरी ऐश्वर्यशक्तिहरूद्वारा नित्ययुक्त रहनुहुन्छ। जब हजुर सृष्टि आदिको समयमा माया र आफ्नो सत्, चित् आनन्दस्वरूपलाई समेटी अनन्त जगत्को रूपमा देखिनुहुन्छ, त्यही अवस्थामा नै हजुरलाई वेदहरूले वर्णन गर्दछन्।

**विवरण–** यस श्लोकमा वेदहरूले परमात्मासँग जीवहरूको अज्ञानलाई नष्ट गरिदिनका लागि प्रार्थना गरेका छन्। जीवहरू रजोगुणी एवं मायाको अधीनमा हुन्छन्। उनीहरूको मन सधैँ चञ्चल भइरहन्छ अनि उनीहरू अविद्या, अस्मिता आदि पाँच प्रकारका क्लेशहरूले पनि युक्त हुन्छन्। जसले परमात्माको भावपूर्ण प्रार्थना गर्दछ, त्यस्तो व्यक्तिको संसारबन्धन हट्दछ भनी शास्त्रहरूमा बताइएको छ। संसारको दुःखमा मायाद्वारा अनादिकालदेखि रुमलिएका यी जीवहरूको अवस्थालाई देखी वेदहरूले उनीहरूका लागि आफैँ परमात्माको स्तुति गरेका छन्। यहाँ श्रुति भन्ने स्त्रीलिङ्गी शब्दको प्रयोग भएको छ, यसले भगवती श्रुति सम्पूर्ण जीवहरूको जननीसमान भएको सूचित भएको छ। माताहरूले आफ्ना पुत्रहरूको दुःख हटाइदिन आफ्ना पतिसँग प्रार्थना गरिदिए झैं जीवहरूको अज्ञान एवं दुःख नष्ट गरिदिन वेदहरूले यहाँ आफ्ना मालिक परमात्माको स्तुति गरेका छन्। श्रीशङ्कराचार्य उपनिषद्भाष्यमा बताउनुहुन्छ– **मातृपितृसहस्रेणापि श्रोतृहितैषिणी श्रुतिः** अर्थात् हजारौं आमाबाबुले भन्दा पनि वेदहरूले प्राणीहरूका कल्याणको चिन्तन गर्दछन्। यद्यपि आमाबुबा पनि आफ्ना सन्तानको पूर्ण अभ्युदय देख्न चाहन्छन्, तर ती स्वयं अज्ञानी भएकाले कसरी पूर्ण अभ्युदय हुन्छ, आफैँ जान्दैनन्। वेदहरूले चाहिँ प्राणीहरूको कल्याणको उपाय सबै जान्ने हुनाले वेदलाई हजारौं मातापिताभन्दा पनि श्रेष्ठ बताइएको छ। अर्को तरिकाले विचार गर्दा चाहिँ अज्ञानमा रुमल्लिई आत्तिएका जीवहरूले आफ्नो प्रतिनिधि बनाई श्रुतिलाई परमात्माको स्तुति गर्न लगाएको बुझिन्छ। परमात्माको स्तुति गर्न आफूहरू असमर्थ भएकाले जीवहरूको तर्फबाट आफ्ना परमहितैषी श्रुतिलाई नै त्यो काममा लगाउनु उचित नै हो।

यहाँ परमात्मालाई **अजित** अर्थात् कसैद्वारा पनि जित्न नसकिने हे परमात्मा ! भनी सम्बोधन गरिएको छ। यसले मायाका बन्धन आदि सबैलाई नष्ट गरिदिन सक्ने उहाँको पराक्रमको प्रशंसा गरिएको छ। **अग** भनेको नहिँड्ने स्थावर प्राणीहरू हुन्, **जगत्** भनेको हिँड्ने

जङ्गम प्राणीहरू हुन्। **ओकसाम्** अर्थात् यी दुबैथरी प्राणीहरूको **अजा** अर्थात् अविद्यालाई पूर्णतः नष्ट गरिदिनुहोस् भनी वेदले प्रार्थना गरेका छन् र यही कार्यद्वारा उहाँको उत्कर्ष हुने पनि जनाएका छन्।

अविद्या त तीन गुणले युक्त छे, गुणयुक्तलाई कसरी मार्न मिल्दछ र? भन्ने जिज्ञासामा वेदहरू उत्तर दिन्छन्— **दोषगृभीतगुणाम्** अर्थात् तीन गुणयुक्त भए तापनि यो दुष्टाले अरूलाई दुःख दिनका लागि गुण स्वीकार गरेकी हो।

यहाँ **गृहीत** भन्ने अर्थमा **गृभीत** शब्दको प्रयोग गरिएको छ। यो वैदिक प्रयोग हो। **दोषगृभीत** यो पदावलीको आनन्द आदि गुणहरूको आवरण गर्ने भन्ने अर्थ निस्कन्छ। जसले अर्काका गुणहरूलाई छोपी तिनलाई दुःख दिन आफू गुण स्वीकार गर्दछ भने त्यसलाई दण्ड दिनै पर्दछ। अविद्या गुणवती भए तापनि उसको गुणको प्रयोग प्राणीहरूको आनन्दरूपतालाई छोपी तिनलाई दुःख दिन प्रयोग भएकाले त्यसलाई मार्नुपर्ने वेदहरूको तर्क छ। यदि अविद्याले जीवहरूलाई मोहित गर्दछे भने यसले मलाई पनि त मोहित गर्दी होली अनि म कसरी त्यसलाई मार्न सक्छु त? भन्ने भगवान्‌को प्रश्नमा उत्तर दिँदै वेदहरू **समवरुद्धसमस्तभगः** अर्थात् परमात्मा सम्पूर्ण ऐश्वर्यले युक्त र समर्थ हुनुभएकाले उहाँलाई मायाले मोहित गर्न नसक्ने कुरा वेदहरू जनाउँदछन्। हजुर आफ्नो सामर्थ्यद्वारा मायालाई वशमा राख्नुहुन्छ। त्यसैले जीवहरूको अविद्यालाई हटाउन हजुर समर्थ हुनुहुन्छ भन्ने वेदहरूको भनाइको तात्पर्य निस्कन्छ।

आफ्नो अज्ञानको नाश त आफ्नै प्रयासले पो गर्नुपर्दछ त, **दृष्ट एवात्मनीश्वरे** अर्थात् आफूमा परमात्मदर्शन गरिसकेपछि हृदयको अज्ञानरूपी गाँठो नष्ट हुन्छ भनी वेदमा पनि बताइएको छ। त्यसैले जीवहरूले आफैँ ज्ञान–वैराग्य आदिद्वारा युक्त भई अज्ञानको नाश गर्नुपर्दछ भन्ने परमात्माको भनाइको उत्तर दिँदै वेदहरू भन्छन्— **अखिलशक्त्यवबोधक** अर्थात् हे परमात्मा ! हजुर नै सबै प्राणीहरूका शक्तिलाई प्रबुद्ध गराइदिनुहुन्छ। **यः आत्मनि तिष्ठन्** अर्थात् जुन परमात्मा जीवहरूभित्र पसी तिनलाई नियन्त्रित गर्नुहुन्छ, उहाँ नै अन्तर्यामी हुनुहुन्छ भनी अन्तर्यामी तत्त्वको रूपमा परमात्माको प्रतिपादन गरिएको छ। हृदयभित्रका प्रेरकको रूपमा उहाँले नै सबै प्राणीहरूका राम्रा नराम्रा सबै भावहरूलाई सञ्चालित गर्नुहुन्छ। अविद्यालाई जित्ने शक्तिको उद्‌बोधन तिनीहरूभित्र हजुरले नै गर्नुहुन्छ। त्यसैले तिनीहरू स्वतन्त्ररूपमा अविद्यालाई नष्ट गर्न समर्थ छैनन् भन्नु यसको तात्पर्य हो। म सबै गर्न समर्थ छु भन्नेमा के प्रमाण छ? भन्ने भगवान्‌को प्रश्नमा वेदहरू त्यसमा आफैँ प्रमाण भएको बताउँछन्। **निगमः** अर्थात् हामी वेदहरू नै परमात्मा, उहाँका नित्यशक्ति एवं अनन्त कल्याण गुणहरूका विषयमा प्रमाण छौँ। त्यसैले सर्वसमर्थ परमात्माले वेदहरूको भनाइ अनुसार जीवहरूको अविद्यालाई नष्ट गर्नुपर्ने अनिवार्यता यहाँ देखाइएको छ।

म त निर्गुण, निरुपाधिक छु, मनवचन आदि कसैले पनि मलाई विषय गर्न सक्दैनन् भने तिमीहरूले मलाई कसरी बताउन सक्छौ? भन्ने भगवान्‌को प्रश्नमा वेदहरूले मायालाई स्वीकार गरेको अवस्थामा मात्र आफूहरूले परमात्मालाई बताउन सक्ने जनाएका छन्। यहाँ **अजया** र **आत्मना** यी दुई पद आएका छन्। यसलाई **अजया चरतः** र **आत्मना चरतः** भनी दुई भागमा

विभक्त गरी अर्थ बुझ्नुपर्दछ। **अजया चरतः** भन्ने पदले मायाद्वारा सृष्टि आदिमा प्रवृत्त भएका परमात्मालाई बुझाउँछ भने **आत्मना चरतः** भन्ने पदले सत्, चित्, आनन्द, अद्वितीय आदि अनन्त कल्याण गुणहरूले युक्त हुनुभएका परमात्मालाई बुझाउँछ। जब परमात्मा मायाद्वारा सृष्टिको विस्तार गर्नुहुन्छ, त्यही वेलामा वेदले परमात्मालाई सृष्टि, स्थिति र लयको कारणको रूपमा बताउँछन्– **यतो वा इमानि भूतानि जायन्ते, येन जातानि जीवन्ति, यत् प्रयन्त्यभिसंविशन्ति... तद् ब्रह्म** (तैत्तिरीयोपनिषद् ३।१) अर्थात् जसबाट यी सम्पूर्ण प्राणीहरू उत्पन्न हुन्छन्, जहाँ यी सबै अडिन्छन्, अनि जहाँ गई यी अन्तमा लीन हुन्छन्, त्यो नै ब्रह्मतत्त्व हो भनी वेदले यही रूपमा परमात्मालाई बताएका छन्। यो परमात्माको तटस्थ लक्षण हो। **आत्मना** अर्थात् स्वरूपतः चाहिँ परमात्मा सच्चिदानन्दरूप हुनुहुन्छ। यद्यपि यो प्रतिपादन पनि मायाविशिष्ट अवस्थामा मात्र गर्न सम्भव छ, तर पनि यी गुणहरू परमात्माका स्वरूपभूत आन्तरिक गुण हुन्। निर्गुण ब्रह्मलाई सत्ता, चित्ता र आनन्दरूपता जस्ता गुणद्वारा कसरी बताउन सकिन्छ र ? त्यसैले यी स्वरूपलक्षणका पदहरूले पनि पहिले सगुण ब्रह्मलाई नै बताई पछि जीव र ईश्वरको अभेद बुझाउनुपर्दा भने तात्पर्यतः निर्गुण ब्रह्मलाई सूचित गर्दछन् मात्र। यसरी वेदहरूले परमात्माको गुणलाई स्वीकार गरेको अवस्थामा आफूहरूले उहाँको स्तुति गर्न सक्ने जनाएका छन्।

वेदस्तुतिको यस श्लोकमा प्रतिपादित विषयलाई श्रीधरस्वामीले यसरी संक्षेपीकरण गर्नुभएको छ–

**जय जयाजित जह्यगजङ्गमावृत्तिमजामुपनीतमृषागुणाम्।**
**न हि भवन्तमृते प्रभवन्त्यमी निगमगीतगुणार्णवता तव।।**

अर्थात् हे अजित परमात्मा ! हजुरको उत्कर्ष होस्। स्थावर जङ्गम सबै प्राणीहरूलाई मोहद्वारा ढाकिदिने अविद्यालाई मारिदिनुहोस्, किनभने यसले अरूलाई दुःख दिनकै लागि व्यर्थमा देखावटी गुणहरूलाई धारण गरेकी छ। हजुरविना प्राणीहरू आफैँ मात्र यसलाई नष्ट गर्न सक्दैनन्, वेदहरूले सगुण अवस्थामा हजुरका अनेक गुणहरू गाएका छन्।

वेदस्तुतिको यो श्लोकलाई श्रीकृष्णलीलाको तात्पर्यमा अर्को प्रकारले समेत अर्थ्याइएको छ। बृहद्वैष्णवतोषिणी टीकाकार सनातन गोस्वामी लेख्नुहुन्छ– हे सबैलाई जित्ने श्रीकृष्ण भगवान् ! **अजां** अर्थात् निद्रालाई त्यागिदिनुहोस्। यो स्तुतिमा श्रुतिको स्तुति भनेर श्रुतिरूपा गोपिनीहरूले गरेको स्तुतिलाई लिनुपर्दछ। भगवान्‌ले सोध्नुभयो, यो निद्रा पनि मेरो एउटा लीला हो। त्यसलाई किन छोड्ने ? यसको उत्तरमा श्रुतिहरू भन्छन्– **दोषगृभीतगुणाम्। दोषेण वचनामृतलीलावलोकनाद्यनाविर्भावरूपेण गृहीतो गुणः लीलास्वरूपो येन ताम्** भन्ने यसको विग्रह हो। भगवान्‌को वचनामृत सुन्न नपाउनु र उहाँको कल्याणमय विचित्र हेराइ प्रकट नहुनु नै दोष हो। निद्राले यसकै लागि गुण अर्थात् लीलाको रूप बनाई आएकी हो। त्यसैले दोषयुक्त भएकाले यसलाई छाडिदिनुपर्दछ। यहाँ दोष भनेर व्रजका मान्यजन बिचमा आउलान् कि भन्ने सन्देहलाई पनि लिन सकिन्छ। श्रीकृष्ण आफ्ना चञ्चले लीलाहरूको बिचमा व्रजका मान्यजन आउलान् कि भनेर सशङ्कित रहनुहुन्छ। कोही आयो भने निदाए झैँ गरिदिने उहाँको बानी छ। यस्तो देखावटी निद्रा त्यागी आफूहरूसँग फेरि लीला गर्नका लागि पनि यहाँ प्रार्थना गरिएको छ। यो निद्राले

जाग्रत् अवस्थामा भगवान्का दिव्य लीलाहरूको अनुभव गरेर हुने दिव्य आनन्दलाई पनि रोकिदिन्छ। रसमय एवं उल्लासरूप परमात्मालाई निःस्पन्द र नीरस बनाइदिने यो एउटा दोष हो। त्यसैले यसलाई छाडिहाल्नुपर्दछ भन्ने भक्तको प्रार्थना यहाँ अभिव्यक्त भएको छ। मेरो निद्राले मलाई विश्रामको सुख दिन्छ नि त, यस्तो सुख दिनेलाई मैले किन छोड्ने ? भन्ने शङ्कामा श्रुतिहरू उत्तर दिन्छन्— **आत्मना समवरुद्धसमस्तभगः** अर्थात् हजुर आफैँ नै सम्पूर्ण ऐश्वर्यहरूलाई प्राप्त गरी नित्य आनन्दमय स्वरूपमा अवस्थित रहनुहुन्छ। यस्ता आफैँमा रमाउनेलाई निद्राको सुख किन चाहियो ?

उसो भए वृन्दावनका रुख, गाई आदिले मलाई किन अतिशय आनन्द दिन्छन् त ? भन्ने प्रश्नको उत्तरमा वेदरूपा गोपिनीहरू भन्छन्— **अगजगदोकसाम् अखिलशक्त्यवबोधक।** अग भनेका वृन्दावनका स्थावर रुखहरू र जगत् भनेका जङ्गम गाई, पक्षी, भ्रमरा आदि हुन्। यी सबैभित्र आनन्दित पार्ने शक्ति त छ, तर तिनीहरूभित्र रही हजुरले नै आनन्दशक्तिको उद्बोधन गर्नुभएको हो। हजुरको कृपादृष्टिलाई नपाउने हो भने तिनीहरूभित्रको रस सुक्न सक्छ। त्यसैले आफ्नो कृपापूर्ण एवं आनन्दमय हेराइबाट सम्पूर्ण वृन्दावनवासी स्थावर-जङ्गम प्राणीहरूलाई आनन्दित बनाउनुहोस् र त्यही रसलाई पिई फेरि आफैँ पनि आनन्दित हुनुहोस्। एउटै मैले कसरी सबैलाई आनन्दित गरौँ भन्ने शङ्का हुँदा गोपिनीहरू उत्तर दिन्छन्— **क्वचित्** अर्थात् कहिलेकाहीँ हजुरले यसो गर्नुभएको छ। **अजया** अर्थात् आफ्नो योगमायालाई साथ लिई **आत्मना** अर्थात् आफैँले अनेक रूप लिई चित्स्वरूप हजुरले रासक्रीडा आदिको समयमा सबैलाई एकैपटक आनन्दित गर्नुभएको छ। **निगमः** अर्थात् वेदको प्रमाण दिँदै गोपिनीहरू कृष्णको विषयमा आफ्नो धारणा सही भएको पुष्टि गर्दछन्— **एको वशी सर्वगः कृष्ण ईड्यः एकोऽपि सन् बहुधा योऽवभाति** अर्थात् श्रीकृष्ण एउटै सर्वव्यापक प्रशंसनीय र सबैलाई वशमा राख्न सक्नुहुन्छ, उहाँ एउटै भए पनि अनेक रूपमा प्रकट हुनुहुन्छ। यसरी अनेक रूपमा प्रकट भई सबैलाई आनन्द दिन सक्ने भएकाले लीलारसको सिद्धिका लागि निद्रा वा आलस्यलाई छाड्नुपर्ने भक्तको धारणा यहाँ अभिव्यक्त भएको छ। यसरी वेदका वचनहरूमा अनेक तात्पर्य हुन्छन्। दार्शनिक रूपमा उपनिषद्को सिद्धान्त अनुसार निर्गुण परमात्माकै व्याख्या वेदहरूले गरेका हुन् भने लीलारसका रसिक भक्तहरूको हृदयमा चाहिँ भगवल्लीलाकै मधुर अर्थ अभिव्यक्त हुन्छ।

**बृहदुपलब्धमेतदवयन्त्यवशेषतया**
**यत उदयास्तमयौ विकृतेर्मृदि वाविकृतात्।**
**अत ऋषयो दधुस्त्वयि मनोवचनाचरितं**
**कथमयथा भवन्ति भुवि दत्तपदानि नृणाम्॥ १५॥**

**पदार्थ—**

**एतत्** = यो (इन्द्र, वरुण आदि सबै देवताहरूको रूपमा) **उपलब्धं** = उपलब्ध सबै **अवशेषतया** = अन्तमा एउटै तत्त्व अवशिष्ट रहने हुनाले

**बृहत्** = सर्वव्यापक ब्रह्मकै रूपमा
**अवयन्ति** = (वेदहरू) बताउँछन्
**अविकृतात्** = अविकारी
**यतः** = जुन तत्त्वबाट
**विकृतेः** = सम्पूर्ण विकारी प्रपञ्चको
**मृदि वा** = माटोमा घैंटो आदि उत्पन्न भए झैं
**उदयास्तमयौ** = उत्पत्ति र विलय हुन्छ
**अतः** = त्यसैले
**ऋषयः** = ऋषिहरूले
**मनोवचनाचरितं** = मन, वचन र आचरणलाई
**त्वयि** = हजुरमा नै
**दधुः** = समर्पित गरेका छन्
**नृणां** = मानिसहरूका
**भुवि** = पृथिवीमा
**दत्तपदानि** = राखिएका पाउहरू
**कथं** = कसरी
**अयथा** = अरू कुनै ठाउँमा राखिएका
**भवन्ति** = हुन सक्छन्

**वाक्यार्थ—** हे भगवान्! वेदहरू इन्द्र, वरुण आदि सबै देवताहरूको रूपमा पनि एउटै ब्रह्मतत्त्वको नै वर्णन गर्दछन्, किनभने अन्तमा त्यही एउटै मात्र तत्त्व अवशिष्ट रहन्छ। जसरी घैंटो आदि पदार्थको उत्पत्ति र विलय माटोमा नै हुन्छ, त्यसै गरी सम्पूर्ण विकारी प्रपञ्चको उत्पत्ति र नाश पनि त्यही अविकारी तत्त्वमा हुन्छ। अतः मन्त्रद्रष्टा ऋषिहरूले आफ्नो मन र वाणीको उपयोग हजुरकै प्रतिपादनमा गरेका छन्। मनुष्यहरूले माटो, ढुङ्गा, इँट आदि जुनसुकै वस्तुमा आफ्नो पाउ राखे पनि त्यो पाउ के पृथिवीमा नै राखेको ठहर्दैन र?

**विवरण—** यस श्लोकमा वेदहरूले परमात्मा सर्वरूप हुनुहुन्छ भनी उहाँको स्तुति गरेका छन्। यो भन्दा अघिल्लो श्लोकमा वेदहरूले सगुण परमात्मालाई प्रतिपादन गर्दछन् भनी बताइएको थियो। यसमा के शङ्का हुन्छ भने वेदमा त परमात्माको मात्र होइन, अरू अरू देवताहरूको पनि सर्वश्रेष्ठ रूपमा वर्णन गरिएको छ। **इन्द्रो यातोऽवसितस्य राजा** (ऋग्वेद १।३२।१५) आदि श्रुतिले इन्द्रको प्रशंसा गरेका छन्। फेरि **अग्निमूर्धा दिवः ककुत्पतिः पृथिव्या अयम्** आदि वचनहरूले अग्निलाई नै श्रेष्ठ भनी बताएका छन्। **यातः** अर्थात् जङ्गम प्राणीहरूको अनि **अवसितस्य** अर्थात् स्थावर प्राणीहरूको पनि राजा अर्थात् स्वामी इन्द्र हुन् भन्दा कहाँ परमात्माको स्तुति भयो? अनि सूर्यका रूपमा अग्नि नै द्युलोकका मूर्धा हुन् र पृथिवीका पनि यी स्वामी हुन् भनी अग्निलाई आकाश र पातालको स्वामी बताउँदा कसरी परमात्माको स्तुति भयो? यसरी अरू-अरू देवताको प्रशंसा गर्ने वेदहरूले परमात्माको प्रतिपादन गरेको भन्न कहाँ मिल्छ र? भन्ने शङ्का हो। यसको उत्तरमा वेदहरू भन्दछन्— **एतत् उपलब्धम्** अर्थात् वेदमा वर्णन गरिएका यी सबै देवता आदि **बृहत्** अर्थात् सर्वव्यापक ब्रह्मरूप नै हुन्। त्यसैले सबैको स्तुति सर्वरूप हजुरकै स्तुति हो।

वेदान्तशास्त्रमा सम्पूर्ण प्रपञ्चलाई पनि ब्रह्मरूप नै मानिन्छ। **सर्वं खल्विदं ब्रह्म** अर्थात् यो सबै जगत् ब्रह्म नै हो भनी वेदले यही अर्थ बताएको छ। **उपलब्धम्** भन्ने शब्दले इन्द्रिय आदि प्रमाणद्वारा देखिने लौकिक वस्तु अनि वेदप्रमाणद्वारा जानिने पारलौकिक वस्तुहरू सबैलाई लिएको छ। अतः यो लोक-परलोकको दुबै संसार, त्यहाँका पदार्थहरू अनि त्यहाँका प्राणी, मानिस, गाई, देवता आदि सबै ब्रह्मरूप नै हुन्। किन? भन्ने प्रश्नको उत्तरमा भनिन्छ— **अवशेषतया** अर्थात् अन्तमा एउटै ब्रह्मतत्त्व मात्र अवशिष्ट रहने भएकाले। ब्रह्मबाट नै जगत्को **उदयास्तमयौ** अर्थात् उत्पत्ति र प्रलय हुन्छ। यहाँका सम्पूर्ण प्राणीहरू (ब्रह्मादेखि भुसुनासम्मका सम्पूर्ण जीवहरू) एउटै परमात्माबाट उत्पन्न भएका हुन् र त्यहीं गई यिनीहरू लीन हुन्छन्।

उपनिषद्मा यसलाई आगोबाट झिल्का निस्कनुसमान बताइएको छ। **तदक्षरात् विविधाः सोम्य भावाः प्रजायन्ते तत्र चैवापयन्ति** अर्थात् आगोबाट झिल्का निस्किए झैं नै अक्षर परमात्माबाट सम्पूर्ण जीवहरू निस्कन्छन् र त्यहीं गई विलीन हुन्छन्। बाहिरी संसार ब्रह्मबाट उत्पन्न भई त्यहीं अडिन्छ र त्यहीं लीन हुन्छ भन्नेमा त **यतो वा इमानि भूतानि जायन्ते** भन्ने श्रुति प्रमाण नै छ ( तैत्तिरीयोपनिषद् ३।१) । जो जहाँ उत्पन्न भई जहाँ अडिन्छ र अन्तमा जहाँ लीन हुन्छ, त्यो त्यो कारण तत्त्वदेखि अभिन्न हुन्छ। जीव र जगत् यी दुबै परमात्माबाटै उत्पन्न भई त्यहीं लीन हुने भएकाले ती पनि वास्तवमा ब्रह्मरूप नै हुन्। ब्रह्म सबैको उपादान कारण हो अनि कार्य उपादान कारणदेखि अभिन्न हुन्छ।

ब्रह्म सबैको कारण हो भने त्यो केही न केही रूपमा बिग्रिएर नै कार्यको रूपमा आएको हुन सक्छ। अतः ब्रह्ममा विकार आउँछ कि भन्ने शङ्का हुँदा भनिन्छ— **अविकृतात्** अर्थात् अविकृत रहेको ब्रह्मबाट नै जगत्को उत्पत्ति भएको हो, यसमा ब्रह्म कत्ति पनि बिग्रिएको छैन। कारणले आफ्नो स्वरूपलाई नछोडीकन अर्को रूपमा देखिनुलाई विवर्त भनिन्छ। यसमा कारण वस्तुको आफ्नो स्वरूप बिग्रिएको या नयाँ भएको हुँदैन। **मृदि** अर्थात् माटोमा **विकृतेः** अर्थात् घैंटो, गमला आदि कार्यहरूको उदय भएको देखिन्छ, तर घैंटोमा माटो बाहेक कुनै नयाँ वस्तु छैन। माटोले आफ्नो रूपलाई नछाडी घैंटोको नामरूपलाई धारण गरेको छ। यसै गरी ब्रह्म पनि कत्ति पनि नबिग्रिई मायाद्वारा जगत्को रूपमा देखिएको मात्र हो। त्यसैले त्यसमा विकार या परिवर्तनको शङ्का छैन। यसरी अनेक पदार्थ एवं प्राणीहरूको रूपमा देखिँदा पनि आफ्नो स्वरूपमा केही विकार नआएका हजुरमा नै ऋषिहरूले मन, वचन र आचरण समर्पित गरेका छन्। यसैलाई उपनिषद्मा **तज्जलानिति शान्त उपासीत** (छान्दोग्योपनिषद् ३।१४।१) अर्थात् सम्पूर्ण संसार ब्रह्मबाट नै **ज**-जन्मिने, **ल**-लीन हुने, **अनिति**-प्राण धारण गर्ने भएकाले शान्त भावले ब्रह्मको मात्र चिन्तन गर भनी बताइएको छ। यहाँ **ऋषयः** भनेर मन्त्र अनि मन्त्रद्रष्टा ऋषि दुबैलाई लिन सकिन्छ। वेदका मन्त्रहरूले अग्नि, वायु आदिको प्रशंसा त गरेका छन्, तर ती सबै एउटै परमात्माकै अनेक रूपहरू हुन्। परमात्मा नै इन्द्र, वायु आदि भित्र आत्मरूपले पसी तिनलाई सिद्ध गराउनुहुन्छ। अनि ती-ती अनेक नामबाट पुकारिई उहाँ स्वयं नै यज्ञीय आहुतिहरूको भोग पनि गर्नुहुन्छ भन्ने कुरा पहिले बताइएको छ— **एकः पृथङ् नामभिराहुतो मुदा गृह्णाति पूर्णः स्वयमाशिषां पतिः।** यसप्रकार अनेक संस्कार भएका प्राणीहरूको श्रद्धालाई स्थिर गर्न परमात्मा नै अनेक देवताको रूपमा बन्ने अनि वेदहरूले पनि परमात्माका तिनै अनेक रूपहरूको स्तुति गर्ने गरेको कुरा सिद्ध हुन्छ। भक्तले **यां तनुं** अर्थात् जुन रूपमा परमात्माको आराधना गर्न चाहन्छ, परमात्मा पनि त्यसको श्रद्धालाई अडिग बनाउनका लागि ती-ती रूपको बनिदिनुहुन्छ भनी भगवद्गीता ( ७।२१)मा भगवान्ले उपदेश गर्नुभएको छ— **तस्य तस्याचलां श्रद्धां तामेव विदधाम्यहम्।** अर्थात् म भक्तको श्रद्धालाई अडिग बनाउनका लागि ती-ती रूप धारण गर्दछु। यसरी वेदहरूमा कहिले देवताको स्तुति गर्ने त कहिले परमात्माको गुण गाउने भन्ने व्यभिचारको दोष पनि आउँदैन। किनभने सबैथरी मन्त्रहरूले आखिर अन्तमा त परमात्मालाई नै बुझाएका छन्। वेदहरू दृष्टान्त दिँदै भन्छन्— **नृणां** अर्थात् मानिसहरूले **दत्तपदानि** अर्थात् अरू ढुङ्गा, काठ आदिमाथि खुट्टा राखे

तापनि उसको खुट्टा के पृथिवीमा नै हुँदैन र ? जसरी ढुङ्गा, काठ, माटो आदि सबै पृथिवी भएकाले ती माथि टेक्दा आखिर पृथिवीमा नै टेकेको हुन्छ, त्यसै गरी देवताहरू परमात्माकै अनेक रूप भएकाले उनीहरूको छुट्टाछुट्टै स्तुति गर्दा पनि त्यो एउटै परमात्माको स्तुति हुन्छ। श्वेताश्वतरोपनिषद् (४।२)मा पनि अग्नि, वायु आदि सबै देवता एउटै तत्त्व हुन् भनी बताइएको पाइन्छ— **तदेवाग्निस्तदादित्यस्तद् वायुस्तदु चन्द्रमाः** अर्थात् त्यही अग्नि तत्त्व आदित्य हो, वायु र चन्द्रमा पनि हो। यसरी यहाँ सर्वरूपमा रहेका परमात्माको स्तुति गरिएको छ।

यस श्लोकको श्रीकृष्णलीलापरक व्याख्या पनि गरिएको छ। यो भन्दा अघिल्लो श्लोकमा श्रुतिहरूले भगवान् श्रीकृष्णलाई आँखा खोली वृन्दावनमा विहार गर्नका लागि प्रार्थना गरेका थिए। त्यसमा मानौं भगवान्‌ले सोध्नुभयो— त्यो वृन्दावन कस्तो छ र मैले त्यहाँ विहार गर्नुपर्‍यो ? यसको उत्तरमा श्रुतिहरू भन्छन्— **उपलब्धम्** अर्थात् बाहिर इन्द्रियद्वारा देखिने यो वृन्दावन **बृहत्** अर्थात् साक्षात् ब्रह्मरूप नै हो भनी भक्तहरू बताउँछन्। भक्तहरूका अनुसार भगवान्‌ले आफ्नो सत् अंश र चित् अंशबाट आफ्ना दिव्य धामहरूको रचना गर्नुहुन्छ। यी दिव्य धामहरू प्राकृतिक या मायिक उपादानबाट बनेका नभई स्वयं चिद्रूप परमात्माकै उपादानबाट बनेका हुन्। यसैले गोलोक आदि धामहरू नित्य छन्। पृथिवीमा लीला गर्न अवतार लिँदा भगवान्‌सँगै उहाँको दिव्यलोकको पनि यहाँ आविर्भाव हुन्छ र भगवान् त्यहीँ लीला गर्नुहुन्छ। यसरी चिद्रूप परमात्माबाट नै उत्पन्न भएकाले वृन्दावन आदि धामहरू परमात्मरूप नै हुन् भनी भक्तहरू बताउँछन्। **अवशेषतया** अर्थात् प्रलयपछि पनि बाँकी रहिरहने हुनाले यी धाम नित्य छन्। पुराणहरूमा काशीक्षेत्रलाई भगवान् शिवको त्रिशूलमा अडिएकाले प्रलयमा पनि नष्ट नहुने बताइएको पाइन्छ। त्यसै गरी वृन्दावन पनि नष्ट नहुने भएकाले त्यो ब्रह्मरूप नै हो। **अविकृतात्** अर्थात् वृन्दावन स्वयं त अविकारी छ, तर त्यहाँबाट **विकृतेः** अर्थात् विकाररूप अनेक रुख, लहरा आदिको **उदयास्तमयौ** अर्थात् उत्पत्ति र प्रलय भइरहन्छ। वृन्दावनको नित्यताको विषयमा उपनिषद्‌वचनहरूलाई प्रमाणको रूपमा उद्धृत गरिएको छ— **साक्षाद् ब्रह्म गोपालपुरी भवति। सकाम्या निष्काम्या देवानां सर्वेषां भूतानां भवति। अथास्य भजनं भवति। यथा हि वै सरसि पद्मं तिष्ठति तथा भूम्यां हि तिष्ठति** (गोपालोत्तरतापिन्युपनिषद् १) अर्थात् गोपालपुरी वृन्दावन साक्षात् ब्रह्म नै हो, जसरी पोखरीमा त्यहाँको पानीद्वारा नछोइएर कमल बस्छ, त्यसै गरी पृथिवीमा यो बसेको छ।

श्लोकमा आएको **अतः** भन्ने शब्दले श्रीकृष्णको निवासस्थान वृन्दावनको त यति महिमा छ भने साक्षात् श्रीकृष्णको कति होला ? भन्ने तर्फ सङ्केत गरेको छ। त्यसैले **ऋषयः** अर्थात् देवर्षि नारद आदिले **त्वयि** अर्थात् हजुर श्रीकृष्णमा नै **मनो दधुः** अर्थात् मन लगाए। अरू सम्पूर्ण अवतारहरूको आविर्भावका हेतु भएकाले सर्व अवताररूप श्रीकृष्णको भजन नै सबैको भजन हो भनी ऋषिहरूले श्रीकृष्णमा मन लगाए भन्ने पनि अर्थ हुन्छ। फेरि श्रुतिरूपा गोपिनीहरू भन्छन्— **भुवि** अर्थात् वृन्दावन भूमिमा **दत्तपदानि** अर्थात् पाइला टेकियो भने त्यो कहिल्यै **अयथा** अर्थात् अनर्थका लागि हुँदैन, तिनले त जन्ममृत्युको प्रवाहरूप अनर्थलाई नष्ट गरी श्रीकृष्णलाई नै प्राप्त गर्दछन्।

यसप्रकार प्रस्तुत श्लोकमा अरू सम्पूर्ण देवताहरूको स्तुति या उपासना पनि एउटै

परमात्माको उपासना हो भनी बताइएको छ। यस श्लोकको तात्पर्य बताउँदै श्रीधर स्वामी लेख्नुहुन्छ–

**द्रुहिणबह्निरवीन्द्रमुखामराः जगदिदं न भवेत् पृथगुत्थितम्।**
**बहुमुखैरपि मन्त्रगणैरजस्त्वमुरुमूर्तिरतो विनिगद्यसे।।**

ब्रह्माजी, अग्नि, सूर्य, इन्द्र आदि देवता अनि सम्पूर्ण जगत् पनि परमात्माभन्दा भिन्न रूपमा उत्पन्न भएका छैनन्। अनेक देवताहरूको विषयमा बताउने मन्त्रहरूले पनि ती–ती मूर्तिहरूको रूपमा रहने परमात्मालाई नै स्तुति गरेका हुन्छन्।

**इति तव सूरयस्त्र्यधिपतेऽखिललोकमल-**
**क्षपणकथामृताब्धिमवगाह्य तपांसि जहुः।**
**किमुत पुनः स्वधामविधुताशयकालगुणाः**
**परम भजन्ति ये पदमजस्रसुखानुभवम्॥ १६॥**

**पदार्थ–**
**त्र्यधिपते** = हे त्रिगुणात्मिका मायाका स्वामी
**सूरयः** = विवेकीहरूले
**इति** = यस्ता प्रकारका
**तव** = हजुरको
**अखिललोकमलक्षपणकथा-मृताब्धिं** = समस्त संसारको तापलाई नष्ट गर्न समर्थ कथारूपी अमृतको सागरमा
**अवगाह्य** = डुबुल्की लगाई
**तपांसि** = सम्पूर्ण कष्टमय अनुष्ठानहरूलाई
**जहुः** = छोडिदिए
**परम** = हे परमात्मा
**स्वधामविधुताशयकालगुणाः** = परमात्मस्वरूप आत्मतत्त्वको स्फुरणद्वारा अन्तःकरण र कालका सारा मलिनता एवं अवस्थाहरूलाई नष्ट गरेका
**ये** = जसले
**अजस्रसुखानुभवं** = नित्य सुखानुभवस्वरूप
**पदं** = हजुरको चरणलाई
**भजन्ति** = चिन्तन गर्दछन्
**पुनः** = फेरि
**किं उत** = के भन्नु

**वाक्यार्थ–** त्रिगुणात्मिका मायाका मालिक हे भगवान्! हजुरका विवेकी भक्तहरूले सम्पूर्ण मनुष्यहरूको पापलाई नाश गर्ने हजुरको कथारूपी अमृतको सागरमा डुबुल्की लगाएर सम्पूर्ण कष्ट त्याग्दछन् भने जसले परमात्मस्वरूप आत्मतत्त्वको अनुभव गरेर अन्तःकरणका मलिनता एवं कालका विभिन्न अवस्थाको बाध गरेका छन् र निरन्तर सुखानुभूतिको वर्षा गरिरहने हजुरको चरणको सेवन गरिरहेका छन्, ती मनुष्यहरू दुःखबाट सधैँका लागि पार हुन्छन् भन्ने कुरामा के आश्चर्य छ र?

**विवरण–** यस श्लोकमा भगवान्को दिव्य गुणकथा अनि नित्यसुखरूप उहाँको वास्तविक स्वरूपको पनि प्रशंसा गरिएको छ। यहाँ भगवान्लाई **त्र्यधिपते** भनी सम्बोधन गरिएको छ। यसको अर्थ त्रिगुणात्मिका मायालाई नियन्त्रित गर्ने भन्ने हुन्छ। वेदहरूले यस्ता मायापति परमात्माको वर्णन त गरेकै छन्, साथै महापुरुषहरूले पनि आफ्नो सम्पूर्ण जीवन परमात्माका लागि समर्पित गरी यी शास्त्रवचनहरू प्रामाणिक भएको पुष्टि गरेका छन्। महापुरुषहरूको

आचरणविना शास्त्रका तात्पर्यहरू खुल्दैनन्, अनि तिनीहरू यथार्थ भए-नभएको पनि थाहा पाइँदैन। त्यसैले धर्मको स्वरूप बताउने क्रममा वेद र स्मृतिसँगसँगै सदाचार अर्थात् महापुरुषहरूको आचरणलाई पनि धर्म भनिएको छ— **वेदः स्मृतिः सदाचारः** (मनुस्मृति २।१२)। सूरयः अर्थात् यस्ता महापुरुषहरू **कथामृताब्धिम्** अर्थात् भगवान्का कथामृतरूपी सागरमा चुर्लुम्म डुब्छन्। यो सगुण परमात्माको भक्तिको प्रसङ्ग हो। यसमा भगवत्कथा श्रवणको सबैभन्दा बढी महत्व रहेको हुन्छ।

माधुर्य, भक्तवात्सल्य आदि अनन्त कल्याण गुणहरूले युक्त हुनुभएका परमात्मालाई आफ्नो हृदयभित्र ल्याइपुऱ्याउने बाटो कुन होला ? यसको लागि एक मात्र बाटो भनेको श्रवणेन्द्रिय नै हो। कथा श्रवण गरिसकेपछि कानको प्वालबाट भगवान् सिधै हृदयभित्र प्रवेश गर्नुहुन्छ। उहाँ भित्र गइसकेपछि **अन्तःस्थः** अर्थात् भित्रै अडिनुहुन्छ, बाहिर निस्कनुहुन्न। उहाँ सत्पुरुषहरूका परम हितैषी भएकाले आफ्ना यी भक्तहरूका मनमा रहेका **अभद्र** अर्थात् जति दुर्वासना, पाप आदि छन्, ती सबैलाई नष्ट गरिदिनुहुन्छ भनी बताइएको छ— **शृण्वतां स्वकथां कृष्णः पुण्यश्रवणकीर्तनः, हृद्यन्तःस्थो ह्यभद्राणि विधुनोति सुहृत् स्वयम्** (भागवत १।२।१७)। दुर्वासनाबाट ग्रस्त व्यक्तिहरूले कसरी परमात्माको भक्ति गर्ने ? भनेर आत्तिनुपर्दैन। किनभने भावपूर्वक भगवान्को गुणकथाको श्रवण गर्ने हो भने सारा दुर्वासनाहरू स्वतः नष्ट हुँदै जान्छन्। त्यसैले कथाश्रवण भक्तिको प्रमुख साधन हो। साधनभक्तिको वर्णन गर्ने क्रममा सबभन्दा पहिला **श्रवणं** भनेर यही श्रवणलाई नै बताइएको छ। कथाश्रवण गरिसकेपछि भगवान्को स्वरूप एवं माहात्म्य थाहा पाइन्छ। महत्त्व थाहा नपाईकन कुनै पनि वस्तुसँग प्रेम हुन सक्दैन। प्रेम भइसकेपछि भने व्यक्ति आफ्नो प्रेमीको गुणगानलाई नसुनी बस्नै सक्दैन। यसैले भक्तिसाधनामा साधनाको आरम्भ पनि कथाश्रवणबाट नै हुन्छ र भगवत्साक्षात्कार पछि सिद्धावस्थामा त यो झन् अनिवार्य हुन्छ। भक्तिको लक्षण गर्दा नारदभक्तिसूत्र (१।७)मा **कथादिष्विति गर्गः** अर्थात् कथाश्रवण आदिमा अनुराग हुनु नै भक्ति हो भन्ने गर्गको मत उल्लेख गरिएको छ। सम्पूर्ण प्राणीहरूका दुर्वासना, पाप आदिलाई नष्ट गरिदिन भगवत्कथा नै सक्षम छ। भगवान्को नाममा अनि उहाँको गुणकथामा यस्तो सामर्थ्य छ, जसले एकै पटकमा जन्मौं जन्मका सम्पूर्ण पापराशिहरूलाई नष्ट गरिदिन्छ। **नाम्नोऽस्ति यावती शक्तिः पापनिर्हरणे हरेः तावत् कर्तुं न शक्नोति पातकं पातकी जनः** अर्थात् भगवान्को नाममा पापलाई नष्ट गर्ने यति शक्ति छ कि, त्यति पाप पापीभन्दा पापी व्यक्तिले जीवनभरमा पनि गर्न सक्दैन। यो दृष्टिले भगवान्लाई भन्दा पनि भगवान्को नामलाई बढी महत्त्वपूर्ण मानिएको छ। भगवान् श्रीकृष्ण स्वयं अगाडि हुँदा कंस, शिशुपाल आदिको दुर्वासना नष्ट भएन, तर कसैले भगवान्को कथाश्रवण गऱ्यो भने त्यो व्यक्तिको दुर्वासना अवश्य नै नष्ट हुन्छ। त्यसैले भक्तहरू भगवान्को कथालाई अमृतको समुद्र भन्ने ठान्दछन्। शीतल जलमा डुबुल्की लगाएपछि बाहिरको प्रचण्ड तापबाट स्वतः जोगिन सकिन्छ, त्यसै गरी भगवान्को कथामृतरूपी समुद्रमा डुबुल्की लगाएपछि पनि **तपांसि** अर्थात् दुर्वासना या दुःखहरूबाट स्वतः जोगिन सकिन्छ। यसरी भगवत्कथाश्रवण गर्ने व्यक्तिले पापलाई छोडिदिन्छ भन्ने एउटा अर्थ हो। यो साधक भक्तहरूलाई गरिएको उपदेश हो।

प्रह्लादजस्ता सिद्ध भक्तहरू, जो भगवत्कथा श्रवणलाई छाडेर एक क्षण पनि बस्न सक्दैनन्, तिनीहरूलाई हेर्दा यस श्लोकको अर्को अर्थ पनि हुन्छ। **सूरयः** अर्थात् भगवत्तत्व साक्षात्कार गरिसकेका सिद्ध भक्तहरू सधैं कथामृतरूपी समुद्रमा डुबिरहन्छन्। भगवान्को कथा अखिललोक अर्थात् सारा संसारको पापलाई नष्ट गर्न समर्थ छ। श्रीशुकदेव जस्ता परमज्ञानी सिद्ध भक्तहरूबाट कथाश्रवण गरेर परीक्षित् जस्ता राजाहरूको जन्मौं जन्मका पाप, अज्ञान आदि सबै नष्ट भएको प्रमाण पाइन्छ। भक्तमा आफैं कुनै पाप नहुने भए तापनि संसारभरको पापलाई नष्ट गर्न उनीहरू सधैं भगवान्को कथालाई उच्चारण गरिरहन्छन्। भगवान्को गुणकथा यस्तो आकर्षक छ कि, त्यसबाट आकृष्ट भई श्रीशुकदेव जस्ता ठुला ज्ञानीहरू पनि **तपांसि** अर्थात् तपस्या आदि शास्त्रीय साधनहरूलाई छाडिदिन्छन्। तपस्या, दान, यज्ञ आदि सबै साधनहरू भक्तिका अघि व्यर्थ हुन्छन्, किनभने भगवान् निर्मल भक्तिद्वारा मात्र प्रसन्न बन्नुहुन्छ। यो कुरा प्रह्लादले दैत्य बालकहरूलाई पनि उपदेश गर्नुभएको छ– **प्रीयतेऽमलया भक्त्या हरिरन्यद् विडम्बनम्** (भागवत ७।८।५२)। यसप्रकार भगवत्कथाको सबैभन्दा बढी महत्त्व सिद्ध हुन्छ। श्रवणलाई साधन भक्तिकै कोटिमा गनिने भएकाले अनि संसारबन्धन नष्ट गर्ने यसको प्रमुख प्रयोजन पनि साधनावस्थामा नै रहने भएकाले यहाँ साधनावस्थाकै अर्थ प्रमुख छ।

प्रस्तुत श्लोकमा आधा अंशले साधनरूप भक्तिको वर्णन गरेको छ भने अर्को आधा अंशले चाहिँ परमात्माको वास्तविक निरुपाधिक स्थितिमा अवस्थित रहने ज्ञानको अवस्थालाई जनाएको छ। यदि भगवान्को कथालाई केवल श्रवण मात्र गर्ने व्यक्तिहरूले त हृदयभित्रका सारा पाप आदिलाई त्यागिदिन्छन् भने स्वप्रकाश आत्मामा अवस्थित भई त्रिगुणमय बन्धनलाई ध्वस्त गरिसकेका ज्ञानीहरूले पापलाई त्यागिदिन्छन् भन्नु के अनौठो भयो र? ज्ञानीलाई पापले छुँदैन भन्ने कुरा छान्दोग्योपनिषद् (४।१४।३)मा कमलको पातको दृष्टान्तसहित बताइएको छ– **यथा पुष्करपलाश आपो न श्लिष्यन्त एवमेवं विद्धि पापं कर्म न श्लिष्यते** अर्थात् जसरी कमलको पात पानीले भिज्दैन, त्यसै गरी आत्मालाई जान्ने व्यक्ति पनि पापबाट छोइँदैन। **स्वधाम** शब्दको अर्थ हुन्छ– आफ्नो वास्तविक स्वरूपको स्फुरण। यो जीव र ईश्वरको एकताको ज्ञानद्वारा स्वयं अन्तःकरण नै ध्वस्त हुन्छ र कर्मका सारा बन्धनहरू तत्काल नष्ट हुन्छन्। यसैलाई उपनिषद्मा **क्षीयन्ते चास्य कर्माणि तस्मिन् दृष्टे परावरे** (मुण्डकोपनिषद् २।२।९) अर्थात् आफूमा ईश्वरलाई अनुभव गर्ने बित्तिकै कर्मबन्धन आदि सबै ध्वस्त हुन्छन् भनी बताइएको छ। यहाँ आशय शब्दले अनेक संस्कारहरूले युक्त रहने अन्तःकरणलाई बुझाएको छ। त्यसका गुण भनेर राग–द्वेष आदिलाई लिनुपर्दछ। त्यसै गरी कालगुण भनेर चाहिँ बुढ्याइँ, मृत्यु आदिलाई लिनुपर्दछ। आफ्नो स्वरूप **अपहतपाप्मा** अर्थात् पाप आदि दोषले रहित छ, अनि **विजरः विमृत्युः** अर्थात् बुढ्याइँ र मृत्युले पनि रहित छ भनी उपनिषद्मा बताइएको छ (छान्दोग्योपनिषद् १।२।९)। यस्तो वास्तविक स्वरूपलाई बुझिसकेपछि साधकले भ्रमद्वारा आफूमा कल्पना गरिएका यी सबै औपाधिक बन्धनलाई तत्काल छाडिदिन्छ। यहाँ परम भन्ने शब्दले परमात्माको निरुपाधिक वास्तविक स्वरूपलाई बुझाएको छ। **अजस्रसुखानुभव** अर्थात् नित्यसुखानुभवरूप परमात्माको **पदं** अर्थात् स्वरूपलाई आत्मरूपमै साक्षात्कार गरी सधैं त्यसमा रमाइरहने ज्ञानीहरूको महत्त्व यहाँ गाइएको

छ। यस श्लोकमा भक्तिको उत्कृष्ट साधनाप्रणालीको पनि सूचना पाइन्छ। सबभन्दा पहिला संसारका तापबाट तप्त भई आएका व्यक्तिहरू भगवत्कथाश्रवणको मार्गबाट साधनामा लाग्दछन्। साधन भक्तिद्वारा सारा ताप-पाप आदि नष्ट भएपछि शुद्ध एवं निश्चल चित्तमा नै **स्वधाम** अर्थात् आत्माको वास्तविक स्वरूप प्रकाशित हुन्छ। ज्ञान नहुन्जेलसम्म व्यक्तिको साधना मायामय थियो। अब व्यक्ति त्यो मायाको सीमाबाट पर पुग्दछ। अन्तःकरण र कालका सबै बन्धन ध्वस्त गर्नुले यही मायालाई अतिक्रमण गरेको जनाइएको छ। जीवनभरि भक्तिको साधना गरेको हुनाले व्यक्ति ज्ञानी भएपछि पनि त्यसलाई छाड्दैन अपितु आफ्ना आत्मरूप परमात्माको आनन्दमय वास्तविक रूपमा रमाइरहन्छ। यो भक्तिसाधनाको पराकाष्ठा हो, यसमा ज्ञानी स्वयं परमात्मरूप भएको हुन्छ। यसैलाई भगवान्‌ले गीता (७।१८)मा **ज्ञानी त्वात्मैव मे मतम्** अर्थात् ज्ञानी त मेरो आत्मा नै हो भन्नुभएको छ।

वंशीधरले यस श्लोकलाई अर्को प्रकारले अर्थ्याउनुभएको छ। यो भन्दा अघिल्लो श्लोकमा ऋषिहरूले परमात्मामा मन लगाउँछन् भनी बताइएको थियो, भगवान्‌मा मन लगाउनका लागि त्यहाँ विक्षेप आदि केही हुनुहुँदैन। घरव्यवहारमा रहँदा व्यावहारिक समस्या अनि नित्य र नैमित्तिक कर्मका विधानले परमात्मामा मन लगाउनका लागि बाधा गर्न थाल्दछ। यो बाधालाई हटाई निरन्तर आत्मचिन्तन गरिरहनका लागि शास्त्रमा संन्यासको विधान गरिएको छ। प्रस्तुत श्लोकमा आधा श्लोकले विविदिषा संन्यास एवं आधा श्लोकले विद्वत्संन्यासलाई बताएको छ।

**सूरयः** यो पदले संसारबन्धनबाट माथि उठ्न चाहने मुमुक्षुहरूलाई बुझाएको छ। कथा भनेर वेदान्तश्रवणलाई लिनुपर्दछ। यो कथा **अमृताब्धि** अर्थात् अमृतको समुद्र हो। वेदान्तश्रवणलाई किन अमृतसमुद्र भनियो भन्ने शङ्कामा भनिन्छ— **अमृतत्वसाधनत्वात् दुरवगाहत्वाच्च** अर्थात् वेदान्तश्रवण अमृतत्व (मोक्ष)को साधन भएकाले अमृत हो अनि दुरवगाह अर्थात् यसको भित्री तहसम्म पुग्न गाह्रो भएकोले पनि यो समुद्र हो। यो वेदान्तश्रवणले संसारका सारा मलिनताहरूलाई नष्ट गरिदिन्छ। **तपन्तीति तपांसि** भन्ने व्युत्पत्ति अनुसार यहाँ यसको अर्थ तीन एषणाहरू भन्ने लिनुपर्दछ। संसारबन्धनबाट मुक्त हुन चाहने मानिसहरू **पुत्रैषणायाश्च वित्तैषणायाश्च लोकैषणायाश्च व्युत्थायाथ भिक्षाचर्यं चरन्ति** (बृहदारण्यकोपनिषद् ३।५।१) अर्थात् पुत्रैषणा, वित्तैषणा र लोकैषणाबाट जागेर भिक्षाचर्या गरी हिँड्छन् भनी उपनिषद्‌मा बताइएको छ। सन्तानको इच्छा, सम्पत्ति कमाउने इच्छा अनि पद-प्रतिष्ठाको एवं कीर्तिको इच्छालाई छाडी वनमा गएर आत्मचिन्तन गर्दा स्वरूपमा स्थित हुन सजिलो पर्दछ। यो विविदिषा संन्यास अर्थात् आत्मज्ञानको इच्छाले लिइने संन्यास हो। यहाँ भगवान्‌लाई **त्र्यधिपते** भनी सम्बोधन गरिएबाट तीन आश्रम (ब्रह्मचर्य, गृहस्थ र वानप्रस्थ) मा गरेका कर्महरूद्वारा खुसी भई चित्त शुद्ध गराएर आत्मज्ञानको अधिकारी बनाइदिने परमात्माप्रति कृतज्ञता व्यक्त गरिएको छ। ज्ञानीहरू भने **स्व** अर्थात् आफ्नै स्वरूपमा अवस्थित भई **धाम** अर्थात् स्वरूपकै प्रकाशद्वारा अन्तःकरण आदि सबैलाई बाधित गर्दछन्। यहाँ **विधुत** शब्दको अर्थ हुन्छ— **रज्जुसर्पादिवत् बाधितः** अर्थात् डोरीमा भ्रमवश देखिएको सर्प बाधित भए झैँ बाधित भएको। ज्ञानद्वारा के-के बाधित हुन्छन् भन्ने जिज्ञासामा श्लोकमा भनिन्छ— **आशयकालगुणाः** अर्थात् अन्तःकरण, काल र गुणहरू बाधित

हुन्छन्। ज्ञानद्वारा अन्तःकरण अथवा हृदयग्रन्थि नष्ट हुन्छ, काल अर्थात् मृत्यु आदि पनि बाधित हुन्छन् अनि गुण अर्थात् राग द्वेष, सत्त्व, रज, तम, सुख-दुःख आदि सबै प्रकारका गुणहरू बाधित हुन्छन्। याज्ञवल्क्य जस्ता ती ज्ञानीहरू **अजस्रसुखानुभवम्** अर्थात् नित्य सुखानुभवस्वरूप **पदं** अर्थात् आफ्नो स्वरूपको निर्बाधरूपमा अनुभव गर्न घरबार छाडिदिन्छन्। अज्ञानी मुमुक्षुले त आत्मज्ञानका लागि तीनै एषणा त्यागिदिन्छन् भने ज्ञानीहरूले असत्यरूपमा प्रतीत हुने संसारलाई छोड्नु के नै नौलो भयो र ? भन्ने अर्थ यसबाट निस्कन्छ।

भगवान् श्रीकृष्णको लीलापरक अर्थ गर्दा **त्र्यधिपते** शब्दको अर्थ हुन्छ, नृत्य, गीत र वादन यी तीनै कर्ममा निपुण भएका। अथवा मुनिरूपा, श्रुतिरूपा र नित्यसिद्धा गोपिनीहरूका **अधिपति** भन्ने अर्थ पनि गर्न सकिन्छ। तपस्या आदि शास्त्रीय साधनहरूले पनि हटाउन नसक्ने भगवन्निन्दा आदि पापहरू हुन्छन्। **अखिल** अर्थात् ती सबै मल अर्थात् पापहरूलाई पनि भगवान्का रसमय रासविहार आदि कथाहरूले नष्ट गरिदिन्छन्। भगवान्का रसमय कथा सुनेर चित्त पग्लिएपछि त्यसका सम्पूर्ण दुराग्रहहरू पनि नष्ट हुन्छन्, अनि भक्तिका प्रतिबन्धक अन्य दोषहरू पनि निवृत्त हुन्छन्। यस्ता रसमय कथामा अवगाह्य अर्थात् डुबेर रसिक भक्तहरू **तपांसि** अर्थात् अरू बाहिरी धर्महरूको आश्रयलाई छाडिदिन्छन्। भगवद्धर्मको पालनमा बाधक हुने लोकधर्मलाई त्यागिदिनुपर्दछ भन्ने यसको तात्पर्य हो। भगवान्को कथालाई स्वीकार गर्ने भक्तहरूको त यस्तो अवस्था हुन्छ भने **स्वधाम** अर्थात् भगवान्का दिव्य धामहरूमा रही भगवत्स्वरूपको दर्शन-स्पर्श आदिद्वारा जसका सबै दोष हटेका हुन्छन्, तिनले ताप छाडिदिनुमा के आश्चर्य हुन्छ र ? यहाँ आशय अर्थात् अन्तःकरणका गुण भनेर कामना आदिलाई लिनुपर्दछ। अनि कालका गुण भनेर समयको बन्धनलाई लिनुपर्दछ। गोपिनीहरूले भगवान्मा प्रेम गरी पति-पुत्र, घर आदिको कामनालाई छाडिदिए अनि समयको बन्धनलाई पनि उनीहरूले जिते। रासलीलाको समयमा कल्पौँसम्मको समयलाई क्षणसमान अनि श्रीकृष्णविनाको निमेषभरको समय पनि कल्पौँसमान अनुभव गर्ने तिनीहरूमा कालको बन्धन पनि थिएन। यसरी यस्ता भक्तहरूले संसारको तापलाई नष्ट गर्नुमा आश्चर्य हुँदैन भन्ने यस श्लोकको आशय हो। बल्लभाचार्यले चाहिँ **साक्षात् ते पादसंश्लिष्टास्ते किं वाच्याः महायशाः** अर्थात् हजुरको कथाश्रवण गर्ने त तापहरूबाट मुक्त हुन्छन् भने जो हजुरको पाउकै निकटमा रही त्यसको सेवा गर्दछन्, तिनको विषयमा के भन्नु ? भन्ने अर्थ गर्नुभएको छ।

यसप्रकार प्रस्तुत श्लोकका अनेक अर्थ हुन्छन्। मुख्यतः कथाश्रवण गर्ने साधक भक्तहरू पनि पापमुक्त हुन्छन् भने आनन्दस्वरूप परमात्माको वास्तविक रूपमा नित्य आत्मभावले स्थित रहने जीवन्मुक्त महापुरुषहरू पापबाट मुक्त हुनुमा के आश्चर्य ? यहाँ **तपांसि** शब्दले चिन्तालाई लिँदा ज्ञानीलाई पाप-पुण्यको चिन्ताले पनि नसताउने अर्थ हुन्छ। यसलाई उपनिषद्मा **स तं ह वाव न तपति किमहं साधु नकरवम् किमहं असाधु अकरवम्** अर्थात् यो ज्ञानीलाई मैले किन सत्कर्म गरिनछु, अनि मैले किन यस्तो असाधु कर्म गरिछु भन्ने चिन्ताले सताउँदैन भनी बताइएको छ। यिनै अर्थहरूलाई श्लोकरूपमा संग्रह गर्दै श्रीधर स्वामी लेख्नुहुन्छ–

**सकलवेदगणेरितसद्गुणस्त्वमिति सर्वमनीषिजना रताः।**

**त्वयि सुभद्रगुणश्रवणादिभिस्तव पदस्मरणेन गतक्लमाः ।।**

अर्थात् हे भगवान् ! हजुर सम्पूर्ण वेदहरूद्वारा सद्गुणहरूको स्तुति गरिएका हुनुहुन्छ भनी सबै सत्पुरुषहरू हजुरमा रमाउँछन्। हे परम कल्याणमय परमात्मा ! हजुरका कल्याण गुणहरूको श्रवणद्वारा अनि हजुरको स्वरूपलाई सम्झेर पनि तिनीहरू संसारका क्लेशहरूबाट मुक्त हुन्छन्।

**दृतय इव श्वसन्त्यसुभृतो यदि तेऽनुविधा**
**महदहमादयोऽण्डमसृजन् यदनुग्रहतः।**
**पुरुषविधोऽन्वयोऽत्र चरमोऽन्नमयादिषु यः**
**सदसतः परं त्वमथ यदेष्ववशेषमृतम्॥ १७॥**

**पदार्थ–**
**असुभृतः** = प्राणीहरू
**यदि** = यदि
**ते** = हजुरको
**अनुविधाः** = अनुवर्ती छन् (सेवा गर्दछन्) भने
**श्वसन्ति** = जीवित रहन्छन्, नत्र
**दृतयः इव** = केवल खलाँती झैँ हुन्छन्
**यदनुग्रहतः** = जसको अनुग्रहबाट
**महदहमादयः** = महत्तत्त्व, अहङ्कार आदिले
**अण्डं** = अण्ड (समष्टि ब्रह्माण्ड र व्यष्टि स्थूल शरीर)
**असृजन्** = सृजना गरे
**यः** = जो
**अन्नमयादिषु** = अन्नमय आदि कोशहरूमा
**चरमः** = ती सबैका अन्तिम अधिष्ठान भएर पनि
**अत्र** = यिनमा
**पुरुषविधः** = पुरुष (शरीर)को आकारले
**अन्वयः** = घुस्नुभएको छ
**अथ** = यसैले
**यत्** = जो
**एषु** = यी कोशहरूमा
**अवशेषं** = अवशिष्ट रहने
**ऋतं** = सत्यस्वरूप
**सदसतः** = स्थूल, सूक्ष्मभन्दा
**परं** = पर रहेका
**त्वम्** = हजुर नै हुनुहुन्छ

**वाक्यार्थ–** प्राणीहरू यदि हजुरको सेवा गर्दछन् भने ती प्राणीहरूको जीवन सफल जीवन हो। यदि तिनीहरू हजुरका भक्त छैनन् भने खलाँतीले सास फेरे झैँ सास फेर्ने तिनीहरूको जीवन निरर्थक हुन्छ। जुन आत्माबाट सामर्थ्य प्राप्त गरेर महत्तत्त्व र अहङ्कार आदिले समष्टि ब्रह्माण्ड र व्यष्टि स्थूल शरीरको सृष्टि गरे, जुन आत्मा अन्नमय आदि पाँच कोशहरूको आकारमा आकारित भएर ती पाँच कोशहरूसँग मिलेको जस्तो प्रतीत भइरहेको छ। वस्तुतः अन्नमय आदि पाँच कोशहरूको अधिष्ठानरूपले अथवा साक्षीरूपले र स्थूल, सूक्ष्मभन्दा पर सत्यरूपले अवस्थित आत्मतत्त्व हजुर नै हुनुहुन्छ।

**विवरण–** यस श्लोकमा भगवान्का भजन नगर्नेहरूको निन्दा गरिएको छ। अघिल्लो श्लोकमा बताइए अनुसार कथाश्रवणरूप साधना भक्ति अनि ज्ञानात्मिका भक्ति दुबैले रहित भएका व्यक्तिहरूको जीवन व्यर्थ हुन्छ भनिएको छ। प्राणीहरू यदि परमात्माको सेवा गर्दछन् भने तिनीहरू बाँचेको सार्थक हुन्छ। **अनुविदधति इति अनुविधाः** यो व्युत्पत्ति अनुसार **अनुविधाः** यो पदको अर्थ हुन्छ– अनुवर्ती भक्तहरू। यदि प्राणीहरू परमात्माको सेवा गर्दछन् भने उनीहरूको

जीवन सार्थक हुन्छ, नत्र केवल खलाँतीले सास फेर्नुसमान मात्र उनीहरूको जीवन हुन्छ। उपनिषद्मा परमात्मालाई सम्पूर्ण इन्द्रियहरूभित्र प्रेरक शक्तिको रूपमा रही सबैलाई सञ्चालित गर्ने तत्त्वको रूपमा बताइएको छ— **येन रूपं रसं गन्धं शब्दान् स्पर्शांश्च मैथुनान्, एतेनैव विजानाति** अर्थात् परमात्माको चैतन्य सत्ताद्वारा नै प्राणीहरू रूप, रस, गन्ध, शब्द, स्पर्श आदि अनुभव गर्दछन्। इन्द्रियहरूमा संसारका विषयहरूलाई प्रकाशित गर्ने सामर्थ्य हुँदैन, तिनीहरूले आत्मशक्तिलाई पाएर मात्र प्रकाशित गर्न सक्दछन्। अरु केनोपनिषद् (१।२)मा त प्राणीहरूका इन्द्रियभित्र रहने दर्शन, स्पर्श आदि गर्ने शक्तिको रूपमा पनि परमात्मा नै रहेको बताइएको छ— **श्रोत्रस्य श्रोत्रं मनसो मनो यद् वाचो ह वाचं स उ प्राणस्य प्राणः** अर्थात् त्यही आत्मतत्त्व श्रोत्रेन्द्रियको पनि श्रोत्र अर्थात् श्रवणसामर्थ्य हो, मनको मनन गर्ने शक्ति, वाणीको बोल्ने शक्ति, अनि प्राणको श्वास-प्रश्वास गर्ने शक्ति पनि त्यही तत्त्व हो। सम्पूर्ण इन्द्रियहरूभित्र ती-ती सामर्थ्यको रूपमा परमात्मा नै बसेकाले उहाँ विना इन्द्रियहरू स्वतः अस्तित्वहीन एवं बेकम्मा हुन्छन्। अतः परमात्मचिन्तन नगर्ने प्राणीहरूले सास लिनु व्यर्थ छ, त्यो त खलाँतीले सास फेरेजस्तै हो।

महापुरुषहरूले भक्तिरहित जीवनको धेरै निन्दा गरेका छन्। मानिस भएर बाँच्नुको अर्थ केवल पेट भर्नु, घर बनाउनु, सन्तान जन्माउनु र मरेर जानुमा मात्र छैन। मानिसले त आफ्नो स्वधर्मको पालनपूर्वक जीवन बाँच्यो भने मात्र त्यसले बाँचेको ठहर्छ। सास फेरेर बाँचेको हुने भए खलाँतीलाई पनि ज्युँदो भनिनुपर्ने। यसकारण जीवन भनेको देखावटी वस्तु होइन, यो त एउटा चेतना हो र विवेक हो। त्यसैले शास्त्रहरूमा परमात्माको दर्शन नगर्ने आँखालाई मयूरको प्वाँखको थोप्ला, कथाश्रवण नगर्ने कानलाई रुखका टोड्का अनि परमात्माको उद्देश्यले तीर्थयात्रा आदि नगर्ने खुट्टालाई रुख भनिएको छ। यो सबैको तात्पर्य मानिसले संसारको भोग एवं भौतिक उन्नति गरेर मात्र बाँचेको ठहर्दैन, उसले त विवेकशक्तिको प्रयोग गरेर सर्वव्यापी परमात्मालाई खोज्न सक्नुपर्दछ र त्यसैमा समर्पित हुन सक्नुपर्दछ भन्ने हो। परमात्मा सत्य वस्तु हुनुहुन्छ, संसार मिथ्या छ। असत्य पदार्थमा लागी सत्य वस्तुलाई छाडिदिने इन्द्रियहरूलाई कसरी सार्थक भन्न सकिन्छ र?

परमात्माको भक्तिविना पनि मानिसहरू विषयको भोग गरी बाँचेकै छन् त? भन्ने शङ्का हुँदा यहाँ यो संसारको उत्पत्ति पनि परमात्माको अनुग्रहद्वारा नै भएकाले उहाँको स्मरणविना संसारभोग गरेको पनि सार्थक नहुने कुरा यहाँ बताइएको छ। **यदनुग्रहतः** अर्थात् जुन परमात्माको अनुग्रहद्वारा नै **महदहमादयः** अर्थात् महत्तत्त्व र अहङ्कार आदिले अण्ड अर्थात् समष्टि ब्रह्माण्ड र व्यष्टि स्थूल शरीरको रचना गरेका हुन्। महत्तत्त्व, अहङ्कार आदि स्वयं जड भएकाले यिनबाट जगत्को उत्पत्ति हुन सक्दैन, यसका लागि चेतनको आवश्यकता पर्दछ। वेदान्तसिद्धान्त अनुसार त ब्रह्म बाहेक अर्को कुनै दोस्रो वस्तु छैन। जगत्को सृष्टि हुनुभन्दा अघि **एकमेवाद्वितीयम्** (छान्दोग्योपनिषद् ६।२।१) अर्थात् एक मात्र रहने अद्वितीय ब्रह्मबाट नै सम्पूर्ण जगत्को उत्पत्ति भएको हो। ब्रह्मविना महत्तत्त्व आदिको पनि कुनै अलग अस्तित्व छैन। यहाँ अनुग्रह शब्दको अर्थ ती-ती कार्यरूपमा प्रकट हुनु भन्ने हुन्छ। यसरी जगत् सृष्टिको कारणता महत्तत्त्व आदिमा नभई

साक्षात् ब्रह्ममा नै रहेको बुझ्नुपर्दछ। प्रकृति, महत्तत्त्व आदि उपाधिले युक्त भएर नै ब्रह्म जगत्को कारण हुन्छ। पूर्व पूर्व उपाधिले युक्त ब्रह्मतत्त्व उत्तरोत्तर कार्यरूपमा प्रकट हुन्छ। त्यसैले आकाशबाट वायु, वायुबाट तेज उत्पन्न हुन्छ भन्ने श्रुतिको तात्पर्य स्पष्ट पार्दै ब्रह्मसूत्रमा ती–ती पूर्व–पूर्व कारण अवस्थामा रहेको ब्रह्मबाट ती–ती उत्तर–उत्तर कार्यको रूपमा उत्पन्न हुनु नै जगत् सृष्टिको प्रक्रिया हो भनी बताइएको छ। यसप्रकार महत्तत्त्व आदि पनि जुन परमात्माको अस्तित्वविना केही गर्न सक्दैनन्, त्यस्ता परमात्मा नै सबैका उत्पादक एवं प्रकाशक हुनुहुन्छ। जगत्लाई जगत्को रूपमा प्रकाशित गर्ने परमात्मा हुनुभएकाले उहाँविना जगत्भोगको पनि कुनै अस्तित्व रहँदैन, त्यसैले संसारीहरूले परमात्मालाई बिर्सिई भोग गर्नुको केही अर्थ छैन भन्ने यसको तात्पर्य हो। यसैलाई वंशीधर लेख्नुहुन्छ– **त्वत्कृतप्रकाशादिरूपानुग्रहं विना कामादिसुखमपि न स्यात्** अर्थात् हजुरले प्रकाशित गरी तिनलाई सिद्ध नगरिदिए विषयभोगको सुख पनि सिद्ध हुँदैन।

इन्द्रियहरू समष्टि ब्रह्माण्ड र व्यष्टि शरीरभित्र प्रवेश गर्नुअघि उनीहरूले परमात्माको स्तुति गरेको पाइन्छ। इन्द्रियका अभिमानी यी देवताहरू **स्वक्रियानीशाः** अर्थात् आफ्नो सृष्टि उत्पन्न गर्ने कार्यमा असमर्थ भएकाले तिनीहरूले हात जोडी परमात्माको स्तुति गरे भनी बताइएको छ (भागवत ३।५।३७)। **नमाम ते देव पदारविन्दम्** अर्थात् हे परमात्मा ! हजुरको चरणकमललाई प्रणाम गर्दछौँ (भागवत ३।५।३८) भनी इन्द्रियका अभिमानी देवताहरूले स्तुति गरेका छन्। यसप्रकार यी इन्द्रियहरूले परमात्माको स्तुतिपूर्वक नै शरीरमा प्रवेश गरेको हुनाले जसले आफ्ना इन्द्रियहरूलाई तिनै परमात्माको सेवामा लगाउँदैनन्, तिनीहरूका इन्द्रिय शरीरमा रहे पनि नरहे बराबर नै हुन्छन्। त्यसैले यहाँ त्यस्ता इन्द्रियहरू बेकम्मा हुन्छन् भनिएको हो। **असुभृतः** यो पदले केवल आफ्नै प्राणको मात्र भरण–पोषण गर्ने संसारी व्यक्तिहरूलाई बुझाइएको छ। शरीर, इन्द्रिय, मन आदिलाई नै आत्मा मान्ने यस्ता व्यक्तिहरू आफ्नो वास्तविक स्वरूपको उपेक्षा गर्दछन् र परमात्मालाई नचिनी जीवन बर्बाद पार्दछन्। यिनीहरूलाई उपनिषद्मा आत्मघाती भनिएको छ। यिनीहरूको दुर्गतिको वर्णन गर्दै ईशावास्योपनिषद् (३)मा भनिएको छ– **असुर्या नाम ते लोका अन्धेन तमासावृताः, ताँस्ते प्रेत्याभिगच्छन्ति ये के चात्महनो जनाः** अर्थात् जो–जो आत्मघाती व्यक्तिहरू छन्, ती सबै बारम्बार घोर अन्धकारबाट ढाकिएका अज्ञानमय योनिहरूमा परिरहन्छन्। यहाँ आफ्नै स्वरूप भएका परमात्मालाई नजान्ने र उहाँको सेवा नगर्ने व्यक्तिहरूको निन्दा गरिएको छ।

यस श्लोकमा परमात्माको अनुग्रहबाट नै महत्तत्त्व आदिले जगत्को रचना गरे भनिएबाट सांख्यसिद्धान्तको खण्डन भएको छ। सांख्यशास्त्र अनुसार सृष्टिमा केवल प्रकृतिको मात्र भूमिका हुन्छ, पुरुष त केवल द्रष्टा मात्र हुन्छ। सांख्यसिद्धान्त अनुसार सृष्टि गर्नका लागि प्रकृतिलाई पुरुषको अनुग्रह या शक्ति चाहिँदैन। प्रकृति महत्तत्त्व, अहङ्कार आदिको माध्यमले त्रिगुणमय संसारको रचना गर्न स्वयं समर्थ हुन्छे। यहाँ चाहिँ महत्तत्त्व आदिले परमात्माको अनुग्रहबाट मात्र सृष्टि रचना गर्न सकेको बताइएको छ। गीता (९।१०)मा पनि भगवान्ले **मयाध्यक्षेण प्रकृतिः सूयते सचराचरम्** अर्थात् मेरै शक्तिलाई पाएर प्रकृतिले चराचर जगत्लाई रच्दछे भनिएको छ। यसद्वारा प्रकृतिलाई स्वतन्त्र रूपमा जगत्कारण मान्ने सांख्यमतको खण्डन भएको छ।

आत्माको स्वरूप बताउँदै यस श्लोकमा श्रुतिहरू भन्छन्— **पुरुषविधः** अर्थात् आत्मतत्त्व शरीर झैँ छ। **पुरुषस्य विधा इव विधा यस्य सः** अर्थात् अन्नमयकोश आदि झैँ आकार हुनु नै आत्मा पुरुषविध हुनुको तात्पर्य हो। अशरीर एवं चिद्रूप आत्मा शरीर झैँ हुन कसरी सम्भव छ ? भन्ने शङ्कामा श्रुतिहरू उत्तर दिँदै भन्छन्— **अन्वयः अत्र** अर्थात् अन्नमय, प्राणमय आदि शरीरहरूमा आत्माको अन्वय या अनुवृत्ति भएकाले आत्मालाई पनि शरीर झैँ भनिएको हो।

ब्रह्म पाँचै कोशहरूबाट असङ्ग एवं छुट्टै छ भन्ने जनाउन यस श्लोकमा **सदसतः परं** भन्ने पदको प्रयोग गरिएको छ। **सत् असत्** अर्थात् स्थूल, सूक्ष्म सबैथरी कोशहरूदेखि ब्रह्मतत्त्व पर रहेको छ। ती सबै कोशहरू अनात्मा भएकाले बाधित हुन्छन् या नष्ट हुन्छन्, तर आत्मा चाहिँ **अवशेषम्** अर्थात् ती कोशहरूको बाध हुँदा पनि अवशिष्ट रहिरहन्छ। यसरी सबै शरीर आदिको बाध हुँदा पनि सत्रूपमा रहिरहने हुनाले आत्मालाई ऋतम् अर्थात् सत् स्वरूप भनी बताइएको छ।

यो श्लोकलाई श्रीकृष्णलीलापरक व्याख्या गर्दा **असुभृतः** भन्ने पदद्वारा याज्ञिक ब्राह्मणहरूलाई लिइएको छ। श्रीकृष्णले अन्न आदिको याचना गर्दा वास्ता नगर्ने ब्राह्मणहरूको निन्दा गरिएको प्रसङ्ग हो यो। अनेक यज्ञ गरी जसको आराधना गरिन्छ, तिनै यज्ञपति परमात्माको इच्छालाई अवहेलना गर्ने ती ब्राह्मणलाई **असुभृतः** भनिएको हो। ब्राह्मण, यज्ञकर्ता आदि केही नभनी यो पदको प्रयोग गर्नुमा तिनले प्राणधारण गरी आफूलाई जीवित ठान्नु व्यर्थ छ भन्ने उपहासको भाव प्रकट भएको छ। सनातन गोस्वामी लेख्नुहुन्छ— **असुभृत्त्वोक्तिः रोषबहुत्वात्** अर्थात् ब्राह्मण नभनी **असुभृत्** भन्नुले श्रुतिहरूको क्रोधलाई दर्साएको छ। **अनुविधाः** शब्दको अर्थ हुन्छ, **अनु–अनुविधयः यज्ञाः येषां ते** अर्थात् एकपछि अर्को गरी यज्ञविधिहरू गरिरहन्छन् जो तिनीहरू। त्यस्ता याज्ञिकहरूको जीवन खलाँतीले सास फेर्नु समान मात्र हो। भगवान् त गोठालाको छोरा गोप हुनुहुन्छ, उहाँको इच्छा पूरा नगर्दैमा के दोष भयो र ? भन्ने प्रश्नमा श्रुतिहरू भन्छन्— **यदनुग्रहतः** जुन भगवान्कै अनुग्रहद्वारा **महत्** अर्थात् सृष्टिकर्ता ब्रह्मादिहरूले ब्रह्माण्डको रचना गर्न सक्दछन्, यस्ता हजुर सर्वश्रेष्ठ हुनुहुन्छ। यहाँ **विधु** शब्दको अर्थ चन्द्रमा या प्रकाशक भन्ने हुन्छ। **पुरुषविधो** यो पदको अर्थ हे मनुष्यहरूमा सर्वश्रेष्ठ श्रीकृष्णचन्द्र ! भन्ने हुन्छ। अथवा **पुरुषाणां ब्रह्मविष्णुशिवानां विधुः प्रकाशक** अर्थात् ब्रह्माण्डका श्रेष्ठ पुरुषहरू ब्रह्मा, विष्णु र शिवका पनि प्रकाशक हे परमात्मा ! भन्ने अर्थ पनि गर्न सकिन्छ।

**अन्नमयादिषु च रमः** यसरी पदच्छेद गरी पाठभेद मान्दा प्रचुर अन्न भएका व्रजका अनेक ठाउँहरू अनि एकान्त प्रदेशहरूमा पनि श्रीकृष्ण खाँदै खेल्दै रमाउनुहुन्छ भन्ने अर्थ हुन्छ। **रमते इति रमः** अर्थात् रमाउने। यहाँ **रमः** शब्दले सधैँ रमाइरहने श्रीकृष्णलाई बताएको छ। यसरी व्रजमण्डलमा खाँदै खेल्दै रमाउने श्रीकृष्णलाई जसले भोजन आदिद्वारा प्रसन्न पारेनन्, तिनीहरू बाँच्नु व्यर्थ छ। श्लोकको अन्तिम पङ्क्तिमा श्रीकृष्णसँग गोकुल र गाईगोठको रक्षा गर्न प्रार्थना गरिएको छ। **सत्** अर्थात् गाईहरू बस्ने पवित्र गोठ या गोकुललाई **अव** अर्थात् रक्षा गर। त्यो गोकुल कस्तो छ ? भन्ने प्रश्नको उत्तर दिँदै श्रुतिहरू भन्छन्— **असतः परं** अर्थात् दुष्ट कंसको शत्रुसमान भएको गोकुललाई रक्षा गर। अनेक राक्षसहरू पठाई उपद्रव मच्चाइरहने कंसलाई नष्ट गरी व्रजमण्डलको रक्षा गर्ने प्रार्थना यहाँ गरिएको छ। यो व्रजमण्डल **शेषं** अर्थात् श्रीकृष्णकै

उपभोगका लागि हो। सत्स्वरूप परमात्मा जसबाट आनन्द लिनुहुन्छ, त्यो स्थान पनि **ऋतं** अर्थात् सत्स्वरूप नै होला, किनभने असत् वस्तुबाट परमात्मालाई के आनन्द आउला र ? यसरी यहाँ श्रीकृष्णको प्रशंसा गरिएको छ।

यसप्रकार यस श्लोकमा सम्पूर्ण शरीर आदिका साक्षीका रूपमा श्रीकृष्णको वर्णन गरिएको छ। अनि जसले परमात्माको भजन गर्दैनन्, तिनको जीवन व्यर्थ भएको जनाइएको छ। यस श्लोकका भावलाई समेट्दै श्रीधर स्वामी लेख्नुहुन्छ–

**नरवपुः प्रतिपद्य यदि त्वयि श्रवणवर्णनसंस्मरणादिभिः।**
**नरहरे न भजन्ति नृणामिदं दृतिवदुच्छ्वसितं विफलं ततः।।**

अर्थात् हे नरहरि ! मानिसको जन्म पाएर पनि प्राणीले यदि श्रवण, कीर्तन र स्मरण आदिद्वारा हजुरको भजन गरेनन् भने तिनीहरूले सास लिनु खलाँतीले हावा फ्याँक्नु झैं व्यर्थ छ।

**उदरमुपासते य ऋषिवर्त्मसु कूर्पदृशः**
**परिसरपद्धतिं हृदयमारुणयो दहरम्।**
**तत उदगादनन्त तव धाम शिरः परमं**
**पुनरिह यत् समेत्य न पतन्ति कृतान्तमुखे॥ १८॥**

**पदार्थ–**
**ये** = जो साधकहरू
**ऋषिवर्त्मसु** = ऋषिका सम्प्रदायहरूमा
**कूर्पदृशः** = स्थूल दृष्टि (बुद्धि) भएका छन्, तिनीहरू
**उदरं** = उदरस्थ मणिपुर चक्रमा
**उपासते** = ब्रह्मको ध्यान गर्दछन्
**आरुणयः** = आरुणिहरू चाहिँ
**परिसरपद्धतिं** = सारा नाडीहरूको निर्गमनकेन्द्र
**हृदयं** = हृदय प्रदेशमा
**दहरं** = सूक्ष्म ब्रह्मको ध्यान गर्दछन्
**अनन्त** = हे परमात्मा
**ततः** = त्यस हृदयकमलबाट
**तव** = हजुरको
**परमं** = सर्वश्रेष्ठ
**धाम** = स्थान
**शिरः** = ब्रह्मरन्ध्रमा
**उदगात्** = पुगिन्छ
**यत् समेत्य** = जसलाई प्राप्त गरेर
**पुनः** = फेरि
**इह** = यो
**कृतान्तमुखे** = कालको मुखमा
**न पतन्ति** = खस्दैनन्

**वाक्यार्थ–** ऋषि सम्प्रदायहरूमा रहेका तर स्थूल बुद्धि भएका साधकहरू उदरस्थ मणिपुर चक्रमा ब्रह्मको उपासना गर्दछन्। शुद्ध चित्त भएका अरुण सम्प्रदायका ऋषिहरू भने सम्पूर्ण नाडीहरू जहाँबाट फैलिन्छन् त्यस्तो हृदयरूप आकाशमा सूक्ष्म ब्रह्मको उपासना गर्दछन्। परमात्माको असली स्वरूपलाई उपलब्ध गराउने सुषुम्ना नाडी त्यही हृदयबाट निक्लिएर ब्रह्मरन्ध्रतिर गएको छ र भगवान्‌को त्यस धामलाई प्राप्त गरिसकेपछि साधकहरू कालको मुखमा पर्दैनन्।

**विवरण–** यस श्लोकमा ऋषिहरूले अनेक उपाधिको आधारमा परमात्मालाई अनेक रूपमा उपासना गर्दछन् भनी बताइएको छ। श्रीधर स्वामीले **उदरं ब्रह्मेति शार्कराक्षा उपासते, हृदयं**

**ब्रह्मेति आरुणयः** भन्ने श्रुतिवाक्यको उद्धरण दिँदै यसको व्याख्या गर्नुभएको छ। शार्कराक्षहरूले उदरलाई नै ब्रह्म भनी उपासना गर्दछन् भने आरुणिहरूले चाहिँ हृदयलाई नै ब्रह्म भनी उपासना गर्दछन् भन्ने यसको तात्पर्य हो। श्लोकमा शार्कराक्षहरूलाई बुझाउन **कूर्पदृशः** भन्ने पद आएको छ। **कूर्पं शर्करारजः विद्यते दृक्षु अक्षिषु येषां अर्थात्** कूर्प भनेको सख्खरको धुलो, **दृक्** अर्थात् आँखामा छ जसको तिनलाई **कूर्पदृक्** भन्दछन्। यसको तात्पर्य रजोगुणद्वारा दृष्टि ढाकिएका या स्थूलदृष्टि भएका भन्ने हुन्छ। यिनीहरूले स्थूलदृष्टि भएका हुनाले हृदयभित्र प्रेरकको रूपमा रहेका परमात्मालाई जान्न सक्दैनन् र पेटभित्र उनको उपासना गर्दछन्, **उदर**को सामान्य अर्थ पेट भन्ने हुन्छ, तर उदरोपासना गर्नुको अर्थ पेटलाई ब्रह्म सम्झिनु चाहिँ होइन। पेटभित्र आएको वस्तुलाई पचाउने वैश्वानर रहेको छ। भगवान्ले गीता (१५।१४)मा भन्नुभएको छ– **अहं वैश्वानरो भूत्वा प्राणिनां देहमाश्रितः** अर्थात् प्राणीहरूको पेटभित्र वैश्वानर अर्थात् जठरानल भएर बस्ने म नै हुँ। वंशीधर लेख्नुहुन्छ– **उदरं वैश्वानरान्तर्यामिणं** अर्थात् यहाँ उदर भनेर वैश्वानरका पति अन्तर्यामी रूपमा रहेका परमात्मालाई लिनुपर्दछ। अन्न आदिलाई पचाई शरीरका लागि आवश्यक शक्ति उत्पन्न गरिदिने हुनाले यो परमात्माको रूप क्रियाशक्तिको प्रवर्तक हो। शार्कराक्षहरूले मणिपूर चक्रमा यही रूपमा परमात्माको चिन्तन गर्दछन्। **आरुणयः** अर्थात् आरुणिहरू चाहिँ सूक्ष्मदृष्टि भएका हुनाले **हृदयं** अर्थात् हृदयभित्रका प्रेरकका रूपमा परमात्माको चिन्तन गर्दछन्। हृदयभित्र अन्तर्यामीका रूपमा परमात्मा रहनुहुन्छ र यस रूपले उहाँले जीवलाई प्रेरित गर्नुहुन्छ। बुद्धि आदिको प्रवृत्ति पनि उहाँबाट नै हुन्छ। त्यसैले ज्ञानशक्तिका प्रवर्तक जीवका अन्तर्यामी परमात्माको रूपमा आरुणिहरूले उहाँको उपासना गरेको देखिन्छ। यसरी केही स्थूल दृष्टि भएकाहरू क्रियाशक्तिको प्रवर्तक उदरस्थ वैश्वानरको रूपमा परमात्माको चिन्तन गर्दछन् भने सूक्ष्म दृष्टि भएकाहरू चाहिँ ज्ञानशक्तिका प्रवर्तक हृदयस्थ अन्तर्यामीका रूपमा परमात्माको चिन्तन गर्दछन्। यहाँ हृदयलाई परिसरपद्धति भनिएको छ। यसको अर्थ हुन्छ– **परितः सरन्ति इति परिसराः नाड्यः तासां पद्धतिं प्रसरणस्थानम्** अर्थात् शरीरभरि जतातते फैलिएका नाडीहरू प्रसारित हुने मूल ठाउँ। प्रश्नोपनिषद् (३।६)मा पनि हृदयबाट मुख्य एक सय एक नाडीहरू निस्किएका छन् भनिएको छ। हृदय नै मूलरूपमा परमात्मालाई उपलब्ध गर्ने स्थान हो। यसलाई परमात्माको निवासस्थान भनी शास्त्रहरूमा बताइएको छ। **अस्मिन् ब्रह्मपुरे दहरं पुण्डरीकं वेश्म दहरोऽस्मिन्नन्तराकाशः** (छान्दोग्योपनिषद् ८।१।१) अर्थात् यो ब्रह्मपुर शरीरभित्र पुण्डरीक कमलको आकारको मांसपिण्ड छ। त्यसभित्रको खाली ठाउँलाई दहराकाश भनिन्छ। यही दहराकाशमा नै ब्रह्मको उपलब्धि हुने हुनाले ब्रह्मलाई पनि दहरब्रह्म भनिएको हो।

शरीरभित्रका नाडीहरूमध्ये सबभन्दा महत्त्वपूर्ण सुषुम्णा नाडी नै हो। यसलाई श्लोकमा **तव धाम** अर्थात् परमात्माको उपलब्धिस्थान भनिएको छ। यो नाडी मूलाधार चक्रबाट हृदय हुँदै ब्रह्मरन्ध्र (सहस्रार)सम्म पुगेको छ र त्यसलाई पनि भेदन गरी ज्योतिर्मय एवं अदृश्य रूपमा यो ब्रह्मलोकसम्म फैलिएको छ। यसैद्वारा प्राण त्याग्ने व्यक्तिहरू सिधा ब्रह्मलोक जान्छन्, त्यसैले यस श्लोकमा यसलाई पाइसकेपछि मानिसहरू फेरि कालको चक्रमा फर्किँदैनन् भनी बताइएको छ। यहाँ नाडी र चक्रहरूको प्रसङ्ग बुझ्न योग एवं तन्त्रशास्त्रका मुख्य मान्यताहरू जान्नु आवश्यक

देखिन्छ।

योगशास्त्रमा षड्चक्र अर्थात् छ ओटा चक्रहरू बताइएका छन्। शरीरमा नै रहने अनेक प्रकारका नाडीहरूमध्ये इडा, पिङ्गला र सुषुम्णा मुख्य नाडीहरू हुन्। मूलाधार प्रदेशबाट सुरु भएका यी नाडीमध्ये इडा दाहिनेतिर, पिङ्गला देब्रेतिर हुन्छ भने बिचमा सुषुम्णा नाडी हुन्छ। यी क्रमशः सूर्य, चन्द्र र अग्निका प्रतिनिधिहरू हुन्। प्राणवायुसँग यिनीहरूको प्रत्यक्ष सम्बन्ध हुन्छ। इडा नाडीबाट प्राणवायु चल्दा नाकको दाहिने स्वर खुलेको हुन्छ भने पिङ्गलाबाट चल्दा देब्रे स्वर खुलेको हुन्छ। यसको अनुभव नाकका प्वालमध्ये कताको श्वास बढी खुलेको छ, यसबाट गर्न सकिन्छ। सुषुम्णाबाट प्राणवायु चल्दा चाहिँ दुबै नाकका प्वालबाट समानरूपमा श्वास खुलेको हुन्छ। परमात्माको ध्यान, अन्तरङ्ग योगाभ्यास र दृढ ब्रह्मचिन्तन आदि गरिएको वेलामा स्वतः नै प्राण सुषुम्णाबाट चलेको हुन्छ। सामान्य अवस्थामा भने डेढ-दुई घण्टाको अन्तरमा इडा-पिङ्गलामा स्वरहरू बदलिइरहेका हुन्छन्। **चन्द्रस्वर** अर्थात् नाकका बायाँ प्वाल खुल्दा शरीरभित्र शीतलताको सञ्चार हुन्छ, त्यसैले दिउँसो बढी मात्रामा यो स्वर चल्नु शुभ मानिन्छ भने रातमा उष्णतावर्धक बायाँ या सूर्यस्वर चल्नु शुभ मानिन्छ। यसरी यी तीन नाडीहरूको सम्बन्ध छ। तीन नाडीहरू जहाँ एक आपसमा जोडिई नाडीगुच्छको आकार लिन्छन्, त्यसैलाई नै योगशास्त्रमा अनेक चक्रहरू भनिएको छ। यद्यपि शरीरका नाडीहरू जहाँ गुच्छ बन्दछन्, त्यही स्थानमा यौगिक चक्रहरू पनि रहेका हुन्छन्, तर चक्रहरू ज्योतिर्मय तैजस भएकाले यिनीहरू स्थूल दृष्टिबाट नभई सूक्ष्म मानस दृष्टिबाट मात्र प्रत्यक्ष हुन्छन्। मूलाधार प्रदेशमा जहाँबाट तीन नाडीहरू निस्कन्छन्, त्यहाँ तीनै नाडीहरू एकै ठाउँमा जोडिएका हुन्छन्। त्यसैले यसलाई मूलाधार चक्र भनिन्छ। यसको ठाउँ गुदा र लिङ्गको बिचमा रहेको हुन्छ। यहाँबाट फेरि छुट्टिएका यी नाडीहरू लिङ्ग र नाभिका बिच प्रदेशमा फेरि जोडिन्छन्, यसलाई स्वाधिष्ठान चक्र भनिन्छ। यसभन्दा माथि पनि नाडीगुच्छकै आधारमा नाभिप्रदेशमा मणिपूर चक्र, हृदयप्रदेशमा अनाहत चक्र, रुद्रघण्टीभन्दा थोरै तल घाँटीको सुरुवात हुने प्रदेशमा विशुद्ध चक्र, दुई आँखीभौँको बिच प्रदेशमा आज्ञा चक्र रहेका हुन्छन्। योगाभ्यास आदिद्वारा आफ्नो प्राण र चेतनालाई सुषुम्णा नाडीबाट सधैँ सञ्चरित गराउन सकियो भने यी छ ओटै चक्रहरू क्रमशः खुल्दै जान्छन्, यसैलाई तन्त्रशास्त्रमा कुण्डलिनी जागरण भनिएको छ। छ चक्रहरूको जागरणपछि अन्तिम स्थान सहस्रारमा व्यक्तिको चेतना स्थिर रहन्छ। मूलाधारमा रहेको कुण्डलिनी शक्ति अन्तश्चेतनाको जागरण सँगसँगै सुषुम्णा नाडीको माध्यमले अघि बढेर चक्रहरूलाई भेदन गर्दै सहस्रारमा प्रतिष्ठित हुनुलाई तन्त्रशास्त्रमा शिव-शक्तिको सामरस्य या अभेद भनिएको छ। योगशास्त्रमा पनि व्यक्तिको सूक्ष्म प्राणवायु सुषुम्णाको माध्यमले सहस्रारमा प्रतिष्ठित हुनुलाई समाधिको स्थिति भनिएको छ। यहाँ **समेत्य** अर्थात् प्रतिष्ठित भइसकेपछि व्यक्ति फेरि **कृतान्तमुखे** अर्थात् कालको मुखमा फर्किँदैन।

यस श्लोकको श्रीकृष्णलीलापरक व्याख्या गर्दा यहाँ भगवद्धामको महत्त्व गाइएको छ। यहाँ **कूर्पदृशः** यो पदले वशिष्ठ आदि ऋषिहरूलाई लिनुपर्दछ। जसरी **उदर** अर्थात् पेट सम्पूर्ण शरीरको बिच भागमा हुन्छ, त्यसै गरी व्रजक्षेत्रको बिच भागमा मधुवन पर्दछ, यस प्रदेशमा वशिष्ठ आदिको आश्रम रहेको भन्ने प्रसिद्धि छ। त्यसैले वशिष्ठ आदि ऋषि उदरस्थानीय

मधुवनको नै **उपासते** अर्थात् नजिक रहेको स्पष्ट हुन्छ। **आरुणयः** शब्दको अर्थ यहाँ अनुरागी भक्तहरू भन्ने गर्नुपर्दछ। हृदय परमात्माको निवास भए जस्तै वृन्दावन पनि परमात्माको निवासक्षेत्र हो। हृदयबाट नाडीहरू निस्किए झैँ यहाँबाट अनेक झर्ना-नदीहरू निस्किएका छन्। यसरी अनुरागी भक्तहरूले वृन्दावनकै उपासना गर्ने अर्थात् यहीँ आसन जमाउने स्पष्ट हुन्छ। यसलाई दहर भन्नुको अर्थ चाहिँ यो कुञ्जलता आदिको कारणले झाडीले भरिएको र गुप्त छ भन्ने गर्नुपर्दछ। यहाँबाट चाहिँ ती भक्तहरू **शिरः** अर्थात् परमात्मा निवास गर्ने नन्दगृहमै पुग्छन्। **शिरः** शब्दको अर्थ गर्दै सनातन गोस्वामी लेख्नुहुन्छ— **शिरोभूतं नन्दीश्वर शृङ्गरूपम्**। यसको अर्थ ठुला सिङ हुने गाई-गोरुहरूको स्थान नै भगवान्का लागि प्रिय निवास भन्ने हुन्छ। गाई गोरुहरू धेरै रहेका नन्दका घरमा परमात्मा रहनुहुन्छ। यो नै भगवान्को **परमं धाम** अर्थात् सर्वश्रेष्ठ स्थान हो। वेदमा पनि परमात्माको स्वरूपलाई यसै रूपमा बताइएको छ। **यत्र गावो भूरिशृङ्गाऽअयासः अत्राह तदुरुगायस्य वृष्णयः परमं पदमवभाति भूरि** (ऋग्वेद १।१४५।६) अर्थात् जहाँ ठुला सिङ भएका गाई, गोरुहरू रहन्छन्, त्यही नै सबै कामना बर्साउने उरुगाय परमात्माको परम पद हो। कुनै पनि व्यक्ति **इह समेत्य** अर्थात् यो परमात्माको क्षेत्रमा आइपुग्यो भने त्यो फेरि कालको मुखमा पर्दैन। यसरी यहाँ भगवद्धामको दर्शन गर्नुको महत्त्व बताइएको छ।

यसप्रकार यो श्लोकमा नाभि र हृदयप्रदेशका ती-ती स्वरूपमा परमात्मचिन्तन गर्ने अनि सबैलाई अतिक्रमण गरी शिरमा पुग्ने यौगिक प्रक्रिया बताइएको छ। यी सबै भावलाई सङ्ग्रह गरी श्रीधर स्वामी लेख्नुहुन्छ—

**उदरादिषु यः पुंसां चिन्तितो मुनिवर्त्मभिः।**
**हन्ति मृत्युभयं देवो हृद्गतं तमुपास्महे।।**

अर्थात् मुनिहरूले आ-आफ्ना प्रक्रिया अनुसार वैश्वानर अन्तर्यामी आदिको चिन्तन गरिएको जुन परमात्माले मृत्युको भयलाई नष्ट गरिदिनुहुन्छ, त्यस्ता हृदयस्थ परमात्माको उपासना गर्दछौँ।

**स्वकृतविचित्रयोनिषु विशन्निव हेतुतया**
**तरतमतश्चकास्स्यनलवत् स्वकृतानुकृतिः।**
**अथ वितथास्वमूष्ववितथं तव धाम समं**
**विरजधियोऽन्वयन्त्यभिविपण्यव एकरसम्॥ १९॥**

पदार्थ—
**स्वकृतविचित्रयोनिषु** = आफूद्वारा रचित अनेक शरीरहरूमा
**हेतुतया** = उपादान कारणरूपले
**विशन् इव** = प्रवेश गरे झैँ
**स्वकृतानुकृतिः** = आफ्नै कार्यको अनुकरण गर्दै
**तरतमतः** = ऊचनीच भावले
**अनलवत्** = (दाउरा अनुसार) आगो झैँ
**चकास्सि** = प्रकट हुनुहुन्छ
**अथ** = यसैले
**अभिविपण्यवः** = सबैथरी व्यावहारिक कर्म, यिनको फल आदिलाई छाडिदिएका

**विरजधियः** = निर्मल बुद्धि भएकाहरू
**वितथासु** = विनाशी
**अमूषु** = यी शरीरहरूमा
**तव** = हजुरको
**एकरसं** = एकरस (नित्य आनन्दस्वरूप)
**अवितथं** = सत्य
**समं** = समानरूपले रहने
**धाम** = स्वरूपलाई
**अन्वयन्ति** = साक्षात्कार गर्दछन्

**वाक्यार्थ–** हजुर आफूले बनाएका भिन्न-भिन्न शरीरहरूमा उपादानरूपले प्रवेश गरे झैं देखिनुहुन्छ, जसरी अग्नि स्वरूपतः एउटै भए पनि दाउरा आदि उपाधि अनुसार त्यस्तै उपाधिको आकारमा देखिन्छ, त्यसै गरी हजुर पनि आफूबाट निर्मित विभिन्न शरीरको आकारमा आकारित भए झैं प्रतीत हुनुहुन्छ। यसकारण यस लोक र परलोकका कर्म र कर्मफलबाट विरक्त हुनाले शुद्ध चित्त भएका साधकहरू विनाशवान् एवं मिथ्या शरीरहरूमा सत्य निर्विशेष एवं एकरसरूपले हजुरको स्वरूपलाई जान्दछन्।

**विवरण–** यस श्लोकमा परमात्मा उपाधिभेदले रहित हुनुहुन्छ भनी बताइएको छ। यसभन्दा अघिल्लो श्लोकमा परमात्मालाई नाभिप्रदेश हृदयप्रदेश आदिमा चिन्तन गरिने बताइएको थियो। त्यहाँ के शङ्का भयो भने नाभिप्रदेश या हृदयमा परमात्मचिन्तन गर्नका लागि ती-ती ठाउँमा परमात्माको सम्बन्ध छ या छैन ? यदि ती स्थानमा परमात्माको सम्बन्ध छैन भन्ने हो भने त्यहाँ ध्यान गरेर परमात्माको स्वरूपको साक्षात्कार कसरी गर्ने ? यदि परमात्माको सम्बन्ध छ भने शरीरका साथ सम्बन्धित हुनुहुने परमात्मा जीवजस्तै भइहाल्नुभयो। जसरी जीव शरीर आदि उपाधिका साथ सम्बन्धित भएकाले परतन्त्र, अल्पज्ञ र अपूज्य छ, त्यसै गरी परमात्मा पनि शरीर आदि उपाधिका साथ सम्बन्धित हुनुभएको छ भने उहाँमा पनि अपूज्यताको आपत्ति आइपर्ला। यदि परमात्माको शरीर आदि उपाधिसँग वास्तविक सम्बन्ध छैन, केवल अज्ञानको कारणले सम्बन्ध भए झैं प्रतीत भएको मात्र हो भने पनि समस्याको समाधान हुने देखिँदैन। किनभने वेदान्तमा त जीवको पनि शरीर आदिसँग वास्तविक सम्बन्ध छैन, त्यो केवल अज्ञानका कारणले देखिएको हो भनिन्छ, त्यसो भए जीवको ध्यान गरेर पनि मोक्ष हुनुपर्‍यो, यी अनेक आशङ्काहरूको उत्तरको रूपमा यो श्लोक आएको छ। यहाँ परमात्मा जीवको रूपमा अनेक औपाधिक भेदहरूले युक्त हुँदा पनि वास्तवमा चाहिँ अद्वितीय नै हुनुहुन्छ भनी बताइएको छ।

**स्वकृतविचित्रयोनिषु** अर्थात् आफैंले उत्पन्न गरेका अनेक प्रकारका शरीरमा परमात्मा आफैं प्रवेश गर्नुहुन्छ। यसलाई तैत्तिरीयोपनिषद् (२।६)मा **तत् सृष्ट्वा तदेवानुप्राविशत्** अर्थात् जगत्को रचना गरी त्यहीँभित्र प्रवेश गर्नुभयो भनी बताइएको छ। यसरी परमात्माले संसार रच्नुभयो अनि त्यहीँभित्र पस्नुभयो भनी बताएको सुन्दा सामान्य मानिसहरूलाई के शङ्का हुन्छ भने यो कुनै व्यक्तिले घर बनाई प्रवेश गरे झैं हो। जसरी घर बनाउँदा मान्छे छुट्टै अनि बन्ने घर छुट्टै हुन्छ, अनि इट्टा, सिमेन्ट, बालुवा आदिद्वारा घर बनाइसकेपछि मान्छे त्यसभित्र पस्दछ, त्यसै गरी परमात्मा पनि संसारभन्दा पृथक् हुनुहुन्छ, प्रकृतिका उपादानहरूद्वारा यसलाई रचना गरी उहाँ यहाँभित्र प्रवेश गर्नुहुन्छ भन्ने सामान्य धारणा रहेको हुन्छ। तर उपनिषद् सिद्धान्त अनुसार यो बुझाइ ठिक छैन। सृष्टि उत्पन्न गर्नुभन्दा अघि परमात्मा बाहेक कुनै दोस्रो वस्तु थिएन, जसको प्रयोग गरी परमात्माद्वारा संसारको रचना गरिएको होस्। **सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम्**

(छान्दोग्योपनिषद् ६।२।१) अर्थात् हे बाबु ! सृष्टि हुनुभन्दा पहिले एउटै सत्य तत्त्व मात्र थियो, त्यो अद्वितीय थियो। जहाँ आफूभन्दा दोस्रो वस्तु नै सम्भव छैन, त्यहाँ जगत् बनाउनुको के अर्थ हुन सक्छ र ? एउटै परमात्माले जगत् बनाउनुको मतलब उहाँ स्वयं जगत्को रूपमा देखिनु हो। जो स्वयं जगत्को रूपमा देखिएको छ, त्यो वस्तु जगत्भित्र पस्न कसरी सक्दछ ? फेरि कहीं पस्नका लागि त त्यो ठाउँभन्दा आफू सानो हुनुपर्दछ, के परमात्मा पनि जगत्भन्दा सानो भएकाले घरभित्र मान्छे प्रवेश गरे जैं यहाँ पस्नुभएको हो ? यसो पनि होइन। यहाँ जगत्भित्र पस्नु भन्नुको तात्पर्य पनि कार्य जगत्को रूपमा प्रकट हुनु नै हो। वेदान्त शास्त्रमा जगत् र ब्रह्मको कार्यकारणभाव देखाउँदा माटो र घैंटोको दृष्टान्त दिने गरिन्छ। जसरी घैंटो उत्पन्न हुनुअघि केवल माटो मात्र रहेको हुन्छ, घैंटो बन्दा पनि त्यहाँ घैंटोको रूपमा केवल माटो मात्र हुन्छ। यसैलाई घैंटोमा माटो पसेको भन्न सकिन्छ। त्यसै गरी जगत् उत्पन्न हुनुअघि एक मात्र रहेको ब्रह्मतत्त्व आफैं नै जगत्को रूपमा बनेकाले त्यसलाई जगत्भित्र पसेको भन्न सकिन्छ। उपादान कारणलाई छाडी कार्यको अस्तित्व हुन नसक्नु नै त्यो कारण कार्यभित्र प्रवेश गर्नु हो। यसैलाई बुझाउन श्लोकमा **हेतुतया** भन्ने पद आएको छ।

वेदान्तमा जस्तै साङ्ख्य सिद्धान्तमा पनि कार्य उत्पन्न हुनुभन्दा अघि त्यो कार्य वस्तु आफ्नो कारणमा रहेको हुन्छ भन्ने मानिन्छ। साङ्ख्य मतमा जगत्को उपादान कारण प्रकृति हो, त्यो कार्यको रूपमा परिणत हुन्छ। आफूले रचना गरेका कार्य शरीर आदिभित्र कारण रूपले पस्ने भन्दा यस श्लोकमा पनि साङ्ख्यसिद्धान्त अनुसार जगत्को उत्पत्तिलाई बताइएको हो कि भन्ने शङ्का हुन सक्छ, तर श्लोकमा आएको **हेतुतया विशन्** भन्ने पदले त्यो मतलाई खण्डन गरेको छ। किनभने साङ्ख्यसिद्धान्त अनुसार कारणमा कार्य अव्यक्त रूपले रहन सम्भव छ, तर कार्यमा कारण प्रवेश गर्न सम्भव छैन। जसरी दुधमा अव्यक्त रूपमा दही विद्यमान छ, तर दही बनिसकेपछि त्यहाँबाट दुध निकाल्न नसकिने हुनाले त्यहाँ दुध छैन भन्नुपर्दछ, त्यसै गरी प्रकृति पनि जगत्को रूपमा परिणत भइसकेको छ र अब ऊ आफ्नो कारण रूपमा त्यहाँ छैन। कार्यभित्र पनि कारणलाई जस्ताको तस्तै रहिरहेको मान्न वेदान्तसम्मत विवर्तवादलाई नै अँगाल्नुपर्दछ। विवर्त भनेको कारणले आफ्नो रूपलाई नछाडी कार्यको रूपमा देखिनु हो। श्लोकमा आएको **इव** यो पदले पनि वास्तवमा कार्यभित्र कारण नपसेको, तर पनि कार्यको रूपमा पनि आफैं नै रहेको भन्ने तथ्यलाई सङ्केत गरेको छ। परमात्मा जगत्भित्र पस्नु मुख्य प्रवेश होइन, अपि तु नाममात्रको प्रवेश हो भन्ने अर्थ यसले बुझाएको छ। यसरी आफैंले रचना गरेका कार्यहरूभित्र उपादान कारणरूपले परमात्मा प्रविष्ट हुनुहुन्छ भन्ने तात्पर्य हुन्छ।

परमात्मा जगत्भित्र जीवरूपले पनि प्रवेश गर्नुभएको छ। परमात्मा जगत्को रूपमा बन्दा पनि त्यहाँ व्यवहार आदि केही भएन। जगत्को व्यवहार चलाउन फेरि परमात्माले त्यहाँ चेतनको रूपमा प्रवेश गर्नुपर्ने आवश्यकता भयो। यही देखेर परमात्मा जीवचैतन्यको रूपमा यहाँ प्रवेश गर्नुभयो। **अनेन जीवेनात्मनानुप्रविश्य नामरूपे व्याकरणवाणि** अर्थात् म यो जीवात्माको रूपमा जगत्भित्र पसी नाम र रूपलाई विभक्त गर्नेछु भन्ने परमात्माको सङ्कल्प छान्दोग्योपनिषद् (६।३।२)मा बताइएको छ। यहाँ फेरि के शङ्का हुन्छ भने परमात्मा जीवरूपले शरीरहरूभित्र प्रवेश

गर्नुको तात्पर्य के हो ? परमात्माले आफूभन्दा अलग्गै जीव भन्ने छुट्टै रूप बनाई त्यहाँभित्र प्रवेश गर्नुभएको हो कि ? तर उपनिषद्सिद्धान्त अनुसार जीव परमात्माभन्दा भिन्न अलग अस्तित्व होइन। यसलाई दृष्टान्तको रूपमा बताउने क्रममा घटाकाश र महाकाशको दृष्टान्त दिइन्छ। आकाश व्यापक छ, त्यसको जति भागमा घट उत्पन्न हुन्छ, त्यति भागको नाम घटाकाश हो। घटाकाश वास्तवमा महाकाश नै हो र त्यो घैँटोभित्र प्रवेश गरेको पनि होइन, त्यो त घैँटोको पनि अधिष्ठान हो, तर पनि घटसँगै घटाकाश पनि उत्पन्न भएको अनि घटभित्र घटाकाश रहेको व्यवहार हुन्छ। यसै गरी सर्वव्यापक आत्माको जति भागमा अन्तःकरण उत्पन्न हुन्छ, त्यति भागको नाम जीव पर्न जान्छ। अन्तःकरणावच्छिन्न अर्थात् अन्तःकरणको घेरामा परेको त्यही चैतन्यको नाम जीव हुन जान्छ। यसैलाई माण्डूक्यकारिका (३।३)मा **आत्मा ह्याकाशवज्जीवैर्घटाकाशैरिवोदितः** अर्थात् आत्माको जीवरूपमा उत्पत्ति भनेको घटद्वारा घटाकाशहरू उत्पन्न भए भन्नु झैँ हो भनिएको छ। शरीर, इन्द्रिय, अन्तःकरण आदि उपाधिहरूको उत्पत्ति भइसकेपछि सर्वव्यापक आत्मा स्वतः ती उपाधिहरूभित्र पनि हुने नै भयो। आत्मा ती उपाधिहरूको पनि **हेतुतया** अर्थात् अधिष्ठानको रूपले पहिले नै विद्यमान थियो, त्यसैले ती उपाधिहरूभित्र प्रवेश हुने कुरा भएन। त्यसैले श्लोकमा **विशन् इव** अर्थात् प्रवेश गरे झैँ भनिएको छ। एउटै आत्मा नै अनेक जीवहरूको रूपमा देखिएको हो भन्ने उपनिषद्को सिद्धान्तलाई यसले पुष्टि गरेको छ।

आत्मा एउटै भए जीवहरूमा उचनीच भाव, अनि कोही सुखी, कोही दुःखी किन भएको छ त ? भन्ने शङ्का हुन्छ। यसको उत्तर पनि उपाधिभेदलाई लिएर दिने गरिन्छ। आत्मा एउटै भए पनि त्यसको उपाधि अन्तःकरण भिन्न-भिन्न भएकाले त्यही अन्तःकरण अनुसार प्राणीहरूको उचनीचभाव देखिएको हो। जसरी एउटै आकाश सबै घैँटोभित्र छिरी अनेक घटाकाश झैँ भएको छ, तर जुन घैँटो उपाधिभित्र धुवाँ, धुलो आदि लागेको छ, त्यसको सम्बन्ध त्यही घटाकाशसँग मात्र हुन्छ, अरू घटाकाशसँग होइन। यही दृष्टान्त दिँदै गौडपादाचार्यले **यथैकस्मिन् घटाकाशे रजोधूमादिभिर्युते, न सर्वे संप्रयुज्यन्ते तद्वज्जीवाः सुखादिभिः** (माण्डूक्यकारिका ३।५) अर्थात् यसै गरी जीवहरू पनि सुख-दुःखले युक्त हुन्छन् भनी बताउनुभएको छ। जुन अन्तःकरण उपाधिमा सुख-दुःख आदि उत्पन्न हुन्छन्, त्यहाँबाट त्यही उपाधिले युक्त आत्मा मात्र छोइन्छ, अरू छोइँदैनन्। एउटाको सुख-दुःख, दोष आदिले अर्को जीवलाई त छुँदैन भने निरुपाधिक परमात्मामा शरीर आदि उपाधिको सम्बन्ध कसरी हुन सक्छ र ? यसरी आत्मामा भिन्नता नभए पनि उपाधिमा भिन्नता भएकाले सुखदुःख व्यवस्था भएको छ। यही कारणले अन्तःकरण, उचनीच संस्कार आदिको आधारमा संसारका प्राणीहरूमध्ये कुनै जुनी उच्च र कुनै जुनी नीच भन्ने व्यवस्था भएको हो। यसैलाई श्लोकमा **तरतमतः चकास्मि** अर्थात् श्रेष्ठतर, श्रेष्ठतम आदि रूपमा प्रकट हुनुहुन्छ भनी बताइएको छ। **स्वकृतानुकृतिः** अर्थात् आफैँले रचना गरेका उपाधिहरूको अनुकरणका कारणले नै **अनलवत्** अर्थात् आगो झैँ परमात्मामा अनेक भेद देखिएको हो भनिएको छ। जसरी एउटै अग्नितत्त्वलाई दाउरारूपी उपाधिको कारण धेरै दाउरा हुँदा ठुलो आगो, अनि कम दाउरा हुँदा सानो आगो भनिन्छ। त्यसै गरी अन्तःकरणका एवं त्यसका संस्कारको श्रेष्ठताले

गर्दा मनुष्य आदि जन्म श्रेष्ठ अनि पशु आदि जन्म निच भएको हो। यी सबै उपाधिहरू वितथ अर्थात् मिथ्या हुन्, तर ती सबैभित्र परमात्माको स्वरूप भने **अवितथं** अर्थात् सत्य एवं समान छ। यसलाई प्राप्त गर्न योग्य व्यक्तिहरूको चर्चा गर्दै श्रुतिहरू भन्दछन्— **विरजधियः** अर्थात् जसको बुद्धि निर्मल छ, त्यस्ताले **अन्वयन्ति** अर्थात् अनुसन्धानपूर्वक सबैभित्र रहेका परमात्मालाई पाउँछन्। उपनिषद्मा **विरजं ब्रह्म निष्कलम्** अर्थात् ब्रह्म रजले रहित एवं निष्कल छ भनिएको छ। यहाँ रज भनेर माया एवं मायाको कार्य सबैलाई लिनुपर्दछ। त्यस्तो ब्रह्मलाई पाउन व्यक्तिको बुद्धि पनि **विरज** अर्थात् अज्ञान, दुर्वासना अनि तीनै गुणहरूको मलले रहित हुनु आवश्यक छ। **अभिविपण्यवः** यो पदको अर्थ सबै व्यवहार त्यागेका भन्ने हुन्छ। अतः चित्त शुद्ध भई सबै सांसारिक व्यवहार त्यागेका व्यक्तिहरूले मात्र एकरस आत्माको साक्षात्कार गर्दछन्।

यहाँ **विचित्रयोनिषु** भन्ने पदद्वारा भगवान्का कच्छप आदि अवतारलाई पनि लिन सकिन्छ। सबैका हेतुभूत एउटै परमात्मा भए पनि उहाँ ती सबैमा प्रवेश गरी **तरतमतः** अर्थात् श्रेष्ठताको तारतम्यले प्रकाशित हुनुहुन्छ। अनेक अवतारमध्ये कुन अवतारमा कति कला, अनि कुन अवतारमा कति पूर्ण भन्ने शास्त्रहरूमा बताइएको छ। उहाँले राम आदि अवतारको क्रममा **स्वकृतं** अर्थात् आफैँले बनाएको सत्यपालन आदिको मर्यादालाई पनि **अनुकृतिः** अर्थात् अनुकरण गर्नुभएको छ। यहाँ **विचित्रयोनिषु** भनेर ब्रह्मा, विष्णु र महेश्वर आदिलाई पनि लिन सकिन्छ। यी तीनओटै रूप एउटै परमात्म तत्त्वबाट उत्पन्न भएका हुन् र अरू देवताका रूपहरूमध्ये श्रेष्ठ पनि छन्। यद्यपि सबै देवयोनि श्रेष्ठ मानिन्छन्, तर विशेषतः गणेश, देवी, सूर्य, विष्णु र शिव यी पाँच देवता भने अझै श्रेष्ठतर र श्रेष्ठतम मानिन्छन्। यहाँ **तरतरमतः** भन्ने पदले यही अर्थ बुझाएको छ। एउटै परमात्मामा श्रेष्ठतर र श्रेष्ठतम भाव कसरी भयो, यसको उत्तरमा वंशीधर लेख्नुहुन्छ— उपासकका लागि आ-आफ्ना उपास्य स्वरूप श्रेष्ठतम अनि अरू स्वरूपहरू चाहिँ श्रेष्ठतर हुन्छन्। यी सबै भेदहरू **वितथ** अर्थात् मिथ्या हुन्। उपासकहरूको बुद्धि अनुसार नै रूपरहित ब्रह्ममा अनेक रूपको कल्पना भएको हो, वास्तवमा त यी सबै रूप औपाधिक भएकाले मिथ्या हुन्, परमात्मा निरुपाधिक एवं अद्वितीय हुनुहुन्छ भन्ने वेदान्तको सिद्धान्त हो। यदि ती-ती देवताहरूलाई छुट्टाछुट्टै सत्य मान्ने हो भने **परस्परविरोधात् शास्त्राप्रामाण्यम्** अर्थात् शास्त्रहरूमा परस्पर विरोध परी शास्त्र नै अप्रमाण हुने दोष आइपर्दछ। शिव, स्कन्द आदि पुराणहरूमा शिवलाई नै परमतत्त्व अनि ब्रह्मा, विष्णु आदिलाई तिनका अङ्ग मानिएको छ, त्यसै गरी भागवत, विष्णु आदि पुराणहरूमा विष्णु वा कृष्णलाई अनि देवीपुराण आदिमा देवीलाई नै परमतत्त्वको रूपमा बताइएको छ। यदि ती सबै रूपभेद यथार्थ हुन्थे त शास्त्रको तात्पर्यमा परस्पर विरोध पर्दथ्यो। अनि कहिले कुन, कहिले कुनलाई श्रेष्ठ बताउने शास्त्र नै अप्रामाणिक भएको ठहर्दथ्यो। तर एउटै परमात्माका यी सबै अनेक रूप भएकाले सबैलाई परमात्मरूपले सर्वश्रेष्ठ बताउनु अनि देवताको रूपले चाहिँ उहाँको अङ्ग भनी बताउनु सबै मिल्न आउँछ। श्लोकमा आएको **तव धाम समं** भन्ने पदावलीले सबै उपास्य रूपहरूभित्र परमात्माको स्वरूप समान छ भनी यही तात्पर्यलाई बताइएको छ।

श्रीकृष्णलीलाको रूपमा अर्थ्याउँदा चाहिँ यो श्लोकले भगवान्ले गाई, बाच्छा आदि सबैको रूपलाई धारण गर्नुभएको लीलातर्फ सङ्केत गरेको छ। ब्रह्माजीले गाई, बाच्छा, श्रीकृष्णका

गोठाला साथीहरू आदिको हरण गरेपछि भगवान् आफैँले ती सबैको सृष्टि गर्नुभयो। त्यो सृष्टिमा गाई, बाच्छा, लौरी, दाम्लो, गोठाला, तिनका कपडा, खाजा, शीलस्वभाव आदि विचित्र भेद-उपभेद आदि थिए। जड चेतनमय सम्पूर्ण पदार्थको रूपमा परमात्मा रूपान्तरित हुनुभयो। यसरी मानौँ ती सबै पदार्थहरूभित्र पसे झैँ हुनुभयो, तर भगवान् श्रीकृष्ण तिनीहरूको रूपमा मात्र होइन, आफ्नै मूल स्वरूपमा पनि हुनुहुन्थ्यो। यसैले यहाँ भगवान्लाई ती प्राणीभित्र प्रवेश गरेको नभनी **इव** अर्थात् ती भन्दा पृथक् हुनुहुन्थ्यो भन्ने तात्पर्य निस्कन्छ। ती अनेक पदार्थहरूको रूपमा बन्दा उहाँमा श्रेष्ठताको तारतम्य देखियो। गोठाला, गाई आदि रूपमा बन्नु चेतन सृष्टि भएकाले श्रेष्ठतम थियो भने लौरो, दाम्लो, कपडा आदि जड सृष्टि भएकाले तीभन्दा नीच थिए। उहाँ मायाद्वारा ती-ती रूपमा हुनुभएको थियो कि ? भन्ने शङ्कामा भनिन्छ— **स्वकृतानुकृतिः** अर्थात् यो मायिक सृष्टि नभई चिद्रूप परमात्माको स्वयंको सृष्टि थियो र उहाँले त्यसकै अनुवर्तन गर्नुभएको थियो। श्लोकमा आएको **वितथ** शब्दको अर्थ हुन्छ— **विगतः तथा मायादेहभावादिः येषां** अर्थात् जसमा अरू प्राणीहरूमा हुने जस्तो मायिक देहभाव छैन। अनेक प्राणीको रूपमा स्वयं भगवान् हुनुभएकाले उनीहरूमा देहात्मभाव, अज्ञान आदि केही पनि थिएनन्, तिनले त अनेक प्राणीहरूको आकारमा रहँदा पनि आफूलाई परमात्मरूपमा नै बुझ्दथे। यसैलाई श्रीशुकदेवले भागवत (१०।१३।२५)मा **हरेस्तोकता मायया विना** अर्थात् श्रीहरि भगवान् गोपबालक बन्नुभयो, तर उहाँमा माया-अज्ञान थिएन भनी बताउनुभएको छ। ती सबै नाम मात्रका बालक थिए, वास्तवमा त ती सबै श्रीकृष्ण नै थिए भन्ने यसको तात्पर्य हो। श्लोकमा आएको **तव धाम सत्यं** अर्थात् ती सबैमा हजुरको स्वरूप बराबर थियो भन्ने पदावलीले यही अर्थ बुझाएको छ। यहाँ **अवितथं**को अर्थ ती-ती आकृतिहरूद्वारा पनि भगवान्को भगवत्ता छोपिएको थिएन भन्ने गर्नुपर्दछ। यस्ता परमात्मालाई **अभिविपण्यवः** अर्थात् परमभक्तहरूले जान्दछन्। **पण व्यवहारे स्तुतौ च** अर्थात् व्यवहार र स्तुतिको अर्थ भएको **पण** धातुबाट **अभि** र **वि** उपसर्ग लागेर प्रथमा विभक्तिको बहुवचनमा **अभिविपण्यवः** यो पद बन्दछ। पण धातुको व्यवहार भन्ने अर्थ लिँदा अभितः **विगतः पण्यः व्यवहारः येषां ते** अर्थात् जसले संसार व्यवहारलाई सम्पूर्ण रूपमा छाडिदिएका छन् भन्ने अर्थ लाग्छ। अनि स्तुति अर्थ लिँदा चाहिँ **अभितः विशेषेण पणयन्ति स्तुवन्ति** अर्थात् पूर्णरूपले र विशेष भावले जसले भगवान्को स्तुति गर्दछन् भन्ने अर्थ लाग्दछ। यसरी सारा घरव्यवहार त्यागेर परमात्माको स्तुति गाउने विशेष भक्तहरूले सर्वत्र विद्यमान एकरस परमात्मालाई जान्दछन्।

यसप्रकार यस श्लोकमा परमात्मामा वास्तविक रूपमा शरीर आदि उपाधिहरूको सम्बन्ध नभएको अनि उहाँ चर-अचर सम्पूर्ण प्राणीहरूको भित्र अन्तर्यामी आत्मरूपले अनुस्यूत हुनुभएको बताइएको छ। अन्तःकरण उपाधिको कारणले नै जीव बनेको हो, त्यसैले त्यो सुख, दुःख आदि औपाधिक दोषहरूद्वारा छोइन्छ, परमात्मा त महाकाशसमान निरुपाधिक हुनुभएकाले उहाँलाई शरीरदोषले छुँदैन, अनि सबै जीवहरू परमात्मामा नै कल्पित भएकाले ती परमात्माभन्दा अलग पनि हुन सक्दैनन् भन्ने बुझ्नुपर्दछ। यस श्लोकको भावलाई संक्षिप्त रूपमा बताउँदै श्रीधर स्वामी लेख्नुहुन्छ—

**स्वनिर्मितेषु कार्येषु तारतम्यविवर्जितम्।**

**सर्वानुस्यूतसन्मात्रं भगवन्तं भजामहे ।।**

अर्थात् आफैँद्वारा रचना गरिएका कार्यहरूमा सत्तारूपले अनुस्यूत अनि शरीर आदिको तारतम्य हुँदा पनि आफू चाहिँ त्यसको उचनीच भावले रहित हुनुहुने भगवान्को भजन गर्दछौँ।

**स्वकृतपुरेष्वमीष्वबहिरन्तरसंवरणं**
**तव पुरुषं वदन्त्यखिलशक्तिधृतोंऽशकृतम् ।**
**इति नृगतिं विविच्य कवयो निगमावपनं**
**भवत उपासतेऽङ्घ्रिमभवं भुवि विश्वसिताः ॥ २० ॥**

**पदार्थ—**
**अमीषु** = यी
**स्वकृतपुरेषु** = आफूबाट रचिएका शरीरहरूमा
**अबहिरन्तरसंवरणं** = वस्तुतः बाहिरी, भित्री आवरणले रहित भएको
**पुरुषं** = जीवलाई
**अखिलशक्तिधृतः** = सम्पूर्ण शक्तिहरूले युक्त
**तव** = हजुरकै
**अंशकृतं** = अंश अथवा कार्य भनेर पनि
**वदन्ति** = कोही बताउँछन्
**इति** = यसप्रकार
**नृगतिं** = जीवको वास्तविक परमात्मरूपतालाई
**विविच्य** = विचार गरी
**विश्वसिताः** = निश्चित बुद्धि भएका
**कवयः** = विवेकीहरूले
**भुवि** = यस संसारमा
**निगमावपनं** = वेदमा बताइएका कर्महरूको फल दिने एक मात्र आश्रय
**भवतः** = हजुरकै
**अभवं** = अभयरूप
**अङ्घ्रिं** = चरणकमललाई
**उपासते** = उपासना गर्दछन्

**वाक्यार्थ—** आ-आफ्ना कर्महरूद्वारा आर्जित मनुष्य आदि शरीरहरूमा बाहिर र भित्रको आवरणले शून्य भएको भोक्ताको रूपमा विद्यमान जीवात्मालाई सम्पूर्ण शक्तिहरूको आश्रय भएका हजुरको अंश हो भनी भन्दछन्। जीवात्माहरूको यस्तो स्वरूपलाई विचार गरेका विवेकी मुमुक्षुहरूले यस मर्त्यलोकमा वेदमा बताइएका कर्महरूको फल दिने एक मात्र आश्रय भएको संसारनाशक हजुरको चरणकमलको उपासना गर्ने गर्दछन्।

**विवरण—** संसारका पदार्थहरूमध्ये यज्ञीय वस्तुहरू द्रव्यपरक, जीव यजमानपरक अनि ईश्वर चाहिँ देवतापरक हुन्छन्। यस श्लोकमा जीवात्मालाई भगवान्को अंश भनी बताइएको छ। श्रीधर स्वामी लेख्नुहुन्छ— **कर्मभिः संसरतो जीवस्यापि भगवद्भावं लक्षणया बोधयन्त्यः** अर्थात् कर्महरूको कारणले संसारको चक्रमा परिरहेका जीवको पनि भगवद्भावलाई बुझाउने लक्षणापरक श्रुतिहरूले गरेको स्तुति हो यो। यसमा श्रीधर स्वामीले **यश्चायं पुरुषे यश्चासौ आदित्ये स एकः** अर्थात् जो यो पुरुषभित्र छ, अनि जो आदित्यमण्डलमा रहेको छ, त्यो एउटै हो भन्ने श्रुतिको उल्लेख गर्नुभएको छ। मीमांसा दर्शनमा ईश्वरको सत्ता मानिँदैन। जसअनुसार कर्महरूको कारणले नै जगत्को व्यवस्था चल्ने भएकाले ईश्वर भनेको कर्म नै हो। अनि ब्रह्मलाई बताउने जति पनि श्रुतिहरू छन्, तिनीहरूको तात्पर्य यज्ञानुष्ठान र यजमानको स्वरूपलाई

बताउनुमा रहेको छ, वेदको सम्पूर्ण भाग क्रियापरक हुने भएकाले जुन भाग क्रियापरक छैन, त्यस भागलाई पनि क्रियाको अङ्गकै रूपमा अर्थ्याउनुपर्दछ नत्र वेदमा नै अप्रामाण्य आउँछ भन्ने मीमांसासिद्धान्त रहेको छ। भनिएको पनि छ— **आम्नायस्य क्रियार्थत्वादा-नर्थक्यमतदर्थानां तस्मादनित्यमुच्यते** (जैमिनिसूत्र २।१) अर्थात् वेद क्रियापरक भएकाले जुन क्रियापरक छैन, त्यो अर्थहीन हुन्छ। मीमांसाशास्त्रमा वेदान्तभाग वेदको ऊषर भाग अर्थात् केही कर्मफल नफल्ने भाग हो समेत भनिएको छ । यसरी आत्मस्वरूपलाई प्रतिपादन गर्ने सम्पूर्ण मन्त्रहरूको तात्पर्य यजमानको स्वरूप बताउनुमा नै छ भन्ने मीमांसाशास्त्रीहरूको भनाइ छ। यद्यपि धर्मतत्त्वको ठिक-ठिक निर्णय गर्न मीमांसाको अनिवार्यता रहन्छ, तर यसको मुख्य विषय धर्मप्रतिपादन भएकाले यसलाई त्यति अर्थमा मात्र प्रामाणिक मान्न सकिन्छ। आत्मा या ब्रह्मको विषयमा विचार गर्ने शास्त्र वेदान्त भएकाले यस विषयमा मीमांसाको नभई वेदान्तकै प्रामाणिकता स्वतःसिद्ध छ। त्यसैले उपनिषद्मा सर्वशक्तिसम्पन्न परमात्मा एवं उहाँको आराधनाको विषयमा बताइएको छ। **यस्य देवे परा भक्तिः** (श्वेताश्वतरोपनिषद् ६।२३) अर्थात् जो व्यक्तिको परमात्मामा परम भक्ति छ, त्यही व्यक्ति ज्ञानको अधिकारी हुन्छ। यिनै ईश्वरभक्ति सम्बन्धी श्रुतिहरूले आफ्नो भाव प्रस्तुत श्लोकमा बताएका छन्।

**स्वकृतपरेषु** अर्थात् आफैँले रचना गरेका शरीरहरूमा परमात्मा जीवरूपले पस्नुभएको छ। नामरूपको विभाग गरी जगत्का पदार्थहरूको छुट्टाछुट्टै भोग गर्न भोक्तारूपले अन्तःकरण, शरीर उपाधिमा पस्नुभएका परमात्मालाई नै जीव भनिन्छ। कठोपनिषद् (१।३।४)मा भोक्ताको विषयमा भनिएको छ— **आत्मेन्द्रियमनोयुक्तं भोक्तेत्याहुर्मनीषिणः** अर्थात् आत्मा, इन्द्रिय र मन मिलेर भोक्ता जीवभाव बन्दछ। यसरी मन आदि उपाधिहरूमा कारण जीवभाव खडा हुन्छ भन्ने उपनिषद्को सिद्धान्त हो। यहाँ जीवलाई सर्वशक्तिशाली परमात्माको अंश भनिएको छ। यसको अर्थ गर्दै श्रीधर स्वामी लेख्नुहुन्छ— **अंश इव अंशः** अर्थात् जीव अंश जस्तै अंश मात्र हो, वास्तवमा नै अंश चाहिँ होइन। कुनै दर्शनहरूमा जीवलाई परमात्माको अंश भन्ने मानिन्छ। केही वैष्णव दर्शनका आचार्यहरूले पनि जीवले परमात्माको भक्ति अनिवार्य गर्नुपर्दछ भन्ने कुरा प्रमाणतः सिद्ध गर्नका लागि यो मतको प्रतिपादन गर्नुभएको पाइन्छ। जीव परमात्माको अंश हो, अनि परमात्मा सम्पूर्ण जीवहरूका अंशी हुनुहुन्छ, त्यसैले अंश (जीव)ले आफ्ना अंशी (परमात्मा)को भजन गर्नुपर्दछ भनेर यसको प्रतिपादन गरिन्छ। तर भक्तिको सिद्धिका लागि जीवलाई परमात्माको अंश नै मान्नुपर्ने अनिवार्यता देखिँदैन। त्यसैले वेदान्तमा जीव र ईश्वर वस्तुतः एउटै चैतन्य भए तापनि उपाधिको घटबढका कारण यिनीहरू भिन्न भएकाले अल्पज्ञ जीवले आफ्नो बन्धनलाई नष्ट गर्न सर्वज्ञ एवं सर्वशक्तिमान् परमात्माको आराधना गर्नुपर्दछ भन्ने बताइन्छ। आफूमा स्वतः नै प्रेम हुने हुँदा आफ्नै स्वरूपभूत ईश्वरसँग निरतिशय प्रेम गर्न पनि सम्भव छ। त्यसैले यहाँ अंशको अर्थ **अंश इव अंशः** भनी गरिएको छ।

आत्मतत्त्व एक मात्र र अद्वितीय छ— **एकमेवाद्वितीयम्** (छान्दोग्योपनिषद् ६।२।१) यही आत्मतत्त्व शुद्ध सत्त्वात्मिका मायाले युक्त हुँदा या त्यसमा प्रतिबिम्बित हुँदा ईश्वररूप बन्दछ। शुद्ध सत्त्वमय उपाधि भएकाले ईश्वरमा नित्य ज्ञान र अखण्डित ऐश्वर्य छ। जीवहरूको अज्ञानमय

दृष्टिमा ब्रह्म र ईश्वर फरक झैँ देखिए पनि यी वास्तवमा एउटै हुन् र ईश्वरले आफूलाई ब्रह्म भनेर नै जान्नुहुन्छ। यसरी सत्त्वगुणका कारणले ईश्वर सर्वसमर्थ, सर्वज्ञ एवं जगत्कर्ता हुनुहुन्छ। रजोगुणी अविद्या या अन्तःकरणमा प्रतिबिम्बित हुँदा भने त्यही आत्मतत्त्व जीव बन्दछ। यो जीव रजोगुणी उपाधिले युक्त भएको हुँदा अल्पज्ञ छ, त्यसको आत्मरूपता ढाकिएको छ र यो संसारको बन्धनमा परी दुःखी भइरहेको छ। यसले आफ्ना सबै दुःख हटाउन आफ्नै आत्मस्वरूप परम मित्र एवं एक मात्र हितैषी उनै ईश्वरको आराधना गर्दछ। यसरी जीव र ईश्वरको सम्बन्धलाई उपनिषद्‌मा एउटै रुखमा बस्ने खाने चरा र नखाने चरा भनी बताइएको छ– **तयोरन्यः पिप्पलं स्वाद्वत्त्यनश्नन्नन्यो अभिचाकशीति** (मुण्डकोपनिषद् ३।१।१) अर्थात् ती दुईमध्ये एउटा चरो पिपल (कर्मफल)लाई मिठो मानी खान्छ भने अर्को चाहिँ नखाईकन हेरिरहन्छ। परमात्मा जीवका **अविज्ञातसखा** अर्थात् बिर्सिएका साथी हुन्। संसारभोगमा आसक्त भई जीवले आफ्ना नित्य हितैषीलाई चटक्कै बिर्सिएको छ। तिनै ईश्वरले जीवहरूलाई मोहनिद्राबाट ब्युँझाई आफ्नो स्वरूपमा प्रतिष्ठित गर्न उपदेश दिँदै भन्नुभएको छ– **अहं भवान्न चान्यस्त्वं त्वमेवाहं विचक्ष्व भो** (भागवत ४।२८।६२) अर्थात् म तिमी हुँ र तिमी पनि मभन्दा भिन्न होइनौ, म नै हौ। यसरी जीव र परमात्माको स्पष्ट शब्दमा एकात्मकता देखाइएको छ। यसैलाई उपनिषद्‌का **तत्त्वमसि** (छान्दोग्योपनिषद् ६।८।७) जस्ता महावाक्यहरूले बताएका छन्।

फेरि शङ्का हुन्छ, शास्त्रमा त जीव परमात्माको अंश हो भनी स्पष्टतया प्रतिपादन गर्ने वाक्यहरू पनि रहेका छन् नि त, यसको उत्तर हो, शास्त्रहरूमा जीवलाई परमात्माको अंश भन्नुको तात्पर्य रहस्यमय छ। यदि स्वरूपतः नै जीव परमात्माको अंश हुने हो भने परमात्मा अनेक जीवहरूको अंश मिलेर बन्नुभएको होला भन्ने शङ्का आउन सक्छ। जसरी शरीरको एउटा अङ्ग बिग्रँदा या नष्ट हुँदा सारा शरीरलाई कष्ट हुन्छ, त्यसै गरी जीवात्माहरू दुःखी हुँदा त्यसको दोषले अंशी परमात्मालाई पनि छुन सक्छ। यदि परमात्मा जीवहरू जस्तै सुख, दुःख आदिले युक्त हुनुभयो भने उहाँ पनि जीव समान भइहाल्नुभयो, पूज्य हुनुभएन। अंश भन्ने बित्तिकै टुक्रा या केही भाग भन्ने अर्थ लाग्छ। यदि परमात्मा टुक्रिने या भाग लाग्ने भयो भने उहाँको अखण्डता र नित्यतामा पनि हानि पुग्न जान्छ। यसरी अनेक दोषहरू आउने हुँदा जीवलाई ईश्वरको अंश मान्नु उचित देखिँदैन। उसो भए **ममैवांशो जीवलोके जीवभूतः सनातनः** (श्रीमद्‌भगवद्‌गीता १५।७) अर्थात् जीवलोकमा मेरो अंश नै जीव भएर सनातन रूपमा रहेको छ। अनि ब्रह्मसूत्र (२।३।४३)मा आएको **अंशो नानाव्यपदेशात्** आदि शास्त्रवचनहरूको अर्थ के हो त ? यसको उत्तरमा भनिन्छ– यिनीहरूले जीवचैतन्यलाई नभई यसको उपाधि अन्तःकरणलाई लिई यस्तो कुरा बताएका हुन्। चैतन्य त एक मात्र भएकाले त्यसमा जीव-ईश्वर आदिको भाग लाग्नै सक्दैन। यदि भाग लग्यो भने त्यो परम अस्तित्व हुनै सक्दैन। यसैले जीव अंश होइन। यसको उपाधि भएको अन्तःकरण भने परिच्छिन्न एवं मायाको कार्य भएकाले पक्कै पनि अंश हो। शरीर, इन्द्रिय, अन्तःकरण आदि परिच्छिन्न एवं अंशभूत वस्तु भएका हुनाले यिनको उपाधिमा परेको आत्मालाई पनि परमात्माको अंश भनिएको मात्र हो। यिनै उपाधिका कारणले जीवचैतन्यले केवल सानो शरीरमा मात्र आत्मबुद्धि गरेकाले त्यसलाई पनि अंश भनिएको हो। यसरी मायाको कार्य भएकाले त्यसको

अंशभूत अन्तःकरणमा चैतन्यको प्रतिबिम्ब पर्दा खडा भएको जीवात्मालाई पनि परमात्माको अंश भनी बताइएको छ। यो अंश भनेको घटभित्र रहेको घटाकाशलाई महाकाशको अंश अनि ऐनाभित्र परेको मुखको प्रतिबिम्बलाई बिम्बको अंश भने झैं मात्र हो। जसरी हरेक ऐनापिच्छे सूर्यको प्रतिबिम्ब पर्दछ र ऐनाहरूमा करोडौं सूर्यहरू रहेका हुन्छन्, ती सबै सूर्यहरू आकाशीय सूर्यका अंश हुन् कि होइनन्, यदि अंश हुन् भने ऐना फुटाएपछि ती अंशहरू सबै अंशीमा मिल्न गएको देखिनुपर्ने, यदि होइनन् भने संसारमा करोडौं सूर्य छन् भनिनुपर्ने, तर यस्तो भनिदैंन, अपि तु सूर्य एउटै छ र त्यसको आभास मात्र ऐना, पोखरी आदिमा पर्दछ भनिन्छ। ठिक यसै गरी एउटै आत्माको प्रतिबिम्ब अनेकौं अन्तःकरण उपाधिमा परेको हुनाले एउटै परमात्मा अनेक जीव झैं देखिएको मात्र हो। वास्तवमा ऊ प्रतिबिम्बरूपले मिथ्या अनि बिम्बरूपले चाहिँ परमात्मा नै हो। यसैले यहाँ जीवलाई परमात्माको ठ्याक्कै अंश या अङ्ग नभई अंश झैं अंश भनिएको हो।

यस श्लोकमा आएको **अखिलशक्तिधृतः** यो पदले सर्वशक्तिमान् परमात्मालाई बुझाएको छ। यसले परमात्माको शक्ति पूर्ण रहेको र जीव चाहिँ अल्पशक्तिमान् भएकाले यी दुईको अंश–अंशीभाव केवल मायाशक्ति र अन्तःकरणलाई लिएर भएको हो भन्ने सूचित गरेको छ। **कृत** शब्दको अर्थ गरिएको छ— कृत इव कृतः। जीव नित्य ब्रह्मरूप भएकाले यो कार्य हुनै सक्दैन। यसैलाई ब्रह्मसूत्र (२।३।१७)मा **नात्माऽश्रुतेर्नित्यत्वाच्च ताभ्यः** अर्थात् आत्मा जन्मिँदैन, आत्मा जन्मिन्छ भनी वेदमा नबताइएकाले अनि आत्मा नित्य भएकाले भनिएको छ। जहाँ जीवलाई कार्यमा उत्पत्तिमान्‌को रूपमा बताइएको हुन्छ, त्यहाँ त्यसको अर्थ अन्तःकरणरूप उपाधिको जन्मलाई लिएर भनिएको हो। उपाधि जन्मिँदा त्यहाँभित्र प्रतिबिम्बित आत्मा पनि जन्मे झैं भएको मात्र हो, जसरी घट उत्पन्न हुँदा घटाकाश उत्पन्न भए झैं हुन्छ।

यसप्रकार प्राणीहरूको वास्तविक गति या परमात्मरूपतालाई बुझी विवेकीहरूले बाहिरी संसारमा मन लगाउँदैनन्। **अभवं** अर्थात् संसाररहित परमात्माको यथार्थ स्वरूपमा नै उनीहरूले मन लगाउँछन्। परमात्मा **निगमावपन** अर्थात् वेदोक्त कर्महरूलाई रोप्ने ठाउँ हुनुहुन्छ। **आवपन** शब्दको अर्थ हुन्छ— **उप्यन्ते अस्मिन् कर्माणि इति आवपनं क्षेत्रम्** अर्थात् जहाँ कर्महरू रोपिन्छन्, त्यस्तो खेत। खेतमा नरोपी कुनै पनि बिउ उम्रँदैन, त्यसै गरी परमात्मामा समर्पित नगरिएका कर्महरू पनि दोषयुक्त हुन्छन् र तिनीहरूले पुण्यरूपी फल फलाउन सक्दैनन्। परमात्मचिन्तनले नै कर्महरूलाई त्रुटिरहित बनाइदिन्छ। **सर्वं करोति निश्छिद्रं नामसङ्कीर्तनं तव** (भागवत ८।२३।१६) अर्थात् परमात्माको नामसङ्कीर्तनले कर्महरूमा रहेका सारा दोष या त्रुटिहरूलाई मेटी त्यसलाई निश्छिद्र बनाइदिन्छ। परमात्मामा समर्पित नगरिएका कर्महरू चाहिँ निष्काम कर्म नै भए पनि तिनीहरूले पूर्ण कल्याण गर्न सक्दैनन्। ती अकल्याणरूप नै हुन्छन् भनी बताइएको छ— **न चार्पितं कर्म यदप्यकारणम्** (भागवत १।५।१२)। त्यसैले परमात्मा सबै कर्महरूलाई फलाइदिने खेतसमान हुनुहुन्छ। भक्तिद्वारा नै कर्महरू सिद्ध हुन्छन्। **भक्त्या सिद्ध्यन्ति कर्मााणि कर्मभिस्तुष्यते हरिः, तस्मिन् तुष्टे भवेज्ज्ञानं ज्ञानान्मोक्ष अवाप्यते** अर्थात् भक्तिद्वारा कर्महरू सिद्ध हुन्छन्, कर्मद्वारा परमात्मा प्रसन्न हुनुहुन्छ, परमात्मा प्रसन्न भएपछि ज्ञान हुन्छ, अनि त्यसद्वारा मोक्ष प्राप्ति हुन्छ।

यस श्लोकलाई श्रीकृष्णलीलारूपमा अर्थ्याउँदै सनातन गोस्वामी भन्नुहुन्छ— **स्वकृतपरेषु**

अर्थात् आफ्ना भक्तहरूले निवास गर्ने वृन्दावन आदि ठाउँहरूमा भगवान् अंशरूपले रहनुहुन्छ। यहाँ अंश भनेर प्रद्युम्न, अनिरुद्ध र सङ्कर्षण यी तीन व्यूहलाई अथवा बलदेवलाई पनि लिन सकिन्छ। **अंशकृतम्, अंशावताररूपेण प्राप्यम्** अर्थात् अंशकृत शब्दको अर्थ अंशावताररूपले प्राप्त हुनुभएका भन्ने हुन्छ। **संवरणं** शब्दको अर्थ हुन्छ, अलग-अलग हुनु, छुट्टिनु आदि। **नास्ति बहिः अन्तः च संवरणं यस्य** अर्थात् जो भित्र-बाहिर कतै पनि परमात्माबाट छुट्टिएको या अलग भएको छैन। व्रजलीलामा बलराम घरभित्र अनि घरबाहिर पनि कहिल्यै भगवान्सँग अलग हुनुभएन। **नृगति** शब्दले परमात्माको मनुष्यलीलालाई बुझ्नुपर्दछ। आफ्ना अनुचरहरूको साथमा परमात्माले गर्नुभएको मनुष्यलीलालाई **कवयः** अर्थात् ब्रह्मा आदिले पनि विचार गर्दछन्। यहाँ **विमृश्य** शब्दले तुलना गरेर भन्ने अर्थ पनि दिन्छ। भगवान् पूर्णावतार हुनुहुन्छ भन्ने बुझाउन उहाँसँगै उहाँका अंशावतार पनि भएका छन्। तर विवेकीहरू विचारपूर्वक परमात्मालाई नै अंशी एवं सर्वश्रेष्ठ रूपमा उहाँकै चरणको उपासना गर्दछन्, अरूको होइन।

यसरी यो श्लोकमा जीव पनि उपाधितः परमात्माको अंश भए पनि स्वरूपतः परमात्मरूप नै भएकाले विवेकीहरू जीवहरूका पनि आत्मभूत परमात्मामा नै मन लगाउँछन् भनी बताइएको छ। यस श्लोकको भावलाई समेट्दै श्रीधर स्वामी लेख्नुहुन्छ—

**त्वदंशस्य ममेशान त्वन्मायाकृतबन्धनम्।**
**त्वदङ्घ्रिसेवामाविश्य परानन्द निवर्तय।।**

अर्थात् हे परमात्मा ! हजुरको अंश भएको मलाई मायाद्वारा खडा भएको बन्धनलाई आफ्नै चरणसेवामा लगाई हटाइदिनुहोस्। हजुर सर्वशक्तिमान् एवं परम आनन्दरूप हुनुहुन्छ।

**दुरवगमात्मतत्त्वनिगमाय तवात्ततनो-**
**श्चरितमहामृताब्धिपरिवर्तपरिश्रमणाः।**
**न परिलषन्ति केचिदपवर्गमपीश्वर ते**
**चरणसरोजहंसकुलसङ्गविसृष्टगृहाः॥ २१॥**

**पदार्थ—**
**ईश्वर** = हे परमात्मा
**दुरवगमात्मतत्त्वनिगमाय** = दुर्बोध आत्मतत्त्वको ज्ञान गराउनका लागि
**आत्ततनोः** = शरीर धारण गर्नुहुने
**तव** = हजुरको
**चरितमहामृताब्धिपरिवर्तपरिश्रमणाः** = लीलारूपी महासागरमा निरन्तर डुबुल्की लगाइरहने
**ते** = हजुरकै
**चरणसरोजहंसकुलसङ्गविसृष्टगृहाः** = चरणकमलका हाँससमान भक्तहरूको सङ्गतद्वारा घरव्यवहारलाई त्यागिदिएका
**केचित्** = कोही व्यक्तिहरूले
**अपवर्गम् अपि** = मोक्षलाई समेत
**न परिलषन्ति** = चाहँदैनन्

**वाक्यार्थ—** हे ईश्वर ! दुर्बोध आत्मतत्त्वको ज्ञान गराउनका लागि नै हजुरले विभिन्न समयमा विभिन्न अवतार लिनुहुन्छ। हजुरका जिज्ञासु भक्तहरू हजुरको लीलारूपी अमृतको महासागरमा

निरन्तर डुबुल्की लगाइरहन्छन्। हजुरका चरणकमलका सेवक हाँससमानका भक्तहरूको सङ्गतद्वारा सारा घरव्यवहारलाई त्यागिदिने यस्ता कुनै कुनै भक्तहरू त मोक्षको पनि इच्छा गर्दैनन्।

**विवरण–** यस श्लोकमा भक्तिको महत्त्व गाइएको छ। भक्ति परमात्मप्राप्तिमा कर्म आदि जस्तै सामान्य साधन मात्र हो कि भन्ने शङ्का हुँदा यो परमात्मप्राप्तिमा मुख्य साधन हो भन्ने जनाउन यस श्लोकमा भक्तिको प्रशंसा गरिएको छ। श्रुतिमा बताइएको छ– **तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसानाशकेन** (बृहदारण्यकोपनिषद् ४।४।२२) अर्थात् त्यो यो आत्मालाई ब्राह्मणहरू वेदाध्ययन, यज्ञ, दान, तपस्या आदि साधनहरूद्वारा जान्न खोज्दछन्। यहाँ यज्ञ, दान आदि सत्कर्महरूले ब्रह्मज्ञानको इच्छालाई उत्पन्न गर्ने बताइएको छ। ज्ञानद्वारा मोक्ष हुनभुन्दा अघि आत्मजिज्ञासा अनिवार्य चाहिन्छ। यसको साधन बताउने क्रममा यहाँ भक्तिको नाम आएन। त्यसैले भक्ति सामान्य साधन मात्र हो कि भन्ने शङ्का हुन्छ। यस विषयमा श्रीधर स्वामी लेख्नुहुन्छ– **भक्तिं अल्पसाधनं इति अनुचितमिव मन्वानः भक्तिं गुरूकरोति** अर्थात् भक्ति अल्पसाधन हो कि भन्ने शङ्कालाई अनुचित मान्दै भक्तिलाई यहाँ श्रेष्ठ बताइएको छ।

परमात्मा वास्तवमा माया एवं मायाको कार्यले रहित हुनुहुन्छ। यस्ता निर्गुण निष्क्रिय आत्मामा मन लगाउन पनि असाध्यै कठिन हुन्छ। अरू मनको विषय सगुणरूप मात्र हुने हुँदा निरुपाधिक आत्मामा मन लगाउनै सकिँदैन। कुनै पनि गुण, धर्म आदि व्यक्त नभएका परमात्मामा के आधारले मन लगाउने ? त्यसकारण अव्यक्त परमात्मामा मन लगाउन या उपाधिहरूलाई बाधित गरी निरुपाधिक रूपमा अवस्थित हुन प्रयास गर्न अत्यन्त कठिन छ। त्यसैले भगवद्गीता (१२।५)मा भगवान्ले **अव्यक्ता हि गतिर्दुःखं देहवद्भिरवाप्यते** अर्थात् शरीरमा आत्मबुद्धि गर्नेहरूले अव्यक्त आत्मस्थितिलाई पाउन असाध्यै कठिन छ भनिएको छ। त्यसैले आत्मतत्त्व दुरवगम्य छ अर्थात् यसलाई जान्न बुझ्न अत्यन्त दुःखले मात्र सकिन्छ, यो सामान्य व्यक्तिहरूका लागि प्रायः असम्भव छ। संसारमा देखिने, भोगिने सबै पदार्थहरूलाई बाधित गरी नदेखिने तत्त्वमा स्थित रहनु कहाँ सजिलो हुन्छ र ? त्यसैले प्राणीहरूलाई सजिलो होस् भन्नका लागि परमात्माले व्यक्तरूपमा अनेक अवतारहरू लिइदिनुहुन्छ। जब भगवान् लीलाद्वारा अनेक रूपहरू बनाउनुहुन्छ, तब प्राणीहरूलाई साकार रूपमा प्राप्त त्यस्ता परमात्माको चिन्तन गर्न र मन लगाउन सजिलो पर्दछ। वास्तवमा परमात्माले अवतार लिनुको वास्तविक प्रयोजन पनि यही हो। यद्यपि शास्त्रहरूमा परमात्माले धर्मसंस्थापना गर्न र दुष्टहरूलाई दण्ड दिन अवतार लिनुहुन्छ भनी बताइएको छ, तर यो त उहाँको दिव्य ईश्वरीय पराक्रमको कुरा भयो, उहाँका मधुर लीलाहरू भक्तहरूलाई आनन्दित पार्न र त्यसको चिन्तनद्वारा उनीहरूको बन्धनलाई समाप्त गरिदिनका लागि हुन्छन्। दुष्टदमन आदि चरित्रले पनि ईश्वरीय पराक्रम सम्झाई भक्तहरूको मन परमात्मामा निरुद्ध गरिदिन्छ। दुष्टहरूको नाश त सर्वसमर्थ परमात्माको इच्छाद्वारा नै भइहाल्यो, फेरि दुष्टदमन गर्नु मात्र अवतारको उद्देश्य हुने भए भगवान्ले तत्काल अवतार लिई दुष्टहरूलाई मारेर गए भइहाल्थ्यो, मानवीय आचरण गर्नुपर्ने आवश्यकता थिएन। त्यसैले परमात्माको अवतारको मुख्य प्रयोजन हो, दुर्बोध आत्मतत्त्व जनाइदिनु या देखाइदिनु। यदि अवतारहरू नभएका भए परमात्माको स्वरूपलाई कसले आफैँ खोजेर जान्न सक्छ र ? त्यस्ता परमात्माका चरित्रहरू

अमृतका समुद्रसमान छन्। भक्तहरू त्यहीं डुबिरहन्छन् र संसारका सारा तापहरूलाई तत्काल त्यागिदिन्छन्। यहाँ **परिश्रमण** शब्दको अर्थ दुईप्रकारको हुन्छ। एक प्रकारले भन्दा परि उपसर्गको अर्थ त्यागिदिनु हो— **परिः वर्जनार्थः** अर्थात् यहाँ परि उपसर्ग त्यागको अर्थमा प्रयुक्त छ। अर्को प्रकारले भन्दा **परि** शब्दले पूर्ण श्रम गर्नु भन्ने सामान्य अर्थलाई नै बुझाउँछ। परमात्माको चिन्तनद्वारा, उहाँको कथाश्रवण आदिमा डुबी भक्तहरू संसारका सारा श्रमहरूलाई तत्काल नै त्यागिदिन्छन् भन्ने एउटा अर्थ हो। अनि अर्को अर्थ हो— भगवान्का भक्तहरू आफ्नो जीवनभरिको सम्पूर्ण प्रयास भगवान्को कथाश्रवणमा नै गर्दछन्। यस्ता भगवन्निष्ठ भक्तहरू आफू जस्तै भगवद्भक्तहरूको सङ्गत गरी घरव्यवहारको झन्झटलाई त्यागिदिन्छन् अनि परमात्माको भजन छुट्छ भन्ने आशङ्काले अपवर्ग अर्थात् मोक्षलाई पनि चाहँदैनन्। यो भनाइबाट भक्तहरूले इन्द्र आदि पदको चाहना गर्छन् कि ? भन्ने कुरा त स्वतः नै निरस्त भएको छ— **कुतोऽन्यत् इन्द्रादिपदम्** ? भक्तले मोक्षलाई पनि नचाहने कुराबाट मोक्षभन्दा भक्ति नै श्रेष्ठ रहेको प्रतीत हुन्छ, तर परमात्माको दृढ प्रेमरूपा भक्ति अनि मोक्ष अलग गर्न सकिने विषय होइनन्।

सम्पूर्ण शास्त्रहरूले मोक्षलाई परम पुरुषार्थको रूपमा मानेका छन्। वेदान्तमा मोक्ष भनेको कुनै बाहिरी वस्तु नभई **स्वात्मनि अवस्थानं** अर्थात् आत्मामै अवस्थित हुनु नै हो। आफू निरतिशय आनन्दरूप भएकाले त्यसमा अवस्थित भई सम्पूर्ण दुःखहरूबाट मुक्त भएको स्थिति नै मोक्ष हो। भागवत (२।१०।६)मा पनि **स्वरूपेण व्यवस्थितिः** अर्थात् ज्ञानद्वारा आफ्नो स्वरूपमा स्थित रहनु नै मोक्ष हो भनिएको छ। संसारमा अज्ञानको कारणले नै प्राणीहरू अनात्मा शरीर आदिमा आत्मबुद्धि गर्दछन् र ती अनित्य पदार्थहरूको चिन्तन एवं संरक्षणमा समय बिताउँछन्। अज्ञानलाई नष्ट गर्न ज्ञान मात्र साधन भएकाले यो अज्ञानात्मक संसारबाट मुक्त हुनका लागि ज्ञानको अनिवार्यता रहेको छ। ज्ञान या मोक्षलाई नचाहेर पनि हटाउन या तिरस्कार गर्न सकिँदैन, किनभने त्यो आफ्नै यथार्थ स्वरूप हो। परमात्मतत्त्वको वास्तविक ज्ञान शुद्ध हृदयमा मात्र हुन सम्भव छ, हृदयबाट संसारका दुर्वासना फाली त्यसलाई शुद्ध गर्न भक्ति अनिवार्य छ। यहीं आएर केही दार्शनिकहरू भक्तिले केवल चित्त शुद्धि मात्र गर्ने, ज्ञानका लागि त विधिपूर्वक वेदान्तश्रवण, मनन आदि गर्नै पर्ने धारणा राख्छन्, तर भागवत र श्रीमद्भगवद्गीताको मत अनुसार भक्तिद्वारा सीधै परमात्मतत्वको साक्षात्कार हुन सम्भव छ। भागवत (१०।८२।४८)मा **तदनुस्मरणध्वस्तजीव-कोशास्तमध्यगन्** अर्थात् गोपिनीहरू ज्ञानद्वारा लिङ्गशरीरको बन्धनलाई ध्वस्त पारी परमात्मा पुगे भनिएको छ। गीता (१०।११)मा पनि भगवान्ले **अहमज्ञानजं तमः नाशयामि** अर्थात् मैले मेरो भक्तहरूको अज्ञानरूपी अन्धकारलाई नष्ट गरिदिन्छु भन्नुभएको छ। यसरी अन्तर्यामी परमात्मा भक्तिद्वारा खुसी भएपछि उहाँ आफ्नो निरावरण वास्तविक रूपमा प्रकट हुनलाई केको आपत्ति छ र ? त्यसैले भक्ति ज्ञानको प्रमुख र सर्वोत्कृष्ट साधन हो भन्ने बुझिन्छ। यी दृढ भक्तहरू रसस्वरूप परमात्मामा पूरै डुबेका हुन्छन् र आफूलाई पनि यिनीहरूले परमात्मामा नै समर्पित गरिदिएका हुन्छन्। परमात्मस्वरूपमा नित्य-निरन्तर डुबिरहनाले यिनीहरू नित्य मुक्त छँदैछन्, फेरि अर्को मोक्ष यिनीहरूलाई किन चाहियो। फेरि अर्को रहस्यमय कुरा के छ भने भक्तहरूले आफ्नो सुखका लागि भन्दा परमात्माको सुखका लागि नै उहाँसँग प्रेम गरेका हुन्छन्। मुक्त भई स्वयं पनि

रसस्वरूप नै भई परमात्मरूपमा बस्न त आनन्द छ, तर त्यहाँ परमात्माको सेवा छैन। अनन्तकालसम्म परमात्मालाई सेवा गरेर उहाँलाई नै आफ्नो भावद्वारा सधैं आनन्दित बनाइराख्ने उद्देश्य भएकाले नै भक्तहरू मोक्षको पनि चाहना गर्दैनन्। मोक्ष प्राप्त गरी स्वयं परमात्मामा मिल्नु या परमात्मा नै बन्नुभन्दा पनि आफू परमात्माको नजिकै तर अलग बसी उहाँको अनन्त आनन्दको रसास्वादन गरिरहँदा उनीहरूलाई तृप्ति हुन्छ। त्यसैले भक्तहरू मोक्ष पनि चाहँदैनन् भनिएको हो। अलग अलग उपाधिलाई स्वीकार गरी भावराज्यको आनन्द लिन त मुक्त पुरुषहरू पनि मायाद्वारा लीलामय शरीर धारण गर्दछन् र भगवान्को आराधना गर्दछन् भन्ने प्रमाण पाइन्छ। नृसिंहतायिनी उपनिषद्को भाष्यमा भगवत्पाद शङ्कराचार्य लेख्नुहुन्छ— **मुक्ता अपि लीलया विग्रहं धृत्वा भगवन्तं भजन्ति**। यद्यपि द्वैत बन्धनको कारण हो, तर त्यो ज्ञान हुनुभन्दा अघि मात्र बन्धन हुन्छ, ज्ञानपछि त भक्तिको आनन्द लिन भक्त र भगवान्को द्वैत कल्पना गरी परमात्माको सेवा गर्नु अद्वैत स्थितिभन्दा पनि रमाइलो हुन्छ भन्ने विद्वान्हरूको भनाइ छ— **भक्त्यर्थं कल्पितं द्वैतमद्वैतादपि सुन्दरम्।** यसरी यहाँ मुक्त पुरुषहरूले पनि चाहने भगवद्भक्तिलाई प्रशंसा गरिएको छ।

श्रीकृष्णलीलाको तात्पर्यमा अर्थ्याउँदा पनि **आत्ततनुः** अर्थात् भगवान्ले शरीर स्वीकार गर्नु, आत्मतत्त्वकै प्रचारका लागि हो भन्ने बुझिन्छ। परमात्मतत्त्व दुरवगम रहेको छ। अजन्मा हुँदाहुँदै पनि जन्म लिनै पर्ने, ऐश्वर्यसम्पन्न हुँदा पनि यशोदा र हामीसँग भाग्नुपर्ने, दुर्बोध रहस्ययुक्त चरित्र प्रदर्शनका लागि पनि उहाँ अवतीर्ण हुनुभएको हो। यसरी यशोदाले ओखलमा बाँधिदिएको, गोपिनीहरूसँग भागेका आदि रहस्यमय लीला गर्ने परमात्माको कथामृतमा डुबी भक्तहरू आनन्दित रहने र उनीहरूले परमात्मभावमा नै पुऱ्याइदिने मोक्ष नचाहने कुरा यस श्लोकमा बताइएको छ।

यस श्लोकको भावलाई समेट्दै श्रीधर स्वामी लेख्नुहुन्छ—

**त्वत्कथामृतपाथोधौ विहरन्तो महामुदः।**
**कुर्वन्ति कृतिनः केचिच्चतुर्वर्गं तृणोपमम्।।**

अर्थात् हजुरका गुणकथारूपी अमृतसमुद्रमा विहार गरिरहेका कोही भाग्यशाली र परम आनन्दमय भक्तहरूले धर्म अर्थ, काम र मोक्ष यी चारै ओटा पुरुषार्थलाई तृणबराबर ठान्दछन्।

**त्वदनुपथं कुलायमिदमात्मसुहृत्प्रियव-**
**च्चरति तथोन्मुखे त्वयि हिते प्रिय आत्मनि च।**
**न बत रमन्त्यहो असदुपासनयात्महनो**
**यदनुशया भ्रमन्त्युरुभये कुशरीरभृतः॥ २२॥**

**पदार्थ—**
**त्वदनुपथं** = हजुरको सेवाको लागि उन्मुख भए
**इदं** = यो
**कुलायं** = जड शरीर पनि
**आत्मसुहृत्प्रियवत्** = आफू,

हितैषी र प्रिय झैं
**चरति** = प्रतीत हुन्छ
**तथा च** = तर पनि
**अहो** = आश्चर्य छ
**असदुपासनया** = असत् वस्तुहरूकै चाहना गर्नाले
**आत्महनः** = आत्मघाती बनेका व्यक्तिहरू
**उन्मुखे** = कल्याणका लागि अभिमुख हुनुभएका
**हिते** = हितकारक
**प्रिये** = प्रिय
**आत्मनि** = आत्मरूप
**त्वयि** = हजुरमा
**बत** = निश्चय नै
**न रमन्ति** = रमाउँदैनन्
**यदनुशयाः** = जुन असत् वस्तुहरूको वासना भएका
**कुशरीरभृतः** = कुत्सित शरीर धारण गरिरहने व्यक्तिहरू
**उरुभये** = ज्यादै भयानक संसारमा
**भ्रमन्ति** = घुमिरहन्छन्

**वाक्यार्थ–** यो शरीर हजुरको सेवाको लागि उन्मुख भएको अवस्थामा आफू, सुहृद् र मित्रले जस्तै कुनै व्यक्तिको हित गर्दछ। तर आश्चर्यको कुरो के छ भने आफ्नो विनाशतर्फ अग्रसर भएका व्यक्तिहरू आफ्नो हित गर्ने परमप्रिय आत्मरूप हजुरमा रमाउँदैनन्। त्यसको विपरीत जीवात्माहरू निरन्तर दुःखदायी असत् पदार्थहरूको चिन्तन गरिरहन्छन्। यसले गर्दा उनीहरू विभिन्न जुनीहरूमा जन्म लिएर यो ज्यादै भयानक संसारमा घुमिरहन्छन्।

**विवरण–** यस श्लोकमा भगवद्भक्तिले रहित भएकाहरूको निन्दा गरिएको छ। शरीर माटोमा उत्पन्न भई त्यहीं लीने हुने वस्तु हो, यसलाई परमात्मसेवामा लगाउन सकियो भने यसको सार्थकता हुन्छ। यदि परमात्मामा लगाउन सकिएन भने यो शरीर केवल माटोसमान मात्र हुन्छ। यहाँ शरीरलाई **कुलाय** भनिएको छ। **कौ पृथिव्यां लीयते इति** अर्थात् पृथिवीमा लीन हुने हुनाले यसलाई कुलाय भनिएको हो। जड शरीरभित्र चेतन आत्मरूपले परमात्मा पस्नुभएकाले नै यो शरीरले चेतनले झैं व्यवहार गरिरहेको छ। यसरी सारा संसारको व्यवहारलाई त शरीरभित्र रहने परमात्माले नै सिद्ध गर्नुभएको छ। त्यसैले उहाँको सेवा एवं अनुवर्तन गर्नु नै शरीरको प्रमुख कर्तव्य हो। आचार्यहरूले परमात्माप्रतिको यही कृतज्ञता नै भक्ति हो भन्नुभएको छ। सामान्य संसारमा कसैले आपत्कालमा सानो सहयोग गऱ्यो भने पनि व्यक्तिहरू ऊप्रति ऋणी हुन्छन् र जीवनभर कृतज्ञ बनिरहन्छन्। व्यक्तिले केही स्वार्थको कारणले नै अर्कोलाई सहयोग गरेको हुन्छ, तर पनि ऊप्रति कृतज्ञ भइरहन्छ। परमात्माले त विनास्वार्थ प्राणीहरूलाई सर्वस्व प्रदान गर्नुभएको छ। यसका इन्द्रिय, मन, बुद्धि, आदि सबै परमात्माबाटै प्राप्त भएका हुन्। यति मात्र नभई स्वयं आत्मरूपले पनि परमात्मा नै पस्नुभएको छ भने पछि त प्राणीहरूका लागि सम्पूर्ण अमूल्य सम्पत्ति एवं जीवन पनि दिने परमात्माप्रति कति कृतज्ञ बन्नुपर्ला ? आफ्ना इन्द्रिय, मन र शरीरका पनि मालिक परमात्मालाई कृतज्ञताको कारणले सधैं सम्झिरहनु नै भक्ति हो। श्लोकमा **त्वदनुपथं** भन्ने पद आएको छ। यसको तात्पर्य हुन्छ– हजुरको सेवाको लायक भयो भने नै यो शरीरको सार्थकता रहन्छ। आत्मविना यो शरीर कसरी चेतन हुन सक्छ ? अनि कसरी सुहृत्, मित्र आदि बन्न सक्छ। यसैलाई श्लोकमा **आत्मसुहृत्प्रियवत्** भन्ने शब्दले बताएको छ। जड शरीर कसैको पनि मित्र या सुहृत् हुन सक्दैन। यदि हुने भए मुर्दालाई पनि मित्र आदि व्यवहार गर्नुपर्ने। त्यसैले शरीरको सबैथरी लौकिक सम्बन्ध आदि व्यवहार पनि आत्मद्वारा नै सिद्ध छ भन्ने बुझिन्छ।

परमात्मा प्राणीहरूको कल्याणकारक अनि परमप्रिय पनि हुनुहुन्छ। सामान्य लोकमा जो

प्रिय हुन्छ, त्यो कल्याणकारक पनि हुन्छ भन्ने छैन। अरु उपनिषद्मा त श्रेय र प्रेयको स्वरूप नै छुट्टाछुट्टै छ भनी बताइएको छ। **श्रेयो हि धीरोऽभिप्रेयसो वृणीते, प्रेयो मन्दो योगक्षेमाद् वृणीते** अर्थात् धीर व्यक्तिले प्रेयलाई छाडी श्रेयलाई ग्रहण गर्दछ भने मन्द बुद्धि भएको मानिस सांसारिक वस्तुहरूको प्राप्ति र संरक्षणमा नै रमाई प्रेयलाई ग्रहण गर्छ। श्रेय भनेको कल्याणको मार्ग हो भने प्रेय भनेको क्षणिक विषयसुखको मार्ग हो। मानिसलाई तत्कालीन सुख नै प्रिय लाग्ने भएकाले उसले पछि दुःख दिने विषयभोगहरूलाई नै पछ्याउँदै आएको छ। रुट्ट भोग्दा सुख दिने र पछि चाहिँ दुःख दिने यस्तो सुखलाई गीता (१८।३८)मा भगवान्ले राजस सुख भन्नुभएको छ। श्रेयमार्ग चाहिँ यद्यपि परमकल्याण एवं निरतिशय आनन्दमा पुग्छ, तर यो पहिले अलि कष्टकारक हुन्छ। त्यसैले सामान्य व्यक्तिहरूले यो सात्त्विक एवं पूर्ण सुखलाई छाडी अपूर्ण सुखलाई नै मन पराउँछन्। त्यसैले उसका लागि संसारको मार्ग नै प्रिय रहेको छ। यसरी हितकारक वस्तु प्रिय नलाग्ने अनि अहितकारक वस्तु प्रिय लाग्ने भेद देखिन्छ। यो भेद अज्ञानीहरूद्वारा कल्पित हो र त्यही अज्ञानीहरूकै दृष्टिलाई लिई उपनिषद्ले पनि श्रेय र प्रेयमा भेद देखाएको हो। वास्तवमा विचार गर्दा त आत्मा नै परम प्रिय अनि परम हितकारक सिद्ध हुन्छ। आत्माकै लागि नै संसारभरका सम्पूर्ण पदार्थहरूमा प्रेम हुन्छ, यसको तात्पर्य ती सबै वस्तुहरू भन्दा आत्मा नै परम प्रिय हुन्छ भन्ने हो। आत्मा नै परम पुरुषार्थ मोक्षरूप भएकाले परम हितकारक पनि छ। यसैले श्लोकमा परमात्मालाई हितकारक र प्रिय भनिएको हो।

यस्ता परमात्मालाई भजन नगर्ने र अनात्मा पदार्थहरूमा नै रमाउने व्यक्तिहरू **आत्महनः** अर्थात् आत्मघातीहरू हुन्। यिनीहरू सत् परमात्मवस्तुलाई छाडी असत् सांसारिक वस्तुहरूको कामना गर्दछन् र तिनीहरूमा रमाउँछन्। यिनीहरूले शरीर धारण गर्नु व्यर्थ छ। **कुशरीरभृतः** यो पदको अर्थ हुन्छ, **कुत्सितं शरीरं बिभ्रति इति** अर्थात् जसले कुत्सित शरीरलाई नै बोकेका छन्। शरीर पञ्चभूतले बनेको विकारी वस्तु हो, यसबाट क्षण-क्षणमा मल निस्किरहेको हुन्छ। यस्तो कुत्सित शरीरलाई नै आफू भनेर आत्मरूपमा बोकिरहने व्यक्तिहरूको मूर्खतालाई यहाँ सङ्केत गरिएको छ। सत्, चित् र आनन्दरूप आफूलाई बिर्सेर असत्, जड र दुःखरूप शरीरलाई बोक्ने संसारीहरूले के सुख पाउँथे ? त्यसैले बाटो बिराएकाले उनीहरू **उरुभय** अर्थात् जन्म, मृत्यु, रोग, बुढ्याइँ आदि अनेक भयले युक्त संसारमा नै घुमिरहन्छन्।

यसलाई श्रीकृष्णलीलापरक अर्थ गर्दा भने यहाँ भगवान्कै कुलमा जन्मिएर पनि उहाँसँग प्रेम नगर्नेहरूको निन्दा गरिएको छ। कुलाय भन्ने शब्दले यदुवंशीहरूको शरीरलाई लिनुपर्दछ। **कुले अयते जन्मना समेति इति कुलायः** अर्थात् भगवान् जन्मिएकै यदुकुलमा जन्म लिने शरीर कुलाय हो। एउटै कुलका बान्धव भएकाले ती भगवान्का सुहृत् झैं प्रतीत हुन्छन्। भगवान्सँगै भएकाले उनीहरूलाई परमात्मसेवा गर्न सजिलो पनि छ। **त्वदनुपथं** शब्दको अर्थ हुन्छ— **त्वत्सेवौपयिकम्** अर्थात् त्यसद्वारा परमात्माको सेवा गर्नु उपयुक्त हुन्छ, तर कोही व्यक्तिहरू असत् अर्थात् बाहिरी संसारका धन आदि विषयलाई नै चाहन्छन्, तिनीहरूले परमात्मालाई पनि बिर्सी आत्मघात गरिरहेका छन्। स्यमन्तक मणिको प्रसङ्गमा मणिको लोभले भगवान्सँग द्रोह गर्ने या निन्दा गर्ने शतधन्वा, प्रसेन आदिलाई यहाँ निन्दा गरिएको हो। यसप्रकार यो श्लोकमा

परमात्माको सेवा गर्ने उचित शरीर पाएर पनि उहाँको चिन्तन नगर्नेहरूको निन्दा गरिएको छ।

यस श्लोकको भावलाई संक्षिप्त रूपमा श्रीधर स्वामी बताउनुहुन्छ–

**त्वय्यात्मनि जगन्नाथे मन्मनो रमतामिह।**
**कदा ममेदृशं जन्म मानुषं सम्भविष्यति।।**

अर्थात् संसारैका स्वामी एवं आत्मस्वरूप हजुरमा मेरो मन रमाइरहोस्, यस्तो परमात्मसेवाका लागि योग्य मनुष्यजन्म मलाई कहिले प्राप्त होला ?

**निभृतमरुन्मनोऽक्षदृढयोगयुजो हृदि य-**
**न्मुनय उपासते तदरयोऽपि ययुः स्मरणात्।**
**स्त्रिय उरगेन्द्रभोगभुजदण्डविषक्तधियो**
**वयमपि ते समाः समदृशोऽङ्घ्रिसरोजसुधाः॥ २३॥**

**पदार्थ–**
**निभृतमरुन्मनोऽक्षदृढयोगयुजः** = प्राण, मन र इन्द्रियलाई नियन्त्रित गरी दृढ योग धारण गर्ने
**मुनयः** = मुनिहरूले
**हृदि** = हृदयभित्र
**यत्** = जसलाई
**उपासते** = उपासना गर्दछन्
**स्मरणात्** = (आफ्नो भाव अनुसार) सम्झिँदा
**अरयः** = भगवद्द्रोहीहरू र
**उरगेन्द्रभोगभुजदण्डविषक्त-धियः** = हजुरका सर्पसमान बलिष्ठ दुई बाहुका आलिङ्गन आदिका चाहनामा लिप्त भएका
**स्त्रियः अपि** = गोपिनी आदि स्त्रीहरू पनि
**तत्** = ती परमात्मामा नै
**ययुः** = प्राप्त भए
**अङ्घ्रिसरोजसुधाः** = चरणकमलको ध्यान गर्ने
**वयम् अपि** = हामीहरू पनि
**समदृशः** = समदर्शी
**ते** = हजुरका लागि
**समाः** = बराबर नै छौँ

**वाक्यार्थ–** हे भगवान् ! प्राणवायु, इन्द्रिय, मन आदिलाई नियन्त्रित गरी उपासना गर्ने योगीहरूले हजुरको उपासना गर्दछन् र हजुरलाई प्राप्त गर्दछन्, भवगद्द्रोहीहरू र हजुरका सर्पसमान बलिष्ठ दुई बाहुका आलिङ्गन आदिका चाहनामा लिप्त भएका गोपिनी आदि स्त्रीहरूले पनि हजुरलाई नै प्राप्त गर्दछन्, हजुरको चरणकमलको ध्यान गर्ने हामी वेदहरू पनि समदर्शी हजुरका लागि तिनीहरू बराबर त छौँ नि।

**विवरण–** यस श्लोकमा विभिन्नथरी भाव राख्नेहरूले परमात्मालाई उही रूपमा पाउँछन् भनिएको छ। मुनि भनेका संसारको लौकिक व्यवहारलाई त्यागी एकान्तस्थलमा मौन रूपमा साधना गर्दै जीवन बिताउने तपस्वीहरू हुन्। प्राणवायु, मन र सारा इन्द्रियहरूलाई नियन्त्रित गरेर दृढ योग गर्ने ती मुनिहरूले आफ्नो अविरल तपस्याद्वारा परमात्मालाई प्राप्त गर्दछन्। यति मात्र नभई **अरयः** अर्थात् भगवान्का शत्रुहरूले पनि परमात्मालाई त्यही रूपमा प्राप्त गर्दछन्। यहाँ भगवान्का शत्रु भन्नाले जसले भगवान्लाई शत्रुरूपले हेर्दछन्, तिनीहरू भन्ने अर्थ हुन्छ। भगवान्को **भुजदण्ड** बलियो सर्प समान छ। यसमा आसक्त भएका गोपिनीहरूले पनि

भगवान्लाई प्राप्त गरे भने परमात्मतत्त्वलाई यथार्थसँग जान्ने हामी वेदले पनि उही परमात्मालाई प्राप्त गऱ्यौं भनी श्लोकमा बताइएको छ। यहाँ मुनिहरूले शान्त भावले उपासना गरेर परमात्मालाई पाएका छन् भने केही राजाहरूले शत्रुभावले चिन्तन गरेर परमात्मालाई पाएका छन्। गोपिनी आदिले कामभावले भगवान्लाई पाएका छन् भने वेदहरूले तत्त्वज्ञानद्वारा परमात्मालाई पाएका छन्। यसरी अनेक भावले पनि एउटै परमात्मालाई प्राप्त गरिने कुरा यहाँ बताइएको छ।

यहाँ के शङ्का हुन्छ भने भावमा यति भिन्नता हुँदा पनि एउटै वस्तुलाई कसरी प्राप्त गर्न सकियो ? मुनिहरूको शुद्ध भक्ति अनि शत्रुहरूको शत्रुता दुबै समान हो त ? यदि त्यसो हो भने भगवान्को भक्तिको के महत्त्व भयो र ? फेरि सबैका आत्मा भएका भगवान्लाई द्वेष गर्नेहरू त महाअन्धकारमय नरकमा पो जाकिनुपर्ने, तिनीहरूले पनि मोक्ष पाउनु कत्तिको उचित छ ? सामान्य मानिसहरू पनि को व्यक्ति आफ्नो अनुकूल एवं प्रिय छ, अनि को व्यक्ति आफ्नो अहित चिताउँछ भन्ने थाहा पाउँछन् भने अन्तर्यामी भगवान्लाई को आफ्नो भक्त हो अनि को आफ्नो शत्रु हो भन्ने थाहा हुँदैन ?। तर भगवान्ले अनेक भावहरूबाट आफूमा मन लगाउने सबैलाई समान दृष्टिले हेर्ने हुनाले यसो भएको हो। भगवान्मा सामान्य मानिसहरूमा जस्तो भेददृष्टि छैन। सामान्य मानिसहरू आफूलाई शरीर हुँ भन्ने ठान्दछन् अनि त्यसको उपकार या अपकार गर्नेलाई आफ्नै उपकार या अपकार गरेको सम्झिन्छन्। तिनीहरूमा आफ्नो उपकार गर्ने मित्र अनि आफ्नो अपकार गर्ने शत्रु हुन् भन्ने भाव हुन्छ। परमात्मा त शरीरमा आत्मबुद्धि गर्नुहुन्न, उहाँ सबैलाई आत्मदृष्टिले मात्र हेर्नुहुन्छ। आत्मालाई कसैले पनि केही हानि या अपकार गर्न नसक्ने हुनाले आत्मवादीहरू सबै व्यक्तिहरूलाई समान भावले हेर्दछन्। उनीहरू शरीरसम्बन्धी पदार्थहरूमा मोह अनि तिनको नाश भएकोमा शोक पनि गर्दैनन्। त्यसैले उपनिषद्मा पनि **तत्र को मोहः कः शोकः एकत्वमनुपश्यतः** अर्थात् जसले सबैलाई एउटै आत्मा देख्दछ भने त्यहाँ शोक र मोह हुन कसरी सम्भव छ र ? भनिएको छ। संसारमा एउटै परमात्मतत्त्व रहेको छ भनेर जान्ने विवेकीहरू समदर्शी हुन्छन् भनी गीता (५।१८)मा पनि बताइएको छ– **पण्डिताः समदर्शिनः**। यसरी परमात्मतत्त्वलाई जान्नेहरू त सबैमा समदृष्टि गर्दछन् भने भगवान्ले सबैमा समदृष्टि गर्नु के नौलो भयो र ? यो उहाँको अज्ञता नभई परम कृपा हो। यही बुझाउन श्लोकमा **समदृशः** यो पद आएको छ।

भगवान्लाई सबैले समानरूपले पाउनुमा आगोलाई दृष्टान्त दिन सकिन्छ। जाडो महिनामा यदि कहीँ आगो बालिएको छ भने त्यसले आफूनजिक आउने सबैलाई समान रूपले ताप दिन्छ। चिसो हटाउनु, तातो दिनु र प्रकाश फिँजाउनु यी आगोका स्वाभाविक कार्य हुन्। यसलाई कुनै व्यक्तिको भाव या चिन्तनले यता–उता पार्न सक्दैन। कोही व्यक्ति श्रद्धापूर्वक आगोलाई परमात्माको मुख मान्दै त्यसको निकटमा जान्छ भने त्यो व्यक्तिले पनि आगोबाट उत्ति नै प्रकाश एवं उष्णता प्राप्त गर्दछ अनि कोही व्यक्ति आगोलाई निभाउने सोचले बाल्टीभरि पानी लिएर गयो भने पनि आगोले त्यसलाई त्यत्ति नै उष्णता दिन्छ। यसमा आगोप्रति राम्रो भाव या दुर्भाव राख्नु मुख्य नभई त्यसको नजिक जानु मात्र मुख्य रहेको छ। यसै गरी परमात्मामा पनि स्वाभाविक रूपमा दया, वात्सल्य आदि गुणहरू रहेका छन् भने स्वभावतः नै संसारबन्धनलाई नष्ट गर्ने सामर्थ्य उहाँमा छ। उहाँका नजिक जाने व्यक्तिहरू यी स्वाभाविक गुणहरूद्वारा

लाभान्वित हुन्छन्। यसमा राम्रो या नराम्रो भावले नजिक जानुलाई हेरिँदैन। आफूलाई क-कसले पाउँछन् भनी शास्त्रनियम बताउने क्रममा परमात्माले जसले आफ्नो भक्ति गर्छन्, तिनैले मलाई पाउँछन् भन्ने व्यवस्था गर्नुभएन, किनभने उहाँमा आफ्नो प्रचार या कीर्तिको अलिकति पनि कामना छैन। बरु उहाँले सबै प्राणीको अनेकथरी धारणाहरूलाई हेरी सबैका लागि उपयुक्त हुने गरी के व्यवस्था गर्नुभयो भने जो परमात्माको स्मरण गर्दछ, त्यही व्यक्तिले परमात्मालाई पाउँछ। जुनसुकै भावद्वारा भए पनि कोही परमात्माको नजिक गयो अर्थात् उसले उहाँको स्मरण गऱ्यो भने उसले परमात्मालाई पाउने भयो। यसै कारणले मुनिहरूले र भगवान्का शत्रुहरूले पनि परमात्मालाई पाएका हुन्।

भगवान्का भक्त नारद, श्रीशुकदेव, वेदव्यास आदि मुनिहरू हुन् भने शिशुपाल, हिरण्याक्ष, हिरण्यकशिपु, रावण आदि भगवान्लाई शत्रुरूपले सम्झिरहने व्यक्तिहरू हुन्। प्रेमीलाई त वेला-मौकामा सम्झिइन्छ, तर शत्रुलाई त उठेदेखि सुतुन्जेलसम्म गहिरोसँग सम्झिइएको हुन्छ। दृढतापूर्वक सम्झिएकाले शिशुपाल आदिले परमात्मालाई नै प्राप्त गरेका हुन्। त्यसै गरी गोपिनीहरूले कामद्वारा भगवान्मा मन लगाए। श्लोकमा गोपिनी आदि स्त्रीहरूलाई भगवान्को भुजदण्डमा आसक्त भनिएको छ। गोपिनीहरूले आफूहरू किन भगवान्का सेविका भयौँ भनी बताउने क्रममा पनि उनीहरूले यसलाई कारणको रूपमा बताएका छन्। **दत्ताभयं च भुजदण्डयुगं विलोक्य** (भागवत १०।२९।३९) अर्थात् संसारैलाई अभय दिने बलिष्ठ पाखुरा देखेर पनि हामी हजुरका दासी भएका हौँ। भगवान्मा मन आसक्त हुनुमा मुख्यतया तीन कारणहरू बताइएका छन्— उहाँको अप्रतिम सौन्दर्य, दिव्य ऐश्वर्य र अपरिमित पराक्रम। घुम्रिएका कपालहरूले घेरिएको अनि मन्द मुस्कानयुक्त भगवान्को सुन्दर अनुहार भगवान्प्रति गोपिनीहरू आसक्त हुनुको प्रमुख कारण हो। त्यसै गरी लक्ष्मी आदिलाई पनि स्थान दिने उहाँको दिव्य ऐश्वर्य अनि बलिष्ठ पाखुराबाट सूचित भएको अतुलनीय पराक्रम भगवान्मा मन लाउनुका कारण हुन्। यहाँ गोपिनीहरूले ईश्वरीय पराक्रमको पनि चर्चा गरेर के सूचना गरेका छन् भने उनीहरूको श्रीकृष्णप्रतिको प्रेम शरीरको सौन्दर्यमा मात्र आसक्त हुने सामान्य लौकिक काम नभई ईश्वरसँग गरिने विशुद्ध प्रेम हो। गोपिनीहरूले श्रीकृष्णप्रति गरेको उत्कट प्रेमलाई नै काम शब्दद्वारा बताइएको हो। फेरि आसक्ति सधैँ बन्धनको कारण कहाँ हुन्छ र ? त्यो आसक्ति कुन वस्तुमा लागेको छ, त्यही अनुसार यसको स्वरूप एवं फलको निर्णय गर्नुपर्दछ। एउटा स्वधर्मनिष्ठ क्षत्रियका लागि देशको सम्प्रभुतामा पूर्ण आसक्ति हुनु अनि त्यसको रक्षार्थ हाँसी-हाँसी प्राण त्यागनुलाई ब्रह्मलोकको प्राप्तिसाधन भनी बताइएको छ— **परिव्राड् योगयुक्तश्च रणे चाभिमुखो हतः** अर्थात् योगयुक्त भई प्राण त्याग्ने संन्यासी र देश एवं धर्मका लागि लडाइँमा मारिने वीर दुबै सूर्यमण्डललाई भेदन गरी ब्रह्मलोक पुग्दछन्। जहाँ स्वधर्ममा निष्ठा हुनुलाई त उत्तम गतिको साधन बताइएको छ भने स्वयं परमात्मामा गरिने आसक्तिको के कुरा। संसारमा गरिने अनुराग आसक्ति हुन्छ भने भगवान्प्रतिको अनुराग भक्ति हुन्छ। यसैलाई शाण्डिल्यभक्तिसूत्र (१।१।२)मा **सा परानुरक्तिरीश्वरे** अर्थात् भक्ति भनेको परमात्मामा अत्यन्त अनुराग हुनु हो भनिएको छ। यसरी यस श्लोकमा अनेक भावले भगवान्को चिन्तन गर्नेहरूले पनि एउटै परमात्मालाई पाउँछन् र यसमा परमात्माको समदृष्टि नै

कारण हो भनी बताइएको छ।

यस श्लोकको भावलाई संक्षिप्त रूपमा व्यक्त गर्दै श्रीधर स्वामी लेख्नुहुन्छ—

**चरणस्मरणं प्रेम्णा तव देव सुदुर्लभम्।**
**यथा कथञ्चिन्नृहरे मम भूयादहर्निशम्।।**

अर्थात्, हे नृसिंह प्रभो ! प्रेमपूर्वक हजुरको चरणस्मरण गर्नु असाध्यै दुर्लभ छ, त्यसैले म दिनरात सधैँ कसैगरी भए पनि हजुरलाई सम्झिरहन सकूँ।

यहाँ शत्रुता, प्रेम आदिद्वारा चिन्तन गर्नेमध्ये प्रेमपूर्वकको चिन्तनलाई नै सुदुर्लभ भनिएको छ। यद्यपि द्वेष, भय आदि भावहरूद्वारा निरन्तर चिन्तन हुन्छ, तर पनि त्यहाँ परमात्माको आनन्द प्रस्फुटित हुँदैन। विरोधी भावले युक्त भएकाले यी व्यक्तिहरू परमात्मचिन्तनमा सुख पाउँदैनन्, मरेपछि मात्र परमात्मालाई पाउँछन्। भक्तहरू चाहिँ भक्तिपूर्वक चिन्तन गर्दा यहाँ पनि परम आनन्द पाउँछन् अनि मरेपछि पनि परमानन्द पाउँछन्। त्यसैले साधना र साध्य दुबै स्थितिमा आनन्ददायक भएकाले भगवान्‌मा प्रेमपूर्वक मन लगाउनु नै सर्वोत्कृष्ट र शास्त्रसम्मत ठहर्छ।

**क इह नु वेद बतावरजन्मलयोऽग्रसरं**
**यत उदगादृषिर्यमनु देवगणा उभये।**
**तर्हि न सन्न चासदुभयं न च कालजवः**
**किमपि न तत्र शास्त्रमवकृष्य शयीत यदा॥ २४॥**

**पदार्थ—**
**बत** = निश्चय नै
**इह** = यो संसारमा
**अवरजन्मलयः** = पछि जन्मने र मृत्यु हुने
**कः नु** = कुन प्राणीले
**अग्रसरं** = सृष्टिभन्दा पहिलेदेखि सिद्ध हुनुभएका हजुरलाई
**वेद** = जान्दछ
**यतः** = जसबाट
**ऋषिः** = ब्रह्मा
**उदगात्** = उत्पन्न हुनुभयो
**यम् अनु** = जसपछि
**उभये** = आध्यात्मिक र आधिदैविक
**देवगणाः** = देवगणहरू उत्पन्न भए
**यदा** = जब
**शास्त्रं** = शास्त्रलाई
**अवकृष्य** = लीन गरी
**शयीत** = प्रलयनिद्रामा मस्त भई सुत्नुहुन्छ
**तर्हि** = त्यस समयमा
**सत्** = कार्यप्रपञ्च र
**असत्** = कारण महत्तत्त्व आदि
**न** = हुँदैनन्
**उभयं च न** = दुबैबाट बनेको शरीर समेत हुँदैन
**कालजवः च न** = कालको वेगसमेत हुँदैन
**तत्र** = त्यहाँ
**किम् अपि न** = केही पनि रहँदैन

**वाक्यार्थ—** हे भगवान् ! यस संसारको सृष्टि हुनुभन्दा पहिलेदेखि नै विद्यमान हजुरलाई पछि उत्पन्न र नष्ट हुने स्वभाव भएको कुन प्राणीले जान्न सक्दछ र? हजुरबाट सबैभन्दा पहिले ब्रह्माजी उत्पन्न हुनुभयो। ब्रह्माजीपछि आध्यात्मिक र आधिभौतिक अरू देवताहरू उत्पन्न भए। जब प्रलयकालमा सम्पूर्ण सृष्ट पदार्थहरूलाई आफूमा लीन गरेर हजुर प्रलयनिद्रामा मस्त भई

सुत्नुहुन्छ, त्यस समयमा जीवात्माहरूसँग हजुरलाई जान्ने कुनै साधन हुँदैन, किनभने त्यस समयमा न त सत् शब्दवाच्य स्थूल आकाश आदि पदार्थ हुन्छन्, न त असत् शब्दवाच्य महत् आदि तत्त्वहरू नै हुन्छन्, न त त्यस समयमा सत् असत्‌बाट बनेको स्थूल शरीर नै हुन्छ। न त त्यहाँ प्रकृतिका गुणहरूमा क्षोभ उत्पन्न गर्ने काल नै हुन्छ। केही पनि हुँदैनन्। (जब यी पदार्थहरूकै अभाव छ भने इन्द्रिय र प्राण आदि हुने कुरै भएन। त्यस समयमा वेद आदि शास्त्रहरू पनि हुँदैनन्। अनि हजुरलाई त्यस समयमा जीवात्माहरूले कुन साधनले जान्ने ?)

**विवरण–** यस श्लोकमा भगवान् प्रलयनिद्रामा मस्त भई सुत्नुभएको वेलामा प्राणीहरूले परमात्मालाई जान्न सक्दैनन् भनी बताइएको छ। **अवरजन्मलयः** पदको अर्थ हुन्छ, **अवरं पश्चात्, जन्मलयौ वर्तेते यस्य सः** अर्थात् जसको उत्पत्ति एवं नाश पछि हुन्छ। सृष्टिकालमा पञ्चमहाभूतको सृष्टिपछि सबभन्दा पहिला ब्रह्माजी उत्पन्न हुनुभयो। त्यसपछि प्राणीका अनेक कर्मसंस्कारहरूका आधारमा अनेक योनिमा उनीहरूलाई ब्रह्माजीले नै उत्पन्न गर्नुभयो। सम्पूर्ण देवताहरू पनि परमात्माबाट नै उत्पन्न भएका हुन्। यसरी सारा संसारको उत्पत्ति हुनुभन्दा अघि परमात्मा नै हुनुहुन्थ्यो। यो सृष्टिको उत्पत्ति हुनुअघि केवल सत् तत्त्व मात्र थियो र त्यो तत्त्व परमात्मा हुनुहुन्थ्यो। यसैलाई श्लोकमा आएको **अग्रसरं** यो शब्दले जनाएको छ। पछि उत्पन्न भएको कुनै पनि कार्यले आफ्नो कारणको विषयमा निर्क्योल गर्न सक्दैन। घैँटो उत्पन्न हुनुअघि माटोको अवस्था के कस्तो थियो ? यो घैँटोबाट पत्ता लाग्ने कुरा होइन। यसैले सृष्टिमा पछि उत्पन्न भएका प्राणीहरूले आफ्ना कारण परमात्मालाई ठिक-ठिक जान्न सक्दैनन् भन्नु यस श्लोकको आशय हो। यहाँ **देवगणाः** यो शब्दले आध्यात्मिक र आधिदैविक दुबै देवताहरूलाई लिन सकिन्छ। आधिदैविक देव भनेर अग्नि, वायु, वरुण, इन्द्र आदि प्रसिद्ध देवता नै भए भने आध्यात्मिक देवता भनेका चाहिँ इन्द्रियहरू हुन्। **उभये** अर्थात् यी दुबैथरी देवताहरूको उत्पत्तिपछि मात्र जगत्‌मा प्राणीहरूको शरीर उत्पन्न भएको हो।

यस श्लोकमा सृष्टिकालमा अनि सृष्टिपछि पनि प्राणीहरूले परमात्मालाई जान्न नसक्ने बताइएको छ। **देव** अर्थात् सम्पूर्ण इन्द्रिय र तिनका प्रेरक अधिष्ठाता देवताहरू पछि उत्पन्न भएका हुन्। ती सबैको उत्पत्ति हुने अधिष्ठान भनेको परमात्मा नै हुनुहुन्छ। सृष्टिकालमा प्राणीले केही पनि कुरा जान्नुपर्दा इन्द्रियहरूको नै सहायता चाहिन्छ। कान, आँखा, छाला आदि ज्ञानेन्द्रियहरूको माध्यमले नै प्राणीलाई वस्तुहरूको ज्ञान हुन्छ, तर यी सम्पूर्ण इन्द्रियहरूले मायाका कार्य स्थूल पदार्थहरूलाई मात्र देख्न सक्छन्। सूक्ष्म पदार्थहरू जो मायाकै कार्य हुन्, तिनलाई पनि यिनले ग्रहण गर्न सक्दैनन् भने मायाका पनि अधिष्ठान परमात्मालाई जान्न सक्ने कुरै आएन। देवता शब्दले इन्द्रियहरूलाई लिँदा ऋषि शब्दले मनलाई लिन सकिन्छ। **ऋषति गच्छति सङ्कल्पमात्रेण दूरम्** अर्थात् सङ्कल्पमात्रले टाढा-टाढा पुग्ने हुनाले मनलाई ऋषि भन्न सकिन्छ। यो मन इन्द्रियहरूभन्दा पनि पहिले उत्पन्न भएको हो अनि यसमा यिनीहरूभन्दा पनि सूक्ष्म पदार्थलाई देख्ने शक्ति विद्यमान छ। यसैलाई वेदमा **दूरङ्गमं ज्योतिषां ज्योतिः** (रुद्राष्टाध्यायी, १।५) अर्थात् टाढासम्म जान्न सक्ने अनि ज्योति अर्थात् विषयप्रकाशक इन्द्रियहरूको पनि ज्योति अर्थात् प्रकाशक मन हो भनिएको छ। फेरि मनद्वारा परमात्मालाई

देख्नुपर्दछ भनी बृहदारण्यकोपनिषद् (४।४।१९)मा भनिएको पाइन्छ— **मनसैवानुद्रष्टव्यम्** । त्यसैले मनले त परमात्मालाई देख्न सक्छ कि ? भन्दा वास्तवमा मनद्वारा पनि परमात्मालाई ठम्याउन सकिने देखिँदैन। परमात्मा मनको पनि कारण एवं अधिष्ठान हो। मन जहाँ पुग्दछ, त्यसको अधिष्ठानको रूपमा आत्मा पहिल्यैदेखि त्यहाँ विद्यमान छ। त्यसैले पछि उत्पन्न हुने मनले आत्मालाई बुझाउन सक्दैन।

उसो भए प्रलयकालमा परमात्माभित्रै पसेका हुनाले प्राणीहरूले उहाँलाई जान्न सक्छन् कि ? भन्ने शङ्कामा भनिन्छ, प्रलयकालमा त झन् इन्द्रिय, विषय आदि ज्ञानसामग्री केही पनि नभएकाले त्यस वेलामा प्राणीहरूले परमात्मालाई जान्न सक्दैनन्। प्रलयमा शास्त्र पनि परमात्मामा नै लीन भएको हुन्छ, त्यसको अभावमा प्राणीहरूले के आधारमा परमात्माको निश्चय गर्न सक्छन् र ? सत् अर्थात् मूर्त या स्थूल पदार्थ अनि असत् अर्थात् अमूर्त या सूक्ष्म पदार्थ दुबै प्रलयकालमा छैनन्। प्राणीका सबै इन्द्रिय र मनसमेत अविद्यामा लीन हुने हुनाले त्यस वेलामा तिनले परमात्मालाई जान्न सक्दैनन्। यसरी सृष्टि एवं प्रलयमा पनि कुनै पनि उपायले परमात्मालाई ठम्याउन नसकिने कुरा यहाँ जनाइएको छ।

यस श्लोकको भावलाई संक्षिप्त रूपमा बताउँदै श्रीधर स्वामी लेख्नुहुन्छ—

**क्वाहं बुद्ध्यादिसंरूढः क्व च भूमन्महस्तव ।**
**दीनबन्धो दयासिन्धो भक्तिं मे नृहरे दिश ।।**

अर्थात् हे सर्वव्यापक परमात्मा ! म कहाँ बुद्धि, इन्द्रिय आदिको आधारमा ज्ञान गर्ने सामान्य प्राणी अनि कहाँ कुनै पनि इन्द्रिय आदिले विषय नगरिने हजुरको अपार महिमायुक्त स्वरूप। त्यसैले हे दयासिन्धु ! हे दीनबन्धु ! मलाई भक्तिकै वर दिनुहोस्।

यसप्रकार यस श्लोकमा प्राणीका ज्ञानसाधन भएका इन्द्रिय आदिले परमात्मालाई प्राप्त गर्न नसक्ने हुँदा शरणागतिपूर्वक उहाँको भक्ति गर्नु नै एक मात्र उपाय भएको बताइएको छ।

यस श्लोकलाई श्रीकृष्णलीलापरक अर्थ गर्दा भने यहाँ वेणुनादको प्रशंसा गरिएको छ। सनातन गोस्वामी लेख्नुहुन्छ— **वेणोः माधुर्यवर्णनेन तं स्तुवन्ति** अर्थात् श्रुतिहरू वेणुको माधुर्य बताउँदै श्रीकृष्णको स्तुति गर्दछन्। **अग्रसरं** शब्दले वेणुलाई बुझाएको छ। **अग्रे- अन्तः शब्दरूपेण सरति प्रविशति** अर्थात् अन्तःकरणभित्र शब्दरूपले पस्ने भएकाले वेणु अग्रसर हो। त्यसलाई अनि त्यसको माधुर्यलाई कसले ठम्याउन सक्छ र ? भन्ने श्रुतिहरूको प्रश्न छ। **अवरजन्म** शब्दको अर्थ सामान्य प्राकृत शरीरको जन्म भन्ने हुन्छ। **अवरजन्मनः लयः नाशः अभावो वा यस्य सः** अर्थात् जसको सामान्य प्राकृत जन्म छैन, त्यस्ता चिद्रूप शरीर भएकाहरूले पनि यसको माधुर्यलाई ठम्याउन सक्दैनन्। सामान्यतया ऋषि भन्ने शब्दले वेदमन्त्रका द्रष्टाहरूलाई बुझाउँछ, तर यहाँ ऋषि शब्दले श्रीकृष्णको वंशीबाट निस्कने मोहनमन्त्ररूप नादलाई नै लिनुपर्दछ। **ऋषिः उदगात्** शब्दको अर्थ हुन्छ, मोहननाद आफैँ निस्कियो। यसले श्रीकृष्णको वंशी कहिलेकाहीँ आफैँ पनि बज्दछ भन्ने सूचना दिन्छ। **यं अनु** अर्थात् जुन वेणुनादलाई सुनिसकेपछि **देवगणाः** अर्थात् देवताहरू पनि प्रसन्न भई बाहिर निस्किए। यहाँ **उभये** अर्थात् दुईथरी देवगण भनिएको छ। यसको अर्थ रुद्र आदि एक थरी देवगण अनि अर्का चाहिँ भगवान्का पार्षदरूप गरुड, विष्वक्सेन,

जय आदि देवगण भन्ने हुन्छ। श्रुतिहरू भन्छन्— श्रीकृष्णको वंशी सौभाग्यशाली छ किनभने त्यो उहाँको ओठमै अडिइरहन्छ। गान्धर्वशास्त्रका गीत, नृत्य, बाजा आदिका जति पनि रस छन्, ती सबैलाई यसले फिक्का पारिदिन्छ। **शास्त्रं** अर्थात् गान्धर्वशास्त्रहरूलाई **अवकृष्य** अर्थात् पूरै आफैँमा तानी **तत्र** अर्थात् श्रीकृष्णको ओठमा जब यो **शयीत** अर्थात् अडिन्छ, तब **किमपि न** अर्थात् जगत्मा कुनै पनि वस्तु आफ्नो ठाउँमा अडिन सक्दैन। **सत् असत् उभयं च न** यो पदावलीले सत् असत् र उभयरूप प्राणीहरूले आफ्नो स्वाभाविकतालाई छाडी अर्कै हुने बताइएको छ। सत् भनेका चेतन प्राणीहरू हुन्, असत् भनेका जड ढुङ्गा आदि हुन्। अनि उभय भनेका जड–चतेन दुबै लाग्ने वृक्ष, लहरा आदि हुन्। श्रीकृष्णले बाँसुरी बजाएपछि चेतनप्राणी मूर्च्छित भई जड बन्दछन्, अनि जड भएका ढुङ्गाहरू समेत पग्लिई चेतन झैँ चलमलाउँछन्। मिश्रितयोनि रुखहरूले पनि आफ्नो स्वभाव छाड्दछन्। उनीहरूका हाँगाबाट मधुधारा निस्कन्छ, अनि ती चलमलाउँछन्। यही कुरा गोपिनीहरूले पनि बताएका छन्— **अस्पन्दनं गतिमतां पुलकस्तरूणां** (भागवत १०।२१।१९) अर्थात् गतिमान्हरू निःस्पन्द हुने अनि रुखहरू पुलकित भई हल्लिने, परिवर्तन देखिन्छ। यसरी जड–चेतन र उभयरूप प्राणीहरूले आ–आफ्नो स्वभावलाई छाडेको कुरा यहाँ बताइएको छ।

यसै गरी **कालजवः** अर्थात् कालको वेग पनि त्यो वेलामा ठप्प हुन्छ। रासलीलाको क्रममा श्रीकृष्णले वेणु बजाएपछि कालको वेग रोकिई एउटै रात ब्रह्मरात्रबराबर भएको बताइएको छ। सूर्य, चन्द्र आदि रोकिनाले कालको वेग रोकिएको अनुमान हुन्छ। **तत्र** अर्थात् त्यो वेलामा **न किमपि** अर्थात् केही पनि आफ्नो रूपमा रहँदैनन्। यसले नदी आदिलाई सूचित गरेको छ। श्रीकृष्णको वेणु सुनेर नदीहरूको वेग पनि रोकिने अनि उनीहरूले छालरूपी हातहरू निकाली श्रीकृष्णलाई अङ्कमाल गर्न खोज्ने कुरा बताइएको छ— **आलिङ्गनस्थगितमूर्मिभुजैर्मुरारेः** (भागवत १०।२१।१५)। यसरी सम्पूर्ण जगत् वंशीको धुनले मस्त भएको बताइएको छ। सनातन गोस्वामी लेख्नुहुन्छ— **सर्वमेव जगत् वेणुनादाम्बुधौ मज्जतीत्यर्थः** अर्थात् सम्पूर्ण जगत् नै वेणुनादको समुद्रमा डुब्छ भन्नु यो श्लोकको आशय हो।

**जनिमसतः सतो मृतिमुतात्मनि ये च भिदां**
**विपणमृतं स्मरन्त्युपदिशन्ति त आरुपितैः।**
**त्रिगुणमयः पुमानिति भिदा यदबोधकृता**
**त्वयि न ततः परत्र स भवेदवबोधरसे॥ २५॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **ये च** = जो जो दार्शनिकहरू | **सतः** = सत् रूप दुःखहरूको | **आत्मनि** = आत्मामा |
| **असतः** = असद्रूप जगत्को | **मृतिं** = विनाश अर्थात् मुक्ति (नैयायिक मत) | **भिदां** = भेद (साङ्ख्य मत) |
| **जनिं** = उत्पत्ति (वैशेषिक मत) | **उत** = यस्तै | **विपणं** = कर्मव्यवहारलाई |
| | | **ऋतं** = सत्य (मीमांसक मत) |

**स्मरन्ति** = सम्झिन्छन्
**ते** = ती व्यक्तिहरू
**आरुपितैः** = आरोपित भ्रमद्वारा
**उपदिशन्ति** = उपदेश गर्दछन्
**त्रिगुणमयः** = त्रिगुणमय
**पुमान् इति** = परमात्मा हुनुहुन्छ भन्ने
**भिदा** = भेद
**यदबोधकृता** = जसको स्वरूप नजान्नाले हुन्छ
**ततः** = त्यहाँबाट
**परत्र** = पर रहेको
**अवबोधरसे** = ज्ञानस्वरूप
**त्वयि** = हजुरमा
**सः** = त्यो भेद
**न भवेत्** = छैन

**वाक्यार्थ—** कारणमा नभएको कार्यको उत्पत्ति हुन्छ भनी वैशेषिकहरू भन्दछन्। नैयायिकहरू प्रमाण, प्रमेय आदि सोह्र पदार्थहरूको ज्ञान भएपछि हुने एक्काईस प्रकारका दुःखहरूको निवृत्तिलाई मुक्ति भन्छन्। साङ्ख्यहरू आत्मा अनेक छन् भनी स्वीकार गर्दछन्। मीमांसकहरू कर्मफलको व्यवहार सत्य हो भनी स्वीकार गर्दछन्, तर यी सम्पूर्ण दार्शनिकहरू तत्त्वदृष्टिले उपदेश नगरी आरोपित भ्रमलाई स्वीकार गरेर उपदेश गर्दछन्। परमात्माको अज्ञानको कारणले नै पुरुष त्रिगुणमय हो भन्ने भेद स्वीकार गरिएको हो। वस्तुतः अज्ञानदेखि पर रहेका ज्ञानस्वरूप हजुरमा त्यो भेद छैन।

**विवरण—** यस श्लोकमा परमात्माको विषयमा ठिक-ठिक निश्चय गर्न नसकी ठुला दार्शनिकहरू समेत भ्रममा परेको बताइएको छ। न्याय, वैशेषिक, योग, साङ्ख्य, मीमांसक यी सबै वेदलाई प्रमाण मान्ने दार्शनिक सम्प्रदाय नै हुन्। त्यसैले यिनीहरूलाई आस्तिक दर्शन भनिन्छ। छ ओटा आस्तिक दर्शनहरूमध्ये उपनिषत्प्रतिपाद्य वेदान्तले बाहेक अरू कसैले पनि वेदको परम तात्पर्य अद्वितीय परमात्मप्रतिपादनमा रहेको छ भनी ठम्याउन सकेनन्। उनीहरूमध्ये कसैले परमाणुलाई अनि कसैले प्रकृतिलाई जगत्कारण भने र द्वैतको प्रतिपादन गरिरहे। वेदको तात्पर्य ठम्याउन नसकेकाले ती दर्शनहरूले अनेक अमिल्दा कुरा बताएका छन् भनी यहाँ बताइएको छ। स्वयं वेदले आफ्नो तात्पर्य आफैँ प्रकट गरेकाले यहाँबाट उपनिषत्प्रतिपाद्य प्रामाणिकता निःसन्देह पुष्ट भएको छ।

**असतः जनिं** पदावलीले कारणमा पहिले नभएको कार्य पछि उत्पन्न भएको हो भनी मान्ने वैशेषिक सिद्धान्तलाई सङ्केत गरेको छ। यसल सिद्धान्तलाई असत्कार्यवाद भनिन्छ। कार्य कारणमा थिएन, यो पछि मात्र उत्पन्न भएको हो। यदि नभएको वस्तु उत्पन्न हुने हो भने माटोबाट सुनका गहना किन बनेनन् त ? यो शङ्कामा असत्कार्यवादीहरू उत्तर दिन्छन्— माटोमा घैँटो नभए तापनि घैँटो उत्पन्न गर्ने क्षमता रहेको छ। त्यस्तै सुनमा गहना उत्पन्न गर्ने सामर्थ्य रहेको छ। त्यसैले ती-ती कारणमा ती-ती कार्यको मात्र उत्पत्ति हुन सक्दछ। तर वेदान्तको दृष्टिमा भने असत् वस्तुको उत्पत्ति सम्भव छैन। कारणरूपमा सत् रहेको वस्तु मात्र जन्मिन सक्छ। जगत् ब्रह्मरूप नै भएको हुनाले यो आफ्नो कारणरूपमा नहुने कुरै आएन। यदि जगत् ब्रह्मरूपले थिएन भने त्यहाँबाट पृथक् रूपमा जन्मेको यो ब्रह्मभन्दा अलग सत्तावान् छ भन्ने शङ्का हुन सक्छ। त्यसैले असत्को उत्पत्ति भयो भन्ने दार्शनिकहरू भ्रान्त छन्। योग दर्शनमा पनि जीवमा पहिला ब्रह्मत्व थिएन, पछि योगानुष्ठान आदिद्वारा मात्र यो ब्रह्म बन्दछ भन्ने मानिन्छ। यसरी नभएको ब्रह्मरूपताको उत्पत्ति योगीहरू मान्दछन्। यो मत पनि उपनिषत्सम्मत छैन। किनभने यदि जीव अहिलेसम्म ब्रह्म थिएन

भने अब पनि कसै गरी ब्रह्म हुन सक्दैन। त्यसैले ब्रह्म नै भए पनि अज्ञानको कारणले अर्कै रूपमा प्रतीत भइरहेको जीव ज्ञानद्वारा फेरि ब्रह्मरूप नै हुन्छ भन्ने उपनिषद्को सिद्धान्तलाई नै मान्नुपर्ने देखिन्छ।

कुनै दार्शनिकहरू **सतः मृतिम्** अर्थात् सत् वस्तु नष्ट हुन्छ भन्दछन्। नैयायिकहरू संसार एवं सुख-दुःख आदि सबैलाई सत्‌रूप मान्दछन् अनि पछि ज्ञानद्वारा चाहिँ एक्काईस प्रकारकै दुःखको ध्वंस भई मोक्ष हुन्छ भन्दछन्। तर सत् वस्तुको नाश सम्भव छैन। **नाभावो विद्यते सतः** (श्रीमद्भगवद्गीता २।१६) अर्थात् सत् वस्तुको अभाव कहिल्यै छैन भनी भगवान्‌ले बताउनुभएको छ। यदि सुखदुःख आदि वास्तवमा नै सत् हुन् भने तिनीहरूको नाश कसरी भयो ? अनि पछि नाश हुने हुन् भने ती सत्य कसरी भए ? किनभने त्यो वस्तु नै सत्य हुन्छ, जुन वस्तु कहिल्यै नष्ट हुँदैन। त्यसैले यो नैयायिक मत पनि ठिक छैन।

फेरि साङ्ख्य आदि धेरैजसो दार्शनिक आत्मामा भेद मान्दछन्। **पुरुषबहुत्वं सिद्धम्** (सांख्यकारिका १८) अर्थात् प्रमाणद्वारा पुरुषहरू धेरै छन् भन्ने सिद्ध हुन्छ भन्ने उनीहरूको मत रहेको छ। तर चैतन्य तत्त्व धेरै हुन सम्भव छैन। यदि चैतन्यतत्त्व धेरै भयो भने त्यसको सर्वव्यापकतामा अनि सर्वरूपतामा हानि हुन्छ। परमसत्ता दुई वा तीन हुनै सक्दैन, किनभने दुई वा तीन या धेरै हुने बित्तिकै त्यो परमसत्ता नै हुन सक्दैन। यदि परमसत्तामा भेद मान्ने हो भने जगत्को उत्पत्ति आदि कसले गर्दछ ? यदि सबै काम एउटैले गर्दछ भन्ने हो भने अरू चैतन्य नाममात्रका चैतन्य हुने भए, तिनलाई अलग सत्तावान् किन मान्ने ? अनि सबै मिलेर गर्दछन् भने जगत् उत्पत्ति आदि गर्न अरू सबैको अपेक्षा हुने तिनीहरू निरपेक्ष परमसत्ता हुन सक्दैनन्। यदि छुट्टाछुट्टै रूपमा जगत् सृष्टि आदि गर्न सक्छन् भने एउटाले गरेको सृष्टिमा अर्कोले प्रलय गरिदिएमा जगत्को अव्यवस्था हुन सक्छ। त्यसैले बाहिर जति द्वैत या अनेक प्रतीत भए तापनि परम सत्तामा विभाजन या द्वैत मान्न सकिँदैन।

मीमांसकहरू **विपणम्** अर्थात् कर्मफलको भोगलाई सत्य मान्दछन्। भोग्दै जाँदा नष्ट हुँदै जाने पदार्थहरूलाई कसरी सत्य मान्न सकिन्छ र ? त्यसैले सबै दार्शनिकहरू **आरुपितैः** अर्थात् आत्मामा आरोपित भएका परमाणु, प्रकृति कर्म आदिलाई नै वास्तविक रूपमा लिई त्यसकै उपदेश गरिरहेका छन्। यहाँ उपदेश भन्नाले ती-ती दर्शनका सिद्धान्तलाई लिनुपर्दछ।

न्यायवैशेषिक दर्शनमा परमाणु नै जगत्को कारण हो, यसमा केवल परमाणुहरूको संयोगका लागि मात्र ईश्वरको आवश्यकता परेको हो। ईश्वरको इच्छाले आपसमा संयुक्त भएका परमाणुहरूले द्व्यणुक र त्रसरेणुको क्रमले विशाल विश्वको उत्पत्ति गर्दछन्। माटोलाई जोडी कुमालेले घैंटो बनाए झैं पहिल्यैदेखि रहेका परमाणुहरूलाई जोडी परमात्माले जगत् बनाएकाले जगत्प्रति ईश्वर निमित्त कारण हुनुहुन्छ भन्ने मानिन्छ। उता साङ्ख्य र योग दर्शनमा पनि प्रकृति र पुरुष नै तत्त्व अनि सबै कार्य गर्ने प्रकृति नै हो भन्ने मानिन्छ। मीमांसादर्शनमा भने सम्पूर्ण संसार कर्मकै कारणले उत्पन्न हुन्छ भनिन्छ। यदि परमात्मा तीन गुणहरूले युक्त हुनुहुन्थ्यो भने यी विभिन्न प्रतिपादनहरू मिल्दथे। किनभने आत्मा गुणहरूको कारणले अनेक रूपमा अनेक प्रकारले जगत्को कारण बनेको भनी सबै मतलाई सत्य मान्न सकिन्थ्यो, तर आत्मतत्त्व वस्तुतः निर्गुण

भएकाले एउटै आत्मामा यी अनेक प्रतिपादनहरू कसरी मिल्दछन् र ? त्यसैले दार्शनिकहरूले बताएको यो भेद **अबोधकृता** अर्थात् केवल अज्ञानका कारणले कल्पित भएको हो। एउटै आत्मतत्त्वलाई नजान्नाले यी दार्शनिकहरूले अनेक वादहरू बताएका छन्। जब कुनै पनि कुरामा अनेक विकल्प र विमति देखिन्छन् भने तिनीहरूको परस्पर विरोधले ती सबै आ-आफैँ अप्रामाणिक बन्दछन्। जगत्को विषयमा पनि अनेक दार्शनिकहरूको आफ्नै सिद्धान्त र विवाद भएकाले यसद्वारा त जगत्को उत्पत्ति नै प्रामाणिक होइन र यो वास्तवमा ब्रह्मरूप नै हो भन्ने वेदान्तको अजातवाद सिद्ध हुन पुग्दछ। त्यसैले माण्डूक्योपनिषत्कारिका (४।५)मा भनिएको छ— **ख्याप्यमानामजातिं तैरनुमोदामहे वयम्** अर्थात् अनेक दार्शनिकहरूले जगत् उत्पत्तिको सम्बन्धमा विवाद गरेर यो अप्रामाणिक भएको र वास्तवमा कुनै पनि उत्पत्तिक्रिया अमिल्दो भएकाले अजातवाद नै प्रामाणिक हो भनी बताइरहेका छन्, हामी तिनीहरूको झगडाबाट सूचित भएका अजातवादलाई अनुमोदन गर्दछौँ। परमात्मा ज्ञानस्वरूप एकरस हुनहुन्छ। उहाँमा यी भेद व्यवहारहरूको सम्बन्ध छैन किनभने यो सबै व्यवहार अज्ञानमूलक भएकाले ज्ञानस्वरूप परमात्मामा सम्भव छैन।

यस श्लोकको भाव प्रकट गर्दै श्रीधर स्वामी लेख्नुहुन्छ—

**मिथ्यातर्कसुकर्कशेरितमहावादान्धकारान्तर-**
**भ्राम्यन्मन्दमतेरमन्दमहिमँस्त्वज्ञानवर्त्मास्फुटम् ।**
**श्रीमन्माधव वामन त्रिनयन श्रीशङ्कर श्रीपते**
**गोविन्देति मुदा वदन् मधुपते ! मुक्तः कदा स्यामहम् ।।**

अर्थात्, हे भगवान् ! व्यर्थका अनेक कर्कश तर्कहरू एवं वाद-सिद्धान्तहरूको महाअन्धकारमा फसेर म भ्रान्त हुँदैछु। हजुरको महिमा अमन्द अर्थात् अनन्त छ भने म मन्दमति छु, त्यसैले हजुरलाई जान्ने उपाय छैन। हजुरलाई सम्झिनु बाहेक अरू कुनै उपाय नभएकाले म हजुरका माधव, वामन, त्रिनयन, श्रीशङ्कर, श्रीपति, गोविन्द आदि नामहरूको उच्चारण गर्दै कहिले मुक्त हुँला ?

यो श्लोकलाई श्रीकृष्णलीलापरक अर्थमा व्याख्या गर्दा भने यहाँ इन्द्रले गोकुलमा प्रलयकारी झन्झावात पठाएको बताइएको छ। श्रीकृष्णले इन्द्रयज्ञ रोकेपछि इन्द्रले गोकुललाई ध्वस्त गर्न भनेर प्रलयकालीन सांवर्तक नामका मेघलाई वृष्टि गर्न पठाए। असत् शब्दको अर्थ हुन्छ, दुष्ट मेघहरू। विध्वंसकारी यी मेघहरूको **जनिं** अर्थात् उत्पत्तिले **सतः** अर्थात् गोकुलको **मृतिं** अर्थात् नाश हुन्छ भन्नेमा विश्वस्त थिए। यिनीहरूले **स्मरन्ति** अर्थात् यही चिन्तन गरेर **उपदिशन्ति** त्यही अनुसारको आज्ञा पनि मेघलाई दिए। यिनीहरूको सङ्कल्प के थियो भन्ने बारे श्रीशुकदेवले **नन्दगोष्ठजिघांसया** (भागवत १०।२५।७) अर्थात् नन्दको गोकुललाई ध्वस्त गर्ने इच्छाले भन्ने पदद्वारा बताउनुभएको छ। त्यही सङ्केत यहाँ गरिएको छ। त्यस वेलामा इन्द्रले श्रीकृष्ण परमात्मा हुनुहुन्छ भन्ने बिर्सिएका थिए, उनले श्रीकृष्णलाई परमात्मा नभई सामान्य मानिस मानेका थिए। **आत्मनि** अर्थात् श्रीकृष्णमा **भिदा** अर्थात् परमात्माभन्दा भिन्नता छ या मनुष्यता छ भन्ने उनको विचार थियो। यसकै अभिव्यक्ति उनले कृष्णनिन्दाको वेलामा **वाचालं बालिशं**

**स्तब्धम्** (भागवत १०।२५।५) अर्थात् यो कृष्ण धेरै बोलिरहने, मूर्ख र अटेरी छ भनी गरेका छन्। नन्द आदिले सामान्य श्रद्धावश इन्द्रलाई श्रेष्ठ देवता मानी **विपणं** अर्थात् जुन इन्द्रध्वजोत्थापन आदि व्यवहार गर्दथे, त्यसैलाई नै ती अभिमानीहरू **ऋतं** अर्थात् सत्य र नित्य मान्थे। यो सबै सोचाइ र गराइ केवल **आरुपितैः** अर्थात् आफ्नै बुद्धिमा आरोपित अज्ञानद्वारा भएको थियो। यहाँ भगवान् श्रीकृष्णलाई **त्रिगुणमयः पुमान्** अर्थात् त्रिगुणमयी प्रकृतिका अधिष्ठाता भन्नु पनि अज्ञान भएको बताइएको छ। त्रिगुणात्मिका प्रकृतिका अधिष्ठाता भन्दा भगवान् साङ्ख्यसिद्धान्तीहरूले मानेका पुरुषसमान बन्नुहुन्छ। त्यहाँ पुरुषको जगत् उत्पत्ति आदिमा केही भूमिका र शक्ति छैन। तर श्रीकृष्ण सर्वशक्तिमान् हुनुहुन्छ र सम्पूर्ण सृष्टिको रूपमा उहाँ आफैँ नै प्रकट हुनुभएको छ। गीताको पन्ध्रौँ अध्यायमा भगवान्ले अक्षर पुरुषभन्दा पनि परमात्मतत्त्व अलग रहेको बताउनुभएको छ— **उत्तमः पुरुषस्त्वन्यः परमात्मेत्युदाहृतः** (श्रीमद्भगवद्गीता १५।१७) अर्थात् यी दुबै पुरुषभन्दा उत्तम पुरुष परमात्मा अलग हुनुहुन्छ। यसरी साङ्ख्यशास्त्रीय पुरुषभन्दा पनि पुरुषोत्तम श्रीकृष्ण श्रेष्ठ हुनुहुन्छ। श्लोकमा **ततः परम्** अर्थात् त्यो त्रिगुणात्मिका पुरुषभन्दा परमात्मा पर रहनुहुन्छ भनी यही अर्थलाई सङ्केत गरिएको छ। यद्यपि पुरुष त्रिगुणात्मिका प्रकृतिलाई चेतना दिने तत्त्व हो, तर श्रीकृष्ण पुरुषोत्तम हुनुभएकाले उहाँलाई **भिदा** अर्थात् परमात्माभन्दा भिन्न त्रिगुणमय पुरुषको रूपमा बताउनु अबोध अर्थात् अज्ञान हो। यसो भए इन्द्रले श्रीकृष्णलाई झन् सामान्य मनुष्य मानी उहाँमाथि गरेको आक्रमण कति अज्ञानमय थियो भन्ने ? जे होस् **त्वयि** अर्थात् हजुरमा **सः** अर्थात् अज्ञानद्वारा कल्पना गरिएको त्यो दुष्टसङ्कल्प **न भवेत्** अर्थात् सफल भएन। पछि उनले झुकेर हजुरको स्तुति गर्नुपर्‍यो। यसप्रकार यस श्लोकको कृष्णलीलापरक व्याख्या गरिएको छ।

यसप्रकार प्रस्तुत श्लोकमा श्रुतिहरूले अनेक दार्शनिकहरूको झगडालाई अमिल्दो भनी बताएर परमात्माको शरणमा भक्तिपूर्वक जानु नै ज्ञान एवं मोक्षको हेतु हो भन्ने कुरा बताइएको छ। श्रुतिहरूले दर्शनको वादविवादमा अल्झिनु राम्रो होइन भन्ने सूचित गरेका छन्। यसै गरी जगत् उत्पत्तिसम्बन्धी सबै धारणा बाझिएकाले परमात्माभन्दा भिन्न जगत् उत्पन्न नै नभएको अनि त्रिगुणमय पुरुष पनि परमात्माभन्दा भिन्न नभएको बताएर वेदहरूले यो प्रपञ्च अनि पुरुष दुबैलाई परमात्मादेखि अभिन्न रूपमा सिद्ध गरेका छन्।

**सदिव मनस्त्रिवृत्त्वयि विभात्यसदामनुजात्**
**सदभिमृशन्त्यशेषमिदमात्मतयात्मविदः।**
**न हि विकृतिं त्यजन्ति कनकस्य तदात्मतया**
**स्वकृतमनुप्रविष्टमिदमात्मतयावसितम्॥ २६॥**

**पदार्थ–**
**आमनुजात्** = मनुष्य (जीव) लगायत
**त्रिवृत्** = त्रिगुणात्मक प्रपञ्च
**असत्** = असत् र
**मनः** = मनद्वारा कल्पित भएर

पनि
**त्वयि** = अधिष्ठान हजुरमा रहेर
**सत् इव** = सत्य झैँ
**विभाति** = प्रतीत हुन्छ
**आत्मविदः** = आत्मज्ञानीहरू चाहिँ
**अशेषं** = सम्पूर्ण
**इदं** = यो जगत्‌लाई
**आत्मतया** = आत्मरूपले नै
**सत्** = सत्य
**अभिमृशन्ति** = मान्दछन्
**हि** = निश्चय नै (सुन खोज्ने व्यक्तिहरू)
**तदात्मतया** = सुनकै स्वरूप भएकाले
**कनकस्य** = सुनका
**विकृतिं** = गहनाहरूलाई
**न त्यजन्ति** = छोड्दैनन्
**स्वकृतं** = आफैँद्वारा रचित
**इदं** = यो जगत्‌मा
**अनुप्रविष्टं** = प्रविष्ट भएका परमात्मा
**आत्मतया** = पुरुषरूपले
**अवसितम्** = निश्चित हुनुहुन्छ

**वाक्यार्थ–** यो त्रिगुणात्मक प्रपञ्च र जीव यी दुबै मनद्वारा कल्पित वा असत्य भएर पनि हजुरको सत्तालाई प्राप्त गरेर सत्य झैँ प्रतीत भइरहेका छन्। जसरी सुन चाहने मानिसले सुनबाट बनेका गहनालाई सुन नै हो भनी निश्चय गरी त्यसको परित्याग गर्दैनन् त्यसै गरी आत्मज्ञानी पुरुषहरू भोक्ता र भोग्यको रूपमा प्रतीयमान सम्पूर्ण जगत् आत्मरूपले परमात्मा भन्दा अलग होइन भन्ने निश्चय गर्दछन् र जगत्‌को परित्याग गर्दैनन्।

**विवरण–** यो श्लोकमा परमात्मा नै प्रपञ्च एवं पुरुषरूपले हुनुहुन्छ भनी बताइएको छ। अघिल्लो श्लोकमा प्रपञ्च एवं पुरुष परमात्माभन्दा भिन्न रूपमा सिद्ध हुँदैनन् भनी बताइएको थियो। उसो भए यिनीहरू सत् रूपमा कसरी प्रतीत भइरहेका छन् त ? भन्ने शङ्का हुँदा यो श्लोकमा ती दुबै परमात्माकै कारणले सत् रूपमा प्रतीत भएको बताइएको छ। **त्रिवृत्** अर्थात् त्रिगुणात्मक प्रपञ्च वास्तवमा मनको विलास मात्र हो। त्यसैले श्लोकमा आएको **मनः** शब्दको अर्थ मनद्वारा कल्पित भन्ने हो। वास्तवमा सम्पूर्ण संसार मनको विलास एवं भ्रमरूप हो। डोरीमा सर्प अनि सिपीमा चाँदी छैन, तर देख्ने व्यक्तिको मनको कल्पनाले त्यहाँ सर्प एवं चाँदी उत्पन्न गरिदिन्छ। जुन भ्रम हुन्छ, त्यो प्रमाणतः देखिएको हुँदैन, अपि तु मनको कल्पनाले मात्र देखिएको हुन्छ। जहाँ त्रिगुणात्मक प्रपञ्चको स्फुरण छ, त्यहाँ मन छ अनि जहाँ मन छैन त्यहाँ त्रिगुणात्मक प्रपञ्चको स्फुरण छैन। कुनै पनि वस्तु उपलब्ध नभए, त्यसबाट त्यो वस्तुको अभावज्ञान गरिन्छ, यसलाई अनुपलब्धि प्रमाण भनिन्छ। इन्द्रियले ग्रहण गर्न योग्य वस्तु यदि अनुपलब्ध हुन्छ या देखिँदैन भने त्यसको अभावको निश्चय हुन्छ। प्रपञ्च पनि इन्द्रियग्राह्य वस्तु हो, जाग्रत् र स्वप्नमा देखिए तापनि सुषुप्तिमा नदेखिने हुनाले त्यो वेलामा यसको अभावको ज्ञान हुन्छ। जुन वस्तुको सुषुप्तिमा अभाव छ, त्यसलाई कसरी सत् मान्न सकिन्छ र ? किनभने जो सधैँ रहन्छ, त्यसलाई मात्र सत् भनिन्छ। त्यसैले सुषुप्तिमा नभएकाले जगत् सत्य होइन भनी विवेकचूडामणि (२३६)मा भनिएको छ– **यदि सत्यं भवेद् विश्वं सुषुप्तावुपलभ्यताम्। यन्नोपलभ्यते किञ्चिदतोऽसत् स्वप्नवन्मृषा।** अर्थात् यदि विश्व सत्य हुन्थ्यो भने त्यो सुषुप्ति अवस्थामा पनि उपलब्ध हुनु पर्थ्यो। सुषुप्तिमा जगत् हुँदैन त्यसकारण जाग्रत्‌मा देखिएको जगत् पनि केवल स्वप्न झैँ झुठो हो। भागवत (११।१३।३४)मै पनि **ईक्षेत विभ्रममिदं मनसो विलासं** अर्थात् यो जगत्‌लाई केवल मनको कल्पना र भ्रम हो भनी विचार गर्नू भनिएको छ। त्यसैले यस श्लोकमा **मनः** अर्थात् मनद्वारा कल्पित भएको त्रिगुणात्मक प्रपञ्च असत् हो भनिएको छ।

**इदं** बुद्धिले विषय गर्ने प्रपञ्च मात्र होइन, **अहं** अर्थात् म हुँ भन्ने बुद्धिले विषय गर्ने चेतन प्राणीहरू पनि आत्मामा कल्पित भएका हुन्। त्यसैलाई बुझाउन श्लोकमा **आमनुजात्** भन्ने पद आएको छ। **मनुज** भनेर यहाँ जीवलाई लिनुपर्दछ। जीवदेखि जगत्सम्म सम्पूर्ण वस्तुहरू मनको भ्रमद्वारा कल्पित भएका हुन्। भ्रमद्वारा नै जीवहरू अनेक पदार्थ एवं लोक-लोकान्तरका कल्पना गर्दछन् र अज्ञानमै घुमिरहन्छन्। यहाँ के शङ्का हुन्छ भने पुरुष र प्रपञ्च दुबै मनको भ्रम भए मन त त्यसको कारण भएकाले सत्य नै होला अनि फेरि द्वैतको शङ्का भइहाल्यो नि त ? यसको उत्तर हो, **मनः** अर्थात् मन पनि स्वरूपतः नभएकै वस्तु हो। वेदान्तमा अन्तःकरण उपाधिद्वारा नै जीवभाव खडा भएको मानिन्छ। महाकाशमा घट उत्पन्न भएपछि घटाकाश पनि जन्म्यो भन्ने व्यवहार भए झैं आत्मामा अन्तःकरण उपाधि उत्पन्न भएपछि त्यहाँ जीव पनि उत्पन्न भयो भन्ने व्यवहार हुन्छ। यसरी जीवभावको कारण अन्तःकरणलाई मानिन्छ। तर यो अन्तःकरण पनि स्वरूपतः असत् वस्तु नै हो। किनभने जुन वस्तु उत्पन्न हुन्छ र नष्ट हुन्छ, त्यसलाई सत् मान्न सकिँदैन। मन पनि अज्ञानको कारणले कल्पित हुने हुँदा त्यो पनि असत् नै हो। त्यसैले सम्पूर्ण संसार भ्रमद्वारा नै कल्पित भएको हो।

यहाँ शङ्का के हुन्छ भने सबै पदार्थ अविद्याद्वारा कल्पित भएको भए ब्रह्मज्ञानीहरूले त यो केही पनि नदेख्नुपर्ने। उनीहरूले पनि जगत्लाई यस्तै देखेकाले यसलाई कल्पित भनी मान्न मिल्दैन। यसको उत्तरमा भनिन्छ– **आत्मविदः** अर्थात् आत्मज्ञानीहरूले चाहिँ जगत्लाई जगत्को रूपमा नभई **आत्मतया** अर्थात् आत्माकै रूपमा सत् मान्दछन्। जसरी डोरीमा देखिएको सर्प सर्परूपले मिथ्या हो अनि वास्तवमा चाहिँ त्यो डोरी नै हो, त्यसै गरी प्रपञ्च पनि नाम र रूपको दृष्टिमा मिथ्या हो अनि ब्रह्मरूपले सत्य नै हो। वेदान्तमा अध्यस्त वस्तुको सत्तालाई अधिष्ठानकै सत्ता मानिन्छ। भनिएको पनि छ– **नाधिष्ठानात् भिन्नतारोपितस्य** अर्थात् आरोपित वस्तु अधिष्ठानदेखि भिन्न हुँदैन। **कनकस्य** अर्थात् सुनको **विकृतिं** अर्थात् विकार गहनालाई के सुन भनिँदैन र ? त्यसै गरी **तदात्मतया** अर्थात् प्रपञ्चको रूपले यसभित्र प्रवेश गर्ने परमात्मा नै भएकाले ज्ञानीहरू यो सबैलाई आत्मतया अर्थात् आत्मरूपले नै निश्चय गर्दछन्।

श्रीकृष्णलीलापरक व्याख्या गर्दा भने यहाँ सम्पूर्ण विश्व अनि वृन्दावन आदि धामलाई श्रीकृष्णकै रूपमा बताइएको छ। **आमनुजात्** अर्थात् मानिसदेखि लिएर सम्पूर्ण भुवन **मन इव** अर्थात् मन झैं अस्थिर एवं अनित्य भए तापनि **त्वयि** अर्थात् श्रीकृष्णमा नै **सत् विभाति** सत् रूपले देखिएका छन्। यो प्रपञ्च **त्रिवृत्** अर्थात् तीन थरी तापहरूद्वारा आवृत पनि छ। तापनाशक हजुरको आगमनको कारणले नै यो संसार राम्रो झैं देखिएको छ। उसो भए नित्यलीलास्थल भनिने वृन्दावन आदि पनि असत् एवं तापयुक्त नै छन् त ? भन्ने शङ्कामा भनिन्छ– **इदं अशेषं** अर्थात् वृन्दावन आदि धाम र त्यसले युक्त सम्पूर्ण जगत्लाई **आत्मविदः** अर्थात् अन्तर्यामी रूपले हजुरलाई देख्नेहरूले चाहिँ **सत्** अर्थात् हजुरकै रूपमा देख्दछन्। किनभने **आत्मतया** अर्थात् चिद्रूप परमात्मा आफैँ नै ती अनेक रूपमा रहनुभएको छ। **स्वकृतं** अर्थात् यो प्रपञ्च परमात्माबाट नै रचित हो, अनि **आत्मतया अनुप्रविष्टम्** अर्थात् यसभित्र आत्मरूपले पस्ने ती परमात्मा नै हुनुहन्छ। त्यसैले यो सबै जगत् श्रीकृष्णकै स्वरूप हो भनी ज्ञानी भक्तहरू भन्दछन्।

श्रीधर स्वामी यस श्लोकको अर्थमा आफ्नो भाव थप्दै लेख्नुहुन्छ–

**यत्सत्वतः सदा भान्ति जगदेतदसत्स्वनः।**
**सदाभासमसत्यस्मिन् भगवन्तं भजाम तम्।।**

अर्थात् स्वयं असत् भए पनि यो जगत् जसको सत्ताको कारणले सत् रूप देखिन्छ, त्यस्ता असत्यमा पनि सत् रूपले देखिने परमात्मालाई भजन गर्दछौं।

यसप्रकार यस श्लोकमा सम्पूर्ण जगत् एवं जीवहरू पनि परमात्मामा कल्पित भएकाले असत् रूप हुन् अनि परमात्मा चाहिँ ती सबैभित्र सत्‌रूपले पसी सबैलाई सत्य झैं प्रतीत गराइदिने तत्त्व हुनुहुन्छ भनी स्तुति गरिएको छ।

**तव परि ये चरन्त्यखिलसत्त्वनिकेततया**
**त उत पदाक्रमन्त्यविगणय्य शिरो निर्ऋतेः।**
**परिवयसे पशूनिव गिरा विबुधानपि तां-**
**स्त्वयि कृतसौहृदाः खलु पुनन्ति न ये विमुखाः॥ २७॥**

**पदार्थ–**
**ये** = जो व्यक्तिहरू
**अखिलसत्त्वनिकेततया** = सम्पूर्ण जगत्‌को अधिष्ठानको रूपमा
**तव** = हजुरको
**परिचरन्ति** = उपासना गर्दछन्
**ते** = तिनीहरूले
**उत** = निश्चय नै
**निर्ऋतेः** = मृत्युको
**शिरः** = शिरलाई
**अविगणय्य** = तिरस्कार गर्दै
**पदा** = पैतालाले
**आक्रमन्ति** = टेक्दछन्
**तान्** = भक्तिरहित ती
**विबुधान् अपि** = विद्वान्‌हरूलाई पनि
**गिरा** = वेदरूपी वाणीद्वारा
**पशून् इव** = पशुहरूलाई झैं
**परिवयसे** = बाँध्नुहुन्छ
**खलु** = निश्चय नै
**त्वयि** = हजुरमा
**कृतसौहृदाः** = प्रेमभाव राख्ने व्यक्तिहरू
**पुनन्ति** = (जगत्‌लाई) पवित्र गर्दछन्
**ये** = जो व्यक्तिहरू
**विमुखाः** = हजुरबाट विमुख छन्
**न** = तिनीहरूले गर्दैनन्

**वाक्यार्थ–** हे भगवान्! जुन व्यक्तिहरू सम्पूर्ण प्राणीहरूको अधिष्ठानको रूपमा हजुरको भजन गर्दछन्, तिनै भक्तहरू मृत्युको शिरलाई तिरस्कार गर्दै पैतालाले कुल्चेर संसारबाट पार हुन्छन्। जो हजुरको भक्तिबाट विमुख छन् उनीहरूले विद्वान् नै भए पनि हजुरको वेदवाणीरूपी बन्धनबाट पार पाउन सक्दैनन्। हजुरसँग जो प्रेम गर्दछन्, तिनीहरूले आफूलाई पवित्र गर्दछन् र अरूलाई पनि पवित्र गर्दछन्। जो व्यक्ति हजुरबाट विमुख हुन्छन् तिनीहरू न आफू पवित्र हुन्छन् न त उनीहरूले अरूलाई पवित्र गराउन नै सक्दछन्।

**विवरण–** यस श्लोकमा सर्वान्तर्यामी रूपमा परमात्माको भजन गर्नेहरूले मृत्युलाई पनि जित्दछन् भनी बताइएको छ। **अखिलसत्त्वनिकेत** शब्दको अर्थ हुन्छ– **अखिलानि सत्त्वानि निकेतो यस्य सः** अर्थात् सम्पूर्ण प्राणीहरू जसका निवास हुन्। परमात्माको घर भनेको सबैको हृदय नै

हो। जसरी सहरभित्र मुख्य स्थानमा राजाको निवास हुन्छ त्यसै गरी शरीररूपी सहरको हृदयरूपी घरमा परमात्माको निवास छ। यसैले छान्दोग्योपनिषद् (८।१।२)मा **यदिदमस्मिन् ब्रह्मपुरे दहरं पुण्डरीकं वेश्म** अर्थात् ब्रह्मको सहर यस शरीरमा हृदयकमल नै उहाँको घर हो। आत्माको उपलब्धि गर्ने ठाउँ हृदय भएकाले त्यसलाई आत्माको निवास भनी बताइएको हो। यसैले गीतामा पनि ईश्वर सबै प्राणीहरूको हृदयदेशमा बस्दछन्— **ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति** (श्रीमद्‌भगवद्‌गीता १८।६१) भनी बताइएको पाइन्छ। यसरी सबैभित्र परमात्मा रहेको बुझी जसले परमात्माको उपासना गर्दछन् तिनीहरूले मृत्युलाई पनि तिरस्कारपूर्वक अतिक्रमण गर्दछन्। अङ्घ्रि **पदा आक्रमन्ति** अर्थात् आफ्नो पैतालाले मृत्युको शिरमाथि टेक्दछन् भनिएको छ। यसको कथा प्रसङ्ग ध्रुवचरित्रमा आउँछ। ध्रुव पृथ्वीबाट दिव्य लोकमा जाने वेलामा भगवान्‌को विमानसँगसँगै मृत्यु पनि आयो, तर ध्रुव मृत्युलाई नै सिँढी बनाई मृत्युको शिरमाथि टेकेर दिव्य विमानमा चढे। **मृत्योर्मूर्ध्नि पदं दत्वा आरुरोहाद्‌भुतं गृहम्** (भागवत ४।१२।३०) अर्थात् मृत्युकै शिरमाथि पाउ राखी त्यो दिव्य विमानमा उनी चढे। यसरी भगवान्‌का भक्तले मृत्युलाई जित्ने स्पष्ट छ।

भक्ति नै जन्ममृत्युमय संसारबन्धनबाट पार तर्ने उपाय हो भन्दै वेदहरू बताउँछन्— यदि व्यक्ति भगवान्‌को भक्त छैन भने त्यस्ता ज्ञानीहरूलाई पनि हजुर आफ्नो **गिरा** अर्थात् वेदरूप वाणीद्वारा **परिवयसे** अर्थात् बाँधिदिनुहुन्छ। यहाँ ज्ञानी भनेर परमात्मतत्त्वको ज्ञान नभएका शास्त्रज्ञहरूलाई लिनुपर्दछ। किनभने तिनीहरूलाई मात्र संसारको बन्धन सम्भव छ। शास्त्र जान्ने बित्तिकै परमात्मतत्त्वको ज्ञान हुने अनि मोक्ष हुने होइन। यसका लागि त भक्तिको आवश्यकता पर्दछ। भक्तिविनाका केवल शास्त्रवेत्ताहरूलाई चाहिँ भगवान्‌ले आफ्नो वेदरूपी वाणीद्वारा नै संसारमा बाँधिदिनुहुन्छ। यो भन्नुको आशय के हो भने भक्तिविना भित्रका वासनाहरूको नाश हुन सम्भव छैन। वासनाको नाश नभएसम्म व्यक्ति जति शास्त्र जान्ने भए पनि कर्मफलहरूलाई सत्य मानी तिनमा आसक्त भइहाल्दछ। वेदमा अनेक कर्म गरी अनेक फल पाइने चर्चा सुनेपछि ती व्यक्तिहरू स्वभावतः तिनै सकाम कर्महरूमा लाग्दछन् र बारम्बार कर्मफल भोग्न संसारमा जन्मिरहन्छन्। भक्तहरू चाहिँ परमात्माबाहेक अरू कोही चाहँदैनन् र उनीहरूमा संसारको वासना नै हुँदैन। त्यसैले तिनीहरू यहाँ बाँधिदैनन्। मृत्युलाई जित्न अर्थात् मोक्षका लागि भक्तिको अनिवार्यता बताउँदै श्रीधर स्वामी लेख्नुहुन्छ— **भगवत्परिचर्यया तु सम्यगमलचित्तानां तत्प्रसादेन लब्धापरोक्षज्ञानानां अयन्तन एव करकलितो मोक्षः** यसको आशय के हो भने परमात्मतत्त्व सबैको हृदयको प्रकाशकको रूपले अपरोक्ष हुने भए पनि भक्तिरहित व्यक्तिहरूको चित्त मलिन हुने भएकाले उनीहरूका लागि परमात्मा परोक्ष मात्र हुनुहुन्छ। शास्त्रबाट परमात्मालाई राम्रोसँग जाने पछि उनीहरूको ज्ञान अपरोक्ष हुन सक्दैन। त्यसैले त्यो **अनपरोक्षभ्रमनिवृत्तिसमर्थम्** अर्थात् अपरोक्ष भ्रमलाई हटाउन समर्थ हुँदैन। **भगवत्परिचर्या** अर्थात् भगवान्‌को सेवाबाट चाहिँ व्यक्तिको चित्त पूर्णतया निर्मल हुन्छ। अनि भगवान्‌कै प्रसन्नताले तिनीहरूको हृदयमा अपरोक्ष ज्ञान उत्पन्न हुन्छ। यसरी भक्तहरू स्वतः नै मुक्त हुन्छन्। त्यसैले भगवान्‌का भक्तहरूले संसारलाई पवित्र पार्दछन् भने अभक्तहरू चाहिँ आफ्नै अन्तःकरण पनि पवित्र नभएकाले उनीहरूले कसैलाई पनि पवित्र पार्न सक्दैनन्।

यस श्लोकलाई श्रीकृष्णलीलाको रूपमा अर्थ्याउँदा यहाँ याज्ञिक ब्राह्मणहरूभन्दा सामान्य जातिका भक्तहरू नै श्रेष्ठ भएको जनाइएको छ। सनातन गोस्वामी लेख्नुहुन्छ— **ननु कंसभयात् वने निलीनस्य कथं स्तुतिः** अर्थात् कंसदेखि डराएर मथुराबाट भागी वृन्दावनमा लुक्नेलाई परमात्मा भनी किन स्तुति गर्ने ? यो शङ्काको उत्तर दिँदै श्रुतिहरू यो श्लोकमा भगवान् त के भगवान्‌का चरणसेवक भक्तहरू पनि निर्भय हुने बताउँछन्। यहाँ **अखिलसत्त्वनिकेत** यो पदद्वारा भगवान्‌लाई सम्बोधन गरिएको छ। हे सबैका अन्तर्यामी परमात्मा ! भन्ने यसको अर्थ हो। **तया** अर्थात् भगवान्‌कै अन्तरङ्ग स्वरूप भएकी श्रीराधासँग **तव** हजुरको चिन्तन गरी जो **परिचरन्ति** अर्थात् सेवा गर्दछन्, तिनीहरूले मृत्युलाई पनि अतिक्रमण गर्दछन्। जो भक्त छैनन्, ती विद्वान् नै भए पनि तिनलाई हजुर **गिरा** अर्थात् आफ्नो वेदरूप वाणीद्वारा कर्मको फन्दामा **परिवयसे** अर्थात् बाँधिदिनुहुन्छ। व्रजमण्डलका याज्ञिक ब्राह्मणहरूले कर्मको बन्धनमा परी भगवान्‌लाई नै अनादर गरेका र पछि पश्चात्ताप गरेको कथा बताइसकिएको छ। भगवान्‌मा मन लगाउनेहरू सामान्य जातिका व्यक्ति नै भए पनि ती पवित्र हुन्छन् र यिनीहरूले सम्पूर्ण जगत्‌लाई नै पवित्र बनाउँछन्। यसमा गोपगोपिनीहरू स्वयं दृष्टान्त छन्। उद्धवजीले भागवत (१०।४७।६३)मा यिनको चरणधूलिलाई पनि नमस्कार गर्दै भन्नुभएको छ— **वन्दे नन्दव्रजस्त्रीणां पादरेणुमभीक्ष्णशः, यासां हरिकथोद्‌गीतं पुनाति भुवनत्रयम्** अर्थात् जुन यी गोपिनीहरूले गाएको हरिकथाले तीनै भुवनलाई पवित्र पारिदिन्छ। भगवान्‌बाट विमुख व्यक्तिहरू भने आफैँ पनि पवित्र हुँदैनन्, तिनले अरूलाई पवित्र गर्ने के कुरा ?

श्रीधर स्वामी यस श्लोकको भावार्थलाई संक्षेपमा बताउँदै भन्नुहुन्छ—

**तपन्तु तापैः प्रपतन्तु पर्वतादटन्तु तीर्थानि पठन्तु चागमान्।**
**यजन्तु यागैर्विवदन्तु वादैर्विना हरिं नैव मृतिं तरन्ति।।**

अर्थात् तपस्याको तापमा तप्त होऊन्, अथवा पहाडबाट खसून्। तीर्थमा भड्किऊन् अथवा वेदहरूको अध्ययन गरून्, यज्ञहरू गरून् अथवा अनेक दर्शनको वादविवाद गरून्, हरिको भक्तिविना तिनीहरूले मृत्युलाई तर्न सक्दैनन्।

यसप्रकार प्रस्तुत श्लोकमा भक्तिविना शास्त्राध्ययन आदिको बलले मात्र कसै गरी पनि मृत्युबाट तर्न या मुक्त हुन नसकिने कुरा बताइएको छ।

**त्वमकरणः स्वराडखिलकारकशक्तिधर-**
**स्तव बलिमुद्वहन्ति समदन्त्यजयानिमिषाः।**
**वर्षभुजोऽखिलक्षितिपतेरिव विश्वसृजो**
**विदधति यत्र ये त्वधिकृता भवतश्चकिताः॥ २८॥**

**पदार्थ—**
**अकरणः** = इन्द्रिय आदिले रहित
**स्वराट्** = स्वयंप्रकाश
**त्वं** = हजुर नै
**अखिलकारकशक्तिधरः** = सम्पूर्ण प्राणीहरूका इन्द्रिय आदिका

शक्तिहरूलाई धारण गर्नुहुन्छ
**अजया** = अविद्याले सहित
**अनिमिषाः** = देवताहरू र
**विश्वसृजः** = विश्व सृष्टि गर्ने ब्रह्मा आदि समेत
**वर्षभुजः** = प्रादेशिक राजाहरूले
**अखिलक्षितिपतेः इव** = चक्रवर्ती राजालाई झैं
**तव** = हजुरलाई
**बलिं** = उपहार
**उद्वहन्ति** = चढाउँछन् र
**समदन्ति** = भोग गर्दछन्
**यत्र** = जुन काममा
**ये तु** = जो देवताहरू
**अधिकृताः** = नियुक्त छन्, तिनीहरू
**भवतः** = हजुरबाट
**चकिताः** = डराई
**विदधति** = काम गरिरहन्छन्

**वाक्यार्थ–** हे भगवान् ! हजुर स्वयंप्रकाश हुनुहुन्छ र मन, इन्द्रिय आदि करणहरू हजुरमा छैनन्। तर पनि हजुरले नै सम्पूर्ण प्राणीहरूका इन्द्रिय आदिलाई शक्ति प्रदान गरी धारण गर्नुहुन्छ। अविद्यायुक्त सम्पूर्ण देवता र विश्वस्रष्टा ब्रह्मा आदि समेत प्रादेशिक राजाहरूले चक्रवर्ती सम्राट्लाई कर चढाए झैं अन्तर्यामी हजुरलाई सारा विषयभोग समर्पण गर्दै आफू पनि भोग गर्दछन्। ती देवताहरू जो-जो जुन-जुन कर्ममा नियुक्त भएका छन्, तिनीहरू हजुरबाट डराएर नै आफ्ना काम गर्दछन्।

**विवरण–** यस श्लोकमा परमात्मालाई सम्पूर्ण देवताहरूले सेवा गर्ने र उहाँको आज्ञाको अधीनमा नै रही काम गर्ने कुरा बताइएको छ। अघिल्लो श्लोकमा परमात्मालाई सबैको हृदयभरि रही सबैलाई प्रेरित गर्ने भनी स्तुति गरिएको थियो। त्यसमा शङ्का भयो, उसो भए परमात्मा के सबैका इन्द्रिय अन्तःकरण आदि युक्त भोक्ता हुनुहुन्छ त ? किनभने आत्मा, इन्द्रिय र मन मिलेपछि भोक्ता बन्दछ भनिएको छ। यो शङ्काको उत्तरमा भनिन्छ– **त्वं अकरणः** अर्थात् हजुर इन्द्रियसम्बन्धले रहित हुनुहुन्छ। इन्द्रिय, मन आदिको सम्बन्धले रहित भए तापनि परमात्मा **अखिलकारकशक्तिधरः** अर्थात् सम्पूर्ण प्राणीका सम्पूर्ण इन्द्रिय आदिका शक्तिलाई धारण गर्नुहुन्छ। यसको अर्थ सबै इन्द्रियहरू आत्माको शक्तिलाई पाएर नै शक्तियुक्त हुन्छन् अनि त्यही चेतन सत्ताद्वारा प्रेरित भई आ-आफ्नो काम गर्दछन् भन्ने हो। परमात्मा चाहिँ **स्वराट्** अर्थात् स्वयं प्रकाशित हुने भएकाले नित्यज्ञानस्वरूप उहाँलाई कुनै कारण आदिको आवश्यकता पर्दैन। यसैलाई श्वेताश्वतरोपनिषद् (३।१९)मा **अपादपाणिपादो जवनो ग्रहीता, पश्यत्यचक्षुः स शृणोत्यकर्णः** अर्थात् परमात्मा हात नभए पनि लिन सक्नुहुन्छ, खुट्टा नभए पनि वेगपूर्वक हिँड्न सक्नुहुन्छ अनि आँखा र कान नभए पनि देख्न र सुन्न सक्नुहुन्छ भनी बताइएको छ। इन्द्रिय, अन्तःकरण, त्यसका वृत्ति आदि सबै जड भएकाले यिनीहरूले कुनै पनि विषयलाई प्रकाशित गर्न सक्दैनन्। इन्द्रियको माध्यमले निस्किएको अन्तःकरणको वृत्तिमा आत्मचैतन्यको प्रकाशले नै पदार्थहरूलाई प्रकाशित गर्दछ। यसरी इन्द्रियहरूलाई विषयको प्रकाशन गर्न आत्मशक्तिको आवश्यकता पर्दछ। आत्मालाई भने केही प्रकाशित गर्न पनि कुनै पनि इन्द्रियको आवश्यकता पर्दैन। यसलाई वेदान्तमा साक्षिभास्य भनिन्छ। स्वयं इन्द्रिय अन्तःकरण, त्यसका धर्म आदि साक्षिभास्य हुन्। त्यसैले परमात्मा अकरण हुनुभए पनि सबै करण आदिको शक्तिलाई परमात्माले नै प्रेरित गर्नुहुन्छ भनिएको हो।

देवताहरू अनि ब्रह्मा आदिले पनि अविद्याले युक्त भई परमात्माकै सेवा गर्दछन्। यहाँ श्रीधर स्वामीले देवताहरूले भगवान्को आज्ञालाई पालन गर्नु नै उहाँको सेवा गर्नु या उहाँलाई

उपहार चढाउनु हो भन्नुभएको छ। जसरी चक्रवर्ती सम्राट्‌द्वारा ठाउँ-ठाउँमा राखिएका रजौटाहरू सम्राट्‌को आज्ञा अनुसार आफ्नो अधिकारमा रहन्छन्, त्यसै गरी देवताहरू पनि जहाँ खटाइएका छन्, त्यहाँ रही भयपूर्वक भगवान्‌को आज्ञापालन गर्दछन्। यसलाई कठोपनिषद् (२।३।३) मा **भयादस्याग्निस्तपति भयात्तपति सूर्यः, भयादिन्द्रश्च वायुश्च मृत्युर्धावति पञ्चमः** अर्थात् परमात्माको भयद्वारा नै वायु, सूर्य, अग्नि, इन्द्र र मृत्युसमेत आ-आफ्नो कर्तव्यमा लाग्दछन् भनी बताइएको छ।

यहाँ **अनिमिषः** भनेर इन्द्रियरूप देवताहरू अनि **विश्वसृजः** भनेर वासनाको कारणले संसारको प्रवर्तन गर्ने अन्तःकरण चतुष्टयलाई पनि लिन सकिन्छ। **अजया** अर्थात् अनादि अविद्याद्वारा युक्त भएका यी इन्द्रियहरू कामनाद्वारा विक्षिप्त भई बहिर्मुखी बन्दछन्, अनि विषयहरूको ग्रहण गर्दछन्। तर यिनीहरूले गरेको विषयको ग्रहण आत्मामा समर्पण नगरी प्रमाणित या प्रकाशित हुँदैन। आत्माले थाहा नपाई न खाएको, न छोएको, न त सुनेको नै सिद्ध हुन्छ। त्यसैले इन्द्रियहरूले **बलिं** अर्थात् ती-ती विषयरूपी उपहार आत्मालाई चढाउँछन् अनि बल्ल तिनको भोग प्रकाशित हुन्छ र ती तृप्त हुन्छन्। यहाँ **समदन्ति**को अर्थ खान्छन् भन्ने चाहिँ होइन, किनभने इन्द्रियहरू जड भएकाले स्वयं भोक्ता हुन सक्दैनन्। इन्द्रियहरूले विषयहरूलाई बाहिरबाट भित्र ल्याउनु नै तिनले भोग गर्नु हो, र आत्मामा ल्याई आ-आफ्ना विषयहरू चढाउने प्रक्रियालाई नै बलि समर्पण भनिएको छ। प्रश्नोनिषद् (२।७)मा पनि सम्पूर्ण देवताहरूले आत्मालाई उपहार चढाउँछन् भनी बताइएको छ।

यस श्लोकको श्रीकृष्णलीलापरक व्याख्या गर्दा भने यहाँ ब्रह्मा, इन्द्र आदि सम्पूर्ण देवताहरूले श्रीकृष्णको सेवा गर्छन् भन्ने कुरा बताइएको छ। भगवान् **अकरणः** अर्थात् करणद्वारा हुने क्रियाको सम्बन्धले रहित हुनुहुन्छ। अनेक क्रीडा गर्ने भगवान् कसरी करणसम्बन्धले रहित हुनुभयो ? भन्ने प्रश्नमा श्रुतिहरू भन्दछन्— **स्वराट्** अर्थात् परमात्मा स्वयंप्रकाश चिद्रूप हुनुभएकाले प्राकृत क्रियाहरूले युक्त हुनुहुन्न। रासलीला आदिको क्रममा अनेक क्रीडा गरे पनि त्यो उहाँको चित्शक्तिले गरेको लीलाविलास हो। उसो भए जगत्‌को सृष्टि आदि कार्य कसले गर्छ त ? भन्ने शङ्कामा वेदहरू उत्तर दिन्छन्— **अखिलकारकशक्तिधरः** अर्थात् भगवान् नै सम्पूर्ण कारक अर्थात् ब्रह्मा आदिका शक्तिलाई धारण गर्नुहुन्छ। यसको अर्थ ब्रह्मा आदि परमात्माकै शक्तिद्वारा जगत्कर्ता आदि बन्दछन् भन्ने हुन्छ। **अनिमिषः** अर्थात् देवताहरू अनि **विश्वसृजः** अर्थात् जगत् स्रष्टा ब्रह्मा आदिले पनि हजुरकै सेवा गर्दछन्। यहाँ पनि बलिसमर्पणको अर्थ सेवा गर्नु भन्ने नै गरिन्छ। यी सबैले परिमात्माको सेवा विभिन्न प्रकारले गरेका छन्। ब्रह्मा र इन्द्रले गाईबाच्छाहरण र गोवर्धनधारणको प्रसङ्गमा भगवान्‌को स्तुति गरेर अनि उहाँलाई गोविन्दको रूपमा अभिषेक गरेर सेवा गरेका छन्। वायुले गरेको सेवा वेणु बजाउँदै श्रीकृष्ण वनमा डुलिरहेको अवस्थामा सुगन्धित भई बिस्तारै बहनु हो भन्ने कुरा युगलगीतको प्रसङ्गमा उल्लेख छ— **मन्दवायुरुपवात्यनुकूलम्** (भागवत १०।३५।२१)। चन्द्रले रासलीलाको समयमा वनलाई प्रकाशित गर्ने गरी उदाएर सेवा गरेका छन्— **वैमानिकैः कुसुमवर्षिभिरीड्यमानः** (भागवत १०।३३।२३) यसरी सबै देवताहरूले भगवान्‌को सेवा गरेका छन्।

श्रीधर स्वामी यस श्लोकको भाव बताउँदै लेख्नुहुन्छ—

**अनिन्द्रियोऽपि यो देवः सर्वकारकशक्तिधृक्।**
**सर्वज्ञः सर्वकर्ता च सर्वसेव्यं नमामि तम्।।**

अर्थात् जुन परमात्मा इन्द्रियरहित भएर पनि सबै कारकहरूको शक्तिलाई धारण गर्नुहुन्छ, त्यस्ता सर्वज्ञ सर्वकर्ता अनि सबैका सेव्य परमात्मालाई म प्रणाम गर्दछु।

यसप्रकार यस श्लोकमा परमात्मा सबैका सेव्य अनि इन्द्रियरहित भए तापनि उहाँले सबैका इन्द्रिय आदिलाई प्रेरित गर्नुहुन्छ भनी स्तुति गरिएको छ।

**स्थिरचरजातयः स्युरजयोत्थनिमित्तयुजो**
**विहर उदीक्षया यदि परस्य विमुक्त ततः।**
**न हि परमस्य कश्चिदपरो न परश्च भवेद्**
**वियत इवापदस्य तव शून्यतुलां दधतः॥ २९॥**

**पदार्थ—**
**हि** = निश्चय नै
**विमुक्त** = हे नित्यमुक्त
**यदि** = यदि
**ततः** = मायाभन्दा
**परस्य** = पर रहनुभएका हजुरको
**अजया** = मायासँग
**उदीक्षया** = ईक्षणरूप
**विहरः** = विहार हुन्छ
**उत्थनिमित्तयुजः** = सृष्टिसङ्कल्प-रूप ईक्षणद्वारा नै सृष्टिका निमित्त भएका कर्महरू जागेका
**स्थिरचरजातयः** = स्थावर, जङ्गम सम्पूर्ण प्राणीहरू
**स्युः** = उत्पन्न हुन्छन्
**अपदस्य** = वाणी र मनका अविषय
**शून्यतुलां** = शून्यको तुल्यता
**दधतः** = धारण गर्नुहुने
**वियतः इव** = आकाश जैँ व्यापक
**तव** = हजुर
**परमस्य** = परमात्माको
**कश्चित्** = कोही पनि
**अपरः न** = आफन्त छैन
**परः च** = पराइ पनि
**न भवेत्** = कोही छैन

**वाक्यार्थ—** हे नित्ययुक्त परमात्मा ! जुन समयमा मायाभन्दा पर रहनुभएका हजुरको मायाका साथ विहार हुन्छ, त्यसै समयमा हजुरको इच्छाद्वारा उत्पन्न कर्महरूका साथ सम्बन्ध राखेर हजुरबाट स्थावर र जङ्गम प्राणीहरूको उत्पत्ति हुन्छ र वस्तुतः तुलनामा शून्यतुल्य हुनुभएका, आकाश जैँ व्यापक अनि मन र वाणीका विषय नहुनुभएका परम कारुणिक हजुरका लागि न आफ्नो भन्ने कोही छ, न त अर्को भन्ने नै कुनै छ।

**विवरण—** यस श्लोकमा इन्द्रियका प्रवर्तक भएकाले मात्र होइन, अपि तु उहाँबाट नै उत्पन्न भएकाले पनि जीवहरूले परमात्माको सेवा गर्नुपर्ने बताइएको छ। स्थावर, जङ्गम सबै प्राणीहरू परमात्माबाट नै उत्पन्न भएका हुन्। **उदीक्षया** अर्थात् उहाँको ईक्षणद्वारा नै यी सबैको उत्पत्ति भएको हो। छान्दोग्योपनिषद् (६।२।३)मा यसलाई **तदैक्षत बहु स्यां प्रजायेय** अर्थात् परमात्माले एकबाट धेरै हुने सङ्कल्प गर्नुभयो भनी बताइएको छ। **उदीक्षया उत्थैः निमित्तैः युज्यन्ते** यस्तो विग्रह गर्दा **उदीक्षया उत्थनिमित्तयुजः** यो पदावलीले प्राणीहरूलाई बताउँछ। परमात्माको ईक्षणरूप

सङ्कल्पले प्राणीहरूका निमित्त अर्थात् संसारका कारणभूत कर्महरू उत्थित भए। जब कर्महरू जागा भए तब त्यसकै संस्कार अनुरूप प्राणीहरूको जन्म भयो। यसरी अनादि सृष्टिपरम्परालाई यहाँ सङ्केत गरिएको छ। यसरी प्राणीका कर्महरूसँगै प्राणीको पनि **व्युत्थान** अर्थात् प्रलयबाट जागरण तब हुन्छ, जब परमात्मा मायाद्वारा विहार गर्नुहुन्छ। परमात्माबाट नै सम्पूर्ण प्राणीहरू उत्पन्न भए भन्दा के हुन्छ ? त्यहाँ माया अनि अनादि कर्मसंस्कारहरूको के आवश्यकता भन्ने शङ्कामा वेदहरू बताउँदछन्— आकाश जस्तै समान एवं सर्वव्यापक परमात्माबाट असमान रूपमा प्राणीहरूको सष्टि हुन सक्दैन, त्यसैले माया एवं कर्मसंस्कारहरू अवश्य नै चाहिन्छन्। यदि सम्पूर्ण प्राणीहरूलाई परमात्माले कर्म आदिले निरपेक्ष भएर नै उत्पन्न गर्नुभयो भन्ने हो भने उहाँमा मुख्य दुई दोष आउँछन्— एउटा विषमता अनि अर्को निर्दयीपना। भगवान्ले यत्तिकै सृष्टि गर्नुभएको हो भने उहाँले कसैलाई सुखी अनि कसैलाई दुःखी कसरी बनाउनुभयो ? यसरी सुखी, दुःखी बनाउँदा उहाँले प्राणीहरूमाथि विषमता गरेको दोष आउने भयो अनि अर्को चाहिँ दुःखीहरूप्रति उहाँले दया नगर्नुभएको देखियो। यसैले यी दोष नआऊन् भन्नका लागि प्राणीका पूर्व-पूर्व संस्कार अनुसार नै उत्तर-उत्तर जन्महरू हुन्छन् भन्नुपर्दछ। **शून्यतुलां दधतः** यो पदावलीले प्रलयकालमा अरू सबैद्वारा रहित भई शून्य जस्तै रहनुभएकोतर्फ सङ्केत गरेको छ। परमात्मा प्रलयकालमा हुनुभए तापनि किन शून्य जस्तै प्रतीत हुनुभयो त ? यस प्रश्नको उत्तरस्वरूप वेदहरू भन्छन्— **अपदस्य** अर्थात् परमात्मा इन्द्रियहरूद्वारा नभेटिनुभएकाले शून्य जस्तै लाग्नुभएको हो। प्रलयकालमा परमात्मालाई जान्ने साधन पनि छैन, अनि उहाँ पदार्थ आदि कुनै रूपमा प्रकट पनि हुनुभएको छैन। यसरी अप्रकट वा अव्यक्त रहेकाले परमात्मालाई शून्य जस्तै भनिएको हो। यसरी प्रलयमा परमात्मामा लीन भएका प्राणीहरू उहाँको सङ्कल्पले उहाँबाट नै उत्पन्न हुने भएकाले उनीहरूले परमात्मसेवा गर्नुपर्ने कुरा यहाँ बताइएको छ।

यस श्लोकलाई श्रीकृष्णलीलाका रूपमा अर्थ्याउँदा भने यहाँ अन्तरङ्ग भक्तहरूको प्रशंसा गरिएको छ। **परस्य** अर्थात् पुरुषोत्तम श्रीकृष्णको **अजया** अर्थात् लीलाशक्तिद्वारा जब **विहरः** वा विहार हुन्छ, तब वृन्दावनवासी सबै प्राणीहरू प्रफुल्लित हुन्छन्। **स्थिरचरजातयः** यो पदको विग्रह हुन्छ— **स्थिराश्च चराश्च जातयः सजातयश्च** अर्थात् वृन्दावनवासी भगवान्का तीन थरी भक्तलाई यसले सङ्केत गरेको छ। यिनीहरू जम्मै भगवान्को इच्छा हुनेबित्तिकै विहारका लागि तयार भइहाल्दछन्। **उदीक्षया** अर्थात् भगवान्को कृपापूर्ण दृष्टिद्वारा नै यिनीहरू **उत्थनिमित्तयुजः** अर्थात् विहारका साधनले संयुक्त भइहाल्दछन्। **उत्था प्रकटा विहारकारणानां युक् योगो यासु ताः** अर्थात् प्रकट भएका छन् श्रीकृष्णसँग विहार गर्ने साधन एवं उद्दीपक कारणहरू जसमा। स्थिर अर्थात् लता, वृक्ष आदिमा कृष्णसँग विहारका लागि फूल फल लाग्ने र मधुधारा चुहिने परिवर्तन एवं उद्दीपक सामग्री देखिन्छन्। उता **चर** अर्थात् मयूर, भ्रमर आदि प्राणीहरूमा चाहिँ प्वाँख फैलाउने अनि मधुर गुञ्जन गर्ने आदि उद्दीपक सामग्रीको प्राकट्य देखिन्छ। **जातयः** अर्थात् भगवान्का सजातीय गोपगोपिनीहरूमा चाहिँ अनुकूल वेष, अलि-अलि लज्जा, प्रफुल्लता आदि उद्दीपक सामग्रीहरू प्रकट हुन्छन्। यसरी श्रीकृष्णको सङ्कल्पसँगसँगै वृन्दावनका अनेक प्राणीहरूमा लीलाका लागि आवश्यक सामग्रीहरू प्रकट भएका छन्।

वृन्दावनकासँग मात्र विशेष लीला गर्दा भगवान्‌मा वैषम्य दोष आउँछ कि भन्ने शङ्का हुँदा भगवान्‌ले प्राणीहरूमा गर्ने समव्यवहारलाई यहाँ देखाइएको छ। **परमस्य** अर्थात् परमात्माका लागि कोही पनि पर-अपर हुँदैन। उहाँले कर्म अनुसार नै प्राणीहरूलाई सुखदुःख आदि फल प्रदान गर्नुहुन्छ। यसरी आफूमा भक्ति नगर्नेहरूप्रति परमात्माले गर्ने सामान्य दया यहाँ बताइयो। जो विद्वेष गर्छन्, तिनीहरूका लागि भने परमात्मा **शून्यतुलां दधन्** अर्थात् शून्य झैं अप्रकट भई रहिदिनुहुन्छ। उहाँ **अपद** अर्थात् इन्द्रियको विषय नहुनुभएकाले ती विद्वेषीहरू उहाँलाई भेट्टाउन पनि सक्दैनन्। यसरी विशेष अन्तरङ्गहरूसँग विशेष कृपापूर्ण लीला, सामान्य प्राणीहरूलाई ती-ती कर्मफल प्रदान गर्ने सामान्य दया एवं विद्वेषीहरूलाई पनि उपेक्षा गरी दण्ड नदिने दया गरेर भगवान्‌मा रहेको दया वृत्तिको यहाँ प्रशंसा गरिएको छ। यसरी सबैतिर समान हुने परमात्माको स्वभाव भए तापनि आफ्नो विशेष प्रेमवश जसले भगवान्‌को विशेष कृपा पाएका छन्, त्यस्ता वृन्दावनवासी अन्तरङ्ग भक्तहरूको प्रशंसा यहाँ गरिएको हो।

यस श्लोकको भावानुसार श्रीधर स्वामी अर्को श्लोक रचना गर्नुहुन्छ—

**त्वदीक्षणवशक्षोभमायाबोधितकर्मभिः ।**<br>
**जातान् संसरतः खिन्नान् नृहरे पाहि नः पितः ।।**

अर्थात् हे नृसिंह ! संसार रचाउने हजुरको सङ्कल्प भइसकेपछि क्षुब्ध भएकी मायाद्वारा प्राणीहरूका कर्मसंस्कारहरू उद्दीप्त हुन्छन् र त्यसको वशमा परी प्राणीहरू संसारमा बारम्बार जन्म-मृत्यु पाइरहन्छन्। यसरी अनेक दुःखबाट खिन्न भएका ती प्राणीहरूलाई सबैका पिता हजुरले रक्षा गर्नुहोस्।

यसप्रकार प्रस्तुत श्लोकमा सम्पूर्ण संसारको कारण एवं सबैतिर समान रहने परमात्माको स्तुति गरिएको छ।

**अपरिमिता ध्रुवास्तनुभृतो यदि सर्वगता-**<br>
**स्तर्हि न शास्यतेति नियमो ध्रुव नेतरथा ।**<br>
**अजनि च यन्मयं तदविमुच्य नियन्तृ भवेत्**<br>
**सममनुजानतां यदमतं मतदुष्टतया ॥ ३० ॥**

**पदार्थ—**<br>
**ध्रुव** = हे परमात्मा<br>
**यदि** = यदि<br>
**तनुभृतः** = शरीरधारीहरू<br>
**अपरिमिताः** = अनन्त<br>
**सर्वगताः** = सर्वव्यापक र<br>
**ध्रुवाः** = नित्य (मान्ने हो भने)<br>
**तर्हि** = त्यसोभए (तिनीहरू)<br>
**न शास्यता इति** = शास्य हुन सक्दैनन्<br>
**न नियमः** = हजुरद्वारा नियन्त्रित हुन सक्दैनन्<br>
**इतरथा** = यस्तो नभए मात्र (तिनीहरू शासित हुन सक्छन्)<br>
**यन्मयं च** = जुन आत्ममय भएर<br>
**अजनि** = जीव उत्पन्न भयो<br>
**तत् अविमुच्य** = त्यो आफ्नो कारणरूपतालाई नत्यागी<br>
**नियन्तृ** = हजुर नियन्त्रक<br>
**भवेत्** = हुनुहुन्छ<br>
**मतदुष्टतया** = मन आदिको

विषय हुनु नै दोषरूप भएकाले **अनुजानतां** = (मन आदि साधनद्वारा) जान्नेहरूका लागि **यत् समं** = जुन सर्वसम तत्त्व **अमतम्** = नजानिएको नै छ

**वाक्यार्थ–** यदि सम्पूर्ण जीवात्माहरू अनन्त, नित्य र सर्वव्यापक छन् भनेर मान्ने हो भने परमात्मा र जीवात्माहरूमा कुनै पनि भिन्नता नहुने हुनाले परमात्मा शासक र जीवहरू शास्य भन्ने व्यवहार बन्दैन। जीवहरूलाई नित्य र सर्वव्यापक नमानेको खण्डमा घट उत्पन्न हुँदा घटाकाशको उत्पत्ति माने झैं अविद्या या अन्तःकरणरूप उपाधिको उत्पत्ति हुँदा त्यसमा परेका चिदाभासरूप जीवको उत्पत्ति मान्ने हो भने आफूबाट उत्पन्न भएका अन्तःकरण उपाधिवाला जीवहरू शास्य र हजुर माया उपाधिवाला परमात्मा शासक भन्ने व्यवहार बन्न सक्दछ। हजुरलाई कुनै पनि साधकले म परमात्मालाई राम्रोसँग जान्दछु भनेर भन्न सक्दैन, किनभने जसले परमात्मालाई राम्रोसँग जान्दछु भन्छ उसले परमात्मालाई नजानेकै ठहर्छ, अनि जुन वस्तु मनद्वारा ज्ञानको विषय हुन्छ, त्यो दोषयुक्त हुन्छ अर्थात् मिथ्या हुन्छ।

**विवरण–** यस श्लोकमा जीवहरू शास्य र परमात्मा शासक कसरी बन्नुहुन्छ भन्ने विषय बताइएको छ। यद्यपि परमार्थतः जीव र ईश्वर आत्मरूपले एउटै हुन् भन्ने उपनिषद्को परम तात्पर्य हो, तर लोकव्यवस्थाका लागि उपाधिको दृष्टिले ईश्वर सबैका नियन्ता एवं जीवहरू उहाँद्वारा नियम्य हुन्छन्। परमात्मालाई अन्तर्यामी भन्नु नै हृदयभित्र बसेर सबैलाई नियमन गर्ने या शासन गर्ने भन्ने अर्थमा हो। त्यसैले गीता (१८।६१)मा **भ्रामयन् सर्वभूतानि यन्त्रारूढानि मायया** अर्थात् भगवान् ईश्वरले सबैको हृदयभित्र बसी सबै प्राणीहरूलाई आफ्नो मायाद्वारा आफ्नो इच्छा अनुसार नचाउनुहुन्छ भनी बताइएको छ। जीवका सारा व्यवहारलाई साक्षात् प्रकाशित गर्ने भएकाले यसलाई साक्षी पनि भनिन्छ। यो जीवको पनि वास्तविक आफ्नै स्वरूप हो, तर जबसम्म जीव आफूलाई साक्षी आत्माको रूपमा जान्दैन, तबसम्म जीवको आत्मदृष्टि शरीर, अन्तःकरण आदिमा नै हुन्छ र त्यस वेलासम्म साक्षी अन्तर्यामीको नियन्त्रण आवश्यक परिरहन्छ। अन्तःकरण उपाधि रहुन्जेलसम्म नियामक या शासकका रूपमा रहने अनि उपाधिको परित्याग गरेपछि चाहिँ जीवको आफ्नै स्वरूप भई स्फुरित हुने यसैलाई बृहदारण्यकोपनिषद् (३।७।१५)मा अन्तर्यामी आत्मा भनिएको छ। **यः सर्वाणि भूतान्यन्तरो यमयत्येष त आत्मान्तर्यामी** अर्थात् जसले सबै प्राणीहरूको भित्र रही सबैलाई नियमन गर्दछ, त्यही तिम्रो वास्तविक आत्मा अन्तर्यामी तत्त्व हो भनी उपदेश गरिएको छ। यसरी जीव र ईश्वर वास्तवमा एउटै आत्मा भएको तर पनि अविद्या अवस्थामा जीवले आत्मामा नभई शरीर, इन्द्रिय आदिमा अहं बुद्धि गरेकाले त्यो अवस्थामा ईश्वर जीवको नियामक हुन्छ। यही दृष्टिले यहाँ जीव शास्य र ईश्वर शासक हुन्छ भन्ने भावको व्याख्या गरिएको हो।

अघिल्लो श्लोकमा **अजा** अर्थात् अविद्याद्वारा प्राणीहरू अनेक रूपमा जन्मिएका हुन् भनी बताइएको थियो। त्यहाँ शङ्का के भयो भने यो अविद्या एउटै छ या धेरै छन् ? यदि अविद्या एउटै छ भन्ने हो भने एउटा व्यक्ति अविद्यालाई नाश गरी मुक्त हुँदा सम्पूर्ण प्राणीहरू मुक्त हुने अवस्था आइपर्ला। अनि अविद्या धेरै छन् भन्ने हो भने कसैले पनि सबै अविद्यालाई पूर्णतः नष्ट गर्न नसक्ने हुनाले कोही पनि मुक्त नहुने आपत्ति आउला। यसरी वेदान्तमा अविद्यालाई लिएर जीव

एउटै छ या अनेक छ भन्ने शङ्का हुन्छ। यही विषयमा पूर्वपक्षीहरू के भन्दछन् भने सुख-दुःख, बन्धन-मोक्ष आदिको वैविध्य देखिएकाले जीवलाई एउटै त कसै गरी पनि मान्न सकिँदैन। यसैले जीवहरू अनेक छन् भन्ने नै मान्नुपर्दछ। फेरि ती जीवहरूलाई पनि सर्वव्यापक नै मान्नुपर्दछ। किनभने तिनलाई अणुपरिमाण या मध्यम परिमाण पनि मान्न सकिँदैन। यसरी जीवहरू अनेक छन् र तिनीहरू नित्य र सर्वव्यापक छन् भन्नु पर्दछ। पूर्वपक्षको रूपमा उठेको यो भनाइ न्यायको मतसँग नजिक देखिन्छ। नैयायिकहरू आत्मा धेरै छन् र ती सबै व्यापक एवं नित्य छन् भनी भन्दछन्। जीवात्मालाई व्यापक मान्नुको तर्क दिँदै उनीहरू भन्दछन्— किनभने जीवलाई अरू कुनै रूपमा बताउन सकिँदैन। यदि अणुपरिमाण मान्ने हो भने शरीरको एक भागमा आत्मा हुँदा अर्को भागमा आत्मा नरही त्यहाँ अचेतता आउनुपर्ला। यदि मध्यम परिमाण अर्थात् शरीरभरि टम्म आत्मा हुन्छ भन्ने हो भने पनि आत्मा शरीरको घटी-बढीसँग घट्ने बढ्ने विकारी हुने भयो। यसैले आत्मालाई सर्वव्यापक मान्नुपर्दछ भन्ने उनीहरूको मत रहेको छ।

यही विषयमा कुरा उठाउँदै श्रुतिहरू भन्दछन्— **तनुभृतः** अर्थात् शरीरधारी जीवहरू यदि **अपरिमिताः** अर्थात् अनन्त छन् अनि **ध्रुवाः** अर्थात् नित्य पनि छन् अनि **सर्वगताः** अर्थात् सर्वव्यापक छन् भनी मान्ने हो भने **न शास्यता** अर्थात् जीव र परमात्मामा शास्य-शासक भाव बन्न सक्दैन। यसप्रकार यहाँ श्रुतिहरूको भनाइबाट न्यायशास्त्र अनुसारको जीवको परिभाषा खण्डित भएको छ। यदि जीवहरू परमात्मा जस्तै सर्वव्यापक र नित्य हुने भए तिनीहरू त ईश्वरसमान नै भइहाले। अनि उनीहरूले आफूसमानको ईश्वरलाई किन स्तुति र सेवा गर्ने ? सेवा गर्नका लागि त सेव्य वस्तु सेवकभन्दा ठुलो हुनुपर्दछ। आफूभन्दा सानोको अनि आफूबराबरको व्यक्तिको पनि कसैले सेवा गर्दैन। त्यसैले जीवहरूलाई ईश्वरसमान नित्य एवं सर्वव्यापक मान्न सकिँदैन भन्ने श्रुतिहरूको तात्पर्य हो। यहाँ फेरि शङ्का हुन्छ, उपनिषद् आदि शास्त्रमा त जीव र ईश्वर एउटै हुन् भनी बताइएको छ। माण्डूक्योपनिषद् (६)मा सुषुप्ति अवस्थाको अभिमानी प्राज्ञको चर्चा गर्दै त्यही जीवलाई सर्वेश्वर अनि सर्वान्तर्यामी भनी बताइएको छ— **एष सर्वेश्वर एष सर्वज्ञ एषोऽन्तर्याम्येष योनिः सर्वस्य प्रभवाप्ययौ हि भूतानाम्** अर्थात् यही सर्वेश्वर, सर्वज्ञ, सर्वान्तर्यामी र सम्पूर्ण प्राणीहरूको उत्पत्ति एवं नाशको पनि आधार हो। यसको व्याख्यामा शाङ्करभाष्यमा भनिएको छ— **एषः स्वरूपावस्थः सर्वेश्वरः** अर्थात् यो जीव यदि आफ्नो स्वरूपमा बसेको छ भने त्यही सर्वेश्वर र सर्वज्ञ हो। यसरी स्वरूपमा बसेको जीव र ईश्वरलाई एउटै भनिएको छ। **योऽसावसौ पुरुषः सोऽहमस्मि** (ईशावास्योपनिषद् १६) अर्थात् जुन यो सूर्यमण्डलाभिमानी ज्योतिर्मय पुरुष ईश्वर छ, त्यही म हुँ। **अयमात्मा ब्रह्म** (बृहदारण्यकोपनिषद् २।५।१९), **तत्त्वमसि** (छान्दोग्योपनिषद् ६।८।७) आदि महावाक्यहरूले पनि जीव र ब्रह्मको एकतालाई नै परम तात्पर्य बनाएका छन् भने ती सबै शास्त्रीय सिद्धान्तभन्दा भिन्न यहाँ जीवलाई ईश्वरभन्दा भिन्न अनि शास्य भनी कसरी बताइयो ? यसको उत्तरमा भनिन्छ— **जीवात्मा यन्मयः** अर्थात् जीवात्मा परमात्मामय नै हो।

धेरै वा विकार यी दुई अर्थमा मयट् प्रत्यय गरिन्छ। यहाँ चाहिँ विकार अर्थमा मयट् प्रत्यय गरिएको हो। जीव ईश्वरको विकार हो भन्नुको अर्थ ईश्वर बिग्रिएर जीव बनेको भन्ने पनि

होइन। वेदान्तमा जीवलाई विकार भन्नुको के मात्र तात्पर्य हो भने परमात्मा जीवात्माको नाम र रूपमा देखिएको छ। वस्तुतः परिवर्तन नआए पनि जीवको रूपमा परिवर्तित भए झैँ देखिनु नै परमात्माको विकार हुनु हो। यसलाई उपयुक्त दृष्टान्त दिँदै उपनिषद्मा मृत्पिण्ड र मृण्मयको प्रसङ्ग उठाइएको छ। छान्दोग्योपनिषद् (६।१।४)मा आरुणि श्वेतकेतुलाई उपदेश दिँदै भन्नुहुन्छ— **एकेन मृत्पिण्डेन सर्वं मृण्मयं विज्ञातं स्यात्** अर्थात् एउटा माटोको डल्लोलाई जानिसकेपछि त्यसबाट बन्ने मृण्मय घैँटो, गमला आदि स्वतः जानिन्छन्। यहाँ माटोको विकारलाई मृण्मय भनिए पनि माटोले आफ्नो स्वरूपलाई नछाडी केवल नयाँ नामरूपमा प्रकट भएको मात्र छ। त्यसैले मृण्मय पदको अर्थ हुन्छ, माटै-माटो भएको घैँटो। त्यसै गरी जीवलाई पनि परमात्माको विकार भन्दा यसको अर्थ परमात्मा नै जीवको रूपमा देखिनुभएको मात्र हो, त्यहाँ जीव भनिने कुनै दोस्रो वस्तु छैन भन्ने बुझिन्छ। त्यसैले वेदान्तमा विकारको अर्थ बिग्रनु या परिणत हुनु नभई विवर्तित हुनु या नयाँ झैँ देखिनु मात्र हो भन्ने बुझ्नुपर्दछ। त्यसै दृष्टिले यहाँ श्रुतिहरूले जीवलाई **यन्मयः** अर्थात् परमात्माको विकार भनेका छन्। जसरी मृण्मय घैँटो माटोदेखि अलग सिद्ध हुँदैन, त्यसै गरी परमात्ममय जीव पनि परमात्मादेखि अलग सिद्ध हुँदैन। यसरी परमात्माको सत्ताविना स्वयं सिद्ध हुन नसक्नु नै जीवलाई परमात्माले नियन्त्रित गर्नु हो। अरु भन्दा परमात्माले सत्ता एवं चैतन्यद्वारा प्राणीहरूलाई युक्त गराउनु र आफ्नै सत्ता-चैतन्यद्वारा तिनीहरूलाई प्रकाशित गर्नु नै परमात्माले जीवहरूलाई नियन्त्रित गर्नु हो। त्यसैले यस श्लोकमा **तदविमुच्य** अर्थात् त्यो कारणरूपतालाई नछाडी परमात्मतत्त्व **नियन्तृ** अर्थात् नियन्त्रक हुन्छ भनिएको छ। यसरी **समम्** अर्थात् सबैभित्र समानरूपले अनुस्यूत परमात्मा नै हुनुहुन्छ र उहाँ नै आफ्नो सत्ताद्वारा जीवहरूलाई सिद्ध गरी आफ्नै चैतन्यद्वारा तिनलाई प्रकाशित एवं प्रेरित गरेर तिनीहरूलाई नियन्त्रित गर्नुहुन्छ भन्ने सिद्ध हुन्छ।

परमात्मतत्त्वलाई सिधै बताउन सकिँदैन भन्दै वेदहरू भन्दछन्— **अनुजानतां यत् अमतं** अर्थात् जानैँ भन्नेहरूका लागि जुन तत्त्व नजानिने नै रहन्छ। यसलाई केनोपनिषद् (२।३)मा **यस्यामतं तस्य मतं मतं यस्य न वेद सः** अर्थात् जसले ब्रह्मलाई जान्न सकिँदैन भन्यो, त्यसले जान्यो, अनि जसले चाहिँ ब्रह्मलाई इन्द्रिय आदिद्वारा स्पष्टतः जान्न सकिन्छ भन्यो, त्यसले आत्मालाई जानेन भनी बताइएको छ। आत्मालाई नजान्नेहरूले जान्ने अनि जान्नेहरूले नजान्ने भन्दा यो के भनेको होला भनी शङ्का हुन सक्छ, तर यहाँ अमतं शब्दको अर्थ हुन्छ, जसले ब्रह्म अमत छ अर्थात् यो इन्द्रिय, मन आदिको विषय हुँदैन भनेर जान्यो, त्यसैले **मतं** अर्थात् ब्रह्मलाई जान्यो। अनि जसले **मतं** अर्थात् ब्रह्म इन्द्रिय आदिको विषय हुन सक्छ भनी जान्यो, त्यसले न वेद अर्थात् ब्रह्मलाई जानेन। यसरी **मतदुष्टतया** अर्थात् ब्रह्मलाई जानैँ भन्दा पनि दोष हुने भएकाले यसलाई निश्चित गरेर घट, पट आदि विषयहरू झैँ तोक्न सकिँदैन।

यस श्लोकलाई श्रीकृष्णलीलाको रूपमा अर्थ्याउँदा भने यो श्लोकमा श्रीकृष्णको सर्वरूपधारण सम्बन्धी लीलालाई बताइएको छ। योभन्दा अघिल्लो श्लोकको श्रीकृष्णपरक व्याख्यामा श्रुतिहरूले व्रजवासीहरूमा श्रीकृष्णको सबैभन्दा बढी प्रेम भएको बताएका थिए। भगवान्ले मानौँ के सोध्नुभयो भने तिमीहरूले यस्तो कसरी भन्न सक्यौ ? म त सबै प्राणीहरूलाई

समान प्रेम गर्दछु। यसको उत्तरमा वेदहरूले भगवान्ले व्रजवासीको पुत्र बन्नुभएको घटना सम्झाएका छन्। ब्रह्माजीले बाच्छा, गोपबालक आदि सबैलाई हरण गरिदिएपछि भगवान् स्वयं नै सबै गोपबालक, बाच्छा, लट्ठी, दाम्लो, कपडा, शील–स्वभाव आदिको रूपमा प्रकट हुनुभएको थियो। स्वयं श्रीकृष्णरूप भएकाले यी सबै जड चेतनमय प्राणीहरू **ध्रुव** अर्थात् नित्य पनि हुन् र सर्वव्यापक पनि। यी **अपरिमित** अर्थात् अनन्त प्राणीहरूको रूपमा स्वयं श्रीकृष्ण नै हुनुहुन्थ्यो। यी सबै श्रीकृष्णरूप नभई सामान्य जीव नै हुन् कि ? भन्ने शङ्कामा श्रुतिहरू भन्दछन्– **तर्हि न शास्यता स्यात्** अर्थात् त्यसो भएदेखि भगवान्भन्दा छुट्टै अस्तित्व एवं व्यक्तित्व भएका अनि नित्य पनि भएका यी जीवहरू भगवान्द्वारा शासित हुन सक्दैनन्। **इतरथा** अर्थात् योभन्दा भिन्न यदि यिनीहरू भगवद्रूप नै हुन् भन्ने हो भने मात्र **त्वदिच्छैकमयता** अर्थात् श्रीकृष्णको इच्छा नै यिनीहरूको पनि इच्छा हुने हुनाले यिनलाई इच्छामात्रले भगवान् नियन्त्रित गर्न सक्नुहुन्छ। ती–ती गाई–बाच्छालाई ती–ती गोठमा अनि ती–ती गोपबालकहरूलाई ती–ती घरमा पुऱ्याई कसैले पनि रहस्य थाहा नपाउने गरी भगवान्ले लीला गर्नुभएको छ। यसलाई श्रीशुकदेवले **स्वयमात्मात्मगोवत्सान् प्रतिवार्यात्मवत्सपैः** (भागवत १०।१३।२०) अर्थात् स्वयं श्रीकृष्णले बाच्छारूप आफैँलाई गोपबालकरूप आफैँद्वारा नियन्त्रित गर्दै आफैँसँग क्रीडा गर्नुभयो भनी बताउनुभएको छ।

**यन्मयं** अर्थात् जुन हजुरले गोपबालक आदि रूप **अजनि** अर्थात् प्रकट गर्नुभयो, **तत्** अर्थात् त्यही हजुर नै **नियन्तृ** अर्थात् तिनको प्रादुर्भाव र तिरोभावमा समर्थ नियामक हुनुहुन्छ। ती बाच्छा अनि गोपबालक आदि अरू देवतारूप किन भएनन्, तिनीहरू किन भगवान्कै स्वरूप हुन् त ? भन्ने शङ्का हुँदा भनिन्छ, किनभने भगवान्समान अरू कोही पनि छैन, त्यसैले भगवान्का स्वरूपभूत गोपहरूलाई अरूसँग तुलना गर्न मिल्दैन। **समं** अर्थात् श्रीकृष्णसमानका अरू कोही छन् भनी बताउनेहरूको मत नै दुष्ट अर्थात् दोषयुक्त छ, त्यसैले त्यो मत अमत अर्थात् वास्तविक विचार नै होइन। यसरी ती सबै प्राणी कृष्णरूप अनि उहाँद्वारा नै नियम्य सिद्ध हुन्छन्।

यस श्लोकको भावार्थ बताउँदै श्रीधर स्वामी लेख्नुहुन्छ–

**अन्तर्यन्ता सर्वलोकस्य गीतः श्रुत्या युक्त्या चैवमेवावसेयः।**
**यः सर्वज्ञः सर्वशक्तिर्नृसिंहः श्रीमन्तं तं चेतसैवावलम्बे।।**

अर्थात् नृसिंह भगवान् हजुर सबै प्राणीहरूका अन्तर्यामी भनी श्रुति र युक्तिद्वारा पनि निश्चित हुनुहुन्छ। यस्ता सर्वज्ञ, सर्वशक्तियुक्त श्रीनृसिंहको म भित्री हृदयदेखि नै शरण पर्दछु।

यसप्रकार यस श्लोकमा परमात्मा र जीवात्मामा वास्तविक रूपमा भेद नभए तापनि उपाधिलाई स्वीकार गरेको अवस्थामा शरीर, इन्द्रिय आदिमा आत्मबुद्धि गर्ने जीव नियम्य अनि मायापति ईश्वर नियामक या शासक बन्नुहुन्छ भनी प्रतिपादन गरिएको छ।

**न घटत उद्भवः प्रकृतिपूरुषयोरजयो–**
**रुभययुजा भवन्त्यसुभृतो जलबुद्बुदवत्।**

**त्वयि त इमे ततो विविधनामगुणैः परमे**
**सरित इवार्णवे मधुनि लिल्युरशेषरसाः ॥ ३१ ॥**

**पदार्थ–**
**अजयोः** = अजन्मा
**प्रकृतिपूरुषयोः** = प्रकृति र पुरुषको
**उद्भवः** = उत्पत्ति
**न घटते** = हुन सक्दैन
**असुभृतः** = प्राणीहरू
**उभययुजा** = ती दुबैको परस्पर अध्यासबाट
**जलबुद्बुदवत्** = पानीमा (वायु र पानी मिली) फोका बने झैँ
**भवन्ति** = उत्पन्न हुन्छन्
**ततः** = त्यसैले
**ते** = ती
**इमे** = यी जीवहरू
**परमे** = परमात्मा
**त्वयि** = हजुरमा
**सरितः** = नदीहरू
**अर्णवे** = समुद्रमा अथवा
**मधुनि** = महमा
**अशेषरसाः** = सबैथरी फूलका रसहरू
**मधुनि इव** = एकीभावमा प्राप्त भए झैँ
**विविधनामगुणैः** = आफ्ना अनेक नाम, रूप र स्वभाव आदिको साथ
**लिल्युः** = लीन हुन्छन्

**वाक्यार्थ–** प्रकृति र पुरुष दुबै नजन्मिने हुनाले यी दुबैको जीवरूपले उत्पत्ति सम्भव छैन। प्रकृति र पुरुष यी दुबै परस्परमा अध्यस्त भएपछि त वायुसंयुक्त जलबाट जलका फोकाहरू उत्पन्न भए झैँ परस्परमा अध्यस्त यी प्रकृति र पुरुषहरूबाट जीवहरूको उत्पत्ति हुन सक्दछ। परस्परमा अध्यस्त प्रकृति र पुरुषबाट उत्पन्न भएका यी सम्पूर्ण प्राणीहरू सुषुप्ति र प्रलयकालमा माया उपाधिवाला हजुरमा त्यसै गरी लीन हुन्छन् जसरी महमा सम्पूर्ण फूलका रसहरू लीन भएका हुन्छन्। तर मोक्षको समयमा भने हजुरको उपाधि मायाको पनि नाश हुने हुनाले यी सम्पूर्ण प्राणीहरू निरुपाधिक हजुरमा त्यसै गरी लीन हुन्छन्, जसरी सम्पूर्ण नदीहरू समुद्रमा लीन हुन्छन्।

**विवरण–** यस श्लोकमा वास्तवमा जीवहरू उत्पन्न हुँदैनन् भनी बताइएको छ। अघिल्लो श्लोकमा जीवहरू परमात्माबाट नै उत्पन्न भएकाले ती उहाँद्वारा नियम्य हुन्छन् भनी बताइएको थियो। यदि वास्तवमा नै जीवहरू उत्पन्न हुने भएदेखि त ती जीवहरू उत्पन्न र नष्ट हुने भएकाले अनित्य हुने भए। अतः उपाधिको सम्बन्धद्वारा नै जीवको औपाधिक जन्म भएको हो, वास्तवमा चाहिँ होइन भन्ने बताउनु प्रस्तुत श्लोकको तात्पर्य हो। जीवहरूलाई उत्पन्न भएको मान्दा कि प्रकृतिलाई जीवरूपमा उत्पन्न भन्नुपर्दछ कि त पुरुषलाई। यी दुबै कुरा सम्भव छैनन्। प्रकृतिलाई अजा भनिएको छ, यसको अर्थ हुन्छ नजन्मिने। जीवको रूपमा यदि प्रकृति उत्पन्न हुने भए त उसको अजात्व नै नष्ट हुन्छ। यसै गरी पुरुषलाई पनि अज भनिएको छ। पुरुष यदि जीवको रूपमा उत्पन्न भएको हो भने पनि जीवरूपले पुरुष नै जन्मिएको ठहर्छ र पुरुषको अजत्वमा हानि आउँछ। फेरि प्रकृति र पुरुषलाई जीवरूपमा उत्पन्न भएको मान्ने हो भने अरू दोष पनि आउने देखिन्छन्। प्रकृति जीवको रूपमा उत्पन्न भएको मान्दा जीवलाई जड भन्नुपर्दछ, किनभने कारणको गुण नै कार्यमा आउँछ। अनि पुरुष उत्पन्न भएको मान्दा पनि पुरुषलाई विकारी मानेको हुन जान्छ। त्यसैले श्लोकमा भनिन्छ– **प्रकृतिपुरुषयोः** अर्थात् प्रकृति अनि पुरुष दुबैको

**उद्भवः** अर्थात् जीवरूपले उत्पत्ति हुनु **नघटते** अर्थात् सम्भव छैन। उसो भए जीव कसरी भएको छ त भन्ने शङ्कामा वेदहरू भन्दछन्— **उभययुजा** अर्थात् दुबै आपसमा मिल्नाले नै यस्तो भएको छ। प्रकृति जड छे र शरीर आदिको उत्पत्ति उसैबाट हुन्छ। पुरुष अर्थात् आत्मा चाहिँ निर्विकार चेतनरूप छ। जब यी दुबै आपसमा जोडिन्छन् तब एक-आपसमा एउटाको धर्म अर्कोमा सर्दछ। प्रकृतिबाट उत्पन्न शरीर आदिमा आत्माले **अहं** अर्थात् म हुँ भन्ने बुद्धि गर्नु प्रकृतिमा आत्माको अध्यास हो भने आत्मालाई शरीर भनिठान्नु आत्मामा प्रकृतिको अध्यास हुनु हो। यसलाई परस्पराध्यास भनिन्छ। श्रीशङ्कराचार्य ब्रह्मसूत्रशाङ्करभाष्यको उपक्रममा भन्नुहुन्छ— यद्यपि यी दुई एउटा चेतन र अर्को जड भएकाले प्रकाश र अन्धकार झैँ पृथक् स्वभावबाला छन्, तर पनि अनादिकालदेखि यी विरोधीहरूमा पनि परस्पर अध्यास भई शरीरलाई नै आत्मा अनि आत्मालाई नै शरीर मान्ने अज्ञानी लोकव्यवहार चलिआएको छ। यसैलाई अध्यास भनिन्छ। यसरी प्रकृति र पुरुषको आपसमा अध्यास भएर नै जीवभाव खडा भएको छ। यसैले जीवमा जड शरीरको अनि चेतन आत्माको पनि स्फुरण हुन्छ। यसैलाई श्लोकमा प्रकृति र पुरुष परस्परमा युक्त हुनाले नै जीव उत्पन्न भएको हो भनिएको छ। यसमा दृष्टान्त दिँदै श्रुतिहरू भन्दछन्— **जलबुद्बुदवत्** अर्थात् हावा र पानी मिलेर फोका बने झैँ प्रकृति र पुरुष दुबैको अंश मिलेर नै जीव बन्दछ। जुन वस्तु उपाधितः बनेको हुन्छ, त्यो वास्तवमा बनेकै हुँदैन। यसैले प्रकृति र पुरुषको अध्यास या छ्यासमिसका कारणले जीव उत्पन्न हुनुको अर्थ वास्तवमा उत्पन्न भएकै छैन भन्ने हो।

उपाधि नष्ट भएपछि जीवहरू परमात्मामा नै मिल्दछन् भन्ने श्रुतिप्रमाणद्वारा जीवहरू वास्तवमा उत्पन्न नभएको सिद्ध हुन्छ। यदि जीव परमात्माभन्दा भिन्नै उत्पन्न भएको हुन्थ्यो भने त्यो उपाधि नाशपछि परमात्मामा पूरै मिल्न कसरी सक्दथ्यो ? त्यसैले जीवहरू उत्पन्न हुनुको अर्थ अलग-अलग नामरूपमा एउटै तत्त्व प्रतीत हुनु भन्ने मात्र हो। जब त्यो एउटै परमात्मवस्तुमा कल्पित भएका अनेक नामरूप नष्ट हुन्छन्, तब जीवहरू परमात्मा नै भइहाल्दछन्। त्यसैले श्लोकमा **ततः** अर्थात् उपाधिको नाश भएपछि **इमे** अर्थात् यी अनेक रूपमा प्रतीत भइरहेका जीवहरू **विविधनामगुणैः** अर्थात् आ-आफ्नो अनेक नाम, रूप गुण आदि सहित **लिल्युः** अर्थात् लीन भइहाल्छन् भनी बताइएको छ। यहाँ जीवहरू परमात्मामा लीन हुने विषयलाई लिएर दुईथरी उपनिषद्वचनलाई आधार मानी दुईथरी नै दृष्टान्त प्रस्तुत गरिएका छन्। पहिलो दृष्टान्त छ— महमा अनेक फूलका रसहरू लीन हुनु अनि अर्को दृष्टान्त छ— नदीहरू आफ्नो परम गन्तव्य समुद्रमा पुगी लीन हुनु। पहिलो दृष्टान्त छान्दोग्योपनिषद्को अनि दोस्रो चाहिँ मुण्डकोपनिषद्को हो।

छान्दोग्योपनिषद्मा जीवहरू सुषुप्तिकालमा ब्रह्ममा लीन भएर पनि किन आफूलाई ब्रह्म भएँ भनी थाहा पाउँदैनन् भनेर सम्झाउने क्रममा आरुणिले आफ्नो पुत्र श्वेतकेतुलाई महको दृष्टान्त दिनुभएको छ। जसरी मौरीले हजारौँ फूलबाट रस चुसी एउटै घारमा मह बनाई राख्छ, तर ती मह बनिसकेका फूलका विभिन्न रसहरूको भेद भने थाहा पाइँदैन त्यसै गरी सुषुप्तिमा ब्रह्ममा मिलेका जीवहरूले भेद थाहा पाउँदैनन्। त्यहाँ भनिएको छ— **यथा सोम्य मधु मधुकृतो निस्तिष्ठन्ति नानात्ययानां वृक्षाणां रसान् समवहारमेकतां रसं गमयन्ति। ते यथा तत्र न विवेकं लभन्तेऽमुस्याहं**

**वृक्षस्य रसोऽस्म्यमुष्याहं वृक्षस्य रसोऽस्मीत्येवमेव खलु सोम्येमाः सर्वाः प्रजाः सति सम्पद्य न विदुः सति सम्पद्यामह इति** (६।९।१-२)। यही दृष्टान्त प्रलयकालका लागि पनि लागु हुन्छ। त्यहाँ पनि प्राणीहरू आफ्नो व्यष्टि उपाधिलाई बिर्सिएर ब्रह्मरूप भएका हुन्छन् तर प्रलयकालमा अज्ञान नष्ट भएको हुँदैन। त्यसैले यो लय अज्ञान सहितकै लय हुन्छ। अर्को दृष्टान्तमा चाहिँ जसरी नदीहरू आफ्नो परम गन्तव्य समुद्रतिर बग्दै त्यहाँ पुगेर आफ्नो नामरूपलाई छाडी समुद्र बन्दछन्, त्यसै गरी ब्रह्मज्ञानी पनि आफ्नो नामरूपलाई त्यागेर ब्रह्ममा मिली ब्रह्म नै बन्दछन् भनिएको छ– **यथा नद्यः स्यन्दमानाः समुद्रेऽस्तं गच्छन्ति नामरूपे विहाय, तथा विद्वान् नामरूपाद् विमुक्तः परात्परं पुरुषमुपैति दिव्यम्** (मुण्डकोपनिषद् ३।२।८) यसरी ज्ञानद्वारा उपाधिको परित्यागपूर्वक परमात्मामा हुने लयलाई यहाँ बताइएको छ। श्लोकमा **मधुनि अशेषरसाः** अर्थात् महमा सबै फूलका रसहरू अनि **सरितः अर्णवे इव** अर्थात् नदीहरू समुद्रमा लीन भएझैं भनी यसैको प्रतिपादन गरिएको छ।

यस श्लोकलाई श्रीकृष्णलीलाको रूपमा अर्थ्याउँदा भने यहाँ भगवान्को अनि उहाँकी नित्यशक्तिरूपा श्रीराधाको स्वरूप बताइएको छ। **उद्भवः** अर्थात् हजुरहरूको प्रादुर्भाव **प्रकृतिपुरुषयोः न** अर्थात् प्रकृति र पुरुषको प्रादुर्भाव होइन। हजुरहरू प्रकृति र पुरुषभन्दा भिन्न पुरुषोत्तम र उहाँकी शक्तिरूपा हुनुहुन्छ। उसो भए के मेरा प्रिय अरू गोपगोपिनीहरू चाहिँ प्रकृति र पुरुषरूप हुन् त ? भन्ने शङ्कामा वेदहरू भन्छन्– **उभययुजा** अर्थात् चित्शक्ति र लीलाशक्तिको योगद्वारा नै **असुभृतः** अर्थात् हजुरका प्रिय प्राणीहरू उत्पन्न हुन्छन्। यहाँ चित्शक्तिप्रधान र लीला अर्थात् माधुरी शक्तिप्रधान गरी दुईथरी प्रियजन हुने बताइएको छ। भगवान्का विमला, उत्कर्षिणी आदि शक्ति र रुक्मिणी आदि रानीहरू एवं अन्य उद्धव आदि सबै भक्त चित्शक्तिप्रधान छन्। व्रजवासी श्रीदामा आदि गोप अनि गोपिनीहरू चाहिँ लीला अर्थात् माधुरीशक्तिप्रधान छन्। यी सबैथरी भक्तहरू **परमे त्वयि** अर्थात् परमात्मा हजुरमा सधैं लीन भइरहन्छन्। यहाँ **मधु निलिल्युः** यी दुई पदको अर्थ **मधु यथा स्यात्तथा निलिल्युः** भन्ने हुन्छ, अर्थात् यी सबै भक्त आनन्दै आनन्द हुने गरी परम आनन्दस्वरूप हजुरमा पूर्ण लीन हुन्छन्। भगवान्मा लीन हुने साधन बताउँदै श्रुति भन्छन्– **विविधनामगुणैः** अर्थात् भगवान्का नन्दनन्दन, गोवर्धनधर, दामोदर आदि नामहरू लिएर अनि उहाँका भक्तवात्सल्य, सौन्दर्य आदि अनेक गुणहरूलाई सम्झिएर भक्तहरू परमात्मामा लीन हुन्छन्। अनेक रूपले भगवान्लाई सम्झँदै उनीहरू यहाँबाट **अशेषरसाः** अर्थात् सबैथरी रसहरूको आस्वाद गरिरहन्छन् भन्ने भाव रहेको छ।

यस श्लोकको भावलाई श्लोकान्तरमा श्रीधर स्वामी यसरी प्रस्तुत गर्नुहुन्छ–

**यस्मिन्नुद्यद् विलयमपि यद् भाति विश्वं लयादौ**
**जीवोपेतं गुरुकरुणया केवलात्मावबोधे।**
**अत्यन्तान्तं व्रजति सहसा सिन्धुवत् सिन्धुमध्ये**
**मध्ये चित्तं त्रिभुवनगुरुं भावये तं नृसिंहम्।।**

अर्थात् प्राणीहरूसहित यो सम्पूर्ण संसार जसबाट उत्पन्न भएको छ, जहाँ अडिएर यो प्रकाशित भएको छ, त्यसै गरी प्रलयकालमा यो सम्पूर्ण जीव-जगत् जहाँ गई लीन हुन्छ। गुरुको कृपाद्वारा जुन परमात्माको साक्षात्कार भइसकेपछि मुक्त जीवहरू नदीहरू समुद्रमा गई मिले झैं

जहाँ गई लीन हुन्छन्, त्यस्ता तीनै लोकका गुरु श्रीनृसिंहलाई म आफ्नो चित्तभित्र चिन्तन गर्दछु।

यसप्रकार यस श्लोकमा जीवहरू वास्तवमा परमात्माबाट उत्पन्न नभएको अपि तु प्रकृति र पुरुषको परस्पर अध्यासको कारणले मात्र जीवभाव खडा भएको र उपाधिनाशपछि जीवहरू परमात्मामा नै मिल्ने कुरा बताइएको छ।

**नृषु तव मायया भ्रमममीष्ववगत्य भृशं**
**त्वयि सुधियोऽभवे दधति भावमनुप्रभवम्।**
**कथमनुवर्ततां भवभयं तव यद् भ्रुकुटिः**
**सृजति मुहुस्त्रिणेमिरभवच्छरणेषु भयम्॥ ३२॥**

**पदार्थ—**
**सुधियः** = विवेकीहरू
**अमीषु** = यी
**नृषु** = मानिसहरूमा
**तव** = हजुरको
**मायया** = मायाद्वारा
**अनुप्रभवं** = जन्मौं जन्म
**भृशं** = बारम्बार
**भ्रमं** = संसारभ्रम भएको
**अवगत्य** = जानेर
**अभवे** = संसाररहित
**त्वयि** = हजुरमा
**भावं** = भक्ति
**दधति** = गर्दछन्
**अनुवर्ततां** = हजुरको अनुसरण गर्ने भक्तहरूलाई
**कथं** = कसरी
**भवभयं** = संसारभय हुन सक्छ
**यत्** = किनभने
**तव** = हजुरको
**भ्रुकुटिः** = टेढो आँखीभौँरूप
**त्रिणेमिः** = (शीत, ग्रीष्म र वर्षा यी) तीन भागवाला कालचक्रले
**अभवच्छरणेषु** = हजुरका शरणमा नजानेहरूका लागि
**मुहुः** = बारम्बार
**भयं** = भयको
**सृजति** = सिर्जना गर्दछ

**वाक्यार्थ—** हजुरको मायाको कारणले गर्दा मनुष्यहरूमा बारम्बार भ्रम भइरहन्छ भन्ने कुरालाई बुझेर विवेकीहरू सधैँ हजुरको भक्ति गर्दछन्। हजुरको शरणमा आएका भक्तहरूलाई संसारको भयले छुन सक्दैन। शीत, उष्ण र वर्षा गरी तीन भागमा विभक्त भएको हजुरको आँखीभौँको रूपमा रहेको कालले हजुरका अभक्तहरूमा मात्रै जन्म र मरणरूपी भयलाई सृष्टि गर्दछ।

**विवरण—** यस श्लोकमा भगवान्मा मन लगाउने भक्तहरू संसारबाट भयभीत नहुने बताइएको छ। प्राणीहरू संसारको भ्रममा परेका छन्। यसैले उनीहरू यसबाट डराउँछन्। भ्रमको कारण परमात्माको माया नै हो। यसलाई अनादि अविद्याका कारणले हुने अध्यास भनिन्छ। अनादि अविद्या स्वयं पनि आत्मामा अध्यस्त वस्तु हो, यदि त्यसलाई अध्यस्त नमान्ने हो भने संसारको भ्रमलाई उत्पन्न गर्ने त्यो स्वयं सद्रूप हुन सक्छ। त्यसैले आत्मामा संसार अज्ञानको कारणले अध्यस्त हो अनि अज्ञान चाहिँ स्वरूपतः नै परमात्मामा अध्यस्त हो। यी दुबैको अध्यासलाई कारणाध्यास र कार्याध्यास भनिन्छ। अध्यासको कारण अज्ञान हो। त्यसैले आत्मामा अज्ञानको अध्यास हुनुलाई कारणाध्यास भनिन्छ भने अज्ञानका कार्य कर्तृत्व भोक्तृत्व आदिको अध्यास हुनुलाई चाहिँ कार्याध्यास भनिन्छ। ज्ञानद्वारा अज्ञान हटेपछि त्यसको कार्य भएको अध्यास पनि

हट्दछ। वाचस्पति मिश्रले ब्रह्मसूत्रशाङ्करभाष्यको अध्यासभाष्यको व्याख्यामा अज्ञान र अध्यासको कार्यकारणभाव देखाउँदै भन्नुभएको छ– **यत्र अध्यासः तत्र भेदाग्रहः यत्र भेदाग्रहः तत्र अज्ञानम्** अर्थात् अध्यास भएको ठाउँमा त्यसको कारण भेदाग्रह हुनै पर्दछ अनि भेदाग्रह भएको ठाउँमा त्यसको कारण अज्ञान हुनै पर्दछ। यसरी पहिला ब्रह्मस्वरूपको अज्ञान हुन्छ। अज्ञान भइसकेपछि सत् वस्तु र असत् वस्तुबिचको भेदलाई जान्न सकिँदैन। **भेदस्य अग्रहः** अर्थात् सत् र असत्बिचको भेदलाई बुझ्नु या ग्रहण गर्न नसक्नु नै भेदाग्रह हो। जब वस्तुबिचको भिन्नता थाहा हुँदैन, तब **असत्** अर्थात् नभएको वस्तु पनि **सत्** अर्थात् सत्य वस्तु झैँ प्रतीत हुन्छ। डोरीमा सर्प अनि सिपीमा चाँदीको अध्यास प्रसिद्ध छ। आफ्नो अगाडि सिपी भए तापनि व्यक्ति चाँदी देखेको पूर्व अनुभवको संस्कार अनि चाँदीप्रतिको आसक्तिको कारणले त्यसलाई अलि–अलि टल्किएको भरमा चाँदी नै भन्ने देख्दछ र त्यसलाई समात्न दौडिन्छ। यहाँ पहिला सिपीको अज्ञान भएको छ। अनि त्यसलाई सिपी भनी नबुझ्नाले अलि–अलि टल्किएको देख्नेबित्तिकै त्यहाँ मनभित्रको चाँदीको संस्कार उद्बुद्ध भई चाँदी नै देख्दछ। ठिक यसै गरी व्यक्ति पनि अधिष्ठान ब्रह्मलाई बुझ्दैन। संसार अनुभव गरेको अनादि संस्कारले चित्त भरिएको र संसारप्रति राग पनि भएको हुनाले ब्रह्ममा संसारको अध्यास हुन्छ।

अध्यासको व्युत्पत्ति हुन्छ– **वस्त्वन्तरं अधिकृत्य आस्ते प्रकाशते इति अध्यासः** अर्थात् एउटा वस्तुमा अर्को वस्तु देखिनु नै अध्यास हो। यसलाई अरु स्पष्ट शब्दमा भन्दा **अतस्मिन् तद्बुद्धिः अध्यासः** अर्थात् जुन वस्तु जस्तो छ, त्यसलाई त्यो रूपमा नजानी अर्को रूपमा जान्नु नै अध्यास हो। संसार नभएको ठाउँ ब्रह्ममा संसार देखिनु यही नै अध्यास हो। अरु सूक्ष्मतापूर्वक हेर्ने हो भने अध्यास शब्दले शरीर र आत्माको परस्परमा हुने आरोपलाई बताएको छ। **तव मायया** अर्थात् परमात्माको माया या अज्ञानको कारण व्यक्ति आत्मालाई यथार्थ रूपमा बुझ्दैन अनि आत्मा एवं शरीरको परस्पर अध्यास गर्न पुग्दछ। आत्मालाई शरीर भन्नु र शरीरलाई आत्मा भन्नु यो दुबैको परस्परमा आरोप भएको हो। जुन वस्तु आरोपित हुन्छ, त्यो मिथ्या हुन्छ। आत्माको शरीरमा अध्यास मान्दा त्यो पनि मिथ्या होला भन्ने शङ्का हुँदा वेदान्तमा शरीरको आत्मामा हुने भ्रमलाई स्वरूपाध्यास अनि आत्माको शरीरमा हुने भ्रमलाई चाहिँ संसर्गाध्यास भनिएको छ। शरीर आत्मामा स्वरूपतः नै अध्यस्त भएकाले त्यो स्वरूपतः मिथ्या हो तर आत्माको चाहिँ संसर्ग अर्थात् सम्बन्ध मात्र अध्यस्त भएकाले आत्मा मिथ्या होइन, संसर्ग मात्र मिथ्या हो। यसरी मायाको कारणले भ्रम हुने स्पष्ट छ।

**सुधियः** अर्थात् विचारशील व्यक्तिहरू चाहिँ यो संसार अनि शरीर आदि सबै भ्रमरूप छन् भन्ने बुझेर **त्वयि** अर्थात् हजुर परमात्मामा नै **भावं** अर्थात् आफ्नो सम्पूर्ण चिन्तन लगाउँछन्। यहाँ **अनुप्रभवं** शब्दको अर्थ नित्यनिरन्तर अनि जन्मैपिच्छे भन्ने हुन्छ। भक्त अनेक पटक जन्मिएर पनि भगवान्को सेवा गर्न खोज्दछ, त्यसैले उसकै भावलाई लिएर वेदले यहाँ अनेक जन्मको कुरा उठाएका हुन्। त्यस्ता निरन्तरका भक्तहरूलाई कालको डरले कसरी सताउला र? यहाँ **त्रिणेमि** अर्थात् गर्मी, जाडो र वर्षा गरी मुख्य तीन मौसमले घेरिएको या युक्त भएको संवत्सररूप काललाई नै **त्रिणेमि** भनिएको छ। भगवान्ले भ्रुकुटि खुम्च्याउनु नै काल हो। त्यस कालले

अभक्तहरूमा मात्र भय जन्माउन सक्छ, भक्तहरूमा होइन।

यस श्लोकको श्रीकृष्णलीलापरक अर्थ गर्दा यहाँ यज्ञपत्नीहरूको प्रशंसाको भाव आएको छ। **नृषु** अर्थात् पतिहरूमा **तव मायया** अर्थात् हजुरकै मायाद्वारा **भ्रमं** अर्थात् श्रीकृष्ण परमात्मा नभई सामान्य मनुष्य हुन् भन्ने भ्रान्त धारणालाई **अवगत्य** अर्थात् जानेर **सुधियः** अर्थात् बुद्धिशाली यज्ञपत्नीहरूले तिनको भ्रमलाई छाडी हजुरमा नै मन लगाए। पछि त याज्ञिकहरूलाई पनि पश्चात्ताप भई भगवान्प्रति भक्ति भएकै देखिन्छ। त्यसैले तिनीहरूलाई कसरी भ्रान्त भन्न सकिन्छ ? यसको उत्तरमा भनिन्छ— तिनीहरू वास्तवमा भक्त थिएनन्, किनभने तिनले कंसका डरका कारण पछि पनि श्रीकृष्णदर्शन गर्न सकेका छैनन्। श्रुतिहरू भन्दछन्— कंसको भयको त के कुरा, हजुरका भक्तहरूलाई त **भवभयं** अर्थात् संसारैको भयले पनि सताउन सक्दैन। किनभने प्रलयकारी कालाग्निरुद्रले पनि **अभवच्छरणेषु** अर्थात् भगवान्को शरणमा नजानेहरूलाई नै भयभीत बनाउँछन्। यहाँ भ्रुकुटि शब्दले भगवान् टेढो आँखीभौँ या रिसस्वरूप **त्रिणेमि** अर्थात् त्रिनेत्र हुने प्रलयङ्कर रुद्रलाई लिनुपर्दछ। संसारैका संहर्ता उहाँले अभक्तहरूलाई मात्र भयभीत पार्नुहुन्छ भने त्यो तुच्छ कंसले भक्तहरूलाई कसरी भयभीत पार्न सक्छ। अतः केही डर नमानी भगवान्को शरणमा जाने यज्ञपत्नीहरू नै श्रेष्ठ छन् भन्ने यस श्लोकको भाव हो।

यस श्लोकको भावलाई समेटेर श्रीधरस्वामी लेख्नुहुन्छ—

**संसारचक्रक्रकचैर्विदीर्णमुदीर्णनानाभवतापतप्तम् ।**
**कथं चिदापन्नमिह प्रपन्नं त्वमुद्धर श्रीनृहरे ! नृलोकम् ।।**

अर्थात् हे भगवान् ! संसारका सम्पूर्ण मनुष्यहरू संसारको जन्ममृत्युको चक्ररूपी आराद्वारा निरन्तर चिरिइरहेका छन्। यिनीहरू अनेक तापहरूबाट असाध्यै तप्त पनि भएका छन्। आपत्तिमा पर्नाले बल्ल यिनीहरू हजुरको शरणमा आएका हुन्। त्यसैले हजुरले यिनीहरूलाई कुनै पनि उपायले उद्धार गरिदिनुहोस्।

यसप्रकार यस श्लोकमा परमात्माको मायाद्वारा भ्रमपूर्ण संसारलाई सत्य ठानी सम्पूर्ण प्राणीहरू भ्रममा परेका छन् अनि भगवान्का भक्तहरू चाहिँ यो सब देखेर परमात्माकै शरण लिन्छन्। उनीहरूलाई संसारको भयले कसै गरी पनि छुन सक्दैन भनी बताइएको छ।

**विजितहृषीकवायुभिरदान्तमनस्तुरगं**
**य इह यतन्ति यन्तुमतिलोलमुपायखिदः ।**
**व्यसनशतान्विताः समवहाय गुरोश्चरणं**
**वणिज इवाज सन्त्यकृतकर्णधरा जलधौ ॥ ३३ ॥**

**पदार्थ—**
**अज** = हे अजन्मा परमात्मा
**ये** = जो मानिसहरू
**इह** = यहाँ
**अतिलोलं** = अत्यन्त चञ्चल र
**विजितहृषीकवायुभिः** = कर्मेन्द्रिय एवं प्राणवायुहरूलाई जितेका योगीहरूले पनि
**अदान्तमनस्तुरगं** = नियन्त्रित

गर्न नसकिने मनरूपी घोडालाई
**यन्तुं** = वशमा गर्न
**यतन्ति** = प्रयास गर्दछन्, तर
**गुरोः** = गुरुको
**चरणं** = चरणलाई
**समवहाय** = छोडी
**उपायखिदः** = अनेक उपाय गर्दा पनि खिन्न भएका
**व्यसनशतान्विताः** = अनेकौं आपत्तिहरूले ग्रसित तिनीहरू
**जलधौ** = समुद्रमा
**अकृतकर्णधराः** = नाविक (डुङ्गा चलाउने व्यक्ति) विनाको
**वणिजः इव** = व्यापारी (यात्री)हरू जैँ
**सन्ति** = भएका हुन्छन्

**वाक्यार्थ–** हे भगवान्! जो साधकहरू गुरुको चरणकमलको आश्रयलाई छाडेर इन्द्रिय र प्राणमाथि विजय प्राप्त गरेका ऋषिहरूद्वारा पनि नियन्त्रण गर्न नसकिने अत्यन्त चञ्चल मनरूपी घोडालाई अरू कुनै उपायद्वारा वशमा गर्न चाहन्छन् ती साधकहरूले नाविक नभएको समुद्रबिचको डुङ्गामाथि बसेका व्यक्तिहरूले जैँ यस संसाररूपी समुद्रमा केवल कष्ट मात्रै प्राप्त गर्दछन्।

**विवरण–** यस श्लोकमा गुरुको महत्त्व बताइएको छ। अघिल्लो श्लोकमा भक्तहरूले भगवान्मा आफ्नो भाव लगाउँछन् भनी बताइएको थियो। भगवान्मा आफ्नो भाव लगाउने भन्ने कुरा मन शान्त नभई संभव छैन। मन शान्त गर्नका लागि चाहिँ गुरुसँग गई उहाँले उपदेश गरेको शास्त्रीय उपायको अवलम्बन गरेर मात्र समर्थ भइन्छ। गुरुविना शास्त्रीय साधनाका रहस्य पनि खुल्दैनन्। अनि गुरुको उपदेशविना ग्रन्थ आदिबाट स्वतः जानेको विद्या पनि तेजस्वी हुँदैन। **आचार्यादिव लब्धा विद्या साधिष्ठा भवति** अर्थात् आचार्यबाट प्राप्त विद्या नै तेजस्वी या समर्थ हुन्छ। यसरी शास्त्रहरूमा परमात्माप्राप्तिका लागि गुरुको आवश्यकता अनिवार्य बताइएको छ। गुरु कस्तो हुनुपर्दछ र गुरुकहाँ कस्तो भावले कसरी जाने भन्ने कुरा मुण्डकोपनिषद् (१।२।१२)मा यसरी बताइएको छ– **तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्** अर्थात् आत्मतत्त्वलाई जान्नका लागि विरक्त शिष्य हातमा समिधा लिएर विनयपूर्वक श्रोत्रिय ब्रह्मनिष्ठ गुरुकहाँ जाओस्। वेद आदि शास्त्रहरूको विधिपूर्वक अध्ययन गरेको शास्त्रज्ञलाई श्रोत्रिय भन्दछन् भने ब्रह्मज्ञान भई आफूमा नै स्थित भइसकेको व्यक्तिलाई ब्रह्मनिष्ठ भन्दछन्। यसैलाई गीता (४।३४)मा भगवान्ले **उपदेक्ष्यन्ति ते ज्ञानं ज्ञानिनस्तत्वदर्शिनः** अर्थात् तिमीले विधिपूर्वक सेवा एवं जिज्ञासा गरेपछि शास्त्रज्ञ एवं तत्त्वदर्शी गुरुहरूले तिमीलाई ज्ञानको उपदेश गर्दछन् भनी बताउनुभएको छ।

यहाँ प्राणायाम आदिद्वारा प्राणवायु अनि विषयमा आसक्त इन्द्रियहरूलाई पनि बलजफ्ती नियन्त्रणमा लिएका योगीहरूको पनि मन **अदान्त** अर्थात् अनियन्त्रित नै हुन्छ भनिएको छ। मनलाई घोडा भनिएको छ। अनियन्त्रित घोडाले जतातनै लगे जैँ अनियन्त्रित मनले पनि साधकलाई साधनामार्गबाट भड्काई कहाँबाट कहाँ पुऱ्याइदिन्छ, यसको भरोसा हुँदैन। मन अत्यन्त चञ्चल छ। यसलाई नियन्त्रित गर्न परमात्माको भक्ति नै चाहिन्छ। सुख खोज्ने मनको स्वभाव भएको हुनाले जबसम्म मनलाई परमात्मप्रेमको रसमा डुबाइँदैन, तबसम्म त्यसले संसारका वस्तुहरूबाट आनन्द लिन छाड्दैन। उता हठपूर्वक योग गरिरहनेहरू चाहिँ अनुभवी गुरुहरूले बताउने सजिलो बाटोलाई थाहा नपाई मनलाई नियन्त्रण गर्न यसलाई थिचेर राख्ने प्रयास गर्दछन्।

तर प्राणवायु र इन्द्रियलाई रोके तापनि मनलाई रोक्न के सकिन्थ्यो ? उनीहरू जब समाधिबाट उठ्छन् तब मन फेरि पहिले जस्तै वासनायुक्त भइरहेको हुन्छ। यसरी अनेक उपाय गर्दा पनि केही पनि नलागी खिन्न भएका तिनीहरू व्यर्थ नै दुःख पाउँछन्। गीता (३।६)मा पनि भगवान् श्रीकृष्णले विषयभोग नगरी इन्द्रियलाई बलपूर्वक नियन्त्रण मात्र गर्दा तिनीहरूभित्र रहेको सूक्ष्म विषयभोगको संस्कार नहराउने र त्यो नियन्त्रणको कार्य केवल मिथ्याचार हुने बताउनुभएको छ। जबसम्म मनमा विषयहरूप्रतिको राग रहिरहन्छ, तबसम्म जति नै मनलाई नियन्त्रित गरे पनि त्यो वशीभूत हुँदैन। गुरुको शरणमा नगई त्यो मन नियन्त्रित हुँदैन। समुद्रमा डुङ्गाभित्र कोही छ, अनि त्यहाँ डुङ्गा चलाउने नाविक छैन भने जति वर्ष लगाए पनि के त्यो डुङ्गाले त्यो डुङ्गामा चढेको व्यक्तिलाई आफू जान चाहेको किनारामा पुऱ्याउँछ ? यसै गरी गुरुविनाको साधनाले पनि व्यक्तिलाई उचित लक्ष्यमा पुऱ्याउँदैन।

यस श्लोकको श्रीकृष्णलीलापरक अर्थ गर्दा भने गुरु भनेर श्रीकृष्णलाई नै लिइएको छ। **अज** शब्दले सामान्य प्राणी जन्मिए झैँ प्राकृत जन्मले रहित हुनुभएका श्रीकृष्णलाई बुझाएको छ। भगवान् श्रीकृष्ण गुरु अर्थात् ब्रह्मा आदिलाई पनि वेदको उपदेश गर्ने आदि गुरु हुनुहुन्छ। उहाँ धर्ममर्यादाका प्रवर्तक एवं संरक्षक भएकाले जगद्गुरु पनि हुनुहुन्छ। यस्ता सन्मार्ग देखाउँदै भक्तहरूको उद्धार गर्ने परम गुरु परमात्माको चरणलाई नसमाती व्यक्तिहरू वायुनिग्रह, इन्द्रियनिग्रह आदिको साधना गर्दछन् भने तिनीहरूले जति उपाय गरे पनि मनलाई जित्न सक्दैनन् र उनीहरू केवल दुःखी मात्र बन्दछन्।

श्रीधर स्वामी यस श्लोकको भाव बताउँदै लेख्नुहुन्छ–

**यदा परानन्दगुरो भवत्पदे पदं मनो मे भगवँल्लभेत।**
**तदा निरस्ताखिलसाधनश्रमः श्रयेय सौख्यं भवतः कृपातः।।**

अर्थात् हे भगवान् ! जब परम आनन्दमय गुरु हजुरको चरणमा मेरो मन पूर्णतया समर्पित होला, त्यस वेलामा अनेक साधनहरूको व्यर्थ श्रमलाई छाडी म हजुरको कृपाबाट सुखपूर्वक नै संसारबाट पार हुँला।

यसप्रकार यस श्लोकमा प्राण आदिको बलपूर्वक नियन्त्रण गरे तापनि गुरुको शरणमा नगईकन मन नियन्त्रित नहुने अनि त्यसविना संसारसागरबाट पार तर्न पनि नसकिने कुरा बताइएको छ।

**स्वजनसुतात्मदारधनधामधरासुरथै-**
**स्त्वयि सति किं नृणां श्रयत आत्मनि सर्वरसे।**
**इति सदजानतां मिथुनतो रतये चरतां**
**सुखयति को न्विह स्वविहते स्वनिरस्तभगे॥ ३४॥**

**पदार्थ**–

**त्वयि** = हजुर

**सर्वरसे** = परमानन्दमय

**आत्मनि** = आत्मा
**सति** = रहँदारहँदै
**श्रयतः** = त्यसको आश्रय लिने
**नृणां** = मान्छेहरूलाई
**स्वजनसुतात्मदारधनधामधरा-सुरथैः** = आफन्त, पुत्र, शरीर, पत्नी, धन, घर, जमिन र राम्रा रथ आदि सुखभोगबाट
**किं** = के नै हुन्छ र
**इति** = यस्तो
**सत्** = सत्यलाई
**अजानतां** = नजान्ने र
**मिथुनतः** = स्त्रीसँग मिली
**रतये** = रतिसुखमा
**चरतां** = लागिरहेकाहरूलाई
**स्वविहते** = स्वयंमा विनश्वर र
**स्वनिरस्तभगे** = स्वतः सारशून्य
**इह** = यस संसारमा
**कः नु** = कुन चाहिँ वस्तुले
**सुखयति** = सुख दिन सक्ला र

**वाक्यार्थ—** परमानन्दस्वरूप हजुर छँदाछँदै त्यस्ता हजुरको आश्रय लिने मानिसहरूलाई यी तुच्छ आफन्त, पुत्र, शरीर, पत्नी, धन, घर, जमिन र राम्रा वाहन आदि सुखभोगको के प्रयोजन छ र ? यस सत्यलाई नजानेर स्त्रीसँग मिली रतिसुखमा लागिरहेकाहरूलाई नाशवान् एवं सारविहीन यस संसारमा कुन चाहिँ वस्तुले सुख दिन सक्ला र ?

**विवरण—** यस श्लोकमा भगवान्को आनन्दरूपता एवं सांसारिक वस्तुहरूको निस्सारतालाई बताइएको छ। परमात्मा **सर्वरस** अर्थात् सम्पूर्ण सुखस्वरूप हुनुहुन्छ। छान्दोग्योपनिषद् (३।१४।२)मा परमात्मालाई सम्पूर्ण रस आदिले युक्त भनी बताइएको छ— **सर्वकामः सर्वगन्धः सर्वरसः**। अरु परमात्मा त स्वयं रसरूप नै हुनुहुन्छ। त्यसैले तैत्तिरीयोपनिषद् (२।७)मा बताइएको छ— **रसो वै सः, रसं ह्येवायं लब्ध्वानन्दीभवति** अर्थात् परमात्मा रसस्वरूप हुनुहुन्छ र रसस्वरूप उहाँलाई पाएर नै प्राणीहरू आनन्दित हुन्छन्। **त्वयि** अर्थात् यस्ता आनन्दरूप हजुर **आत्मनि सति** अर्थात् स्वयं आत्मरूप नै हुनुहुन्छ भने प्राणीहरूलाई अरू बाहिरी विषयबाट आनन्द लिनुको के आवश्यकता हुन्छ र ? सम्पूर्ण वस्तु एवं प्राणीहरूमा जुन आनन्द देखिन्छ, त्यो त आत्माको आनन्दको थोरै मात्रा या लेश हो। यसैलाई बृहदारण्यकोपनिषद् (४।३।३२)मा **एतस्यैवानन्दस्यान्यानि भूतानि मात्रामुपजीवन्ति** अर्थात् सम्पूर्ण प्राणीहरू यही आनन्दस्वरूप आत्माकै केही आनन्दलाई पाएर आनन्दपूर्वक बाँच्छन् भनी बताइएको छ। संसारमा जति पनि आनन्द छ, त्यो सबै आत्मरूप आनन्दको प्रतिबिम्ब या आभास हो। यही आभास आनन्दलाई पाएर नै मानिसदेखि ब्रह्मासम्मका सम्पूर्ण प्राणीहरू आनन्दित भइरहेका हुन्छन्। यसरी परमात्माको स्वरूपभूत आनन्द असीम छ र त्यसलाई पाइसकेका व्यक्तिलाई अरू बाहिरी पदार्थको आनन्दले आकृष्ट गर्न सक्दैन, किनभने ऊ त्यो भन्दा अनन्त गुणा बढी आनन्दरूप भई बसिरहेको छ। यो त आनन्दस्वरूप आत्माको साक्षात्कार गरिसकेपछिको स्थिति हो। अरु जो वास्तविक आत्मा नभई पति, पुत्र आदि सम्बन्धले युक्त काल्पनिक जीव हो, त्यसको आनन्द पनि संसारका सबै बाहिरी पदार्थको आनन्दभन्दा बढी हुन्छ भन्ने श्रुति र अनुभव दुबैले सिद्ध गरेको छ। आफ्नी पत्नीलाई उपदेश गर्ने क्रममा पुत्र आदि सम्बन्धले युक्त हुने इच्छा पनि आफ्नै सुख प्राप्तिका उपाय मात्र हुन् भनी याज्ञवल्क्यले मैत्रेयीलाई बुझाउनुभएको छ। पतिकै प्रयोजनका लागि पति प्रिय भएको होइन, आफ्नै लागि नै पति प्रिय लागेको हो अनि पत्नीकै प्रयोजनका लागि पत्नी प्रिय लागेको होइन आफ्नै लागि पत्नी प्रिय लागेको हो— **न वा अरे पत्युः कामाय पतिः प्रियो भवत्यात्मनस्तु कामाय पतिः प्रियो भवति। न वा अरे जायायै कामाय जाया प्रिया भवत्यात्मनस्तु कामाय जाया प्रिया भवति**

(बृहदारण्यकोपनिषद् २।४।५)। यो पति–पत्नी आदिसँगको सम्बन्ध पनि आनन्दमय आत्मासँग सम्बन्ध हुने भएकाले तिनीहरू प्रिय लागेका हुन्। झन् आफ्नो वास्तविक आत्मस्वरूप त अखण्ड आनन्दरूप छ। त्यसको असीम आनन्दको व्याख्या एवं नाप गरेरै साध्य छैन। जीवलाई सबै पदार्थ एवं सम्बन्धीहरूभन्दा बढी आनन्दरूप बुझ्नुले संसारका पदार्थहरूबाट वैराग्य उत्पन्न हुन्छ र त्यो वैराग्य आत्मज्ञानको साधन हुन्छ। यो विचार एवं भावनापूर्वकको वैराग्य हो भने आनन्दस्वरूप आत्माको साक्षात्कार गरिसकेको स्थितिमा भने सम्पूर्ण असत्रूप पदार्थबाट स्वतः नै वैराग्य हुन्छ, यसमा विचारको आवश्यकता पर्दैन। सम्पूर्ण संसारलाई असत्रूप जानी आत्मामा नै रमाइरहने यो ज्ञानपछि हुने वैराग्य नै असली वैराग्य हो। **सर्वरसे त्वयि आत्मनि सति** अर्थात् पूर्ण आनन्दरूप हजुर स्वयं आत्मा भइसकेपछि अरू सम्बन्धबाट किम् अर्थात् के हुन्छ र ? भनी यस श्लोकमा बताइएको वैराग्य आत्मज्ञानपछिको वैराग्य हो।

यस्ता सत् अर्थात् सत्स्वरूप परमात्मालाई नजानीकन संसारको सुख पाउन पति–पत्नी आदि सम्बन्धमा मस्त रहने प्राणीहरूलाई कुनै पनि वस्तुले सुखी बनाउन सक्दैन। संसारलाई बताउन श्लोकमा दुई पद आएका छन्– **स्वनिरस्तभग र स्वविहत**। **स्वनिरस्तभग** शब्दको अर्थ हुन्छ– स्वयं नै साररहित। संसारका पदार्थहरूमा पहिले त निकै सार या आनन्द होला भन्ने लाग्छ, तर जब भोग गर्दै गइन्छ, तब हरेक भोगपिच्छे त्यसको आनन्द निःसार बन्दै जान्छ। यसरी पूरा भोग गरिसक्दा संसारका सम्पूर्ण वस्तुमा आफूले खोजे जस्तो आनन्द नभएको थाहा पाइन्छ। फेरि संसार **विहत** अर्थात् नाशवान् छ। नाशवान् पदार्थहरू जति आनन्ददायक भए पनि तिनले नाश भएको क्षणमा असह्य पीडा उत्पन्न गरिदिन्छन्। यसैले उपनिषद्मा नाशवान् पदार्थहरूसँग गरिएको प्रेम एक दिन दुःखदायी हुने बताइएको छ– **प्रियं रोत्स्यति** (बृहदारण्यकोपनिषद् १।४।८)। यस्ता नाशवान् पदार्थमा जति प्रेम गर्‍यो, त्यसको नाशपछि त्यति पीडा हुन्छ। त्यसैले संसारको पदार्थले कसैलाई पनि सुखी बनाउन सक्दैन।

यस श्लोकलाई श्रीकृष्णलीलाका रूपमा अर्थ गर्दा भने यहाँ व्रजवासी भक्तहरूको भावलाई बताइएको छ। **सर्वरसे** अर्थात् सबै रसस्वरूप परम आनन्दमय परमात्मा **आत्मनि** अर्थात् परम प्रिय भइसकेपछि व्रजवासीहरूलाई घरव्यवहार अनि आफन्त आदिले पनि सुखी गराउन सक्दैनन्। **त्वयि सति किम्** ? अर्थात् परमप्रिय हजुर श्रीकृष्ण नै साथमा भएपछि ती व्रजवासीहरूलाई अरू साधनहरूको के आवश्यकता ? आफन्त, पुत्र, शरीर, पत्नी, धन, घर, जग्गा–जमिन र राम्रा रथ आदि सबै वस्तुहरूबाट भन्दा श्रीकृष्णबाट नै परमानन्द आउने भएकाले व्रजवासीहरू ती सबैमा भन्दा श्रीकृष्णमा नै प्रेम गर्दथे। उसो भए उनीहरू तिनै पदार्थको भोग गरी किन बसिरहेका थिए त ? भन्ने शङ्का हुँदा सनातन गोस्वामी लेख्नुहुन्छ– **एतेषां आत्मार्थमनुपयोगः कृष्णार्थमेव** इति अर्थात् गोपगोपिनीहरू सारा पदार्थहरूको उपभोग आफ्ना लागि होइन, श्रीकृष्णकै लागि भनेर गर्दथे। तिनीहरूले मोही पारी नौनी बनाएर लुकाउने काम नगरेको भए श्रीकृष्णले घरभित्र पसी चोरी गरेको लीला कसरी बन्न सक्थ्यो र ? गोपिनीहरूका बालबच्चा नभएका भए भगवान्ले गोपबालकहरूसँग लीला गर्न कसरी सम्भव हुन्थ्यो ? त्यसै गरी तिनीहरूले गाई नपालेको भए भगवान्ले वनमा गाई चराउन जाने कार्य कसरी हुनसक्थ्यो ?

त्यसैले व्रजवासीहरूका गाई पाल्ने, नौनी बनाउने आदि सबै व्यवहारहरू केवल श्रीकृष्णकै लागि थिए। एकान्तवासी मुनि झैँ यिनीहरूले सबै वस्तुलाई त्यागिदिएका भए श्रीकृष्णको मधुरलीला सम्भव हुँदैनथ्यो। त्यसैले गोपिनीका सारा व्यवहार श्रीकृष्णका लागि थिए, अरु गोपिनीहरूले आफ्नो शरीरलाई पनि श्रीकृष्णकै भनेर संरक्षण गर्ने बताइएको छ। **निजाङ्गमपि यः गोप्यो ममेति समुपासते** अर्थात् गोपिनीहरूले आफ्ना अङ्गहरूलाई पनि मेरो भनेर नै स्याहार गर्दछन्। ब्रह्माजीले पनि व्रजवासीहरूका शरीर, सन्तति, प्राण, अन्तःकरण आदि सबै श्रीकृष्णकै लागि समर्पित छन्— **आत्मजतनयप्राणाशयास्त्वत्कृते** (भागवत १०।१४।३५) भन्नुभएको छ। यस्ता सत्स्वरूप परमात्मालाई **अजानतां** नजान्नेहरूका लागि संसारमा कहीँ पनि सुख प्राप्त हुन सक्दैन। तिनीहरू सुखप्राप्ति हुने आशामा अनेक व्यवहार आदि त गर्छन्, तर आनन्दरूप हजुरलाई छाडेकाले कहिल्यै पनि ती अज्ञानीहरूले पूर्ण सुख पाउन सक्दैनन्। संसारका पदार्थ नाशवान् एवं रसविहीन छन्। **त्वद्भजनमन्तरा न किमपि सुखम्** अर्थात् यो संसारमा परमात्माको भजन गर्नुबाहेक कुनै अर्को सुख छैन।

यस श्लोकको भावलाई सङ्क्षेपीकृत गर्दै श्रीधर स्वामी लेख्नुहुन्छ—

**भजतो हि भवान् साक्षात् परमानन्दचिद्घनः।**
**आत्मैव किमतः कृत्यं तुच्छदारसुतादिभिः।।**

अर्थात् हजुरलाई सेवा गर्नेहरूका लागि हजुर स्वयं नै परम आनन्द र चैतन्यरूपले साक्षात् प्रकाशित हुने आत्मा हुनुहुन्छ भने अब तुच्छ पति-पत्नी सन्तति आदिको के प्रयोजन ?

यसप्रकार यहाँ परमात्मा नै परम आनन्दरूप आत्मा भएकाले संसारमा सुखका साधन भनिएका आफन्त, पतिपत्नी, सन्तति आदि सबै व्यर्थ भएको जनाइएको छ। वैराग्य ज्ञानको अन्तरङ्ग साधन हो, अनि विषयमा दोषदर्शन नगरी त्यसबाट वैराग्य हुन सम्भव छैन। त्यसैले आनन्दस्वरूप आत्माको अघि संसारका तुच्छ पदार्थहरूको केही प्रयोजन छैन भन्ने बताई विषयमा दोषदर्शन गराएर यहाँ वैराग्यकै उपदेश गरिएको छ।

**भुवि पुरुपुण्यतीर्थसदनान्यृषयो विमदा-**
**स्त उत भवत्पदाम्बुजहृदोऽघभिदङ्घ्रिजलाः।**
**दधति सकृन्मनस्त्वयि य आत्मनि नित्यसुखे**
**न पुनरुपासते पुरुषसारहरावसथान्॥ ३५॥**

**पदार्थ—**
**भवत्पदाम्बुजहृदः** = हृदयमा हजुरको चरणकमल धारण गर्ने
**अघभिदङ्घ्रिजलाः** = आफ्नै चरणजलबाट नै संसारको ताप नष्ट गर्न समर्थ भएका
**ते** = ती
**विमदाः** = अहङ्कारशून्य
**ऋषयः** = ऋषिहरू समेत
**भुवि** = पृथिवीमा
**पुरुपुण्यतीर्थसदनानि** = अनेकौँ पुण्यतीर्थ क्षेत्रहरूमा
**उत** = निश्चय नै (रहन्छन्)
**ये** = जो
**नित्यसुखे** = नित्यसुखरूप
**आत्मनि** = आत्मस्वरूप
**त्वयि** = हजुरमा
**सकृत्** = एकपटक मात्र

**मनः** = मन
**दधति** = लगाउँछन्, तिनीहरू
**पुरुषसारहरावसथान्** = मानिसहरूको विवेक आदिलाई हरण गर्ने व्यवहारको झन्झटलाई
**पुनः** = फेरि
**न उपासते** = ग्रहण गर्दैनन्

**वाक्यार्थ–** अहङ्कारले रहित भएका भगवान्को चरणकमललाई आफ्नो हृदयमा धारण गरेका हुनाले आफ्ना चरणकमलका जलले अरूको पापलाई नष्ट गर्ने ऋषिहरू समेत (आफूले प्राप्त गरेको ज्ञानलाई दृढ गराउनका लागि) पृथिवीका पुण्य तीर्थहरूको भ्रमण गर्दछन्। (यस्ता मननशील ऋषिहरू फेरि विवेक र धैर्य आदि गुणहरूलाई नष्ट गर्ने घरव्यवहारमा रमाउँदैनन्।) यदि कुनै व्यक्तिले एकपटक आफ्नो मनद्वारा भगवान्को चरणकमलको आस्वादन गरेको छ भने उसले त फेरि विवेक आदि गुणहरूलाई नष्ट गर्ने गृहस्थाश्रमको सुखलाई रुचाउँदैन भने ऋषिहरूको त कुरा ?

**विवरण–** यस श्लोकमा भगवान्को नित्य सुखस्वरूपको अनुभवमा रमाउने ज्ञानीहरू संसारका झन्झटिला व्यवहारहरूलाई त्यागी उन्मुक्त भावले विचरण गर्दछन् भनी बताइएको छ। मदरहित भएका ऋषिहरू **भवत्पदाम्बुजहृदः** अर्थात् हजुर (भगवान्)को चरणकमललाई नै हृदयमा स्थापित गर्दछन्। परमात्माको चरण पापनाशक भएकाले जसको हृदयमा परमात्माको चरण रहेको छ, त्यस्ता महापुरुषको चरणजल पनि स्वयं तीर्थसमानको हुन्छ। भक्तहरू आफ्नो अन्तर्हृदयमा हुनुभएका भगवान्को कारणले तीर्थको मललाई पनि नष्ट गर्दै तीर्थलाई पनि तीर्थ बनाउँछन् भनिन्छ– **तीर्थीकुर्वन्ति तीर्थानि स्वान्तःस्थेन गदाभृता**। यस्ता भक्तहरूलाई तीर्थयात्रा आदिको केही प्रयोजन छैन, तर पनि उनीहरू महापुरुषहरूको सान्निध्य प्राप्त गर्न अनेक पवित्र तीर्थहरूको यात्रा गरिरहन्छन्। उनीहरूलाई व्यवहारको झन्झटिलो बन्धनले बाँध्न सक्दैन । घरपरिवारको बन्धन त प्राणीहरूको सार अर्थात् भित्री क्षमतालाई हरण गर्ने ठाउँ हो। यहाँ **आवसथ** भनेर घरलाई लिइएको छ। घरगृहस्थीको भोग गरेर आजित भइसकेका व्यक्तिहरू फेरि यही बन्धनमा बस्दैनन्। शास्त्रमा वनमा बस्नुलाई सात्त्विक वास अनि घर-गाउँमा बस्नुलाई राजस वास भनिएको छ– **वने तु सात्त्विको वासो ग्रामो राजस उच्यते** (भागवत ११।२५।२५)। रजोगुणको काम राग-द्वेष आदि हुन्। सत्सङ्ग गर्नुभन्दा अघि जमेर संसारव्यवहार गरेको अवस्थामा मानिसले त्यहाँ बसी अनेक नचाहिँदा कर्महरू अनि व्यर्थका राग-द्वेष आदि गरेको हुन्छ। त्यसको सम्झनाले पनि उसलाई पीडित गर्दछ। त्यसैले भगवान्का भक्त एवं सत्सङ्ग रुचाउने मान्छेहरू यो घरपरिवारको बन्धनलाई छाडेर तीर्थक्षेत्रमा गई बस्छन् र महापुरुषहरूको सङ्गतमा रमाउँछन्। यिनीहरू फेरि घरव्यवहारमा फर्किंदैनन्, किनभने यी व्यवहारहरूले मानिसका महत्त्वपूर्ण क्षमा, दया, शान्ति आदि गुणहरूलाई खाइदिन्छन्। प्रह्लादले पनि घर राग-द्वेष, शोक, भय आदि अनेक अनर्थहरूले भरिएको हुने हुँदा त्यसलाई छाडी भगवान्को चरणको शरणमा जानुपर्दछ भनी बताउनुभएको छ– **हित्वा गृहं संसृतिचक्रवालं नृसिंहपादं भजता कुतोभयम्** (भागवत ५।१८।१४)। यसरी **सकृत्** अर्थात् केवल एकचोटि परमत्मामा मन लगाउने भक्तहरू त व्यवहारमा फस्दैनन् भने **नित्यसुखे आत्मनि** अर्थात् नित्यसुखरूप आत्मामा रमाउने ज्ञानीहरू त झन् किन यसमा रमाउँथे ? भनिएको छ।

यस श्लोकलाई कृष्णलीलाको तात्पर्यमा अर्थ्याउँदा भने यहाँ भगवान्‌को धाममा नै आश्रित रहने भक्तहरूको प्रशंसा गरिएको छ। **ऋषयः** अर्थात् देवर्षि नारद आदि **भवत्पदाम्बुजहृदः** अर्थात् हृदयमा भगवान्‌को चरणकमलले युक्त भएका भए पनि भगवान्‌को धाम नजिक बसिरहन्छन्। भगवान्‌को धाम व्रजमण्डलको यस्तो महत्त्व छ कि यो प्रेमभावको प्रकाशक हो। त्यसैले भक्तहरू आफ्नो भावलाई अझ बढाउन यसको वरिपरि बस्दछन्। **पुरुपुण्यानि तीर्थानि सदनानि च यस्मिन्** अर्थात् जुन व्रजमण्डलमा अनन्तपुण्ययुक्त तीर्थहरू एवं सदन अर्थात् भगवान्‌को निवासस्थानहरू पनि छन्, त्यही व्रजमण्डलमा भक्तहरू आश्रित रहन्छन्। अथवा यहाँ **पुरुपुण्य** भन्ने शब्दले गोपबालकहरूलाई पनि लिन सकिन्छ। भगवान्‌सँग खेल्ने तिनीहरूको प्रशंसा गर्दा तिनलाई **कृतपुण्यपुञ्जाः** (भागवत १०।१२।१२) अर्थात् अनेक पुण्यका थुप्रो आर्जन गरिसकेका भनिएको छ। तिनीहरू **तीर्थ** अर्थात् यमुना अनि **सदन** अर्थात् व्रजराज नन्दको घर आदि सबैले युक्त भएको वृन्दावनमा बस्दछन्। यी सबै भगवान्‌लाई आफ्नो साथी मान्दछन्, उपास्य होइन। त्यसैले **यहाँ भवत्पदाम्बुजहृदः**को अर्थ **भवतः पदं स्थानं माथुराख्यम् तत् एव अम्बुजं कमलतुल्यं तत् हृत् भावः निवासः येषां** भन्ने हुन्छ। **भवत्पद**को अर्थ हुन्छ, भगवान्‌को निवासस्थान। त्यो मण्डलाकार भएकाले अनि तापहारक पनि भएकाले कमलतुल्य छ। त्यसमा नै गोपहरूको **हृत्** अर्थात् भाव या आदरबुद्धि छ र उनीहरू त्यहीँ निवास गर्दछन्। यस्ता भक्तहरू तीर्थक्षेत्रमा निवास गरी घरगृहस्थीको झन्झटिलो व्यवहारमा फस्दैनन्। विशेष भक्तहरू व्यवहारको झन्झटमा नफस्नु केही नौलो भएन। जसले नित्यसुखरूप श्रीकृष्णमा **सकृत्** अर्थात् एकपटक पनि मन लगाउँछन् भने उनीहरू समेत यो झमेलामा पर्दैनन्। यसप्रकार यहाँ भगवान्‌का विशेष भक्तहरूको प्रशंसा गरिएको छ।

यस श्लोकको भावलाई अन्य रूपमा प्रस्तुत गर्दै श्रीधर स्वामी लेख्नुहुन्छ—

**मुञ्चन्नङ्गतदङ्गसङ्गमनिशं त्वामेव सञ्चिन्तयन्**
**सन्तः सन्ति यतो यतो गतमदास्तानाश्रमानावसन्।**
**नित्यं तन्मुखपङ्कजाद् विगलितस्त्वत्पुण्यगाथामृत-**
**श्रोतःसंप्लवसंप्लुतो नरहरे न स्यामहं देहभृत्।।**

अर्थात् हे नृसिंह भगवान्! शरीर र त्यससम्बन्धी स्त्री, पुत्र आदिमा आसक्तिलाई छाडी हजुरकै चिन्तन गर्दै अनि हजुरका अभिमानरहित भक्तहरू जुन पुण्यक्षेत्रमा बस्छन्, त्यहीँ बसेर उनीहरूको मुखकमलबाट निस्किएको हजुरको पवित्र कथाको अमृतरूपी महासागरमा डुबुल्की मार्दै म मुक्त बन्न सकूँ, फेरि शरीरधारी नबनूँ।

यसप्रकार यस श्लोकमा भगवान्‌का चरणचिन्तन गर्ने भक्तहरू घर व्यवहारको बन्धनलाई छाडी तीर्थक्षेत्रमा महापुरुषहरूको सङ्गत र कथाश्रवण आदि गर्दै त्यहीँ आनन्दमा रमाउँछन् र फेरि तुच्छ व्यवहारमा फर्किंदैनन् भनी बताइएको छ।

**सत इदमुत्थितं सदिति चेन्ननु तर्कहतं**
**व्यभिचरति क्व च क्व च मृषा न तथोभययुक्।**

**व्यवहृतये विकल्प इषितोऽन्धपरम्परया**
**भ्रमयति भारती त उरुवृत्तिभिरुक्थजडान्॥ ३६॥**

**पदार्थ–**
**ननु** = निश्चय नै
**सतः** = सत् ब्रह्मबाट
**उत्थितं** = उत्पन्न भएकाले
**इदं** = यो जगत्
**सत् इति चेत्** = सत् हो भन्ने हो भन्ने
**तर्कहतं** = यो तर्क सिद्ध छैन
**क्व च** = कहीँ–कहीँ
**व्यभिचरति** = व्यभिचरित हुन्छ
**क्व च** = कहीँ–कहीँ
**मृषा** = मिथ्या वस्तुमा (पनि कार्यकारणभाव देखिन्छ)
**उभययुक्** = सत्य र मिथ्या दुबै मिलेर बनेको मान्दा पनि
**तथा** = जगत्लाई सत्य भन्न
**न** = सकिँदैन
**अन्धपरम्परया** = अन्धपरम्परा-द्वारा
**व्यवहृतये** = व्यवहार चलाउनका लागि
**विकल्पः** = जगद्भ्रम
**इषितः** = मानिएको हो
**ते** = हजुरको
**भारती** = वेदरूप वाणीले
**उरुवृत्तिभिः** = कर्म, त्यसको फल आदि संसारको विषयमा बताउने मन्त्रहरूद्वारा
**उक्थजडान्** = कर्ममा आसक्तहरूलाई
**भ्रमयति** = भ्रमित बनाउँछ

**वाक्यार्थ–** सत् ब्रह्मबाट उत्पन्न भएको हुनाले यो संसार पनि सत् हुन्छ भन्ने कुरा तर्कसिद्ध छैन किनभने यसमा कतै व्यभिचार देखिन्छ। कहीँ सत्य वस्तुबाट मिथ्या वस्तु उत्पन्न भएको देखिन्छ। सत्य र मिथ्या दुबै मिलेर बनेको मान्दा पनि जगत्लाई सत्य भन्न सकिँदैन। यो जगत् मिथ्या भए पनि व्यवहारका लागि अन्धपरम्पराद्वारा भ्रमलाई स्वीकार गरिएको हुनाले ज्ञान हुनुभन्दा पहिले व्यवहार यथावत् चलिरहन्छ। जसले यो वस्तुस्थितिलाई नबुझेर संसारलाई सत्य मानेका छन्, ती कर्मश्रद्धाको भारले आक्रान्त मन्दमतिहरूलाई हजुरको कर्म, त्यसको फल आदि संसारको विषयमा बताउने वेदरूप वाणीले भ्रमित बनाएको छ।

**विवरण–** यस श्लोकमा संसारको मिथ्यात्व बताइएको छ। यहाँ पूर्वपक्ष र सिद्धान्त पक्षबिचको शङ्का एवं समाधानको शैलीमा वेदहरूले आफ्नो तात्पर्य व्यक्त गरेका छन्। विभिन्न दर्शनहरूमा संसारलाई कस्तो मान्ने भन्ने विषयमा लामो चर्चा–परिचर्चा भएको छ। केही दार्शनिकहरू जगत्लाई जस्ताको त्यस्तै सत्य मान्दछन् भने कोही यसलाई केवल भ्रमवश देखिएको भनी बताउँछन्। यीमध्ये जगत्लाई सत्य मान्नेहरूले प्रत्यक्षप्रमाण र संसार अनुभव गरिएको अनुभव प्रमाणको बलद्वारा शास्त्रका वचनहरूलाई त्यही अनुकूल अर्थ लगाउँदै संसारलाई सत्य सिद्ध गर्न प्रयास गरेका छन्। वेदान्तबाहेक सबैजसो आस्तिक दर्शनहरू जगत्लाई सत्य नै मान्दछन्। अझ मीमांसकहरू त जगत्को उत्पत्ति एवं प्रलय पनि नहुने र यो सामान्य हेरफेर भए पनि यस्तै रूपमा रहिरहन्छ भनी बताउँछन्। **न कदापि अनीदृशं जगत्** अर्थात् यो जगत् कहिल्यै पनि योभन्दा अर्को खालको थिएन भनिन्छ। यी सबै दार्शनिकहरूले बताएको संसारको सत्यतालाई यहाँ वेदहरू खण्डन गर्दै छन्।

पूर्वपक्षी शङ्का गर्दछन्, **सतः उत्थितं सत्** अर्थात् यो जगत् सत् ब्रह्मबाट उत्पन्न भएकाले

सत् नै हो। यहाँ श्रीधर स्वामीले उनीहरूले गरेको अनुमानलाई नै देखाइदिनुभएको छ— **इदं विश्वं सत्, सतः उत्पन्नत्वात्, यथा कनकादुत्पन्नं कुण्डलादि** अर्थात् यो जगत् सत्य छ, सत् परमात्माबाट उत्पन्न भएकाले, जसरी सुनबाट बनेको गहना सुन नै हुन्छ। यसप्रकार परमात्माबाट उत्पन्न भएकाले जगत् पनि परमात्मा जस्तै सत्य नै छ भन्ने उनीहरूको भनाइ हो। तर यो कुरा तर्कहत अर्थात् विचारपूर्वक तर्क गर्दा समाप्त हुन्छ। किनभने सत्‌बाट उत्पन्न भएको भन्ने बित्तिकै सत् कारण अनि विश्व कार्य भयो। उपादान कारणको रूपमा सत् परमात्मालाई अनि कार्यको रूपमा जगत्‌लाई लिएपछि यिनीहरूको बिचमा कसरी अभेद हुन सम्भव छ ? यहाँ पूर्वपक्षीले कार्य र कारणलाई एउटै मानी कुरा गरेका छन्, सिद्धान्तीले चाहिँ कार्यभन्दा उपादानकारण भिन्नै हुन्छ भन्ने आशय व्यक्त गरेका छन्। वेदान्त सिद्धान्तमा उपादान कारण नै कार्यको रूपमा प्रकट भएको मानिन्छ, तर कार्यभन्दा कारण अलग हुन्छ भन्ने मानिन्छ। घैंटोमा माटो मात्र छ भन्नु अलग कुरा हो, अनि माटो र घैंटो एउटै हो भन्नु अलग कुरा हो। घैंटोको नामरूप माटोमा कल्पित भएकाले त्यो मिथ्या हो। त्यसै गरी जगत्‌को नामरूप पनि ब्रह्ममा कल्पित भएकाले यो मिथ्या हो। यसलाई उपनिषद्‌मा **वाचारम्भणं विकारो नामधेयं मृत्तिकेत्येव सत्यम्** (छान्दोग्योपनिषद् ६।१।४) अर्थात् घैंटो भनिने विकार केवल वाणीले भनिदिएको मात्र हो, त्यो मिथ्या हो र माटो नै साँचो हो भनी बताइएको छ। यहाँ घैंटोलाई विकाररूप भएकाले मिथ्या अनि माटोलाई चाहिँ सत्य भनिएको छ। जगत्‌को नामरूप कल्पित भएकाले यो मिथ्या हो अनि यसका आधार परमात्मा चाहिँ सत्य हुनुहुन्छ। वेदान्तमा कार्य उपादान कारणदेखि अनन्य हुन्छ भन्नुको तात्पर्य पनि कार्य र कारण अभिन्न हुन् भन्नु होइन। किनभने कल्पित कार्य र सत्य अधिष्ठानको अभेद सम्भव छैन। यसको अर्थ त कार्यरूपमा पनि त्यही कारण तत्त्व मात्र अनुस्यूत छ, त्यसैले त्यो कार्य वास्तविक होइन, किनभने त्यसको आफ्नै छुट्टै सत्ता छैन भन्ने हुन्छ। यसैले जगत्‌लाई सत् ब्रह्म रूप मान्न सकिँदैन।

फेरि पूर्वपक्षी शङ्का गर्दछन्, हामीले अभेद सिद्ध गराउन खोजेका छैनौँ, अपि तु कार्य कारणभन्दा भिन्न छैन भनी भेदनिराकरण मात्र गर्न खोजेको हो, त्यसमा त केही आपत्ति छैन होला ? यसको उत्तरमा उत्तरपक्षी भन्दछन्— कार्य र कारणको भेदलाई हटाउन सकिँदैन, किनभने तिम्रो भनाइ **व्यभिचरति** अर्थात् लोकमा पनि व्यभिचरित हुन्छ। पिताबाट जन्मेको पुत्र के पिताबाट भिन्न हुँदैन र ? त्यसै गरी कुमालेबाट जन्मिएको घैंटो के कुमालेबाट भिन्न हुँदैन र ? यसमा पूर्वपक्षी भन्छन्— हामीले त उपादान कारण अनि कार्यको सम्बन्धमा पो भनेका थियौँ त। कुमाले र घैंटो अनि पिता र पुत्र यी उपादानकारणका नभई निमित्तकारणका दृष्टान्त हुन्। निमित्त कारण र कार्य आपसमा भिन्न नै हुन्छन्। त्यसैले तिम्रो भनाइ ठिक भएन।

यसको उत्तरमा सिद्धान्ती भन्छन्— **क्व च मृषा** अर्थात् भ्रमस्थलहरूमा पनि पूर्वपक्षीको भनाइ बाधित हुन्छ। डोरीमा सर्पको भ्रम हुँदा डोरी उपादान कारण हो, अनि त्यहाँ अध्यस्त सर्प त्यसको कार्य हो। डोरी नभएको भए त्यहाँ सर्प देखिँदैनथ्यो। यसप्रकार भ्रमस्थलमा कल्पित सर्प आफ्नो उपादान कारण डोरीसँग अभिन्न हुन सक्दैन। यदि अध्यस्त वस्तु अधिष्ठानभन्दा अभिन्न हुने हो भने डोरीमा अध्यस्त भएको सर्प आफ्नो अधिष्ठान या उपादानकारण डोरीदेखि अभिन्न

होला अनि कहिल्यै पनि बाधित नहोला। जब वास्तविक रूपमा डोरीको ज्ञान हुन्छ, त्यो वेलामा सर्परूप यत्तिकै हराउँछ। यदि सर्प डोरीभन्दा अभिन्न भएको भए त त्यो पनि डोरी झैँ सत्य हुनुपर्ने। यसैले डोरीमा देखिएको सर्पलाई डोरीरूप होइन, अपि तु मिथ्या मान्नुपर्दछ। यसै गरी जगत् पनि ब्रह्ममा भ्रमवश देखिएकाले यसलाई मिथ्या मान्नुपर्दछ, ब्रह्म झैँ सत्य होइन।

यहाँ पूर्वपक्षी शङ्का गर्दै भन्छन्— डोरी र सर्पको दृष्टान्त ठिक छैन, किनभने डोरीमा सर्प अध्यस्त हुनुको कारण केवल डोरी मात्र होइन, अज्ञान पनि हो। डोरीमा सर्प अध्यस्त हुने भए त सबै डोरीमा सधैँ सर्प देखिनुपर्ने, तर त्यसो हुँदैन। जहाँ डोरीको अज्ञान हुन्छ, त्यहाँ मात्र सर्प देखिन्छ। यसको मतलब अज्ञानले सहित डोरी नै सर्पको कारण हो भन्ने हुन्छ। अज्ञान स्वयं पनि मिथ्या भएकाले त्यसको कार्य सर्प मिथ्या हुन केही आपत्ति छैन। तर सत् ब्रह्मबाट उत्पन्न यो जगत् चाहिँ केवल सत् नै हुनुपर्दछ, मिथ्या होइन।

यसको उत्तरमा सिद्धान्ती भन्दछन्— जसरी सर्प केवल डोरीको मात्र नभई अज्ञानयुक्त डोरीको कार्य भएकाले त्यो मिथ्या हो, त्यसै गरी जगत् पनि केवल ब्रह्मको मात्र कार्य नभई अज्ञानसहित ब्रह्मको कार्य हो। जब व्यक्ति ब्रह्मस्वरूपलाई यथार्थ रूपमा जान्दैन, तब त्यही अज्ञान सहितको ब्रह्मबाट नै जगत्भेद खडा हुन्छ। एउटै आत्मा अज्ञानको कारणले नै अनेक भेदमा कल्पित भएको हो भनी माण्डूक्यकारिका (२।१७)मा यही कुरालाई दृष्टान्तपूर्वक बताइएको छ— **अनिश्चिता यथा रज्जुरन्धकारे विकल्पिता, सर्पधारादिभिर्भावैस्तद्वदात्मा विकल्पितः** अर्थात् अनिश्चित या अज्ञात डोरी नै अन्धकारमा जसरी सर्प, दण्ड, जलधारा आदि अनेक भेदमा देखिन्छ, त्यसै गरी अज्ञात आत्मा नै जीव, जगत् आदिको रूपमा कल्पित हुन्छ। जगत् केवल ब्रह्मको मात्र कार्य भएको भए त मुक्त अवस्थामा पनि ब्रह्मबाट जगत् उत्पन्न हुनुपर्ने अनि संसार कहिल्यै नहट्नाले मोक्ष नै असिद्ध हुनुपर्ने। त्यसैले जगत् केवल ब्रह्मको नभई अविद्यायुक्त ब्रह्मको कार्य भएकाले यो मिथ्या नै हो। यही कुरा बुझाउन श्लोकमा **न तथोभययुक्** भन्ने पदावली आएको छ। प्रपञ्च पनि उभयभुक् अर्थात् ब्रह्म र अज्ञान दुबैको कार्य हो, केवल ब्रह्मको मात्र होइन, त्यसैले यो **न तथा** अर्थात् पूर्वपक्षीले बताए झैँ सत्स्वरूप होइन।

पूर्वपक्षीहरूले आफ्नो पहिलो अनुमानले प्रपञ्चलाई सत् स्वरूप सिद्ध गराउन असमर्थ भएपछि फेरि अर्को अनुमान गरेका छन्— **इदं विश्वं सत् अर्थक्रियाकारित्वात्** अर्थात् यो विश्व सत् स्वरूप छ, किनभने अर्थक्रियाकारित्व भएको हुनाले। अर्थक्रियाकारित्वको अर्थ व्यवहारयोग्यत्व भन्ने हो। तिर्खा लाग्दा पानी पिउनुपर्ने, भोक लाग्दा भोजन गर्नुपर्ने, अनि रोग लाग्दा औषधी खानुपर्ने देखिन्छ। संसारका यी सारा पदार्थहरू सत्य नहुने भए यिनीहरूबाट व्यवहार कसरी चल्थ्यो ? यदि असत् वस्तुबाट पनि व्यवहार चल्दछ भने त सपनाको एवं कल्पनाको पदार्थले पनि जगत्मा काम गर्नुपर्ने। तर जगत्मा त भोक लागेको वेलामा पेट भर्न बाहिरी भोजनकै आवश्यकता पर्दछ, काल्पनिक भोजनले काम चल्दैन। त्यसकारण यो सारा खानु, लाउनु आदि व्यवहारको विषय भइरहेको संसार असत् हुन सक्दैन, सत् नै हुन्छ भन्नुपर्दछ भन्ने पूर्वपक्षीहरूको आशय हो। यसको उत्तरमा सिद्धान्ती भन्छन्— **व्यवहृतये** अर्थात् पदार्थ व्यवहारयोग्य हुन या क्रियाकारी हुन **विकल्पः** अर्थात् भ्रम, **इषितः** अर्थात् इष्ट छ। यसको तात्पर्य

भ्रमवश कल्पित भएका पदार्थहरूद्वारा नै व्यवहार सिद्ध हुन्छ भन्नु वेदान्तमतमा दोष नभई इष्ट नै हुन्छ भन्नु हो। कल्पित वस्तुद्वारा पनि व्यवहार हुन्छ भन्ने कुरा सर्पले नटोके तापनि सर्पले टोकेको भ्रममा अनेक मान्छेहरू आत्तिई बिरामी भएकोबाट स्पष्ट हुन्छ। वेदान्तमा जगत्का पदार्थहरू व्यवहारयोग्य या अर्थक्रियाकारी छन् भन्ने कुरालाई खण्डन गर्दै भनिएको छ— **सप्रयोजनता तेषां स्वप्ने विप्रतिपद्यते** (माण्डूक्यकारिका २।७) अर्थात् जगत्का बाह्य पदार्थहरू व्यवहाररूप प्रयोजनलाई सिद्ध गर्ने हुनाले तिनीहरू सत्य हुन् भन्ने कुरा ठिक होइन, किनभने ती पदार्थहरूको प्रयोजनवत्ता स्वप्नमा हराउँछ। स्वप्नका पदार्थले जाग्रत्मा काम नगरे जैँ जाग्रत्का पदार्थहरूले पनि स्वप्न अवस्थाको व्यवहार चलाउन सक्दैनन्। भर्खर भोजन गरेर सुत्दा कसैले सपनामा आफूलाई भोकाएको देख्यो भने त्यसको पेटभित्र रहेको भोजनले त्यस भोकलाई नष्ट गर्न सक्दैन, त्यहाँ त सपनाकै भोजन चाहिन्छ। त्यसैले जाग्रत्का पदार्थलाई अर्थक्रियाकारी भएको भनी सत्य मान्न सकिँदैन।

फेरि पूर्वपक्षी सोध्छन्— एक ठाउँमा प्रसिद्ध वस्तु अन्यत्र आरोपित हुनुलाई भ्रम भनिन्छ, प्रपञ्चलाई पूरै असत् मान्दा यसको भ्रम पनि कसरी सिद्ध हुन्छ र ? किनभने जगत्मा कसैमा पनि अप्रसिद्ध एवं असत् वस्तुहरू, जस्तै वन्ध्यापुत्र, खरायोको सिङ् आदिको भ्रम भएको छैन।

यसको उत्तरमा भनिन्छ— **अन्धपरम्परया** अर्थात् यो भ्रम अनादि अज्ञानको परम्पराले नै चल्दै आएको छ। वेदान्ती भन्छन्— कुनै पनि वस्तुको कहीँ आरोप हुन त्यो वस्तु पहिले सत् रूपमा नै हुनुपर्दछ भन्ने छैन, भ्रमका लागि आरोपित वस्तुको सत्ताको अपेक्षा हुँदैन। अपि तु त्यसको प्रतीति मात्र भए पुग्दछ। अनादि अज्ञानको कारणले प्रतीत हुँदै आइरहेकाले त्यसकै आधारमा संसारमा उत्तर-उत्तर भ्रमहरू सिद्ध हुन्छन्। अज्ञानीहरूले गर्ने हचुवाको व्यवहारलाई अन्धपरम्परा भनिन्छ। कुनै एउटा अन्धोले अर्को अन्धोलाई बतायो कि मैले आज त्यो वरको फेदमा भूत देखेँ। त्यसलाई सत्य मानी त्यसले अरूलाई अनि अरूले अरू-अरूलाई गरी सबैतिर यो कुरा फैलियो। अन्धोको जमातमा कोही त्यस्तो व्यक्ति पनि त थिएन, जसले त्यहाँ गई परीक्षापूर्वक भूत भएको थाहा पाउन सकोस्। यसरी एउटा अन्धोले बताएकोमा सबै अन्धा पछि लागे जैँ एउटा अज्ञानीले संसारको सत्ता बताएकोमा सबै अज्ञानीले विनाविचार त्यसलाई पूर्णतः प्रामाणिक रूपमा स्वीकार गर्दै आउनु अन्धपरम्परा हो। यसरी संसार अनादि अज्ञानकै कारणले सिद्ध भएको हो भन्ने बुझिन्छ।

संसारलाई भ्रमरूप भनी बताउँदा पूर्वपक्षीहरूले फेरि के शङ्का गर्छन् भने यसलाई कसरी भ्रमरूप मान्न सकिन्छ ? वेदको कर्मकाण्ड भागमा त संसारलाई सत्य बताइएको छ। **अक्षय्यं ह वै चातुर्मास्ययाजिनां सुकृतं भवति** अर्थात् चातुर्मास्य याग गर्नेहरूलाई अक्षय्य पुण्य प्राप्त हुन्छ, **अपाम सोमममृता अभूम** अर्थात् हामी सोमरसको पान गरी अमर होऔँ आदि वाक्यहरूले त प्राणी, लोक-लोकान्तर, पुण्य-पाप आदि सबैलाई सत्यरूपमा बताएका छन्।

यसको उत्तरमा सिद्धान्ती भन्छन्— भारती अर्थात् वेदवाणीले **उक्थजडान्** अर्थात् कर्ममा श्रद्धा भएका जडबुद्धिहरूलाई **उरुवृत्तिभिः** अर्थात् अनेक प्रकारका वाक्यहरूद्वारा घुमाइदिन्छन्। वेदको तात्पर्य कर्मफलहरूको नित्यता बताउनुमा छैन। प्राणीहरू सत्कर्ममा प्रवृत्त होऊन् र

निष्काम भावले कर्महरू गर्दै चित्तशुद्धिद्वारा उनीहरूले ज्ञान प्राप्त गरून् भन्ने नै वेदको तात्पर्य हो। कर्मकाण्ड भागले कर्मफललाई नित्य भनी बताउनु कर्मको प्रशंसा मात्र हो, जसद्वारा प्राणीहरू असत्कर्म छाडी शास्त्रीय कर्मफलतर्फ लागून्। यसरी अन्तमा ज्ञानमा लैजाने उद्देश्यले नै कर्मको प्रतिपादन भएको हो। कर्मफल अनित्य हुन्छ भन्ने कुरा त उपनिषद्मा स्पष्टतः बताइएको छ— **पुण्यजितो लोकः क्षीयते** (छान्दोग्योपनिषद् ८।१।६) अर्थात् पुण्यबाट प्राप्त लोक पनि क्षीण हुन्छ। यसरी कर्ममा आसक्त भएकाहरूले मात्र वेदको तात्पर्य थाहा नपाई यसको अर्थलाई बङ्ग्याएको कुरा यहाँ सूचित गरिएको छ।

यस श्लोकलाई श्रीकृष्णलीलापरक दृष्टिले अर्थ्याउँदा यहाँ मथुरावासी याज्ञिक ब्राह्मणहरूकै निन्दा गरिएको बुझिन्छ। मथुरावासी मेरा भक्त भएकाले यी पनि भक्त नै हुन् भन्ने शङ्कामा वेदहरू सत् वंशमा उत्पन्न भएको व्यक्ति सत् नै हुन्छ भनेर प्रतिपादन गर्दछन्। **सतः** अर्थात् मेरा भक्त मथुरावासीको कुलबाट **उत्थितं** अर्थात् उत्पन्न यी ब्राह्मणहरू **सत्** अर्थात् मेरा भक्त नै हुन् भन्ने कुरा **तर्कहतम्** अर्थात् तर्कसिद्ध छैन। मेरा भक्तबाट उत्पन्न व्यक्ति भक्त नै हुन्छन् भन्ने कुरा कहीँ **व्यभिचरति** अर्थात् व्यभिचरित हुन्छ भने कहीँ यो **मृषा** अर्थात् देखावटी भक्ति बन्दछ। कर्ण सूर्यका पुत्र भए पनि सत्रूप भएनन्, उनमा असत्पक्षलाई साथ दिने बुद्धि आयो। त्यसैले भक्तका पुत्र भक्त हुन्छन् भन्नेमा यहीँ व्यभिचार भयो। **क्व च मृषा** अर्थात् कहीँ चाहिँ भक्तबाट उत्पन्न व्यक्तिहरू पनि देखाओटीरूपमा मात्र भक्त हुन्छन्। व्यासबाट उत्पन्न भएका धृतराष्ट्र **न तथा** अर्थात् विदुरजस्ता थिएनन्। यहाँ शङ्का के भयो भने कर्ण त सूर्यपूत्र भए तापनि पूर्वकल्पमा सहस्रकवच नाम गरेको दुष्ट थियो, त्यसैले तिनमा भक्ति थिएन, याज्ञिकहरू त सदाचारी ब्राह्मण भएकाले यिनीहरूको तुलना तिनीहरूसँग हुनै सक्दैन। यसको उत्तरमा भनिन्छ— **उभययुक्** अर्थात् ती याज्ञिकहरूमा ब्राह्मणत्व र खलत्व दुबै थियो। कंसको वृत्ति खाएर बाँचेका हुनाले तिनीहरूमा पनि दुष्टताको अंश आएको थियो। ती दुष्ट थिए भने गोपबालकहरूलाई श्रीकृष्णले किन तिनीहरूलाई प्रणाम गर्न भने अनि किन गोपबालकहरूले प्रणाम गरे त ? यो शङ्काको उत्तरमा भनिन्छ— **व्यवहृतये** अर्थात् बाहिरी व्यवहार चलाउनका लागि **अन्धपरम्परया** अर्थात् ब्राह्मणहरू सबै नै पूज्य हुन्छन् भन्ने अन्धपरम्पराद्वारा तिनीहरूलाई प्रणाम गरिएको थियो। वस्तुतः ती जड कर्ममा श्रद्धा भएकाहरूलाई वेदवचनहरूले अनेक रूपले घुमाइदिन्छन्।

यस श्लोकको भावमा आधारित भएर श्रीधर स्वामी लेख्नुहुन्छ—

**उद्भूतं भवतः सतोऽपि भुवनं सन्नेव सर्पः स्रजः**
**कुर्वत् कार्यमपीह कूटकनकं वेदोऽपि नैवं परः।**
**अद्वैतं तव सत्परं तु परमानन्दं पदं तन्मुदा**
**वन्दे सुन्दरमिन्दिरानुत हरे मा मुञ्च मामानतम्।।**

अर्थात् सत् परमात्माबाट उत्पन्न भए तापनि यो संसार सत्य नभई मिथ्या नै हो, जसरी सत्य मालामा कल्पित भएको सर्प सत्य नभई मिथ्या नै हुन्छ। जसरी कहिलेकाहीँ नक्कली सुन आदिले पनि व्यवहार हुन्छ, त्यसै गरी मिथ्या संसारद्वारा नै व्यवहार चल्दछ। जगत्लाई सत्य रूपमा बताउनु वेदको पनि तात्पर्य होइन। हे इन्दिराद्वारा सेवित परमात्मा ! हजुरको परमानन्द

सद्रूप अद्वितीय पद (चरण)को म आनन्दपूर्वक वन्दना गर्दछु, हजुरको शरणमा आएको मलाई हजुरले नछाड्नुहोस्।

यसप्रकार यस श्लोकमा प्रपञ्च सत्य नभई मिथ्या भएको अनि कर्मश्रद्धा भएका मन्दबुद्धिहरूका लागि नै वेदले कर्मफललाई नित्य भनी केवल बताइदिएको मात्र हो भन्ने कुरा प्रतिपादन गरिएको छ।

**न यदिदमग्र आस न भविष्यदतो निधनाद्**
**अनु मितमन्तरा त्वयि विभाति मृषैकरसे।**
**अत उपमीयते द्रविणजातिविकल्पपथै-**
**र्वितथमनोविलासमृतमित्यवयन्त्यबुधाः ॥ ३७ ॥**

**पदार्थ–**
**यत्** = किनभने
**इदं** = यो जगत्
**अग्रे** = उत्पत्तिभन्दा पहिले
**न आस** = थिएन
**निधनात् अनु** = प्रलयपछि
**न भविष्यत्** = रहनेछैन
**अतः** = त्यसैले
**अन्तरा** = कारणविना नै
**एकरसे** = एकरस
**त्वयि** = हजुरमा
**मृषा** = मिथ्यारूपले नै
**विभाति** = देखिएको छ भन्ने
**मितं** = निश्चित हुन्छ
**अतः** = त्यसैले
**द्रविणजातिविकल्पपथैः** = माटो, फलाम आदि द्रव्य मात्रका विकार भएका घैंटो, हतियार आदिद्वारा
**उपमीयते** = उपमान गरिन्छ
**अबुधाः** = अज्ञानीहरू
**वितथमनोविलासं** = मनको कल्पना भएको मिथ्या संसारलाई
**ऋतम् इति** = सत्य भनी
**अवयन्ति** = जान्दछन्

**वाक्यार्थ–** यो संसार सृष्टि हुनुभन्दा पहिले पनि थिएन र प्रलयपछि पनि रहनेवाला छैन। बिचमा केही समयका लागि मिथ्या भएर पनि हजुरको सत्तालाई प्राप्त गरेर हजुरमा यो संसार सत्य झैं प्रतीत भइरहेको छ। जसरी घैंटो, हतियार आदि अनेक कार्यहरू माटो, फलाम आदि कारणद्रव्यबाट नै बन्दछन् र त्यहीं प्रतीत हुन्छन्, त्यसै गरी यो संसार पनि हजुरमा प्रतीत हुन्छ। अतः मनको विलास मात्र हुनाले मिथ्या भएको यस संसारलाई अज्ञानी व्यक्तिहरू मात्र सत्य हो भनी ठान्दछन्।

**विवरण–** यस श्लोकमा प्रपञ्चलाई मिथ्या सिद्ध गर्ने प्रमाण प्रस्तुत गरिएको छ। अघिल्लो श्लोकमा प्रपञ्चलाई कसै गरी पनि सिद्ध गर्न सकिँदैन भनी खण्डनपूर्वक बताइएको थियो। यहाँ चाहिँ प्रपञ्च परमात्मामा उत्पन्न हुने र नष्ट हुने भएकाले यो मिथ्या हो भनी बताइएको छ। यसमा पनि **यतो वा इमानि भूतानि जायन्ते** (तैत्तिरीयोपनिषद् ३।१) अर्थात् जहाँबाट यी सम्पूर्ण प्राणीहरू जन्मिन्छन् भन्ने जस्ता उत्पत्तिपरक श्रुति अनि **नासदासीन्नो सदासीत् तदानीम्** (ऋग्वेद १०।१२९।१-२) अर्थात् प्रलयकालमा न सत् अनि न असत् पदार्थ नै थियो भनी बताउने प्रलयपरक श्रुतिहरूलाई प्रमाणको रूपमा बताइएको छ। श्लोकमा **इदं** अर्थात् यो प्रपञ्चलाई **अग्रे** अर्थात्

सृष्टि हुनुभन्दा पहिले **न आस** थिएन अनि **निधनात् अनु** अर्थात् प्रलयपछि पनि **नभविष्यत्** अर्थात् हुनेछैन, त्यसैले **अन्तरा** अर्थात् बिचमा देखिएको वेलामा पनि यसलाई **मृषा मितम्** अर्थात् मिथ्यारूपमा नै निश्चय गर्नुपर्दछ।

सत् वस्तु त्यो मात्रै हुन्छ, जो तीनै कालमा अबाधित हुन्छ। अबाधित हुनु भन्नुको तात्पर्य सदा सर्वदा प्रमाण ज्ञानद्वारा सिद्ध भइरहनु हो। कुनै पनि वस्तु एकछिन देखिए झैँ भयो, तर प्रमाणपूर्वक ज्ञान गर्दा हरायो वा देखिएन त्यो वस्तु बाधित भयो भनिन्छ। ब्रह्म तीनै कालमा अबाध्य छ अर्थात् उपनिषद् र अनुभव प्रमाणको आधारमा यो स्वयंसिद्ध छ, त्यसैले यो सत्य हो। भनिएको छ— **त्रिकालाबाध्यत्वं सत्यत्वम्।** तीनै काल भनेको संसारको उत्पत्ति हुनुअघि, संसार भएको अवस्थामा र संसारको प्रलयपछि पनि भन्ने अर्थ हो। ब्रह्मतत्त्व संसारको उत्पत्ति हुनुअघि सत् रूपमा विद्यमान थियो— **सदेव सोम्येदमग्र आसीत्** (छान्दोग्योपनिषद् ६।२।१)। प्रलयपछि पनि बाँकी रहने त्यही परमात्मतत्त्व हो— **योऽवशिष्येत सोऽस्म्यहम्** (भागवत २।९।३२ )। प्रपञ्च चाहिँ ठिक यसको उल्टो, सृष्टि हुनुभन्दा अघि पनि थिएन र सृष्टिपछि पनि रहनेछैन। जुन वस्तु पहिले पनि छैन अनि पछि पनि रहँदैन त्यसलाई सत्य भन्न सकिँदैन। त्यसैले वर्तमानमा प्रपञ्च देखिएको भएर पनि यसलाई सत्य मान्न सकिँदैन। **आदौ अन्ते च यन्नास्ति वर्तमानेऽपि तत्तथा, वितथैः सदृशाः सन्तोऽवितथा इव लक्षिताः** (माण्डूक्यकारिका २।६) अर्थात् अगाडि र पछि पनि जुन वस्तु छैन भने त्यसलाई वर्तमानमा देखिँदा देखिँदै पनि छैन नै भन्नुपर्दछ। यी सबै बिचमा मात्र देखिने पदार्थहरू **वितथ** अर्थात् अवास्तविक भएर पनि **अवितथ** अर्थात् वास्तविक झैँ देखिएका छन्। उत्पन्न हुनुभन्दा अघि र नष्ट भएपछि वस्तुहरू नभए पनि जुन वेलामा ती वर्तमान हुन्छन्, त्यस वेलामा त ती वस्तुहरूको सत्ता मान्नै पर्दछ भन्ने शङ्का हुँदा भनिन्छ— **अन्तरा** अर्थात् बिचको समयमा पनि त्यो मिथ्या नै छ। जगत्को नामरूप ब्रह्ममा नै कल्पित भएकाले जुन वेलामा जगत् देखिन्छ, त्यस वेलामा पनि त्यसको अस्तित्व छैन, किनभने अध्यस्त वस्तुको सत्ता अधिष्ठानदेखि भिन्न हुँदैन। भागवत (१०।९।१३)मा पनि **जगच्च यः** अर्थात् जगत्को रूपमा पनि परमात्मा नै हुनुहुन्छ भनी बताइएको छ। यसको अर्थ जगत् छ भनिएको वेलामा पनि त्यो ब्रह्मभन्दा भिन्न सत्तावान् नभई ब्रह्ममा नै कल्पित छ भन्ने हो। जसरी डोरीमा सर्पको भ्रम हुँदा त्यहाँ सर्प भएको भान हुन्छ, तर डोरीमा सर्पको भ्रम हुनु अघि पनि सर्प थिएन अनि सर्पको भ्रम निवृत्त भइसकेपछि पनि त्यहाँ सर्प हुँदैन। त्यसै गरी जुन वेलामा सर्प देखिएको छ, त्यो वेलामा पनि त्यहाँ सर्प हुँदैन। यदि भ्रमकालमा देखिएको सर्प वास्तविक रूपमा नै हुन्थ्यो भने भ्रमनिवृत्तिपछि डोरीबाट सर्प भागेको देखिनुपर्ने, तर त्यस्तो देखिँदैन। त्यसैले डोरीको अज्ञानको कारणले कल्पित भएको सर्प देखिएकै वेलामा पनि नभए झैँ ब्रह्मको अज्ञानका कारणले कल्पित जगत् देखिएकै वेलामा पनि छैन।

श्रीधर स्वामीले यस श्लोकको व्याख्याको क्रममा शुक्तिरजतको दृष्टान्त दिएर जगत्लाई अनुमानद्वारा भ्रमरूप सिद्ध गर्नुभएको छ— **इदं विश्वं न सत्, आद्यन्तयोः अविद्यमानत्वात् विकारित्वात् दृश्यत्वाच्च शुक्तिरूप्यवत्**। यहाँ विश्वलाई मिथ्या सिद्ध गर्न **आद्यन्तयोः अविद्यमानत्वात्** अर्थात् अघि र पछि नहुने, विकारित्व अर्थात् विकारी हुने अनि दृश्यत्व अर्थात्

इन्द्रियग्राह्य हुने भन्ने तीन हेतुहरू बताउनुभएको छ। जुन वस्तु अघि-पछि नभई बिचमा मात्र देखिन्छ, त्यो सत् हुन सक्दैन, फेरि जुन वस्तु विकारी अर्थात् परिवर्तनशील हुन्छ, त्यो पनि सत् हुन सक्दैन, यसै गरी जुन वस्तु दृश्य अर्थात् इन्द्रिय-मनद्वारा ग्राह्य हुन्छ, त्यो पनि सत् हुन सक्दैन। यहाँ सिपीमा देखिएको चाँदीलाई दृष्टान्त बनाइएको छ। यसप्रकार प्रपञ्च पनि शुक्तिरजत झैँ नभएकै वस्तु हो भन्ने सिद्ध हुन्छ।

यो जगत् स्वरूपतः नभए तापनि कसरी वास्तविक झैँ देखिएको छ त ? भन्ने शङ्का हुँदा भनिन्छ— **एकरसे त्वयि विभाति** अर्थात् एकरस हजुरमा देखिन्छ। यसलाई माटो घैँटोको रूपमा बन्नुसँग तुलना गरिएको छ। **द्रविणजातिविकल्पपथैः** यसको अर्थ हुन्छ— **द्रविणजातीनां द्रव्यमात्राणां विकल्पाः भेदाः घटकुण्डलादयः तेषां मार्गाः प्रकाराः**। यहाँ द्रविणजाति यो पदले माटो, सुन आदि द्रव्य मात्रलाई लिनुपर्दछ। यिनीहरूका विकल्प भनेका एउटै माटोबाट अनेक रूपमा बन्ने घैँटो, गमला आदि र एउटै सुनबाट अनेक रूपमा बन्ने गहना आदि हुन्। यसैप्रकार एउटै ब्रह्ममा पनि प्रपञ्चको अनेक भेद देखिएको छ। एउटै वस्तुमा अनेक भेद देख्नुले ती सबै भेददृष्टिहरू असत्य भएको पुष्टि गर्दछ, किनभने एउटै वस्तु अनेक हुन सम्भव छैन। ब्रह्म पनि अद्वितीय वस्तु हो, त्यसमा अनेक भेद देख्नु आफ्नै मनको कल्पना मात्र हो। **अबुधाः** अर्थात् अज्ञानीहरू चाहिँ यो व्यर्थको मनको विलास मात्र भएको प्रपञ्चलाई **ऋतं** अर्थात् सत्य भनी ग्रहण गर्दछन्। भोगमा आसक्त भएका व्यक्तिले भोग गरिरहनका लागि संसारलाई सत्य माने तापनि यो सबै वास्तवमा मिथ्या हो।

यो श्लोकको श्रीकृष्णलीलापरक अर्थ गर्दा भने प्रस्तुत श्लोकमा शिशुपाल आदि वास्तवमा भगवान्का भक्त नै भएको पुष्टि गरिएको छ। अघिल्लो श्लोकमा श्रुतिहरूले जड कर्महरूमा आसक्त भई भगवान्लाई भुल्ने याज्ञिकहरूको निन्दा गरेका थिए। यहाँ शङ्का के भयो भने किन खाली ती ब्राह्मणहरूको नै निन्दा गर्ने ? तिनीहरू वेदमन्त्रकै आधारमा त छन्। यो भन्दा त बरु जन्मदेखि नै भगवान्को निन्दा गर्ने शिशुपाल आदिलाई धिक्कार्नुपर्ने हो। यसको उत्तरमा श्रुतिहरू भन्दछन्— **यत्** अर्थात् जुन यो **दौरात्म्य** अर्थात् शिशुपाल, दन्तवक्त्र आदिमा देखिन्छ, त्यो **अग्रे** अर्थात् पहिला पनि थिएन र पछि पनि हुने छैन। पहिला यिनीहरू भगवान्का पार्षद थिए अनि पछि आसुरी जन्म समाप्त भइसकेपछि पनि यी फेरि भगवान्का नै पार्षद हुन्छन्। **अन्तरा** अर्थात् बिचमा केही समयका लागि लीला गर्न मात्र **मृषा** अर्थात् काल्पनिक रूपमा यो दुष्ट भाव देखिएको हो। जसरी सुनबाट अनेक गहना बन्दा त्यहाँ अघि-पछि पनि सुन नै स्थायी स्थिति हो भन्ने सिद्ध हुन्छ, त्यसै गरी पहिले र पछि पनि यिनीहरू भगवान्का पार्षद नै भएकाले यिनीहरूमा भक्ति नै स्थायी भाव हो, आसुरी स्वभाव पछि कल्पना गरिएको हो। **वितथमनोविलास** शब्दको अर्थ हुन्छ, सनक आदिको श्रापले ख्याल-ख्यालमा प्रकटित भएको दुष्टता। यसलाई **अबुधाः** अर्थात् अरू अविवेकीहरूले भने **ऋतं** अर्थात् सत्य नै ठाने अनि व्यर्थमा नै भगवान्सँग शत्रुता गरे। यहाँ अविवेकी भन्नाले शिशुपाल आदिका साथी शाल्व आदिलाई लिनुपर्दछ। यसरी नजिककाहरूले शिशुपाल, दन्तवक्त्र आदिलाई भगवान्को शत्रुको रूपमा बुझे पनि शिशुपालहरू वास्तवमा भगवान्का भक्त नै थिए भन्ने अर्थ निस्कन्छ।

यस श्लोकको भावमा आधारित भएर श्रीधर स्वामी लेख्नुहुन्छ–

**मुकुटकुण्डलकङ्कणकिङ्कणीपरिणतं कनकं परमार्थतः।**
**महदहङ्कृतिखप्रमुखं तथा नरहरे परमं परमार्थतः।।**

अर्थात् हे नृसिंह ! जसरी सुन नै मुकुट, कुण्डल, बाला अनि पाउजु आदिको रूपमा परिणत भएको छ, त्यसै गरी हजुर नै महत्तत्व, अहङ्कार, आकाश आदि पदार्थहरूको रूपमा प्रकट हुनुभएको हो।

यस श्लोकमा सम्पूर्ण संसार मिथ्या भएको र यहाँ केवल परमात्मा मात्र वास्तविक भएको बताइएको छ।

**स यदजया त्वजामनुशयीत गुणांश्च जुषन्**
**भजति सरूपतां तदनु मृत्युमपेतभगः।**
**त्वमुत जहासि तामहिरिव त्वचमात्तभगो**
**महसि महीयसेऽष्टगुणितेऽपरिमेयभगः॥ ३८॥**

**पदार्थ–**
**सः तु** = त्यो जीव चाहिँ
**यत्** = जब
**अजया** = अज्ञानको कारणले
**अजां** = मायालाई
**अनुशयीत** = स्वीकार गर्दछ, त्यस वेला
**गुणान् च** = मायाका गुणहरूलाई
**जुषन्** = लिँदै
**सरूपतां** = मायाको गुण जस्तै उत्पत्ति, नाश आदि क्षणिकतालाई
**भजति** = धारण गर्दछ
**तदनु** = त्यसपछि
**अपेतभगः** = आनन्द आदि गुणहरू ढाकिनाले
**मृत्युं** = मृत्युमा प्राप्त हुन्छ
**आत्तभगः** = समस्त ऐश्वर्यहरूलाई धारण गर्ने
**त्वं उत** = हजुर चाहिँ
**अहिः** = सर्पले
**त्वचं इव** = काँचुलीलाई जस्तै
**तां** = त्यो अविद्यालाई
**जहासि** = त्यागिदिनुहुन्छ
**अपरिमेयभगः** = अनन्त ऐश्वर्य भएका हजुर
**अष्टगुणिते** = अणिमा आदि अष्टसिद्धिले युक्त
**महसि** = परम ऐश्वर्यस्थितिमा
**महीयसे** = सुशोभित रहनुहुन्छ

**वाक्यार्थ–** हे भगवान् ! जीवले अज्ञानको कारणले मायालाई स्वीकार गर्दछ। त्यो मायाको कारणले ऊ शरीर र इन्द्रियहरूका साथ तादात्म्याध्यास प्राप्त गरेर ती शरीर, इन्द्रियहरूका धर्महरू पनि आफूमा अध्यस्त गर्दछ। अनि ऊ आफ्नो आनन्दस्वरूपलाई बिर्सिएर संसारमा घुम्न थाल्दछ, तर हजुरले सर्पले आफ्नो काँचुलीलाई छोडे जस्तै त्यो मायालाई छोड्नुहुन्छ। सम्पूर्ण ऐश्वर्यहरू हजुरलाई नित्य प्राप्त छन्। हजुर अणिमा आदि ऐश्वर्यले युक्त भएको ठुलो पदमा विराजमान हुनुहुन्छ।

**विवरण–** यस श्लोकमा जीव अविद्याद्वारा सम्बन्धित हुन्छ तर परमात्मा चाहिँ त्यससँग सम्बन्धित हुनुहुन्न भनी बताइएको छ। अघिल्लो श्लोकमा सारा प्रपञ्च केवल भ्रमद्वारा मात्र कल्पित भएको

हो भनी बताइएको थियो। यसमा शङ्का के भयो भने यदि प्रपञ्च छँदैछैन भने जीव किन प्रपञ्चमा बाँधिएको छ र यहाँ अनादि कालदेखि दुःख पाइरहेको छ। त्यसै गरी ईश्वर चाहिँ उही आत्मा भएर पनि किन नित्यमुक्त हुनुहुन्छ ? फेरि संसार सम्पूर्ण रूपमा असत् नै भए वेदका कर्मकाण्डभागको पनि के प्रयोजन ? यी सबै शङ्काहरूको समाधान गर्दै प्रस्तुत श्लोकमा जीव अज्ञानयुक्त भएकाले नै बन्धनमा छ, अनि ईश्वर अज्ञानमुक्त भएकाले कर्मफल आदिसँग सम्बन्धित हुनुहुन्न भनी बताइएको छ। जीव र ईश्वरलाई एउटै रुखमा बस्ने खाने चरा र नखाने चरा भन्ने खालका श्रुतिहरूले यो श्लोकमा आफ्नो भाव प्रकट गरेका छन्। यहाँ पहिलो दुई पङ्क्तिमा जीव किन बन्धनमा पर्छ भनी बताइएको छ भने बाँकी दुई पङ्क्तिमा चाहिँ ईश्वर किन बन्धनमा हुनुहुन्न भनी बताइएको छ।

जीवात्मा संसारका अनेक दुःखहरूबाट तप्त भइरहेको छ। यो सबै दुःखहरूको मूल कारण आत्माको वास्तविक स्वरूपलाई नजान्नु नै हो। परमानन्दस्वरूप आत्मालाई यथार्थतः जानेका भए व्यक्तिहरू सम्पूर्ण दुःख शोकहरूबाट तत्काल मुक्त हुन्थे। त्यसैले उपनिषद्मा भनिएको छ– **तरति शोकमात्मवित्** (छान्दोग्योपनिषद् ७।१।१) अर्थात् आत्मज्ञानी शोकबाट पार हुन्छ। सम्पूर्ण दुःखको मूल अज्ञान नै भएको बुझी योगशास्त्र (२।३)मा पनि पञ्चक्लेशहरूको गणना गर्दा पहिला अविद्याकै नाम आएको छ। **अविद्यास्मितारागद्वेषाभिनिवेशाः पञ्च क्लेशाः** अर्थात् अविद्या, अहङ्कार, राग, द्वेष र मृत्युभय गरी पाँच प्रकारका क्लेशहरू या दुःखका कारणहरू छन्। यी सबै क्लेशहरू जीवमा मात्र हुन्छन्। परमात्मा नित्यज्ञानयुक्त भएको हुनाले उहाँमा यी कसैको पनि सम्बन्ध छैन भनी बताइएको छ। **क्लेशकर्मविपाकाशयैः अपरामृष्टः पुरुषविशेषः ईश्वरः** (योगसूत्र १।२४) अर्थात् पाँचै प्रकारका क्लेश, कर्म, कर्मको फल र कर्मको संस्कारले रहित भएको पुरुषविशेष नै ईश्वर हो। ईश्वरको उपाधि शुद्ध सत्त्वगुण भएकाले उहाँमा अज्ञान आदि कुनै पनि दोषको सम्बन्ध छैन। जीवको उपाधि चाहिँ रजोगुण भएकाले उसमा अज्ञान आदिको सम्बन्ध हुन्छ। यसैले जीव अज्ञानयुक्त भएकाले संसारको बन्धनमा परेको अनि परमात्मा चाहिँ अज्ञानमुक्त हुनुभएकाले संसारको बन्धनबाट माथि हुनुभएको हो।

श्लोकमा जीवले **अजा** अर्थात् अविद्यालाई स्वीकार गरिसकेपछि नै अनर्थको परम्परा सुरु हुने देखाइएको छ। जब **सः** त्यस जीवले **अजया** अर्थात् मायाको कारणबाट **अजां** अर्थात् अविद्यालाई **अनुशयीत** अर्थात् स्वीकार गर्दछ, तब **गुणान्** अर्थात् शरीर, इन्द्रिय आदिलाई पनि यसले अँगाल्दछ। जब आत्माले आफूलाई सर्वव्यापक सत्ता हुँ भन्ने बुझ्दैन, तब ऊ स्वतः नै आफूलाई शरीर आदिमा सीमित बुझ्न थाल्दछ। यसैलाई यहाँ **गुणान् जुषन्** भन्ने पदले बताएको छ। **जुषन्** शब्दको अर्थ हुन्छ, **आत्मतया अध्यस्यन्** अर्थात् आत्मरूपले अध्यस्त गर्दै। यो आत्माले आफूलाई सर्वव्यापक आत्मा नभनी परिच्छिन्न शरीर आदि हुँ भन्न थालेको अध्यासको अवस्था हो। जब आत्माले शरीरमा आत्मबुद्धि गर्न थाल्यो तब त्यसलाई शरीरसम्बन्धी सुखदुःखले छुन थाले। यसैलाई श्लोकमा **सरूपतां तद्धर्मयोगं भजति** भनिएको छ। यसलाई वेदान्त दर्शनमा धर्मी अध्यासपछि धर्माध्यास हुन्छ भनी बताइएको छ। आत्मा र शरीर यी दुबै धर्मी हुन्। आत्माको धर्म नित्यत्व, सद्रूपत्व आदि हो भने शरीरको धर्म जन्म, मृत्यु आदि हुन्। जब आत्माको शरीरमा अनि

शरीरको आत्मामा परस्पर अध्यास भयो तब यी दुबैका धर्महरू परस्परमा सरे। आगोनजिक राखेको फलाममा आगोका दाहकत्व, उष्णत्व आदि गुण सरे झैं अन्तःकरण, शरीर आदिको संसर्गमा रहेको आत्मामा पनि शरीरका जन्म, मृत्यु अनि अन्तःकरण सुख, दुःख आदि धर्महरू सरे। अनि शरीरमा चाहिँ सद्रूपत्व आदि धर्म आत्माबाट सरे। यसै कारणले आत्मा शरीरधर्मले युक्त भई म जन्मन्छु, मर्छु या सुखी, दुःखी हुन्छु भन्न थाल्यो भने शरीर चाहिँ म नै आत्मा हुँ र सत्रूप हुँ भन्न थाल्यो। **तद्धर्मयोग** यो पदले आत्मामा शरीर आदिको धर्म सर्ने कुरालाई सङ्केत गरेको छ। जब आत्मा यी अध्यस्त धर्महरूले युक्त हुन्छ, तब उसको आफ्नो **भग** अर्थात् अनन्त आनन्द आदि ऐश्वर्य ढाकिन्छ। यसरी आत्मा **मृत्यु** अर्थात् संसारमा प्राप्त भइरहन्छ।

उता परमात्मामा भने **अजा** अर्थात् अविद्या छैन। उहाँले सर्पले काँचुली फेरे झैं त्यो अविद्यालाई त्यागिदिनुहुन्छ। परमात्मा **अपरिमेयभगः** अर्थात् अपरिमित ऐश्वर्यले युक्त हुनुभएकाले उहाँ **अष्टगुणिते** अर्थात् अणिमा आदि आठ ऐश्वर्यले युक्त **महसि** अर्थात् आफ्नो ईश्वरीय महिमामा प्रतिष्ठित हुनुहुन्छ।

यस श्लोकको श्रीकृष्णलीलापरक अर्थ गर्दा भने यहाँ श्रीकृष्णमा संसारित्व छैन भन्ने कुरा बताइएको छ। श्रीकृष्ण सुतिरहनुभएको छ र श्रुतिहरू उहाँलाई उठाउन अनेक प्रार्थनाहरू गर्दैछन्। यही बिचमा मानौं भगवान्ले भन्नुभयो— **सुप्तस्य मे कुतः संसारित्वाभावः** अर्थात् सुतिरहेको ममा कसरी संसारित्व भएन ? अनि तिमीहरू मेरो यतिविधि स्तुति गर्दछौ। यसको उत्तरमा श्रुतिहरू भन्छन्— जीवहरू नै अविद्याको सम्बन्धले युक्त हुन्छन्, परमात्मा होइन। **सः** अर्थात् जीव **अजया** अर्थात् अविद्याका कारणले **अजां** अर्थात् अविद्याकै कार्य भएको निद्रालाई स्वीकार गर्दछ। निद्रामा परेपछि त्यो स्वप्नमा **गुणान्** अर्थात् गुणहरूका कारणले **सरूपता** अर्थात् मान्छे, देवता, पशु आदिको स्वरूपलाई प्राप्त गर्दछ। यही क्रमले आफैँलाई अनेक भ्रममा कल्पना गर्दै त्यो **मृतिं** अर्थात् सुषुप्तिमा पनि पुग्छ। सुषुप्तिमा पुगेको वेलामा त्यो व्यक्ति **अपेतभगः** अर्थात् आफ्नो शरीर, इन्द्रिय आदिको सामर्थ्यले सर्वथा रहित हुन्छ। परमात्मामा त त्यस्तो निद्रा छैन, किनभने उहाँ शुद्धसत्त्वमय हुनुभएकाले उहाँमा रजोगुणी निद्राको सम्बन्ध हुनै सक्दैन। परमात्मामा त सामान्य निद्रा झैं लाग्ने योगनिद्रा पो छ जहाँ परमात्मा झन् **आत्तभगः** अर्थात् परम ऐश्वर्यले युक्त हुनुभएको हुन्छ। **महसि** अर्थात् रास आदि महोत्सवको वेलामा **अपरिमेयभगः** अर्थात् अनन्त ऐश्वर्यले युक्त हुनुभएको स्पष्टतः देखिन्छ, किनभने त्यहाँ उहाँले अनन्त रूप बनाउनुभएको छ अनि अनन्त माधुर्यलाई पनि प्रकट गर्नुभएको छ। त्यो वेलामा उहाँ अष्टगुणले अर्थात् राधा आदि मुख्य आठ प्रिय सखीहरूद्वारा युक्त हुनुहुन्छ। यसप्रकार परम ऐश्वर्यसम्पन्न परमात्मामा जीवको झैं संसारित्व छैन भन्ने अर्थ यस श्लोकबाट निस्कन्छ।

यस श्लोकको भावलाई प्रस्तुत गर्दै श्रीधर स्वामी लेख्नुहुन्छ—

**नृत्यन्ती तव वीक्षणाङ्गणगता कालस्वभावादिभि-**
**र्भावान् सत्त्वरजस्तमोगुणमयान् उन्मीलयन्ती बहून्।**
**मामाक्रम्य पदा शिरस्यतिभरं संमर्दयन्त्यातुरं**
**माया ते शरणं गतोऽस्मि नृहरे! त्वामेव तां वारय।।**

अर्थात् हे नृसिंह भगवान्! हजुरको वीक्षण या सङ्कल्प नै मायाको मूल हो। त्यही सङ्कल्पको आँगनमा यो माया काल, कर्म, स्वभाव आदि रूपलाई धारण गरेर सत्त्व, रज र तमोगुणको भावलाई देखाउँदै नाँचिरहेकी छे। अहिले मेरो टाउकै माथि चढेर यसले आफ्नो भारले मलाई थिच्दै मलाई मऱ्याकमुरुक पारिरहेकी छ। यसबाट असाध्यै भयभीत भई म हजुरको शरणमा आएको छु, त्यसैले यसलाई हजुरले नै हटाइदिनुहोस्।

यसप्रकार यस श्लोकमा जीवमा अविद्याको सम्बन्ध भए तापनि परमात्मामा त्यसको सम्बन्ध नभएको कुरा बताइएको छ।

**यदि न समुद्धरन्ति यतयो हृदि कामजटा**
**दुरधिगमोऽसतां हृदि गतोऽस्मृतकण्ठमणिः।**
**असुतृपयोगिनामुभयतोऽप्यसुखं भगव-**
**न्ननपगतान्तकादनधिरूढपदाद् भवतः॥ ३९॥**

**पदार्थ–**
**यदि** = यदि
**यतयः** = योगीहरू
**हृदि** = हृदयभित्रका
**कामजटाः** = कामनाहरूलाई
**न समुद्धरन्ति** = निर्मूल पार्दैनन् भने
**असतां** = त्यस्ता कुयोगीहरूको
**हृदि** = हृदयभित्रै
**गतः** = रहेर पनि हजुर
**अस्मृतकण्ठमणिः** = बिर्सिएको कण्ठहार जस्तै
**दुरधिगमः** = दुष्प्राप्य हुनुहुन्छ
**भगवन्** = हे भगवान्
**असुतृपयोगिनां** = इन्द्रियतृप्तिका लागि लागिपर्ने योगीहरूका लागि
**अनपगतान्तकात्** = कालको भय नष्ट नहुनाले र
**भवतः** = हजुरको
**अनधिरूढपदात्** = चरणकमलको प्राप्ति भइनसक्नाले
**उभयतः अपि** = दुबैतिरबाट
**असुखम्** = दुःख रहिरहन्छ

**वाक्यार्थ–** हे भगवान्! जबसम्म योगीहरूले आफ्नो हृदयमा रहेका वासनाहरूलाई जरैसमेत उखेलेर फाल्दैनन्, तबसम्म उनीहरूकै हृदयमा रहेर पनि ती कुयोगीहरूका लागि हजुर अप्राप्य हुनुहुन्छ, जसरी कुनै व्यक्ति आफ्नै गलामा मणि रहे पनि मेरो गलामा रहेको मणि हरायो भन्दै मणि खोज्न थाल्दछ। त्यस्ता योगीहरूका लागि हजुर अप्राप्य हुनुहुन्छ नै, साथै उनीहरूका लागि कालको भय नष्ट नहुनाले र हजुरको चरणकमलको प्राप्ति भइनसकेको हुनाले मृत्युबाट र हजुरबाट समेत भय भइरहन्छ।

**विवरण–** यस श्लोकमा भित्री आसक्ति नष्ट नभएसम्म बाहिरी त्यागले मात्र परमात्मालाई पाउन नसकिने कुरा बताइएको छ। **कामान् यः कामयते मन्यमानः स कामभिर्जायते तत्र तत्र** अर्थात् जसले कामनाहरूलाई राम्रो मान्दै अँगाल्दछ, त्यो व्यक्ति ती कामनाहरूको नै वशमा परी ती–ती जुनीहरूमा जन्मिन्छ भनी उपनिषद्मा बताइएको छ।

परमात्मतत्त्वलाई पाउन व्यक्ति पूरै निष्काम हुनुपर्दछ। जबसम्म **कामजटा** अर्थात् कामका

मूल भएका वासनाहरूलाई हटाइँदैन, तबसम्म तपस्वी मुनिहरूले पनि परमात्मालाई पाउन सक्दैनन्। बाहिरबाट सारा व्यवहारलाई त्यागेर पनि भित्रबाट त्यसकै सुखमा आसक्त भइरहनेहरूको यहाँ निन्दा गरिएको छ। वंशीधर लेख्नुहुन्छ– **रहसि विषयभोक्तारः मिथ्यासंन्यासिनः** अर्थात् यहाँ निन्दा गरिएका व्यक्तिहरू एकान्तमा विषयभोग गर्ने अनि बाहिर चाहिँ देखाओटी रूपमा त्यागी बन्नेहरू हुन्। यिनीहरू शास्त्रज्ञान तपस्या आदिले युक्त भए तापनि भित्री वासना नष्ट नभएकाले उनीहरूले परमात्मालाई पाउन सक्दैनन्। उपनिषद्मा कसले शास्त्रज्ञानद्वारा पनि परमात्मालाई पाउन सक्दैन भनी बताउने क्रममा भनिएको छ– **नाविरतो दुश्चरितान्नाशान्तो नासमाहितः, नाशान्तमानसो वाचि प्रज्ञानेनैनमाप्नुयात्** (कठोपनिषद् १।२।२४)। **प्रज्ञान** अर्थात् शास्त्रीय सम्पूर्ण ज्ञानले युक्त भए तापनि जो व्यक्ति दुश्चरित अथवा खराब आदत या विषयभोगको दूषित संस्कारले रहित भएको छैन, जसका इन्द्रियहरू विषयतिर विक्षिप्त भइरहन्छन्, जसको मन समाहित छैन अनि जो मोक्षको आनन्दलाई कल्पना गर्छ तर परमात्मचिन्तनविना बसिरहन्छ, त्यस्तो व्यक्तिले परमात्मालाई पाउँदैन। गीता (३।६)मा भगवान्ले कर्मेन्द्रियहरूलाई नियन्त्रित गरी भित्र-भित्र चाहिँ विषयभोगको सम्झना गरिरहने यस्ता व्यक्तिहरूलाई मिथ्याचारी भनी निन्दा गर्नुभएको छ– **विमूढात्मा मिथ्याचारः स उच्यते**। अज्ञानीलाई त बरु अरूको उपदेशले हुन्छ, तर यस्ता व्यक्तिहरू त आफैँ शास्त्रज्ञ भएकाले अनि बेठिकलाई ठिक भनी ठानेकाले यिनीहरूलाई सुधार्न सकिँदैन। भगवान् सबैका हृदयभित्र रहे पनि यस्ताका लागि अप्रकट नै रहनुहुन्छ, जसरी बिर्सिएको हार घाँटीमै भए पनि अप्रकट हुन्छ।

श्रुतिहरू भन्दछन्, **असुतृप** अर्थात् इन्द्रिय, प्राण आदिलाई तृप्त गर्न लागिपर्ने यी मिथ्याचारी योगीहरूलाई **उभयतः** अर्थात् यो लोक र परलोकमा पनि सुख छैन। यस लोकमा कामनाको अनि मिथ्याचारको दुःखले सताइरहेको हुनाले अनि स्वधर्म त्यागी विषयसेवनमै मन गरेकाले चाहिँ परलोकमा दुःख पाउने हुनाले यिनीहरू दुबैतिरबाट दुःखी बन्दछन्। शास्त्रहरूमा यस्ता व्यक्तिलाई **कर्मब्रह्मोभयभ्रष्ट** अर्थात् कर्म र ब्रह्म दुवैबाट भ्रष्ट भएको मानिन्छ। ब्रह्मज्ञानी तपस्वी हुँ भनी कर्मको त्याग गरेकाले कर्मबाट भ्रष्ट अनि ज्ञान उत्पन्न नभएकाले ब्रह्मबाट पनि भ्रष्ट यिनीहरूलाई अपवित्र ठानी त्यागिदिनुपर्दछ। भनिएको छ– **कर्मब्रह्मोभयभ्रष्टं तं त्यजेदन्त्यजं यथा**। तिनीहरूका लागि मृत्यु **अनपगत** अर्थात् हटेको हुँदैन। तिनीहरूले मृत्युबाट डराउनुपर्दछ। अनि **अनधिरूढपदात्** अर्थात् हजुरको परमात्मस्वरूपमा आत्मरूपले आरूढ या स्थित भइनसकेकाले पनि तिनीहरूको संसारबन्धन नष्ट हुँदैन र तिनीहरू पुनर्जन्म र मृत्युको चक्रमा परिरहन्छन्।

यस श्लोकलाई श्रीकृष्णलीलाको क्रममा अर्थ्याउँदा यहाँ पनि भगवान्को भक्तिलाई छाडी बाहिरी साधना आदि गर्नेहरूको कामना नष्ट नहुने भएकाले त्यस्ता देखाओटी साधकहरूकै निन्दा गरिएको छ र भगवान्को भक्तिद्वारा भगवान्को **पद** अर्थात् धाममा स्थित नभई मृत्युको बन्धनबाट छुट्न नसकिने अर्थ गरिएको छ।

यस श्लोकको भावमा आधारित भएर श्रीधर स्वामी लेख्नुहुन्छ–

**दम्भन्यासमिषेण वञ्चितजनं भोगैकचिन्तातुरं**
**सम्मुह्यन्तमहर्निशं विरचितोद्योगक्लमैराकुलम्।**

**आज्ञालङ्घिनमज्ञमज्ञजनता सम्माननासन्मदम्**
**दीनानाथ दयानिधान परमानन्द प्रभो पाहि माम् ।।**

अर्थात् हे भगवान् ! झुटो योगीको भेष बनाएर जनतालाई ठग्ने, भोगको चिन्ताले आतुर हजुरको आज्ञालाई उल्लङ्घन गर्ने, अज्ञानी जनताले दिएको सम्मानलाई प्राप्त गरी व्यर्थमा नै अहङ्कारले भरिएको म अज्ञानीलाई दीनहरूका नाथ एवं दयानिधान परमानन्दरूप हजुरले रक्षा गर्नुहोस् ।

यसप्रकार यस श्लोकमा दाम्भिक अज्ञानीहरूको निन्दा गरिएको छ।

**त्वदवगमी न वेत्ति भवदुत्थशुभाशुभयो-**
**र्गुणविगुणान्वयांस्तर्हि देहभृतां च गिरः ।**
**अनुयुगमन्वहं सगुण गीतपरम्परया**
**श्रवणभृतो यतस्त्वमपवर्गगतिर्मनुजैः ॥ ४० ॥**

**पदार्थ–**
**सगुण** = हे षड्गुणरूप ऐश्वर्यले युक्त भएका भगवान्
**त्वदवगमी** = हजुरको तत्त्वलाई बुझ्ने व्यक्ति
**तर्हि** = त्यस समयमा
**भवदुत्थशुभाशुभयोः** = हजुरबाट प्रदत्त शुभ र अशुभ कर्मका फल भएका
**गुणविगुणान्वयान्** = सुखदुःख आदिलाई र
**देहभृतां** = मानिसहरूका
**गिरः च** = अनेकथरी वचनहरूलाई पनि
**न वेत्ति** = जान्दैन
**यतः** = किनभने
**अनुयुगं** = युगैपिच्छे
**गीतपरम्परया** = सच्चा सम्प्रदायको उपदेशप्रणालीद्वारा
**मनुजैः** = विवेकी मानिसहरूद्वारा
**अन्वहं** = प्रतिदिन
**श्रवणभृतः** = कथाश्रवण गरिनुभएका
**त्वं** = हजुर
**अपवर्गगतिः** = मोक्षको कारण हुनुहुन्छ

**वाक्यार्थ–** हे षड्गुणरूप ऐश्वर्यले युक्त भएका भगवान् ! हजुरको वास्तविक स्वरूपलाई साक्षात्कार गर्ने व्यक्तिले शुभ र अशुभ कर्मको फल सुख-दुःख दुबैको सम्बन्धलाई जान्दैन। उसले मानिसहरूका अनेकथरी वचनहरूलाई पनि जान्दैन। किनभने प्रतियुगमा सम्प्रदायद्वारा प्राप्त भएको हजुरको कथा श्रवण गर्ने भक्तहरूलाई हजुर मोक्ष प्रदान गर्नुहुन्छ।

**विवरण–** यस श्लोकमा भगवान्का भक्त एवं ज्ञानीहरूको प्रशंसा गरिएको छ। अघिल्लो श्लोकमा देखाओटी त्यागीहरूको यो लोक र परलोक पनि नष्ट हुन्छ भनी बताइएको थियो। यो श्लोकमा चाहिँ त्यस्तो अनावश्यक तपस्या आदिको झन्झटमा पर्नुभन्दा भित्री हृदयदेखि नै निश्छल भावले परमात्माको भक्ति गर्नु अनि उहाँको स्वरूपज्ञानद्वारा संसारका वासनाहरूलाई नाश गर्नु श्रेष्ठ हो भनी उपदेश गरिएको छ। **त्वदवगमी** अर्थात् परमात्मतत्त्वलाई पूर्णतः जान्ने ज्ञानीहरू शुभ-अशुभ अनि सुख-दुःख आदिको भेदलाई पनि थाहा पाउँदैनन्। उनीहरू केवल आत्मामा नै रमाइरहेका हुन्छन् र आफ्नै शरीरलाई पनि बिर्सिन्छन् भनी उपनिषद्मा बताइएको छ– **नोपजनं**

**स्मरन्निदं शरीरम्** (छान्दोग्योपनिषद् ८।१२।३)। यसरी आत्मामा मस्त भएका ज्ञानीहरू प्रिय र अप्रिय अनि निन्दा र स्तुतिमा पनि समान हुन्छन् भनी गीता (१४।२४)मा भगवान्ले बताउनुभएको छ— **तुल्य प्रियाप्रियो धीरस्तुल्यनिन्दात्मसंस्तुतिः**। आत्मज्ञहरू संसारको स्मृतिबाट माथि उठेका हुन्छन्। सुख र दुःख हुन शरीर आदिसँग सम्बन्धित हुनुपर्दछ, तर जो व्यक्ति शरीरसम्बन्धले रहित छ, त्यसलाई सुखदुःखले छुन सक्दैन। यसैलाई **अशरीरं वाव सन्तं न प्रियाप्रिये स्पृशतः** (छान्दोग्योपनिषद् ८।१२।१) अर्थात् अशरीर भइसकेका व्यक्तिलाई प्रिय र अप्रियले छुन सक्दैनन् भनी बताइएको छ। गीता (१४।२४)मा पनि भगवान्ले **स्वस्थ** अर्थात् आफूमा स्थित भएको व्यक्ति शरीरका सुखदुःख दुबैलाई बराबर ठान्दछ, किनभने उसले आफूलाई शरीर नभई आत्माको रूपमा बुझिसक्यो भन्नुभएको छ— **समदुःखसुखः स्वस्थः**। यसप्रकार ज्ञानीहरू गुणविगुणान्वयान् अर्थात् सुखदुःखको सम्बन्धलाई थाहा पाउँदैनन्। देहाभिमानीहरू यस्ता आत्मनिष्ठ व्यक्तिहरूलाई पनि संसारको नियममा बाँध्न खोज्दछन्। उनीहरूले संसारको व्यवहार चलाउन केही नियम बनाएका हुन्छन्, जसमा के गर्ने, के नगर्ने भनी निश्चित गरिएको हुन्छ। ज्ञानीलाई भने संसारको नै भान नहुने भएकाले ऊ यो विधिनिषेधको तहबाट माथि उठिसकेको हुन्छ। अरू उसमा त वेदका विधि-निषेधले पनि केही गर्न सक्दैनन् भनिएको छ। शास्त्र एवं लोकका मर्यादाहरू त्यसैका लागि हुन्, जो यिनको सीमाभित्र छ। त्रिगुणातीत भइसकेको व्यक्तिलाई त्रिगुणमय संसार अन्तर्गत भएका यी विषयले के नियन्त्रित गर्न सक्दथे ? त्यसैले ज्ञानीहरू **देहभृतां** अर्थात् देहात्मवादीहरूले बनाएका **गिरः** अर्थात् लौकिक विधिनिषेधका वचनहरूलाई पनि जान्दैनन्। यसको अर्थ ज्ञानीहरू लोक एवं शास्त्रको विरुद्ध आचरण गर्दै हिँड्छन् भन्ने चाहिँ होइन। पापकर्म गर्न दुर्वासना आवश्यक हुन्छ, ज्ञानीहरूमा वासना एवं अन्तःकरण नष्ट भइसकेका हुनाले उनीहरूबाट कहिल्यै पापकर्म हुनै सक्दैन। बरु उनीहरू अन्तर्यामीको प्रेरणाबाट महान् सत्कर्महरू मात्र गर्छन्। यसरी परमात्मभावमा पुगिसकेका ज्ञानीहरूको यहाँ प्रशंसा गरियो।

अब साधक भक्तहरूको विषयमा श्रुतिहरू बताउँदछन्— **सगुण** अर्थात् हे सगुण परमात्मा ! हजुरका उपासक साधकहरू पनि **गीतपरम्परया** अर्थात् गुरुको परम्पराले प्राप्त भगवत्कथाको गान आदिद्वारा हजुरलाई कानको माध्यमले हृदयभित्र पुऱ्याउँछन् र त्यस्ताका लागि हजुर **अपवर्गगतिः** अर्थात् मोक्षप्रदाता हुनुहुन्छ। यहाँ **सगुणगीतपरम्परया** यसलाई एउटै पद मान्ने हो भने यसको अर्थ **गुणैः सौन्दर्यमाधुर्यादिभिः सहिता गीतपरम्परा या तया** भन्ने हुन्छ। भगवान्मा रहेका सौन्दर्य, माधुर्य, भक्तवात्सल्य आदि गुणहरूको चिन्तनसहित भक्तहरू हजुरका चरित्रको गान गरिरहन्छन्। त्यस्ता भक्तका लागि हजुर स्वयंले प्रतिज्ञा गरे अनुसार उनीहरूलाई बुद्धियोग प्रदान गरी आफूमा मिलाउनुहुन्छ। भगवान्ले आफ्ना नित्यचिन्तन गरिरहने भक्तहरूलाई बुद्धियोग दिन्छु र ममा मिलाउँछु भन्नुभएको छ— **ददामि बुद्धियोगं तं येन मामुपयान्ति च** (गीता १०।१०)।

यस श्लोकको श्रीकृष्णभक्तिपरक व्याख्या गर्दा यहाँ **त्वदवगमी** शब्दले श्रीकृष्णको सम्पूर्ण चरित्रलाई जान्ने पूर्ण प्रेमी सिद्ध भक्तहरूलाई लिइएको छ र दोस्रो पङ्क्तिमा चाहिँ पहिले बताए जसरी नै साधकहरूको प्रशंसा बताइएको छ। यसरी सिद्ध प्रेमी एवं साधक भक्तको प्रशंसा यहाँ गरिएको छ।

यस श्लोकको भावमा आधारित भएर श्रीधर स्वामी लेख्नुहुन्छ—

**अवगमं तव मे दिश माधव स्फुरति यन्न सुखासुखसङ्गमः ।**
**श्रवणवर्णनभावमथापि वा न हि भवामि यथा विधिकिङ्करः ।।**

अर्थात् हे माधव ! मलाई हजुरको त्यस्तो स्वरूपज्ञान प्रदान गर्नुहोस्, जसद्वारा मलाई सुख र दुःख आए गएकै थाहा नहोस्। अथवा मलाई हजुरको श्रवण एवं कीर्तन गर्न त्यस्तो तन्मय भाव दिनुहोस् जसद्वारा म वेदका विधिनिषेधको अधीनमा नरहूँ।

यसप्रकार यस श्लोकमा परमात्मतत्त्वको यथार्थ ज्ञान गर्ने अनि भगवान्मा पूर्ण भक्ति भएका व्यक्तिहरू पनि सुखदुःख, विधिनिषेध आदिको स्तरभन्दा माथि उठ्ने र परमात्मामा नै प्रतिष्ठित हुने बताइएको छ।

**द्युपतय एव ते न ययुरन्तमनन्ततया**
**त्वमपि यदन्तराण्डनिचया ननु सावरणाः ।**
**ख इव रजांसि वान्ति वयसा सह यच्छ्रुतय-**
**स्त्वयि हि फलन्त्यतन्निरसनेन भवन्निधनाः ॥ ४१ ॥**

**पदार्थ—**
**द्युपतयः एव** = ब्रह्मा आदि लोकपालहरू समेत
**अनन्ततया** = अनन्त हुनुभएकाले
**ते** = हजुरको
**अन्तं** = अन्तलाई
**न ययुः** = प्राप्त गर्न सक्दैनन्
**त्वम् अपि** = हजुर पनि सर्वव्यापक हुनुहुन्छ
**ननु** = निश्चय नै
**यदन्तरा** = जुन हजुरकै भित्र
**खे** = आकाशमा
**रजांसि इव** = धुलो उडे झैँ
**वयसा सह** = कालचक्रद्वारा
**सावरणाः** = अनेक आवरणले सहित भएका
**अण्डनिचयाः** = सारा ब्रह्माण्डहरू
**वान्ति** = घुमिरहेका छन्
**हि** = निश्चय नै
**यत्** = जुन
**भवन्निधनाः** = हजुरमा पर्यवसित हुने
**श्रुतयः** = श्रुतिहरू
**अतन्निरसनेन** = माया र मायाको कार्यलाई निषेध गरी
**त्वयि** = हजुरमा नै
**फलन्ति** = पर्यवसित हुन्छन्

**वाक्यार्थ—** हे भगवान् ! ब्रह्मा आदि देवताहरू पनि अनन्त हुनुभएका हजुरको पार पाउन सक्दैनन्, सर्वव्यापक आकाशमा धुलो उडे झैँ हजुरभित्र आवरणले युक्त भएका अनन्त ब्रह्माण्डहरू निरन्तर घुमिरहेका छन्। हजुरको ज्ञान गराउनु नै तात्पर्य भएका सम्पूर्ण वेदहरू हजुरदेखि अतिरिक्त माया र मायाको कार्य सम्पूर्ण पदार्थहरूको निषेध गरेर अन्त्यमा तात्पर्यवृत्तिद्वारा हजुरमै पर्यवसित हुन्छन्।

**विवरण—** यस श्लोकमा परमात्माको अनन्त महिमालाई बताइएको छ। योभन्दा अघिल्लो श्लोकमा परमात्मालाई जान्ने व्यक्ति सुख-दुःख आदिबाट पार हुन्छ भनी बताइएको थियो। परमात्मालाई जान्नु भनेको अरू सामान्य पदार्थहरूलाई जस्तो परिच्छिन्न रूपले जान्नु होइन,

किनभने परमात्मा त अनन्त हुनुहुन्छ भनी बताउनु यो श्लोकको तात्पर्य हो। घैँटो आदि पदार्थलाई जान्दा त्यसलाई परिच्छिन्न रूपले जानिएको हुन्छ। **भूतले घटः** अर्थात् भुइँमा घैँटो छ भन्दा भूमिको केही भागमा सीमित घटको ज्ञान भइरहेको छ। इन्द्रिय र अन्तःकरण वृत्ति स्वयं परिच्छिन्न वस्तु भएकाले तिनीहरूले परिच्छिन्न पदार्थहरूको मात्र **तत्त्वतः** निश्चय गर्न सक्छन्। परमात्मा अन्तःकरण आदिको पनि प्रकाशक भएकाले त्यसले आफ्नो आधारलाई प्रकाशित गर्न सक्दैन अनि परमात्मा अनन्त हुनुभएकाले पनि उहाँलाई ती परिच्छिन्न करणहरूले भेट्टाउन सक्दैनन्। उपनिषद्मा परमात्माको अनन्तता बताउँदै भनिएको छ— **यदूर्ध्वं गार्गि दिवो यदवाक् पृथिव्या यदन्तरा द्यावापृथिवी** (बृहदारण्यकोपनिषद् ३।८।४) अर्थात् हे गार्गि! जुन तत्त्व आकाशभन्दा माथि, पृथिवीभन्दा पनि तल छ अनि जसभित्र सम्पूर्ण क्षितिज अटेको छ भनी तत्त्वको उपदेश गरिएको छ। यस्ता आत्मतत्त्वलाई अपरिच्छिन्न एवं अनन्त रूपमा बताउँदै श्रुतिहरूले यस श्लोकमा आफ्नो भाव प्रकट गरेका छन्।

**द्युपतयः** अर्थात् दिव्य लोकका पतिहरू इन्द्र, ब्रह्मा आदिले पनि परमात्माको अन्तलाई पाउन सकेनन्। किनभने परमात्मा अनन्त हुनुहुन्छ। अनन्त शब्दको अर्थ हुन्छ— देशकृत, कालकृत र वस्तुकृत परिच्छेदले शून्य। कुनै ठाउँमा हुनु अनि कुनै ठाउँमा नहुनु देशकृत परिच्छेद हो। घैँटो आदि कहीँ छन्, कहीँ छैनन्, त्यसैले ती अव्यापक वस्तु देशपरिच्छेदले युक्त छन्, तर ब्रह्म त संसारको अणु-परमाणुमा व्यापक भएकाले त्यसमा देशपरिच्छेद सम्भव छैन। उत्पन्न भएर केही समयपछि नष्ट हुने वस्तुहरूलाई कालले परिच्छिन्न अर्थात् सीमित बनाइदिएको हुन्छ। तर आत्मतत्त्व सर्वदा रहने हुनाले त्यसमा कालकृत परिच्छेद पनि छैन। एउटा वस्तु अर्को वस्तु हुन नसक्नु वस्तुकृत परिच्छेद हो, जस्तै घैँटो कपडा होइन, अनि कपडा घैँटो होइन यही नै यिनीहरू आपसमा परिच्छिन्न हुनु हो। परमात्मा सम्पूर्ण संसारको रूपमा देखिएकाले सबै पदार्थ परमात्मरूप नै हुन्, त्यसैले परमात्मामा वस्तुकृत परिच्छेद पनि छैन। यसरी हरेक दृष्टिले अनन्त हुनुभएका परमात्मालाई देवताहरूले जान्न सकेनन्। श्रुतिहरू भन्छन्— **त्वमपि** अर्थात् हजुर पनि आफ्नो महिमाको अन्तलाई जान्नुहुन्न। उसो भए परमात्मा सर्वज्ञ कसरी हुनुभयो त ? भन्ने शङ्कामा भनिन्छ— जुन वस्तु छैन, त्यसलाई नजान्दा व्यक्ति अज्ञानी ठहर्दैन। **न हि शशविषाणाज्ञानं सार्वज्ञ्यं विहन्ति** अर्थात् खरायोको सिङ् नहुने हुनाले त्यसलाई नजान्दा सर्वज्ञतामा हानि आउँदैन। परमात्माको महिमा पनि अन्तरहित भएकाले त्यसको अन्तलाई नजान्दा परमात्मामा अल्पज्ञताको दोष आउँदैन।

परमात्मा अनन्त हुनुहुन्छ भन्ने बताउँदै श्रुतिहरू भन्छन्— **सावरणाः अण्डनिचयाः यदन्तरा** अर्थात् एकभन्दा अर्को दश गुणा विशाल भएका सात थरी आवरणले घेरिएको एउटा ब्रह्माण्ड अनि यस्तै अरू-अरू पनि ब्रह्माण्ड गरी अनन्त ब्रह्माण्डहरू जुन परमात्माको भित्र नै छन् ती सम्पूर्ण ब्रह्माण्डहरू **खे रजांसि इव** अर्थात् आकाशमा धुलोको कण उडे झैँ परमात्मामा चलमलाउँछन्। जसरी आकाशको लागि एउटा धुलोको कण हल्लिनुको खास केही अर्थ छैन, त्यसै गरी परमात्मामा पनि अनन्त ब्रह्माण्डहरू धुलो झैँ उडिरहेका छन्, यो उहाँलाई मतलब छैन। श्रुतिहरूले पनि **फलन्ति** अर्थात् **तात्पर्यतः** मात्रै परमात्मालाई बताउँछन्, निश्चयपूर्वक ब्रह्म यस्तै छ

र यत्ति छ भन्न सक्दैनन्। यसको कारण बताउँदै श्रीधर स्वामी लेख्नुहुन्छ– **सगुणस्य गुणानन्त्यात् निर्गुणस्य च अगोचरत्वात्** सगुण परमात्माको स्वरूप एवं गुणको अन्त्य छैन, त्यसैले उहाँलाई पनि निश्चित गरी बताउन सकिँदैन, अनि निर्गुण ब्रह्म त अगोचर अर्थात् इन्द्रिय, मन आदिको विषय नभएकाले त्यसलाई पनि बताउन सकिँदैन। उसो भए वेद आदि शास्त्रहरू किन चाहिए त ? यदि तिनले आत्मालाई नबुझाउने हो भने तिनीहरूलाई आत्मज्ञानमा किन प्रमाण मान्ने ? यो शङ्काको उत्तर हो, वेदहरूले परमात्मालाई बताउँछन्, तर घैंटो आदिलाई बताए झैं होइन। ब्रह्मवस्तु अपरिच्छिन्न भएकाले यसलाई कुनै पनि नाम, रूप, गुण उपाधि आदिद्वारा निरूपित गर्न सकिँदैन, तर पनि जम्मै उपाधिहरूलाई हटाएर बाँकी रहने अधिष्ठान तत्त्वको रूपमा भने बताउन सकिन्छ। यसो गर्दा ब्रह्म अनन्त पनि रहने भयो अनि शास्त्रहरूले पनि तात्पर्यतः नै भए पनि ब्रह्म बुझाउने हुनाले ती अप्रामाणिक पनि भएनन्। **अतन्निरसन** अर्थात् ब्रह्ममा नभएका उपाधि माया, मायाको कार्य आदिको निषेध गरेर बाँकी रहने जुन अधिष्ठान तत्त्व छ, अनि जसको कहिल्यै निषेध हुनै सक्दैन, त्यही ब्रह्म हो भनी उपनिषद्ले बुझाउँछन्। सम्पूर्ण शास्त्रहरू **भवन्निधनाः** अर्थात् परमात्मामा नै समाप्त हुन्छन्। शास्त्रप्रतिपादनको अन्तिम सीमा परमात्मा भएकाले त्यहाँ गएपछि उनीहरू त्यही तत्त्वमै शान्त हुन्छन्।

यस श्लोकलाई श्रीकृष्णलीलाको रूपमा अर्थ्याउँदा भने यहाँ **द्युपतयः** अर्थात् ब्रह्मा, इन्द्र आदि देवताले पनि रासक्रीडा आदि अवसरमा परमात्माको अनन्त महिमाको अन्त नपाएको अर्थ निस्कन्छ। करोडौं व्रजगोपिकाहरूसँग छुट्टाछुट्टै रूपमा अभिव्यक्त भई अनन्त लीला गरेकाले उनीहरूले परमात्माको अन्त थाहा नपाएका हुन्। **त्वम् अपि** भन्ने शब्दले त्यस वेला अनन्त माधुर्य र सौन्दर्य आदिको रूपमा प्रकट भएको आफ्नो महिमाको अन्तलाई स्वयं परमात्माले नै पनि नजानेको बताइएको छ। परमात्माको अनन्तता बताउँदै श्रुतिहरू भन्दछन्– **त्वदन्तरा** अर्थात् हजुरको रौंको प्वालभित्र नै आवरण सहितका अनन्त ब्रह्माण्डहरू आकाशमा धुलो उडेझैं उड्दछन्। **श्रुतयः** अर्थात् वेदहरू जो ज्ञानकाण्डरूप छन्, तिनीहरू निषेधवृत्तिद्वारा परमात्मामा पुग्छन् तर हामीहरू चाहिँ **भवन्निधनाः** अर्थात् जन्म, मृत्यु सबै केवल हजुरमा भएका छौं। कृष्णलीलाको रूपमा अर्थ्याउँदा श्रुति भनेर श्रुतिरूपा गोपिनीहरूलाई नै लिनुपर्ने पहिल्यै बताइएको थियो। यी गोपिनीहरू सुतिरहेका श्रीकृष्णलाई जगाउन उहाँको स्तुति गरिरहेका छन्। यिनीहरू के भन्छन् भने वेद आदि शास्त्रहरू त हजुर अनन्त भए तापनि कुनै उपायले हजुरमा पुगिहाल्दा रहेछन्, तर हामीहरू त त्यस्तो केही उपाय जान्दैनौं। हामीहरूको त जीवन पनि हजुर र निधन पनि हजुर नै हुनुहुन्छ। त्यसैले हामीमाथि अब कृपा गर्न जाग्नुहोस् भनी गोपिनीहरूले भगवान् श्रीकृष्णको स्तुति गरेका छन्।

यस श्लोकको भावलाई प्रस्तुत गर्दै श्रीधर स्वामी लेख्नुहुन्छ–

**द्युपतयो विदुरन्तमनन्त ते न च भवान्न गिरः श्रुतिमौलयः।**
**त्वयि फलन्ति यतो नम इत्यतो जय जयेति भजे तव तत्पदम्।।**

अर्थात् हे भगवान् ! हजुरको इयत्तालाई ब्रह्मा, इन्द्र आदि देवताहरू र हजुर स्वयंले पनि जान्नुहुन्न। वेदका शिरस्थानीय उपनिषद्हरू पनि तात्पर्य वृत्तिद्वारा बल्ल बल्ल हजुरमा पुग्दछन्।

हजुरको यस्तो अनन्त पदको जय होस्, उत्कर्ष होस्। हामी सधैँ हजुरकै भजन गरिरहूँ।

यसप्रकार यस श्लोकमा परमात्माको महिमा अनन्त छ भनी बताइएको छ।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**इत्येतद् ब्रह्मणः पुत्रा आश्रुत्यात्मानुशासनम्।**
**सनन्दनमथानर्चुः सिद्धा ज्ञात्वात्मनो गतिम्॥ ४२॥**

**पदार्थ–**
**सिद्धाः** = नित्य सिद्ध
**ब्रह्मणः** = ब्रह्माजीका
**पुत्राः** = चार पुत्रहरूले
**इति एतत्** = यसप्रकारको
**आत्मानुशासनं** = आत्मस्वरूपको उपदेशलाई
**आश्रुत्य** = सुनेर
**आत्मनः** = आत्माको
**गतिं** = वास्तविक स्वरूपलाई
**ज्ञात्वा** = जानेर
**अथ** = यसपछि
**सनन्दनं** = सनन्दनलाई
**आनर्चुः** = पूजा गरे

**वाक्यार्थ–** यसप्रकार नित्य सिद्ध भए तापनि ती ब्रह्माजीका पुत्रहरूले आत्मविषयक उपदेश सुने र त्यसबाट वास्तविक आत्मस्वरूपलाई जानी तिनीहरूले सनन्दनको पूजा गरे।

**इत्यशेषसमाम्नायपुराणोपनिषद्रसः।**
**समुद्धृतः पूर्वजातैर्व्योमयानैर्महात्मभिः॥ ४३॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**पूर्वजातैः** = सृष्टिको आरम्भमा उत्पन्न भएका
**व्योमयानैः** = आकाशगामी
**महात्मभिः** = ती महापुरुषहरूद्वारा
**अशेषसमाम्नायपुराणोपनिषद्रसः** = समस्त वेद, पुराण र उपनिषद्को रसलाई
**समुद्धृतः** = निचोडको रूपमा निकालिएको छ

**वाक्यार्थ–** यसप्रकार सृष्टिको आरम्भमा उत्पन्न आकाशगामी सनक आदि महापुरुषहरूले यो वेदस्तुतिरूपी समस्त वेद, पुराण र उपनिषद्को रसलाई निचोडको रूपमा निकालेका छन्।

**त्वं चैतद् ब्रह्मदायाद श्रद्धयात्मानुशासनम्।**
**धारयंश्चर गां कामं कामानां भर्जनं नृणाम्॥ ४४॥**

**पदार्थ–**
**ब्रह्मदायाद** = हे ब्रह्मपुत्र नारद
**त्वं च** = तपाईं पनि
**नृणां** = मानिसहरूको
**कामानां** = विषय वासनालाई
**भर्जनं** = नष्ट गरिदिने
**एतत्** = यो
**आत्मानुशासनं** = आत्मविद्यालाई
**श्रद्धया** = श्रद्धापूर्वक
**धारयन्** = धारण गर्दै
**कामं** = यथेच्छ
**गां** = पृथिवीमा
**चर** = विचरण गर्नुहोस्

**वाक्यार्थ–** हे ब्रह्मपुत्र नारद ! यो आत्मविद्या मनुष्यहरूको सारा विषयवासनालाई नष्ट गरिदिन

समर्थ छ। तपाईं पनि यसलाई श्रद्धापूर्वक धारण गरी पृथिवीमा यथेच्छ विचरण गर्नुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं स ऋषिणादिष्टं गृहीत्वा श्रद्धयात्मवान्।**

**पूर्णः श्रुतधरो राजन्नाह वीरव्रतो मुनिः॥ ४५॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**आत्मवान्** = संयमी
**पूर्णः** = पूर्णकाम
**श्रुतधरः** = सुनेको कुरालाई एकपटकमै धारण गर्ने
**वीरव्रतः** = दृढ ब्रह्मचर्यव्रत स्वीकार गर्ने
**सः** = ती
**मुनिः** = मुनि नारदले
**एवं** = यसप्रकार
**ऋषिणा** = ऋषि नारायणद्वारा
**आदिष्टं** = दिइएको आदेशलाई
**श्रद्धया** = श्रद्धापूर्वक
**गृहीत्वा** = ग्रहण गरी
**आह** = भन्नुभयो

**वाक्यार्थ–** हे परीक्षित्! संयमी, पूर्णकाम, दृढ ब्रह्मचर्यव्रतलाई स्वीकार गर्नुभएका, एकपटक सुनेको कुरालाई तत्काल धारण गर्नुहुने मुनि नारदले ती नारायणऋषिद्वारा दिइएको उपदेशलाई श्रद्धापूर्वक धारण गर्नुभयो र ऋषिलाई यसो भन्नुभयो।

**नारद उवाच** (नारदले भन्नुभयो)

**नमस्तस्मै भगवते कृष्णायामलकीर्तये।**

**यो धत्ते सर्वभूतानामभवायोशतीः कलाः॥ ४६॥**

**पदार्थ–**
**यः** = जसले
**सर्वभूतानां** = सम्पूर्ण प्राणीहरूको
**अभवाय** = मोक्षका लागि
**ऊशतीः** = श्रेष्ठ एवं मनोहर
**कलाः** = कलाहरूले सहित अवतार
**धत्ते** = स्वीकार गर्नुहुन्छ
**तस्मै** = त्यस्ता
**अमलकीर्तये** = निर्मलकीर्ति भएका
**भगवते** = भगवान्
**कृष्णाय** = श्रीकृष्णस्वरूप हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** हे भगवान्! हजुरले सम्पूर्ण प्राणीहरूलाई मोक्षका लागि नै श्रेष्ठ एवं मनोहर कलाहरूले युक्त यो नारायणऋषिको अवतार धारण गर्नुभएको छ। निर्मलकीर्ति भएका त्यस्ता भगवान् श्रीकृष्णस्वरूप हजुरलाई नमस्कार छ।

**इत्याद्यमृषिमानम्य तच्छिष्यांश्च महात्मनः।**

**ततोऽगादाश्रमं साक्षात् पितुर्द्वैपायनस्य मे॥ ४७॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**आद्यम्** = आदि

| | | |
|---|---|---|
| **ऋषिं** = ऋषि नारायणलाई र | **ततः** = त्यसपछि (नारद) | **महात्मनः** = उदारहृदय |
| **तच्छिष्यान् च** = उहाँका | **साक्षात्** = साक्षात् | **द्वैपायनस्य** = कृष्णद्वैपायनको |
| शिष्यहरूलाई समेत | **मे** = मेरा | **आश्रमं** = आश्रममा |
| **आनम्य** = अभिवादन गरी | **पितुः** = पिता | **अगात्** = जानुभयो |

**वाक्यार्थ–** यसप्रकार आद्य ऋषि भगवान् नारायण र उहाँका शिष्यहरूलाई समेत अभिवादन गरेर देवर्षि नारद उदारहृदय हुनुहुने साक्षात् मेरा पिताजी कृष्णद्वैपायनको आश्रममा जानुभयो।

**सभाजितो भगवता कृतासनपरिग्रहः।**
**तस्मै तद् वर्णयामास नारायणमुखाच्छ्रुतम्॥ ४८॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भगवता** = भगवान् | स्वीकार गरी बस्नुभएका | **श्रुतं** = सुनिएको |
| कृष्णद्वैपायनद्वारा | नारदले | **तत्** = त्यही उपदेश |
| **सभाजितः** = सत्कार गरिएका | **तस्मै** = ती कृष्णद्वैपायनलाई | **वर्णयामास** = बताउनुभयो |
| **कृतासनपरिग्रहः** = आसन | **नारायणमुखात्** = ऋषि नारायणको मुखबाट | |

**वाक्यार्थ–** भगवान् कृष्णद्वैपायनले नारदको स्वागत गर्नुभयो र नारद पनि उहाँले दिएको आसनमा बस्नुभयो। त्यसपछि नारदले कृष्णद्वैपायनलाई भगवान् नारायणको मुखबाट सुनिएको त्यो उपदेश बताउनुभयो।

**इत्येतद् वर्णितं राजन् यन्नः प्रश्नः कृतस्त्वया।**
**यथा ब्रह्मण्यनिर्देश्ये निर्गुणेऽपि मनश्चरेत्॥ ४९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **राजन्** = हे राजा परीक्षित् | **कृतः** = गरिएको थियो | **मनः** = मन |
| **यत्** = जुन विषयमा | **अनिर्देश्ये** = (मन, वाणी आदिबाट) निर्देश गर्न नसकिने | **चरेत्** = प्रवेश गर्दछ |
| **त्वया** = तपाईंद्वारा | **निर्गुणे अपि** = निर्गुण | **इति** = यो कुरालाई |
| **नः** = हामीलाई | **ब्रह्मणि**= ब्रह्ममा | **एतत्** = यसप्रकार |
| **प्रश्नः** = प्रश्न | **यथा** = जसरी | **वर्णितम्** = बताइयो |

**वाक्यार्थ–** हे परीक्षित्! तपाईंले मलाई मन, वाणीद्वारा निर्देश गर्न नसकिने एवं निर्गुण ब्रह्मतत्त्वमा कसरी मन प्रवेश गर्दछ र वेदहरूले कसरी स्तुति गर्न सक्दछन् भन्ने प्रश्न गर्नुभएको थियो, त्यस विषयमा मैले तपाईंलाई यो प्रसङ्ग बताएँ।

**योऽस्योत्प्रेक्षक आदिमध्यनिधने योऽव्यक्तजीवेश्वरो**
**यः सृष्ट्वेदमनुप्रविश्य ऋषिणा चक्रे पुरः शास्ति ताः।**

**यं सम्पद्य जहात्यजामनुशयी सुप्तः कुलायं यथा**
**तं कैवल्यनिरस्तयोनिमभयं ध्यायेदजस्रं हरिम् ॥ ५० ॥**

**पदार्थ–**
**यः** = जो
**अस्य** = यो संसारको
**उत्प्रेक्षकः** = सङ्कल्पकर्ता हुनुहुन्छ
**आदिमध्यनिधने** = आदि, मध्य र अन्तमा पनि रहनुभएको छ
**यः** = जो
**अव्यक्तजीवेश्वरः** = प्रकृति र जीव दुबैको स्वामी हुनुहुन्छ
**यः** = जसले
**इदं** = यो संसारलाई
**सृष्ट्वा** = रचना गरी
**ऋषिणा** = जीवात्माका साथ
**अनुप्रविश्य** = यसभित्र प्रवेश गरी
**पुरः** = अनेक शरीरहरू
**चक्रे** = बनाउनुभयो र
**ताः** = ती सबैलाई
**शास्ति** = नियन्त्रित गर्नुहुन्छ
**अनुशयी** = जीव
**यं** = जुन स्वरूपमा
**सम्पद्य** = प्राप्त भई
**सुप्तः** = सुषुप्ति अवस्थाको प्राणीले
**कुलायं यथा** = शरीर आदिलाई बिर्सिए झैं
**अजां** = अविद्यालाई
**जहाति** = छाडिदिन्छ
**कैवल्यनिरस्तयोनिं** = केवल विशुद्ध स्वरूपद्वारा जगत्को कारण मायालाई निरस्त गर्ने
**अभयं** = अभयरूप
**तं** = त्यस्ता
**हरिम्** = श्रीहरिलाई
**अजस्रं** = निरन्तर
**ध्यायेत्** = चिन्तन गर्नुपर्दछ

**वाक्यार्थ–** हे परीक्षित् ! भगवान् नै सम्पूर्ण विश्वको सङ्कल्पकर्ता हुनुहुन्छ र उहाँ नै यसको आदि, मध्य र अन्तको अवस्थामा स्थित हुनुहुन्छ। उहाँ नै प्रकृति र जीव दुबैको स्वामी हुनुहुन्छ। सम्पूर्ण जगत्को सिर्जना गरी जीवात्माका साथ यसभित्र प्रवेश गरी उहाँले प्राणीहरूका स्थूल, सूक्ष्म र कारण यी अनेक शरीरहरूको सिर्जना गर्नुभएको छ। ती सबैलाई अन्तर्यामी चेतनरूपले उहाँले नियन्त्रित गर्नुहुन्छ। जसरी सुषुप्ति अवस्थामा प्राणीले शरीर आदिको सम्बन्धलाई त्यागिदिन्छ, त्यसै गरी ब्रह्मस्वरूपमा प्राप्त भएपछि जीवले पनि अविद्यालाई त्यागिदिन्छ। आफ्नो केवल विशुद्धस्वरूपद्वारा जगत्को कारण भएको मायालाई पनि उहाँ निरस्त गर्नुहुन्छ। सबैलाई अभय दिने त्यस्ता श्रीहरि भगवान्को निरन्तर चिन्तन गरिरहनुपर्दछ।

**विवरण–** यस श्लोकमा वेदस्तुतिको सारांश बताइएको छ। परमात्मा यो विश्वको सङ्कल्पकर्ता हुनुहुन्छ। प्रलयकालमा अविद्यामा लीन भएका प्राणीहरूका अनेक कर्मसंस्कारहरूलाई ती-ती भोगद्वारा शान्त गराइदिनका लागि परमात्मा संसारको रचना गर्ने सङ्कल्प गर्नुहुन्छ। **तदैक्षत बहु स्यां प्रजायेय** (छान्दोग्योपनिषद् ६।२।३) अर्थात् परमात्माले ईक्षणरूप सङ्कल्प गर्नुभयो कि म एकबाट अनेक बनूँ। यसबाट परमात्माले संसारलाई कस्तो बनाउने ? भन्ने विषयमा विचार गर्नुभएको देखिन्छ। यो विचार या सङ्कल्प कुनै चेतन पुरुषले मात्र गर्न सक्छ। त्यसैले वेदान्तसूत्रमा यही ईक्षणश्रुतिलाई नै आधार मानी जगत्को कर्ता कुनै चेतन मात्र हुन सक्ने हुनाले सांख्यले बताए अनुसार जड प्रकृति संसारको कारण हुन सक्दैन भनी बताइएको छ– **ईक्षतेर्नाशब्दम्** (ब्रह्मसूत्र १।१।५) अर्थात् वेदमा प्रतिपादन नगरिएकी प्रकृति जगत्कारण हुन सक्दिन, किनभने वेदमा जगत्कर्ताले जगत्को रचनापूर्व ईक्षण या सङ्कल्प गऱ्यो भनी बताइएको छ। कुनै पनि कार्यप्रति

चेतन व्यक्ति निमित्तकारण हुन्छ। त्यसैले यस प्रसङ्गले जगत्का प्रति ईश्वर निमित्तकारण हुनुहुन्छ भन्ने सूचित भएको छ।

परमात्मा जगत्का लागि केवल निमित्त मात्र नभई उपादान कारण पनि हुनुहुन्छ, यसलाई बुझाउन श्लोकमा **आदिमध्यनिधनः** यो पद आएको छ। जगत्को **आदि** अर्थात् उत्पत्ति, **मध्य** अर्थात् स्थिति अनि **निधनः** अर्थात् प्रलय पनि परमात्मामा नै हुन्छ। जुन वस्तु जहाँ उत्पन्न हुन्छ, जहाँ अवस्थित हुन्छ र अन्तमा जहाँ गई लीन हुन्छ, त्यो वस्तुलाई त्यो कारणदेखि भिन्न मान्न सकिँदैन। माटोमै उत्पन्न भएर त्यहीँ स्थित भई त्यहीँ नष्ट हुने घैँटोलाई माटोरूप नै मानिन्छ। यसबाट माटो घैँटोका लागि उपादानकारण हो भन्ने पनि सूचित हुन्छ। यसै गरी जगत् पनि ब्रह्ममा उत्पन्न भएर ब्रह्ममा नै अवस्थित भई त्यहीँ नै नष्ट हुने भएकाले ब्रह्मदेखि अभिन्न हो। यसरी ब्रह्म जगत्का लागि निमित्त एवं उपादान दुबै कारण भएको हुनाले ब्रह्म जगत्को **अभिन्ननिमित्तोपादान** कारण हो। जसरी चेतन कुमालेले माटोरूप उपादानद्वारा घैँटो बनाउँछ, त्यसै गरी चेतन परमात्माले आफैँलाई उपादान बनाई आफैँमा जगत्को रचना गर्नुभएको हो भन्नु यसको आशय हो। यसैले वेदान्तमा भनिन्छ– **कल्पयत्यात्मनात्मानं आत्मा देवः स्वमायया** (माण्डूक्यकारिका २।१२)।

यहाँ के शङ्का हुन्छ भने जगत्का लागि त प्रकृति र पुरुष पो कारण हुन् भनिन्छ, परमात्मा कसरी कारण हुनुभयो त ? यसको उत्तरमा भनिन्छ– **अव्यक्तजीवेश्वरः** अर्थात् परमात्मा अव्यक्त प्रकृति र जीव पुरुषको पनि नियन्त्रक हुनुहुन्छ। यसरी प्रकृतिपुरुषका पनि मूल कारण भएकाले परमात्मा नै जगत्का एक मात्र कारण हुनुहुन्छ भन्ने सिद्ध हुन्छ। **इदं सृष्ट्वा** अर्थात् यो विश्वलाई सृष्टि गरेर **अनुप्रविश्य** अर्थात् यसभित्र प्रवेश पनि गर्नुभयो र **ऋषिणा** अर्थात् जीवसँग **पुरः** अर्थात् जीवका भोगसाधन शरीर आदिलाई चलाउनुभयो। संसारको रचना गरी जीवरूपले प्रवेश गर्ने पनि परमात्मा नै हुनुहुन्छ, अनि त्यसलाई प्रकाशित गरी सिद्ध गर्ने पनि परमात्मा नै हुनुहुन्छ भन्ने यस श्लोकको आशय हो। **पुरः शास्ति**को अर्थ हुन्छ, जीवका भोगसाधन भएका शरीरहरूलाई नियन्त्रित गर्दछ। यहाँ नियन्त्रण गर्नु भनेको चैतन्यरूपले त्यहीँ पसी ती इन्द्रिय आदिलाई आ-आफ्नो विषयमा प्रेरित गर्नु हो। यसरी परमात्मा नै जीवरूपले अनि इन्द्रिय आदिलाई प्रेरित गर्ने अन्तर्यामीरूपले पनि रहनुभएको थाहा हुन्छ। यसप्रकार माथिल्ला दुई पङ्क्तिमा परमात्मा संसारको कारण कसरी हुनुहुन्छ र संसारमा जीवहरूलाई कसरी प्रेरित गर्नुहुन्छ भन्ने बताइयो। अब पछिल्ला दुई पङ्क्तिमा चाहिँ त्यही परमात्मा उपासकहरूका लागि कसरी कैवल्यरूप बन्नुहुन्छ भनी बताइएको छ।

यहाँ **अनुशयी** अर्थात् जीव **यं संपद्य** अर्थात् जसमा प्राप्त भयो भने अविद्याबाट मुक्त हुन्छ भनी परमात्माको स्तुति गरिएको छ। जीवको आफ्नो स्वरूप भनेका परमात्मा नै हुन्। सत्स्वरूप परमात्मासँग संयुक्त हुँदा जीवले आफ्नो स्वरूपलाई प्राप्त गरेको हुन्छ भनी उपनिषद्मा भनिन्छ– **सता सोम्य तदा सम्पन्नो भवति स्वमपीतो भवति** (छान्दोग्योपनिषद् ६।८।१) अर्थात् सत्स्वरूप परमात्मासँग संयुक्त भएको वेलामा जीवले स्वरूपलाई प्राप्त गर्दछ। यहाँ सम्पन्न हुनुको तात्पर्य जीवले आफूलाई परमात्मरूपमा जान्नु हो। यसरी आफूलाई जानिसकेको व्यक्तिले **अजां** अर्थात्

अविद्यालाई **जहाति** अर्थात् त्यागिदिन्छ। अविद्यालाई त्याग्नुको तात्पर्य अविद्याको कार्यभूत सम्पूर्ण प्रपञ्चलाई बाधित गर्नु हो। यहाँ शङ्का के हुन्छ भने ब्रह्मज्ञानीका लागि पनि संसार जस्ताको तस्तै देखिन्छ, यसलाई कसरी हटाउन सम्भव छ ? यसको उत्तरमा भनिन्छ– **सुप्तः कुलायं यथा** अर्थात् यो सुतेको व्यक्तिले बाहिरी स्थूल शरीरलाई बिर्सिए झैँ हो। सुषुप्तिमा गएको वेलामा व्यक्तिले आफ्नो शरीरलाई पूर्णतः बिर्सिएको हुन्छ, सुषुप्त अवस्थामा व्यक्तिहरूका सम्पूर्ण शरीर र इन्द्रिय बाधित हुन्छन्। बाहिरी अरू व्यक्तिहरूले यसको शरीर अनि प्राण चलेको देखेर सुषुप्ति अवस्थाको जीवसँग सम्बन्ध छ भनेर कल्पना गर्नु भ्रम मात्र हो। त्यसै गरी ब्रह्मज्ञानीका दृष्टिमा संसार नभएपछि अरू बाहिरी व्यक्तिहरूले ऊ संसारसँग सम्बन्धित रहेको भ्रम गर्दछन्। **कैवल्यात् निरस्ता योनिः मूलकारणं अज्ञानं येन सः** यो व्युत्पत्तिबाट **कैवल्यनिरस्तयोनि** पद बन्दछ। यसको अर्थ परमात्माले केवल अद्वितीय रूपमा आफ्नो स्वरूपको नित्य अनुभव गरेर **योनि** अर्थात् संसारैको मूल कारण अविद्यालाई निरस्त गर्नुभएको छ भन्ने हुन्छ। यस्ता भगवान्लाई प्रणाम गरिएको छ।

यसप्रकार यस श्लोकमा परमात्मा जगत्का उपादान र निमित्त दुबै कारण हुनुभएको, प्रकृति र पुरुषभन्दा पनि उहाँ पर रहेको, जीवको रूपमा संसारभित्र पसी शरीर, इन्द्रिय आदिद्वारा त्यसको भोग गर्ने र साक्षी रूपमा प्रकाशित गरिरहने पनि उहाँ नै भएको, त्यही परमात्मस्वरूपलाई आफ्नो रूपमा जान्ने र उहाँको शरणमा जाने व्यक्तिले अविद्यालाई नष्ट गर्न सक्ने आदि वेदस्तुतिका मुख्य सबै पक्षहरूको समावेश यस श्लोकमा भएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे नारदनारायणसंवादे वेदस्तुतिर्नाम सप्ताशीतितमोऽध्यायः॥ ८७॥**

# अथाष्टाशीतितमोऽध्यायः

## आफैँले दिएको वरबाट भगवान् शिवजीमाथि आइपरेको सङ्कट

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**देवासुरमनुष्येषु ये भजन्त्यशिवं शिवम्।**

**प्रायस्ते धनिनो भोजा न तु लक्ष्म्याः पतिं हरिम्॥ १॥**

**एतद् वेदितुमिच्छामः सन्देहोऽत्र महान् हि नः।**

**विरुद्धशीलयोः प्रभ्वोर्विरुद्धा भजतां गतिः॥ २॥**

**पदार्थ–**
**देवासुरमनुष्येषु** = देवता, असुर र मनुष्यहरूमध्ये
**ये** = जो
**अशिवं** = समस्त भोगलाई त्यागिदिने
**शिवं** = भगवान् शिवलाई
**भजन्ति** = पूज्दछन्
**ते** = तिनीहरू
**प्रायः** = धेरैजसो
**धनिनः** = धनी र
**भोजाः** = भोगसम्पन्न हुन्छन्
**लक्ष्म्याः** = लक्ष्मीका
**पतिं** = पति
**हरिम् तु** = श्रीहरिका उपासकहरू चाहिँ
**न** = हुँदैनन्
**विरुद्धशीलयोः** = फरक स्वभाव भएका
**प्रभ्वोः** = दुबै प्रभुहरूको
**भजतां** = भक्तहरूको
**गतिः** = फलप्राप्ति
**विरुद्धा** = विरुद्ध छ
**एतत्** = यो
**वेदितुं** = जान्न
**इच्छामः** = चाहन्छु
**हि** = निश्चय नै
**अत्र** = यस विषयमा
**नः** = मेरो मनमा
**महान्** = ठुलो
**सन्देहः** = सन्देह छ

**वाक्यार्थ–** हे शुकदेव ! भगवान् शिवले समस्त भोगहरूलाई त्यागिदिनुभएको छ, तर उहाँका भक्तहरू प्रायःजसो धनी र भोगसम्पन्न देखिन्छन् भने लक्ष्मीपति भगवान्का भक्तहरू चाहिँ भोगविहीन देखिन्छन्। संसारका प्रभु यी दुबै देवताहरू ऐश्वर्यत्याग र ऐश्वर्यसङ्ग्रह यी दुई विरुद्ध स्वभावले युक्त हुनुहुन्छ, तर उहाँहरूका भक्तहरूलाई भने यसको विपरीत फल मिलेको देखिन्छ। यस विषयमा मेरो मनमा ठुलो सन्देह छ। यसैले म यसको रहस्य जान्न चाहन्छु।

**विवरण–** यस अध्यायमा भगवान् विष्णु नै एक मात्र उपास्य भएको बताउन भगवान् शङ्करभन्दा विष्णुको श्रेष्ठता बताइएको छ। **एको देवः** (श्वेताश्वतरोपनिषद् ६।११) अर्थात् परमात्मा एउटा नै हुनुहुन्छ भनी उपनिषद्मा बताइएको छ। एउटै परमात्मा अनेक भक्तका अनेक संस्कार एवं आस्थासँग मिल्ने गरी अनेक रूपमा प्रकट हुनुहुन्छ। उपासकहरूले चाहिँ आफ्नो श्रद्धा अनुसार आफ्ना इष्टदेवलाई मूल परमात्मस्वरूप अनि अन्य देवताहरूलाई उहाँकै विभूति या अनेक अभिव्यक्ति भन्ने मान्नुपर्दछ। नत्र अनेक देवताहरूको चिन्तनमा लागिरहँदा व्यक्तिको चित्त कहीँ

पनि स्थिर हुन पाउँदैन। चञ्चल मनलाई एउटै तत्त्वमा रोकिदिनु नै भक्तिको मुख्य काम हो। एउटै परमात्मालाई मात्र चिन्तन गरी उहाँमा नै निरन्तर मन लगाइरहनुलाई अनन्यता भनिन्छ। **अनन्य** अर्थात् अरू कसैको पनि चिन्तन नगरी केवल एउटै स्वरूपको चिन्तन गर्ने साधकको प्रशंसा भगवान्ले पनि गर्नुभएको छ— **अनन्यचेताः सततं यो मां स्मरति नित्यशः** (गीता ८।१४) अर्थात् जसले अनन्यचित्त भई नित्य निरन्तर मेरो स्मरण गर्दछ, त्यस्ताका लागि म सुलभ छु। यस्तो अनन्यताका लागि आफ्ना इष्टलाई परमात्मस्वरूप मान्नुपर्दछ भने अरू देवताहरू पनि आफ्ना इष्टकै विभूतिहरू हुन् भनी तिनमा पनि इष्टकै बुद्धि गर्नुपर्दछ। यहाँ भगवान् श्रीकृष्ण नै प्रमुख इष्ट हुनुहुन्छ। उहाँमा अविचल श्रद्धा स्थिर गर्नका लागि अरू सम्पूर्ण ठुला देवताहरू पनि उहाँकै अधीनमा छन् भन्ने देखाउनु आवश्यक छ। संसारका मुख्य त्रिदेवमध्ये पनि प्रायः शिव र विष्णुको मात्र उपासना गरिन्छ। पूर्णब्रह्म परमात्मा तीनै गुणभन्दा माथि रहने निर्गुण परमतत्त्व हुनुहुन्छ— **हरिर्हि निर्गुणः साक्षात्** (भागवत १०।८८।५) अनि भगवान् ब्रह्मा, विष्णु र शङ्करचाहिँ सत्त्व, रज र तम यी तीन गुणलाई लिएर काम गर्नुहुन्छ भनी बताइएको छ। यिनै गुणलाई लिँदा तमोगुणको होइन, सत्त्वगुणको आश्रय लिनुपर्छ भन्ने साधनाको सोपानक्रम बताउन भनिएको हो। शिवजीको आराधनालाई कम देखाउनु यसको तात्पर्य होइन। परीक्षित्ले प्रश्नमा शिवलाई अशिव भन्नुको तात्पर्य सबै भोग त्यागेका भन्ने हुन्छ। अथवा चिताभस्मको लेपन गर्ने आदि अमङ्गल रूपले प्रतीत हुने भन्ने पनि अर्थ हुन्छ। शिव र विष्णुको शील विरुद्ध छ भन्नुको तात्पर्य यिनमा विरोध छ भन्ने होइन, अपि तु विष्णु देवगणद्वारा त शिव भूतगणद्वारा घेरिएर रहनुहुन्छ भन्ने स्वभाव बताइएको छ। श्लोकमा आएको प्रायः पदको अर्थ लेख्दै सुबोधिनीकार भन्नुहुन्छ— **प्रायः पदेन शिवस्य न सर्वदा धनप्रदत्वमपि तु मोक्षप्रदत्वमपि** अर्थात् प्रायः पदद्वारा भगवान् शिवले धन मात्र दिने नभई मोक्ष पनि दिनुहुन्छ भन्ने सङ्केत गरिएको छ। यसरी सम्पूर्ण भोगसामग्रीलाई त्यागी एक्लै रहने शिवका भक्तहरू अखण्ड ऐश्वर्यले पूर्ण हुने अनि सम्पूर्ण भोगसामग्री एवं तिनका अधिष्ठात्री लक्ष्मीले पनि युक्त रहने भगवान् विष्णुका भक्तहरू भने अकिञ्चन हुने कसरी भयो होला ? परीक्षित्को मनमा पनि यही महान् सन्देह थियो। सात दिनपछि मृत्यु हुने श्राप पाएका परीक्षित्ले शिवभक्तहरू किन सबै समृद्धिले युक्त हुन्छन् ? भनी तिनको समृद्धिको विषयमा जिज्ञासा गर्नु उपयुक्त छैन। सम्पूर्ण राज्य त्यागी भगवत्कथाको श्रवणमा लागेका राजाले किन यस्तो जिज्ञासा राखे होलान् ? यसको उत्तरमा श्रीसनातन गोस्वामीले परीक्षित्को प्रश्नको विशेष आशय निकाल्नुभएको छ। परीक्षित्ले आफ्ना इष्ट श्रीकृष्णलाई परिपूर्ण परमात्मा सम्झी उहाँमा समर्पित हुन लाग्दा संस्कारवश श्रीशिवलाई सम्झे। वेदहरूले पनि भगवान्कै स्तुति गर्ने हुनाले **ध्यायेदजस्रजं हरिं** अर्थात् हरिको सधैँ ध्यान गर्नुपर्दछ भन्दा उनलाई आशुतोष श्रीशिवको सम्झना भयो। श्रीकृष्णशरणागतिमा अन्य देवताको श्रेष्ठत्व चिन्तन बाधक भएकाले उनले आफ्नो मनको शङ्का तत्काल श्रीशुकदेवको अघि राखे। सनातन गोस्वामी लेख्नुहुन्छ— **श्रीशिवभक्तानां साक्षाद् धनादिविभूतिदर्शनात् श्रीशिवस्यैव उत्कर्षो घटेत इति जिज्ञासा** अर्थात् श्रीशिवका भक्तहरू तत्काल नै समृद्धि आदिले युक्त हुने हुँदा त्यस्ता आशुतोष शिव नै उत्कृष्ट हुनुहुन्छ कि भन्ने परीक्षित्को जिज्ञासा हो। जसको शरणमा गएपछि तत्काल नै सबै दुःखबाट छुट्कारा मिल्दछ, त्यसैलाई श्रेष्ठ

भनिन्छ। शिवशरणमा सबै दुःखको निराकरण भई तत्काल नै सर्वसमृद्धि लाभ भएको देखिने हुनाले उहाँ नै श्रेष्ठ हुन सक्ने परीक्षित्को शङ्का हो। यसको समाधानका लागि यहाँ श्रीशुकदेवले शिव त्रिगुणमय हुनुभएकाले उहाँबाट त्रिगुणात्मक फल प्राप्त हुने अनि श्रीहरि निर्गुण हुनुभएकाले उहाँबाट मोक्ष फल पाइने उत्तर दिनुभएको छ। यसै गरी गुणलाई आश्रय लिएको अवस्थामा शिवले दिएको समृद्धि एवं वरले कहिलेकाहीँ उहाँ स्वयंलाई अप्ठेरोमा पारेको बताउन वृकासुरको कथाप्रसङ्ग पनि सुनाउनुभएको छ। शिव र विष्णु आदि देवता छुट्टाछुट्टै हुनुहुन्छ भने त परमात्मामा पनि भेद हुने भयो, यसबाट उपनिषद्मा बताइएको एउटै परमात्माको सिद्धि पनि भएन भन्ने शङ्का हुन सक्छ। यसको उत्तरमा वंशीधर लेख्नुहुन्छ— **नैतावता सर्वविग्रहावच्छिन्नेशैक्यविधानः** अर्थात् विष्णु भगवान्लाई शिवभन्दा ठुला भनिएबाट परमात्माको सर्वरूपतामा हानि आउँदैन। शिव, विष्णु आदि सबै रूपमा देखिने एउटै परमात्मा हुनुहुन्छ। उपासनाको लागि आ-आफ्ना उपास्यलाई त्यही मूल परमात्मस्वरूप मानी उपासना गर्नुपर्दछ। यसप्रकार यो अध्यायमा शिवलाई त्रिगुणात्मक एवं भगवान् श्रीहरिलाई निर्गुण भनी उहाँमा श्रद्धा दृढ गराइएको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**शिवः शक्तियुतः शश्वत् त्रिलिङ्गो गुणसंवृतः।**
**वैकारिकस्तैजसश्च तामसश्चेत्यहं त्रिधा॥ ३॥**

**पदार्थ—**
**शिवः** = भगवान् शिव
**शश्वत्** = निरन्तर
**शक्तियुतः** = शक्तिले युक्त हुनुहुन्छ
**त्रिलिङ्गः** = तीनथरी अहङ्कारका अधिष्ठाता र
**गुणसंवृतः** = तीन गुणले युक्त हुनुहुन्छ
**वैकारिकः** = वैकारिक
**तैजसः च** = तैजस
**तामसः च** = तामस
**इति** = गरी
**अहं** = अहङ्कार पनि
**त्रिधा** = तीन प्रकारको छ

**वाक्यार्थ—** भगवान् शिव आफ्नो शक्तिले निरन्तर संयुक्त रहनुहुन्छ। सत्त्व आदि गुणयुक्त उहाँ वैकारिक, तैजस र तामस गरी तीनै प्रकारका अहङ्कारको अधिष्ठाता हुनुहुन्छ।

**ततो विकारा अभवन् षोडशामीषु कञ्चन।**
**उपधावन् विभूतीनां सर्वासामश्नुते गतिम्॥ ४॥**

**पदार्थ—**
**ततः** = त्यसबाट
**षोडश** = सोह्रथरी
**विकाराः** = विकारहरू
**अभवन्** = उत्पन्न भए
**अमीषु** = यीमध्ये
**कञ्चन** = कुनै पनि विकारका अधिष्ठातालाई
**उपधावन्** = सेवा गर्नाले (उपासकले)
**सर्वासां** = सम्पूर्ण
**विभूतीनां** = ऐश्वर्यहरूको
**गतिं** = अवस्थालाई
**अश्नुते** = प्राप्त गर्दछ

**वाक्यार्थ—** तीनथरी अहङ्कारबाट नै दश इन्द्रिय, पाँच महाभूत र एक मन गरी सोह्र विकारहरू

उत्पन्न भए। यीमध्ये कसैको पनि अधिष्ठाता देवतालाई उपासना गर्नाले उपासकलाई सबैथरी ऐश्वर्यको प्राप्ति हुन्छ।

**हरिर्हि निर्गुणः साक्षात् पुरुषः प्रकृतेः परः।**
**स सर्वदृगुपद्रष्टा तं भजन् निर्गुणो भवेत्॥ ५॥**

**पदार्थ—**
**हि** = निश्चय नै
**हरिः** = भगवान् श्रीहरि
**निर्गुणः** = निर्गुण
**प्रकृतेः** = प्रकृतिभन्दा
**परः** = पर
**साक्षात्** = साक्षात्
**पुरुषः** = परमपुरुष हुनुहुन्छ
**सः** = उहाँ
**सर्वदृक्** = सर्वज्ञ र
**उपद्रष्टा** = सबैका अन्तःकरणका साक्षी हुनुहुन्छ
**तं** = उहाँलाई
**भजन्** = भज्नाले
**निर्गुणः** = गुणातीत
**भवेत्** = हुन्छ

**वाक्यार्थ—** भगवान् श्रीहरि चाहिँ प्रकृतिभन्दा पर साक्षात् निर्गुण परम पुरुष परमात्मा हुनुहुन्छ। उहाँ सर्वज्ञ र सम्पूर्ण अन्तःकरणका साक्षी हुनुहुन्छ। उहाँको भजन गर्ने व्यक्ति स्वयं पनि गुणातीत हुन्छ।

**निवृत्तेष्वश्वमेधेषु राजा युष्मत्पितामहः।**
**शृण्वन् भगवतो धर्मानपृच्छदिदमच्युतम्॥ ६॥**

**पदार्थ—**
**अश्वमेधेषु** = अश्वमेध यज्ञहरू
**निवृत्तेषु** = समाप्त भएपछि
**युष्मत्पितामहः** = तपाईंका हजुरबुबा
**राजा** = राजा युधिष्ठिरले
**भगवतः** = भगवान् श्रीकृष्णसँग
**धर्मान्** = धर्महरू
**शृण्वन्** = सुन्दासुन्दै
**अच्युतम्** = भगवान् अच्युतलाई
**इदं** = यस्तो
**अपृच्छत्** = प्रश्न गरे

**वाक्यार्थ—** अश्वमेध यज्ञहरू समाप्त भएपछि तपाईंका हजुरबुबा महाराज युधिष्ठिरले भगवान् श्रीकृष्णसँग धर्मोपदेश श्रवण गर्दागर्दै उहाँलाई यही प्रश्न गरे।

**स आह भगवांस्तस्मै प्रीतः शुश्रूषवे प्रभुः।**
**नृणां निःश्रेयसार्थाय योऽवतीर्णो यदोः कुले॥ ७॥**

**पदार्थ—**
**यः** = जो
**नृणां** = मानिसहरूको
**निःश्रेयसार्थाय** = परमकल्याणका लागि
**यदोः** = यदुको
**कुले** = कुलमा
**अवतीर्णः** = अवतार लिनुभएको छ
**सः** = त्यस्ता
**प्रभुः** = सर्वसमर्थ
**प्रीतः** = प्रसन्न
**भगवान्** = भगवान्ले
**शुश्रूषवे** = सुन्न चाहने
**तस्मै** = उनलाई
**आह** = यसो भन्नुभयो

**वाक्यार्थ–** मानिसहरूलाई परमकल्याण प्रदान गर्नकै लागि यदुकुलमा जन्मिनुभएका सर्वसमर्थ भगवान्ले युधिष्ठिरको प्रश्नबाट प्रसन्न हुँदै सुन्न खोजिरहेका उनलाई यसो भन्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**यस्याहमनुगृह्णामि हरिष्ये तद्धनं शनैः।**

**ततोऽधनं त्यजन्त्यस्य स्वजना दुःखदुःखितम्॥ ८॥**

**पदार्थ–**
**अहं** = म
**यस्य** = जसलाई
**अनुगृह्णामि** = अनुग्रह गर्दछु
**शनैः** = बिस्तारै बिस्तारै
**तद्धनं** = त्यसको सम्पत्तिलाई
**हरिष्ये** = हरण गर्दछु
**ततः** = त्यसपछि
**अस्य** = यसका
**स्वजनाः** = आफन्तहरूले
**दुःखदुःखितं** = दुःखै दुःख पाएको
**अधनं** = निर्धन त्यसलाई
**त्यजन्ति** = छाडिदिन्छन्

**वाक्यार्थ–** जसलाई म अनुग्रह गर्न खोज्छु, त्यसको सम्पत्ति म बिस्तार-बिस्तार हरण गरिदिन्छु। निर्धन भई दुःखै दुःख पाएको त्यस व्यक्तिलाई उसका आफन्तहरूले पनि छाडिदिन्छन्।

**स यदा वितथोद्योगो निर्विण्णः स्याद्धनेहया।**

**मत्परैः कृतमैत्रस्य करिष्ये मदनुग्रहम्॥ ९॥**

**पदार्थ–**
**सः** = त्यो व्यक्ति
**यदा** = जब
**धनेहया** = धनको कामनाले
**वितथोद्योगः** = अनेकौं उद्योग गर्दा पनि विफल भई
**निर्विण्णः** = विरक्त
**स्यात्** = हुन्छ
**मत्परैः** = मेरा भक्तहरूसँग
**कृतमैत्रस्य** = सम्बन्ध गाँसेपछि
**मदनुग्रहं** = मेरो अनुग्रह
**करिष्ये** = गर्दछु

**वाक्यार्थ–** त्यो व्यक्ति धनको कामनाले अनेकौं उद्योग गर्दछ, तर ती सबै प्रयत्नहरू विफल हुँदै जान्छन्। यसबाट विरक्त भएको उसले संसारलाई छाडी मेरा भक्तहरूसँग सम्बन्ध गाँस्दछ। यसपछि भने म उसलाई अनुग्रह गर्दछु।

**तद् ब्रह्म परमं सूक्ष्मं चिन्मात्रं सदनन्तकम्।**

**अतो मां सुदुराराध्यं हित्वान्यान् भजते जनः॥ १०॥**

**पदार्थ–**
**परमं** = परम
**सूक्ष्मं** = सूक्ष्म
**सत्** = सद्रूप
**चिन्मात्रं** = चिद्रूप
**अनन्तकं** = अनन्त
**तत्** = त्यो
**ब्रह्म** = परब्रह्मतत्त्व छ
**अतः** = त्यसैले
**सुदुराराध्यं** = आराधना गर्न अत्यन्त कठिन
**मां** = मलाई
**हित्वा** = छाडेर
**जनः** = मानिसले
**अन्यान्** = अरू देवताहरूलाई
**भजते** = सेवा गर्दछ

**वाक्यार्थ–** परब्रह्मतत्त्व परम सूक्ष्म, सत्, चित् र अनन्तरूप छ। त्यसैले अत्यन्त कठिन भएको मेरो आराधनालाई छाडी सामान्य व्यक्तिहरू अन्य देवताहरूको सेवा गर्दछन्।

**ततस्त आशुतोषेभ्यो लब्धराज्यश्रियोद्धताः।**
**मत्ताः प्रमत्ता वरदान् विस्मरन्त्यवजानते॥ ११॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**आशुतोषेभ्यः** = चाँडै खुसी हुने देवताहरूबाट
**लब्धराज्यश्रियोद्धताः** = राज्य, लक्ष्मी आदि पाउनाले उद्धत भएका
**मत्ताः** = मातिएका
**प्रमत्ताः** = प्रमत्त भएका
**ते** = तिनीहरू
**वरदान्** = आफूलाई वर दिनेहरूलाई नै
**विस्मरन्ति** = बिर्सन्छन् र
**अवजानते** = अपमान गर्दछन्

**वाक्यार्थ–** चाँडै प्रसन्न हुने देवताहरूबाट राज्य, सम्पत्ति आदि भौतिक साधनहरू पाएर ती व्यक्तिहरू अत्यन्त उन्मत्त हुन्छन् अनि आफूलाई वर दिने देवतालाई नै बिर्सी उहाँकै अपमान गर्न थाल्दछन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**शापप्रसादयोरीशा ब्रह्मविष्णुशिवादयः।**
**सद्यः शापप्रसादोऽङ्ग शिवो ब्रह्मा न चाच्युतः॥ १२॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय राजा
**ब्रह्मविष्णुशिवादयः** = ब्रह्मा, विष्णु र शिव यी तीन
**शापप्रसादयोः** = श्राप र वरदान दिन
**ईशाः** = समर्थ हुनुहुन्छ
**सद्यः** = तत्काल
**शापप्रसादः** = श्राप र वरदान दिने
**शिवः** = शिवजी र
**ब्रह्मा च** = ब्रह्माजी हुनुहुन्छ भने
**न अच्युतः** = भगवान् विष्णु हुनुहुन्न

**वाक्यार्थ–** हे परीक्षित् ! ब्रह्मा, विष्णु र शिव यी तीनै देवताहरू श्राप र वरदान दिन समर्थ हुनुहुन्छ, तर यीमध्ये ब्रह्मा र शिव चाँडै नै प्रसन्न या रुष्ट भई वरदान या श्राप दिनुहुन्छ भने भगवान् विष्णु यसो गर्नुहुन्न।

**अत्र चोदाहरन्तीममितिहासं पुरातनम्।**
**वृकासुराय गिरिशो वरं दत्त्वाप सङ्कटम्॥ १३॥**

**पदार्थ–**
**अत्र च** = यस विषयमा
**गिरिशः** = भगवान् शिवले
**वृकासुराय** = वृकासुरलाई
**वरं** = वर
**दत्त्वा** = दिएर
**सङ्कटं** = सङ्कटमा
**आप** = प्राप्त हुनुभएको थियो
**इमं** = यस्तो

**पुरातनं** = पुरानो
**इतिहासं** = इतिहास
**उदाहरन्ति** = उदाहरण दिने गर्दछन्

**वाक्यार्थ–** भगवान् शिवले चाँडै वरदान दिने विषयमा उहाँले वृकासुरलाई वर दिँदा आफैँ सङ्कटमा पर्नुभएको घटनालाई उदाहरणको रूपमा बताउने गरिन्छ।

**वृको नामासुरः पुत्रः शकुनेः पथि नारदम्।**
**दृष्ट्वाशुतोषं पप्रच्छ देवेषु त्रिषु दुर्मतिः॥ १४॥**

पदार्थ–
**शकुनेः** = शकुनिको
**पुत्रः** = पुत्र
**दुर्मतिः** = दुष्ट बुद्धि भएको
**वृकः** = वृक
**नाम** = नामको
**असुरः** = असुरले
**पथि** = बाटोमा
**नारदं** = देवर्षि नारदलाई
**दृष्ट्वा** = देखेर
**त्रिषु** = तीन
**देवेषु** = देवताहरूमध्ये
**आशुतोषं** = चाँडै प्रसन्न हुने को हुन् भनी
**पप्रच्छ** = सोध्यो

**वाक्यार्थ–** शकुनिको पुत्र वृक नामको दुष्ट बुद्धि भएको असुर थियो। उसले कहीं जाँदै गर्दा बाटोमा नारदलाई देखेर ब्रह्मा, विष्णु र शिव यी तीन देवताहरूमध्ये चाँडै प्रसन्न हुने देवता को हुन् भनी सोध्यो।

**स आह देवं गिरिशमुपाधावाशु सिद्ध्यसि।**
**योऽल्पाभ्यां गुणदोषाभ्यामाशु तुष्यति कुप्यति॥ १५॥**

पदार्थ–
**सः** = उहाँले
**आह** = भन्नुभयो
**यः** = जो
**अल्पाभ्यां** = थोरै नै
**गुणदोषाभ्यां** = गुण र दोषबाट
**आशु** = चाँडै
**तुष्यति** = प्रसन्न हुनुहुन्छ र
**कुप्यति** = रिसाउनुहुन्छ, त्यस्ता
**गिरिशं** = शङ्कर
**देवं** = भगवान्लाई
**उपाधाव** = आराधना गर
**आशु** = चाँडै नै
**सिद्ध्यसि** = कृतार्थ हुनेछौ

**वाक्यार्थ–** देवर्षि नारदले भन्नुभयो– हे वृकासुर! भगवान् शङ्कर थोरै गुण अथवा थोरै दोषबाट नै चाँडै प्रसन्न पनि हुनुहुन्छ र रिसाउनुहुन्छ पनि। त्यसैले तिमीले उनै आशुतोषको आराधना गर। यसबाट चाँडै नै तिम्रो इच्छा पूरा हुनेछ।

**दशास्यबाणयोस्तुष्टः स्तुवतोर्वन्दिनोरिव।**
**ऐश्वर्यमतुलं दत्त्वा तत आप सुसङ्कटम्॥ १६॥**

पदार्थ–
**वन्दिनोः इव** = वन्दीजनले झैँ
**स्तुवतोः** = स्तुति गरिरहेका
**दशास्यबाणयोः** = रावण र बाणासुरमाथि
**तुष्टः** = प्रसन्न भई

**अतुलं** = अनन्त
**ऐश्वर्यम्** = ऐश्वर्य
**दत्त्वा** = दिएर
**ततः** = त्यसपछि
**सुसङ्कटं** = सङ्कटमा समेत
**आप** = प्राप्त हुनुभएको थियो

**वाक्यार्थ–** रावण र बाणसुरले वन्दीजनले राजाहरूको स्तुति गरे जैँ भगवान् शङ्करको केवल स्तुति मात्र गरेका थिए, यत्तिकैमा प्रसन्न भएका भगवान् शङ्करले उनीहरूलाई अतुल ऐश्वर्य प्रदान गर्नुभएको थियो र पछि त्यही कारणले उहाँ आफैँ सङ्कटमा पर्नुभएको थियो।

**इत्यादिष्टस्तमसुर उपाधावत् स्वगात्रतः।**
**केदार आत्मक्रव्येण जुह्वानोऽग्निमुखं हरम्॥ १७॥**
**देवोपलब्धिमप्राप्य निर्वेदात् सप्तमेऽहनि।**
**शिरोऽवृश्चत् स्वधितिना तत्तीर्थक्लिन्नमूर्धजम्॥ १८॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**आदिष्टः** = आज्ञा पाएको
**असुरः** = त्यो असुरले
**केदारे** = केदार क्षेत्रमा
**आत्मक्रव्येण** = आफ्नो शरीरको मासु काटेर
**अग्निमुखं** = अग्नि नै मुख भएका
**हरं** = भगवान् शङ्करलाई
**जुह्वानः** = हवन गर्दै
**स्वगात्रतः** = आफ्नो शरीरबाट
**तं** = उहाँको
**उपाधावत्** = आराधना गऱ्यो
**देवोपलब्धिं** = भगवान्को दर्शन
**अप्राप्य** = नपाएर
**निर्वेदात्** = दुःखी भई
**सप्तमे** = सातौँ
**अहनि** = दिनमा
**स्वधितिना** = धारिलो हतियारले
**तत्तीर्थक्लिन्नमूर्धजं** = केदार तीर्थमा स्नान गर्नाले कपाल भिजेको
**शिरः** = शिरलाई
**अवृश्चत्** = काट्न लाग्यो

**वाक्यार्थ–** यसप्रकार नारदबाट आज्ञा पाएपछि त्यो असुर केदार क्षेत्रमा गयो। त्यहाँ उसले अग्निलाई नै भगवान् शङ्करको मुख ठानी आफ्नो शरीरका अङ्गहरूबाट मासु काटेर हवन गर्दै उहाँको आराधना गऱ्यो। लगातार छ दिनसम्म यसप्रकार आराधना गर्दा पनि भगवान्को दर्शन प्राप्त नभएपछि दुःखी भई उसले सातौँ दिन केदारतीर्थमा स्नान गरी भिजेकै कपाल भएको शिरलाई धारिलो हतियारले काट्न खोज्यो।

**तदा महाकारुणिको स धूर्जटिर्यथा वयं चाग्निरिवोत्थितोऽनलात्।**
**निगृह्य दोर्भ्यां भुजयोर्न्यवारयत् तत्स्पर्शनाद् भूय उपस्कृताकृतिः॥ १९॥**

**पदार्थ–**
**तदा** = त्यस समयमा
**यथा** = जसरी
**वयं** = (कसैको दुःखबाट) हामीहरू (पग्लिन्छौँ त्यसै गरी)
**महाकारुणिकः** = अत्यन्त कारुणिक
**सः** = उहाँ
**धूर्जटिः च** = भगवान् शङ्कर पनि
**अग्निः इव** = अग्निदेव जैँ
**अनलात्** = अग्निकुण्डबाट
**उत्थितः** = प्रकट हुनुभयो

**दोर्भ्यां** = आफ्ना दुबै हातले
**भुजयोः** = वृकासुरका दुबै हात
**निगृह्य** = समाती
**न्यवारयत्** = निवारण गर्नुभयो
**तत्स्पर्शनात्** = भगवान्को स्पर्श हुनाले
**भूयः** = फेरि
**उपस्कृताकृतिः** = वृकासुरको शरीर पूर्ववत् भयो

**वाक्यार्थ–** जसरी कसैको दुःख देखी हाम्रो मन पग्लिन्छ, त्यसै गरी वृकासुरले टाउको काट्न लागेको देखी महाकारुणिक भगवान् शङ्कर पनि अग्निकुण्डबाट अग्निदेव प्रकट भए झैँ तत्क्षण प्रकट हुनुभयो। त्यसपछि उहाँले आफ्ना दुबै हातले वृकासुरका दुबै हात समातेर टाउको काट्न लागेको वृकासुरलाई रोक्नुभयो। भगवान्को स्पर्शबाट वृकासुरको शरीर जस्ताको त्यस्तै भयो।

**तमाह चाङ्गालमलं वृणीष्व मे यथाभिकामं वितरामि ते वरम्।**
**प्रीयेय तोयेन नृणां प्रपद्यतामहो त्वयात्मा भृशमर्द्यते वृथा॥ २०॥**

**पदार्थ–**
**तं च** = उसलाई
**आह** = भन्नुभयो
**अङ्ग** = हे प्रिय वृकासुर
**अलं अलं** = भयो भयो
**ते** = तिमीलाई
**वरं** = वर
**वितरामि** = दिन्छु
**यथाभिकामं** = इच्छा अनुसार
**मे** = मबाट
**वृणीष्व** = वर माग
**प्रपद्यतां** = शरणमा आएका
**नृणां** = मानिसहरूका लागि
**तोयेन** = जलद्वारा मात्र
**प्रीयेय** = प्रसन्न हुन्छु
**अहो** = आश्चर्य छ
**त्वया** = तिमीद्वारा
**वृथा** = बेकारमा नै
**आत्मा** = आफ्नो शरीर
**भृशं** = बारम्बार
**अर्द्यते** = पीडित भइरहेको छ

**वाक्यार्थ–** उहाँले वृकासुरलाई भन्नुभयो– हे वृकासुर! भयो, अब यो काम छोडिदेऊ, म तिमीलाई वर दिन्छु। आफ्नो इच्छा अनुसार कुनै पनि वर माग। म त आफ्ना शरणमा आएका भक्तहरूप्रति केवल जल चढाउनाले मात्र पनि सन्तुष्ट हुन्छु। तिमीले व्यर्थमा आफ्नो शरीरलाई पीडा दिइरहेका छौ।

**देवं स वव्रे पापीयान् वरं भूतभयावहम्।**
**यस्य यस्य करं शीर्ष्णि धास्ये स म्रियतामिति॥ २१॥**

**पदार्थ–**
**सः** = त्यो
**पापीयान्** = पापिष्ठ असुरले
**देवं** = भगवान्सँग
**यस्य यस्य** = जस-जसको
**शीर्ष्णि** = शिरमाथि
**करं** = हात
**धास्ये** = राखिदिन्छु
**सः** = त्यो
**म्रियताम् इति** = मरोस् भन्ने
**भूतभयावहं** = सम्पूर्ण प्राणीहरूलाई भय दिने
**वरं** = वर
**वव्रे** = माग्यो

**वाक्यार्थ–** त्यो पापिष्ठ वृकासुरले म जस-जसको शिरमाथि हात राखिदिन्छु, त्यो मरिहालोस् भन्ने सम्पूर्ण प्राणीहरूलाई भयभीत गर्ने खालको वर माग्यो।

**तच्छ्रुत्वा भगवान् रुद्रो दुर्मना इव भारत।**

**ओमिति प्रहसंस्तस्मै ददेऽहेरमृतं यथा॥ २२॥**

**पदार्थ–**
**भारत** = हे भरतवंशी परीक्षित्
**तत्** = त्यो कुरा
**श्रुत्वा** = सुनेर
**भगवान्** = भगवान्
**रुद्रः** = शङ्करले
**दुर्मनाः इव** = खिन्न मन भई
**प्रहसन्** = अलि अलि हाँस्दै
**ओम् इति** = यस्तै होस् भनी
**तस्मै** = त्यसलाई
**अहेः** = सर्पलाई
**अमृतं यथा** = अमृत दिए झैं
**ददे** = वर दिनुभयो

**वाक्यार्थ–** हे परीक्षित्! उसको कुरा सुनेर भगवान् शङ्कर अलिकति खिन्न हुनुभयो र पछि हाँस्दै उहाँले सर्पलाई अमृत दिए झैं वृकासुरलाई यस्तै होस् भनी वर दिनुभयो।

**इत्युक्तः सोऽसुरो नूनं गौरीहरणलालसः।**

**स तद्वरपरीक्षार्थं शम्भोर्मूर्ध्नि किलासुरः।**

**स्वहस्तं धातुमारेभे सोऽबिभ्यत् स्वकृताच्छिवः॥ २३॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**उक्तः** = भनिएको
**सः** = त्यो
**असुरः** = असुर
**नूनं** = निश्चय नै
**गौरीहरणलालसः** = गौरीहरण गर्ने इच्छा गरेको
**किल** = निश्चय नै
**सः** = त्यो
**असुरः** = असुरले
**तद्वरपरीक्षार्थं** = त्यो वरको परीक्षा गर्न
**शम्भोः** = भगवान् शङ्करको
**मूर्ध्नि** = शिरमाथि
**स्वहस्तं** = आफ्नो हात
**धातुं** = राख्न
**आरेभे** = थाल्यो
**सः** = ती
**शिवः** = शिवजी
**स्वकृतात्** = आफैँले दिएको वरबाट
**अबिभ्यत्** = डराउनुभयो

**वाक्यार्थ–** यसप्रकार वरदान पाएपछि त्यो असुरको मनमा गौरीहरण गर्ने इच्छा जाग्यो। त्यो असुरले शिवजीले दिएको वरको परीक्षा गर्न उहाँकै शिरमाथि आफ्नो हात राख्न खोज्यो। यसपछि भगवान् शिव आफैँले दिएको वरबाट डराउनुभयो।

**तेनोपसृष्टः सन्त्रस्तः पराधावन् सवेपथुः।**

**यावदन्तं दिवो भूमेः कष्ठानामुदगादुदक्॥ २४॥**

**पदार्थ–**
**तेन** = त्यसद्वारा
**उपसृष्टः** = पिछा गरिएका
**सन्त्रस्तः** = डराएका
**सवेपथुः** = काम्दै
**पराधावन्** = दौडिरहेका रुद्र
**दिवः** = स्वर्गलोक
**भूमेः** = पृथिवीको
**अन्तं यावत्** = अन्तसम्म

**काष्ठानां** = दिशाहरूमध्ये
**उदक्** = उत्तरदिशातर्फ
**उदगात्** = जानुभयो

**वाक्यार्थ–** वृकासुरले पिछा गर्न लागेपछि भगवान् शङ्कर डराउँदै काम्दै स्वर्ग, पृथिवी र दिशाहरूको अन्तसम्म दौडिँदै अन्तमा उत्तरतर्फ लाग्नुभयो।

**अजानन्तः प्रतिविधिं तूष्णीमासन् सुरेश्वराः।**
**ततो वैकुण्ठमगमद् भास्वरं तमसः परम्॥ २५॥**
**यत्र नारायणः साक्षान्न्यासिनां परमा गतिः।**
**शान्तानां न्यस्तदण्डानां यतो नावर्तते गतः॥ २६॥**

**पदार्थ–**
**सुरेश्वराः** = देवताहरू
**प्रतिविधिं** = त्यसको प्रतिकार गर्न
**अजानन्तः** = नजान्नाले
**तूष्णीम्** = चुपचाप
**आसन्** = रहेका थिए
**ततः** = त्यसपछि उहाँ
**यत्र** = जहाँ
**शान्तानां** = शान्त
**न्यस्तदण्डानां** = जगत्लाई अभय दिने
**न्यासिनां** = संन्यासीहरूको
**परमा** = सर्वश्रेष्ठ
**गतिः** = गति हुनुहुने
**साक्षात्** = साक्षात्
**नारायणः** = नारायण हुनुहुन्छ
**गतः** = त्यहाँ गएको व्यक्ति
**यतः** = जहाँबाट
**न आवर्तते** = फर्किँदैन, त्यस्तो
**तमसः** = अन्धकारबाट
**परं** = पर रहेको
**भास्वरं** = प्रकाशमय
**वैकुण्ठं** = वैकुण्ठलोकमा
**अगमत्** = जानुभयो

**वाक्यार्थ–** यो सङ्कटलाई प्रतिकार गर्ने कुनै उपाय नदेखेर देवताहरू चुपचाप भए। यसपछि भगवान् शङ्कर त्यस्तो अन्धकारशून्य प्रकाशमान वैकुण्ठलोकमा जानुभयो, जहाँ सम्पूर्ण जगत्लाई अभय दिने शान्त, संन्यासीहरूका एक मात्र प्राप्तव्य भगवान् नारायण रहनुहुन्छ र जहाँ गएपछि व्यक्ति फेरि संसारमा फर्किँदैन।

**तं तथा व्यसनं दृष्ट्वा भगवान् वृजिनार्दनः।**
**दूरात् प्रत्युदियाद् भूत्वा वटुको योगमायया॥ २७॥**

**पदार्थ–**
**वृजिनार्दनः** = सम्पूर्ण दुःखलाई नष्ट गर्ने
**भगवान्** = भगवान् श्रीहरिले
**तं** = त्यो वृकासुरलाई
**तथा** = भगवान् शङ्करलाई नष्ट गर्ने त्यस्तो
**व्यसनं** = व्यर्थको प्रयास गरिरहेको
**दृष्ट्वा** = देखेर
**योगमायया** = योगमायाद्वारा
**वटुकः** = वटुक
**भूत्वा** = भई
**दूरात्** = टाढैबाट
**प्रत्युदियात्** = नजिक आउनुभयो

**वाक्यार्थ–** भक्तहरूका सम्पूर्ण दुःखलाई नष्ट गर्ने भगवान् श्रीहरिले वृकासुरलाई भगवान् शङ्करलाई दुःख दिन व्यर्थ प्रयास गरिरहेको देख्नुभयो। यसपछि उहाँ योगमायाद्वारा वटुकको वेष

धारण गरी टाढैबाट बिस्तारै वृकासुरको नजिक आउनुभयो।

**मेखलाजिनदण्डाक्षैस्तेजसाग्निरिव ज्वलन्।**

**अभिवादयामास च तं कुशपाणिर्विनीतवत्॥ २८॥**

| **पदार्थ—** | **अग्निः इव** = अग्नि झैँ | **तं** = त्यो वृकासुरलाई |
|---|---|---|
| **मेखलाजिनदण्डाक्षैः** = मेखला, मृगचर्म, दण्ड र रुद्राक्ष धारण गरी | **ज्वलन्** = चम्किरहेका | **अभिवादयामास** = अभिवादन गरे |
| **तेजसा च** = शरीरको कान्तिबाट | **कुशपाणिः** = हातमा कुश धारण गर्ने ती वटुकले | |
| | **विनीतवत्** = नम्र झैँ भई | |

**वाक्यार्थ—** ती वटुक मेखला, मृगचर्म, दण्ड र रुद्राक्षको मालाद्वारा सुशोभित थिए। हातमा कुश धारण गरेका र शरीरको कान्तिद्वारा अग्नि झैँ चम्किएका तिनले नम्र भए झैँ झुकेर वृकासुरलाई अभिवादन गरे।

**श्रीभगवानुवाच** (भगवान् श्रीहरिले भन्नुभयो)

**शाकुनेय भवान् व्यक्तं श्रान्तः किं दूरमागतः।**

**क्षणं विश्रम्यतां पुंस आत्मायं सर्वकामधुक्॥ २९॥**

| **पदार्थ—** | **किं** = के | **अयं** = यो |
|---|---|---|
| **शाकुनेय** = हे शकुनिपुत्र वृकासुर | **दूरं** = टाढाबाट | **आत्मा** = शरीरले नै |
| **भवान्** = हजुर | **आगतः** = आउनुभएको हो | **सर्वकामधुक्** = सबै कामनालाई पूरा गर्दछ |
| **व्यक्तं** = निश्चय नै | **क्षणं** = केही क्षण | |
| **श्रान्तः** = थाकेको देखिनुहुन्छ | **विश्रम्यतां** = विश्राम गर्नुहोस् | |
| | **पुंसः** = व्यक्तिको | |

**वाक्यार्थ—** हे शकुनिपुत्र वृकासुर! हजुर धेरै नै थाकेको देखिनुहुन्छ, के टाढाबाट आउनुभएको हो? केही क्षण विश्राम गर्नुहोस्, किनभने प्राणीको लागि शरीर नै सबै कामना पूरा गर्ने साधन हो। (यसलाई धेरै कष्ट नदिनुहोस्।)

**यदि नः श्रवणायालं युष्मद्व्यवसितं विभो।**

**भण्यतां प्रायशः पुम्भिर्धृतैः स्वार्थान् समीहते॥ ३०॥**

| **पदार्थ—** | **युष्मद्व्यवसितं** = हजुरको इच्छा | **अलं** = योग्य छ भने |
|---|---|---|
| **विभो** = हे समर्थ वृकासुर | **नः** = हामीले | **भण्यताम्** = भन्नुहोस् |
| **यदि** = यदि | **श्रवणाय** = सुन्न | **प्रायशः** = प्रायः जसो मानिसहरू |

**धृतैः** = आफ्ना सहायक
**पुम्भिः** = मानिसहरूद्वारा नै
**स्वार्थान्** = आफ्नो प्रयोजन
**समीहते** = पूरा गर्न चाहन्छन्

**वाक्यार्थ–** हे वृकासुर ! यद्यपि हजुर समर्थ हुनुहुन्छ, तैपनि हामीहरू हजुरको इच्छा सुन्न योग्य छौँ भने त्यो कुरा बताउनुहोस्। किनभने संसारमा सबैजसो मानिसहरू आफ्ना सहयोगीहरूबाट आफ्नो इच्छा पूरा गर्न समर्थ भएका देखिन्छन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं भगवता पृष्टो वचसामृतवर्षिणा ।**
**गतक्लमोऽब्रवीत् तस्मै यथापूर्वमनुष्ठितम् ॥ ३१ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**भगवता** = भगवान्द्वारा
**अमृतवर्षिणा** = अमृत वर्षने
**वचसा** = वचनद्वारा
**पृष्टः** = सोधिएको
**गतक्लमः** = थकाइ हटेको उसले
**तस्मै** = ती वटुकलाई
**यथापूर्वम्** = पहिलेदेखि गरेको
**अनुष्ठितम्** = आफ्नो काम
**अब्रवीत्** = बतायो

**वाक्यार्थ–** यसप्रकार भगवान्ले अमृतसमानको वचनले सोध्नुभएपछि उहाँको कुरा सुनी थकाइ हटेको त्यसले ब्रह्मचारी वेषधारी ती भगवान्लाई आफूले तपस्या गरेदेखि अहिलेसम्मको सम्पूर्ण घटना बतायो।

**श्रीभगवानुवाच** (भगवान्ले भन्नुभयो)

**एवं चेत् तर्हि तद्वाक्यं न वयं श्रद्दधीमहि ।**
**यो दक्षशापात् पैशाच्यं प्राप्तः प्रेतपिशाचराट् ॥ ३२ ॥**

**पदार्थ–**
**एवं चेत्** = यस्तो हो भने
**तर्हि** = त्यसो भए
**वयं** = हामीहरू
**तद्वाक्यं** = उनको वाक्यलाई
**न श्रद्दधीमहि** = विश्वास गर्दैनौँ
**यः** = जो
**प्रेतपिशाचराट्** = प्रेत र पिशाचहरूका स्वामी
**दक्षशापात्** = दक्षको श्रापबाट
**पैशाच्यं** = आफैँ पिशाचसमान
**प्राप्तः** = बनेका छन्

**वाक्यार्थ–** यदि यस्तै कुरा हो भने हामीहरू त उनको वरदान दिने भनाइ पत्याउँदैनौँ। किनभने दक्षका श्रापबाट उनी स्वयं पिशाचसमान भई प्रेत र पिशाचहरूका स्वामी भएका छन्।

**यदि वस्तत्र विश्रम्भो दानवेन्द्र जगद्गुरौ ।**
**तर्ह्यङ्गाशु स्वशिरसि हस्तं न्यस्य प्रतीयताम् ॥ ३३ ॥**

**पदार्थ–**
**दानवेन्द्र** = हे दानवराज
**यदि** = यदि

**वः** = हजुरको
**तत्र** = ती
**जगद्गुरौ** = जगद्गुरु भनिने शिवजीमा
**विश्रम्भः** = विश्वास छ भने
**अङ्ग** = हे प्रिय पुरुष
**तर्हि** = त्यसो भए
**आशु** = अहिले नै
**स्वशिरसि** = आफ्नो शिरमाथि
**हस्तं** = हात
**न्यस्य** = राखी
**प्रतीयताम्** = विश्वास गर्नुहोस्

**वाक्यार्थ–** हे दानवराज ! यदि अरु पनि हजुर तिनीलाई जगद्गुरु ठानी उनको कुरा पत्याउनुहुन्छ भने अहिले नै हजुर आफ्नो शिरमाथि हात राखी त्यो वरदानको परीक्षा गर्नुहोस्।

**यद्यसत्यं वचः शम्भोः कथञ्चिद् दानवर्षभ।**
**तदैनं जह्यसद्वाचं न यद् वक्तानृतं पुनः॥ ३४॥**

**पदार्थ–**
**दानवर्षभ** = हे दानवराज
**यदि** = यदि
**कथञ्चित्** = कुनै पनि रूपले
**शम्भोः** = शङ्करको
**वचः** = वचन
**असत्यं** = असत्य भयो भने
**तदा** = त्यस वेला
**असद्वाचं** = असत्यवादी
**एनं** = यिनलाई
**जहि** = नष्ट गरिदिनुहोस्
**यत्** = जसबाट
**पुनः** = फेरि
**अनृतं** = असत्य
**न वक्ता** = बोल्नै नसकून्

**वाक्यार्थ–** हे दानवराज ! यदि कुनै पनि रूपमा शङ्करको वचन असत्य साबित भयो भने असत्यवादी तिनलाई अहिले नै नष्ट गरिहाल्नुहोस्। जसबाट फेरि यिनले असत्य बोल्न नसकून्।

**इत्थं भगवतश्चित्रैर्वचोभिः स सुपेशलैः।**
**भिन्नधीर्विस्मृतः शीर्ष्णि स्वहस्तं कुमतिर्व्यधात्॥ ३५॥**

**पदार्थ–**
**इत्थं** = यसप्रकार
**भगवतः** = भगवान्को
**सुपेशलैः** = मिठा
**चित्रैः** = विचित्र
**वचोभिः** = वचनहरूद्वारा
**भिन्नधीः** = बुद्धिशक्ति नष्ट भएको र
**विस्मृतः** = सबै कुरा बिर्सिएको
**कुमतिः** = दुष्टबुद्धि
**सः** = त्यस वृकासुरले
**शीर्ष्णि** = आफ्नो टाउकोमा
**स्वहस्तं** = आफ्नो हात
**व्यधात्** = राख्यो

**वाक्यार्थ–** यसप्रकार भगवान् श्रीहरिका मिठा एवं विचित्र वचनहरूद्वारा दुष्टबुद्धि त्यसको बुद्धिशक्ति नष्ट भयो र उसले सबै कुरा बिर्सियो। यसपछि उसले आफ्नै टाउकोमा आफ्नो हात राख्यो।

**अथापतद् भिन्नशिराः व्रजाहत इव क्षणात्।**
**जयशब्दो नमःशब्दः साधुशब्दोऽभवद् दिवि॥ ३६॥**

**पदार्थ–**
**अथ** = यसपछि
**भिन्नशिराः** = शिर फुटेको त्यो

**व्रजाहतः इव** = वज्रप्रहार भए झैँ
**क्षणात्** = तत्काल नै
**अपतत्** = ढल्यो
**दिवि** = आकाशमा
**जयशब्दः** = जय शब्द
**नमःशब्दः** = नमः शब्द र
**साधुशब्दः** = साधु-साधु भन्ने शब्द
**अभवत्** = हुन थाल्यो

**वाक्यार्थ–** त्यसपछि वज्रप्रहार भए झैँ तत्काल नै त्यस दुष्टको शिर फुट्यो र ऊ त्यहीँ ढल्यो। आकाशबाट जय, नमः र साधु-साधु जस्ता शब्दहरू सुनिन थाले।

**मुमुचुः पुष्पवर्षाणि हते पापे वृकासुरे।**
**देवर्षिपितृगन्धर्वा मोचितः सङ्कटाच्छिवः॥ ३७॥**

**पदार्थ–**
**पापे** = पापी
**वृकासुरे** = वृकासुर
**हते** = नष्ट भएपछि
**देवर्षिपितृगन्धर्वाः** = देवता, ऋषि, पितृ र गन्धर्वहरूले
**पुष्पवर्षाणि** = पुष्पवर्षा
**मुमुचुः** = गर्न थाले
**शिवः** = भगवान् शङ्कर पनि
**सङ्कटात्** = सङ्कटबाट
**मोचितः** = मुक्त हुनुभयो

**वाक्यार्थ–** पापी वृकासुर नष्ट भएपछि देवता, ऋषि, पितृ र गन्धर्वहरूले त्यहाँ पुष्पवर्षा गर्न थाले। अनि भगवान् शिव पनि सङ्कटमुक्त हुनुभयो।

**मुक्तं गिरिशमभ्याह भगवान् पुरुषोत्तमः।**
**अहो देव महादेव पापोऽयं स्वेन पाप्मना॥ ३८॥**
**हतः को नु महत्स्वीश जन्तुर्वै कृतकिल्बिषः।**
**क्षेमी स्यात् किमु विश्वेशे कृतागस्को जगद्गुरौ॥ ३९॥**

**पदार्थ–**
**पुरुषोत्तमः** = पुरुषोत्तम
**भगवान्** = भगवान्ले
**मुक्तं** = सङ्कटमुक्त हुनुभएका
**गिरिशं** = शिवजीलाई
**अभ्याह** = यसो भन्नुभयो
**अहो** = अहो
**देव** = हे भगवान्
**महादेव** = महादेव
**अयं** = यो
**पापः** = पापी
**स्वेन** = आफ्नै
**पाप्मना** = पापबाट
**हतः** = मारियो
**ईश** = हे ईश्वर
**वै** = निश्चय नै
**महत्सु** = महापुरुषहरूमाथि
**कृतकिल्बिषः** = अपराध गर्ने
**कः नु** = कुन चाहिँ
**जन्तुः** = प्राणी
**क्षेमी** = सुखी
**स्यात्** = हुन सक्ला र
**जगद्गुरौ** = जगत्का नै गुरु
**विश्वेशे** = विश्वेश्वर हजुरमाथि
**कृतागस्कः** = अपराध गर्ने त
**किमु** = झन् कसरी हुन सक्छ र

**वाक्यार्थ–** सङ्कटबाट मुक्त हुनुभएका शिवजीलाई पुरुषोत्तम भगवान्ले भन्नुभयो– हे भगवान् महादेव ! यो पापी आफ्नै पापको कारणले मारियो। हे ईश्वर ! महापुरुषहरूमाथि अपराध गर्ने कुन चाहिँ व्यक्ति सुखी हुन सक्छ र ? त्यसमाथि संसारका नै गुरु विश्वेश्वर हजुरमाथि अपराध

गर्नेको त के कुरा ?

**य एवमव्याकृतशक्त्युदन्वतः परस्य साक्षात् परमात्मनो हरेः ।**
**गिरित्रमोक्षं कथयेच्छृणोति वा विमुच्यते संसृतिभिस्तथारिभिः ॥ ४० ॥**

| पदार्थ– | | |
|---|---|---|
| **यः** = जसले | **परस्य** = प्रकृतिभन्दा पर | **कथयेत्** = भन्छ |
| **एवं** = यसप्रकार | **साक्षात्** = साक्षात् | **शृणोति वा** = अथवा सुन्छ भने |
| **अव्याकृतशक्त्युदन्वतः** = मन र वाणीभन्दा पर रहेको अनन्त शक्तिका समुद्र हुनुभएका | **परमात्मनः** = परमात्मा | **संसृतिभिः** = संसारबन्धनबाट |
| | **हरेः** = भगवान् श्रीहरिको | **तथा** = त्यस्तै |
| | **गिरित्रमोक्षं** = शङ्करलाई सङ्कटबाट छुटाउने चरित्र | **अरिभिः** = शत्रुहरूबाट समेत |
| | | **विमुच्यते** = मुक्त हुन्छ |

**वाक्यार्थ–** भगवान्‌को शक्ति मन र वाणीको सीमाभन्दा पर छ र उहाँ अनन्त शक्तिका समुद्र हुनुहुन्छ। प्रकृतिभन्दा पर रहेका साक्षात् परमात्मा भगवान् श्रीहरिको यो शङ्करलाई सङ्कटबाट मुक्त गर्ने लीलाचरित्र जसले सुन्छ वा सुनाउँछ त्यो व्यक्ति संसारबन्धनबाट र शत्रुहरूबाट समेत मुक्त हुन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**
**रुद्रमोक्षणं नामाष्टाशीतितमोऽध्यायः ॥ ८८ ॥**

# अथैकोननवतितमोऽध्यायः

## भृगु ऋषिबाट त्रिदेवको परीक्षा र भगवान्‌को कृपाले अर्जुनले मृत ब्राह्मण बालकलाई ल्याउनु

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**सरस्वत्यास्तटे राजन्नृषयः सत्रमासत।**
**वितर्कः समभूत् तेषां त्रिष्वधीशेषु को महान्॥ १॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**सरस्वत्याः** = सरस्वती नदीको
**तटे** = किनारमा
**ऋषयः** = ऋषिहरू
**सत्रं** = यज्ञ
**आसत** = गरिरहेका थिए
**तेषां** = तिनीहरूको मनमा
**त्रिषु** = तीन
**अधीशेषु** = देवताहरूमध्ये
**कः** = को
**महान्** = सर्वश्रेष्ठ हुनुहुन्छ भनी
**वितर्कः** = वितर्क
**समभूत्** = भयो

**वाक्यार्थ–** हे परीक्षित् ! सरस्वती नदीको किनारमा ऋषिहरू यज्ञ गरिरहेका थिए। तिनीहरूको मनमा तीन देवताहरूमध्ये को सर्वश्रेष्ठ हुनुहुन्छ भन्ने शङ्का उत्पन्न भयो।

**तस्य जिज्ञासया ते वै भृगुं ब्रह्मसुतं नृप।**
**तज्ज्ञप्त्यै प्रेषयामासुः सोऽभ्यगाद् ब्रह्मणः सभाम्॥ २॥**

**पदार्थ–**
**नृप** = हे परीक्षित्
**वै** = निश्चय नै
**तस्य** = यसको
**जिज्ञासया** = जिज्ञासाले
**ते** = तिनीहरूले
**ब्रह्मसुतं** = ब्रह्माजीका पुत्र
**भृगुं** = भृगुलाई
**तज्ज्ञप्त्यै** = यो कुरा जान्न
**प्रेषयामासुः** = पठाए
**सः** = ती भृगु
**ब्रह्मणः** = ब्रह्माजीको
**सभां** = सभामा
**अभ्यगात्** = गए

**वाक्यार्थ–** हे परीक्षित् ! यस विषयमा जिज्ञासा गरी तिनीहरूले ब्रह्माजीका पुत्र भृगुलाई यो कुरा जान्न पठाए। ती भृगु पहिले ब्रह्माजीको सभामा गए।

**न तस्मै प्रह्वणं स्तोत्रं चक्रे सत्त्वपरीक्षया।**
**तस्मै चुक्रोध भगवान् प्रज्वलन् स्वेन तेजसा॥ ३॥**

**पदार्थ–**
**सत्त्वपरीक्षया** = धैर्य आदिको परीक्षा गर्न
**तस्मै** = ती ब्रह्माजीलाई
**प्रह्वणं** = अभिवादन
**स्तोत्रं** = स्तुति

**न चक्रे** = गरेनन्
**स्वेन** = आफ्नो
**तेजसा** = तेजद्वारा
**प्रज्वलन्** = चम्किरहेका
**भगवान्** = भगवान् ब्रह्मा
**तस्मै** = उनीमाथि
**चुक्रोध** = रिसाउनुभयो

**वाक्यार्थ–** भृगुले ब्रह्माजीको धैर्य आदिको परीक्षा गर्न उहाँलाई अभिवादन र स्तुति पनि गरेनन्। त्यसपछि आफ्नो तेजद्वारा चम्किरहनुभएका ब्रह्माजी उनीमाथि रिसाउनुभयो।

**स आत्मन्युत्थितं मन्युमात्मजायात्मना प्रभुः।**
**अशीशमद् यथा वह्निं स्वयोन्या वारिणात्मभूः॥ ४॥**

**पदार्थ–**
**सः** = ती
**प्रभुः** = सर्वसमर्थ
**आत्मभूः** = ब्रह्माजीले
**आत्मजाय** = आफ्ना पुत्रका निम्ति
**आत्मनि** = आफूभित्र
**उत्थितं** = उठेको
**मन्युम्** = क्रोधलाई
**आत्मना** = आफैँले
**अशीशमत्** = शमन गर्नुभयो
**यथा** = जसरी
**स्वयोन्या** = आफू (आगो)बाट उत्पन्न भएको
**वारिणा** = जलले
**वह्निं** = आगोलाई (निभाइदिन्छ)

**वाक्यार्थ–** ब्रह्माजी सर्वसमर्थ हुनुहुन्थ्यो, तर उहाँले भृगुलाई आफ्नै पुत्र भन्ने जानी आफूभित्र उठेको क्रोधलाई शान्त गर्नुभयो। जसरी आगोबाट उत्पन्न भएको जलले आगोलाई शान्त गरिदिन्छ।

**टिप्पणी-** **अग्नेरापः** अर्थात् आगोबाट जल उत्पन्न भएको हो भन्ने श्रुतिवचन पाइन्छ।

**ततः कैलासमगमत् स तं देवो महेश्वरः।**
**परिरब्धुं समारेभ उत्थाय भ्रातरं मुदा॥ ५॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**सः** = ती भृगु
**कैलासं** = कैलासमा
**अगमत्** = गए
**देवः** = महादेव
**महेश्वरः** = भगवान् शङ्करजीले
**मुदा** = प्रसन्नतापूर्वक
**उत्थाय** = उठेर
**तं** = ती
**भ्रातरं** = भाइसमान भृगुलाई
**परिरब्धुं** = अङ्कमाल गर्न
**समारेभे** = खोज्नुभयो

**वाक्यार्थ–** त्यसपछि ती भृगु कैलास लोकमा गए। आफ्ना भाइसमान भृगु आएको देखी प्रसन्नतापूर्वक उठेर भगवान् शङ्करले उनलाई अङ्कमाल गर्न खोज्नुभयो।

**नैच्छत् त्वमस्युत्पथग इति देवश्चुकोप ह।**
**शूलमुद्यम्य तं हन्तुमारेभे तिग्मलोचनः॥ ६॥**

**पदार्थ—**
**त्वं** = तिमी
**उत्पथगः** = स्वेच्छाचारी
**असि** = छौ
**इति** = यसो भनी
**न ऐच्छत्** = (उनले अङ्कमाल गर्न) चाहेनन्
**ह** = निश्चय नै
**देवः** = भगवान् शङ्कर
**चुकोप** = रिसाउनुभयो
**तिग्मलोचनः** = क्रोधले टेढो नजर भएका शिवजीले
**शूलं** = त्रिशूल
**उद्यम्य** = उठाएर
**तं** = तिनलाई
**हन्तुं** = मार्न
**आरेभे** = खोज्नुभयो

**वाक्यार्थ—** भगवान् शङ्करले अङ्कमाल गर्न खोज्दा भृगुले तिमी स्वेच्छाचारी छौ भनी अङ्कमाल गर्न चाहेनन्। यसबाट भगवान् शङ्कर असाध्यै रिसाउनुभयो र क्रोधले आँखा टेढा बनाउँदै उहाँले आफ्नो त्रिशूल उठाएर भृगुलाई मार्न तम्सिनुभयो।

**पतित्वा पादयोर्देवी सान्त्वयामास तं गिरा।**
**अथो जगाम वैकुण्ठं यत्र देवो जनार्दनः॥ ७॥**

**पदार्थ—**
**देवी** = माता सतीले
**पादयोः** = चरणमा
**पतित्वा** = परेर
**गिरा** = मधुर वचनले
**तं** = उहाँलाई
**सान्त्वयामास** = शान्त गराउनुभयो
**अथो** = यसपछि
**यत्र** = जहाँ
**जनार्दनः** = जनार्दन
**देवः** = भगवान् हुनुहुन्छ, त्यो
**वैकुण्ठं** = वैकुण्ठमा
**जगाम** = गए

**वाक्यार्थ—** भगवती सतीदेवीले शिवजीको चरण समाती उहाँलाई मधुर वचनले शान्त गराउनुभयो। यसपछि भृगु ऋषि भगवान् नारायणको निवासस्थान वैकुण्ठमा गए।

**शयानं श्रिय उत्सङ्गे पदा वक्षस्यताडयत्।**
**तत उत्थाय भगवान् सह लक्ष्म्या सतां गतिः॥ ८॥**
**स्वतल्पादवरुह्याथ ननाम शिरसा मुनिम्।**
**आह ते स्वागतं ब्रह्मन् निषीदात्रासने क्षणम्॥**
**अजानतामागतान् वः क्षन्तुमर्हथ नः प्रभो॥ ९॥**

**पदार्थ—**
**श्रियः** = लक्ष्मीको
**उत्सङ्गे** = काखमा
**शयानं** = सुतिरहनुभएका भगवान्लाई
**पदा** = खुट्टाले
**वक्षसि** = छातीमा
**अताडयत्** = हिर्काए
**ततः** = त्यसपछि
**सतां** = सत्पुरुषहरूका
**गतिः** = प्राप्तव्य
**भगवान्** = भगवान्
**लक्ष्म्या सह**= लक्ष्मीसँग
**उत्थाय** = उठेर
**स्वतल्पात्** = आफ्नो शेषशय्याबाट
**अवरुह्य** = ओर्लिई
**अथ** = त्यसपछि

**शिरसा** = शिरले
**मुनिं** = मुनिलाई
**ननाम** = नमस्कार गर्नुभयो
**आह** = उहाँले भन्नुभयो
**ब्रह्मन्** = हे ब्रह्मरूप भृगु
**ते** = हजुरलाई
**स्वागतं** = स्वागत छ
**अत्र** = यहाँ
**आसने** = आसनमा
**क्षणं** = केही क्षण
**निषीद** = बस्नुहोस्
**प्रभो** = हे ब्राह्मणदेव
**आगतान्** = यहाँ आउनुभएका
**वः** = हजुरलाई
**अजानतां** = नजान्ने
**नः** = हामीलाई
**क्षन्तुं** = क्षमा दिन
**अर्हथ** = योग्य हुनुहुन्छ

**वाक्यार्थ–** वैकुण्ठमा गई भृगुले भगवती लक्ष्मीजीको काखमा सुतिरहनुभएका भगवान् नारायणको छातीमा आफ्ना खुट्टाले प्रहार गरे। त्यसपछि सत्पुरुषहरूका एक मात्र प्राप्तव्य भगवान् लक्ष्मीसँगै त्यहाँबाट उठ्नुभयो र आफ्नो शेषशय्याबाट ओर्लिई उहाँले शिर झुकाई भृगुलाई प्रणाम गर्नुभयो। यसपछि उहाँले भन्नुभयो– हे ब्रह्मरूप ऋषि ! हजुरलाई स्वागत छ, यहाँ आसनमा केही क्षण बस्नुहोस्। हजुर आउनुभएको थाहा नपाउनाले मैले स्वागत गर्न सकिनँ। मलाई हजुरले क्षमा गरिदिनुहोस्।

**अतीव कोमलौ तात चरणौ ते महामुने।**
**इत्युक्त्वा विप्रचरणौ मर्दयन् स्वेन पाणिना ॥ १० ॥**

**पदार्थ–**
**महामुने** = हे महामुनि
**तात** = प्रिय भृगु
**ते** = हजुरका
**चरणौ** = चरण
**अतीव** = अत्यन्त
**कोमलौ** = कोमल छन्
**इति** = यस्तो
**उक्त्वा** = भनी
**स्वेन** = आफ्नो
**पाणिना** = हातले
**विप्रचरणौ** = भृगुका चरणलाई
**मर्दयन्** = सुम्सुम्याउन थाल्नुभयो

**वाक्यार्थ–** हे प्रिय मुनि भृगु ! हजुरका दुबै चरण अत्यन्त कोमल छन् भन्दै भगवान्ले ती भृगुका चरणलाई आफ्ना हातले सुम्सुम्याउनुभयो।

**पुनीहि सहलोकं मां लोकपालांश्च मद्गतान्।**
**पादोदकेन भवतस्तीर्थानां तीर्थकारिणा ॥ ११ ॥**
**अद्याहं भगवँल्लक्ष्म्या आसमेकान्तभाजनम्।**
**वत्स्यत्युरसि मे भूतिर्भवत्पादहतांहसः ॥ १२ ॥**

**पदार्थ–**
**तीर्थानां** = तीर्थहरूलाई पनि
**तीर्थकारिणा** = तीर्थ बनाउने
**भवतः** = हजुरको
**पादोदकेन** = चरणजलद्वारा
**सहलोकं** = सम्पूर्ण लोकसहित
**मां** = मलाई र
**मद्गतान्** = मसँग रहेका
**लोकपालान् च** = लोकपालहरूलाई पनि
**पुनीहि** = पवित्र गर्नुहोस्
**भगवन्** = हे भगवान् भृगु

| | | |
|---|---|---|
| **अद्य** = आज | आश्रय | **मे** = मेरो |
| **अहं** = म | **आसं** = भएँ | **उरसि** = वक्षस्थलमा |
| **लक्ष्म्याः** = लक्ष्मीको | **भवत्पादहतांहसः** = हजुरको | **भूतिः** = लक्ष्मी |
| **एकान्तभाजनं** = एक मात्र | चरणस्पर्शद्वारा पाप नष्ट भएको | **वत्स्यति** = सधैँ निवास गर्नेछिन् |

**वाक्यार्थ–** हे भगवान् भृगु ! हजुरको चरणजल सम्पूर्ण तीर्थलाई पनि तीर्थ बनाउन समर्थ छ। त्यसद्वारा मेरो वैकुण्ठलोक, म र सम्पूर्ण लोकपालहरूलाई पनि पवित्र गराउनुहोस्। म आज लक्ष्मीको एक मात्र आश्रय भएको छु, किनभने हजुरको चरणद्वारा सम्पूर्ण पाप नष्ट भएको मेरो वक्षस्थलमा लक्ष्मी सधैँ निवास गर्नेछिन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं ब्रुवाणे वैकुण्ठे भृगुस्तन्मन्द्रया गिरा।**
**निर्वृतस्तर्पितस्तूष्णीं भक्त्युत्कण्ठोऽश्रुलोचनः॥ १३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **वैकुण्ठे** = भगवान् विष्णुले | **गिरा** = वाणीद्वारा | **अश्रुलोचनः** = आँखाभरि आँसु भएका |
| **एवं** = यस्तो | **निर्वृतः** = अत्यन्त खुसी र | **भृगुः** = भृगु |
| **ब्रुवाणे** = भनिरहँदा | **तर्पितः** = तृप्त भएका | **तूष्णीम्** = चुप (लागे) |
| **तन्मन्द्रया** = उहाँको गम्भीर | **भक्त्युत्कण्ठः** = भक्तिद्वारा उत्कण्ठित | |

**वाक्यार्थ–** भगवान् विष्णुले यस्तो भनेपछि उहाँको गम्भीर वाणी सुनेर भृगु अत्यन्त खुसी र तृप्त भए। भक्तिद्वारा उत्कण्ठित भएका र आँखाभरि आँसु भएका तिनी केही नबोली चुप लागिरहे।

**पुनश्च सत्रमाव्रज्य मुनीनां ब्रह्मवादिनाम्।**
**स्वानुभूतमशेषेण राजन् भृगुरवर्णयत्॥ १४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **राजन्** = हे राजा परीक्षित् | **ब्रह्मवादिनां** = ब्रह्मवादी | **स्वानुभूतं** = आफ्नो अनुभवलाई |
| **पुनः च** = फेरि | **मुनीनां** = मुनिहरूको | **अशेषेण** = पूर्णरूपमा |
| **भृगुः** = भृगु ऋषि | **सत्रं** = यज्ञमा | **अवर्णयत्** = वर्णन गरे |
| | **आव्रज्य** = आएर | |

**वाक्यार्थ–** यसपछि भृगु ऋषि फर्किई ती ब्रह्मज्ञानी ऋषिहरूकै यज्ञस्थलमा आइपुगे र आफूले अनुभव गरेको कुरा उनले पूर्णरूपमा ती सबैलाई सुनाए।

**तन्निशम्याथ मुनयो विस्मिता मुक्तसंशयाः।**
**भूयांसं श्रद्दधुर्विष्णुं यतः शान्तिर्यतोऽभयम्॥ १५॥**

**पदार्थ–**
**अथ** = यसपछि
**तत्** = त्यो (प्रसङ्ग)
**निशम्य** = सुनेर
**विस्मिताः** = आश्चर्यचकित र
**मुक्तसंशयाः** = संशयमुक्त
**मुनयः** = मुनिहरूले
**यतः** = जहाँबाट
**शान्तिः** = शान्ति
**यतः** = जहाँबाट
**अभयं** = अभय (प्राप्त हुन्छ, त्यस्ता)
**विष्णुं** = विष्णु भगवान्लाई
**भूयांसं** = बढीभन्दा बढी
**श्रद्दधुः** = श्रद्धा गर्न थाले

**वाक्यार्थ–** भृगुबाट त्यस्तो वर्णन सुनेर सबै मुनिहरू आश्चर्यचकित भए र उनीहरूको संशय पनि नष्ट भयो। ती सबैले शान्ति र अभयका एक मात्र उद्‌गम उनै भगवान् विष्णुलाई नै सर्वश्रेष्ठ मानी श्रद्धा गर्न थाले।

**धर्मः साक्षाद् यतो ज्ञानं वैराग्यं च तदन्वितम्।**
**ऐश्वर्यं चाष्टधा यस्माद् यशश्चात्ममलापहम्॥ १६॥**
**मुनीनां न्यस्तदण्डानां शान्तानां समचेतसाम्।**
**अकिञ्चनानां साधूनां यमाहुः परमां गतिम्॥ १७॥**
**सत्त्वं यस्य प्रिया मूर्तिर्ब्राह्मणास्त्विष्टदेवताः।**
**भजन्त्यनाशिषः शान्ता यं वा निपुणबुद्धयः॥ १८॥**
**त्रिविधाकृतयस्तस्य राक्षसा असुराः सुराः।**
**गुणिन्या मायया सृष्टाः सत्त्वं तत्तीर्थसाधनम्॥ १९॥**

**पदार्थ–**
**यतः** = जहाँबाट
**साक्षात्** = साक्षात्
**धर्मः** = धर्म
**ज्ञानं** = ज्ञान
**वैराग्यं च** = वैराग्य
**तदन्वितं** = त्यससँगै
**अष्टधा** = आठ प्रकारका
**ऐश्वर्यं च** = सिद्धिहरू समेत
**यस्मात्** = जहाँबाट
**आत्ममलापहं** = चित्तको मललाई नष्ट गर्ने
**यशः च** = यश पनि प्राप्त हुन्छ
**यं** = जसलाई
**न्यस्तदण्डानां** = दण्ड त्यागेका (सम्पूर्ण लोकलाई अभय दिने)
**शान्तानां** = शान्त
**समचेतसां** = समदर्शी
**मुनीनां** = मुनिहरूको र
**अकिञ्चनानां** = निष्किञ्चन
**साधूनां** = साधुहरूको
**परमां** = सर्वश्रेष्ठ
**गतिं** = आश्रय
**आहुः** = भन्दछन्
**सत्त्वं** = सत्त्व गुण नै
**यस्य** = जसको
**प्रिया** = प्रिय
**मूर्तिः** = स्वरूप हो
**ब्राह्मणाः तु** = ब्राह्मणहरू चाहिँ
**इष्टदेवताः** = इष्टदेवता हुन्
**अनाशिषः** = निष्काम
**शान्ताः** = शान्त
**निपुणबुद्धयः वा** = विवेकसम्पन्न व्यक्तिहरूले
**यं** = जसलाई
**भजन्ति** = भज्दछन्
**तस्य** = उहाँकै
**गुणिन्या** = त्रिगुणात्मिका
**मायया** = मायाद्वारा

**राक्षसाः** = राक्षस
**असुराः** = असुर र
**सुराः** = देवता
**त्रिविधाकृतयः** = यी तीनथरी भिन्नै आकृतिहरू
**सृष्टाः** = रचिएका हुन्
**सत्त्वं** = सत्त्वमयी मूर्ति नै
**तत्तीर्थसाधनम्** = उहाँको प्राप्तिको साधन हो

**वाक्यार्थ–** जहाँबाट साक्षात् धर्म, ज्ञान, वैराग्य, आठ प्रकारका सिद्धिहरू र चित्तको मललाई नष्ट गर्ने यश पनि प्राप्त हुन्छ, जसलाई दण्ड त्यागेका, सम्पूर्ण लोकलाई अभय दिने समदर्शी, शान्तचित्त मुनिहरूको र निष्किञ्चन साधुहरूको सर्वश्रेष्ठ आश्रय भनी बताउँछन्, त्यस्ता भगवान्को स्वरूप शुद्ध सत्त्वमय छ र ब्राह्मणहरू नै उहाँका इष्टदेवता हुन्। शान्त एवं निष्काम व्यक्तिहरू, त्यसै गरी विवेकसम्पन्न बुद्धिमान् मानिसहरूले पनि उहाँलाई भजन गर्दछन्। त्रिगुणात्मिका मायाले राक्षसी, आसुरी र दैवी गरी उहाँका तीनथरी आकृतिहरू बनाएकी छिन्। तीमध्ये सत्त्वमयी मूर्ति नै उहाँको प्राप्तिको साधन हो।

**विवरण–** यस प्रसङ्गमा तीन देवतामध्ये श्रेष्ठ देवता को हुन्? भन्ने विषयमा ऋषिहरूले परीक्षापूर्वक निर्णय गर्नुभएको बताइएको छ। सरस्वती नदीको किनारमा यज्ञ गरिरहेका ऋषिहरूलाई श्रेष्ठ देवता को हुन्? भन्ने जिज्ञासा भयो। कर्म गरिरहेको वेलामा देवताको श्रेष्ठता सम्बन्धी जिज्ञासा किन चाहियो? भन्ने शङ्का हुँदा भनिन्छ– यो कर्मसमर्पणसम्बन्धी जिज्ञासा थियो। कर्म गरिसकेपछि त्यसको फल परमात्मामा अर्पण गर्नुपर्दछ भन्ने शास्त्रीय विधान छ। ऋषिहरूका पिता भएकाले ब्रह्मा श्रेष्ठ हुनुहुन्छ, त्यस्ता आफ्नै पितामा कर्मफल अर्पण गर्ने हो कि? भन्ने एकथरी सन्देह हो। यज्ञस्वरूप हुनुभएकाले यज्ञको फल श्रीविष्णुलाई अर्पण गर्ने हो कि? भन्ने अर्को सन्देह हो। यसै गरी ज्ञानका उपदेश गर्ने गुरु भएकाले महादेवमा पो कर्मफल अर्पण गर्ने हो कि? भन्ने अर्को थरी शङ्का हो। यसरी कर्मको फल कसलाई चढाउने भन्ने विषयलाई लिएर देवताको श्रेष्ठता सम्बन्धी विचार आयो। जो सर्वश्रेष्ठ हुन्छ, सम्पूर्ण कर्मको फल उसैलाई चढाउनुपर्दछ भन्ने निश्चय भएपछि ऋषिहरूले सबै देवताहरूको परीक्षा गरी निर्णय गर्ने सल्लाह गरे। **महर्षीणां भृगुः** (श्रीमद्भगवद्गीता १०।२५) अर्थात् ऋषिहरूमध्ये भृगु सर्वश्रेष्ठ भएकाले ती ऋषिहरूले उनैलाई प्रतिनिधि बनाए। वल्लभाचार्य लेख्नुहुन्छ– **सर्वैः ज्ञानात्मिका ब्रह्मशक्तिः भृगौ समारोपिता ततः स परब्रह्माविष्टो जातः** अर्थात् सबै ऋषिहरूले आफ्नो ज्ञानरूप ब्रह्मशक्ति भृगुलाई दिए, त्यसपछि भृगु ब्रह्मतेजका कारणले स्वयं परब्रह्ममा पुगे। यही भएकाले उनले संसारको श्रेष्ठ एवं उपास्य देवताहरूलाई पनि परीक्षा गरे। ब्रह्मा, शङ्कर र विष्णुको अपमान गर्दा पनि त्यसको दोषले उनलाई छोएन, किनभने त्यस समयमा उनी शरीरलाई बिर्सी परब्रह्मभावमा पुगेका थिए।

श्रेष्ठताको निश्चय गुणहरूको आँकलनद्वारा नै हुने गर्दछ। त्रिदेवमध्ये को श्रेष्ठ भनेर छुट्याउनको लागि पनि उहाँहरूमा कति–कति गुणहरू छन् भनी विचार गर्नुपर्दछ। वंशीधर लेख्नुहुन्छ– **सद्गुणानां मध्ये सर्वावस्थासु क्षोभाभावो महान्** अर्थात् गुणहरूमध्ये पनि सुखदुःख जस्ता विभिन्न विरोधी परिस्थितिहरूमा समेत समान रूपले रहनु या त्यसद्वारा क्षुब्ध अथवा विक्षिप्त नहुनु मुख्य हुन्छ। यही विचारले भृगु श्रेष्ठताको परीक्षा गर्न तत्पर हुनुभयो। उहाँले पहिला ब्रह्माजीको परीक्षा गर्नुभयो। ब्रह्मा भृगुका पिता भएकाले भृगुले उहाँको आदर गर्नुपर्ने हो,

तर त्यो नगर्दा ब्रह्माजी क्षुब्ध हुनुहुन्छ कि हुनुहुन्न विचार गर्न भृगुले उहाँलाई प्रणाम गर्नुभएन। यो तिरस्कारद्वारा ब्रह्माजीलाई अत्यन्त रिस उठ्यो, तर जब उहाँले भृगु आफ्नै पुत्र भएको देख्नुभयो त उहाँले त्यो क्रोधलाई शान्त गर्नुभयो। ब्रह्मतेजद्वारा नै ब्रह्मतेज शान्त हुन्छ, त्यसैले भृगुमा रहेको विशेष ब्रह्मतेजले गर्दा ब्रह्माजीको ब्रह्मतेज शान्त भयो। यसरी ब्रह्माजीमा अपमान गर्दा विक्षेप आएको पनि देखियो अनि उहाँले परब्रह्ममा आविष्ट भएका भृगुलाई छोरा भन्ने ठानी शरीरमा नै आत्मबुद्धि गरेको पनि देखियो र उहाँको श्रेष्ठता सिद्ध भएन। यसपछि भगवान् शङ्करको परीक्षा गर्न भृगु प्रवृत्त भए। उनको मनोभावको चित्रण गर्दै टीकाकारहरू लेख्छन्— भोगका सामग्रीहरूले युक्त रहने विष्णुभन्दा विषयभोगले रहित एकान्तवासी शङ्कर नै श्रेष्ठ हुनुहोला भन्ने भृगुको भाव थियो। भगवान् विष्णु कहिल्यै भोगमा आसक्त हुनुहुन्न, तर भृगुले भगवान्मा अनावश्यक शङ्का गरेका थिए। उनी यही भावनाका कारण विष्णुकहाँ नगई सीधै शङ्करकहाँ पुगे। शङ्कर महादेव हुनुभएकाले उहाँ आफूलाई सत्कार नगर्नेप्रति पनि क्रोधित हुनुहुन्न। भृगु आएको देखेपछि उहाँ उठ्नुभयो र आफैँ उनको सत्कार गरी अङ्कमाल गर्न तत्पर हुनुभयो। यो सब देखेपछि भृगुले सामान्य अनादरले मात्र शङ्करको परीक्षा हुन नसक्ने ठानी गाली गरेर नै उहाँको अनादर गर्नुभयो। यसपछि भने शिवको रौद्ररूप देखापर्‍यो। आफूले स्वागत गर्न तयार भएको वेलामा जथाभावी बोली आफ्नै अपमान गर्ने ? भनी रिसाउँदै शङ्करले त्रिशूल उठाउनुभयो। त्यसपछि भृगुजी विष्णुजीको परीक्षा गर्न वैकुण्ठ जानुभयो। शङ्करलाई त वाणीले मात्र अपराध गरिएको थियो, त्यसैले विष्णुको परीक्षा गर्न शारीरिक रूपले नै अपराध गरियो, तर शान्तिका अधिपति भगवान् विष्णु छातीमैँ लात्ताले हान्दा पनि विचलित हुनुभएन। उहाँले देखाएको क्षोभरहित नम्र व्यवहारबाट उहाँ सर्वश्रेष्ठ सिद्ध हुनुभयो। भगवान् विष्णुले आफूलाई लात्ताले हान्ने भृगुलाई पनि परम आदर गरेपछि सबै ऋषिहरूका लागि भगवान् विष्णु अग्रपूज्य हुनुभयो।

तीन देवताबिचको यो पूज्यापूज्य विचारचाहिँ तीन गुणलाई लिएर भएको हो। तमोगुणलाई र रजोगुणलाई स्वीकार गर्ने रुद्र र ब्रह्माभन्दा सत्त्वगुणलाई स्वीकार गर्ने विष्णु अवश्य श्रेष्ठ हुनुहुन्छ। तर त्रिगुणातीत परमात्माको चाहिँ ब्रह्मा, विष्णु र रुद्रसित तुलना हुन सक्दैन। यहाँ त्रिगुणातीत परम तत्त्वलाई हरि भनिएको छ— **हरिर्हि निर्गुणः साक्षात्** (भागवत १०।८८।५)। भागवतमा अन्यत्र (३।१४।२८, ४।६।४२-४९, ८।७।२१-३४) भगवान् शिवलाई नै गुणातीत परम तत्त्वका रूपमा स्तुति गरिएको छ। यसैले यो त्रिदेव परीक्षाको तात्पर्य गुणलाई लिँदा सत्त्वगुणाश्रयी देवताको श्रेष्ठत्व प्रतिपादन गर्नु हो, शिवजीको महत्त्व कम देखाउनु होइन। वास्तवमा गुणातीत परमात्मालाई भक्त साधकहरूले श्रीहरि वा सदाशिव जुनसुकै रूपमा उपासना गर्न सक्छन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं सारस्वता विप्रा नृणां संशयनुत्तये।**
**पुरुषस्य पदाम्भोजसेवया तद्गतिं गताः॥ २०॥**

**पदार्थ–**
**नृणां** = सामान्य मानिसहरूको
**संशयनुत्तये** = शङ्कालाई नष्ट गर्न
**एवं** = यसप्रकार (परीक्षा गरेका)
**सारस्वताः** = सरस्वती नदीको तटमा रहेका
**विप्राः** = ती ब्राह्मणहरूले
**पुरुषस्य** = परमपुरुष भगवान्‌को
**पदाम्भोजसेवया** = चरणकमलको सेवाद्वारा
**तद्गतिं** = भगवद्गतिलाई
**गताः** = प्राप्त गरे

**वाक्यार्थ–** सरस्वती नदीको तटमा रहेका ती मुनिहरूले सामान्य प्राणीहरूको शङ्कालाई नष्ट गर्ने उद्देश्यले नै यो परीक्षा गरेका थिए। ती सबै ब्राह्मणहरूले परम पुरुष भगवान्‌को चरणकमलको सेवाद्वारा भगवद्गतिलाई नै प्राप्त गरे।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**इत्येतन्मुनितनयास्यपद्मगन्धपीयूषं भवभयभित् परस्य पुंसः।**
**सुश्लोकं श्रवणपुटैः पिबत्यभीक्ष्णं पान्थोऽध्वभ्रमणपरिश्रमं जहाति ॥ २१ ॥**

**पदार्थ–**
**इति एतत्** = यो
**परस्य** = परमपुरुष
**पुंसः** = परमात्माको
**भवभयभित्** = संसारभयलाई नष्ट गर्ने
**सुश्लोकं** = प्रशंसनीय
**मुनितनयास्यपद्मगन्धपीयूषं** = मुनि व्यासका पुत्र शुकदेवको मुखकमलबाट निस्किएको सुगन्धित अमृतधारालाई
**श्रवणपुटैः** = कानरूपी दुनाद्वारा
**अभीक्ष्णं** = निरन्तर
**पिबति** = पिउँछ
**पान्थः** = त्यो बटुवाले
**अध्वभ्रमणपरिश्रमं** = संसाररूपी मार्गमा भ्रमण गरेको थकाइलाई
**जहाति** = छोडिदिन्छ

**वाक्यार्थ–** परमपुरुष परमात्माको यो प्रशंसनीय कथाचरित्रले सम्पूर्ण संसारभयलाई नष्ट गरिदिन्छ। व्यासपुत्र शुकदेवको मुखकमलबाट निस्किएको सुगन्धित अमृतधारासमानको यसलाई दुबै कानरूपी दुनाद्वारा जसले निरन्तर पिउँछ, त्यस व्यक्तिले बारम्बार जन्ममृत्युरूपी संसारचक्रमा भ्रमण गरेको थकाइलाई तत्काल त्यागिदिन्छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एकदा द्वारवत्यां तु विप्रपत्न्याः कुमारकः।**
**जातमात्रो भुवं स्पृष्ट्वा ममार किल भारत ॥ २२ ॥**

**पदार्थ–**
**भारत** = हे भरतवंशी परीक्षित्
**एकदा** = कुनै समयमा
**किल** = निश्चय नै
**द्वारवत्यां तु** = द्वारकामा
**विप्रपत्न्याः** = ब्राह्मणपत्नीको
**कुमारकः** = पुत्र
**जातमात्रः** = जन्मिनासाथ
**भुवं** = पृथिवीलाई
**स्पृष्ट्वा** = छुनेबित्तिकै
**ममार** = मरिहाल्यो

**वाक्यार्थ–** हे परीक्षित् ! कुनै समयमा द्वारका नगरीमा एउटी ब्राह्मणीको छोरो जन्मिएर

पहिलोचोटि पृथिवीमा छुनेबित्तिकै मरिहाल्यो।

**विप्रो गृहीत्वा मृतकं राजद्वार्युपधाय सः।**

**इदं प्रोवाच विलपन्नातुरो दीनमानसः॥ २३॥**

**पदार्थ–**
**मृतकं** = मरेको छोरालाई
**गृहीत्वा** = लिएर
**राजद्वारि** = राजाको ढोकामा
**उपधाय** = राखी
**विलपन्** = विलाप गर्दै
**आतुरः** = दुःखी
**दीनमानसः** = खिन्न भएका
**सः** = ती
**विप्रः** = ब्राह्मणले
**इदं** = यस्तो
**प्रोवाच** = भने

**वाक्यार्थ–** ती ब्राह्मणले आफ्नो मरेको छोरालाई लिई राजाको ढोकामा राखे र दुःखी भई खिन्नतापूर्वक विलाप गर्दै यसो भने।

**ब्रह्मद्विषः शठधियो लुब्धस्य विषयात्मनः।**

**क्षत्रबन्धोः कर्मदोषात् पञ्चत्वं मे गतोऽर्भकः॥ २४॥**

**पदार्थ–**
**मे** = मेरो
**अर्भकः** = पुत्र
**ब्रह्मद्विषः** = ब्राह्मणद्वेषी
**शठधियः** = धूर्तबुद्धि
**लुब्धस्य** = लोभी र
**विषयात्मनः** = विषयमा आसक्त
**क्षत्रबन्धोः** = क्षत्रियहरूको
**कर्मदोषात्** = कर्मदोषका कारण
**पञ्चत्वं** = मृत्युमा
**गतः** = प्राप्त भयो

**वाक्यार्थ–** मेरो यो पुत्र यी ब्राह्मणद्वेषी, धूर्तबुद्धि, लोभी र विषयमा आसक्त क्षत्रिय राजाहरूको कर्मदोषका कारण मऱ्यो।

**हिंसाविहारं नृपतिं दुःशीलमजितेन्द्रियम्।**

**प्रजा भजन्त्यः सीदन्ति दरिद्रा नित्यदुःखिताः॥ २५॥**

**पदार्थ–**
**हिंसाविहारं** = हिंसापरायण
**दुःशीलं** = शीलरहित
**अजितेन्द्रियं** = जितेन्द्रिय नभएका
**नृपतिं** = राजालाई
**भजन्त्यः** = सेवा गर्ने
**दरिद्राः** = दरिद्र
**नित्यदुःखिताः** = निरन्तर दुःखी भइरहने
**प्रजाः** = प्रजाहरू
**सीदन्ति** = महान् सङ्कटमा फस्छन्

**वाक्यार्थ–** जो राजाहरू हिंसापरायण छन्, शीलरहित छन् एवं जितेन्द्रिय छैनन्, त्यस्तालाई सेवा गर्ने प्रजाहरू निरन्तर दुःखी र दरिद्र त भइरहन्छन्, उनीहरू महान् सङ्कटमा पनि फस्छन्।

**एवं द्वितीयं विप्रर्षिस्तृतीयं त्वेवमेव च।**

**विसृज्य स नृपद्वारि तां गाथां समगायत॥ २६॥**

**पदार्थ–**
**सः** = ती
**विप्रर्षिः** = ब्राह्मणले
**एवं** = यसप्रकार
**द्वितीयं** = दोस्रो छोरो मर्दा
**एवं एव** = त्यसै गरी
**तृतीयं च** = तेस्रो छोरोलाई पनि
**नृपद्वारि** = राजाकै ढोकामा
**विसृज्य** = छाडी
**तां** = त्यही
**गाथां** = कुरा
**समगायत** = भने

**वाक्यार्थ–** ती ब्राह्मणको दोस्रो छोरो र तेस्रो छोरो मर्दासमेत तिनले त्यसै गरी राजाकै ढोकामा आफ्नो छोरोलाई राखी विलाप गर्दै त्यही कुरा दोहोऱ्याइरहन लागे।

**तामर्जुन उपश्रुत्य कर्हिचित् केशवान्तिके।**
**परेते नवमे बाले ब्राह्मणं समभाषत॥ २७॥**

**पदार्थ–**
**नवमे** = नवौँ
**बाले** = पुत्र पनि
**परेते** = मरेपछि
**कर्हिचित्** = कुनै दिन
**केशवान्तिके** = भगवान् श्रीकृष्णको नजिक आएका
**अर्जुनः** = अर्जुनले
**तां** = त्यो बिलौना
**उपश्रुत्य** = सुनी
**ब्राह्मणं** = ती ब्राह्मणलाई
**समभाषत** = यसो भने

**वाक्यार्थ–** नवौँ पुत्र पनि मरेपछि ती ब्राह्मणले त्यसै गरी विलाप गरिरहेको समयमा भगवान्को नजिक रहेका अर्जुनले त्यो सुनी ब्राह्मणलाई यसो भने।

**किं स्विद् ब्रह्मंस्त्वन्निवासे इह नास्ति धनुर्धरः।**
**राजन्यबन्धुरेते वै ब्राह्मणाः सत्र आसते॥ २८॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्राह्मण
**इह** = यो
**त्वन्निवासे** = तिमी बस्ने ठाउँमा
**किं स्वित्** = के
**धनुर्धरः** = धनुर्धारी वीर
**न अस्ति** = कोही पनि छैन
**एते** = यी
**वै** = निश्चय नै
**राजन्यबन्धुः** = नाममात्रका राजा हुन्
**ब्राह्मणाः** = ब्राह्मण झैँ
**सत्रे** = यज्ञमा
**आसते** = रहेका छन्

**वाक्यार्थ–** हे ब्राह्मण ! तिमी बस्ने यो नगरीमा के कोही पनि धनुर्धारी वीर छैन ? के यी सबै राजाहरू यज्ञ मात्रै गरिरहने ब्राह्मणहरू जस्ता नाममात्रका क्षत्रिय हुन् ?

**धनदारात्मजापृक्ता यत्र शोचन्ति ब्राह्मणाः।**
**ते वै राजन्यवेषेण नटा जीवन्त्यसुम्भराः॥ २९॥**

**पदार्थ–**
**यत्र** = जहाँ
**धनदारात्मजापृक्ताः** = धन, स्त्री, पुत्र आदिसँग वियोग भई
**ब्राह्मणाः** = ब्राह्मणहरू
**शोचन्ति** = शोक गर्दछन्
**वै** = निश्चय नै
**ते** = तिनीहरू
**राजन्यवेषेण** = क्षत्रियको वेषले

| | | |
|---|---|---|
| **असुम्भराः** = केवल पेट पाल्ने | **नटाः** = नट हुँ | **जीवन्ति** = बाँच्दछन् |

**वाक्यार्थ–** जुन राज्यमा ब्राह्मणहरू धन, स्त्री, पुत्र आदिसँग वियोग भएर शोक गर्दछन्, त्यस राज्यमा क्षत्रिय राजाहरू होइनन्, अपि तु त्यस्तो वेष बनाई पेट पाल्ने नटहरू हुन्।

**अहं प्रजाः वां भगवन् रक्षिष्ये दीनयोरिह।**
**अनिस्तीर्णप्रतिज्ञोऽग्निं प्रवेक्ष्ये हतकल्मषः॥ ३०॥**

| पदार्थ– | | |
|---|---|---|
| **भगवन्** = हे भगवान् | **वां** = दुबै पतिपत्नीको | **हतकल्मषः** = यसबाट म पाप नष्ट भएको हुनका लागि |
| **अहं** = म | **प्रजाः** = सन्ततिलाई | **अग्निं** = अग्निभित्र |
| **इह** = यहाँ | **रक्षिष्ये** = रक्षा गर्नेछु | **प्रवेक्ष्ये** = प्रवेश गर्नेछु |
| **दीनयोः** = दुःखी | **अनिस्तीर्णप्रतिज्ञः** = प्रतिज्ञा पूरा गर्न नसक्दा | |

**वाक्यार्थ–** हे भगवान्! दुःखी हुनुभएका हजुरहरू दुबै पतिपत्नीहरूको आगामी सन्ततिलाई म रक्षा गर्नेछु। यदि मैले आफ्नो प्रतिज्ञा पूरा गर्न सकिनँ भने सारा पाप नष्ट गर्न अग्निभित्र प्रवेश गर्नेछु।

**ब्राह्मण उवाच** (ब्राह्मणले भने)

**सङ्कर्षणो वासुदेवः प्रद्युम्नो धन्विनां वरः।**
**अनिरुद्धोऽप्रतिरथो न त्रातुं शक्नुवन्ति यत्॥ ३१॥**
**तत्कथं नु भवान् कर्म दुष्करं जगदीश्वरैः।**
**त्वं चिकीर्षसि बालिश्यात् तन्न श्रद्दध्महे वयम्॥ ३२॥**

| पदार्थ– | | |
|---|---|---|
| **सङ्कर्षणः** = बलराम | **यत्** = जसलाई | **कर्म** = कामलाई |
| **वासुदेवः** = वसुदेवपुत्र श्रीकृष्ण | **त्रातुं** = जोगाउन | **बालिश्यात्** = मूर्खतावश |
| **धन्विनां** = धनुर्धारीहरूमध्ये | **न शक्नुवन्ति** = सक्दैनन् | **कथं नु** = कसरी |
| **वरः** = श्रेष्ठ | **त्वं भवान्** = त्यस्ता तिमी | **चिकीर्षसि** = गर्न खोज्छौ |
| **प्रद्युम्नः** = प्रद्युम्न | **जगदीश्वरैः** = जगदीश्वरहरूद्वारा पनि | **तत्** = यो कुरालाई |
| **अप्रतिरथः** = अद्वितीय योद्धा | **दुष्करं** = गर्न नसकिने | **वयं** = हामीहरू |
| **अनिरुद्धः** = अनिरुद्ध | **तत्** = त्यो | **न श्रद्दध्महे** = पत्याउँदैनौं |

**वाक्यार्थ–** मेरो पुत्रलाई बलराम, श्रीकृष्ण, श्रेष्ठ धनुर्धारी प्रद्युम्न र अद्वितीय योद्धा अनिरुद्धले समेत जोगाउन सकेनन्, यस्ता जगदीश्वरहरूले समेत गर्न नसकेको कामलाई केवल मूर्खतावश तिमी कसरी गर्न सक्छौ? यो तिम्रो कुरालाई हामीहरू पत्याउँदैनौं।

**अर्जुन उवाच** (अर्जुनले भने)

**नाहं सङ्कर्षणो ब्रह्मन् न कृष्णः कार्ष्णिरेव च ।**

**अहं वा अर्जुनो नाम गाण्डीवं यस्य वै धनुः ॥ ३३ ॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्राह्मण
**अहं** = म
**सङ्कर्षणः न** = बलराम होइन
**कृष्णः न** = कृष्ण होइन
**कार्ष्णिः एव च** = न त प्रद्युम्न नै हुँ
**अहं वै** = म निश्चय नै
**अर्जुनः नाम** = अर्जुन हुँ
**यस्य वै** = जसको
**धनुः** = धनु
**गाण्डीवम्** = गाण्डीव छ

**वाक्यार्थ–** हे ब्राह्मण ! म बलराम, श्रीकृष्ण र प्रद्युम्न होइन, अपितु अर्जुन हुँ। जसको गाण्डीव नामक धनु छ।

**मावमंस्था मम ब्रह्मन् वीर्यं त्र्यम्बकतोषणम् ।**

**मृत्युं विजित्य प्रधने आनेष्ये ते प्रजां प्रभो ॥ ३४ ॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्राह्मण
**मम** = मेरो
**त्र्यम्बकतोषणं** = भगवान् त्रिनेत्र शङ्करलाई पनि प्रसन्न बनाउने
**वीर्यं** = पराक्रमलाई
**मा अवमंस्थाः** = तिरस्कार नगर्नुहोस्
**प्रभो** = हे प्रभु
**प्रधने** = युद्धमा
**मृत्युं** = मृत्युदेवलाई पनि
**विजित्य** = जितेर
**ते** = हजुरको
**प्रजां** = सन्तानलाई
**आनेष्ये** = फिर्ता ल्याउनेछु

**वाक्यार्थ–** हे ब्राह्मण ! भगवान् शङ्करलाई पनि सन्तुष्ट बनाउने मेरो पराक्रमको तिरस्कार नगर्नुहोस्। मैले युद्धमा साक्षात् मृत्युदेवलाई पनि जिती हजुरका सन्ततिलाई फिर्ता ल्याउनेछु।

**एवं विश्रम्भितो विप्रः फाल्गुनेन परन्तप ।**

**जगाम स्वगृहं प्रीतः पार्थवीर्यं निशामयन् ॥ ३५ ॥**

**पदार्थ–**
**परन्तप** = हे शत्रुपीडक परीक्षित्
**एवं** = यसप्रकार
**फाल्गुनेन** = अर्जुनद्वारा
**विश्रम्भितः** = विश्वस्त पारिएका
**प्रीतः** = प्रसन्न
**विप्रः** = ती ब्राह्मण
**पार्थवीर्यं** = अर्जुनको पराक्रमलाई
**निशामयन्** = वर्णन गर्दै
**स्वगृहं** = आफ्नो घरतिर
**जगाम** = गए

**वाक्यार्थ–** हे परीक्षित् ! यसप्रकार अर्जुनद्वारा विश्वस्त बनाइएका ती ब्राह्मण उनको पराक्रमको वर्णन गर्दै प्रसन्नतापूर्वक आफ्नो घर फर्किए।

**प्रसूतिकाल आसन्ने भार्याया द्विजसत्तमः ।**

**पाहि पाहि प्रजां मृत्योरित्याहार्जुनमातुरः ॥ ३६ ॥**

**पदार्थ—**
**भार्यायाः** = आफ्नी पत्नीको
**प्रसूतिकाले** = प्रसवसमय
**आसन्ने** = नजिक हुँदा
**आतुरः** = आत्तिएका
**द्विजसत्तमः** = ती ब्राह्मणले
**अर्जुनं** = अर्जुनलाई
**मृत्योः** = मृत्युको मुखबाट
**प्रजां** = मेरो सन्ततिलाई
**पाहि पाहि इति** = जोगाउनुहोस्, जोगाउनुहोस् भनी
**आह** = भने

**वाक्यार्थ—** जब पत्नीको प्रसवकाल नजिक आयो, तब ती ब्राह्मण अत्यन्त आत्तिए र उनले अर्जुनसँग हजुरले मृत्युबाट मेरो सन्ततिलाई बचाइदिनुहोस् भनी प्रार्थना गरे।

**स उपस्पृश्य शुच्यम्भो नमस्कृत्य महेश्वरम्।**
**दिव्यान्यस्त्राणि संस्मृत्य सज्यं गाण्डीवमाददे ॥ ३७ ॥**

**पदार्थ—**
**सः** = उनले
**शुचि** = पवित्र
**अम्भः** = जल
**उपस्पृश्य** = आचमन गरी
**महेश्वरं** = भगवान् शङ्करलाई
**नमस्कृत्य** = नमस्कार गरेर
**दिव्यानि** = दिव्य
**अस्त्राणि** = अस्त्रहरू
**संस्मृत्य** = सम्झिई
**सज्यं** = ताँदो चढाइएको
**गाण्डीवं** = गाण्डीव धनु
**आददे** = हातमा लिए

**वाक्यार्थ—** उनले शुद्ध जल आचमन गरे र भगवान् शङ्करलाई नमस्कार गरे। त्यसपछि दिव्य अस्त्रहरूको स्मरण गरी ताँदो चढाइएको गाण्डीव धनु हातमा लिए।

**न्यरुणत् सूतिकागारं शरैर्नानास्त्रयोजितैः।**
**तिर्यगूर्ध्वमधः पार्थश्चकार शरपञ्जरम्॥ ३८ ॥**

**पदार्थ—**
**पार्थः** = अर्जुनले
**नानास्त्रयोजितैः** = अनेक अस्त्रमन्त्रद्वारा अभिमन्त्रित
**शरैः** = बाणहरूद्वारा
**सूतिकागारं** = प्रसवगृहलाई
**न्यरुणत्** = घेरिदिए
**तिर्यक्** = उनले अगलबगलमा
**ऊर्ध्वम्** = माथि र
**अधः** = तल
**शरपञ्जरं** = बाणैबाणको पिँजडा
**चकार** = बनाइदिए

**वाक्यार्थ—** यसपछि उनले अनेक अस्त्रमन्त्रहरूद्वारा अभिमन्त्रित बाणहरूले प्रसवगृहलाई चारैतिरबाट ढाकिदिए। तल, माथि र अगलबगलमा बाणै बाणले उनले पिँजडा नै बनाइदिए।

**ततः कुमारः सञ्जातो विप्रपत्न्या रुदन् मुहुः।**
**सद्योऽदर्शनमापेदे सशरीरो विहायसा॥ ३९॥**

**पदार्थ—**
**ततः** = त्यसपछि
**विप्रपत्न्याः** = ब्राह्मणीको गर्भबाट
**कुमारः** = शिशु
**सञ्जातः** = उत्पन्न भयो

**मुहुः** = बारम्बार
**रुदन्** = रोइरहेको त्यो
**सशरीरः** = शरीरसहित नै
**विहायसा** = आकाशमार्गद्वारा
**सद्यः** = तत्काल
**अदर्शनं** = अदृश्य
**आपेदे** = भयो

**वाक्यार्थ–** त्यसपछि ती ब्राह्मणकी पत्नीको गर्भबाट एउटा शिशु पैदा भयो र बारम्बार रुँदारुँदै त्यो बालक शरीरैसहित आकाशमा बिलायो।

**तदाह विप्रो विजयं विनिन्दन् कृष्णसन्निधौ।**
**मौढ्यं पश्यत मे योऽहं श्रद्दधे क्लीबकत्थनम्॥ ४०॥**

**पदार्थ–**
**तदा** = त्यस समयमा
**विप्रः** = ती ब्राह्मणले
**कृष्णसन्निधौ** = श्रीकृष्णकै नजिकमा
**विजयं** = अर्जुनलाई
**विनिन्दन्** = निन्दा गर्दै
**आह** = भने
**मे** = मेरो
**मौढ्यं** = मूढतालाई
**पश्यत** = हेर
**यः** = जुन
**अहं** = मैले
**क्लीबकत्थनं** = नपुंसकको फूर्तिलाई
**श्रद्दधे** = विश्वास गरे

**वाक्यार्थ–** त्यस समयमा ती ब्राह्मणले श्रीकृष्णकै समीपमा अर्जुनको निन्दा गर्दै भने– हेर, म कति मूर्ख रहेछु, मैले यस्तो नपुंसकको फूर्तिलाई पनि पत्याएँ।

**न प्रद्युम्नो नानिरुद्धो न रामो न च केशवः।**
**यस्य शेकुः परित्रातुं कोऽन्यस्तदवितेश्वरः॥ ४१॥**

**पदार्थ–**
**यस्य** = जसको
**परित्रातुं** = रक्षा गर्न
**न प्रद्युम्नः** = न प्रद्युम्न
**न अनिरुद्धः** = न अनिरुद्ध
**न रामः** = न बलराम
**न च केशवः** = न त कृष्णले नै
**शेकुः** = सके
**तदविता** = त्यसको रक्षा गर्न
**ईश्वरः** = समर्थ
**अन्यः** = अर्को
**कः** = को नै होला र

**वाक्यार्थ–** प्रद्युम्न, अनिरुद्ध, बलराम र श्रीकृष्णले समेत जसको रक्षा गर्न सकेनन्, त्यसको रक्षा गर्न अरू कसले सक्ला र ?

**धिगर्जुनं मृषावादं धिगात्मश्लाघिनो धनुः।**
**दैवोपसृष्टं यो मौढ्यादानिनीषति दुर्मतिः॥ ४२॥**

**पदार्थ–**
**मृषावादं** = झुटो बोल्ने
**अर्जुनं** = अर्जुनलाई
**धिक्** = धिक्कार छ
**आत्मश्लाघिनः** = आत्मप्रशंसा गर्ने उसको
**धनुः** = धनुलाई
**धिक्** = धिक्कार छ
**यः** = जुन

**दुर्मतिः** = दुर्बुद्धिले
**दैवोपसृष्टं** = प्रारब्धद्वारा नै
हरिएको वस्तुलाई
**मौढ्यात्** = मूर्खताले
**आनिनीषति** = ल्याउन खोज्छ

**वाक्यार्थ–** झुटो बोल्ने अर्जुनलाई धिक्कार छ, आत्मप्रशंसा गर्ने यस्ता अर्जुनको धनुलाई पनि धिक्कार छ। यो दुर्बुद्धिले प्रारब्धद्वारा नै हरिएको हाम्रो सन्ततिलाई मूर्खतापूर्वक फर्काई ल्याउन खोजेको छ।

**एवं शपति विप्रर्षौ विद्यामास्थाय फाल्गुनः।**
**ययौ संयमनीमाशु यत्रास्ते भगवान् यमः॥ ४३॥**

**पदार्थ–**
**विप्रर्षौ** = ती ब्राह्मणले
**एवं** = यसप्रकार
**शपति** = निन्दा गरिरहँदा
**आशु** = तत्काल नै
**फाल्गुनः** = अर्जुन
**विद्यां** = योगविद्याको
**आस्थाय** = आश्रय लिएर
**यत्र** = जहाँ
**भगवान्** = भगवान्
**यमः** = यमराज
**आस्ते** = बस्नुहुन्छ, त्यो
**संयमनीम्** = संयमनी पुरीमा
**ययौ** = गए

**वाक्यार्थ–** यसरी ब्राह्मणले निन्दा गरिरहँदा अर्जुन तत्काल योगविद्याको बलले संयमनी पुरीमा गए, जहाँ भगवान् यमराज बस्नुहुन्छ।

**विप्रापत्यमचक्षाणस्तत ऐन्द्रीमगात् पुरीम्।**
**आग्नेयीं नैर्ऋतीं सौम्यां वायव्यां वारुणीमथ।**
**रसातलं नाकपृष्ठं धिष्ण्यान्यन्यान्युदायुधः॥ ४४॥**

**पदार्थ–**
**विप्रापत्यं** = ब्राह्मणबालकलाई
**अचक्षाणः** = नदेखी
**ततः** = त्यहाँबाट
**ऐन्द्रीम्** = इन्द्रको
**पुरीम्** = पुरीमा
**अगात्** = गए
**अथ** = यसपछि
**उदायुधः** = गाण्डीव उजाउँदै
उनी
**आग्नेयीं** = अग्निको
**नैर्ऋतीं** = निर्ऋतिको
**सौम्यां** = चन्द्रमाको
**वायव्यां** = वायुको
**वारुणीम्** = वरुणको नगरीमा र
**रसातलं** = रसातलमा
**नाकपृष्ठं** = स्वर्गभन्दा माथिका
लोकहरूमा
**अन्यानि** = अरू-अरू
**धिष्ण्यानि** = स्थानहरूमा पनि
गए

**वाक्यार्थ–** यमलोकमा ब्राह्मणबालकलाई नदेखेपछि उनी त्यहाँबाट इन्द्रपुरीमा गए। यसपछि हातमा गाण्डीव लिएका उनी अग्नि, निर्ऋति, सोम, वायु र वरुण आदिको पुरीहरूमा, त्यसै गरी रसातल आदि तलका लोकमा, स्वर्गभन्दा माथिका लोक तथा अरू-अरू स्थानमा पनि पुगे।

**ततोऽलब्धद्विजसुतो ह्यनिस्तीर्णप्रतिश्रुतः।**
**अग्निं विविक्षुः कृष्णेन प्रत्युक्तः प्रतिषेधता॥ ४५॥**

**दर्शये द्विजसूनूंस्ते मावज्ञात्मानमात्मना ।**

**ये ते नः कीर्तिं विमलां मनुष्याः स्थापयिष्यन्ति ॥ ४६ ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**ततः** = त्यसपछि
**अलब्धद्विजसुतः** = कहीं पनि ब्राह्मणबालकलाई नपाई
**अनिस्तीर्णप्रतिश्रुतः** = प्रतिज्ञा पूरा नभएका उनी
**अग्निं** = अग्निभित्र
**विविक्षुः** = प्रवेश गर्न खोजे
**प्रतिषेधता** = त्यसबाट रोक्दै
**कृष्णेन** = श्रीकृष्णले
**प्रत्युक्तः** = यसो भन्नुभयो
**ते** = तिम्रा लागि
**द्विजसूनून्** = ब्राह्मणका पुत्रहरू
**दर्शये** = देखाइदिनेछु
**आत्मना** = आफैँले
**आत्मानं** = आफैँलाई
**मा अवज्ञ** = हेलाँ नगर
**ये** = जो निन्दा गर्दैछन्
**ते** = तिनै
**मनुष्याः** = मानिसहरूले
**नः** = हाम्रो
**विमलां** = निर्मल
**कीर्तिं** = कीर्ति
**स्थापयिष्यन्ति** = गाउनेछन्

**वाक्यार्थ–** यसरी कहीं पनि ब्राह्मणबालकलाई नपाएपछि अर्जुन आफ्नो प्रतिज्ञा पूरा भएन भनेर अग्निभित्र प्रवेश गर्न खोजे। भगवान् श्रीकृष्णले यसबाट रोक्दै उनलाई भन्नुभयो– हे अर्जुन ! म तिमीलाई यी ब्राह्मणका सबै पुत्रहरू देखाइदिन्छु, आफैँले आफैँलाई न धिक्कार। अहिले तिम्रो निन्दा गर्ने यिनै मान्छेहरूले पछि हाम्रो निर्मल कीर्तिलाई गाउनेछन्।

**इति सम्भाष्य भगवानर्जुनेन सहेश्वरः ।**

**दिव्यं स्वरथमास्थाय प्रतीचीं दिशमाविशत् ॥ ४७ ॥**

**पदार्थ–**
**इति** = यस्तो
**सम्भाष्य** = भनेर
**ईश्वरः** = सर्वसमर्थ
**भगवान्** = भगवान् श्रीकृष्ण
**अर्जुनेन सह** = अर्जुनसँग
**दिव्यं** = दिव्य
**स्वरथं** = आफ्नो रथमा
**आस्थाय** = चढेर
**प्रतीचीं** = पश्चिम
**दिशम्** = दिशातर्फ
**आविशत्** = लाग्नुभयो

**वाक्यार्थ–** यसो भनी सर्वसमर्थ भगवान् श्रीकृष्ण अर्जुनलाई साथ लिई आफ्नो दिव्य रथमा चढ्नुभयो र पश्चिम दिशातर्फ लाग्नुभयो।

**सप्त द्वीपान् सप्तसिन्धून् सप्तसप्तगिरीनथ ।**

**लोकालोकं तथातीत्य विवेश सुमहत्तमः ॥ ४८ ॥**

**पदार्थ–**
**सप्तसप्तगिरीन्** = सात-सात पर्वतले युक्त
**सप्त द्वीपान्** = सातै द्वीपलाई
**अथ** = त्यसै गरी
**सप्त सिन्धून्** = सात समुद्रलाई
**तथा** = अनि
**लोकालोकं** = लोकालोक पर्वतलाई समेत
**अतीत्य** = नाघी
**सुमहत्तमः** = महान् घोर अन्धकारमा
**विवेश** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** भगवान्को रथ सात-सात पर्वतले युक्त सात द्वीप र सातै समुद्रलाई नाघी लोकालोक पर्वतलाई समेत काटेर महान् घोरअन्धकारमा प्रवेश गऱ्यो।

**तत्राश्वाः शैब्यसुग्रीवमेघपुष्पबलाहकाः।**
**तमसि भ्रष्टगतयो बभूवुर्भरतर्षभ॥ ४९॥**

**पदार्थ–**
**भरतर्षभ** = हे भरतवंशीहरूमा श्रेष्ठ परीक्षित्
**तत्र** = त्यो
**तमसि** = घोर अन्धकारमा
**शैब्यसुग्रीवमेघपुष्पबलाहकाः** = शैब्य, सुग्रीव, मेघपुष्प र बलाहक नामका
**अश्वाः** = भगवान्का दिव्य घोडाहरू पनि
**भ्रष्टगतयः** = मार्गभ्रष्ट
**बभूवुः** = भए

**वाक्यार्थ–** हे परीक्षित्! त्यो घोर अन्धकारमा भगवान्का शैब्य, सुग्रीव, मेघपुष्प र बलाहक नामका घोडाहरू पनि बाटो नपाई भड्किन थाले।

**तान् दृष्ट्वा भगवान् कृष्णो महायोगेश्वरेश्वरः।**
**सहस्रादित्यसङ्काशं स्वचक्रं प्राहिणोत् पुरः॥ ५०॥**

**पदार्थ–**
**महायोगेश्वरेश्वरः** = महायोगेश्वरहरूका पनि ईश्वर
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्णले
**तान्** = ती घोडाहरूलाई
**दृष्ट्वा** = देखी
**पुरः** = अगाडि
**सहस्रादित्यसङ्काशं** = हजारौँ सूर्यजस्तो ज्योतिर्मय
**स्वचक्रं** = आफ्नो सुदर्शनचक्रलाई
**प्राहिणोत्** = छोडिदिनुभयो

**वाक्यार्थ–** महायोगेश्वरहरूका पनि ईश्वर भगवान् श्रीकृष्णले त्यो घोर अन्धकारमा घोडाहरूलाई भड्किरहेको देखी रथभन्दा अघि हजारौँ सूर्य झैँ चम्कने आफ्नो सुदर्शनचक्र छाडिदिनुभयो।

**तमः सुघोरं गहनं कृतं महद् विदारयद् भूरितरेण रोचिषा।**
**मनोजवं निर्विविशे सुदर्शनं गुणच्युतो रामशरो यथा चमूः॥ ५१॥**

**पदार्थ–**
**सुघोरं** = भयानक
**गहनं** = अत्यन्त घना
**कृतं** = भगवान्द्वारा नै उत्पन्न
**महत्** = महान्
**तमः** = अन्धकारलाई
**भूरितरेण** = अत्यन्त प्रकाशमान
**रोचिषा** = तेजद्वारा
**विदारयत्** = चिर्दै
**मनोजवं** = मनको वेगले
**सुदर्शनं** = सुदर्शन चक्र
**यथा** = जसरी
**गुणच्युतः** = धनुबाट छुटेको
**रामशरः** = रामको बाण
**चमूः** = राक्षससेनामा पस्छ, त्यसै गरी
**निर्विविशे** = अगाडि बढ्यो

**वाक्यार्थ–** भगवान्द्वारा नै उत्पन्न त्यो अन्धकार अत्यन्त भयानक, घना एवं अनन्त थियो।

सुदर्शन चक्रले अत्यन्त प्रकाशमान आफ्नो तेजद्वारा त्यसलाई चिर्दै मनको वेगले त्यसै गरी अघि बढ्यो, जसरी रामको धनुबाट छुटेको बाण राक्षससेनामा प्रवेश गर्दछ।

**द्वारेण चक्रानुपथेन तत्तमःपरं परं ज्योतिरनन्तपारम्।**
**समश्नुवानं प्रसमीक्ष्य फाल्गुनः प्रताडिताक्षोऽपिदधेऽक्षिणी उभे॥ ५२॥**

**पदार्थ–**
**चक्रानुपथेन** = सुदर्शनचक्रद्वारा देखाइएको बाटोको
**द्वारेण** = माध्यमले
**तत्तमःपरं** = त्यो अन्धकारको सीमाभन्दा पर
**अनन्तपारं** = पार पाउन नसकिने
**परं** = सर्वश्रेष्ठ
**ज्योतिः** = ज्योति
**समश्नुवानं** = व्याप्त भएको
**प्रसमीक्ष्य** = देखेर
**प्रताडिताक्षः** = आँखै हेर्न नसकेका
**फाल्गुनः** = अर्जुनले
**उभे** = दुबै
**अक्षिणी** = आँखा
**अपिदधे** = बन्द गरे

**वाक्यार्थ–** सुदर्शनचक्रद्वारा देखाइएको बाटो हुँदै गएको त्यो रथले अन्धकारको सीमालाई पार गऱ्यो। त्यसभन्दा पर पार पाउन नसकिने सर्वश्रेष्ठ ज्योति व्याप्त भएको देखेर अर्जुनले त्यसलाई हेर्नै सकेनन् र आफ्ना दुबै आँखा बन्द गरे।

**ततः प्रविष्टः सलिलं नभस्वता बलीयसैजद्बृहदूर्मिभूषणम्।**
**तत्राद्भुतं वै भवनं द्युमत्तमं भ्राजन्मणिस्तम्भसहस्रशोभितम्॥ ५३॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**बलीयसा** = शक्तिशाली
**नभस्वता** = आँधीद्वारा
**एजद्बृहदूर्मिभूषणं** = ठुला तरङ्गहरू उठ्नाले सुशोभित भएको
**सलिलं** = दिव्य जलराशिमा
**प्रविष्टः** = रथ प्रविष्ट भयो
**तत्र** = त्यहाँ
**वै** = निश्चय नै
**भ्राजन्मणिस्तम्भसहस्रशोभितं** = चम्किला हजारौँ मणिमय खम्बाद्वारा सुशोभित
**द्युमत्तमं** = प्रकाशमान
**अद्भुतं** = आश्चर्यमय
**भवनम्** = भवन थियो

**वाक्यार्थ–** त्यसपछि त्यो रथ दिव्य जलराशिमा प्रवेश गऱ्यो। शक्तिशाली आँधी आउनाले त्यहाँ ठुला तरङ्गहरू उठी शोभा बढाइरहेका थिए। त्यहाँभित्र प्रकाशमान हजारौँ मणिका खम्बाहरूले सुशोभित उज्ज्वल आश्चर्यमय भवन थियो।

**तस्मिन् महाभीममनन्तमद्भुतं सहस्रमूर्धन्यफणामणिद्युभिः।**
**विभ्राजमानं द्विगुणेक्षणोल्बणं सिताचलाभं शितिकण्ठजिह्वम्॥ ५४॥**

**पदार्थ–**
**तस्मिन्** = त्यहाँ
**सहस्रमूर्धन्यफणामणिद्युभिः** = हजारौँ फणामा रहेका मणिहरूको प्रकाशद्वारा
**विभ्राजमानं** = ज्योतिर्मय भएका
**द्विगुणेक्षणोल्बणं** = दुईगुना (दुई हजार) भयङ्कर आँखाहरूले युक्त
**सिताचलाभं** = कैलास

पर्वतसमान सेता
**शितिकण्ठजिह्वं** = घाँटी र जिब्रो नीलो भएका
**महाभीमं** = अत्यन्त भयानक
**अद्भुतं** = अद्भुत
**अनन्तम्** = शेष हुनुहुन्थ्यो

**वाक्यार्थ–** त्यो भवनमा हजार शिरमा जगमगाइरहेका मणिहरूको प्रकाशद्वारा सुशोभित दुई हजार ओटा भयङ्कर आँखा भएका सम्पूर्ण शरीर कैलास पर्वतसमान सेतो र घाँटी र जिब्रो नीलो भएका अत्यन्त भयानक र आश्चर्यमय शेष हुनुहुन्थ्यो।

**ददर्श तद्भोगसुखासनं विभुं महानुभावं पुरुषोत्तमोत्तमम्।**
**सान्द्राम्बुदाभं सुपिशङ्गवाससं प्रसन्नवक्त्रं रुचिरायतेक्षणम्॥ ५५॥**

**पदार्थ–**
**तद्भोगसुखासनं** = ती शेषको शरीरशय्यामाथि बस्नुहुने
**सान्द्राम्बुदाभं** = घना बादलसमान अङ्गकान्ति भएका
**सुपिशङ्गवाससं** = चम्किलो पहेँलो वस्त्र धारण गर्ने
**प्रसन्नवक्त्रं** = हँसिलो अनुहार भएका
**रुचिरायतेक्षणं** = सुन्दर र विशाल आँखा भएका
**पुरुषोत्तमोत्तमं** = परमपुरुषोत्तम
**महानुभावं** = महाप्रभावशाली
**विभुं** = सर्वव्यापक विष्णुलाई
**ददर्श** = देखे

**वाक्यार्थ–** शेषनागको शय्यामाथि भगवान् विष्णु विराजमान हुनुहुन्थ्यो। उहाँको शरीरको अङ्गकान्ति घना बादलसमान थियो र उहाँले पहेँलो वस्त्र धारण गर्नुभएको थियो। हँसिलो अनुहार एवं सुन्दर र विशाल आँखा भएका महाप्रभावशाली सर्वव्यापक पुरुषोत्तम विष्णुलाई अर्जुनले देखे।

**महामणिव्रातकिरीटकुण्डलप्रभापरिक्षिप्तसहस्रकुन्तलम्।**
**प्रलम्बचार्वष्टभुजं सकौस्तुभं श्रीवत्सलक्ष्मं वनमालयावृतम्॥ ५६॥**
**सुनन्दनप्रमुखैः स्वपार्षदैश्चक्रादिभिर्मूर्तिधरैर्निजायुधैः।**
**पुष्ट्या श्रिया कीर्त्यजयाखिलर्द्धिभिर्निषेव्यमाणं परमेष्ठिनां पतिम्॥ ५७॥**

**पदार्थ–**
**महामणिव्रातकिरीटकुण्डलप्रभा-परिक्षिप्तसहस्रकुन्तलं** = बहुमूल्य मणिसमूहद्वारा जडित मुकुट र कुण्डलहरूको कान्तिद्वारा हजारौं घुम्रिएका केशराशि चम्किरहेका
**प्रलम्बचार्वष्टभुजं** = लामा र सुन्दर आठ भुजा भएका
**सकौस्तुभं** = कौस्तुभ मणि धारण गर्ने
**श्रीवत्सलक्ष्मं** = श्रीवत्सको चिह्न भएका
**वनमालया** = वनमालाद्वारा
**वृतं** = सुशोभित
**सुनन्दनप्रमुखैः** = सुनन्द, नन्द आदि
**स्वपार्षदैः** = आफ्ना पार्षदहरूद्वारा
**मूर्तिधरैः** = मूर्तिमान्
**चक्रादिभिः** = चक्र आदि
**निजायुधैः** = आफ्ना अस्त्रहरूद्वारा
**पुष्ट्या** = पुष्टि
**श्रिया** = श्री
**कीर्त्यजया** = कीर्ति र अजा यी शक्ति तथा
**अखिलर्द्धिभिः** = सम्पूर्ण

ऋद्धिहरूद्वारा
**निषेव्यमाणं** = सेवा गरिएका
**परमेष्ठिनां** = ब्रह्मा आदि लोकपालका पनि
**पतिम्** = स्वामी भगवान्‌लाई (देखे)

**वाक्यार्थ–** अर्जुनले ब्रह्मा आदि लोकपालका पनि स्वामी भगवान्‌लाई देखे। अनेकौं बहुमूल्य मणिद्वारा जडित मुकुट र कुण्डलद्वारा उहाँका हजारौं केशराशि चम्किएका थिए, उहाँका लामा र सुन्दर आठ हातहरू थिए, वनमालाधारी उहाँ कौस्तुभ मणि र श्रीवत्सको चिह्नले समेत सुशोभित हुनुहुन्थ्यो। सुनन्द, नन्द आदि प्रमुख पार्षदहरू, मूर्तिमान् भएका चक्र आदि उहाँकै अस्त्रहरू र पुष्टि, श्री, कीर्ति, अजा यी चारै शक्ति एवं सबै प्रकारका ऋद्धिहरूद्वारा उहाँ सेवित हुनुहुन्थ्यो।

**ववन्द आत्मानमनन्तमच्युतो जिष्णुश्च तद्दर्शनजातसाध्वसः।**
**तावाह भूमा परमेष्ठिनां प्रभुर्बद्धाञ्जली सस्मितमूर्जया गिरा॥ ५८॥**

**पदार्थ–**
**अच्युतः** = भगवान् श्रीकृष्णले
**आत्मानं** = आफ्नै स्वरूप
**अनन्तं** = ती अनन्तलाई
**ववन्द** = वन्दना गर्नुभयो
**तद्दर्शनजातसाध्वसः** = उहाँको दर्शनद्वारा भयभीत भएका
**जिष्णुः च** = अर्जुनले पनि प्रणाम गरे
**परमेष्ठिनां** = ब्रह्मा आदिका
**प्रभुः** = स्वामी
**भूमा** = सर्वव्यापक विष्णुले
**बद्धाञ्जली** = हात जोडेका
**तौ** = ती दुबैलाई
**ऊर्जया** = ओजस्वी
**गिरा** = वाणीले
**सस्मितं** = मुस्कुराउँदै
**आह** = भन्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले आफ्नै स्वरूप भएका अनन्तलाई प्रणाम गर्नुभयो र पहिलोपटक उहाँलाई देख्नाले भयभीत भएका अर्जुनले पनि प्रणाम गरे। जब ती दुबै हात जोडेर बसे तब ब्रह्मा आदि देवताहरूका स्वामी सर्वव्यापक विष्णुले मुस्कुराउँदै ती दुबैलाई ओजस्वी वाणीले भन्नुभयो।

**द्विजात्मजा मे युवयोर्दिदृक्षुणा मयोपनीता भुवि धर्मगुप्तये।**
**कलावतीर्णाववनेर्भरासुरान् हत्वेह भूयस्त्वरयेतमन्ति मे॥ ५९॥**

**पदार्थ–**
**युवयोः** = तिमी दुबैलाई
**दिदृक्षुणा** = देख्न खोज्ने
**मया** = मद्वारा नै
**द्विजात्मजाः** = ब्राह्मणका बालकहरू
**उपनीताः** = ल्याइएका हुन्
**भुवि** = पृथिवीमा
**धर्मगुप्तये** = धर्मरक्षाका लागि
**मे** = मेरै
**कलावतीर्णौ** = कला लिई अवतीर्ण तिमीहरूले
**अवनेः** = पृथिवीका
**भरासुरान्** = भार भएका असुरहरूलाई
**हत्वा** = मारी
**त्वरया** = छिट्टै
**भूयः** = फेरि
**इह** = यहीं
**मे** = मेरै
**अन्ति** = नजिक
**इतम्** = आऊ

**वाक्यार्थ–** मैले तिमीहरू दुबैलाई हेर्ने इच्छाले ती ब्राह्मणका बालकहरू ल्याएको हुँ। तिमीहरू

धर्मरक्षाका लागि मेरै कलाद्वारा पृथिवीमा अवतीर्ण भएका हौ। त्यसैले पृथिवीका भार भएका असुरहरूलाई नष्ट गरी फेरि छिट्टै नै यहीँ मेरो नजिक आऊ।

**पूर्णकामावपि युवां नरनारायणावृषी।**

**धर्ममाचरतां स्थित्यै ऋषभौ लोकसङ्ग्रहम्॥ ६०॥**

**पदार्थ–**

**पूर्णकामौ** = सम्पूर्ण कामना पूर्ण भएका
**ऋषभौ** = सर्वश्रेष्ठ
**नरनारायणौ** = नरनारायण नामक
**ऋषी अपि** = ऋषि भएर पनि
**युवां** = तिमी दुई
**स्थित्यै** = जगत्‌को स्थितिका लागि
**लोकसङ्ग्रहं** = लोकसङ्ग्रहरूप
**धर्मम्** = धर्म
**आचरताम्** = आचरण गर

**वाक्यार्थ–** तिमी दुबै मेरै स्वरूप नरनारायण ऋषि हौ। सर्वश्रेष्ठ र पूर्णकाम भएर पनि तिमीहरूले संसारको स्थितिका लागि लोकसङ्ग्रहरूप धर्मको आचरण गर।

**इत्यादिष्टौ भगवता तौ कृष्णौ परमेष्ठिना।**

**ओमित्यानम्य भूमानमादाय द्विजदारकान्॥ ६१॥**

**न्यवर्ततां स्वकं धाम सम्प्रहृष्टौ यथागतम्।**

**विप्राय ददतुः पुत्रान् यथारूपं यथावयः॥ ६२॥**

**पदार्थ–**

**परमेष्ठिना** = विश्वनियन्ता
**भगवता** = भगवान् विष्णुद्वारा
**इति** = यसप्रकार
**आदिष्टौ** = आदेश दिइएका
**तौ** = ती दुबै
**कृष्णौ** = श्रीकृष्ण र अर्जुनले
**भूमानं** = सर्वव्यापक पुरुषलाई
**ओम् इति** = आज्ञा स्वीकार गरी
**आनम्य** = प्रणाम गरेर
**द्विजदारकान्** = ब्राह्मणबालकहरूलाई
**आदाय** = लिई
**सम्प्रहृष्टौ** = अत्यन्त प्रसन्नतापूर्वक
**यथागतं** = आए अनुसार नै
**स्वकं** = आफ्नो
**धाम** = द्वारकानगरीतिर
**न्यवर्ततां** = फर्किए
**विप्राय** = ब्राह्मणलाई
**यथारूपं** = अनुहार अनुसार
**यथावयः** = उमेर अनुसार
**पुत्रान्** = सबै छोराहरू
**ददतुः** = दिए

**वाक्यार्थ–** यसप्रकार जगन्नियन्ता भगवान् विष्णुले आज्ञा दिनुभयो। त्यो आज्ञालाई स्वीकार गरी दुबैले उहाँलाई प्रणाम गर्नुभयो र ब्राह्मणका बालकहरूलाई लिई अत्यन्त प्रसन्नतापूर्वक त्यसै गरी द्वारकातिर फर्किनुभयो जसरी उहाँहरू त्यहाँ पुग्नुभएको थियो। यसपछि श्रीकृष्ण र अर्जुनले ब्राह्मणलाई अनुहार र उमेर अनुसारका सबै पुत्रहरू जिम्मा लगाइदिनुभयो।

**निशाम्य वैष्णवं धाम पार्थः परमविस्मितः।**

**यत्किञ्चित् पौरुषं पुंसां मेने कृष्णानुकम्पितम्॥ ६३॥**

**पदार्थ—**
**वैष्णवं** = भगवान् विष्णुको
**धाम** = परमधामलाई
**निशाम्य** = देखेर
**परमविस्मितः** = अत्यन्त आश्चर्यचकित भएका
**पार्थः** = अर्जुनले
**पुंसां** = मानिसहरूमा
**यत्किञ्चित्** = जुन अलिकति
**पौरुषं** = सामर्थ्य छ, त्यो सबै
**कृष्णानुकम्पितं** = भगवान् श्रीकृष्णकै अनुग्रह हो भन्ने
**मेने** = ठाने

**वाक्यार्थ—** यसप्रकार भगवान् विष्णुको परमधाम देखेर अर्जुन अत्यन्त आश्चर्यचकित भए र उनले के ठाने भने संसारका सबै प्राणीहरूमा जुन अलिकति सामर्थ्य छ, त्यो भगवान् श्रीकृष्णकै अनुग्रह हो।

**इतीदृशान्यनेकानि वीर्याणीह प्रदर्शयन्।**
**बुभुजे विषयान् ग्राम्यानीजे चात्युर्जितैर्मखैः ॥ ६४ ॥**

**पदार्थ—**
**इति** = यसप्रकार
**इह** = यस संसारमा
**ईदृशानि** = यस्ताखाले
**अनेकानि** = अनेक
**वीर्याणि**= पराक्रमहरू
**प्रदर्शयन्** = देखाउँदै भगवान्ले
**ग्राम्यान्** = सांसारिक
**विषयान्** = विषयहरूलाई
**बुभुजे** = भोग्नुभयो र
**अत्युर्जितैः** = श्रेष्ठ
**मखैः च** = यज्ञहरूद्वारा
**ईजे** = यजन गर्नुभयो

**वाक्यार्थ—** यसप्रकार भगवान्ले वीरतापूर्ण अनेक चरित्रहरू देखाउनुभयो। उहाँले साधारण मानिससमान सांसारिक विषयहरूको भोग पनि गर्नुभयो र श्रेष्ठ यज्ञहरू पनि सम्पन्न गर्नुभयो।

**प्रववर्षाखिलान् कामान् प्रजासु ब्राह्मणादिषु।**
**यथाकालं यथैवेन्द्रो भगवान् श्रैष्ठ्यमास्थितः ॥ ६५ ॥**

**पदार्थ—**
**श्रैष्ठ्यं** = श्रेष्ठ महापुरुषहरूको
**आस्थितः** = आचरणमा रहने
**भगवान्** = भगवान्ले
**ब्राह्मणादिषु** = ब्राह्मण आदि
**प्रजासु** = प्रजाहरूमा
**यथाकालं** = समय अनुसार
**यथा एव** = जसरी
**इन्द्रः** = इन्द्रले (वर्षा गर्दछन् त्यसै गरी)
**अखिलान्** = सम्पूर्ण
**कामान्** = कामनाहरूलाई
**प्रववर्ष** = बर्साइदिनुभयो

**वाक्यार्थ—** भगवान् श्रीकृष्णले श्रेष्ठ महापुरुषहरूको आचरण देखाउँदै समयअनुसार ब्राह्मण आदि समस्त प्रजाहरूका सबै कामना पूरा गराइदिनुभयो, जसरी इन्द्रले ठिक समयमा वर्षा गर्दछन् र सबैको इच्छा पूर्ण गर्दछन्।

**हत्वा नृपानधर्मिष्ठान् घातयित्वार्जुनादिभिः।**
**अञ्जसा वर्तयामास धर्मं धर्मसुतादिभिः ॥ ६६ ॥**

**पदार्थ–**
**अधर्मिष्ठान्** = अधर्मी
**नृपान्** = राजाहरूलाई
**हत्वा** = मारेर र
**अर्जुनादिभिः** = अर्जुन आदिद्वारा
**घातयित्वा** = नष्ट गराएर
**धर्मसुतादिभिः** = धर्मराज युधिष्ठिर जस्ता राजाहरूद्वारा
**अञ्जसा** = अनायास नै
**धर्मं** = धर्ममर्यादालाई
**वर्तयामास** = स्थापित गर्नुभयो

**वाक्यार्थ–** उहाँले धेरै अधर्मी राजाहरूलाई आफैँ मार्नुभयो र अरू धेरैलाई अर्जुन जस्ता वीरहरूद्वारा नष्ट गराउनुभयो। यसपछि उहाँले धर्मराज युधिष्ठिर जस्ता श्रेष्ठ राजाहरूको माध्यमले अनायास नै पृथिवीभरि धर्ममर्यादालाई स्थापित गरिदिनुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे द्विजकुमारानयनं नामैकोननवतितमोऽध्यायः॥ ८९॥**

# अथ नवतितमोऽध्यायः

## भगवान् श्रीकृष्णका लीलाहरू

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**सुखं स्वपुर्यां निवसन् द्वारकायां श्रियः पतिः ।**
**सर्वसम्पत्समृद्धायां जुष्टायां वृष्णिपुङ्गवैः ॥ १ ॥**
**स्त्रीभिश्चोत्तमवेषाभिर्नवयौवनकान्तिभिः ।**
**कन्दुकादिभिर्हर्म्येषु क्रीडन्तीभिस्तडिद्द्युभिः ॥ २ ॥**
**नित्यं सङ्कुलमार्गायां मदच्युद्भिर्मतङ्गजैः ।**
**स्वलङ्कृतैर्भटैरश्वै रथैश्च कनकोज्ज्वलैः ॥ ३ ॥**
**उद्यानोपवनाढ्यायां पुष्पितद्रुमराजिषु ।**
**निर्विशद्भृङ्गविहगैर्नादितायां समन्ततः ॥ ४ ॥**
**रेमे षोडशसाहस्रपत्नीनामेकवल्लभः ।**
**तावद् विचित्ररूपोऽसौ तद्गृहेषु महर्द्धिषु ॥ ५ ॥**

पदार्थ–
**कन्दुकादिभिः** = भकुन्डो आदि खेलसामग्रीद्वारा
**हर्म्येषु** = भवनहरूमा
**क्रीडन्तीभिः** = खेलिरहेका
**तडिद्द्युभिः** = बिजुलीसमान चम्किला अङ्ग भएका
**नवयौवनकान्तिभिः** = नवयौवनको कान्तिले युक्त
**उत्तमवेषाभिः** = राम्रो वस्त्र लगाएका
**स्त्रीभिः** = स्त्रीहरूद्वारा र
**वृष्णिपुङ्गवैः च** = वृष्णिवंशी श्रेष्ठ पुरुषहरूद्वारा समेत
**जुष्टायां** = सेवित भएको
**मदच्युद्भिः** = मद चुहिरहेका
**मतङ्गजैः** = हात्तीहरू
**स्वलङ्कृतैः** = राम्रोसँग सजिएका
**भटैः** = सैनिकहरू
**अश्वैः** = घोडाहरू र
**कनकोज्ज्वलैः** = सुवर्णसमान चम्किला
**रथैः च** = रथहरूद्वारासमेत
**नित्यं** = सधैं
**सङ्कुलमार्गायां** = बाटो भरिइरहने
**उद्यानोपवनाढ्यायां** = उद्यान र उपवनद्वारा सुशोभित
**पुष्पितद्रुमराजिषु** = फूल फुलेका रुखहरूमा
**निर्विशद्भृङ्गविहगैः** = बसिरहेका भँवरा र चराहरूद्वारा
**समन्ततः** = जताततैबाट
**नादितायां** = शब्द गरिएको
**सर्वसम्पत्समृद्धायां** = सम्पूर्ण सम्पत्तिले समृद्ध भएको
**स्वपुर्यां** = आफ्नो पुरी
**द्वारकायां** = द्वारकामा
**निवसन्** = बसिरहेका
**षोडशसाहस्रपत्नीनां** = सोह्र हजार पत्नीहरूका
**एकवल्लभः** = एउटै पति
**तावद्विचित्ररूपः** = त्यति नै थरी

विचित्र रूप बनाउने
**असौ** = यी
**श्रियः पतिः** = लक्ष्मीपति
भगवान् श्रीकृष्ण
**महर्द्धिषु** = समृद्धिले युक्त
**तद्गृहेषु** = ती घरहरूमा
**सुखं** = आनन्दपूर्वक
**रेमे** = रमाउनुहुन्थ्यो

**वाक्यार्थ–** भगवान् द्वारका नगरीमा बस्नुभएको थियो। त्यस नगरीमा बस्ने बिजुली झैं चम्किला अङ्ग भएका स्त्रीहरू आ-आफ्ना भवनहरूमा भकुन्डो आदि अनेकथरी खेलसामग्रीहरू लिएर खेल्दथे र नवयौवनको कान्तिले युक्त ती सबैले उत्तम वस्त्र धारण गरेका थिए। यस्तै श्रेष्ठ वृष्णिवंशी वीरहरूद्वारा सेवित भएको त्यस नगरीका राजमार्गहरू सधैं मत्ता हात्ती, राम्ररी सजिएका सैनिक, घोडा र सुवर्णसमान चम्किला रथहरूद्वारा भरिइरहन्थ्यो। उद्यान र उपवनद्वारा शोभित त्यहाँ फूल फुलेका वृक्षहरूमा भँवरा र चराहरू बसी मिठो आवाज निकालिरहन्थे। यसप्रकार त्यो नगरी सबै थरी समृद्धिले युक्त थियो। त्यहाँ भगवान्का सोह्र हजार पत्नीहरू थिए र ती सबैका एक मात्र पति लक्ष्मीपति भगवान् सोह्र हजारै ओटा विचित्र रूप धारण गरी सबैथरी ऐश्वर्यले सम्पन्न ती घरहरूमा सुखपूर्वक रमाउनुहुन्थ्यो।

**प्रोत्फुल्लोत्पलकह्लारकुमुदाम्भोजरेणुभिः।**
**वासितामलतोयेषु कूजद्द्विजकुलेषु च ॥ ६ ॥**
**विजहार विगाह्याम्भो ह्रदिनीषु महोदयः।**
**कुचकुङ्कुमलिप्ताङ्गः परिरब्धश्च योषिताम् ॥ ७ ॥**

**पदार्थ–**
**महोदयः** = महाभाग्यशाली
**योषितां** = स्त्रीहरूद्वारा
**परिरब्धः च** = अङ्कमाल गरिनुभएका
**कुचकुङ्कुमलिप्ताङ्गः** = स्तनको कुङ्कुमले अङ्ग लिप्त भएका
भगवान्
**प्रोत्फुल्लोत्पलकह्लारकुमुदाम्भोजरेणुभिः** = फुलेका उत्पल, कह्लार कुमुद आदि अनेक प्रकारका कमलपुष्पका परागहरूद्वारा
**वासितामलतोयेषु** = सुगन्धित निर्मल जल भएका
**कूजद्द्विजकुलेषु च** = हाँस आदि श्रेष्ठ पक्षीका आवाजले युक्त भएका
**ह्रदिनीषु** = पोखरीहरूमा
**अम्भः** = जलमा
**विगाह्य** = पौडिई
**विजहार** = विहार गर्नुहुन्थ्यो

**वाक्यार्थ–** भगवान्का ती पत्नीहरूका भवनमा सुन्दर पोखरीहरू थिए। जसमा उत्पल, कह्लार, कुमुद आदि कमलपुष्पहरू फुल्दा तिनका परागद्वारा सम्पूर्ण जल सुगन्धित हुन्थ्यो। त्यसै गरी हाँस आदि श्रेष्ठ पक्षीहरू पनि त्यहाँ विचरण गरी कराइरहन्थे। भगवान्का पत्नीहरूले जब भगवान्लाई अङ्कमाल गर्दथे, तब तिनको स्तनमा लिप्त भएको कुङ्कुम भगवान्को अङ्गमा पनि लाग्दथ्यो। यसपछि भगवान् निर्मल जलमा पौडिँदै विहार गर्नुहुन्थ्यो।

**उपगीयमानो गन्धर्वैर्मृदङ्गपणवानकान्।**
**वादयद्भिर्मुदा वीणां सूतमागधवन्दिभिः ॥ ८ ॥**

**सिच्यमानोऽच्युतस्ताभिर्हसन्तीभिः स्म रेचकैः ।**
**प्रतिषिञ्चन् विचिक्रीडे यक्षीभिर्यक्षराडिव ॥ ९॥**

**पदार्थ–**
**मुदा** = प्रसन्नतापूर्वक
**वीणां** = वीणा र
**मृदङ्गपणवानकान्** = मृदङ्ग, ढोल, नगडा आदि
**वादयद्भिः** = बजाइरहेका
**सूतमागधवन्दिभिः** = सूत, मागध र वन्दीगणहरूद्वारा र
**गन्धर्वैः** = गन्धर्वहरूद्वारा
**उपगीयमानः** = यशोगान गरिएका
**हसन्तीभिः** = हाँसिरहेका
**ताभिः** = ती स्त्रीहरूद्वारा
**रेचकैः** = पिच्केरीले
**सिच्यमानः** = पानी छ्यापी भिज्नुभएका
**अच्युतः** = भगवान् श्रीकृष्ण
**प्रतिषिञ्चन्** = तिनलाई पनि पानी छ्याप्दै
**यक्षीभिः** = यक्षिणीहरूसँग
**यक्षराट् इव** = यक्षराज कुबेर झैं
**विचिक्रीडे स्म** = विहार गर्नुहुन्थ्यो

**वाक्यार्थ–** गन्धर्वहरू भगवान् श्रीकृष्णको यशोगान गर्दथे भने त्यस समयमा सूत, मागध, वन्दीगण आदिले प्रसन्नतापूर्वक वीणा, मृदङ्ग, ढोल, नगडा आदि बजाउँथे। उहाँका पत्नीहरू पिच्केरीद्वारा उहाँलाई पानी छ्यापिदिन्थे भने कहिलेकाहीँ उहाँले पनि ती सबैलाई पानी छ्यापी भिजाइदिनुहुन्थ्यो। यसप्रकार भगवान् श्रीकृष्ण यक्षराज कुबेरले यक्षिणीहरूसँग विहार गरे झैं द्वारकापुरीमा आफ्ना पत्नीहरूसँग विहार गर्नुहुन्थ्यो।

**ताः क्लिन्नवस्त्रविवृतोरुकुचप्रदेशाः**
**सिञ्चन्त्य उद्धृतबृहत्कवरप्रसूनाः ।**
**कान्तं स्म रेचकजिहीरषयोपगुह्य**
**जातस्मरोत्स्मयलसद्वदना विरेजुः ॥ १० ॥**

**पदार्थ–**
**क्लिन्नवस्त्रविवृतोरुकुचप्रदेशाः** = वस्त्र भिज्नाले तिघ्रा, स्तन आदि अङ्गहरू देखिएका
**उद्धृतबृहत्कवरप्रसूनाः** = चुल्ठोमा गुँथिएका फूलहरू बिस्तारै खसिरहेका
**कान्तं** = पति श्रीकृष्णलाई
**सिञ्चन्त्यः** = पानी छ्यापिरहेका
**रेचकजिहीरषया** = उहाँबाट पिच्केरी खोस्ने इच्छाले
**उपगुह्य** = श्रीकृष्णलाई अङ्कमाल गरी
**जातस्मरोत्स्मयलसद्वदनाः** = श्रीकृष्णप्रतिको प्रेम झनै बढ्नाले सुशोभित अनुहार भएका
**ताः** = ती स्त्रीहरू
**विरेजुः स्म** = सुशोभित हुन्थे

**वाक्यार्थ–** भगवान् श्रीकृष्णका ती पत्नीहरूको वस्त्र भिज्नाले तिनका तिघ्रा, स्तन आदि अङ्गहरू बाहिरबाटै देखिन्थे। पति श्रीकृष्णलाई पानी छ्याप्दा चुल्ठो खुस्किई त्यहाँ गुथिएका फूलहरू खसिरहेका थिए। उनीहरू पिच्केरी खोस्ने इच्छाले भगवान्को नजिक गई उहाँलाई आलिङ्गन गर्दथे र यसबाट उहाँप्रतिको प्रेम बढ्नाले उनीहरूको अनुहार झन् चम्किलो देखिन्थ्यो। यसप्रकार भगवान्का पत्नीहरू झन् सुशोभित हुन्थे।

**कृष्णस्तु तत्स्तनविषज्जितकुङ्कुमस्रक्**
**क्रीडाभिषङ्गधुतकुन्तलवृन्दबन्धः।**
**सिञ्चन् मुहुर्युवतिभिः प्रतिषिच्यमानो**
**रेमे करेणुभिरिवेभपतिः परीतः॥ ११॥**

**पदार्थ–**
**तत्स्तनविषज्जितकुङ्कुमस्रक्** = स्त्रीहरूको स्तनको कुङ्कुम वनमालामा लागेका
**क्रीडाभिषङ्गधुतकुन्तलवृन्दबन्धः** = विहारमा मग्न भएकाले घुम्रिएका केशहरू लहराइरहेका
**युवतिभिः** = स्त्रीहरूद्वारा
**प्रतिषिच्यमानः** = पानी छ्यापिँदै
**मुहुः** = बारम्बार
**सिञ्चन्** = तिनलाई छेप्दै
**कृष्णः तु** = भगवान् श्रीकृष्ण
**करेणुभिः** = हत्तिनीहरूद्वारा
**परीतः** = घेरिएको
**इभपतिः इव** = हात्ती झैँ
**रेमे** = रमाउनुभयो

**वाक्यार्थ–** स्त्रीहरूसँग अङ्कमाल गर्दा उनीहरूका स्तनको कुङ्कुम भगवान्को वनमालामा लाग्थ्यो। विहारमा मग्न हुँदा उहाँका घुम्रिएका केशहरू फुकेर लहराइरहेका थिए। स्त्रीहरूद्वारा पानी छ्यापिँदै र उनीहरूलाई समेत पानी छ्याप्दै भगवान् श्रीकृष्ण त्यसै गरी विहार गर्दै रमाउनुभयो, जसरी हत्तिनीहरूद्वारा युक्त भएको हात्ती जलक्रीडा गर्दछ।

**नटानां नर्तकीनां च गीतवाद्योपजीविनाम्।**
**क्रीडालङ्कारवासांसि कृष्णोऽदात् तस्य च स्त्रियः॥ १२॥**

**पदार्थ–**
**कृष्णः** = भगवान् श्रीकृष्णले
**गीतवाद्योपजीविनां** = गाउनु र बजाउनु नै जीविकाका साधन भएका
**नटानां** = नट र
**नर्तकीनां च** = नर्तकीहरूका लागि
**क्रीडालङ्कारवासांसि** = जलक्रीडा गरिसकेपछिको गहना र कपडा
**अदात्** = दिनुभयो
**तस्य** = उहाँका
**स्त्रियः च** = स्त्रीहरूले पनि दिए

**वाक्यार्थ–** जलक्रीडा गरिसकेपछि भगवान् श्रीकृष्ण र उहाँका पत्नीहरूले बाजा बजाउनु र गीत गाउनु नै जीविकाको साधन भएका नट एवं नर्तकीहरूलाई आ-आफ्ना गहना र कपडा आदि दिए।

**कृष्णस्यैवं विहरतो गत्यालापेक्षितस्मितैः।**
**नर्मक्ष्वेलिपरिष्वङ्गैः स्त्रीणां किल हृता धियः॥ १३॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**विहरतः** = विहार गरिरहनुभएका
**कृष्णस्य** = भगवान् श्रीकृष्णको
**गत्यालापेक्षितस्मितैः** = चालढाल, बातचित, हेराइ र

मुस्कानहरूद्वारा
**नर्मक्ष्वेलिपरिष्वङ्गैः** = लज्जायुक्त परिहास र अङ्कमाल आदिद्वारा
**किल** = निश्चय नै
**स्त्रीणां** = ती सबै पत्नीहरूका
**धियः** = बुद्धिवृत्ति
**हृताः** = अपहृत भए

**वाक्यार्थ–** यसप्रकार विहार गरिरहनुभएका भगवान् श्रीकृष्णको चालढाल, बातचित, हेराइ, मुस्कान, लज्जायुक्त परिहास र अङ्कमाल आदिद्वारा ती सम्पूर्ण कृष्णपत्नीहरूको बुद्धिवृत्ति अपहृत भयो।

**ऊचुर्मुकुन्दैकधियोऽगिर उन्मत्तवज्जडम्।**
**चिन्तयन्त्योऽरविन्दाक्षं तानि मे गदतः शृणु॥ १४॥**

**पदार्थ–**
**मुकुन्दैकधियः** = श्रीकृष्णमा नै सबै बुद्धि लागेका
**अगिरः** = बोली बन्द भएका
**अरविन्दाक्षं** = कमलपुष्पजस्तो आँखा भएका श्रीकृष्णलाई
**चिन्तयन्त्यः** = मनमनै चिन्तन गरिरहने तिनीहरूले
**उन्मत्तवत्** = उन्मत्त व्यक्तिले झैं
**जडं** = विरहको मूर्च्छामा प्राप्त गराउने वचन
**ऊचुः** = भने
**गदतः** = बताइरहेको
**मे** = मबाट
**तानि** = ती सबै कुरा
**शृणु** = सुन्नुहोस्

**वाक्यार्थ–** ती सबै रानीहरूको बुद्धि केवल भगवान्मैं लाग्नाले उनीहरूको बोली बन्द हुन्थ्यो, केवल मनमनै कमलनयन श्रीकृष्णलाई नै चिन्तन गर्दै उन्मत्त व्यक्तिले जथाभावी बोले झैं उनीहरू विरह अवस्थाको मूर्च्छामा प्राप्त गराउने वचनहरू बोल्थे, यो कुरा म तपाईंलाई बताउँछु, सुन्नुहोस्।

**महिष्य ऊचुः** (रानीहरूले भने)

**कुररि विलपसि त्वं वीतनिद्रा न शेषे**
**स्वपिति जगति रात्र्यामीश्वरो गुप्तबोधः।**
**वयमिव सखि कच्चिद् गाढनिर्भिन्नचेता**
**नलिननयनहासोदारलीलेक्षितेन॥ १५॥**

**पदार्थ–**
**कुररि** = हे न्याउली चरी
**जगति** = संसारमा
**रात्र्यां** = रातको समयमा
**गुप्तबोधः** = आफ्नो अखण्ड ज्ञानशक्तिलाई लुकाई
**ईश्वरः** = भगवान् श्रीकृष्ण पनि
**स्वपिति** = सुतिरहनुभएको छ
**वीतनिद्रा** = निद्रा हराएकी
**त्वं** = तिमी चाहिँ
**न शेषे** = सुत्दिनौ
**विलपसि** = केवल विलाप गरिरहन्छ्यौ
**सखि** = हे सखि
**कच्चित्** = के
**वयं इव** = हामी झैं
**नलिननयनहासोदारलीलेक्षितेन** = कमलनयन श्रीकृष्णको मधुर

| हास्य र लीलामय हेराइले | **गाढनिर्भिन्नचेताः** = के तिम्रो | चित्त पनि घाइते भएको हो |
|---|---|---|

**वाक्यार्थ–** हे न्याउली चरी ! संसारमा अहिले रात परेको छ। आफ्नो अखण्ड ज्ञानशक्तिलाई लुकाई भगवान् श्रीकृष्णसमेत सुतिरहनुभएको छ। तर तिमी चाहिँ निद्रारहित भई अहिले पनि किन विलाप गर्छौ ? हे सखि ! कमलनयन श्रीकृष्णको मधुर हाँसो र लीलामय हेराइबाट हाम्रो जस्तै तिम्रो चित्त पनि घाइते भएको हो ?

**विवरण–** यस प्रसङ्गमा भगवान्का पत्नीहरूले आफूभित्र रहेको प्रियविरहको भावलाई प्रकट गरेका छन्। यद्यपि भगवान् श्रीकृष्ण ती रानीहरूसँगै हुनुहुन्छ, तर उहाँका रानीहरू प्रेमको गहिराइमा पुगी स्वयं भगवान्लाई पनि बिर्सी छट्पटाइरहेका छन्। भगवान्ले दिनभर रानीहरूलाई खुसी गराउने अनेक लीला गरी जब रात्रिमा विश्राम गर्नुहुन्थ्यो, तब रानीहरू श्रीकृष्णको लीलासुख नपाएर विक्षिप्त हुन्थे। उनीहरूले त्यस समयमा कृष्णविरह भएको कल्पना गर्थे। विरहको अवस्थामा नै प्रेमको उच्चता प्रकट हुन्छ। प्रियमिलनको वेलामा प्रेमीबाट आफूले आनन्द लिने आत्मकेन्द्रीभाव प्रबल रहेको हुन्छ। विरहको वेलामा त आफू स्वयंलाई पनि बिर्सी व्यक्ति आफ्नो प्रियतममा डुबेको हुन्छ। उसले सम्पूर्ण जगत्लाई प्रियमय देख्न थाल्दछ, जहाँ जे-जे भइरहेको छ, त्यो सब प्रियतमकै लागि भइरहेको छ भन्ने यिनीहरूको विचार हुन्छ। त्यसैले यहाँ रानीहरूले रातमा न्याउलीले गीत गाउनु, मन्द-मन्द हावा बग्नु आदि सबैलाई श्रीकृष्णसँगै लगी जोडेका छन्। यहाँ रानीहरूले दश थरी प्रतीकहरूलाई सम्बोधन गर्दै श्रीकृष्णप्रतिको आफ्नो प्रेमभाव एवं विरहवेदनालाई प्रकट गरेका छन्। ती हुन्– न्याउली, चखेवा, समुद्र, चन्द्रमा, मलयवायु, बादल, कोइली, पहाड, नदी र हाँस।

अनेक लीलाहरू गरी भगवान् सुत्नुभएपछि छट्पटाइरहेका रानीहरूले न्याउली चरी रोएको सुने। यसबाट भगवान्को सुताइमा विघ्न पर्ला कि ? भन्ने डर पनि उनीहरूलाई भयो। यद्यपि ती सबै कृष्णविरहमा छट्पटाइरहेका थिए। तर तिनीहरू रातभरि श्रीकृष्ण जागा रही हामीसँग खेल्नुहोस् भन्ने पनि चाहँदैनथे। श्रीकृष्णको विश्राम नै उनीहरूलाई प्रिय थियो, किनभने उनीहरूले आफ्नो लागि नभई श्रीकृष्णको सुखका लागि नै उहाँलाई प्रेम गरेका थिए। यसैले ती रानीहरूले राति-राति कराई श्रीकृष्णको निद्रा नबिथोल्न यहाँ न्याउलीलाई आग्रह गरेका छन्। श्रीकृष्णका प्रेमीहरू कृष्णलाई छाडेर सम्पूर्ण जगत् स्त्रीरूप हो भन्ने ठान्दछन्। ती रानीहरूले पनि सम्पूर्ण जगत् स्त्रीरूप भएको र जहाँ जे-जे पनि दुःख आदि छन्, ती सबैको हेतु भगवान्को विरह नै भएको अनुमान लगाएका छन्। यस प्रसङ्गमा वल्लभाचार्य लेख्नुहुन्छ– **सर्वेषां भगवानेव एक पतिरिति या काचित् दुःखं प्राप्नोति तत्र भगवद्विरह एव हेतुः** अर्थात् सबै प्राणीहरूका एक मात्र पति भगवान् नै हुनुहुन्छ। पतिको वियोगमा पत्नीहरू सबैभन्दा बढी दुःखी हुन्छन्। त्यसकारण संसारमा जानी-नजानी जति दुःख भएका छन्, ती सबै परमात्मासँग वियोग भएकाले नै उत्पन्न भएका हुन् भन्ने धारणाले विचार गर्दा संसारका सारा दुःखहरूको मूल परमात्मालाई बिर्सनु नै हो भन्ने सिद्ध हुन्छ। यसरी न्याउली चरी राति-राति रुनु पनि श्रीकृष्णको विरहकै कारणले भएको हो भन्ने रानीहरूको विश्वास छ। आफूहरू जसरी कमलनयन श्रीकृष्णको नेत्रबाणले विद्ध भएकाले दुःखी भएको हो, त्यसै गरी न्याउलीहरू पनि भगवान्को विरहकै कारणले रोइरहेका छन् भन्ने

कृष्णपत्नीहरूको विचार छ। **गाढनिर्भिन्नचेताः** अर्थात् हृदय पूर्णतः विद्ध भएकाले जसरी हामी सुत्न नसकी दुःखी छौ, त्यसै गरी तिमी पनि दुःखी भएकी हौ कि भन्ने रानीहरूको प्रश्न हो। यसप्रकार यो प्रसङ्गमा रानीहरूले प्रेमको गाढा अवस्थामा पुगी स्वयं प्रियतमलाई पनि बिर्सिएको बताइएको छ।

**नेत्रे निमीलयसि नक्तमदृष्टबन्धु-**
**स्त्वं रोरवीषि करुणं बत चक्रवाकि।**
**दास्यं गता वयमिवाच्युतपादजुष्टां**
**किं वा स्रजं स्पृहयसे कवरेण वोढुम्॥ १६॥**

**पदार्थ–**
**चक्रवाकि** = हे चखेवी
**त्वं** = तिमी
**नक्तं** = रातमा
**नेत्रे** = आँखा
**निमीलयसि** = चिम्लिन्छ्यौ
**बत** = निश्चय नै
**अदृष्टबन्धुः** = आफ्ना पतिलाई नदेख्नाले
**करुणं** = करुण स्वरले
**रोरवीषि** = रोइरहेकी छ्यौ
**किं वा** = के
**दास्यं** = दासी
**गता** = बनी
**वयं इव** = हामी झैँ
**अच्युतपादजुष्टां** = श्रीकृष्णको पाउमा चढाइएको
**स्रजं** = मालालाई
**कवरेण** = चुल्ठोमा
**वोढुं** = बोक्न
**स्पृहयसे** = चाहन्छ्यौ

**वाक्यार्थ–** हे चखेवी ! रातमा आँखा चिम्लिई तिमी आफ्ना पति हराए झैँ करुण स्वरले किन रोइरहेकी छ्यौ ? के तिमी पनि भगवान्‌की दासी बनी हामीले झैँ श्रीकृष्णको चरणमा चढाइएको मालालाई चुल्ठोमा धारण गर्न खोजी रोएकी हौ ?

**भो भोः सदा निष्टनसे उदन्व-**
**न्नलब्धनिद्रोऽधिगतप्रजागरः।**
**किं वा मुकुन्दापहृतात्मलाञ्छनः**
**प्राप्तां दशां त्वं च गतो दुरत्ययाम्॥ १७॥**

**पदार्थ–**
**अलब्धनिद्रः** = कहिल्यै ननिदाउने
**अधिगतप्रजागरः** = सधैँ जाग्ने रोग लागेको
**भो भोः उदन्वन्** = हे समुद्र तिमी
**सदा** = सधैँ
**निष्टनसे** = गर्जिरहन्छौ
**किं वा** = के
**मुकुन्दापहृतात्मलाञ्छनः** = मुकुन्दद्वारा धैर्य, गाम्भीर्य आदि सबै स्वाभाविक गुणहरू खोसिएका
**त्वं च** = तिमी पनि
**प्राप्तां** = हामीले पाएको झैँ
**दुरत्ययां** = शमन गर्नै नसकिने
**दशां** = अवस्थामा
**गतः** = प्राप्त भएका हौ

**वाक्यार्थ–** हे समुद्र ! तिमी कहिले पनि ननिदाई गर्जिरहन्छौ ? मानौँ तिमीलाई सधैँ जागिरहने रोग लागेको छ। अथवा तिमी पनि मुकुन्दद्वारा सर्वस्व चोरिएका हामी झैँ आफ्ना धैर्य आदि स्वाभाविक गुणहरू चोरिनाले पार गर्नै नसकिने दुर्दशामा प्राप्त भएका हौ ?

**त्वं यक्ष्मणा बलवतासि गृहीत इन्दो**
**क्षीणस्तमो न निजदीधितिभिः क्षिणोषि।**
**कच्चिन्मुकुन्दगदितानि यथा वयं त्वं**
**विस्मृत्य भोः स्थगितगीरुपलक्ष्यसे नः॥ १८॥**

**पदार्थ–**
**इन्दो** = हे चन्द्रमा
**त्वं** = तिमी
**बलवता** = बलिष्ठ
**यक्ष्मणा** = क्षयरोगद्वारा
**गृहीतः** = ग्रस्त भएका
**असि** = छौ
**क्षीणः** = त्यसैले क्षीण भएर
**निजदीधितिभिः** = आफ्ना किरणहरूद्वारा
**तमः** = अन्धकारलाई
**न क्षिणोषि** = नष्ट गर्न सक्दैनौ
**त्वं** = तिमी
**कच्चित्** = के
**यथा वयं** = हामी जसरी
**मुकुन्दगदितानि** = मुकुन्दले बोलेका मिठा वचनहरूलाई
**विस्मृत्य** = बिर्सिएर
**स्थगितगीः** = बोली बन्द भएका त होइनौ
**भोः** = हे चन्द्र
**नः** = हामीहरूलाई
**उपलक्ष्यसे** = तिमी त्यस्तै लाग्छौ

**वाक्यार्थ–** हे चन्द्रमा ! तिमीलाई भयङ्कर क्षयरोगले ग्रस्त पारेको छ। त्यसद्वारा क्षीण भएका कारण तिमीले आफ्ना किरणद्वारा अन्धकारलाई राम्ररी हटाउन पनि सकिरहेका छैनौ। के तिमी पनि हामी झैँ मुकुन्दका मिठा वचनहरूलाई बिर्सिएर त्यसैको चिन्तामा बोली बन्द भई बसेका हौ ? हामीलाई त तिमी त्यस्तै लाग्छौ।

**किन्त्वाचरितमस्माभिर्मलयानिल तेऽप्रियम्।**
**गोविन्दापाङ्गनिर्भिन्ने हृदीरयसि नः स्मरम्॥ १९॥**

**पदार्थ–**
**मलयानिल** = हे मलय पर्वतबाट वहने वायु
**अस्माभिः** = हामीहरूद्वारा
**ते** = तिम्रो
**अप्रियं** = अप्रिय
**किं तु** = के नै
**आचरितं** = गरिएको थियो र
**गोविन्दापाङ्गनिर्भिन्ने** = गोविन्दको नजरको कर्के हेराइबाट छिया-छिया भएको
**नः** = हाम्रो
**हृदि** = हृदयमा
**स्मरं** = झन् कामदेवको
**ईरयसि** = सञ्चार गरिरहेछौ

**वाक्यार्थ–** हे मलय पर्वतबाट वहने वायु ! हामीले तिम्रो के नै नराम्रो गरेका थियौँ र ? तिमी गोविन्दको नजरको कर्के हेराइबाट विद्ध भई छिया-छिया बनेको हाम्रो हृदयमा झनै कामदेवको सञ्चार गरिरहेछौ।

**विवरण–** यस श्लोकमा श्रीकृष्णका पटरानीहरूले मलय पर्वतबाट बग्ने बायुलाई नबग्न अनुरोध गरेका छन्। प्रेमको उच्चतम स्थितिमा सम्पूर्ण संसार प्रियमय प्रतीत हुन्छ। प्रियको विरहमा छट्पटाइरहेको व्यक्ति सम्पूर्ण वस्तुहरूद्वारा आफ्नै प्रियतमको सम्झना गर्दछ। उसलाई संसारभरका सबै राम्रा वस्तुहरूले उही प्रियतमकै सम्झना दिलाइरहन्छन्। दुःखमा जति आफ्नो प्रियलाई सम्झ्यो, त्यति त्यसको वेग बढ्दछ। प्रियविरहको एउटै दुःख त खपिनसक्नु भएको वेला झन् उनैको सम्झना गराइदिई त्यो वेगलाई असह्य पारिदिने जुनसुकै वस्तुप्रति पनि प्रेमी व्यक्ति त्यसो नगर्न प्रार्थना गर्दछ। प्रेमीको हृदय यति विचित्र हुन्छ कि ऊ प्रियविरहको वेलामा उनलाई सम्झाउने खालका कुराहरूलाई नसुन्ने या नअपनाउने निश्चय गर्दागर्दै पनि एउटा अव्यक्त आकर्षणले ती वस्तुप्रति ऊ स्वतः ममतामय बनेको हुन्छ। प्रियतमलाई सम्झाउने सम्पूर्ण वस्तुहरू उसका लागि ग्राह्य हुन्छन्, चाहे त्यसबाट उसमा विरहको अगो झन् किन नदन्कियोस्। यसकारण प्रेमी व्यक्ति आफ्ना प्रियतमलाई सम्झाउने वस्तुहरूलाई पनि छाड्न सक्दैन र त्यसलाई अपनाइरहन्छ। सायद प्रियविरहमा आफ्ना प्रियलाई झन्–झन् प्रगाढ भावले सम्झँदै छट्पटाउनु र उनलाई छोड्न नसक्नु प्रेमी व्यक्तिको जीवन एवं अस्तित्व भइसकेको हुन्छ। व्यक्ति जति दुःख परे पनि आफ्नो अस्तित्वलाई छाड्न कहाँ चाहन्छ र ? प्रेमीका लागि प्रियतमको सम्झना नै एक मात्र अस्तित्व भएकाले ऊ त्यसलाई जसरी भए पनि स्वीकार्दछ। यो अनन्त आनन्द मिसिएको अनन्त विरहको कथा हो, जसमा प्रेमी साधक आफ्ना प्रियतम परमात्मामा आफ्नो अस्तित्वलाई मिलाइदिन्छ।

यहाँ रानीहरूले मलय पर्वतको वायुबाट श्रीकृष्णको सम्झना गरेका छन्। वायु बग्नु एउटा स्वाभाविक घटना हो तर श्रीकृष्णको शरीरबाट मलय पर्वतको चन्दन जस्तै सुगन्ध निस्कने हुनाले त्यो मलयाचलको वायुले श्रीकृष्णको सम्झना दिलाउँछ। श्रीकृष्णको सम्झना दिलाई **स्मर** अर्थात् कृष्णमिलनको कामनालाई तीव्र पारिदिने हुनाले रानीहरूले त्यो वायुलाई अप्रियकरी भनेका छन्। तर यो भाषाभित्र प्रेमको प्रियता लुकेको स्पष्ट नै देखिन्छ। रानीहरू भन्दछन्— हाम्रो हृदय यसै त गोविन्दका आँखाका कर्के हेराइले छिन्नभिन्न भइसकेको छ। झन् त्यसमाथि तिमी असह्य हुने गरी प्रियमिलनकै कामना बढाउँदै छौ। यसै फाटिसकेको हाम्रो मन त्यो तीव्र कामनाको वेगद्वारा झनै धुजाधुजा हुनेछ। हामीले तिम्रो अप्रिय काम के नै गरेका छौँ र हामीलाई यति दुःख दिन्छौ ? भन्ने प्रश्न श्रीकृष्णका रानीहरूद्वारा मलय पर्वतको वायुसँग सोधिएको छ।

**मेघ श्रीमंस्त्वमसि दयितो यादवेन्द्रस्य नूनं**
**श्रीवत्साङ्कं वयमिव भवान् ध्यायति प्रेमबद्धः।**
**अत्युत्कण्ठः शवलहृदयोऽस्मद्विधो बाष्पधाराः**
**स्मृत्वा स्मृत्वा विसृजसि मुहुर्दुःखदस्तत्प्रसङ्गः॥ २०॥**

पदार्थ– | **श्रीमन् मेघ** = श्रीमान् मेघ | **त्वं** = तिमी

**नूनं** = निश्चय नै
**यादवेन्द्रस्य** = यदुश्रेष्ठ श्रीकृष्णका
**दयितः** = प्रिय
**असि** = हौ
**भवान्** = तिमी
**वयं इव** = हामी झैं
**प्रेमबद्धः** = प्रेमयुक्त भई
**श्रीवत्साङ्कं** = श्रीवत्सचिह्नले युक्त श्रीकृष्णलाई
**ध्यायति** = चिन्तन गर्दछौ
**शवलहृदयः** = चिन्तायुक्त हृदय र
**अत्युत्कण्ठः** = कृष्ण मिलनको तीव्र उत्कण्ठाले युक्त तिमी
**अस्मद्विधः** = हामीले झैं
**स्मृत्वा स्मृत्वा** = बारम्बार श्रीकृष्णलाई सम्झिई
**मुहुः** = पटकपटक
**बाष्पधाराः** = आँसुका धारा झैं
**विसृजसि** = जल बर्साइरहेका छौ
**तत्प्रसङ्गः** = श्रीकृष्णसँगको मित्रता
**दुःखदः** = अत्यन्त कष्टदायक हुने रहेछ

**वाक्यार्थ—** हे मेघ ! तिमी पक्कै पनि श्रीकृष्णका प्रिय हौ, किनभने हामीले झैं प्रेमयुक्त भई तिमी पनि श्रीकृष्णलाई स्मरण गरिरहेका छौ। चिन्ताले युक्त भएको तिम्रो हृदयमा कृष्णमिलनको तीव्र उत्कण्ठा भए झैं लाग्छ। किनभने तिमी हामीले बारम्बार श्रीकृष्णलाई सम्झिई आँसुका धारा चुहाए झैं जलधारा चुहाइरहेका छौ। साँच्चै उनीसँगको मित्रता अत्यन्त कष्टदायक हुने रहेछ।

**प्रियरावपदानि भाषसे मृतसञ्जीविकयानया गिरा।**
**करवाणि किमद्य ते प्रियं वद मे वल्गितकण्ठ कोकिल॥ २१॥**

पदार्थ—
**वल्गितकण्ठ** = सुरिलो घाँटी भएको
**कोकिल** = हे कोइली
**मृतसञ्जीविकया** = मरेकोलाई पनि बचाउन सक्ने
**अनया** = यस्तो
**गिरा** = अमृतमय स्वरद्वारा
**प्रियरावपदानि** = प्रियभाषी श्रीकृष्णका झैं मिठा शब्दहरू
**भाषसे** = बोलिरहेका छौ
**अद्य** = आज
**ते** = तिम्रो
**किं** = के
**प्रियं** = उपकार
**करवाणि** = गरौं
**मे** = मलाई
**वद** = बताऊ

**वाक्यार्थ—** हे सुरिलो घाँटी भएको कोइली ! तिम्रो अमृतमय मधुर स्वर मरेका मान्छेलाई पनि बचाउँछ कि भने झैं छ। प्रियभाषी श्रीकृष्णले झैं तिमीले पनि मिठा शब्दहरू प्रयोग गरिरहेका छौ। यसैले आज म तिमीलाई के उपकार गरूँ, मलाई बताऊ।

**न चलसि न वदस्युदारबुद्धे क्षितिधर चिन्तयसे महान्तमर्थम्।**
**अपि बत वसुदेवनन्दनाङ्घ्रिं वयमिव कामयसे स्तनैर्विधर्तुम्॥ २२॥**

पदार्थ—
**उदारबुद्धे** = उदार बुद्धि भएका
**क्षितिधर** = हे पर्वतराज
**न चलसि** = तिमी चल्दैनौ
**न वदसि** = तिमी बोल्दनौ
**महान्तं** = कुनै ठुलो
**अर्थम्** = कुरालाई
**चिन्तयसे** = सोचिरहे झैं लाग्छौ
**बत** = निश्चय नै
**वयं इव** = हामीजस्तै
**वसुदेवनन्दनाङ्घ्रिं** = वसुदेवपुत्र श्रीकृष्णको चरणलाई

**स्तनैः** = आफ्ना स्तनद्वारा
**विधर्तुम्** = धारण गर्न
**अपि कामयसे** = के चाहन्छौ र

**वाक्यार्थ–** उदारबुद्धि भएका हे पर्वतराज ! तिमी न चल्दछौ, न बोल्दछौ। कुनै ठुलै कुरा सोचिरहे झैँ लाग्दछौ। के तिमीले पनि हामीले झैँ आफ्ना चुचुरारूपी स्तनमा वसुदेवपुत्र श्रीकृष्णका चरणलाई धारण गर्न खोजिरहेका छौ ?

**शुष्यद्ध्रदाः कर्शिता बत सिन्धुपत्न्यः**
**सम्प्रत्यपास्तकमलश्रिय इष्टभर्तुः।**
**यद्वद् वयं मधुपतेः प्रणयावलोक-**
**मप्राप्य मुष्टहृदयाः पुरुकर्शिताः स्म ॥ २३ ॥**

पदार्थ–
**सिन्धुपत्न्यः** = हे नदीहरू
**सम्प्रति** = ग्रीष्मऋतुको यो समयमा (तिमीहरू)
**बत** = निश्चय नै
**शुष्यद्ध्रदाः** = ह्रद (रह)हरू सुक्नाले
**अपास्तकमलश्रियः** = कमलपुष्पको शोभा हराएका र
**कर्शिताः** = दुब्ली, पातली भएका छौ
**यद्वत्** = जसरी
**वयं** = हामीहरू
**इष्टभर्तुः** = आफ्ना प्रिय पति
**मधुपतेः** = श्रीकृष्णको
**प्रणयावलोकं** = प्रेमपूर्ण हेराइलाई
**अप्राप्य** = नपाएर
**मुष्टहृदयाः** = हृदय चोरिएका भएका र
**पुरुकर्शिताः** = ज्यादै दुब्लाएका
**स्मः** = छौँ

**वाक्यार्थ–** हे नदीहरू ! यो ग्रीष्म ऋतुको समयमा (आफ्ना पति समुद्रबाट वर्षाको जल नपाउनाले) के तिमीहरू दुब्लाएका हौ ? तिमीहरूका ह्रद (रह)हरू सुकेका छन् र त्यसमा रहने कमलपुष्पको शोभा पनि अचेल हराएको छ। हामीहरू पनि यसै गरी आफ्ना प्रिय पति श्रीकृष्णको प्रेमपूर्ण हेराइलाई नपाउनाले हृदय चोरिएर अत्यन्त दुब्लाएका छौँ।

**हंस स्वागतमास्यतां पिब पयो ब्रूह्यङ्ग शौरेः कथां**
**दूतं त्वां नु विदाम कच्चिदजितः स्वस्त्यास्त उक्तं पुरा।**
**किं वा नश्चलसौहृदः स्मरति तं कस्माद् भजामो वयं**
**क्षौद्रालापय कामदं श्रियमृते सैवैकनिष्ठा स्त्रियाम् ॥ २४ ॥**

पदार्थ–
**हंस** = हे हाँस
**स्वागतं** = स्वागत छ
**आस्यतां** = बस
**पयः** = दुध
**पिब** = पिऊ
**अङ्ग** = हे प्रिय हाँस
**शौरेः** = शूरका सन्तान श्रीकृष्णका
**कथां** = कथा
**ब्रूहि** = भन
**त्वां नु** = तिमीलाई
**दूतं** = उनकै दूत भनी
**विदाम** = जान्दछौँ
**कच्चित्** = के
**अजितः** = श्रीकृष्ण
**स्वस्ति** = सन्चै
**आस्ते** = हुनुहुन्छ

**किं वा** = के
**चलसौहृदः** = अस्थिर प्रेमसम्बन्ध भएका उहाँ
**नः** = हामीलाई
**पुरा** = पहिलेका
**उक्तं** = एकान्तका कुराकानीहरूलाई
**स्मरति** = सम्झिनुहुन्छ
**क्षौद्र** = श्रीकृष्णका हे साना दूत
**तं** = उहाँलाई
**वयं** = हामीहरू
**कस्मात्** = किन
**भजामः** = प्रेम गरौँ
**कामदं** = सबैका मनोरथ पूर्ण गर्ने उहाँसँग
**आलापय** = कुराकानी गराऊ
**श्रियं ऋते** = के लक्ष्मीलाई छाडी उहाँ आउन सक्नुहुन्न
**स्त्रियां** = स्त्रीहरूमध्ये
**सा एव** = केवल उनी नै
**एकनिष्ठा** = अनन्य प्रेमिका छिन्

**वाक्यार्थ–** हे हाँस ! तिमीलाई स्वागत छ, यहाँ बस र दुध पिऊ। श्रीकृष्णका कथाहरू भन। तिमीलाई हामी उहाँकै दूत ठान्दछौँ। के श्रीकृष्ण सन्चै हुनुहुन्छ ? उहाँको प्रेमसम्बन्ध असाध्यै अस्थिर छ। के उहाँले हामीलाई र हामीसँग पहिला एकान्तमा गरेका कुराकानीहरूलाई सम्झिनुहुन्छ ? हामी उहाँसँग किन प्रेम गरौँ ? हे श्रीकृष्णका साना दूत ! सबैका मनोरथ पूर्ण गर्ने उहाँसँग हाम्रो पनि कुरा गराऊ। के उहाँ लक्ष्मीलाई छाडी हामीकहाँ आउन र हामीसँग बोल्न सक्नुहुन्न ? के स्त्रीहरूमध्ये लक्ष्मी मात्रै उहाँकी अनन्य प्रेमिका छिन् ? (हामी प्रेमिका होइनौँ र ?)

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इतीदृशेन भावेन कृष्णे योगेश्वरेश्वरे ।**
**क्रियमाणेन माधव्यो लेभिरे परमां गतिम् ॥ २५ ॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**योगेश्वरेश्वरे** = योगेश्वरहरूका पनि ईश्वर
**कृष्णे** = भगवान् श्रीकृष्णप्रति
**क्रियमाणेन** = गरिएको
**ईदृशेन** = यस्तो
**भावेन** = अखण्ड भावनाद्वारा
**माधव्यः** = श्रीकृष्णपत्नीहरूले
**परमां** = परम
**गतिं** = गतिलाई
**लेभिरे** = प्राप्त गरे

**वाक्यार्थ–** यसप्रकार सबै श्रीकृष्णपत्नीहरूको योगेश्वरहरूका पनि ईश्वर भगवान् श्रीकृष्णप्रति गरेको यस्तो अखण्ड भावनाले ती सबैले परम गतिलाई प्राप्त गरे।

**श्रुतमात्रोऽपि यः स्त्रीणां प्रसह्याकर्षते मनः ।**
**उरुगायोरुगीतो वा पश्यन्तीनां कुतः पुनः ॥ २६ ॥**

**पदार्थ–**
**उरुगायोरुगीतः** = अनेक श्रेष्ठ गायकहरूद्वारा अनेक प्रकारले चरित्र गाइएका
**यः** = जसले
**श्रुतमात्रः अपि** = केवल सुन्नाले पनि
**प्रसह्य** = हठात्
**स्त्रीणां** = स्त्रीहरूको
**मनः** = मनलाई
**आकर्षते** = आकृष्ट गर्दछन् भने
**पश्यन्तीनां वा** = उहाँलाई देख्नेहरूको त
**पुनः** = झन्
**कुतः** = के कुरा

**वाक्यार्थ–** श्रीकृष्णको लीलाचरित्रलाई अनेक व्यक्तिहरूले अनेक प्रकारले गाएका छन् जसलाई सुन्दा मात्र पनि स्त्रीहरूको मन श्रीकृष्णप्रति हठात् आकृष्ट हुन्छ भने उहाँलाई नै देख्ने स्त्रीहरूको त झन् के कुरा ?

**याः सम्पर्यचरन् प्रेम्णा पादसंवाहनादिभिः।**

**जगद्गुरुं भर्तृबुद्ध्या तासां किं वर्ण्यते तपः॥ २७॥**

**पदार्थ–**
**याः** = जसले
**जगद्गुरुं** = जगत्का गुरु श्रीकृष्णलाई
**प्रेम्णा** = प्रेमपूर्वक
**पादसंवाहनादिभिः** = चरणसेवा आदिद्वारा
**भर्तृबुद्ध्या** = पतिभावले
**सम्पर्यचरन्** = सेवा गरे
**तासां** = ती स्त्रीहरूको
**तपः** = तपस्या
**किं** = कसरी
**वर्ण्यते** = बताउन सकिन्छ

**वाक्यार्थ–** जुन स्त्रीहरूले श्रीकृष्णको चरणसेवा आदि गरी प्रेमपूर्वक पतिभावले उहाँको आराधना गरे त्यस्ता यिनीहरूको पूर्वजन्मको तपस्यालाई कसरी बताउन सकिन्छ र ?

**एवं वेदोदितं धर्ममनुतिष्ठन् सतां गतिः।**

**गृहं धर्मार्थकामानां मुहुश्चादर्शयत् पदम्॥ २८॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**सतां** = सत्पुरुषहरूका
**गतिः च** = एक मात्र गन्तव्य भएका भगवान्ले
**वेदोदितं** = वेदले बताएको
**धर्मम्** = धर्मलाई
**मुहुः** = बारम्बार
**अनुतिष्ठन्** = पालना गर्दै
**धर्मार्थकामानां** = धर्म, अर्थ र काम यी सबैको
**पदं** = प्राप्तिस्थान भएको
**गृहं** = घर नै हो भनी
**अदर्शयत्** = देखाउनुभयो

**वाक्यार्थ–** यसप्रकार सत्पुरुषहरूका एक मात्र प्राप्तव्य भगवान् श्रीकृष्णले वेदले बताएको धर्मको पालना गर्दै बारम्बार धर्म, अर्थ र काम यी तीनै पुरुषार्थको एक मात्र प्राप्तिस्थान गृहस्थाश्रम नै हो भन्ने कुरा देखाउनुभयो।

**आस्थितस्य परं धर्मं कृष्णस्य गृहमेधिनाम्।**

**आसन् षोडशसाहस्रं महिष्यश्च शताधिकम्॥ २९॥**

**पदार्थ–**
**गृहमेधिनां** = गृहस्थ आश्रमका लागि उपयुक्त
**परं** = श्रेष्ठ
**धर्मं** = धर्मको
**आस्थितस्य** = आश्रय लिएका
**कृष्णस्य** = श्रीकृष्णका
**शताधिकं** = सयसंख्याले बढी
**षोडशसाहस्रं** = सोह्र हजार
**महिष्यः च** = रानीहरू
**आसन्** = थिए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! गृहस्थ आश्रमका लागि उपयुक्त श्रेष्ठ धर्मको अवलम्वन गर्नुहुने भगवान् श्रीकृष्णका सोह्र हजार एकसय रानीहरू थिए।

**तासां स्त्रीरत्नभूतानामष्टौ याः प्रागुदाहृताः।**

**रुक्मिणीप्रमुखा राजंस्तत्पुत्राश्चानुपूर्वशः॥ ३०॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**स्त्रीरत्नभूतानां** = स्त्रीहरूमध्ये अतिउत्तम भएका
**तासां** = तीमध्ये
**अष्टौ** = आठ ओटी
**याः** = जुन जुन
**रुक्मिणीप्रमुखाः** = रुक्मिणी आदि रानीहरू
**तत्पुत्राः च** = तिनका मुख्य पुत्रहरू पनि
**अनुपूर्वशः** = क्रमैसँग
**प्राक् उदाहृताः** = पहिल्यै भनिसकेँ

**वाक्यार्थ–** हे परीक्षित् ! ती हजारौँ श्रेष्ठ स्त्रीहरूमध्ये पनि रुक्मिणी आदि आठ प्रमुख पटरानीहरू थिए। तिनका प्रमुख पुत्रहरूको विषयमा पनि मैले क्रमशः पहिल्यै बताइसकेँ।

**एकैकस्यां दश दश कृष्णोऽजीजनदात्मजान्।**

**यावत्य आत्मनो भार्या अमोघगतिरीश्वरः॥ ३१॥**

**तेषामुद्दामवीर्याणामष्टादश महारथाः।**

**आसन्नुदारयशसस्तेषां नामानि मे शृणु॥ ३२॥**

**पदार्थ–**
**अमोघगतिः** = अमोघ गति भएका
**ईश्वरः** = सर्वसमर्थ
**कृष्णः** = श्रीकृष्णले
**यावत्यः** = जति
**आत्मनः** = आफ्ना
**भार्याः** = पत्नीहरू थिए ती सबै
**एकैकस्यां** = प्रत्येक पत्नीमा
**दश दश** = दश-दश
**आत्मजान्** = पुत्रहरू
**अजीजनत्** = जन्माउनुभयो
**उद्दामवीर्याणां** = प्रबल पराक्रम भएका
**तेषां** = तिनीहरूमध्ये
**अष्टादश** = अठार ओटा
**उदारयशसः** = प्रसिद्धकीर्ति भएका
**महारथाः** = महारथीहरू
**आसन्** = थिए
**तेषां** = तिनीहरूका
**नामानि** = नाम
**मे** = मबाट
**शृणु** = सुन्नुहोस्

**वाक्यार्थ–** अमोघ गति भएका सर्वसमर्थ भगवान् श्रीकृष्णले आफ्ना पत्नीहरूमध्ये हरेक पत्नीमा दश-दश जना पुत्रहरू उत्पन्न गर्नुभयो। प्रबल पराक्रमी तिनीहरूमध्ये अठार जना महारथीहरू प्रसिद्धकीर्ति भएका थिए। तिनीहरूको नाम म भन्छु, सुन्नुहोस्।

**प्रद्युम्नश्चानिरुद्धश्च दीप्तिमान् भानुरेव च।**

**साम्बो मधुर्बृहद्भानुश्चित्रभानुर्वृकोऽरुणः॥ ३३॥**

**पुष्करो वेदबाहुश्च श्रुतदेवः सुनन्दनः।**
**चित्रबाहुर्विरूपश्च कविर्न्यग्रोध एव च॥ ३४॥**
**एतेषामपि राजेन्द्र तनुजानां मधुद्विषः।**
**प्रद्युम्न आसीत् प्रथमः पितृवद्रुक्मिणीसुतः॥ ३५॥**

पदार्थ–
**प्रद्युम्नः च** = प्रद्युम्न
**अनिरुद्धः च** = अनिरुद्ध
**दीप्तिमान्** = दीप्तिमान्
**भानुः एव च** = भानु
**साम्बः** = साम्ब
**मधुः** = मधु
**बृहद्भानुः** = बृहद्भानु
**चित्रभानुः** = चित्रभानु
**वृकः** = वृक
**अरुणः** = अरुण
**पुष्करः** = पुष्कर
**वेदबाहुः च** = वेदबाहु
**श्रुतदेवः** = श्रुतदेव
**सुनन्दनः** = सुनन्दन
**चित्रबाहुः** = चित्रबाहु
**विरूपः च** = विरूप
**कविः** = कवि
**न्यग्रोधः एव च** = न्यग्रोध
**राजेन्द्र** = हे महाराज परीक्षित्
**मधुद्विषः** = भगवान् श्रीकृष्णका
**एतेषां** = यी
**तनुजानां अपि** = पुत्रहरूमध्ये पनि
**प्रथमः** = जेठा
**रुक्मिणीसुतः** = रुक्मिणीका छोरा
**प्रद्युम्नः** = प्रद्युम्न
**पितृवत्** = आफ्ना पितासमान
**आसीत्** = थिए

**वाक्यार्थ–** प्रद्युम्न, अनिरुद्ध, दीप्तिमान्, भानु, साम्ब, मधु, बृहद्भानु, चित्रभानु, वृक, अरुण, पुष्कर, वेदबाहु, श्रुतदेव, सुनन्दन, चित्रबाहु, विरूप, कवि र न्यग्रोध यी अठार जना महारथीहरू हुन्। यिनीहरूमध्ये पनि जेठा रुक्मिणीपुत्र प्रद्युम्न आफ्ना पिता श्रीकृष्ण जस्तै थिए।

**स रुक्मिणो दुहितरमुपयेमे महारथः।**
**तस्मात् सुतोऽनिरुद्धोऽभून्नागायुतबलान्वितः॥ ३६॥**

पदार्थ–
**सः** = ती
**महारथः** = महारथीले
**रुक्मिणः** = रुक्मीकी
**दुहितरं** = छोरीलाई
**उपयेमे** = विवाह गरे
**तस्मात्** = तिनीबाट
**नागायुतबलान्वितः** = दश हजार हात्तीका बल भएका
**सुतः** = पुत्र
**अनिरुद्धः** = अनिरुद्ध
**अभूत्** = उत्पन्न भए

**वाक्यार्थ–** ती महारथी प्रद्युम्नले रुक्मीकी पुत्रीसँग विवाह गरे। तिनबाट दश हजार हात्तीको बल भएका पुत्र अनिरुद्ध उत्पन्न भए।

**स चापि रुक्मिणः पौत्रीं दौहित्रो जगृहे ततः।**
**वज्रस्तस्याभवद् यस्तु मौषलादवशेषितः॥ ३७॥**

पदार्थ–
**रुक्मिणः** = रुक्मीका
**दौहित्रः** = नाति (छोरीका छोरा)

**सः च** = ती अनिरुद्धले
**पौत्रीं** = रुक्मीकै नातिनीलाई
**जगृहे** = ग्रहण गरे
**ततः अपि** = तिनबाट
**तस्य** = उनको
**वज्रः** = वज्र नामका पुत्र
**अभवत्** = भए
**यः तु** = जो
**मौषलात्** = मुसलबाट भएको यदुवंशको विनाशबाट
**अवशेषितः** = बाँकी रहेका थिए

**वाक्यार्थ–** रुक्मीका छोरीका छोरा अनिरुद्धले रुक्मीकै नातिनीसँग विवाह गरे र ती दुईबाट वज्रनामक पुत्र उत्पन्न भए। यी वज्र मुसलबाट भएको यदुवंशको नाशबाट बचेका थिए।

**प्रतिबाहुरभूत् तस्मात् सुबाहुस्तस्य चात्मजः।**
**सुबाहोः शान्तसेनोऽभूच्छतसेनस्तु तत्सुतः॥ ३८॥**

**पदार्थ–**
**तस्मात्** = ती वज्रबाट
**प्रतिबाहुः** = प्रतिबाहु
**अभूत्** = भए
**तस्य** = तिनका
**आत्मजः च** = छोरा चाहिँ
**सुबाहुः** = सुबाहु थिए
**सुबाहोः** = सुबाहुबाट
**शान्तसेनः** = शान्तसेन
**अभूत्** = भए
**तत्सुतः तु** = तिनका छोरा
**शतसेनः** = शतसेन थिए

**वाक्यार्थ–** वज्रबाट प्रतिबाहु र प्रतिबाहुबाट सुबाहु उत्पन्न भए। सुबाहुका छोरा शान्तसेन थिए भने उनका शतसेन नामका छोरा थिए।

**न ह्येतस्मिन् कुले जाता अधना अबहुप्रजाः।**
**अल्पायुषोऽल्पवीर्याश्च अब्रह्मण्याश्च जज्ञिरे॥ ३९॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**एतस्मिन्** = यो
**कुले** = कुलमा
**अधनाः** = निर्धन
**अबहुप्रजाः च** = थोरै सन्तति भएका
**न जाताः** = जन्मिएनन्
**अल्पायुषः** = थोरै आयु भएका
**अल्पवीर्याः** = थोरै पराक्रम भएका
**अब्रह्मण्याः च** = ब्राह्मणभक्त नहुने
**न जज्ञिरे** = जन्मिएनन्

**वाक्यार्थ–** निश्चय नै यो यदुकुलमा थोरै सन्तति भएका र धनरहित व्यक्तिहरू जन्मिएनन्। थोरै आयु, थोरै पराक्रम भएका र ब्राह्मणभक्तिहीन व्यक्तिहरू पनि कोही भएनन्।

**यदुवंशप्रसूतानां पुंसां विख्यातकर्मणाम्।**
**सङ्ख्या न शक्यते कर्तुमपि वर्षायुतैर्नृप॥ ४०॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**यदुवंशप्रसूतानां** = यदुवंशमा उत्पन्न भएका
**विख्यातकर्मणां** = प्रख्यात चरित्र भएका
**पुंसां** = व्यक्तिहरूको
**वर्षायुतैः अपि** = दश हजारौं वर्षमा पनि

**सङ्ख्या** = गणना | **कर्तुम्** = गर्न | **न शक्यते** = सकिँदैन

**वाक्यार्थ–** हे परीक्षित् ! यदुवंशमा उत्पन्न भएका यी सबै व्यक्तिहरू प्रख्यात चरित्र भएका थिए। यिनीहरू यति धेरै थिए कि दशौँ हजार वर्ष लगाएर पनि यिनीहरूको गणना गर्न सकिँदैन।

**तिस्रः कोट्यः सहस्राणामष्टाशीतिशतानि च ।**

**आसन् यदुकुलाचार्याः कुमाराणामिति श्रुतम् ॥ ४१ ॥**

पदार्थ–
**कुमाराणां** = यदुकुमारहरूका
**यदुकुलाचार्याः** = आचार्यहरू
**सहस्राणां** = हजार गुणा
**अष्टाशीतिशतानि** = अठासी सयर
**तिस्रः कोट्यः च** = तीन करोड संख्यामा
**आसन् इति** = थिए भन्ने
**श्रुतम्** = सुनिन्छ

**वाक्यार्थ–** यदुकुमारहरूलाई शिक्षादीक्षा दिने आचार्यहरूमात्र तीन करोड अठासी लाख थिए भन्ने सुनिन्छ।

**सङ्ख्यानं यादवानां कः करिष्यति महात्मनाम् ।**

**यत्रायुतानामयुतलक्षेणास्ते स आहुकः ॥ ४२ ॥**

पदार्थ–
**महात्मनां** = उदार चरित्र भएका
**यादवानां** = यादवहरूको
**सङ्ख्यानं** = गणना
**कः** = कसले
**करिष्यति** = गर्न सक्छ
**यत्र** = जहाँ
**सः** = ती
**आहुकः** = उग्रसेन
**अयुतानां** = दश हजार गुणा
**अयुतलक्षेण** = दश लाख सैनिकद्वारा
**आस्ते** = युक्त हुन्थे

**वाक्यार्थ–** उदार हृदय भएका यादवहरूको गणना कसले गर्न सक्छ र ? उग्रसेनका सैनिकहरू नै दश अरब थिए।

**देवासुराहवहता दैतेया ये सुदारुणाः ।**

**ते चोत्पन्ना मनुष्येषु प्रजा दृप्ता बबाधिरे ॥ ४३ ॥**

**तन्निग्रहाय हरिणा प्रोक्ता देवा यदोः कुले ।**

**अवतीर्णाः कुलशतं तेषामेकाधिकं नृप ॥ ४४ ॥**

पदार्थ–
**ये** = जो
**देवासुराहवहताः** = देवासुर संग्राममा मारिएका
**सुदारुणाः** = भयङ्कर
**दैतेयाः** = दैत्यहरू थिए
**ते** = तिनीहरू
**मनुष्येषु** = मनुष्यकुलमा
**उत्पन्नाः** = उत्पन्न भई
**दृप्ताः च** = अभिमानपूर्वक
**प्रजाः** = सम्पूर्ण प्रजाहरूलाई
**बबाधिरे** = दुःख दिन थाले

**तन्निग्रहाय** = तिनको विनाशका लागि
**हरिणा** = भगवान्द्वारा
**प्रोक्ताः** = आदिष्ट भएका
**देवाः** = देवताहरू
**यदोः कुले** = यदुवंशमा
**अवतीर्णाः** = अवतीर्ण भए
**नृप** = हे राजा परीक्षित्
**तेषां** = तिनीहरूको
**एकाधिकं** = एक बढी
**कुलशतम्** = सय कुल थिए

**वाक्यार्थ—** हे परीक्षित् ! देवासुर संग्राममा मारिएका जति भयङ्कर दैत्यहरू थिए, ती सबै मनुष्यलोकमा उत्पन्न भए र तिनीहरूले अभिमानपूर्वक सारा मनुष्यजातिलाई नै दुःख दिन थाले। ती सबैको विनाशको लागि भगवान्ले देवताहरूलाई आदेश दिनुभयो र देवताहरू यदुवंशमा अवतीर्ण भए। त्यसैले यदुवंशीहरूको कुल एक सय एक थियो।

**तेषां प्रमाणं भगवान् प्रभुत्वेनाभवद्धरिः।**
**ये चानुवर्तिनस्तस्य ववृधुः सर्वयादवाः॥ ४५॥**

**पदार्थ—**
**भगवान्** = भगवान्
**हरिः** = श्रीकृष्ण
**प्रभुत्वेन** = प्रमुख भएकाले
**तेषां** = ती सबैको
**प्रमाणं** = आदर्श
**अभवत्** = हुनुहुन्थ्यो
**ये च** = जो-जो
**तस्य** = उहाँका
**अनुवर्तिनः** = अनुयायी
**सर्वयादवाः** = सबै यादवहरू थिए (तिनीहरू)
**ववृधुः** = बढ्दै गए

**वाक्यार्थ—** ती सबै यदुवंशीहरूका प्रमुख एवं आदर्श भगवान् श्रीकृष्ण नै हुनुहुन्थ्यो। यादवहरू भगवान् श्रीकृष्णका अनुयायी भएकाले तिनीहरूको सबै प्रकारले वृद्धि हुँदै गयो।

**शय्यासनाटनालापक्रीडास्नानादिकर्मसु।**
**न विदुः सन्तमात्मानं वृष्णयः कृष्णचेतसः॥ ४६॥**

**पदार्थ—**
**शय्यासनाटनालापक्रीडास्नानादि-कर्मसु** = सुत्ने, बस्ने, हिँड्ने, कुराकानी गर्ने, खेल्ने, नुहाउने आदि सबै कर्महरूमा
**कृष्णचेतसः** = भगवान् श्रीकृष्णमा नै चित्त लागेका
**वृष्णयः** = वृष्णिवंशीहरूले
**आत्मानं** = शरीर
**सन्तं** = रहेको पनि
**न विदुः** = सम्झिँदैनथे

**वाक्यार्थ—** सबै वृष्णिवंशीहरू सुत्ने, बस्ने, हिँड्ने, कुराकानी गर्ने, खेल्ने, नुहाउने आदि सबै कर्महरूमा उनीहरूको चित्त भगवान्मा यसप्रकार लाग्दथ्यो कि, उनीहरूलाई आफ्नो शरीरको नै याद हुँदैनथ्यो।

**तीर्थं चक्रे नृपोनं यदजनि यदुषु स्वःसरित्पादशौचं**
**विद्विट्स्निग्धाः स्वरूपं ययुरजितपरा श्रीर्यदर्थेऽन्ययत्नः।**

**यन्नामामङ्गलघ्नं श्रुतमथ गदितं यत्कृतो गोत्रधर्मः**
**कृष्णस्यैतन्न चित्रं क्षितिभरहरणं कालचक्रायुधस्य ॥ ४७ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**यत्** = जब
**यदुषु** = यदुकुलमा (भगवान्)
**अजनि** = जन्मिनुभयो
**स्वःसरित्पादशौचं** = आफ्नो चरणजल भएको गङ्गारूप
**तीर्थं** = तीर्थलाई
**ऊनं** = कम महत्त्वको
**चक्रे** = बनाइदिनुभयो
**विद्विट्स्निग्धाः** = द्वेष गर्ने र प्रेम गर्नेहरू सबै
**स्वरूपं** = भगवान्कै स्वरूपमा
**ययुः** = प्राप्त भए
**यदर्थे** = जसका लागि
**अन्ययत्नः** = सबै देवताहरूसमेत प्रयास गर्दछन् त्यस्ती
**श्रीः** = लक्ष्मी पनि
**अजितपरा** = भगवत्परायण हुनुहुन्छ
**श्रुतं** = सुनिएको
**अथ** = अथवा
**गदितं** = भनिएको
**यन्नाम** = जुन भगवान्को नाम
**अमङ्गलघ्नं** = सम्पूर्ण अमङ्गललाई नष्ट गरिदिनेवाला छ
**गोत्रधर्मः** = सबै ऋषिका वंशधर्महरू
**यत्कृतः** = जसले बनाउनुभयो
**कालचक्रायुधस्य** = कालरूपी चक्र अस्त्र भएका
**कृष्णस्य** = श्रीकृष्णका लागि
**एतत्** = यो
**क्षितिभरहरणं** = सम्पूर्ण पृथिवीको भार हरण गर्नु
**न चित्रम्** = आश्चर्य होइन

**वाक्यार्थ–** हे परीक्षित् ! जब भगवान् श्रीकृष्ण यदुकुलमा उत्पन्न हुनुभयो त्यसपछि उहाँको पावन चरित्ररूपी तीर्थले स्वयं उहाँकै चरण धोएको जल गङ्गारूपी तीर्थलाई पनि कम महत्त्वको बनाइदियो। उहाँसँग द्वेष एवं प्रेम गर्नेहरू सबै उहाँकै स्वरूपमा प्राप्त भए। जसको प्राप्तिका लागि देवताहरूले समेत प्रयास गर्दछन् त्यस्ती लक्ष्मीजी पनि केवल भगवान्कै सेवामा रहनुहुन्छ। जसको नाम एकपटक मात्र सुन्दा अथवा भन्दा सबै प्रकारका अमङ्गलहरू नष्ट हुन्छन् र जसद्वारा सबै ऋषिहरूका वंशधर्महरूको स्थापना भएको छ, यस्ता कालरूपी चक्रलाई नै अस्त्रको रूपमा धारण गर्नुहुने भगवान् श्रीकृष्णको लागि यो सम्पूर्ण पृथिवीको भार उतार्ने काम कुनै आश्चर्यको कुरा होइन।

**जयति जननिवासो देवकीजन्मवादो**
**यदुवरपर्षत्स्वैर्दोर्भिरस्यन्नधर्मम् ।**
**स्थिरचरवृजिनघ्नः सुस्मितश्रीमुखेन**
**व्रजपुरवनितानां वर्धयन् कामदेवम् ॥ ४८ ॥**

**पदार्थ–**
**स्वैः** = आफ्ना
**दोर्भिः** = भुजाहरूद्वारा
**अधर्मम्** = अधर्मलाई
**अस्यन्** = नष्ट गर्नुहुने
**सुस्मितश्रीमुखेन** = आफ्नो मन्द मुस्कानयुक्त मुखद्वारा
**व्रजपुरवनितानां** = व्रजमण्डलका गोपिनीहरूभित्र

**कामदेवं** = प्रियमिलनको तीव्र इच्छा
**वर्धयन्** = बढाइदिनुहुने
**स्थिरचरवृजिनघ्नः** = स्थावर-जङ्गम सम्पूर्ण प्राणीका पापहरूलाई नष्ट गर्नुहुने
**यदुवरपर्षत्** = सभामा यदुवीरहरूद्वारा युक्त रहनुहुने
**देवकीजन्मवादः** = देवकीबाट उत्पन्न भएका भन्ने केवल भनाइ मात्र भएका
**जननिवासः** = सम्पूर्ण जगत्का आश्रयस्थल भगवान् श्रीकृष्ण
**जयति** = सर्वश्रेष्ठ हुनुहुन्छ

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण आफ्ना भुजाहरूद्वारा अधर्मलाई नष्ट गर्नुहुन्छ र आफ्नो मन्द मुस्कान भएको मुखमण्डलद्वारा व्रजमण्डलका सबै गोपिनीहरूभित्र प्रियमिलनको तीव्र इच्छा बढाइदिनुहुन्छ। स्थावर-जङ्गम सम्पूर्ण प्राणीका सबैथरी पापहरूलाई नष्ट गर्नुहुने उहाँ यदुकुलका श्रेष्ठ पुरुषहरूसँगै सभामा रहनुहुन्छ। देवकीबाट उत्पन्न भएका भन्ने भनाइ प्रसिद्ध भए पनि उहाँ सम्पूर्ण जगत्का आश्रयस्थल हुनुहुन्छ, यस्ता भगवान् श्रीकृष्ण सर्वश्रेष्ठ हुनुहुन्छ।

**इत्थं परस्य निजवर्त्मरिरक्षयात्त-**
**लीलातनोस्तदनुरूपविडम्बनानि ।**
**कर्माणि कर्मकषणानि यदूत्तमस्य**
**श्रूयादमुष्य पदयोरनुवृत्तिमिच्छन् ॥ ४९ ॥**

**पदार्थ–**
**इत्थं** = यसप्रकार
**निजवर्त्मरिरक्षया** = आफूद्वारा प्रवर्तित धर्ममर्यादाको रक्षा गर्नका लागि
**आत्तलीलातनोः** = लीलाद्वारा शरीर धारण गर्नुहुने
**परस्य** = परमात्मा
**यदूत्तमस्य** = यदुश्रेष्ठ भगवान्को
**तदनुरूपविडम्बनानि** = उहाँकै अनुरूप अद्भुत
**कर्मकषणानि** = सम्पूर्ण कर्मबन्धनलाई नष्ट गरिदिने
**कर्माणि** = चरित्रहरूलाई
**अमुष्य** = उहाँकै
**पदयोः** = चरणको
**अनुवृत्तिं** = सेवालाई
**इच्छन्** = चाहने व्यक्तिले
**श्रूयात्** = सुनोस्

**वाक्यार्थ–** यदुकुलश्रेष्ठ भगवान् श्रीकृष्ण आफूद्वारा प्रवर्तित धर्ममर्यादाको रक्षा गर्ने उद्देश्यले ती लीला गर्दै शरीर धारण गर्नुहुन्छ। उहाँका सम्पूर्ण चरित्रहरू सारा जीवहरूका कर्मबन्धनलाई नष्ट गरिदिन समर्थ छन् र तिनीहरू भगवान्कै अनुरूप अत्यन्त अद्भुत पनि छन्। उहाँको चरणसेवालाई चाहने व्यक्तिले यी सबै चरित्रहरू सुनोस्।

**मर्त्यस्तयानुसवमेधितया मुकुन्द-**
**श्रीमत्कथाश्रवणकीर्तनचिन्तयैति ।**
**तद्धाम दुस्तरकृतान्तजवापवर्गं**
**ग्रामाद् वनं क्षितिभुजोऽपि ययुर्यदर्थाः ॥ ५० ॥**

**पदार्थ—**
**अनुसवं** = प्रत्येक क्षण
**एधितया** = बढिरहने
**मुकुन्दश्रीमत्कथाश्रवणकीर्तन-चिन्तया** = श्रीकृष्ण भगवान्को मनोहर कथाको श्रवण, कीर्तन र चिन्तनरूप
**तया** = त्यस भक्तिद्वारा
**मर्त्यः** = मानिस
**दुस्तरकृतान्तजवापवर्गं** = तर्नै नसकिने कालको वेगबाट पर मोक्षस्वरूप
**तद्धाम** = उहाँको परम धाममा
**एति** = पुग्दछ
**यदर्थाः** = जसका लागि
**क्षितिभुजः अपि** = राजाहरू पनि
**ग्रामात्** = गाउँ (राज्य)बाट
**वनं** = वनतिर
**ययुः** = गए

**वाक्यार्थ—** भगवान् श्रीकृष्णको मनोहर कथाको श्रवण, कीर्तन र चिन्तन गर्नाले उहाँमा गरिएको भक्ति निरन्तर बढिरहन्छ र यसले मानिसलाई तर्नै नसकिने कालको वेगबाट पर रहेको मोक्षस्वरूप भगवान्को परम धाममा पुऱ्याइदिन्छ। यसकै लागि ठुला राजाहरू पनि आफ्नो राज्य छाडी वनतिर गए।

**विवरण—** यस अध्यायमा श्रीकृष्णप्रति उहाँका रानीहरूको विशिष्ट प्रेम प्रकट भएको छ। विद्वान्हरूको भनाइ अनुसार श्रीकृष्णको प्रेममय जीवनको प्राथमिक अवस्थामा गोपिनीहरूको प्रेम मुख्य छ भने उत्तरार्ध कालमा रुक्मिणी आदि रानीहरूको प्रेम मुख्य छ। सबैले श्रीकृष्णलाई आफूलाई भन्दा पनि बढी प्रेम गरेका छन्। यीमध्ये गोपिनीहरूको प्रेम सर्वोच्च तहको हो र यसको वर्णन पूर्वार्द्धमा विशेष रूपले गरिएको छ। गोपिनीहरूले श्रीकृष्णको विरहमा शरीर नै त्यागेको अनि जीवनभर उहाँकै सम्झनामा उहाँकै लागि बाँचेको बताइएको छ। गोपिनीहरूमा परकीया भाव थियो र परकीया भावमा नै प्रेमको उच्चता प्रकट हुन्छ भन्ने प्रेमको सिद्धान्त हो। गोपिनीहरूमा श्रीकृष्णप्रति परकीया भावको प्रेम थियो। यद्यपि दृष्टान्तको रूपमा बताइने परकीया भावको प्रेम अत्यन्त तुच्छ र सांसारिक हो, अनि त्यो नष्ट हुने प्रेम हो, तर लौकिक प्रेमको सबभन्दा तीव्र अभिव्यक्ति पनि त्यही भएकाले त्यसैलाई दृष्टान्त बनाई भगवान् र गोपिनीहरूबिचको प्रेमलाई चिनाइएको छ। यसप्रकार दशमस्कन्धमा बताइएका श्रीकृष्णप्रेमका लीलाहरूमध्ये गोपिनीहरूको प्रेम सर्वव्यापक एवं उदाहरणको रूपमा बताइन्छ। यता भगवान्का आफ्नै पत्नीहरू उहाँका स्वकीया प्रेमी थिए, तर तिनको प्रेम पनि कम थिएन भन्ने देखाउन यो अध्यायमा उनीहरूको प्रेमको विशिष्ट पक्षको बयान गरिएको हो। श्रीकृष्णको विरहमा अचेत झैँ हुने र जताततै श्रीकृष्ण नै देखी बडबडाउने विशेष अवस्था रानीहरूमा पनि देखाइएको छ। यसबाट श्रीकृष्णको उत्तरार्धको प्रेमजीवन पनि सशक्त भावपूर्ण भएको पुष्टि हुन्छ।

दशम स्कन्धलाई निरोध स्कन्ध भनिएको छ। निरोध शब्दको सामान्य अर्थ मनको हलचल पूर्ण रूपले बन्द हुनु हो। कुनै पनि विषयको स्फूर्ति नभई मन हराएको या बिलाएको स्थिति नै निरोध अवस्था हो। योगशास्त्रमा मनका पाँच अवस्थाहरूमध्ये निरुद्धावस्थालाई सबभन्दा उच्चकोटिको मानिन्छ। निर्विकल्प समाधिमा मन पूर्णतः स्फुरणरहित बनेको स्थिति नै योगशास्त्रको निरोध हो। तर यहाँ कसैले पनि समाधि लगाई मनको निरोध गरेका होइनन् भने यहाँ निरोध कसरी भयो ? भन्ने शङ्का पनि हुन सक्छ। गोपिनी या श्रीकृष्णका रानीहरू सबैको चित्त कहिल्यै पनि स्थिर भएर रहँदैनथ्यो, उनीहरूको मन श्रीकृष्णप्रति सधैँ चञ्चल अनि चिन्तित

पनि भइरहन्थ्यो। तर भक्तिशास्त्र अनुसार मनको यही चञ्चलतालाई पनि निरोध अवस्था भनिन्छ। मन निरोध गर्नुको मुख्य लक्ष्य मन, अनात्म पदार्थहरूमा नजाओस् भन्ने हो। श्रीकृष्णका प्रेमीहरूको मन सम्पूर्ण अनात्मपदार्थहरूलाई छाडी सधैँ श्रीकृष्णमा नै गइरहन्थ्यो। उनीहरूले जे भावले चिन्तन गरेका भए पनि आखिर श्रीकृष्ण परमात्मा नै त हुनुहुन्थ्यो। त्यसैले संसारका पदार्थहरूमा मन नगई परमात्मा श्रीकृष्णमा मन गइरहनु नै मनको निरोध हुनु हो। अरु योगको निरुद्ध अवस्था त साधना एवं प्रयासको अपेक्षामा सिद्ध हुन्छ, त्यो स्वाभाविक स्थिति होइन। मनलाई एकाग्रतापूर्वक पूर्णतः निश्चल गरिदिएको स्थितिसम्म मात्र योगीहरू निरुद्धावस्थामा रहन्छन्। निर्विकल्प समाधिबाट ब्युँझिई शारीरिक व्यवहार आदि गरेको अवस्थामा योगीहरू निरुद्धावस्थाबाट झरेका हुन्छन्, तर परमात्माका आन्तरिक भक्तहरू त प्रयासैविना पनि निरन्तर परमात्मामा नै हराइरहेका हुन्छन्। खाँदा, खेल्दा र सुत्दा सबै व्यवहारमा केवल परमात्मालाई देख्ने विशिष्ट भक्तहरूले प्रयासद्वारा मनको निरोध गर्ने अभ्यासात्मक स्थितिलाई पार गरिसकेका हुन्छन् र विना प्रयास नै परमात्मामा मन निरुद्ध भइरहने सहज समाधिको अवस्थामा उनीहरू पुगेका हुन्छन्। आत्मज्ञ महापुरुषले पनि कहाँ मनको निरोध गरिरहन्छन् र ? उनलाई त मन सामान्य सांसारिक व्यवहारमा लागिरहेको स्थितिमा पनि निरन्तर आत्मस्फुरण भइरहेको हुन्छ। यसैलाई गीतामा भगवान्ले **उत्क्रामन्तं स्थितं वापि भुञ्जानं वा गुणान्वितम्, विमूढाः नानुपश्यन्ति पश्यन्ति ज्ञानचक्षुषा** (श्रीमद्भगवद्गीता १५।१०) अर्थात् अज्ञानीहरू प्राणत्याग गरिरहेको, बसेको, खाइरहेको या अन्य व्यवहारमा युक्त भइरहेको वेलामा पनि आत्मालाई देख्दैनन्, तर ज्ञानदृष्टि भएकाहरूले चाहिँ आत्मालाई देखिरहन्छन् भनी बताउनुभएको छ। यो मन परमात्मामा लागिरहने सहज अवस्था हो। भक्तिको उच्च स्थितिमा पनि मन परमात्मामा सहजतापूर्वक नै लागिहरन्छ। यसैले सांसारिक विषयमा नगई परमात्मामा नै मन गइरहेकोलाई लिएर भक्तिको त्यो अवस्थालाई निरुद्धावस्था भनिएको छ। श्रीकृष्णका अनेक लीलाहरूद्वारा उहाँका सबै प्रेमीहरूको मन पूर्णतः उहाँमा नै निरुद्ध भइरहने भएकाले यो स्कन्धलाई निरोधस्कन्ध भनिएको हो।

**इति श्रीमद्भागवते महापुराणे वैयासिक्यामष्टादशसाहस्र्यां पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे श्रीकृष्णचरितानुवर्णनं नाम नवतितमोऽध्यायः ॥ ९० ॥**

# एकादशः स्कन्धः

## अथ प्रथमोऽध्यायः

### यदुवंशीलाई ऋषिहरूको श्राप

**श्रीबादरायणिरुवाच** (श्रीशुकदेवले भन्नुभयो)

**कृत्वा दैत्यवधं कृष्णः सरामो यदुभिर्वृतः ।**

**भुवोऽवतारयद् भारं जविष्ठं जनयन् कलिम् ॥ १ ॥**

**पदार्थ–**
**यदुभिः** = यदुहरूद्वारा
**वृतः** = युक्त
**सरामः** = बलरामसहित
**कृष्णः** = श्रीकृष्णले
**दैत्यवधं** = दैत्यहरूको संहार
**कृत्वा** = गरेर
**जविष्ठं** = अत्यन्त शीघ्र
**कलिं** = झगडालाई
**जनयन्** = उत्पन्न गराई
**भुवः** = पृथिवीको
**भारं** = भार
**अवतारयत्** = उतार्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले यदुहरू र बलराम सहित भई अनेकौं दैत्यहरूको संहार गर्नुभयो र यदु-यदुहरूकै बिचमा झगडा उत्पन्न गराई पृथिवीको भार उतार्नुभयो।

**ये कोपिताः सुबहु पाण्डुसुताः सपत्नै-**

**दुर्द्यूतहेलनकचग्रहणादिभिस्तान् ।**

**कृत्वा निमित्तमितरेतरतः समेतान्**

**हत्वा नृपान् निरहरत् क्षितिभारमीशः ॥ २ ॥**

**पदार्थ–**
**ईशः** = सर्वसमर्थ भगवान्ले
**ये** = जो
**पाण्डुसुताः** = पाण्डवहरू
**सपत्नैः** = शत्रु बनेका गान्धारीपुत्र कौरवहरूद्वारा
**दुर्द्यूतहेलनकचग्रहणादिभिः** = कपटी जुवा, अनेकौं अपमान र द्रौपदीवस्त्रहरण आदिद्वारा
**सुबहु** = अत्यन्त
**कोपिताः** = क्रोधित बनाइएका
**तान्** = ती पाण्डवहरूलाई
**निमित्तं** = निमित्त
**कृत्वा** = बनाएर
**इतरेतरतः** = कौरव र पाण्डव दुबै पक्षतर्फ
**समेतान्** = युद्ध गर्न आएका
**नृपान्** = राजाहरूलाई
**हत्वा** = मारेर
**क्षितिभारं** = पृथिवीको भारलाई
**निरहरत्** = हटाउनुभयो

**वाक्यार्थ–** सर्वसमर्थ भगवान्ले कौरवहरूद्वारा गरिएको कपटी जुवा, अनेकौं अपमान र द्रौपदीवस्त्रहरण आदि कुकृत्यद्वारा अत्यन्त क्रोधित बनाइएका पाण्डवहरूलाई निमित्त बनाई ती

दुबै पक्षतर्फ युद्ध गर्न सबैतिरबाट जम्मा भएका राजाहरूलाई नष्ट गराउनुभयो र पृथिवीको भार उतारिदिनुभयो।

**भूभारराजपृतना यदुभिर्निरस्य**
**गुप्तैः स्वबाहुभिरचिन्तयदप्रमेयः।**
**मन्येऽवनेर्ननु गतोऽप्यगतं हि भारं**
**यद्यादवं कुलमहो अविषह्यमास्ते॥ ३॥**

**पदार्थ—**
**अप्रमेयः** = अचिन्त्य भगवान्ले
**स्वबाहुभिः** = आफ्ना हातहरू (पराक्रम)द्वारा
**गुप्तैः** = सुरक्षित भएका
**यदुभिः** = यदुहरूद्वारा
**भूभारराजपृतनाः** = पृथिवीका भार भएका राजा र तिनका सेनाहरूलाई
**निरस्य** = नष्ट गरेपछि
**अचिन्तयत्** = विचार गर्नुभयो
**ननु** = साँच्चै
**अवनेः** = पृथिवीको भार
**गतः अपि** = समाप्त भए पनि
**भारं** = वास्तविक भार
**अगतं** = पूर्णतः समाप्त नभएको
**मन्ये** = ठान्दछु
**हि** = निश्चय नै
**यत्** = किनभने
**अहो** = अहो
**अविषह्यं** = जित्न नसकिने
**यादवं** = यदुहरूको
**कुलं** = वंश
**आस्ते** = अझै जीवित छ

**वाक्यार्थ—** भगवान् अचिन्त्य सङ्कल्प हुनुहुन्छ। उहाँले आफ्ना बाहुबलद्वारा सुरक्षित भएका यदुहरूको माध्यमले पृथिवीको भार सबै राजा र तिनका सेनाहरूलाई नष्ट गरिदिनुभयो र विचार गर्नुभयो— सामान्यतः बाहिरी दृष्टिले पृथिवीको भार नष्ट भए तापनि पूर्णतया नष्ट भएको छैन। किनभने कसैले जित्न नसक्ने यदुवंशी वीरहरूको कुल अझै बाँकी नै छ।

**नैवान्यतः परिभवोऽस्य भवेत् कथञ्चि-**
**न्मत्संश्रयस्य विभवोन्नहनस्य नित्यम्।**
**अन्तः कलिं यदुकुलस्य विधाय वेणु-**
**स्तम्बस्य वह्निमिव शान्तिमुपैमि धाम॥ ४॥**

**पदार्थ—**
**नित्यं** = निरन्तर
**मत्संश्रयस्य** = मेरै आश्रयमा रहेको
**विभवोन्नहनस्य** = सबै प्रकारका समृद्धिद्वारा उच्छृङ्खल बनेको
**अस्य** = यो यदुकुलको
**अन्यतः** = अरू कसैबाट
**परिभवः** = पराजय
**कथञ्चित्** = कसै गरी पनि
**न एव भवेत्** = हुनै सक्दैन
**वेणुस्तम्बस्य** = बाँसको झाङ परस्परमा ठोकिई
**वह्निम् इव** = आगो उत्पन्न भए झैं
**यदुकुलस्य** = यदुकुलको
**अन्तः** = भित्र
**कलिं** = झगडा

**विधाय** = उत्पन्न गराएर
**शान्तिं** = शान्तिपूर्वक
**धाम** = आफ्नो धाममा
**उपैमि** = जान्छु

**वाक्यार्थ–** यदुकुल निरन्तर मेरो आश्रयमा सुरक्षित भएकाले र सबैथरी समृद्धिले युक्त भएकाले पनि उच्छृङ्खल भएको छ। यसको विनाश अरू कसैबाट पनि सम्भव छैन। त्यसैले बाँसको झाडमा परस्पर बाँसहरू ठोकिई आगो उत्पन्न भए झैँ यदुकुलकै भित्र परस्पर झगडा उत्पन्न गराएर म शान्तिपूर्वक आफ्नो धाममा जानेछु।

**एवं व्यवसितो राजन् सत्यसङ्कल्प ईश्वरः।**
**शापव्याजेन विप्राणां सञ्जह्रे स्वकुलं विभुः॥ ५॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**एवं** = यसप्रकार
**व्यवसितः** = निश्चय गरी
**सत्यसङ्कल्पः** = सत्यसङ्कल्प
**विभुः** = सर्वव्यापक
**ईश्वरः** = सर्वसमर्थ भगवान्ले
**विप्राणां** = ब्राह्मणहरूको
**शापव्याजेन** = श्रापको निहुँले
**स्वकुलं** = आफ्नो कुललाई
**सञ्जह्रे** = संहार गर्नुभयो

**वाक्यार्थ–** हे परीक्षित् ! सत्यसङ्कल्प भगवान्ले यसप्रकार निश्चय गर्नुभयो र सर्वसमर्थ उहाँले ब्राह्मणहरूको श्रापको निहुँले यदुकुलको संहार गर्नुभयो।

**स्वमूर्त्या लोकलावण्यनिर्मुक्त्या लोचनं नृणाम्।**
**गीर्भिस्ताः स्मरतां चित्तं पदैस्तानीक्षतां क्रियाः॥ ६॥**
**आच्छिद्य कीर्तिं सुश्लोकां वितत्य ह्यञ्जसा नु कौ।**
**तमोऽनया तरिष्यन्तीत्यगात् स्वं पदमीश्वरः॥ ७॥**

**पदार्थ–**
**ईश्वरः** = भगवान् श्रीकृष्णले
**लोकलावण्यनिर्मुक्त्या** = सम्पूर्ण संसारको सौन्दर्यलाई तिरस्कृत गर्ने
**स्वमूर्त्या** = आफ्नो आकृतिद्वारा
**नृणां** = मानिसहरूको
**लोचनं** = आँखालाई
**ताः** = ती अत्यन्त मधुर लीलाहरूलाई
**गीर्भिः** = वाणीहरूद्वारा
**स्मरतां** = उहाँको स्मरण गर्नेहरूको
**चित्तं** = चित्तलाई
**पदैः** = हिँडाइद्वारा
**तान्** = उहाँको चरणलाई
**ईक्षतां** = हेरिरहनेहरूको
**क्रियाः** = समस्त लौकिक कर्महरूलाई
**आच्छिद्य** = आफैँतिर खिचेर
**हि** = निश्चय नै
**अञ्जसा** = सजिलैसँग
**कौ** = पृथिवीमा
**सुश्लोकां** = सुयशले युक्त
**कीर्तिं** = कीर्तिलाई
**वितत्य** = विस्तार गरी
**नु** = निश्चय नै
**अनया** = यही कीर्तिद्वारा
**तमः** = अज्ञानरूप अन्धकारलाई
**तरिष्यन्ति** = तर्नेछन्
**इति** = यसो भनी
**स्वं** = आफ्नो
**पदं** = धाममा
**अगात्** = जानुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको आकृति सम्पूर्ण संसारको सौन्दर्यलाई पनि तिरस्कृत गरिदिने खालको थियो। त्यसद्वारा उहाँले सम्पूर्ण प्राणीहरूको आँखालाई आफूतिर आकृष्ट गर्नुभयो। आफ्ना सुमधुर वाणीहरूद्वारा उहाँलाई स्मरण गर्ने सबै व्यक्तिहरूको चित्तलाई आफूतिर आकर्षित गर्नुभयो भने सुललित हिँडाइद्वारा त्यसको दर्शन गर्ने सबै व्यक्तिहरूको व्यवहार टुटाइदिनुभयो। उहाँले पृथिवीभर सजिलै आफ्नो कीर्ति फैलाउनुभयो र यही चरित्रगान गरेर मानिसहरूले संसारको अज्ञानमय अन्धकारलाई पार गर्नेछन् भनी उहाँ परमधाम जानुभयो।

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**ब्रह्मण्यानां वदान्यानां नित्यं वृद्धोपसेविनाम्।**

**विप्रशापः कथमभूद् वृष्णीनां कृष्णचेतसाम्॥ ८॥**

**यन्निमित्तः स वै शापो यादृशो द्विजसत्तम।**

**कथमेकात्मनां भेद एतत् सर्वं वदस्व मे॥ ९॥**

**पदार्थ–**
**नित्यं** = निरन्तर
**वृद्धोपसेविनां** = वृद्धहरूको सेवा गर्ने
**ब्रह्मण्यानां** = ब्राह्मणभक्त
**वदान्यानां** = श्रेष्ठ दानी
**कृष्णचेतसां** = श्रीकृष्णमा चित्त लागेका
**वृष्णीनां** = वृष्णिवंशीहरूमाथि
**विप्रशापः** = ब्राह्मणहरूको श्राप
**कथं** = कसरी
**अभूत्** = भयो
**द्विजसत्तम** = हे ब्राह्मणश्रेष्ठ शुकदेव
**वै** = निश्चय नै
**सः** = त्यो
**शापः** = श्राप
**यन्निमित्तः** = जुन कारणले भयो र
**यादृशः** = जस्तो थियो
**एकात्मनां** = एकै चित्त भएका तिनीहरूको बिचमा
**भेदः** = फुट
**कथं** = कसरी भयो
**एतत्** = यो
**सर्वं** = सबै
**मे** = मलाई
**वदस्व** = बताउनुहोस्

**वाक्यार्थ–** निरन्तर वृद्धहरूको सेवा गर्ने यदुवंशीहरू ब्राह्मणभक्त र श्रेष्ठ दानी पनि थिए। श्रीकृष्णमा निरन्तर चित्त लागेका यस्ता यिनीहरूमाथि ब्राह्मणहरूको श्राप कसरी लाग्यो ? हे शुकदेव ! त्यो श्राप जुन कारणले भयो र जस्तो प्रकारको थियो त्यो हामीलाई बताउनुहोस्। यसै गरी एउटै चित्त भएका ती यदुवंशीहरूको बिचमा कसरी फुट आयो ? यो सबै मलाई बताउनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**बिभ्रद् वपुः सकलसुन्दरसन्निवेशं**

**कर्माचरन् भुवि सुमङ्गलमाप्तकामः।**

**आस्थाय धाम रममाण उदारकीर्तिः**
**संहर्तुमैच्छत कुलं स्थितकृत्यशेषः ॥ १० ॥**

**पदार्थ–**
**सकलसुन्दरसन्निवेशं** = अङ्ग-प्रत्यङ्ग पूर्ण सौन्दर्यले युक्त भएको
**वपुः** = शरीरलाई
**बिभ्रत्** = धारण गर्दै
**भुवि** = पृथिवीमा
**सुमङ्गलं** = मङ्गलमय
**कर्म** = कर्मलाई
**आचरन्** = आचरण गर्दै
**आप्तकामः** = पूर्णकाम (सम्पूर्ण इच्छा पूर्ण भएका)
**धाम** = द्वारका धाममा
**आस्थाय** = बसी
**रममाणः** = रमाइरहनुभएका
**उदारकीर्तिः** = प्रसिद्ध कीर्ति भएका र
**स्थितकृत्यशेषः** = एउटै मात्र पृथिवीको भारहरणरूप कर्म शेष भएका भगवान्ले
**कुलं** = आफ्नो कुललाई
**संहर्तुम्** = संहार गर्न
**ऐच्छत** = इच्छा गर्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले अङ्ग-प्रत्यङ्ग पूर्ण सौन्दर्यले युक्त भएको शरीर धारण गरी पृथिवीमा रहेर मङ्गलमय कर्महरू गर्नुभयो। उहाँ द्वारकाधाममा बसेर रमाइरहनुभए पनि वास्तवमा चाहिँ सम्पूर्ण इच्छा पूर्ण भएका हुनुहुन्थ्यो, तर पनि पृथिवीको भारहरणरूप एउटै कर्तव्य बाँकी रहेकाले उदारकीर्ति भएका उहाँले आफ्नो कुललाई समेत नष्ट गर्ने विचार गर्नुभयो।

**कर्माणि पुण्यनिवहानि सुमङ्गलानि**
**गायज्जगत्कलिमलापहराणि कृत्वा।**
**कालात्मना निवसता यदुदेवगेहे**
**पिण्डारकं समगमन् मुनयो निसृष्टाः ॥ ११ ॥**

**पदार्थ–**
**पुण्यनिवहानि** = पुण्य प्रदान गर्ने
**सुमङ्गलानि** = मङ्गलमय
**गायज्जगत्कलिमलापहराणि** = कीर्तिगान गर्ने सबै प्राणीहरूको कलिदोषलाई नष्ट गरिदिने
**कर्माणि** = लीलाचरित्रहरू
**कृत्वा** = गरेर
**यदुदेवगेहे** = युदराज उग्रसेनको राजधानी द्वारकामा
**कालात्मना** = कालरूपले
**निवसता** = बसिरहनुभएका भगवान्द्वारा
**निसृष्टाः** = प्रेरित
**मुनयः** = मुनिहरू
**पिण्डारकं** = पिण्डारक क्षेत्रमा
**समगमन्** = गए

**वाक्यार्थ–** भगवान् श्रीकृष्णका सबै लीलाचरित्रहरू परम मङ्गलमय र पुण्यप्रदान गर्नेवाला छन्। जसले यस चरित्रको गान गर्दछन् ती व्यक्तिका सारा कलिदोषहरू नष्ट हुन्छन्। यस्ता भगवान् उग्रसेनको राजधानी द्वारकामा कालरूपले बसिरहनुभएको थियो। यस्ता भगवान्बाट प्रेरित भएका मुनिहरू पिण्डारक तीर्थमा गए।

**विश्वामित्रोऽसितः कण्वो दुर्वासा भृगुरङ्गिराः।**
**कश्यपो वामदेवोऽत्रिर्वसिष्ठो नारदादयः ॥ १२ ॥**

**पदार्थ—**
**विश्वामित्रः** = विश्वामित्र
**असितः** = असित
**कण्वः** = कण्व
**दुर्वासा** = दुर्वासा
**भृगुः** = भृगु
**अङ्गिराः** = अङ्गिरा
**कश्यपः** = कश्यप
**वामदेवः** = वामदेव
**अत्रिः** = अत्रि
**वसिष्ठः** = वसिष्ठ
**नारदादयः** = नारद आदि ऋषिहरू (पिण्डारक क्षेत्रमा गए)

**वाक्यार्थ—** विश्वामित्र, असित, कण्व, दुर्वासा, भृगु, अङ्गिरा, कश्यप, वामदेव, अत्रि, वसिष्ठ, नारद आदि ऋषिहरू पिण्डारक क्षेत्रमा गए।

**क्रीडन्तस्तानुपव्रज्य कुमारा यदुनन्दनाः।**
**उपसङ्गृह्य पप्रच्छुरविनीता विनीतवत्॥ १३॥**

**पदार्थ—**
**क्रीडन्तः** = खेलिरहेका
**यदुनन्दनाः** = यदुनन्दन
**कुमाराः** = कुमारहरूले
**तान्** = ती ऋषिहरूको नजिक
**उपव्रज्य** = गई
**उपसङ्गृह्य** = चरणमा प्रणाम गरी
**अविनीताः** = नम्र नभए तापनि
**विनीतवत्** = नम्र झैँ भई
**पप्रच्छुः** = सोधे

**वाक्यार्थ—** यदुनन्दन कुमारहरू आपसमा खेलिरहेका थिए। त्यसै वेलामा उनीहरू ती ऋषिहरूको नजिक गए। उनीहरूले नम्र नभए पनि नम्र झैँ बनी मुनिहरूलाई प्रणाम गरी सोधे।

**ते वेषयित्वा स्त्रीवेषैः साम्बं जाम्बवतीसुतम्।**
**एषा पृच्छति वो विप्रा अन्तर्वत्न्यसितेक्षणा॥ १४॥**
**प्रष्टुं विलज्जती साक्षात् प्रब्रूतामोघदर्शनाः।**
**प्रसोष्यन्ती पुत्रकामा किं स्वित् सञ्जनयिष्यति॥ १५॥**

**पदार्थ—**
**ते** = तिनीहरूले
**जाम्बवतीसुतं** = जाम्बवतीपुत्र
**साम्बं** = साम्बलाई
**स्त्रीवेषैः** = स्त्रीको वेषभूषाद्वारा
**वेषयित्वा** = सजाई
**विप्राः** = हे ब्राह्मणहरू
**असितेक्षणा** = कालो आँखा भएकी
**अन्तर्वत्नी** = गर्भिणी
**प्रसोष्यन्ती** = प्रसवसमय भएकी
**पुत्रकामा** = पुत्रको चाहना गर्ने
**साक्षात्** = आफैँ
**प्रष्टुं** = सोध्न
**विलज्जती** = लजाएकी
**एषा** = यिनले
**वः** = हजुरहरूलाई
**पृच्छति** = सोध्छिन्
**किं स्वित्** = के
**सञ्जनयिष्यति** = जन्माउनेछिन्
**अमोघदर्शनाः** = जसको दर्शन व्यर्थ हुँदैन त्यस्ता हजुरहरूले
**प्रब्रूत** = बताइदिनुहोस्

**वाक्यार्थ—** ती कुमारहरूले जाम्बवतीका पुत्र साम्बलाई स्त्रीको वेषभूषाद्वारा सजाए र ऋषिहरूसँग भने— हे ब्राह्मणहरू ! कालो आँखा भएकी यी गर्भिणीको प्रसवसमय हुनै लागेको छ

र यिनी पुत्रको चाहना गर्दछिन्। आफैँ सोध्न लजाएकी यिनले हजुरहरूसँग मैले के जन्माउँछु भनी सोध्न खोज्छिन्। हजुरहरूको दर्शन व्यर्थ हुँदैन। अतः हजुरहरूले यो कुरा बताइदिनुहोस्।

**एवं प्रलब्धा मुनयस्तानूचुः कुपिता नृप।**
**जनयिष्यति वो मन्दा मुसलं कुलनाशनम्॥ १६॥**

**पदार्थ—**
**नृप** = हे परीक्षित्
**एवं** = यसप्रकार
**प्रलब्धाः** = छक्याइएका
**कुपिताः** = रिसाएका
**मुनयः** = मुनिहरूले
**तान्** = तिनीहरूलाई
**ऊचुः** = भने
**मन्दाः** = हे मूर्खहरू
**वः** = तिमीहरूको
**कुलनाशनं** = कुललाई नष्ट गर्ने
**मुसलं** = मुसल
**जनयिष्यति** = जन्माउनेछिन्

**वाक्यार्थ—** हे परीक्षित् यसप्रकार जब ती यदुकुमारहरूले मुनिहरूलाई छक्याउन खोजे तब तिनीहरूले रिसाई भने— हे मूर्खहरू ! यिनले तिमीहरूको कुललाई नष्ट गर्ने मुसल जन्माउनेछिन्।

**तच्छ्रुत्वा तेऽतिसन्त्रस्ता विमुच्य सहसोदरम्।**
**साम्बस्य ददृशुस्तस्मिन् मुसलं खल्वयस्मयम्॥ १७॥**

**पदार्थ—**
**तत्** = त्यो कुरा
**श्रुत्वा** = सुनेर
**ते** = तिनीहरूले
**सहसा** = झटपट
**साम्बस्य** = साम्बको (ठुलो बनाएको)
**उदरं** = पेट
**विमुच्य** = खोलेर (हेर्दा)
**तस्मिन्** = त्यहाँ
**खलु** = निश्चय नै
**अयस्मयं** = फलामको
**मुसलं** = मुसल
**ददृशुः** = देखे

**वाक्यार्थ—** यो सुनेर तिनीहरूले झटपट साम्बको ठुलो बनाएको पेट खोलेर हेर्दा त्यहाँभित्र फलामको मुसल देखे।

**किं कृतं मन्दभाग्यैर्नः किं वदिष्यन्ति नो जनाः।**
**इति विह्वलिता गेहानादाय मुसलं ययुः॥ १८॥**

**पदार्थ—**
**नः** = हामी
**मन्दभाग्यैः** = मन्दभाग्यहरूद्वारा
**किं** = के
**कृतं** = गरियो
**नः** = हामीलाई
**जनाः** = मानिसहरूले
**किं** = के
**वदिष्यन्ति** = भन्लान्
**इति** = यसप्रकार
**विह्वलिताः** = दुःखी भई
**मुसलं** = मुसल
**आदाय** = लिएर
**गेहान्** = घरतिर
**ययुः** = गए

**वाक्यार्थ—** मन्दभाग्य भएका हामीहरूले यो के गर्‍यौँ ? हामीलाई अरू मानिसहरूले के भन्लान् ?

यसप्रकार दुःखी भएका तिनीहरू मुसल लिएर घरतिर गए।

**तच्चोपनीय सदसि परिम्लानमुखश्रियः।**

**राज्ञ आवेदयाञ्चक्रुः सर्वयादवसन्निधौ॥ १९॥**

**पदार्थ—**
**परिम्लानमुखश्रियः च** = मुखको कान्ति मलिन भएका तिनीहरूले
**तत्** = त्यो मुसललाई
**सर्वयादवसन्निधौ** = सम्पूर्ण यादवहरूको अगाडि
**सदसि** = सभामा
**उपनीय** = लगेर
**राज्ञे** = राजा उग्रसेनलाई
**आवेदयाञ्चक्रुः** = सबै कुरा बताए

**वाक्यार्थ—** मुखको शोभा मलिन भएका यदुकुमारहरूहरूले सम्पूर्ण यादवहरूले सहित भएको राजसभामा त्यो मुसल लगे र सबै कुरा राजा उग्रसेनलाई बताए।

**श्रुत्वामोघं विप्रशापं दृष्ट्वा च मुसलं नृप।**

**विस्मिता भयसन्त्रस्ता बभूवुर्द्वारकौकसः॥ २०॥**

**पदार्थ—**
**नृप** = हे राजा परीक्षित्
**द्वारकौकसः** = द्वारकावासीहरू
**अमोघं** = कहिल्यै असत्य नहुने
**विप्रशापं** = ब्राह्मणहरूको श्रापलाई
**श्रुत्वा** = सुनेर
**मुसलं च** = मुसल समेत
**दृष्ट्वा** = देखेर
**विस्मिताः** = आश्चर्यचकित र
**भयसन्त्रस्ताः** = भयत्रस्त
**बभूवुः** = भए

**वाक्यार्थ—** हे परीक्षित्! द्वारकावासीहरूले कहिल्यै असत्य नहुने ब्राह्मणहरूले श्राप दिएको सुने र मुसलसमेत देखे। यसबाट उनीहरू सबै आश्चर्यचकित र भयत्रस्त भए।

**तच्चूर्णयित्वा मुसलं यदुराजः स आहुकः।**

**समुद्रसलिले प्रास्यल्लोहं चास्यावशेषितम्॥ २१॥**

**पदार्थ—**
**सः** = ती
**यदुराजः** = यदुवंशीहरूका राजा
**आहुकः** = उग्रसेनले
**तत्** = त्यो
**मुसलं** = मुसललाई
**चूर्णयित्वा** = चूर्ण बनाई
**अस्य** = यसको
**अवशेषितं** = बाँकी रहेका
**लोहं च** = फलामको टुक्रालाई
**समुद्रसलिले** = समुद्रको जलमा
**प्रास्यत्** = फालिदिए

**वाक्यार्थ—** यदुवंशीहरूका राजा उग्रसेनले त्यो मुसललाई चूर्ण बनाउन लगाए र यसको चूर्ण एवं मुसलको बाँकी रहेको सानो टुक्रालाई समेत उनले समुद्रको जलमा फाल्न लगाए।

**कश्चिन्मत्स्योऽग्रसील्लोहं चूर्णानि तरलैस्ततः।**

**उह्यमानानि वेलायां लग्नान्यासन् किलैरकाः॥ २२॥**

**पदार्थ–**
**लोहं** = सानो फलामलाई
**कश्चित्** = कुनै
**मत्स्यः** = माछोले
**अग्रसीत्** = निल्यो
**ततः** = त्यसपछि
**तरलैः** = तरङ्गहरूद्वारा
**उह्यमानानि** = छेउतिर लगिएका
**वेलायां** = समुद्रकिनारमा
**लग्नानि** = लागेका
**चूर्णानि** = ती चूर्णहरू
**किल** = निश्चय नै
**एरकाः** = एरका नामको ऱ्ञार
**आसन्** = भए

**वाक्यार्थ–** त्यहाँबाट बाँकी रहेको फलामको सानो टुक्रोलाई कुनै माछोले निल्यो भने मुसलको धुलोलाई चाहिँ समुद्रका तरङ्गहरूले बगाउँदै किनारमा पुऱ्याए र त्यसबाट एरका नामका ऱ्ञार उत्पन्न भए।

**मत्स्यो गृहीतो मत्स्यघ्नैर्जालेनान्यैः सहार्णवे।**
**तस्योदरगतं लोहं स शल्ये लुब्धकोऽकरोत्॥ २३॥**

**पदार्थ–**
**अर्णवे** = समुद्रमा
**जालेन** = जाल हान्दा
**अन्यैः सह** = अरू माछोहरूसँगै
**मत्स्यघ्नैः** = माझीहरूद्वारा
**मत्स्यः** = त्यो माछो पनि
**गृहीतः** = समातियो
**सः** = त्यो
**लुब्धकः** = व्याधाले
**तस्योदरगतं** = त्यो माछाको पेटभित्र रहेको
**लोहं** = फलामलाई
**शल्ये** = बाणको टुप्पोमा
**अकरोत्** = लगायो

**वाक्यार्थ–** समुद्रमा जाल हान्दा माझीहरूले अरू माछासँगै त्यो माछालाई पनि समाते। माछोको पेटभित्र रहेको फलामको सानो टुक्रालाई लिएर एउटा व्याधाले आफ्नो बाणको टुप्पो बनायो।

**भगवान् ज्ञातसर्वार्थ ईश्वरोऽपि तदन्यथा।**
**कर्तुं नैच्छद् विप्रशापं कालरूप्यन्वमोदत॥ २४॥**

**पदार्थ–**
**ज्ञातसर्वार्थः** = सबै कुरा जानेका
**ईश्वरः अपि** = सर्वसमर्थ भएर पनि
**कालरूपी** = कालरूपी
**भगवान्** = भगवान्‌ले
**तत्** = त्यो
**विप्रशापं** = ब्राह्मणहरूको श्रापलाई
**अन्यथा** = परिवर्तन
**कर्तुं** = गर्न
**न ऐच्छत्** = चाहनुभएन
**अन्वमोदत** = अनुमोदन गर्नुभयो

**वाक्यार्थ–** सर्वसमर्थ भगवान्‌ले यो सबै कुरालाई जान्नुभएको थियो, तर पनि उहाँले ब्राह्मणहरूको श्रापलाई परिवर्तन गर्न चाहनुभएन, त्यसको अनुमोदन नै गर्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां एकादशस्कन्धे प्रथमोऽध्यायः॥ १॥**

# अथ द्वितीयोऽध्यायः

## राजा जनक र नौ योगीश्वरहरूको संवाद

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**गोविन्दभुजगुप्तायां द्वारवत्यां कुरूद्वह ।**

**अवात्सीन्नारदोऽभीक्ष्णं कृष्णोपासनलालसः ॥ १ ॥**

**पदार्थ–**
**कुरूद्वह** = हे राजा परीक्षित्
**कृष्णोपासनलालसः** = भगवान् श्रीकृष्णको उपासना तथा सधैँ नजिक रहन चाहने
**नारदः** = देवर्षि नारद
**गोविन्दभुजगुप्तायां** = श्रीकृष्ण भगवान्को हातबाट सुरक्षित
**द्वारवत्यां** = द्वारकामा
**अभीक्ष्णं** = बारम्बार (आएर)
**अवात्सीत्** = बस्नुहुन्थ्यो

**वाक्यार्थ–** हे कुरुश्रेष्ठ परीक्षित् ! श्रीकृष्णको उपासनामा उत्कट इच्छा भएका देवर्षि नारद श्रीकृष्णद्वारा सुरक्षित द्वारकामा बारम्बार आएर बस्नुहुन्थ्यो ।

**को नु राजन्निन्द्रियवान् मुकुन्दचरणाम्बुजम् ।**

**न भजेत् सर्वतोमृत्युरुपास्यममरोत्तमैः ॥ २ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**इन्द्रियवान्** = कार्य गर्न समर्थ इन्द्रिय भएको र
**सर्वतोमृत्युः** = चारै तर्फबाट मृत्युले घेरिएको
**को नु** = कुन चाहिँ व्यक्तिले
**अमरोत्तमैः** = श्रेष्ठ-श्रेष्ठ ब्रह्मा आदि देवताहरूद्वारा पनि
**उपास्यम्** = उपासना गरिने
**मुकुन्दचरणाम्बुजम्** = भगवान्को चरणारविन्दको
**न भजेत्** = भजन नगर्ला र

**वाक्यार्थ–** हे परीक्षित् ! सक्षम इन्द्रिय भए पनि चारैतर्फबाट मृत्युले त्रसित भएका कुनचाहिँ व्यक्तिले ब्रह्मा आदि देवताहरूद्वारा पनि उपासना गरिने भगवान्को चरणारविन्दको भजन नगर्लान् र ?

**विवरण–** यहाँ नारद सधैँ भगवान्को सन्निधिमा रहनुहुन्थ्यो भन्ने बताउँदै भक्तिका लागि विशिष्ट अधिकारीको विषयमा चर्चा गरिएको छ। नारद सधैँ द्वारकामा आइरहनुहुन्थ्यो। भगवान् श्रीकृष्णको दर्शन गर्न बारम्बार इच्छा भइरहने हुनाले उहाँ सधैँ श्रीकृष्णकै वरिपरि घुमिरहनुहुन्थ्यो। **कृष्णोपासनलालसः** यसको अर्थ हुन्छ– श्रीकृष्णको नजिक रहन लालसा गर्ने। **लालसा** शब्दको तात्पर्य तीव्र इच्छा भन्ने हुन्छ। उत्कट इच्छा भएपछि व्यक्ति त्यही काम गरिरहन्छ। नारदमा पनि कृष्णदर्शन गर्ने उत्कट इच्छा भएकाले उहाँ बारम्बार द्वारकामा आउनुहुन्थ्यो। नारदलाई त केही क्षणभन्दा बढी एक ठाउँमा बस्न नसक्ने श्राप परेको थियो। त्यसैले सधैँजसो द्वारकामा रहन

कसरी सम्भव भयो ? यस प्रश्नको समाधान गर्दै भनिन्छ— **गोविन्दभुजगुप्तायाम्** अर्थात् द्वारकापुरी साक्षात् भगवान्‌कै बाहुबलले निर्मित र उहाँद्वारा नै रक्षित भएकाले त्यहाँ दक्षको श्राप पुग्दैनथ्यो। त्यसैले त्यहाँ रहँदा दक्षको श्रापले नछुने भएकाले पनि नारद सधैँ त्यहीँ रहन सक्नुभएको हो। नारद नित्यमुक्त हुनुहुन्छ। उहाँले अरू सामान्य प्राणीहरूले जस्तो संसारबाट मुक्तिका लागि भगवान्‌को भजन गर्नुपर्दैन, तर पनि उहाँ निरन्तर भगवान्‌कै उपासना गर्नुहुन्छ भने अरू सामान्य प्राणीहरूले भगवान्‌को भजन गर्नुपर्नेमा शङ्का हुनै सक्दैन। यही अर्थ बुझाउन अर्को श्लोकमा इन्द्रियवान् सामान्य प्राणीहरूले अवश्य भगवान्‌को भजन गर्नुपर्ने जनाइएको छ। अथवा नारदको नित्य भगवच्चिन्तनलाई पुष्टि गर्नका लागि श्रीशुकदेवले सामान्य इन्द्रिय भएका प्राणीहरू त भगवान्‌को कथाबाट आनन्दित भई त्यसलाई त्याग्न सक्दैनन् भने नारद जस्ता पूर्णतः विरक्त व्यक्तिहरूले त्यो परम आनन्दलाई कसरी त्याग्न सक्छन् ? भनी बताइएको छ। यसरी यी दुई श्लोकमा नारदको भक्तिद्वारा सामान्य प्राणीहरूको भक्ति अनि सामान्य प्राणीहरूले आनन्दपूर्वक गर्ने भगवद्‌भक्तिबाट नारद जस्ता विशिष्ट व्यक्तिहरूको विशिष्ट भक्ति दुबैको पुष्टि भएको छ।

यहाँ **इन्द्रियवान्** अर्थात् इन्द्रिय हुने कुन चाहिँ प्राणीले भगवान्‌को भजन नगर्ला र ? भनी प्रश्न सोधिएको छ। प्राणीहरू सबैतिरबाट मृत्युले आक्रान्त भएका छन्। संसारमा जन्म, बुढ्याइँ, मृत्यु आदि अनेक दुःखले थिचिएका यी प्राणीहरूले परमात्माको भजनबाट मात्र आनन्द पाउने हुनाले उहाँको भजन अवश्य गर्नुपर्छ। अरू देवताको नभई केवल भगवान्‌कै भजन गर्नुपर्नेमा कारण छ— उहाँ उत्तम देवताहरूद्वारा पनि उपास्य हुनुहुन्छ। अरू देवताहरू स्वयं मृत्युभयबाट आक्रान्त छन्, त्यसैले त्यसबाट बाँच्नका लागि प्राणीहरूले केवल परमात्माकै शरणमा जानुपर्दछ। यसबाट मृत्युको भयमा परेका अज्ञानीहरूका लागि भगवान्‌को भक्ति अनिवार्य रहेको पुष्टि हुन्छ। नारद आदि मुक्तहरूमा भने स्वभावतः श्रीकृष्णको उपासना गर्ने लालसा हुन्छ। उनीहरू **अभीक्ष्णं** अर्थात् नित्य-निरन्तर भगवान्‌कै भक्तिमा लीन रहन्छन्, यसरी ज्ञानी र अज्ञानी दुबैले भगवान्‌को भक्ति अनिवार्य रूपले गर्नुपर्ने कुरा सिद्ध छ।

भक्तिका अधिकारीको विषयमा विषयमा श्रीधर स्वामी लेख्नुहुन्छ— **इन्द्रियवत्त्वमेव अधिकारित्वम्** अर्थात् इन्द्रिय भएका सबै व्यक्ति भक्तिका अधिकारी हुन्। यसको व्याख्यामा वंशीधर लेख्नुहुन्छ— **इन्द्रियवत्त्वमेतेन वर्णाश्रमाद्यपेक्षा निरस्ता** अर्थात् इन्द्रियवत्त्व यो पदको प्रयोगद्वारा भक्तिमा वर्णधर्म, आश्रमनियम आदिको अपेक्षा नरहने बताइएको छ। कुनै पनि काम गर्न विशेष अधिकारी चाहिन्छ। पढ्नका लागि विद्यार्थीलाई अधिकारी मानिन्छ भने राज्य व्यवस्था मिलाउनका लागि नेताहरू अधिकारी मानिन्छन्। जो व्यक्ति सिपले युक्त छ, उसैले मात्र गाडी चलाउने, घर बनाउने आदि गर्न सक्दछ, नत्र जोसुकैले जुनसुकै कर्म गर्दा त्यहाँ दुर्घटना या अस्तव्यस्तताको स्थिति आउने निश्चित छ। यसरी सामान्य व्यवहारमा पनि विशेष अधिकारीले मात्र ती-ती कर्म गर्न पाउने प्रावधान छ। झन् शास्त्रीय कार्यमा त कस्तो अधिकारी भन्ने विशेष विवेचना आवश्यक हुन्छ। मीमांसामा **अर्थी समर्थः शास्त्रेण अपर्युदस्तः** अर्थात् कर्मफल चाहने, कर्म गर्न शारीरिक रूपले अनि अनि सम्पत्तिले पनि समर्थ भएको अनि शास्त्रले अयोग्य भनी निर्देश नगरेको व्यक्ति नै कर्म गर्ने अधिकारी हुन्छ भनी बताइएको छ। कर्ममा पनि विशेष

कर्महरूमा अधिकारीहरूको अपेक्षा हुन्छ। श्रुतिले बताए अनुसार साम्राज्य चाहने राजाले मात्र राजसूय यज्ञ गर्न सक्दछ, अनि बृहस्पतिसव गर्न केवल ब्राह्मण मात्र योग्य हुन्छ। सामर्थ्य र इच्छा हुँदैमा न राजाले बृहस्पतिसव गर्न सक्छ, न त ब्राह्मणले राजसूय यज्ञ गर्न सक्दछ। यसरी विशेष कर्महरू विशेष वर्ण र आश्रमका अधिकारीहरूका लागि निश्चित भएको देखिन्छ। यस्तै साधनचतुटष्यसम्पन्न प्रमातालाई मात्र उपनिषद् श्रवण एवं तत्त्वविचारको अधिकारी मानिन्छ। यसप्रकार शास्त्रीय मार्गमध्ये कर्म एवं ज्ञानमा विशिष्ट अधिकारीको अपेक्षा हुन्छ। भक्तिका लागि भने त्यस्तो विशेष अधिकारको अपेक्षा रहँदैन। केवल इन्द्रिय भएको व्यक्ति भएदेखि यसमा स्वतः अधिकारी हुन्छ। वेदान्त सुन्न कान मात्र भएको व्यक्ति अधिकारी हुँदैन, तर भगवान्को नाम एवं गुणको श्रवण गर्न त कान भएको व्यक्ति पनि अधिकारी हुन्छ। यसै गरी हात, खुट्टा भएको व्यक्ति त्यतिकै भरमा मात्र कर्महरूमा अधिकारी हुँदैनन् भने परमात्माको सेवा आदि गर्न त्यति मात्र साधन भए पुग्दछ। यसरी भक्ति अरू मार्गहरूभन्दा सरल र कम झन्झटिलो हुन्छ।

इन्द्रिय हुनुको अर्थ अनेक प्रकारले गरिएको छ। यसको पहिलो अर्थ हुन्छ **सर्वेन्द्रियवत्त्व** अर्थात् सम्पूर्ण इन्द्रियहरूले परिपूर्ण हुनु। कर्मेन्द्रिय, ज्ञानेन्द्रिय आदिका सम्पूर्ण क्षमताहरू केवल मानिसमा मात्र अभिव्यक्त हुन्छन्, अरू पशुपक्षी आदि प्राणीहरूमा हुँदैनन्। त्यसैले कान, आँखा, हात, खुट्टा, मन आदि सबै इन्द्रियहरूले युक्त मानिसहरू भक्तिका अधिकारी हुन्। अथवा एउटै इन्द्रियले युक्त भएको प्राणी पनि भगवान्को भक्तिमा अधिकारी हुन्छ। गाई, मृग, पहाड, रुख आदि सबै श्रीकृष्णको भक्तिमा लीन भएको र जडचेतनमय सम्पूर्ण जगत्ले कृष्णरसमा भिजी आ-आफ्नो स्वाभाविकतालाई भुलेको प्रसङ्ग आइसकेको छ। नदीहरू पनि श्रीकृष्णलाई पाउन रोकिएको अनि श्रीकृष्णप्रेममा रुखहरूले मधुधारा बर्साएको बताएर श्रीशुकदेवले तिनीहरूमा पनि भक्तिको उच्चता प्रकाशित हुन सक्ने बताउनुभएको छ। त्यसकारण सामान्य रूपमा कुनै एक मात्र इन्द्रियहरूको क्षमता अभिव्यक्त छ भने पनि त्यो प्राणी भक्तिमा अधिकारी हुन्छ। यसरी ज्ञान, कर्म आदि साधनहरू भन्दा भक्तिमा सम्पूर्ण जगत् नै अधिकारी भएको स्पष्ट हुन्छ। इन्द्रियहरू समर्थ भएको प्राणीले पनि भगवान्को भक्ति गरेन भने चाहिँ त्यसका इन्द्रिय निरर्थक हुन्छन्। परमात्माको दर्शन नगर्ने आँखा मयूरको प्वाँखसमान हुन्, परमात्मदर्शनका लागि अघि नबढ्ने खुट्टा चाहिँ रुखसमान हुन् भनिएको छ। यसरी परमात्मामा लागेका इन्द्रियहरू नै वास्तवमा इन्द्रिय भएको सिद्ध हुन्छ। सत् वस्तु परमात्मालाई छाडी असत्य संसारको गुणगान गाउने अनि तिनकै ग्रहण चिन्तन गर्ने इन्द्रियलाई इन्द्रिय भन्न मिल्दैन।

परमात्मा सम्पूर्ण इन्द्रियहरूका अधिष्ठान एवं प्रकाशक हुनुहुन्छ। उहाँको सत्तामा टिकेका ती इन्द्रियहरू उहाँकै चैतन्य सत्ताद्वारा प्रकाशित भई आ-आफ्ना काम गर्दछन्। त्यसैले तिनीहरूले आफ्ना अधिष्ठानतिर फर्किनु नै भक्ति हो भनिन्छ। **हृषीकेण हृषीकेशसेवनं भक्तिरुत्तमा** अर्थात् विषयतिर लागेका इन्द्रियहरूले विषयलाई छाडी परमात्माको अनुसरण गर्न थाल्नु नै उत्तम भक्ति हो। यदि यति सजिलो एवं उपयुक्त साधनलाई पनि अपनाउँदैन भने त्यो व्यक्ति आत्मघाती हो भन्ने शास्त्रको निष्कर्ष छ। इन्द्रिय भएको कुन चाहिँ प्राणीले भगवान्को भजन नगर्ला र ? भन्नुको तात्पर्य जसले भजन गर्दैन, त्यसलाई इन्द्रियवान् भन्नै मिल्दैन भन्ने हो। यसरी यस

प्रसङ्गमा भक्तिको विशिष्ट अधिकारित्वको चर्चा गरिएको छ।

**तमेकदा तु देवर्षिं वसुदेवो गृहागतम् ।**
**अर्चितं सुखमासीनमभिवाद्येदमब्रवीत् ॥ ३ ॥**

**पदार्थ–**
**एकदा तु** = कुनै एक दिन
**वसुदेवः** = वसुदेवले
**गृहागतं** = घरमा आएका
**अर्चितं** = पूजा गरिएका र
**सुखम्** = आनन्दसँग
**आसीनं** = बसेका
**तं** = ती
**देवर्षिं** = देवर्षि नारदलाई
**अभिवाद्य** = नमस्कार आदि गरेर
**इदं** = यस्तो कुरा
**अब्रवीत्** = भन्नुभयो

**वाक्यार्थ–** कुनै एक दिन वसुदेवले आफ्नो घरमा आएका देवर्षि नारदलाई राम्रोसँग पूजा अर्चना गरी सुखसँग राखी नमस्कार आदि गरेर यसो भन्नुभयो।

**वसुदेव उवाच** (वसुदेवले भन्नुभयो)

**भगवन् भवतो यात्रा स्वस्तये सर्वदेहिनाम् ।**
**कृपणानां यथा पित्रोरुत्तमश्लोकवर्त्मनाम् ॥ ४ ॥**

**पदार्थ–**
**भगवन्** = हे प्रभु
**यथा** = जसरी
**पित्रोः** = मातापिताको आगमन
**स्वस्तये** = सन्तानको कल्याणका (लागि हुन्छ र जसरी)
**उत्तमश्लोकवर्त्मनां** = भगवान्तिर अग्रसर भएका महात्माहरूको आगमन
**कृपणानां** = प्रपञ्चमा अल्झिएका दीन–दुःखीहरूको लागि मङ्गलका लागि हुन्छ भने, त्यसै गरी
**भवतः** = हजुरको
**यात्रा** = आगमन त
**सर्वदेहिनाम्** = सारा प्राणीहरूको मङ्गलका लागि हुन्छ

**वाक्यार्थ–** हे प्रभु ! जसरी मातापिताको आगमन सन्तानको कल्याणका लागि र भगवान्का परम भक्त महात्माहरूको आगमन संसारी दुःखी व्यक्तिको कल्याणका लागि हुन्छ त्यसै गरी हजुरको आगमन सम्पूर्ण प्राणीहरूको मङ्गलका लागि हुन्छ।

**भूतानां देवचरितं दुःखाय च सुखाय च ।**
**सुखायैव हि साधूनां त्वादृशामच्युतात्मनाम् ॥ ५ ॥**

**पदार्थ–**
**देवचरितं** = देवताहरूको चरित्र
**भूतानां** = प्राणीहरूको
**सुखाय च** = सुखको लागि र
**दुःखाय च** = दुःखको लागि पनि हुन्छ (तर)
**हि** = निश्चय नै
**त्वादृशां** = हजुरहरू जस्ता
**अच्युतात्मनां** = चित्त भगवान्मा समर्पण गरिसकेका
**साधूनां** = साधुहरूको चरित्र
**सुखाय एव** = केवल सुखको लागि मात्र हुन्छ

**वाक्यार्थ–** देवताहरूको चरित्र प्राणीहरूको लागि कहिले सुखदायक हुन्छ र कहिले दुःखदायक पनि हुन्छ, तर हजुरहरू जस्ता भगवान्मा चित्त अर्पण गरिसकेका साधुहरूको चरित्र सधैँ सबैका लागि सुखदायक मात्र हुन्छ।

**भजन्ति ये यथा देवान् देवा अपि तथैव तान्।**
**छायेव कर्मसचिवाः साधवो दीनवत्सलाः ॥ ६ ॥**

**पदार्थ–**
**ये** = जो व्यक्तिहरू
**यथा** = जसरी (जुन प्रकारले)
**देवान्** = देवताहरूलाई
**भजन्ति** = सेवा गर्दछन्
**छाया इव** = अनुकरण गर्ने छायाले झैँ
**कर्मसचिवाः** = कर्म अनुसार फल दिने
**देवाः अपि** = देवताहरूले पनि
**तथा एव** = त्यसरी (आफूले नै गरे अनुसारको)
**तान्** = ती व्यक्तिहरूलाई (फलप्रदान गर्दछन्, तर)
**साधवः** = हजुरहरू जस्ता साधुहरू
**दीनवत्सलाः** = दुःखीका प्रिय हुन्छन् (केहीको अपेक्षा नगरी सुख प्रदान गर्दछन्)

**वाक्यार्थ–** जुन व्यक्तिहरूले देवताको जसरी आराधना गर्दछन्, कर्म अनुसार फल दिने देवताहरूले पनि ती व्यक्तिलाई छाया जस्तो भएर उस्तै फल प्रदान गर्दछन्, तर हजुरहरू जस्ता दुःखीमा दया गर्ने व्यक्तिहरू कुनै कुराको अपेक्षा विना नै अरूलाई सुख प्रदान गर्नुहुन्छ।

**विवरण–** यस प्रसङ्गमा सत्पुरुषहरूको महत्त्व बताइएको छ। मान्छेका सच्चा हितैषी भनेका भगवान्का भक्त साधुहरू नै हुन्। जसरी बच्चाहरूका लागि आमाबाबुको भेट आनन्ददायी हुन्छ, त्यसै गरी मुमुक्षु व्यक्तिका लागि पनि साधु पुरुषहरूको सम्मिलन अत्यन्त आनन्ददायी हुन्छ। यहाँ माता–पिताको दृष्टान्त किन राखिएको छ भने उनीहरू आफ्ना सन्ततिको पूर्ण हित होस् भन्ने चिताउँछन्। मातापिताले आफ्नो शिशुमा अकारण करुणा गर्दछन्, त्यसै गरी बच्चाहरू पनि ती मातापितामा पूर्णतया निर्भर र समर्पित हुन्छन्। यो भन्दा पनि अऊ गहिरो सम्बन्ध जिज्ञासु अनि ज्ञानीका बिच हुन्छ। आमाबाबुले सन्तानको हित होस् भन्ने चाहँदा पनि अज्ञानको कारणले उसलाई दुःखदायी संसारकै मार्गमा प्रेरणा गरेर अहित गरेको देखिन्छ, अनि बच्चाहरू बिस्तारै ठुला हुँदै गएपछि उनीहरूको मातापिताप्रतिको समर्पणभावमा पनि कमी आएको देखिन्छ। तर ज्ञानीहरू त जिज्ञासुको परम हित केमा छ भन्ने जान्दछन् र त्यही मार्गमा उनीहरूलाई प्रवर्तित गर्दछन्। जिज्ञासुहरू पनि एकपटक गुरुकहाँ समर्पित भइसकेपछि जीवनभरि पूर्णरूपले समर्पित भइरहन्छन्। मातापिताले दिएको शरीर त कालको प्रभावले एक दिन नष्ट हुन्छ, तर ज्ञानीले जन्म दिएको ज्ञानशरीरको त कहिल्यै नाश हुँदैन। यसकारण जिज्ञासुका लागि ज्ञानी महापुरुष नै एक मात्र आधार हुन्छन्। जिज्ञासु त्यो व्यक्ति हो, जसले संसारलाई दुःखमय छ भनी अनुभव गरेको छ, तर आत्माको स्वरूपानन्द उसमा प्रकट भइसकेको छैन। यो अवस्थामा व्यक्ति न त संसारको भोगबाट सुख पाउन सक्छ न त आत्माबाट नै। त्यसकारण मुमुक्षुको स्थितिलाई अन्तरिक्षमा झुन्डिएको त्रिशङ्क जस्तै मानिन्छ। संसारबाट मुक्त नभइसकेको ऊ यसबाट छुट्न कुनै भरपर्दो

अवलम्बनको अपेक्षामा हुन्छ। यही वेलामा उसलाई त्यस्ता महापुरुष मिल्छन्, जो परम हितको उपदेश गर्न समर्थ हुन्छन्। यही समय नै मुमुक्षुका लागि सर्वाधिक आनन्दको समय हुन्छ। यहाँ वसुदेवले देवताहरूभन्दा पनि बढी महापुरुषहरू नै मानिसका लागि कल्याणकारी हुन्छन् भनी बताउनुभएको छ। देवताहरू कहिलेकाहीँ आफ्नो अपमान हुँदा प्रतिकूल आचरण गरी प्राणीहरूलाई दुःख पनि दिन्छन्। उनीहरू स्वार्थकै लागि मानिसहरूको कल्याण गर्दछन्, किनभने मानिसले दिएको यज्ञीय आहुति आदिका कारणले नै उनीहरू समर्थ बनिरहन्छन्। अरु उपनिषद्मा त मानिस ज्ञानी भयो भने आफूभन्दा माथि पुग्ने आशङ्काले देवताहरू कल्याणको मार्गमा अघि बढ्न खोज्नेलाई बिचमा विघ्न समेत गर्दछन् भनिएको छ। **तस्मादेषां तन्न प्रियं यदेतन्मनुष्याः विद्युः** (बृहदारण्यकोपनिषद् १।४।१०) अर्थात् यी देवताहरूलाई यो मन पर्दैन कि, मानिसहरूले तत्त्वलाई जानून्। देवताहरू समेत मानिसका लागि अहितकर नै छन्। यसरी जो व्यक्ति कल्याणको मार्गमा हिँड्न खोज्छ, उसका लागि न यो लोकका आमाबुबा पूर्णतः विश्वासयोग्य हुन्छन्, न परलोकका नियन्त्रक देवताहरू। ऊ केवल एक्लै कल्याणमार्गको पथिक बनेको हुन्छ। ज्ञानी पुरुषहरू भने यो मार्गका प्रदर्शक भएकाले संसारमा मुमुक्षुका लागि एक मात्र विश्वासयोग्य हुन्छन्। यी महापुरुषहरूले मानिसहरूलाई उनीहरूको वास्तविक एवं नित्य परमात्मस्वरूपको सम्झना दिलाइदिन्छन्। जसले मृत्युमा पिल्सिरहेको व्यक्तिलाई त्यसबाट जोगाउँदैनन्, तिनलाई के गुरु, के माता-पिता, के आफन्त र के देवता भन्नु ? त्यसैले त्यही व्यक्ति सच्चा आफन्त हो, जसले मानिसलाई अभयपदको मार्ग देखाइदिन्छ। त्यसैले यहाँ आत्मज्ञ महापुरुषहरूको सर्वश्रेष्ठता सिद्ध गरिएको छ।

**ब्रह्मंस्तथापि पृच्छामो धर्मान् भागवतांस्तव।**
**याञ्छ्रुत्वा श्रद्धया मर्त्यो मुच्यते सर्वतो भयात्॥ ७॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे देवर्षि
**तथा अपि** = तैपनि
**तव** = हजुरसँग
**भागवतान्** = भगवान्लाई प्रसन्न पार्ने
**धर्मान्** = धर्महरू
**पृच्छामः** = म सोध्छु
**यान्** = जुन भागवत धर्महरूलाई
**श्रद्धया** = श्रद्धापूर्वक
**श्रुत्वा** = सुनेर
**मर्त्यः** = मरणधर्मवाला मानिस
**सर्वतः भयात्** = सम्पूर्ण भययुक्त संसारबाट
**मुच्यते** = मुक्त हुन्छ

**वाक्यार्थ–** हे देवर्षि नारद ! हजुर स्वयं दयालु हुँदाहुँदै पनि म हजुरसँग भगवान्लाई प्रसन्न पार्ने धर्मको विषयमा सोध्न चाहन्छु, जुन धर्मलाई श्रद्धापूर्वक सुन्नाले मरणधर्मा मानिस भययुक्त संसारबाट मुक्त हुन्छ।

**अहं किल पुरानन्तं प्रजार्थो भुवि मुक्तिदम्।**
**अपूजयं न मोक्षाय मोहितो देवमायया॥ ८॥**

**पदार्थ—**

**पुरा** = पहिलो जन्ममा
**देवमायया** = भगवान्‌को मायाले
**मोहितः** = मोहित भएको
**अहं** = मैले
**मुक्तिदं** = मोक्ष दिने
**अनन्तं** = परमात्मालाई
**भुवि** = पृथिवीमा
**प्रजार्थः** = सन्तानप्राप्तिका लागि
**अपूजयम्** = आराधना गरे
**किल** = निश्चय नै
**मोक्षाय** = मोक्षका लागि
**न** = आराधना गरिनँ

**वाक्यार्थ—** पहिलो जन्ममा मैले मोक्ष दिने भगवान्‌लाई पृथिवीमा सन्तानको चाहना गरेर आराधना गरेँ। भगवान्‌को मायाले मोहित भएका कारण मैले मोक्षका लागि आराधना गरिनँ।

**यथा विचित्रव्यसनाद् भवद्भिर्विश्वतोभयात्।**
**मुच्येम ह्यञ्जसैवाद्धा तथा नः शाधि सुव्रत॥ ९॥**

**पदार्थ—**

**सुव्रत** = हे नियमनिष्ठ नारद
**यथा** = जसरी
**भवद्भिः** = हजुरहरूको सम्पर्कले
**विचित्रव्यसनात्** = विभिन्नखाले दुःखै दुःखले पूर्ण
**विश्वतोभयात्** = सांसारिक डरबाट
**हिं** = निश्चय नै
**अञ्जसा** = सजिलै
**मुच्येम** = मुक्त हुन सक्छौँ
**तथा** = त्यस्ता उपायहरू
**नः** = हामीहरूलाई
**अद्धा** = साक्षात्
**शाधि** = उपदेश गर्नुहोस्

**वाक्यार्थ—** हे नियमनिष्ठ नारद ! जसरी हजुरहरूको उपदेशरूप सहाराले हामीहरू यो अनन्त दुःखले पूर्ण संसारबाट सजिलै मुक्त हुन सक्छौँ, त्यस्तो कुराको हामीहरूलाई उपदेश गर्नुहोस्।

**विवरण—** यस प्रसङ्गमा वसुदेवले आफ्नो पुरानो अविवेकलाई धिक्कार्दै आफूलाई दुःखको पन्जाबाट छुटाउन नारदसँग प्रार्थना गरेका छन्। भगवान्‌ले मुक्ति दिनुहुन्छ। यस्ता सर्वसमर्थ एवं परम कल्याणकारक परमात्माको आराधना गरेर पनि मैले सांसारिक मायाले मोहित भई मोक्ष मागिनँ भन्ने वसुदेवलाई पछुतो लागेको छ। पूर्वजन्ममा आफू कश्यप हुँदा भगवान्‌को तपस्या गरी उनी र उनकी पत्नीले भगवान् जस्तै छोरो हामीलाई प्राप्त होस् भनी वर मागेका थिए। यसमा भगवान्‌को माया नै कारण हो। जुन व्यक्तिभित्र संसारविषयक कर्मसंस्कारहरू रहन्छन्, ती व्यक्तिहरू भगवान्‌को मायाद्वारा स्वतः मोहित हुन्छन्। जसको हृदय पूर्णतः माझिएको अनि वासनाहरूले रहित भएको छ, तिनीहरूमा मात्र भगवान्‌को स्वाभाविक मायाशक्तिले लौकिक सङ्कल्प उत्पन्न गराउन सक्दैन। कश्यप र अदितिभित्र संसारको वासना अवशिष्ट रहेकाले उनीहरू भगवान्‌को मायाद्वारा मोहित भए र सत् वस्तु परमात्मा माग्नु पर्नेमा उनीहरूले असत् वस्तुलाई नै मागे। पूर्ण आनन्दको मूल परमात्मा मात्र हुनुहुन्छ। अरू कुनै पनि सांसारिक वस्तुहरूबाट त्यस्तो आनन्द पाइँदैन। छोरामा आसक्त भएका ती दम्पतीले आखिर संसारमा फसी दुःख नै त पाए ? वसुदेव आफ्नो अनुभव व्यक्त गर्दै भन्छन्— यो संसार त अनेकथरी नयाँ–नयाँ दुःखले भरिएको रहेछ। यहाँ कहिल्यै नसोचेका आपत्तिहरू आउँदा रहेछन्। हुन पनि भगवान्‌लाई नै छोराको रूपमा पाएर पनि वसुदेवले भोगेको पीडा कम दुःखदायी छैन। उनले छोरोको इच्छा गर्दा ज्यादै दुःख पाएका छन्। अरूका छोराहरू त घरभित्र जन्मन्छन् र त्यसको खुसियाली मनाउन आफन्तहरूलाई

थाहा दिइन्छ, तर वसुदेवको छोरा कारागारभित्र जन्मिन्छन् र त्यसको सुइँकोसम्म पनि कसैले पाउन नहुने अवस्था हुन्छ। कहाँ पिताले गर्नुपर्ने छोराको जातकर्म आदि संस्कार अनि कहाँ छोरालाई टोकरीमा लुकाई यमुनापारि गाउँमा लगी छोड्नुपर्ने वसुदेवको बाध्यता। बालक अवस्थाको छोरालाई खेलाउन र हेर्न पनि नपाएकाले वसुदेवलाई छोरो पाएको सन्तुष्टि पनि भएन। यसरी छोराको कामना गर्नाले वसुदेवले त्यो कामनाबाट धेरै दुःख पाए। उनले संसारलाई जतातत्तैबाट भय नै भयले युक्त भनेका छन्। जन्म, रोग, बुढ्याइँ, मृत्यु आदि महाभयहरू रहेको संसारमा अब बाँधिन हुँदैन भन्ने वसुदेवको धारणा छ। जसले संसारबाट धोका पाइसकेपछि त्यसलाई दुःखमय सम्झी झटपट त्यसबाट अलग हुन्छ, त्यही प्राणी विवेकी हो। संसारबाट अनेकौ दुःख र हन्डर खाँदाखाँदै पनि कोही सधैँ विषयभोग गर्दै बाँचिरहने सपना देख्छ भने त्यस्तो मूर्ख व्यक्तिलाई के भन्ने ? विवेकीहरू जब संसारबाट दुःख पाउँछन् त झटपट त्यसलाई विचार गरी संसार नै दुःखमय भएको निष्कर्ष निकाल्दछन्। यही विवेकीहरूको दृष्टिलाई आधार मानी भगवान् श्रीकृष्णले गीतामा संसारलाई नाशवान् अनि दुःखको निवासस्थान भन्नुभएको छ— **दुःखालयमशाश्वतम्** (८।१५)। यो दुःखबाट छुट्कारा पाउने उपाय ज्ञानी महापुरुषले नै बताउन सक्छन्, अरूले होइन। त्यसैले मुमुक्षुहरूका लागि उनीहरू नै आश्रय हुन्छन्। यसरी यहाँ वसुदेवले संसारबाट विरक्त भई परमात्माको विषयमा जिज्ञासा राखेका छन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**राजन्नेवं कृतप्रश्नो वसुदेवेन धीमता।**

**प्रीतस्तमाह देवर्षिर्हरेः संस्मारितो गुणैः॥ १०॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **राजन्** = हे राजा परीक्षित् | **कृतप्रश्नः** = सोधिएका र | **देवर्षिः** = देवर्षि नारदले |
| **एवं** = यसरी | **हरेः** = भगवान् श्रीहरिका | **प्रीतः** = अत्यन्त प्रसन्न भएर |
| **धीमता** = बुद्धिमान् | **गुणैः** = वर्णन गरिने गुणहरूद्वारा | **तं** = ती वसुदेवलाई |
| **वसुदेवेन** = वसुदेवद्वारा | **संस्मारितः** = हरिको सम्झना गराइएका | **आह** = भन्न लाग्नुभयो |

**वाक्यार्थ—** हे परीक्षित् ! यसरी बुद्धिमान् वसुदेवले नारदलाई प्रश्न सोधिसकेपछि नारदलाई भगवान् र भगवान्का गुणहरूको याद आयो र अति प्रसन्न हुनुभयो अनि उहाँले वसुदेवलाई भन्न लाग्नुभयो।

**नारद उवाच** (नारदले भन्नुभयो)

**सम्यगेतद् व्यवसितं भवता सात्वतर्षभ।**

**यत्पृच्छसे भागवतान् धर्मांस्त्वं विश्वभावनान्॥ ११॥**

**पदार्थ—**

| | |
|---|---|
| **सात्वतर्षभ** = हे यादवश्रेष्ठ | वसुदेव |

**भवता** = हजुरद्वारा
**एतत्** = यो
**सम्यक् व्यवसितं** = राम्रो काम गरियो
**यत्** = किनभने
**त्वं** = हजुरले
**विश्वभावनान्** = सबैलाई पवित्र पार्ने
**भागवतान्** = भगवान् सम्बन्धी
**धर्मान्** = धर्महरू
**पृच्छसे** = सोध्नुभएको छ

**वाक्यार्थ–** हे वसुदेव ! हजुरले अत्यन्त राम्रो काम गर्नुभयो, किनभने सबैलाई पवित्र पार्ने भागवत धर्मको विषयमा हजुरले प्रश्न गर्नुभएको छ।

**श्रुतोऽनुपठितो ध्यात आदृतो वानुमोदितः।**
**सद्यः पुनाति सद्धर्मो देवविश्वद्रुहोऽपि हि ॥ १२ ॥**

**पदार्थ–**
**श्रुतः** = सुनेको
**अनुपठितः** = पढेको
**ध्यातः** = चिन्तन गरिएको
**आदृतः** = आदर गरिएको र
**अनुमोदितः** = प्रशंसा गरिएको
**सद्धर्मः** = यो भागवत धर्मले
**हि** = निश्चय नै
**देवविश्वद्रुहः अपि** = देवताको द्रोह गर्ने र जगत्को नै द्रोह गर्नेलाई पनि
**सद्यः** = तुरुन्त
**पुनाति** = पवित्र पार्दछ

**वाक्यार्थ–** यो भागवत धर्मले निश्चय नै केही सुनेको, पढेको तथा केही चिन्तन गरेको र श्रद्धापूर्वक आदर गरेको अनि अरूले आचरण गरेकोमा प्रशंसा मात्रै गरेको भए पनि देवद्रोही र जगत्कै द्रोही भए पनि उसलाई पवित्र पार्दछ।

**त्वया परमकल्याणः पुण्यश्रवणकीर्तनः।**
**स्मारितो भगवानद्य देवो नारायणो मम ॥ १३ ॥**

**पदार्थ–**
**त्वया** = तपाईंद्वारा
**अद्य** = आज
**पुण्यश्रवणकीर्तनः** = नामको श्रवण र कीर्तनबाट पुण्य हुने
**परमकल्याणः** = परम मङ्गलमय
**देवः** = दिव्यरूप
**भगवान् नारायणः** = भगवान् नारायण
**मम** = मलाई
**स्मारितः** = स्मरण गराइनुभयो

**वाक्यार्थ–** हे वसुदेव ! हजुरले आज मलाई जसको नाम उच्चारण गर्नाले र श्रवण गर्नाले पुण्य हुन्छ, जो परम मङ्गलरूप हुनुहुन्छ र दिव्य रूपवाला हुनुहन्छ, त्यस्ता भगवान् नारायणको स्मरण गराइदिनुभयो।

**अत्राप्युदाहरन्तीममितिहासं पुरातनम्।**
**आर्षभाणां च संवादं विदेहस्य महात्मनः ॥ १४ ॥**

**पदार्थ–**
**अत्र** = यो विषयमा (भागवत धर्मको विषयमा)

**आर्षभाणां** = ऋषभदेवका पुत्रहरूको र
**महात्मनः** = महात्मा
**विदेहस्य च** = राजा निमिको
**संवादं** = संवादरूप
**इमं** = यो
**पुरातनं** = पुरानो
**इतिहासम् अपि** = इतिहास पनि
**उदाहरन्ति** = (विद्वान्हरू) भन्ने गर्दछन्

**वाक्यार्थ–** भागवत धर्मको विषयमा ऋषभदेवका पुत्रहरूको र महात्मा राजा निमिको संवादरूप पुरानो इतिहास विद्वान्हरू बताउने गर्दछन्।

**प्रियव्रतो नाम सुतो मनोः स्वायम्भुवस्य यः।**
**तस्याग्नीध्रस्ततो नाभिर्ऋषभस्तत्सुतः स्मृतः॥ १५॥**

**पदार्थ–**
**स्वायम्भुवस्य** = स्वायम्भुव नाम गरेका
**मनोः** = मनुको
**यः** = जो
**प्रियव्रतः नाम** = प्रियव्रत नाम गरेका
**सुतः** = छोरा (थिए)
**तस्य** = उनको पनि
**आग्नीध्रः** = आग्नीध्र नाम गरेका छोरा
**ततः** = त्यसपछि आग्नीध्रबाट
**नाभिः** = नाभि
**तत्सुतः** = तिनको छोरा
**ऋषभः** = ऋषभ
**स्मृतः** = भए

**वाक्यार्थ–** स्वायंभुव मनुका छोरा प्रियव्रत, प्रियव्रतका छोरा आग्नीध्र, आग्नीध्रका छोरा नाभि र नाभिबाट पनि ऋषभदेव नामका छोरा जन्मिए।

**तमाहुर्वासुदेवांशं मोक्षधर्मविवक्षया।**
**अवतीर्णं सुतशतं तस्यासीद् ब्रह्मपारगम्॥ १६॥**

**पदार्थ–**
**तं** = ती ऋषभदेवलाई
**मोक्षधर्मविवक्षया** = मोक्षधर्मको उपदेशका लागि
**अवतीर्णं** = अवतीर्ण भएका
**वासुदेवांशं** = भगवान् वासुदेवकै अंश भनेर
**आहुः** = भन्दछन्
**तस्य** = ती ऋषभदेवको
**ब्रह्मपारगं** = वेद आदि शास्त्रमा पारङ्गत
**सुतशतं** = सय भाइ छोरा
**आसीत्** = थिए

**वाक्यार्थ–** ती ऋषभदेवलाई मोक्षधर्मको उपदेश गर्न अवतीर्ण भएका साक्षात् भगवान् वासुदेवको अंश भनेर भन्दछन्, उनका वेद आदि शास्त्रमा पारङ्गत र ब्रह्मज्ञानी सय भाइ छोराहरू थिए।

**तेषां वै भरतो ज्येष्ठो नारायणपरायणः।**
**विख्यातं वर्षमेतद् यन्नाम्ना भारतमद्भुतम्॥ १७॥**

**पदार्थ—**
**तेषां** = ती सय भाइमध्ये
**ज्येष्ठः** = जेठा
**भरतः** = भरत नामका थिए
**वै** = निश्चय नै उनी
**नारायणपरायणः** = भगवान् नारायणका परम भक्त थिए
**यन्नाम्ना** = जसको नामबाट
**एतत्** = यो
**अद्भुतं** = विशाल
**वर्षं** = वर्ष (भूखण्ड)
**भारतं** = भारतवर्षको नामले
**विख्यातम्** = प्रख्यात भयो

**वाक्यार्थ—** ती सयभाइ छोराहरूमध्ये जेठा भरत थिए जो भगवान् नारायणका परम भक्त थिए र उनैको नाममा यो भूखण्ड भारतवर्षको नामले प्रख्यात भयो।

**स भुक्तभोगां त्यक्त्वेमां निर्गतस्तपसा हरिम्।**
**उपासीनस्तत्पदवीं लेभे वै जन्मभिस्त्रिभिः॥ १८॥**

**पदार्थ—**
**इमां** = यो
**भुक्तभोगां** = भोग भोगिसकिएकी पृथिवीलाई
**त्यक्त्वा** = त्यागेर
**निर्गतः** = घरबाट निक्लिएका
**सः** = ती राजा भरतले
**तपसा** = तपस्या गरेर
**हरिम्** = भगवान् श्रीहरिलाई
**उपासीनः** = उपासना गर्दै
**त्रिभिः**= तीन
**जन्मभिः** = जन्म लगाएर
**वै** = निश्चय नै
**तत्पदवीं** = मुक्तिको पदलाई
**लेभे** = प्राप्त गरे

**वाक्यार्थ—** भोग गरिसकिएकी पृथिवीलाई त्यागेर घरबाट निक्लिएका राजर्षि भरतले तीन जन्मसम्म भगवान्को तपस्या गरे र उनले मुक्तिको पदलाई प्राप्त गरे।

**तेषां नव नवद्वीपपतयोऽस्य समन्ततः।**
**कर्मतन्त्रप्रणेतार एकाशीतिर्द्विजातयः॥ १९॥**
**नवाभवन्महाभागा मुनयो ह्यर्थशंसिनः।**
**श्रमणा वातरसना आत्मविद्याविशारदाः॥ २०॥**
**कविर्हरिरन्तरिक्षः प्रबुद्धः पिप्पलायनः।**
**आविर्होत्रोऽथ द्रुमिलश्चमसः करभाजनः॥ २१॥**

**पदार्थ—**
**तेषां** = भरतका ती उनान्सय छोराहरूमा
**नव** = नौ जना
**अस्य** = यो भारतवर्षका
**समन्ततः** = चारैतर्फ रहेका
**नवद्वीपपतयः** = नौ द्वीपका राजा भए
**एकाशीतिः** = अरू एकासी जना
**कर्मतन्त्रप्रणेतारः** = कर्मकाण्डका प्रवर्तक
**द्विजातयः** = द्विज भए र
**हि** = निश्चय नै
**नव** = अरू नौ जना
**श्रमणाः** = भिक्षुको रूपमा
**अर्थशंसिनः** = परमार्थका निरूपक
**वातरसनाः** = दिगम्बर

**आत्मविद्याविशारदाः** = आत्मतत्त्ववेत्ता
**महाभागाः** = परम भाग्यशाली
**कविः** = कवि
**हरिः** = हरि
**अन्तरिक्षः** = अन्तरिक्ष
**द्रुमिलः** = द्रुमिल
**चमसः** = चमस
**प्रबुद्धः** = प्रबुद्ध
**पिप्पलायनः** = पिप्पलायन
**आविर्होत्रः** = आविर्होत्र र
**अथ** = त्यसपछि
**करभाजनः** = करभाजन नामका
**मुनयः** = मुनिहरू
**अभवन्** = भए

**वाक्यार्थ–** राजा भरतका उनान्सय छोराहरूमा नौजना भारतवर्षका वरिपरि रहेका नौ द्वीपका राजा भए। एकासी जना कर्मकाण्डका प्रवर्तक द्विज भए र अरू कवि, हरि, अन्तरिक्ष, प्रबुद्ध, पिप्पलायन, आविर्होत्र, द्रुमिल, चमस र करभाजन नामका नौ जना चाहिँ परमार्थको निरूपण गर्ने दिगम्बर र आत्मविद्यामा निपुण परम भाग्यशाली मुनिहरू भए।

**त एते भगवद्रूपं विश्वं सदसदात्मकम्।**
**आत्मनोऽव्यतिरेकेण पश्यन्तो व्यचरन्महीम्॥ २२॥**

**पदार्थ–**
**ते** = ती
**एते** = यी नौ योगीश्वरहरू
**सदसदात्मकं** = कार्यकारणरूप
**विश्वं** = जगत्लाई
**भगवद्रूपं** = भगवान्को रूपमा
**आत्मनः** = आफ्नो आत्माभन्दा
**अव्यतिरेकेण** = अभिन्न रूपले
**पश्यन्तः** = हेर्दै वा विचार गर्दै
**महीम्** = पृथिवीमा
**व्यचरन्** = घुम्दथे

**वाक्यार्थ–** ती नौ योगीश्वरहरू कार्यकारणात्मक जगत्लाई भगवान्कै रूपमा र आफ्नो आत्मादेखि अभिन्न वस्तुको रूपमा हेर्दै पृथिवीमा घुम्दथे।

**अव्याहतेष्टगतयः सुरसिद्धसाध्य-**
**गन्धर्वयक्षनरकिन्नरनागलोकान्।**
**मुक्ताश्चरन्ति मुनिचारणभूतनाथ-**
**विद्याधरद्विजगवां भुवनानि कामम्॥ २३॥**

**पदार्थ–**
**अव्याहतेष्टगतयः** = कतै रोकतोक नभएका
**मुक्ताः** = आसक्तिरहित मुक्त ती योगीश्वरहरू
**सुरसिद्धसाध्यगन्धर्वयक्षनर-किन्नरनागलोकान्** = देवता, सिद्ध, साध्य, गन्धर्व, यक्ष, मनुष्य, किन्नर र नागका लोकहरूमा तथा
**मुनिचारणभूतनाथविद्याधरद्विज-गवां** = मुनि, चारण, भूतनाथ, विद्याधर तथा ब्राह्मण र गाई आदिका
**भुवनानि** = लोकहरूमा पनि
**कामं** = स्वच्छन्दतापूर्वक
**चरन्ति** = घुम्दथे

**वाक्यार्थ–** ती नव योगीश्वरहरूलाई कतै जान पनि रोकतोक थिएन। आसक्तिरहित भएर देवता, सिद्ध, साध्य, गन्धर्व, मनुष्य, किन्नर र नागका लोकहरूमा तथा मुनि, चारण, भूतनाथ, विद्याधर,

ब्राह्मण र गाईका लोकहरूमा पनि उनीहरू स्वच्छन्दतापूर्वक घुम्दथे।

**त एकदा निमेः सत्रमुपजग्मुर्यदृच्छया।**
**वितायमानमृषिभिरजनाभे महात्मनः॥ २४॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **ऋषिभिः** = महर्षिहरूद्वारा | **निमेः** = राजा निमिको |
| **एकदा** = कुनै एक दिन | **वितायमानं** = अनुष्ठान | **सत्रं** = यज्ञमा |
| **ते** = ती नौ योगीश्वरहरू | गरिइरहेको | **यदृच्छया** = स्वेच्छाले घुम्दै फिर्दै |
| **अजनाभे** = अजनाभ वर्षमा | **महात्मनः** = महात्मा | **उपजग्मुः** = पुगे |

**वाक्यार्थ–** कुनै एक दिन ती नौ योगीश्वरहरू अजनाभ (भारत) वर्षमा घुम्दै फिर्दै ऋषि महर्षिहरूद्वारा अनुष्ठान गरिएको राजा निमिको यज्ञ भइरहेको ठाउँमा पुगे।

**तान् दृष्ट्वा सूर्यसङ्काशान् महाभागवतान् नृप।**
**यजमानोऽग्नयो विप्राः सर्व एवोपतस्थिरे॥ २५॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **तान्** = ती नौ योगीश्वरहरूलाई | **अग्नयः** = अग्निहरू र |
| **सूर्यसङ्काशान्** = सूर्य जस्ता | **दृष्ट्वा** = देखेर | **विप्राः** = ब्राह्मणहरू |
| तेजस्वी | **यजमानः** = यजमानको रूपमा | **सर्वे एव** = सबै जनाले |
| **महाभागवतान्** = भगवान्का | रहेका | **उपतस्थिरे** = उभिएर स्वागत गरे |
| परम भक्त | **नृप** = राजा निमि | |

**वाक्यार्थ–** सूर्य जस्ता तेजस्वी भगवान्का परमभक्त ती नौ योगीश्वरहरूलाई आउँदै गरेको देखेर यजमानको रूपमा बसेका राजा निमिले, मूर्तिमान् आहवनीय आदि अग्निहरूले र अन्य ब्राह्मणहरू सबैले उभिएर स्वागत गरे।

**विदेहस्तानभिप्रेत्य नारायणपरायणान्।**
**प्रीतः सम्पूजयाञ्चक्रे आसनस्थान् यथार्हतः॥ २६॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | नारायणमा अनुरक्त भएको | **यथार्हतः** = योग्यताको क्रमले |
| **विदेहः** = राजा निमिले | **अभिप्रेत्य** = जानेर | **सम्पूजयाञ्चक्रे** = पूजा गरे |
| **तान्** = ती योगीश्वरहरूलाई | **प्रीतः** = अति प्रसन्न हुँदै | |
| **नारायणपरायणान्** = भगवान् | **आसनस्थान्** = आसनमा राखेर | |

**वाक्यार्थ–** राजा निमिले ती योगीश्वरहरूलाई भगवान् नारायणमा अनुरक्त भएको बुझेर उनीहरूलाई आसनमा राखी योग्यताको क्रम अनुसार पूजा गरे।

**तान् रोचमानान् स्वरुचा ब्रह्मपुत्रोपमान् नव ।**

**पप्रच्छ परमप्रीतः प्रश्रयावनतो नृपः ॥ २७ ॥**

**पदार्थ–**
**परमप्रीतः** = अति प्रसन्न भएका
**नृपः** = राजा निमिले
**स्वरुचा** = आफ्नो कान्तिले
**रोचमानान्** = चम्किएका
**ब्रह्मपुत्रोपमान्** = ब्रह्माजीका पुत्र सनक आदि जस्ता
**तान्** = ती
**नव** = नौ योगीश्वरहरूलाई
**प्रश्रयावनतः** = अति विनम्र भएर
**पप्रच्छ** = सोधे

**वाक्यार्थ–** ती नौ योगीश्वरको आगमनले ज्यादै प्रसन्न भएका राजा निमिले आफ्नै कान्तिले उज्ज्वल भएका ती नव योगीश्वरहरूलाई अति नम्रतापूर्वक सोधे।

**विदेह उवाच** (राजा निमिले भने)

**मन्ये भगवतः साक्षात् पार्षदान् वो मधुद्विषः ।**

**विष्णोर्भूतानि लोकानां पावनाय चरन्ति हि ॥ २८ ॥**

**पदार्थ–**
**वः** = हजुरहरूलाई (मैले)
**साक्षात्** = प्रत्यक्ष
**भगवतः** = भगवान्
**मधुद्विषः** = श्रीहरिका
**पार्षदान्** = पार्षद (भक्त)
**मन्ये** = मानेको छु
**हि** = किनभने
**विष्णोः** = भगवान् नारायणका
**भूतानि** = भक्तहरू
**लोकानां** = सारा लोकलाई
**पावनाय** = पवित्र पार्नको लागि
**चरन्ति** = घुम्दछन्

**वाक्यार्थ–** मैले हजुरहरूलाई भगवान् श्रीहरिको पार्षदको रूपमा मानेको छु, किनभने भगवान्का भक्तहरू लोकलाई पवित्र पार्नको लागि घुम्दछन्।

**दुर्लभो मानुषो देहो देहिनां क्षणभङ्गुरः ।**

**तत्रापि दुर्लभं मन्ये वैकुण्ठप्रियदर्शनम् ॥ २९ ॥**

**पदार्थ–**
**देहिनां** = जीवहरूको लागि
**क्षणभङ्गुरः** = क्षणभङ्गुर (अत्यन्त चाँडो नष्ट हुनेखालको)
**मानुषः देहः** = मनुष्य शरीर
**दुर्लभः** = दुर्लभ छ र
**तत्र अपि** = त्यो मनुष्य जन्ममा पनि
**वैकुण्ठप्रियदर्शनं** = भगवान्का भक्तहरूको दर्शन पाउनु त झन्
**दुर्लभं** = अतिदुर्लभ छ भन्ने कुरा
**मन्ये** = मान्दछु

**वाक्यार्थ–** प्राणीहरूको लागि क्षणभङ्गुर मनुष्य शरीर प्राप्त गर्नु नै दुर्लभ छ। त्यो मनुष्यजन्म प्राप्त गरेपछि पनि भगवान्का भक्तहरूको दर्शन त अतिदुर्लभ हो भन्ने कुरा मैले मानेको छु।

**अत आत्यन्तिकं क्षेमं पृच्छामो भवतोऽनघाः ।**

**संसारेऽस्मिन् क्षणार्धोऽपि सत्सङ्गः शेवधिर्नृणाम् ॥ ३० ॥**

**पद्धार्थ—**
**अनघाः** = हे पुण्यात्मा महात्माहरू
**अतः** = त्यसैले (हामीहरू)
**भवतः** = हजुरहरूसँग
**आत्यन्तिकं** = पारमार्थिक
**क्षेमं** = कल्याणको कुरा
**पृच्छामः** = सोध्छौं
**अस्मिन्** = यो
**संसारे** = संसारमा
**क्षणार्धः अपि** = आधा क्षण मात्रै भए पनि
**सत्सङ्गः** = सत्सङ्ग
**नृणां** = मानिसहरूको लागि
**शेवधिः** = आनन्द दिने खानी समान हुन्छ

**वाक्यार्थ—** हे पुण्यात्मा महात्माहरू ! दुर्लभ भएको कारणले नै हामीहरू हजुरहरूसँग पारमार्थिक कल्याणको कुरा सोध्छौं, किनभने यो संसारमा आधा क्षण मात्रै पनि गरेको सत्सङ्ग मानिसको लागि परम आनन्दायक खानी समान हुन्छ।

**विवरण—** यस प्रसङ्गमा निमिले मनुष्यजन्म अत्यन्त दुर्लभ भएको र यसको सदुपयोगका लागि सत्सङ्ग नै गर्नुपर्ने बताएका छन्। शास्त्रहरूमा मनुष्य जन्मको अत्यन्त प्रशंसा गरिएको छ। परमात्माले मनुष्यभन्दा पहिले गाई, घोडा आदिको सृष्टि गरे तापनि ती प्राणीभित्र इन्द्रियका अभिमानी देवताहरू नपसेको अनि मनुष्यशरीरको रचनापछि भने तिनीहरू सबै झटपट त्यहाँ पसेको कथा ऐतरेयोपनिषद्मा आउँछ— **पुरुषो वाव सुकृतम्** (१।२।३) अर्थात् मनुष्य नै पुण्यमय छ। संसारका विषयहरूको भोग पनि मनुष्यले नै गर्न सक्छन्, अनि सत्कर्मको आचरणले ज्ञानद्वारा मोक्ष पनि यिनैले पाउन सक्छन्। मनुष्यको माध्यमले नै त्यसका इन्द्रियाभिमानी देवताहरूले समेत परम तृप्ति पाउन सक्छन्। त्यसैले देवताहरूले पनि मनुष्यजन्मकै विशेषता गाएका छन्। यद्यपि मनुष्यले भौतिक, आध्यात्मिक सबैथरी उन्नति गर्न सक्छ, तर उसको जीवनको सार्थकता भनेको परमात्मसाक्षात्कार नै हो, किनभने यही एउटा मात्र त्यस्तो विशेष कर्म हो, जो केवल मानिसले मात्र गर्न सक्दछ। अरू प्राणीहरूले गर्न नसक्ने परम पुरुषार्थको प्राप्ति नै मनुष्यको विशेषता हो, त्यसैले खाने-सुत्ने आदि सबैले गर्न सक्ने काम गरेर मात्र मानिस बाँचेको ठहरिँदैन। भगवान्का प्रिय भक्तहरूको दर्शन र सत्सङ्ग गर्नु नै मनुष्यजन्मको मुख्य उद्देश्य हो। मनिसले जीवनभरि गर्ने अनेक काम तिनका अनेकथरी प्रयोजनहरू पनि कालको प्रभावले क्षीण हुन्छन्, भगवान्का भक्तहरूको नजिक रही परमात्माको गुणश्रवण र कीर्तन गर्नु नै जीवनको कहिल्यै नष्ट नहुने सम्पत्ति हो, किनभने यसले अविनाशी फल जन्माइदिन्छ। त्यसैले नारद भन्नुहुन्छ— **अविच्युतोऽर्थः कविभिर्निरूपितो यदुत्तमश्लोकगुणानुवर्णनम्** (भागवत १।५।२२) अर्थात् विद्वान्हरूले मनुष्यका सम्पूर्ण सत्कर्महरूको अविनाशी प्रयोजन पवित्रकीर्ति परमात्माको गुणवर्णन गर्नुलाई नै मानेका छन्। मनुष्यको शरीर अवश्य नाशवान् छ तर त्यसको सदुपयोग गर्न सकियो भने अविनाशी नित्य सुख पाउन सकिन्छ। के यो भन्दा उत्तम अरू कुनै कुरा हुन सक्छ ? महात्माहरू मनुष्यको शरीर काँचको पिंजडा जस्तै नाशवान् भएको तर यसको भित्र बस्ने आत्मा चाहिँ हीराको सुगाजस्तो छ भनी बताउँछन्। अरू प्राणीहरू मर्नका लागि जन्म लिन्छन्, तर मनुष्य पुनर्जन्ममा नपर्नकै लागि जन्म लिन्छ र यो सम्भावना उसको जीवनभर रहन्छ। मनुष्यले आफ्नो जीवनको प्रत्येक क्षणलाई सदुपयोग गर्नुपर्दछ, किनभने यो कुन क्षण समाप्त हुन्छ र आफ्नो परम प्रयोजन नपाईकन नै छुट्छ, त्यो जान्न सकिँदैन। त्यसै भएर निमिले संसारमा आधा क्षण बराबरको सत्सङ्गलाई पनि परम

कल्याणदायक मानेका छन्।

सत्सङ्ग तीनथरी हुन्छन्। **सतः परमात्मनः सङ्गः सत्सङ्गः** अर्थात् सत् वस्तु परमात्माको सङ्ग गर्नु सत्सङ्ग हो। यसले नित्यनिरन्तर परमात्माको चिन्तनमा नै मन लागिरहेको उच्च अवस्थालाई सङ्केत गरेको छ। **सत् शास्त्राणां सङ्गः सत्सङ्गः** अर्थात् परमात्माको विषयमा प्रतिपादन गर्ने शास्त्रहरूको अर्थविचार गर्नु र त्यसको अध्ययन-चिन्तन गर्नु अर्को सत्सङ्ग हो। त्यस्तै अर्को सत्सङ्ग चाहिँ **सतां महापुरुषाणां सङ्गः** अर्थात् भगवद्भक्त ज्ञानी महापुरुषहरूको सङ्गत गर्नु सत्सङ्ग हो। जो मुमुक्षु व्यक्ति हुन्छ, ऊ संसारका पदार्थ एवं व्यक्तिहरूको सङ्गत गर्न चाहँदैन। उसको एक मात्र इच्छा परमात्मालाई पाउने हुन्छ। यसका लागि मार्गदर्शक भएका सत्पुरुषहरूको सङ्गत भने ऊ पूरा प्रयासले गर्दछ। सकिन्छ भने कसैको पनि सङ्गत नगर, किनभने **संयोगाः विप्रयोगान्ताः** अर्थात् हरेक संयोगहरू वियोगमा छुट्टिने हुनाले साधुपुरुषहरूको वियोगले पनि मनमा दुःख उत्पन्न गरिदिन्छ। त्यसैले दुःखबाट रहित हुनुछ भने असङ्ग भई रहनुपर्दछ। यदि असङ्ग भई रहन सकिएको छैन भने त्यो व्यक्तिले सत्सङ्ग नै गर्नुपर्दछ, असत् संसारको सङ्गत होइन। मानिसलाई संसारको दुःसङ्ग गर्ने रोग लागेको छ। यो एकप्रकारको व्यसन नै बनिसकेको हुनाले यसलाई त्यतिकै छोड्न सकिँदैन। जसरी कुलतबाट छुटाउन विशेष औषधिहरूको प्रयोग गरिन्छ र अन्त्यमा त्यो व्यक्ति कुलतबाट पूर्णतः छुट्दछ, त्यसै गरी संसारको सङ्गत गर्ने कुलत लागेको व्यक्ति पनि सत्सङ्गरूपी औषधिको सेवनबाट बिस्तारै बिस्तारै सङ्गदोषबाट छुट्दछ र अन्त्यमा त्यो औषधिलाई पनि छोडिदिने असङ्ग स्थितिमा पुग्दछ। यसरी औषधिको रूपमा सत्सङ्गको महिमा गाइएको छ— **सङ्गः सर्वात्मना हेयः यदि हातुं न शक्यते। स सद्भिरेव कर्तव्यः सतां सङ्गो हि भेषजम्** अर्थात् सङ्गतलाई पूर्णरूपले त्याग्नुपर्दछ र यदि पूर्णरूपले छाड्न सकिँदैन भने सत्पुरुषहरूसँग सङ्गत गर्नुपर्दछ। सङ्गदोषको औषधि भनेको सत्सङ्ग नै हो। यसरी सत्सङ्गका तीन अर्थमध्ये निरन्तर आत्मस्थितिमा पुगेका व्यक्तिहरू पहिलो तहको सत्सङ्ग गर्दछन्, व्यवहार आदिको सीमित बन्धनलाई त्यागी एकान्तसेवन गर्ने व्यक्तिहरू आफैँ शास्त्रचिन्तन गरी दोस्रो सत्सङ्ग गर्दछन् भने सामान्य जिज्ञासु व्यक्तिहरू परिवार आदिमै रही महापुरुषहरूको सङ्गत गरी तेस्रो सत्सङ्ग गर्दछन्। यीमध्ये सत्सङ्ग शब्दले तेस्रो अर्थलाई नै बढी बताएको छ र यहाँ पनि निमिले योगीश्वरहरूको आगमन हुँदा यही सत्सङ्गको प्रशंसा गरेका हुन्।

**धर्मान् भागवतान् ब्रूत यदि नः श्रुतये क्षमम्।**
**यैः प्रसन्नः प्रपन्नाय दास्यत्यात्मानमप्यजः॥ ३१॥**

**पदार्थ—**
**यैः** = जसद्वारा
**प्रसन्नः** = प्रसन्न भएका
**अजः** = भगवान्ले
**प्रपन्नाय** = आफ्ना शरणमा आएका भक्तहरूलाई
**आत्मानम् अपि** = आफ्नो स्वरूप वा स्वयं आफैँलाई पनि
**दास्यति** = दिनुहुन्छ, त्यस्तो
**भागवतान्** = भागवत
**धर्मान्** = धर्महरू
**यदि** = यदि
**नः** = हामीहरूलाई
**श्रुतये** = सुन्नको लागि
**क्षमं** = योग्य सम्झनुहुन्छ भने
**ब्रूत** = बताउनुहोस्

**वाक्यार्थ–** जुन कर्मबाट प्रसन्न भएका भगवान्‌ले आफ्ना शरणमा परेका भक्तहरूलाई सर्वस्व प्रदान गरेर स्वयं आफैँलाई पनि दिनुहुन्छ, त्यस्तो भागवत धर्म यदि हामी सुन्न योग्य छौँ भने सुनाउनुहोस् ।

**नारद उवाच** (नारदले भन्नुभयो)

**एवं ते निमिना पृष्टा वसुदेव महत्तमाः ।**

**प्रतिपूज्याब्रुवन् प्रीत्या ससदस्यर्त्विजं नृपम् ॥ ३२ ॥**

**पदार्थ–**
**वसुदेव** = हे वसुदेव
**एवं** = यसरी
**निमिना** = राजा निमिद्वारा
**पृष्टाः** = सोधिएका
**महत्तमाः** = परमपूज्य
**ते** = ती योगीश्वरहरूले
**ससदस्यर्त्विजं** = अरू सदस्य र ऋत्विक्‌हरू सहित
**नृपं** = राजा निमिलाई
**प्रीत्या** = प्रेमपूर्वक
**प्रतिपूज्य** = सत्कार गरेर
**अब्रुवन्** = भन्न थाले

**वाक्यार्थ–** हे वसुदेव ! यसरी राजा निमिले सोधिसकेपछि ती योगीश्वरहरूले अरू सदस्य र ऋत्विक्‌सहित राजा निमिलाई प्रेमपूर्वक सत्कार गरी भन्न थाले।

**कविरुवाच** (कविले भने)

**मन्येऽकुतश्चिद्भयमच्युतस्य पादाम्बुजोपासनमत्र नित्यम् ।**

**उद्विग्नबुद्धेरसदात्मभावाद् विश्वात्मना यत्र निवर्तते भीः ॥ ३३ ॥**

**पदार्थ–**
**अत्र** = यो संसारमा
**असदात्मभावात्** = असत् शरीर र इन्द्रिय आदिमा आत्मबुद्धि भएकोले
**नित्यं** = सधैँ
**उद्विग्नबुद्धेः** = बुद्धि भ्रान्त भएर भयभीत भएका मानिसको लागि
**अच्युतस्य** = भगवान् श्रीहरिको
**पादाम्बुजोपासनं** = चरणकमलको उपासना गर्नु नै
**अकुतश्चिद्भयं** = कहीँबाट पनि भय नहुनु (निर्भय हुनु) हो भन्ने
**मन्ये** = म मान्दछु
**यत्र** = जुन श्रीहरिको उपासनामा
**भीः** = भय
**विश्वात्मना** = पूर्ण रूपले
**निवर्तते** = भाग्दछ

**वाक्यार्थ–** यो संसारमा रहेर असत् शरीर, इन्द्रिय आदिमा आत्मबुद्धि गरेर सांसारिक दुःखबाट भयभीत भएका मानिसहरूका लागि भगवान् श्रीहरिको चरणको उपासना गर्नु नै निर्भय हुनु हो जस्तो मलाई लाग्छ, जुन भगवच्चरणको उपासनाबाट भय पूरै भाग्दछ।

**विवरण–** यस प्रसङ्गमा कवि योगीश्वरले भगवान्‌को चरण नै अभयरूप छ र त्यसको उपासना गर्ने व्यक्ति पनि अभयमा प्राप्त हुन्छ भनी बताएका छन्। मुमुक्षु व्यक्ति संसारको भयबाट अत्यन्त आत्तिएको हुन्छ, अभय पाउनका लागि नै ऊ संसारलाई छाडी गुरु एवं परमात्माको शरणमा आएको हुन्छ। निष्कपट भावले गुरुको नजिक जानु शिष्यको कर्तव्य हो भने उसलाई संसारको

भयबाट निश्चिन्त बनाउनु गुरुको प्रमुख कर्तव्य हो। संसारमा मायाका अनेक जन्जालले हजारौँ उपाय गरेर पनि फसाउन सक्ने अनि आफूमा चाहिँ मायासँग लड्ने त्यति धेरै शक्ति र समयसमेत नभएको सम्झी छट्पटाइरहेको शिष्यलाई ज्ञानीहरूको दृष्टान्त दिई निर्भय बनाउनु गुरुको प्रमुख दायित्व हो। विवेकचूडामणि (४५)मा भनिएको छ— **मा भैष्ट विद्वंस्तव नास्त्यपायः संसारसिन्धोस्तरणेऽस्त्युपायः** अर्थात् हे बाबु ! नडराऊ, तिम्रो नाश हुँदैन किनभने संसाररूपी समुद्र तर्ने उपाय छ। हुन त अभयप्राप्ति आत्मसाक्षात्कारपछि मात्र हुन सक्छ, तर गुरुले शिष्यलाई पहिले नै अभयको आश्वासन दिएनन् भने उसको चिन्तित र उद्विग्न हृदयले कुनै पनि उपदेशलाई कसरी ग्रहण गर्न सक्दछ र ? निर्भय नभईकन कसैले पनि अभयरूप आत्माको सम्बन्धमा स्थिर विचार गर्न सक्दैन। त्यसैले गुरुले शिष्यलाई पहिल्यै निर्भय बनाउनुपर्दछ।

अभय दुई प्रकारका हुन्छन्, एउटा साधनरूप अभय अनि अर्को चाहिँ साध्यरूप अभय। साधनरूप अभय सत्त्वगुणको कार्य हो। यो दैवी सम्पत्तिमा गनिन्छ र यो ज्ञानको साधन हो। यसै गरी साध्य अभय भनेको चाहिँ ज्ञानद्वारा आफूलाई निर्भय आत्मरूपमा अनुभूत गर्नु हो। गीता (१६।१)मा भगवान्ले **अभयं सत्त्वसंशुद्धिः** अर्थात् अभय र चित्तशुद्धि भनी ज्ञानको साधनको रूपमा अभयको चर्चा गर्नुभएको छ। जनकलाई ज्ञानको उपदेश गरिसकेपछि याज्ञवल्क्यले **अभयं वै जनक प्राप्तोऽसि** (बृहदारण्यकोपनिषद् ४।२।४) अर्थात् हे जनक ! अब तिमी अभयमा पुगेका छौ भनी साध्य अभयको चर्चा गर्नुभएको छ। यसरी अन्तिम साध्य अभयपदको प्राप्तिका लागि साधनरूप अभयको आवश्यकता पर्दछ। यो अवस्थामा साधक यद्यपि पूर्णतः निर्भय भइसकेको हुँदैन, तर संसारसम्बन्धी भयलाई आत्मज्ञानी गुरु एवं परमात्माको चिन्तनमा छाडी ऊ निश्चिन्त बनेको हुन्छ। गुरुको अभयदानले शिष्यमा यही समर्पण र निश्चिन्तताको अभिव्यक्ति गराइदिन्छ।

मानिसहरू किन भयभीत हुन्छन् ? यसको विषयमा बताउँदै कवि भन्दछन्— **असदात्मभावात्** अर्थात् असत् शरीर, इन्द्रिय आदिमा आत्मबुद्धि गरेकाले नै उनीहरू त्यसको नाश हुने चिन्ताले भयभीत हुन्छन्। जसले नाशवान् वस्तुलाई नै आफू भनी मानेको छ, त्यो व्यक्ति कसरी निर्भय हुन सक्छ ? किनभने उसलाई त बारम्बार आफ्नो नाश हुने शङ्काले पिरोलिरहेको हुन्छ। शरीर, इन्द्रिय सबै नाशवान् वस्तुहरू अनात्मा हुन् र यिनमा गरिएको प्रेमले एक दिन अवश्य कष्ट दिनेछ। अविनाशी आत्मामा नै प्रेम गरियो भने चाहिँ त्यसबाट कहिल्यै दुःखी एवं भयभीत हुनु पर्दैन। उपनिषद्मा भनिएको छ— **न हास्यप्रियं प्रमायुकं भवति** (बृहदारण्यकोपनिषद् १।४।८) अर्थात् यदि कसैले आत्मालाई नै आफू भनेर चिन्यो भने अनि त्यहीँ नै प्रेम गऱ्यो भने उसको त्यो प्रियवस्तु कहिल्यै नहराउने नित्य पदार्थ भएकाले उसले दुःख पाउँदैन। जब नाशवान् वस्तुहरूमा कसैले आत्मबुद्धि गर्दछ त ऊ सधैँ चिन्तित भइरहन्छ। परमात्मा सबैका आत्मा एवं सत्रूप हुनुहुन्छ। त्यो कहिल्यै नाश नहुने वस्तु भएकाले त्यसको शरण लिएपछि प्राणीहरूले डराउनुपर्ने कुनै आवश्यकता नै रहँदैन। जहाँबाट भय पनि डराएर भाग्छ, त्यस्ता परमात्मामा पुगेपछि मात्र साधकका सम्पूर्ण भयहरू शान्त हुन्छन् भनी यहाँ उपदेश गरिएको छ।

**ये वै भगवता प्रोक्ता उपाया ह्यात्मलब्धये।**
**अञ्जः पुंसामविदुषां विद्धि भागवतान् हि तान्॥ ३४॥**

**पदार्थ—**
**हि** = निश्चय नै
**भगवता** = भगवान्‌द्वारा
**अविदुषां** = अज्ञानी
**पुंसां** = मानिसहरूलाई
**अञ्जः** = सजिलैसँग
**आत्मलब्धये** = आत्मज्ञानका लागि
**ये** = जो
**वै** = प्रसिद्धरूपले
**उपायाः** = उपायहरू
**प्रोक्ताः** = बताइएका छन्
**तान् हि** = तिनीहरूलाई नै
**भागवतान्** = भागवत धर्म भनेर
**विद्धि** = जान्नुहोस्

**वाक्यार्थ—** भगवान्‌ले अज्ञानी मानिसहरूलाई सजिलैसँग आत्मज्ञान प्राप्त हुने जुन उपायहरू बताउनुभएको छ तिनीहरू नै भागवत धर्म हुन् भन्ने जान्नुहोस्।

**यानास्थाय नरो राजन् न प्रमाद्येत कर्हिचित्।**
**धावन् निमील्य वा नेत्रे न स्खलेन्न पतेदिह॥ ३५॥**

**पदार्थ—**
**राजन्** = हे राजा
**यान्** = जुन भागवत धर्मलाई
**आस्थाय** = अवलम्बन गरेर
**नरः** = मानिस
**कर्हिचित्** = कहिल्यै पनि
**न प्रमाद्येत** = असावधान हुँदैन
**नेत्रे** = आँखा
**निमील्य** = चिम्लिएर
**धावन्** = दौडिए पनि
**इह** = यो भागवत धर्ममा
**न स्खलेत्** = न त विधिको मार्गबाट भ्रष्ट हुन्छ
**न वा पतेत्** = अथवा न त विधि नपुग्दा पतित नै हुन्छ

**वाक्यार्थ—** हे राजा ! जुन भागवत धर्मको आश्रय लिएपछि मानिस कहिल्यै पनि विघ्नबाधाद्वारा पीडित हुँदैन र ऊ विधिविधानको त्रुटिबाट मार्गभ्रष्ट पनि हुँदैन र विधि नपुग्दा पतित पनि हुँदैन।

**कायेन वाचा मनसेन्द्रियैर्वा बुद्ध्यात्मना वानुसृतस्वभावात्।**
**करोति यद् यत् सकलं परस्मै नारायणायेति समर्पयेत् तत्॥ ३६॥**

**पदार्थ—**
**कायेन** = शरीरले
**वाचा** = वाणीले
**मनसा** = मनले
**इन्द्रियैः** = इन्द्रियहरूले
**बुद्ध्या** = बुद्धिले
**आत्मना वा** = अथवा अहङ्कारले
**अनुसृतस्वभावात् वा** = अथवा देहाध्यास आदिको कारणले भएको ब्राह्मणत्व आदि स्वभावले
**यत् यत्** = जे-जे कर्म
**करोति** = गर्दछ (गरिन्छ)
**तत् सकलं** = ती सबै
**परस्मै** = परमात्मस्वरूप
**नारायणाय इति** = नारायणकै लागि हो भनेर
**समर्पयेत्** = समर्पण गरिदिनू

**वाक्यार्थ—** आफ्नो शरीरले, वाणीले, मनले, इन्द्रियहरूले, बुद्धिले, अहङ्कारले र देहाध्यासको कारण भएको ब्राह्मणत्व आदि स्वभावले पनि जे-जे कर्महरू गरिन्छन्, ती सबै कर्महरू भगवान् नारायणकै लागि हुन् भनेर भगवान्‌मा समर्पण गरिदिनू।

**भयं द्वितीयाभिनिवेशतः स्यादीशादपेतस्य विपर्ययोऽस्मृतिः।**
**तन्माययातो बुध आभजेत् तं भक्त्यैकयेशं गुरुदेवतात्मा॥ ३७॥**

**पदार्थ–**
**ईशात्** = भगवान्बाट
**अपेतस्य** = विमुख भएको व्यक्तिको
**तन्मायया** = उहाँको मायाको कारणले
**अस्मृतिः** = आफ्नो स्वरूपको विस्मरण
**स्यात्** = हुन्छ (त्यसपछि)
**विपर्ययः** = 'म फलानो व्यक्ति हुँ' भन्ने भ्रम हुन्छ
**द्वितीयाभिनिवेशतः** = (अद्वितीय वस्तुमा) द्वैत (भेद) बुद्धि भएपछि
**भयं** = डर हुन्छ
**अतः** = त्यसैले
**बुध** = विवेकी मानिसले
**गुरुदेवतात्मा** = गुरुलाई नै परम आराध्य देवतास्वरूप मानेर
**तम्** = उनै
**ईशं** = परमेश्वरलाई
**एकया** = अनन्य
**भक्त्या** = भक्तिले
**आभजेत्** = भजन गरोस्

**वाक्यार्थ–** भगवान्बाट विमुख भएको व्यक्ति भगवान्कै मायाको कारणले आफ्नो स्वरूपलाई भुल्न पुग्दछ र उसलाई देहाध्यास भई म फलानो व्यक्ति हुँ भन्ने भ्रम हुन्छ। त्यस्तो भेदबुद्धिका कारणले उसलाई डर उत्पन्न हुन्छ, त्यसैले विवेकी मानिसले गुरुलाई देवतास्वरूप मानेर उनको उपदेश लिई भगवान्लाई अनन्य भक्तिले भजन गरोस्।

**विवरण–** भय अज्ञानद्वारा कल्पित भएकाले ज्ञानद्वारा निवृत्त भइहाल्दछ नि, किन परमेश्वरको भजन गर्नुपर्‍यो ? भन्ने शङ्का हुँदा यो श्लोकमा अज्ञानद्वारा कल्पित हुने भय परमात्माको मायाको कारणले नै हुने हुनाले त्यसको नाश गर्न परमात्माको भजन गर्नुपर्ने जनाइएको छ। परमात्माबाट विमुख भएको व्यक्तिलाई नै उहाँको मायाले मोहित बनाउँछ र मानिसले आफू नित्य परमात्मरूप भएको यथार्थ रहस्यलाई बिर्सन्छ। आफ्नो स्वरूपलाई बिर्सनु नै अज्ञान हो। अज्ञान भइसकेपछि **विपर्ययः** अर्थात् उल्टो ज्ञान हुन्छ। विपर्ययको व्याख्या गर्दै श्रीधर स्वामी लेख्नुहुन्छ– **देहः अहमस्मीति** अर्थात् म शरीर हुँ भन्ने जान्नु नै विपर्यय ज्ञान हो। सर्वव्यापक आत्माले आफूलाई शरीरमा सीमित गरी जान्नुलाई कसरी यथार्थ ज्ञान भन्न सकिन्छ र ? त्यसैले विपर्यय भनेको भ्रम ज्ञान हो। एउटामा अर्काको बुद्धि गर्नुलाई भ्रम भनिन्छ। अनात्मा शरीरलाई आत्मा भन्ने सम्झिनु भ्रम हो। जब प्राणी नाशवान् शरीरलाई आफू भन्ने ठान्दछ तब ऊ त्यसको रक्षा गर्न सधैँ चिन्तित भइरहन्छ। कुनै पनि व्यक्ति आफ्नो अस्तित्व विलुप्त भएको हेर्न चाहँदैन। मानिसको वास्तविक अस्तित्व कहिल्यै विलुप्त हुँदा पनि हुँदैन, तर जसले नाशवान् पदार्थलाई नै आफू भन्ने मानेको छ भने त्यो विनाशी वस्तुसँगै उसको अस्तित्वको पनि लोप हुने भय हुन सक्छ। यस्तो भयलाई कसले छेक्न सक्दछ र ?

श्लोकमा **द्वितीयाभिनिवेशतः** अर्थात् द्वैतबुद्धिद्वारा नै भय हुने बताइएको छ। आत्माभन्दा भिन्न शरीर, इन्द्रिय आदि सबै द्वितीय हुन्। तिनमा **अभिनिवेश** अर्थात् आत्मभावना गर्नु नै भयको मूल कारण हो। सम्पूर्ण प्राणीहरू दुःखदेखि डराउँछन्। दुःखहरूमध्ये मृत्यु सबभन्दा बढी दुःखदायी हुन्छ, किनभने त्यस अवस्थामा व्यक्तिको सीमित अस्तित्वबोध नै समाप्त हुन्छ। यसैलाई

शास्त्रमा अभिनिवेश भनिएको छ। दुःखदेखि डराएर यसलाई हटाउन खोज्ने व्यक्तिले यसका कारणहरूको खोजी गर्दै तिनलाई नै हटाउन प्रयत्न गर्नुपर्दछ। न्यायसूत्र (२)मा दुःख एवं भयको मूल कारणको रूपमा मिथ्याज्ञानलाई बताउँदै त्यसको निराकरणद्वारा मात्र अपवर्ग हुने सङ्केत गरेका छन्— **दुःखजन्मप्रवृत्तिमिथ्याज्ञानानामुत्तरोत्तरापाये तदनन्तरापायादपवर्गः** अर्थात् दुःखको कारण हो संसारमा जन्म हुनु, यो जन्म हुनुको कारण प्रवृत्ति अर्थात् शुभ र अशुभ कर्महरू गर्नु हो। कर्महरूमा किन प्रवृत्ति भयो ? यसको उत्तर हो मिथ्याज्ञान अर्थात् आफूलाई अनात्मा, शरीर आदि भनी बुझ्नु। यसरी ज्ञानद्वारा पहिले भ्रमज्ञान नष्ट हुन्छ, अनि कारणको नाश भइसकेपछि क्रमशः त्यसका कार्यहरू पनि नष्ट हुँदै अन्तमा दुःख र त्यसको भय पनि नष्ट हुन्छ। यही नै मोक्ष हो। सुरेश्वराचार्यले पनि नैष्कर्म्यसिद्धिमा दुःखको मूल कारण अज्ञान नै हो भनी प्रतिपादन गर्नुभएको छ। दुःखको कारण हो देह, किनभने शरीर धारण नभएको भए संसारको दुःख पाउनै पर्ने थिएन। शरीर उत्पन्न हुनुको कारण धर्म र अधर्म संस्कारहरू हुन्, जसलाई भोग्न राम्रा-नराम्रा योनिहरूमा जन्म लिनुपर्दछ। शुभ र अशुभ कर्म गर्नाले नै धर्म-अधर्म उत्पन्न भएका हुन्। शुभकर्मको हेतु राग हो भने अशुभ कर्मको हेतु द्वेष हो। यसरी रागद्वेष नै सबै कर्मका कारण हुन्। राग-द्वेष पनि किन हुन्छन् भन्दा यसको उत्तर हो, **शोभनाशोभनाध्यास** अर्थात् यो राम्रो र यो नराम्रो भन्ने भ्रमबुद्धि। शोभन र अशोभनको अध्यास हुनुको कारण अविचारसिद्ध द्वैत प्रपञ्च हो। यही द्वैत प्रपञ्चका कारण वस्तुहरूमा स्वभावतः कसैमा शोभनबुद्धि र कसैमा अशोभनबुद्धि हुन्छ। यो द्वैत प्रपञ्चको कारण हो अज्ञान। यसरी आफ्नो वास्तविक स्वरूपलाई नजान्नाले नै व्यक्तिको दुःखयात्रा सुरु हुने देखिन्छ। त्यसैले रामगीता (९)मा पनि भगवान्ले दुःखको मूलकारण अज्ञान नै हो भनी बताउनुभएको छ— **अज्ञानमेवास्य हि मूलकारणम्** अर्थात् अज्ञान नै यो दुःखपरम्पराको मूल कारण हो। जसले आत्मालाई जान्दछ भने त्यो व्यक्ति दुःखबाट पार हुन्छ भनी उपनिषद्मा बताइएको छ— **तरति शोकमात्मवित्** (छान्दोग्योपनिषद् ३।७।१)। आत्मालाई जानी अज्ञान नष्ट गरेपछि भय अवश्य नष्ट हुन्छ, तर आत्मालाई जान्नका लागि भने परमात्माको भजन अनिवार्य गर्नैपर्दछ भन्ने योगीश्वर कविको धारणा छ।

यहाँ भक्तिको विशेषण छ— **एका** अर्थात् अव्यभिचारिणी भक्ति। अव्यभिचारिणी भनेको कुनै पनि फलको कामनाले रहित भई गरिएको अनि कहिल्यै पनि घटी नहुने परम भक्ति हो। भक्तिद्वारा मात्र मायालाई तर्न सकिने कुरा नारदभक्तिसूत्रमा यसरी बताइएको छ— **केवलमविच्छिन्नानुरागं लभते, स तरति स तरति स लोकाँस्तारयति** (३।४९-५०) अर्थात् केवल अविच्छिन्न अनुरागले मात्र युक्त भएको व्यक्ति मायालाई तर्न सक्छ र आफू मात्र होइन सम्पूर्ण लोकलाई नै उसले तार्न सक्दछ। अध्यात्मरामायणमा भक्ति भनेको दियो हो, माया भनेको रात हो अनि ज्ञान भनेको दृष्टिशक्ति हो भन्दै भक्तिरूपी दियोले अन्धकार नष्ट गरेपछि मात्र ज्ञानले तत्त्व दर्शन गर्न सकिन्छ भन्ने कुरा बताइएको छ— **किन्त्वेतद् दुर्लभं मन्ये मद्भक्तिविमुखात्मनाम्, चक्षुष्मतामपि तथा रात्रौ सम्यङ् न दृश्यते, परं दीपसमेतानां दृश्यते सम्यगेव हि,** अर्थात् यो स्वरूप ज्ञान मेरो भक्तिले रहित भएकाहरूलाई दुर्लभ छ, जसरी रातको अन्धकारमा आँखा भएकाले पनि देख्दैनन्, तर दियो भएपछि भने सजिलै देख्दछन् त्यसै गरी आत्मास्वरूप देख्न पनि भक्तिको

दियोको आवश्यकता हुन्छ। **गुरुदेवतात्मा** अर्थात् गुरुलाई नै देवता र आफ्नो स्वरूप पनि मानी श्रद्धापूर्वक भजन गर्नुपर्दछ। यही विषयमा श्वेताश्वतरोपनिषद् (६।२३)मा भनिएको छ– **यस्य देवे परा भक्तिर्यथा देवे तथा गुरौ, तस्यैते कथिताः ह्यर्थाः प्रकाशन्ते महात्मनः,** अर्थात् जसको परमात्मामा परम भक्ति छ अनि देवतामा जस्तै गुरुमा पनि पूर्ण श्रद्धा छ भने त्यस्ता व्यक्तिका लागि मात्र उपनिषद्का उपदेशहरू प्रकाशित हुन्छन्। त्यसैले ज्ञानका लागि परमात्मभजन अनिवार्य गर्नुपर्दछ र ज्ञानद्वारा मात्र संसारको दुःख एवं भय पूर्णतः निवृत्त हुन्छ।

**अविद्यमानोऽप्यवभाति हि द्वयोर्ध्यातुर्धिया स्वप्नमनोरथौ यथा।**
**तत्कर्मसङ्कल्पविकल्पकं मनो बुधो निरुन्ध्यादभयं ततः स्यात्॥ ३८॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**अविद्यमानः अपि** = वास्तविक रूपले नभए पनि
**द्वयः** = यो द्वैत प्रपञ्च
**ध्यातुः** = चिन्तन गर्ने व्यक्तिलाई
**धिया** = मनद्वारा
**स्वप्नमनोरथौ यथा** = स्वप्न र मनद्वारा कल्पित प्रपञ्च झैं
**अवभाति** = प्रतीत हुन्छ (त्यसैले)
**बुधः** = विवेकीले
**तत्कर्मसङ्कल्पविकल्पकं** = त्यस कर्मको सङ्कल्प र विकल्प गर्ने
**मनः** = मनलाई
**निरुन्ध्यात्** = (विषयतिर जानबाट) रोकोस्
**ततः** = त्यसपछि मात्र
**अभयं** = भयको निवृत्ति
**स्यात्** = हुनेछ

**वाक्यार्थ–** यो सारा द्वैत प्रपञ्च अवश्य पनि असत्य हो, तर पनि संसारको चिन्तन गर्ने व्यक्तिलाई मनको माध्यमले स्वप्नका प्रपञ्च र कल्पित जाग्रत् प्रपञ्च झैं यसको पनि प्रतीति भइरहेको छ, त्यसैले विवेकी व्यक्तिले कर्मको सङ्कल्प र विकल्प गर्ने मनलाई विषयबाट रोक्नुपर्दछ अनि मात्र भयको निवृत्ति हुन्छ।

**विवरण–** यस श्लोकमा द्वैतप्रपञ्च नभए तापनि देखिएको मात्र हो भनी बताइएको छ। दुःखको कारण अज्ञान हो र त्यसलाई भगवान्को भजनपूर्वक नै नष्ट गर्नुपर्दछ भनेपछि शङ्का के भयो भने, संसारमा चित्त आसक्त भएको व्यक्तिले कसरी भक्ति गर्न सक्दछ? यही शङ्का उठाउँदै **श्रीधर** स्वामी लेख्नुहुन्छ– **ननु विषयविक्षिप्तचित्तस्य कुतः भक्तिः** अर्थात् जसको चित्त विषयहरूमा लागी विक्षिप्त भइरहन्छ, त्यस्ता चञ्चल चित्त भएका प्राणीहरूले स्थिरतापूर्वक भजन गर्न कसरी सक्दछन् र? यसको उत्तरको रूपमा यो श्लोकमा विषयहरू वास्तवमा छँदै छैनन् भनी बताइएको छ। **ध्यातुः धिया** अर्थात् विचार गर्नेको बुद्धिका कारणले मात्र विषयहरू देखिएका हुन्। यसलाई दृष्टान्तको रूपमा स्वप्न र मनोरथसँग तुलना गरिएको छ। जसरी सपनामा कुनै पनि बाहिरी वस्तु हुँदैनन्, तर पनि व्यक्तिको कल्पनाको कारणले बाहिरी वस्तु झैं तिनको ग्रहण र उपभोग हुन्छ। स्वप्नमा कसैले पनि आफूलाई काल्पनिक संसारमा रहेको ठान्दैन अपि तु व्यावहारिक संसारमा नै रहेको ठान्छ। त्यहाँका वस्तुहरूले पनि जाग्रत्का बाह्य वस्तुहरूले झैं तृप्ति दिन्छन्। तर ती वस्तुहरू केवल मनको कल्पनाले मात्र देखिएका हुन्। यसै गरी जाग्रत्का पदार्थहरू पनि वास्तवमा छैनन्। वेदान्तमा सम्पूर्ण द्वैतप्रपञ्चलाई कल्पनाकै आधारमा खडा भएको मानिन्छ।

अनेक वासना संस्कारले सहित मन भएका प्राणीहरूले यसलाई आ-आफ्नै मनका अनुसार राम्रो नराम्रो भनी छुट्टाछुट्टै रूपमा हेरेका छन्। यदि संसारमा पदार्थ मनको कल्पनाको आधारमा नभएको भए अनेक मानिसमा फरक-फरक धारणा अनुसार फरक-फरक रूपमा किन प्रतीत हुन्थे ? त्यसकारणले जाग्रत्का पदार्थहरूको आफ्नै छुट्टै बाह्य आकार छैन, यो मनको अधीनमा नै सिद्ध छ र मनको अभावमा यो द्वैत सिद्ध हुन सक्दैन भन्ने वेदान्तको सिद्धान्त हो। भनिएको पनि छ— **मनोदृश्यमिदं द्वैतं यत्किञ्चित् सचराचरम्, मनसो ह्यमनीभावे द्वैतं नैवोपलभ्यते** ( माण्डूक्यकारिका ३।३१) अर्थात् यो चराचर जति पनि द्वैतप्रपञ्च छ, त्यो सबै मनद्वारा नै देखिएको हो र मनको अभाव हुँदा द्वैत देखिँदैन। अरु सपनाको दृष्टान्तद्वारा त वेदान्तमा सम्पूर्ण पदार्थहरूलाई मनकै विस्तार मात्र हो भन्ने सिद्ध गरिएको छ। सपनामा मन नै नदी, पहाड, रुख, सूर्य, प्राणी आदि अनेक रूपमा परिवर्तित हुन्छ। जबसम्म स्वाप्निक मन छ, तबसम्म ती सम्पूर्ण पदार्थहरूको प्रतीति छ, अनि जाग्रत्मा आएर स्वाप्निक मनको नाश भइसकेपछि भने ती सबै पदार्थ अकस्मात् हराउँछन्। यो जाग्रत्का पदार्थहरू पनि यस्तै अनादि अज्ञानरूपी निद्रामा मनले कल्पना गरेका हुन्। स्वप्नका पदार्थहरू निद्रादोषका कारणले देखिन्छन् भने जाग्रत्का पदार्थहरू मायादोषका कारणले देखिन्छन्। जब व्यक्ति अज्ञानको निद्राबाट जाग्दछ तब यो सम्पूर्ण संसार, यहाँका दुःख भय आदि सबै अयथार्थ प्रतीत हुन्छन् र मनको निरोध भइसकेपछि अभय प्राप्त हुन्छ।

**शृण्वन् सुभद्राणि रथाङ्गपाणेर्जन्मानि कर्माणि च यानि लोके।**
**गीतानि नामानि तदर्थकानि गायन् विलज्जो विचरेदसङ्गः॥ ३९॥**

**पदार्थ—**
**रथाङ्गपाणेः** = भगवान्का
**सुभद्राणि** = अति मङ्गलमय
**जन्मानि** = जन्मको
**कर्माणि** = कर्मको र
**तदर्थकानि च** = ती
जन्मकर्मविषयक
**यानि** = जो
**नामानि** = भगवान्का नामहरू
**लोके** = लोकमा
**गीतानि** = गाइएका छन् (प्रसिद्ध छन् तिनीहरूलाई)
**असङ्गः** = आसक्तिरहित भई
**विलज्जः** = लाजलाई त्यागेर
**शृण्वन्** = सुन्दै
**गायन्** = गाउँदै
**विचरेत्** = विचरण गरोस्

**वाक्यार्थ—** भगवान् नारायणका जन्म र कर्मका मङ्गलमय लीला कथाहरू र तद्विषयक लोकमा प्रसिद्ध नामहरूलाई आसक्तिरहित भएर लाज र सङ्कोचलाई त्यागी अरूबाट सुन्दै र आफूले पनि गाउँदै पृथिवीमा विचरण गरोस्।

**एवंव्रतः स्वप्रियनामकीर्त्या जातानुरागो द्रुतचित्त उच्चैः।**
**हसत्यथो रोदिति रौति गायत्युन्मादवन्नृत्यति लोकबाह्यः॥ ४०॥**

**पदार्थ—**
**एवंव्रतः** = यस्तो प्रकारको
नियमलाई पालन गर्ने

**स्वप्रियनामकीर्त्या** = आफ्नो प्रिय भगवान्‌को नामसङ्कीर्तनले गर्दा
**जातानुरागः** = अझै भगवान्‌प्रति प्रेमी बनेको
**द्रुतचित्तः** = हृदय पग्लिएको
**लोकबाह्यः** = अरू मानिसभन्दा बेग्लै खालको भएको त्यो व्यक्ति
**उच्चैः** = उच्च स्वरले
**हसति** = हाँस्छ
**अथो** = कहिलेकाहीँ
**रोदिति** = रुन्छ (फेरि कहिले)
**रौति** = कराउँछ र
**गायति** = (कहिले भगवान्‌का गुणको) गान गर्दछ र कहिले
**उन्मादवत्** = पागल झैँ
**नृत्यति** = (खुसीले) नाच्दछ

**वाक्यार्थ—** यस्तो नियमलाई पालन गर्ने व्यक्ति स्वभावतः भगवान्‌मा अनुरक्त हुन्छ र उसको हृदय पग्लन्छ। वास्तवमा त्यो व्यक्ति अन्य संसारी व्यक्तिभन्दा बेग्लै हुन्छ, त्यसैले ऊ कहिले उच्च स्वरले हाँस्छ, कहिले खुब रुन्छ, कहिले त्यसै कराउँछ र कहिले भगवान्‌का गुणको गान गर्दछ, फेरि कहिलेकाहीँ पागल जस्तो भएर खुसीले नाच्दछ।

**विवरण—** यहाँ संसारका सारा दुःखहरूलाई बिर्सने अर्को सजिलो बाटो बताइएको छ। सम्पूर्ण संसार मनको कल्पना भएकाले त्यो मनको निरोध गरी यहाँका भय, दुःख आदिलाई बाधित गर्ने विधि प्रबल इच्छाशक्ति भएका एकान्तवासी तपस्वीहरूका लागि हो। मनको निरोध गर्नु भन्नुको अर्थ मनलाई हलचल गर्न नदिनु हो। संसारका व्यवहार आदिमा मन लगाइरहन पर्ने व्यक्तिहरूले यो मनोनिरोधको साधनालाई अपनाउन सक्दैनन्। त्यसैले त्यस्ता व्यक्तिहरूका लागि संसारबाट मनलाई छुटाउने सजिलो उपाय भनेको भक्ति नै हो। परमात्माका अनन्त नाम एवं अनन्त लीलाचरित्रहरू छन्। तिनीहरूको कीर्तन अनि विचारद्वारा मनलाई त्यतै लगाइरहेपछि मानिस संसारको आसक्तिबाट स्वतः छुट्दछ र असङ्ग बन्दछ। परमात्मा परम आनन्दमय हुनुहुन्छ, उहाँको भजनमा मानिसलाई अपार शान्ति एवं आनन्दको प्राप्ति हुन्छ र त्यस वेलामा उसले सामान्य लौकिक मर्यादा, लाज आदि सबैलाई बिर्सिएको हुन्छ। त्यसैले श्लोकमा **विलज्जः विचरेत्** अर्थात् भगवान्‌को कीर्तन गर्दै लाजरहित भई विचरण गरोस् भनिएको छ।

योगीश्वर कवि भन्नुहुन्छ— **स्वप्रियनामकीर्त्या** अर्थात् आफ्ना प्रियतम परमात्माको नामको कीर्तन गर्दै भक्त त्यसैमा मग्न हुन्छ। ऊ जति-जति परमात्माको नाम लिँदै जान्छ, त्यति-त्यति उसको अनुराग पनि बढ्दै जान्छ। यहाँ **स्वप्रियनामकीर्त्या** शब्दको अर्थ आफ्ना प्रियतम परमात्माका दिव्य नाम एवं पवित्र कीर्तिहरूको श्रवण गरेर भन्ने पनि हो। त्यसद्वारा भक्तको हृदयमा अनुरागको जन्म हुन्छ, भक्ति पलाउँछ। **अनुराग** अर्थात् प्रेम यति शक्तिशाली वस्तु हो कि यसले अनादि कालदेखि संसारका पदार्थहरूमा बाँधिई जर्जर भएको हृदयलाई पनि पगालिदिन्छ। द्रुतचित्तको अर्थ हुन्छ— हृदय पग्लिएको व्यक्ति। भक्तिमा सबैभन्दा महत्त्वपूर्ण विषय भनेकै **चित्तद्रुति** अर्थात् हृदय पग्लिनु हो। भक्ति भनेको बाहिरी रूपमा भगवान्‌को नाम जप्नु, पूजा, आरती गर्नु र कथा आदि सुन्नु मात्र होइन, यसका लागि त हृदय पग्लिएकै हुनुपर्दछ। यदि हृदय पगाल्ने भक्ति छैन भने त्यसले संसारबन्धनलाई नष्ट गर्न पनि सक्दैन, किनभने चित्त नपग्लिईकन मनभित्रका वासनाहरू नष्ट हुँदैनन्। भक्तिको परिभाषा गर्दै मधुसूदन सरस्वती भक्तिरसायनमा लेख्नुहुन्छ— **द्रुतस्य भगवद्धर्मात् धारावाहिकतां गता, सर्वेशे मनसो वृत्तिः भक्तिरित्यभिधीयते** अर्थात् भगवान्‌का गुणकथाको श्रवण, स्मरण आदिद्वारा चित्त पग्लिई धारावाहिक रूपमा सर्वेश्वर

परमात्मामा लागिरहनु नै भक्ति हो। यसै गरी माता देवहूतिलाई उपदेश गर्ने क्रममा कपिलदेवले भगवान्का गुणहरूको श्रवण गर्नेबित्तिकै चित्त अविच्छिन्न रूपमा परमात्मामा लागिहाल्नु भक्ति हो भनी बताउनुभएको छ (भागवत, ३।२९।११)। यस्तो भक्त स्वयं आफ्नो नियन्त्रणमा रहेको हुँदैन। ऊ कहिले हाँस्न र कहिले रुन थाल्दछ। मानिसहरू संसारका पदार्थहरू पाउँदा प्रसन्नतापूर्वक हाँस्दछन् अनि ती पदार्थहरू नष्ट हुँदा दुःखी भई रुन्छन्, तर भक्तहरूको हँसाइ र रुवाइ अलि विलक्षण खालको हुन्छ। उनीहरू न त संसारका पदार्थहरूको अभावले रुन्छन् न लौकिक पदार्थको प्राप्तिद्वारा हाँस्दछन् नै। उनीहरूको त रुवाइ र हँसाइ सबै परमात्मासँगै आबद्ध हुन्छ। सामान्य व्यक्तिहरूले यो विनाकारणको रुवाइ र हँसाइलाई बुझ्दैनन्, त्यसैले तिनीहरूले यस्ता भक्तलाई पागल भन्ने ठान्दछन्। लोकमा यस्तै भ्रान्त धारणाहरू हुने भएकाले भक्तले लोकलाजलाई छोड्नुपर्दछ। भक्त लोकबाह्य अर्थात् संसारका विधि-निषेधमय नियन्त्रणभन्दा बाहिर पुगिसकेको हुन्छ। उसलाई अरूले अनेक नाम राख्नुको के नै अर्थ रहन्छ र ?

प्रह्लादको चरित्रमा उहाँको विशिष्ट भक्तिको व्याख्या गर्दै नारदले प्रह्लाद कहिले हाँस्थे त कहिले रुन्थे भन्नुभएको छ। भक्तहरूमा यस्तो विनाकारणको रुवाइ र हँसाइ किन हुन्छ होला ? यसको कारण बताउँदै नारद भन्नुहुन्छ— **क्वचिद् रुदति वैकुण्ठचिन्ताशबलचेतनः, क्वचिद्धसति तच्चिन्ताह्लाद उद्गायति क्वचित्** (भागवत ७।४।३९) अर्थात् कहिले प्रह्लाद वैकुण्ठ भगवान्को चिन्ताले युक्त भई रुन्थे र कहिले चाहिँ उहाँको चिन्तन गरेको आनन्दको उद्रेकले हाँस्थे र गाउँथे। यहाँ भगवान्को चिन्ता भन्नुको तात्पर्य मलाई अहिलेसम्म भगवान्को दर्शन भएको छैन, या अहिलेसम्म मेरो जन्म यत्तिकै खेर गयो भन्ने चिन्ता हो। यो चिन्ताको भाव आउँदा व्यक्ति आफ्नो अक्षम्य अज्ञान एवं भुललाई सम्झी-सम्झी रुन्छ। जब ऊ परमात्मचिन्तनको आनन्दमा ऊ डुब्छ तब उसलाई फेरि हाँस्न मन लाग्छ र आनन्दको उद्रेकले भरिएर नाच्छ पनि। संसारमा प्राणीहरू असत् पदार्थहरूका लागि रोऊन् अनि तिनकै लागि हाँसून्, तर भक्त त परमात्माकै लागि रुन्छ र हाँस्छ पनि। हुन पनि संसारका लागि रोएर अनि हाँसेर पनि केही फाइदा छैन, तर परमात्माका लागि रुने या हाँस्ने हो भने फाइदै फाइदा छ। भगवान्को भक्तले परमात्माबाहेक अरू संसारका पदार्थहरूलाई देख्दै देख्दैन, त्यसैले उसले अरूका लागि रुने या हाँस्ने त कुरै आएन। दृढभक्ति भइसकेपछि व्यक्ति परमात्मालाई मात्र देख्दछ, सुन्दछ र व्यवहार गर्दछ। नारद भन्नुहुन्छ— **तत्प्राप्य तदेवावलोकयति तदेव शृणोति तदेव भाषयति तदेव चिन्तयति** (नारदभक्तिसूत्र ४।५) अर्थात् त्यसलाई पाएपछि मानिसले परमात्मदर्शन गर्दछ, परमात्माकै विषयमा मात्र श्रवण, भावना या चिन्तन गर्दछ। यसरी परमात्माको नियन्त्रणमा कहिले हाँस्दै र कहिले रुँदै भक्तले संसारको बन्धनलाई शिथिल पारिदिएको हुन्छ। त्यसैले संसारबन्धनलाई नष्ट गर्न र भगवान्लाई पाउनका लागि भगवान्को पूर्ण भक्ति नै सजिलो साधन हो।

**खं वायुमग्निं सलिलं महीं च ज्योतींषि सत्त्वानि दिशो द्रुमादीन्।**
**सरित्समुद्रांश्च हरेः शरीरं यत् किञ्च भूतं प्रणमेदनन्यः ॥ ४१ ॥**

**पदार्थ–**
**खं** = आकाश
**वायुं** = वायु
**अग्निं** = अग्नि
**सलिलं** = जल
**महीं** = पृथिवी
**ज्योतींषि च** = ग्रह, नक्षत्र, ताराहरू
**सत्त्वानि** = प्राणीहरूलाई
**दिशः** = दिशाहरूलाई
**द्रुमादीन् च** = वृक्ष आदिहरूलाई तथा
**सरित्समुद्रान्** = नदीनाला र समुद्रहरूलाई
**यत् किम् च** = जो कोही
**भूतं** = पदार्थहरू छन्,
तिनीहरूलाई
**हरेः** = भगवान् श्रीहरिको
**शरीरं** = शरीर मानेर
**अनन्यः** = भगवान्देखि भिन्न नसम्झी
**प्रणमेत्** = नमस्कार गरोस्

**वाक्यार्थ–** आकाश, वायु, अग्नि, जल, पृथिवी, ग्रह, नक्षत्र, ताराहरू र प्राणीहरू तथा दिशा, वृक्ष र लताहरू, नदी र समुद्रहरू जस्ता जति पनि पदार्थहरू छन्, तिनीहरूलाई भगवान् श्रीहरिको शरीर मानेर भगवान्देखि भिन्न नमानीकन नमस्कार गरोस्।

**भक्तिः परेशानुभवो विरक्तिरन्यत्र चैष त्रिक एककालः।**
**प्रपद्यमानस्य यथाश्नतः स्युस्तुष्टिः पुष्टिः क्षुदपायोऽनुघासम्॥ ४२॥**

**पदार्थ–**
**यथा** = जसरी
**अश्नतः** = भोजन गरिरहेको व्यक्तिको
**तुष्टिः** = सन्तोष (सुख)
**पुष्टिः** = उदरपूर्ति र
**क्षुदपायः** = भोकको निवृत्ति पनि
**अनुघासं** = प्रत्येक गाँसमा
**स्युः** = हुन्छन् (त्यसै गरी)
**प्रपद्यमानस्य** = भगवान्को भजनमा लागेको व्यक्तिको
**भक्तिः** = भक्ति
**परेशानुभवः** = भगवान्को स्वरूपको ज्ञान र
**अन्यत्र** = यीदेखि अरू गृह आदिमा
**विरक्तिः** = वैराग्य
**एषः** = यी
**त्रिकः** = तीनै कुराहरू
**एककालः** = एकै समयमा हुन्छन्

**वाक्यार्थ–** जसरी भोजन गरिरहेको व्यक्तिको मनमा सन्तोष, पेटमा पूर्णताको अनुभूति र भोकको निवृत्ति गाँसैपिच्छे एकैसमयमा भइरहेको हुन्छ, त्यसै गरी भगवान्को भजनमा लागेको व्यक्तिको भगवान्प्रतिको प्रेम, भगवत्स्वरूपको अनुभूति र अतिरिक्त पदार्थमा वैराग्य यी तीनै कुरा एकै समयमा हुन्छन्।

**विवरण–** यस श्लोकमा भगवान्मा शरणागत भइसकेपछि भक्ति, ज्ञान र वैराग्य स्वतः आउँछन् भनी बताइएको छ। **प्रपत्ति** शब्द गमनार्थक **पद्** धातुबाट बन्दछ। प्र उपसर्गपूर्वक पदधातुबाट क्तिन् प्रत्यय गरेपछि बन्ने प्रपत्ति शब्दको अर्थ हुन्छ– पूर्णरूपले ईश्वरको शरणमा जानु। यसरी प्रपत्तिको अर्थ पूर्ण शरणागति भन्ने हुन्छ। शरणागति भनेको आफ्ना सम्पूर्ण पदार्थ, विचार एवं अस्तित्वलाई पनि परमात्मामा समर्पित गरिदिनु हो। म शरणमा आएँ भन्दैमा कोही व्यक्ति शरणागत भएको ठहर्दैन। शरणागति त भित्री हृदयबाट हुने स्वाभाविक प्रक्रिया हो। म अब समर्पित हुन्छु भन्ने विचार गरी कोही व्यक्ति परमात्मामा समर्पित हुन सक्दैन, जब ऊ भित्री हृदयदेखि नै आफ्नो पूर्ण अस्तित्वलाई भगवान्कै अधीनमा रहेको अनुभव गर्दछ, तब नै ऊ पूर्णतः

शरणागत भएको हुन्छ। वास्तवमा भक्ति भनेको आफूलाई परमात्माको रूपमा अनुभव गर्नु नै हो। यही अनुभव नै भक्तिको सबैभन्दा शक्तिशाली साधन हो। **प्रतिक्षणं वर्धमानमविच्छिन्नमनुभवरूपम्** अर्थात् भक्ति भनेको छिन छिनमा बढिरहने अविच्छिन्न अनुभवरूप अनुराग हो। यो गुण र कामनाहरूले रहित हुन्छ। सामान्य व्यक्तिहरू के सम्झिन्छन् भने जप, ध्यान आदि केही साधना नगरी केवल शरणागत भएको भरमा कसरी भक्ति हुन सक्छ ? तर यो धारणा भ्रान्त धारणा हो। वास्तवमा भक्ति भनेको शुद्ध शरणागति नै हो। जबसम्म व्यक्ति आफ्नो बलको आधारमा परमात्मालाई जित्न या पाउन खोज्छ, तबसम्म परमात्मा प्राप्त हुनुहुन्न। मनुष्यको सीमित साधना एवं विचारले के अनन्त परमात्मा वशमा पर्नुहुन्छ र ? परमात्मालाई पाउनका लागि त आफ्नो बललाई छाडी परमात्माकै कृपामा आश्रित हुनुपर्दछ। यो परमात्मालाई पाउने सबभन्दा छोटो र सजिलो मार्ग हो।

भक्तिमा दुई थरी भावले भगवान्लाई प्राप्त गरिन्छ। एकथरी भक्तहरू निरन्तर परमात्माको चिन्तन, श्रवण, नामजप आदि गरी सधैँ परमात्मालाई आफ्नो हृदयमा धारण गर्दछन्। आफ्नो साधना या प्रयासको बलले भगवान्लाई समात्ने यस्ता भक्तहरूको अवस्थालाई **मर्कटशावक–न्याय**द्वारा बुझिन्छ। बाँदरको सानो बच्चो आफैँले आमालाई समात्दछ र आमाले जहाँ लिएर जान्छिन्, विनासङ्कोच त्यतै जान्छ। यहाँ बाँदरको बच्चोले अनेक ठाउँमा जान आफैँ प्रयास गर्नुपर्दैन। केवल आमालाई नछाडी समाइरहे मात्र पुग्छ। यहाँ पनि आमाप्रति बाँदर समर्पित भएको हुन्छ र आमाले लिएर गएको ठाउँमा विना अवरोध स्वतः नै पुग्दछ। तर यहाँ पूर्ण समर्पण भने देखिँदैन। बाँदरको बच्चोले आमालाई समात्न आफैँले प्रयास गरिरहेको हुन्छ। उसको व्यवहारबाट के झल्किन्छ भने आमाले मलाई लैजान त ठिक ठाउँमा मात्र लान्छिन्, तर मैले छोडिदिएँ भने उनले मलाई पनि छोडिदिन्छिन्, त्यसैले मैले उनलाई बेसरी समात्नुपर्दछ। यसरी आफ्नै बलले समातेको हुनाले कहिलेकाहीँ सावधान नभएको अवस्थामा बाँदरको बच्चो आमाबाट अलग हुन सक्दछ। अर्कोथरी भक्तिलाई भने **मार्जारशावकन्याय** अर्थात् बिरालोको बच्चाको दृष्टान्त दिइन्छ। बिरालीले बच्चोलाई आफ्नै मुखले च्यापेर यताउता घुमाउँछे, त्यो बिरालोको बच्चो आफ्नी आमाले कहाँ लाँदैछिन् भन्ने चिन्ता पनि गर्दैन अनि आफू बाटोमा खस्छु कि भन्ने डर पनि उसलाई हुँदैन। ऊ आमाप्रति पूर्णतः विश्वासपूर्वक समर्पित भएको हुन्छ। बिरालोको बच्चाले कहिल्यै यो सोच्दैन कि मैले समातिनँ भने मलाई आमाले बिच बाटोमा छाडिदिन पनि सक्छिन्। शरणागति भनेको भक्त पूर्ण रूपमा परमात्मामा समर्पित हुनु हो भने अरू नामजप आदि साधनमय भक्ति भनेका पूर्णतः समर्पण नहुने अवस्था हो। आफ्ना सबै भक्तलाई भगवान् सन्मार्गमा लिएर जानुहुन्छ। जसले आफ्नै बलले परमात्मालाई समातेका छन्, तिनीहरूलाई पनि परमात्मा उच्च भावभूमिमा पुऱ्याउनुहुन्छ भने परमात्माकै आधारमा आफूलाई छाडिदिएकाहरूलाई पनि उहाँ परमकल्याणमा पुऱ्याइदिनुहुन्छ, तर एउटामा अल्पशक्तिमान् जीवको प्रयत्नले परमात्मालाई समातेकाले यसले परमात्मालाई समात्न बिर्सिएको वेलामा ऊ खस्न पनि सक्दछ भने सम्पूर्णतः परमात्मामा समर्पित व्यक्ति परमात्माद्वारा निरन्तर ऊर्ध्वगतिमा पुगिरहेको हुन्छ। लड्न लागेको बच्चोलाई आमाबाबुले झटपट सहारा दिए झैँ लड्न लागेको यो

शरणागतलाई पनि परमात्मा झटपट सहारा दिनुहुन्छ। भक्तिशास्त्रमा यस्तै व्यक्तिलाई अकिञ्चन भनिन्छ र यस्तै भक्तहरू भगवान्‌लाई प्यारा हुन्छन्। गीता (१८।६६)मा पनि भगवान्‌ले सबै धर्मलाई छाडी मेरै शरणमा आऊ र तिमीलाई सबै पापबाट छुटाउने जिम्मा मेरो भयो भन्नुभएको छ— **सर्वधर्मान् परित्यज्य मामेकं शरणं व्रज, अहं त्वा सर्वपापेभ्यो मोक्षयिष्यामि मा शुचः।** यसबाट परमात्माले आफ्ना भक्तहरूबाट सामान्य विश्वास मात्र नभई पूर्ण आत्मसमर्पण वा शरणागति खोज्नुहुँदोरहेछ भन्ने थाहा हुन्छ।

व्यक्तिको सङ्कीर्णताको बोध नै उसलाई समष्टि भावमा पुग्न नदिने ठुलो व्यवधान हो। जबसम्म व्यक्ति आफ्नै परिश्रमले परमात्मालाई पाउन खोज्छ, तबसम्म उसमा आफ्नो अस्तित्व एवं सीमित साधनाको स्फुरण भइरहेको हुन्छ। यस वेलामा उसमाथि सर्वव्यापी परमात्माको परम कृपा कसरी बर्सिन सक्दछ ? जो व्यक्ति आफूलाई नै बिर्सी निष्किञ्चन भावले परमात्मामा समर्पित हुन्छ, त्यो व्यक्ति तत्काल नै सर्वव्यापी अस्तित्वबाट परिपूर्ण हुन्छ। यसैले परमात्मालाई पाउने सबभन्दा छोटो एवं सजिलो साधन भनेको पूर्ण शरणागति हो भनिएको हो। भगवत्प्राप्तिका श्रवण, कीर्तन, स्मरण आदि सबै साधनमा पनि भगवान्प्रति समर्पण र विश्वासको भाव हुन्छ, तर पनि शरणागतिलाई नवौँ आत्मनिवेदन भक्तिको रूपमा स्थान दिनुको रहस्य पनि अरू सबै भक्तिभन्दा शरणागति श्रेष्ठ छ भन्ने जनाउन नै हो। अरु श्रवण, कीर्तन, स्मरण आदि गर्नुको मुख्य उद्देश्य ती साधन गर्दा थाकेर परमात्माप्रति समर्पित हुने शरणागतिको भाव पाउनु नै हो। यसरी भक्तिमा शरणागति नै प्रमुख साधन हो, अरू सबै त्यसका अङ्ग मात्र हुन्। यहाँ प्रपत्ति अर्थात् शरणागति भइसकेपछि भक्ति, ज्ञान र वैराग्य यी सबै आफैँ आउने बताइएको छ। जसरी भोकाएको व्यक्ति हरेक गास खाइरहँदा तुष्टि र पुष्टि पाउँदै भोकलाई पनि नष्ट गरिरहेको हुन्छ, त्यसै गरी शरणागत व्यक्ति पनि क्षण-क्षणमा भक्ति, ज्ञान र वैराग्यलाई पाइरहेको हुन्छ। भोजन गर्दा हुने सुखलाई तुष्टि भनिन्छ, भक्तिमा पनि सुख हुने हुनाले ती दुबै समान छन्। पुष्टि भनेको पेट भरिनु हो। ज्ञानद्वारा युक्त भएपछि मनुष्य आफ्नो स्वरूपबोधले भरिएको हुन्छ। त्यसैले भरिनु अर्थमा ज्ञान र पुष्टि समान छन्। पेट भरिएपछि भोक मर्नाले भोजनबाट मन हट्दछ, त्यसै गरी ज्ञानद्वारा पूर्ण तृप्त भएको व्यक्ति पनि संसारबाट विरक्त हुन्छ, त्यसैले भोक हट्नु र वैराग्य हुनु समान रहेका छन्। हरेक गास खाँदै गर्दा क्षण-क्षणमा स-साना तृप्ति आदि हुँदै जान्छन् अनि अन्तमा चाहिँ पूर्ण तुष्टि हुँदै भोक नष्ट हुन्छ, त्यसै गरी पूर्ण शरणागतिबाट पनि अन्तमा पूर्णभक्ति पूर्ण ज्ञान र पूर्ण वैराग्यको उदय हुन्छ। यसरी यहाँ भगवत्शरणागतिको महत्त्व बताइएको छ।

**इत्यच्युताङ्घ्रिं भजतोऽनुवृत्त्या भक्तिर्विरक्तिर्भगवत्प्रबोधः।**
**भवन्ति वै भागवतस्य राजंस्ततः परां शान्तिमुपैति साक्षात्॥ ४३॥**

**पदार्थ—**
**राजन्** = हे राजा निमि
**इति** = यसरी
**अच्युताङ्घ्रिं** = भगवान् अच्युतको चरणको
**अनुवृत्त्या** = बारम्बार
**भजतः** = सेवा गर्ने
**भागवतस्य** = भगवद्भक्तको
**भक्तिः** = भगवान्प्रतिको भक्ति

**विरक्तिः** = विषयप्रति वैराग्य
**भगवत्प्रबोधः** = भगवान्स्वरूपको ज्ञान पनि
**वै** = निश्चय नै
**भवन्ति** = हुन्छन् र
**ततः** = त्यसपछि उसले
**साक्षात्** = अपरोक्षरूप
**परां** = सर्वोत्तम
**शान्तिं** = शान्तिलाई
**उपैति** = प्राप्त गर्दछ

**वाक्यार्थ–** हे राजा निमि ! यसरी जसले बारम्बार भगवान्को चरणको सेवा गर्दछ, त्यस भक्तलाई भगवान्प्रतिको भक्ति, विषयप्रतिको वैराग्य र भगवत्स्वरूपको ज्ञान सँगसँगै हुन्छ र त्यसपछि तुरुन्तै उसले परम शान्तिरूप मुक्ति पनि प्राप्त गर्दछ।

**राजोवाच** (राजा निमिले भने)

**अथ भागवतं ब्रूत यद्धर्मो यादृशो नृणाम्।**
**यथाचरति यद् ब्रूते यैर्लिङ्गैर्भगवत्प्रियः॥ ४४॥**

**पदार्थ–**
**अथ** = अब
**भागवतं** = भगवान्को भक्तको लक्षण
**ब्रूत** = बताउनुहोस् (जो भक्त)
**नृणां** = मनुष्यहरूको बिचमा
**यद्धर्मः** = जुन धर्मले रहन्छ
**यादृशः** = जस्तो स्वभावको हुन्छ
**यथा** = जसरी
**आचरति** = आचरण गर्दछ
**यद् ब्रूते** = जे बोल्दछ र
**यैः** = जे-जे
**लिङ्गैः** = चिह्नहरूले गर्दा
**भगवत्प्रियः** = भगवान्को प्यारो बन्दछ

**वाक्यार्थ–** अब मलाई भगवान्को भक्तको लक्षण बताउनुहोस्। भगवान्को भक्त अरू मनुष्यहरूसँग कस्तो व्यवहार गर्छ, उसको स्वभाव कस्तो हुन्छ, अरूसँग कसरी व्यवहार गर्दछ, कसरी के बोल्दछ र उसको कुन-कुन लक्षणले ऊ भगवान्को प्यारो बन्दछ यी सबै बताउनुहोस्।

**हरिरुवाच** (योगीश्वर हरिले भने)

**सर्वभूतेषु यः पश्येद् भगवद्भावमात्मनः।**
**भूतानि भगवत्यात्मन्येष भागवतोत्तमः॥ ४५॥**

**पदार्थ–**
**यः** = जसले
**सर्वभूतेषु** = सम्पूर्ण प्राणीहरूमा
**आत्मनः** = आफ्नो
**भगवद्भावं** = व्यापक ब्रह्मरूपले रहेको कुरा र
**भगवति** = ब्रह्मरूप
**आत्मनि** = आत्मामा
**भूतानि** = सम्पूर्ण प्राणीहरूलाई अभिन्न रूपले रहेको कुरा पनि
**पश्येत्** = देख्दछ भने
**एषः** = त्यो नै
**भागवतोत्तमः** = भगवान्को उत्तम भक्त हो

**वाक्यार्थ–** जसले सम्पूर्ण प्राणीहरूमा व्यापक ब्रह्मरूपले अवस्थित आत्मरूप परमात्मालाई देख्दछ र आत्मरूप परमात्मामा सम्पूर्ण प्राणीहरूलाई अभिन्न रूपले रहेको अनुभव गर्दछ, त्यो नै भगवान्को प्रेमी र उत्तम भक्त हो।

**ईश्वरे तदधीनेषु बालिशेषु द्विषत्सु च।**
**प्रेममैत्रीकृपोपेक्षा यः करोति स मध्यमः॥ ४६॥**

**पदार्थ–**
**यः** = जसले
**ईश्वरे** = भगवान्मा
**तदधीनेषु** = उहाँका भक्तहरूमा
**बालिशेषु** = अज्ञानीहरूमा
**द्विषत्सु च** = शत्रुहरूमा क्रमशः
**प्रेममैत्रीकृपोपेक्षा** = प्रीति, मित्रता, दया र उपेक्षा
**करोति** = गर्दछ
**सः** = त्यो भक्त
**मध्यमः** = मध्यम कोटिको भक्त हो

**वाक्यार्थ–** जसले ईश्वरमा प्रेम, भगवान्का भक्तहरूमा मित्रता, अज्ञानीहरूमा दया र शत्रुहरूमा उपेक्षा गर्दछ, त्यस्तो खालको भक्त भगवान्को मध्यम भक्त हो।

**अर्चायामेव हरये पूजां यः श्रद्धयेहते।**
**न तद्भक्तेषु चान्येषु स भक्तः प्राकृतः स्मृतः॥ ४७॥**

**पदार्थ–**
**यः** = जसले
**हरये** = भगवान्लाई प्रसन्न पार्न
**अर्चायाम् एव** = मूर्तिमा मात्र
**श्रद्धया** = श्रद्धापूर्वक
**पूजां** = पूजा गर्न
**ईहते** = चाहन्छ
**तद्भक्तेषु** = ती भगवान्का भक्तहरूमा र
**अन्येषु च** = अन्य जीवहरूमा पनि
**न** = श्रद्धा दृष्टिले पूजा गर्दैन भने
**सः** = त्यो व्यक्ति
**प्राकृतः भक्तः** = प्राकृत (सामान्य) भक्त हो भनेर
**स्मृतः** = भनिन्छ

**वाक्यार्थ–** जसले भगवान्लाई प्रसन्न पार्न श्रद्धापूर्वक भगवान्को मूर्तिमा मात्र पूजा गर्दछ, भगवान्का भक्तहरू र अरू जीवहरूलाई भगवद्दृष्टिले हेर्दैन, त्यस्तो भक्तलाई सामान्य भक्त भनिन्छ।

**विवरण–** यस प्रसङ्गमा भगवान्का उत्तम, मध्यम र सामान्य भक्तहरूको लक्षण बताइएको छ। परमात्माका विशेष भक्त एवं ज्ञानी महापुरुषहरूको हिँडाइ, बोलाइ, व्यवहार आदिबाट नै उनीहरूको विलक्षणता प्रकट भइरहेको हुन्छ। यद्यपि ज्ञान एवं भक्तिको उच्चतालाई बाहिरी नियमबाट नाप्न सकिँदैन, तर पनि महापुरुषहरूमा अरू संसारी व्यक्तिहरूको भन्दा केही भिन्नता भइहाल्दछ। जतिसुकै एकान्तमा फुलेको फूल भए पनि त्यसको सुवास त अवश्य फैलिन्छ र उसले आफूलाई लुकाउन खोजे पनि सक्दैन भने झैं हृदयको अन्तरतम कुनाबाट प्रज्वलित भएको ज्ञानरूपी ज्योतिको प्रकाश पनि जति रोक्न खोजे पनि कुनै न कुनै रूपमा बाहिर निस्किहाल्दछ। शाब्दिकहरू शब्दाडम्बर अनि व्यवहारलाई प्रदर्शन गरी आफूलाई ब्रह्मज्ञानी सिद्ध गराउन चाहन्छन्, तर वास्तविक ब्रह्मज्ञानीहरू चाहिँ कुनै पनि व्यवहारमा आफूलाई ब्रह्मज्ञानी भएको प्रचार गर्न रुचाउँदैनन्, तर पनि जिज्ञासु एवं विद्वान्हरूले उनको आसक्तिशून्य व्यवहार आदि विलक्षणतालाई हेरी यो रहस्य पत्ता लगाइहाल्दछन्। त्यसैले शास्त्रमा भगवान्का उच्चतम भक्त एवं ज्ञानीहरूको

स्वभाव र आचरणहरूबारे प्रकाश पारिएको छ। यहाँ सबै प्राणीहरूलाई भगवान्‌कै भावले हेर्ने अनि विषयहरूको भोगद्वारा पनि सुखी र दुःखी नहुने व्यक्तिहरूलाई उत्तम भगवद्भक्त भनिएको छ। संसारमा एउटै परमात्मा मात्र सद्वस्तु हुनुहुन्छ। अनि अरू सम्पूर्ण पदार्थ एवं प्राणीहरू चाहिँ उहाँमा नै कल्पित भएका हुन्। अझ सम्पूर्ण पदार्थको रूपमा उहाँ स्वयं नै प्रतीत हुनुभएको हो। त्यसैले ज्ञानीले सबै वस्तुलाई आत्मरूपमा नै देख्दछ। त्यसैले ईशावास्योपनिषद् (६)मा भनिएको छ– **यस्तु सर्वाणि भूतान्यात्मन्येवानुपश्यति, सर्वभूतेषु चात्मानं ततो न विजुगुप्सते** अर्थात् जसले सम्पूर्ण प्राणीहरूलाई आत्मामा अनि आत्मालाई सम्पूर्ण प्राणीहरूमा देख्दछ भने त्यसपछि उसले कसैसँग पनि द्वेष गर्दैन। यहाँ पनि **आत्मनि भगवति** अर्थात् आत्मरूप भगवान्‌मा सम्पूर्ण संसार देख्ने भनी यही कुरा बताइएको छ।

भक्तहरूको तह बताउँदै दोस्रा योगीश्वर हरि भन्दछन्– जसले सबैतिर केवल परमात्मालाई मात्र देख्छ, त्यस्तो व्यक्ति उत्तम हो, जसले संसारमा भगवान्‌का भक्त, सामान्य संसारी अनि दुष्ट व्यक्तिहरू पनि देख्दछ भने त्यो भेदबुद्धिले युक्त भएको व्यक्ति मध्यम भक्त हो अनि केवल प्रतिमा आदिमा मात्र भगवान्‌को बुद्धि गरी त्यसकै पूजा-सेवा गरिरहने व्यक्ति चाहिँ सबैभन्दा सामान्य भगवद्भक्त हो। कुन उच्च भक्त हो भन्ने कुरा कसले कति नामजप या पूजा आदि गऱ्यो भन्नेबाट नभई कसले यथार्थतत्त्वको अनुभव कति बढी र आन्तरिक रूपमा गऱ्यो भन्नेबाट नापिन्छ। संसारमा पनि जो जसको जति प्रिय हुन्छ, उसलाई त्यसका त्यति नै अन्तरङ्ग या रहस्यका कुराहरू थाहा हुन्छन्, अनि यही आधारमा को कसको कति प्रिय छ भन्ने थाहा हुन्छ। भगवान्‌को प्रिय भक्त त्यही हो, जसलाई परमात्माको रहस्यमय आन्तरिक रूप थाहा छ। **वासुदेवः सर्वम्** अर्थात् सबै संसार वासुदेवरूप हो भनी एउटै आत्मतत्त्वको अनुभव गर्नु भगवान्‌को सर्वाधिक रहस्यलाई बुझ्नु हो। त्यसैले यस्ता परमात्मरहस्यलाई बुझ्नेहरूलाई नै आन्तरिक भक्त भनिन्छ। सामान्य मान्छेहरू भगवान्‌को भक्त भन्नेबित्तिकै बाहिरी साधनहरूको लेखाजोखा गर्दछन्, तर भक्तिको रहस्य अलि फरक किसिमको हुन्छ। त्यसैले सामान्य धारणालाई सुधार गर्नका लागि यहाँ सर्वोत्तम भक्तहरूको विषयमा अनेक रूपले बताइएको छ। इन्द्रियहरूद्वारा अर्थ अर्थात् अनेक विषयहरूको ग्रहण गर्दागर्दै पनि जो व्यक्ति सुखी-दुःखी हुँदैन त्यो व्यक्ति नै भागवतोत्तम हो। यस्तो उत्तम भगवद्भक्त को होला भनी पत्ता लगाउन अरू शास्त्रहरूमा अरू-अरू महापुरुषहरूको विषयमा गरिएको वर्णनलाई पनि तुलना गरेर हेर्नुपर्दछ।

भगवद्गीतामा स्थितप्रज्ञ व्यक्तिको लक्षण बताउने क्रममा भनिएको छ– जो व्यक्ति कहीँ पनि **अभिस्नेह** अर्थात् राग गर्दैन अनि राम्रा-नराम्रा अनेकथरी पदार्थहरूलाई पाएर पनि न त्यसको इच्छा नै गर्दछ न त द्वेष नै गर्दछ भने त्यो व्यक्ति स्थितप्रज्ञ हो– **नाभिनन्दति न द्वेष्टि तस्य प्रज्ञा प्रतिष्ठिता** (भगवद्गीता २।५७)। सामान्य व्यक्तिहरू उनीहरूलाई मन पर्ने पदार्थहरूको प्राप्तिमा खुबै आनन्दित हुन्छन्, अनि त्यो वस्तु बारम्बार प्राप्त भइरहोस् भन्ने चाहन्छन्। मन नपर्ने वस्तुहरू प्राप्त भए भने चाहिँ त्यसप्रति उनीहरू दुःखी या क्रोधित हुन्छन्, अनि कहिल्यै त्यो वस्तु नआओस् भन्ने चाहना गर्दछन्। जसको बुद्धि आत्मामा स्थित नभई बाहिरी पदार्थहरूमा भड्किरहेको छ, तिनीहरू यसप्रकार राम्रा-नराम्रा विषयहरूको प्राप्तिमा भिन्न-भिन्न प्रतिक्रिया देखाउँछन्। यसको

अर्थ अज्ञानीहरूको स्वाभाविक स्थितिलाई सुख एवं दुःखका स-साना स्पन्दनले पनि हल्लाइरहन्छन्। यसैले उनीहरूको प्रज्ञा आत्मामा प्रतिष्ठित भएको रहेनछ भन्ने थाहा हुन्छ। आत्मामा बुद्धि प्रतिष्ठित भइसकेका ज्ञानीहरू भने बाहिरी असत् वस्तुहरूको प्राप्ति-अप्राप्तिमा कत्ति पनि विचलित हुँदैनन्। सपनाका पदार्थहरूको प्राप्ति र अप्राप्तिले को दुःखी र सुखी हुन्छ र ? किनभने त्यो वस्तु हुँदै नभएको हो। त्यसै गरी पूर्ण ज्ञानमा लागेका व्यक्तिहरूका लागि पनि यो संसार सपना समान नै असत्य हो भने उनीहरू यहाँका काल्पनिक अनुकूलता र प्रतिकूलताबाट किन प्रभावित बन्दथे र ? पदार्थहरूलाई सत्य एवं शरीर-इन्द्रियलाई नै आत्मा मान्नु सबैभन्दा बाहिरी तहको दृष्टि हो, अन्तर्यामी आत्मामा दृष्टि दिनु सबभन्दा गहिराइको दृष्टि हो। जो रहस्यमय गहिराइमा पुगेको हुन्छ, त्यो व्यक्ति बाहिरी आवरणको व्यवहारले प्रभावित बन्दैन। तलाउको माथिल्लो तरङ्गलाई सानो ढुङ्गाले पनि चञ्चल बनाइदिन्छ, तर सागरको अन्तस्तलमा रहेको गहिरो शान्तिलाई भने ठुला माछा एवं जहाजहरूको खलबलले पनि हल्लाउन सक्दैन। बाहिरी घटनाबाट निरपेक्ष बनी आफ्नै गहिराइमा डुबिरहेको ज्ञानीको यस्तै अवस्था हुन्छ। स्थितप्रज्ञ ज्ञानी कल्पित असत् पदार्थको चिन्तनमा लाग्दैन, त्यसै गरी यहाँ हरिद्वारा बताइएका उत्तम भक्तहरू पनि सारा संसारलाई मायामय देख्छन् र यहाँ राग-द्वेष गर्दैनन्। गीताको चौधौँ अध्यायको गुणातीतको लक्षणमा पनि यही समता देखिन्छ। त्यहाँ **समदुःखसुखः स्वस्थः** (श्रीमद्भगवद्गीता १४।२४) अर्थात् आफूमा अवस्थित भएको ज्ञानी सुख र दुःखमा बराबर हुन्छ भनिएको छ। यसरी तुलनात्मक रूपले विचार गर्दा जीवन्मुक्त आत्मज्ञ महापुरुष नै वास्तविक उत्तम भक्त हो भन्ने सिद्ध हुन्छ। गीताको सातौँ अध्यायमा पनि भगवान्ले यही कुरा बताउनुभएको छ। त्यहाँ चारथरी भक्तहरूमध्ये ज्ञानीहरू भगवान्को आत्मा नै भएको र भगवान्मा नित्ययुक्त रहने र तिनीहरू नै भगवान्को विशेष भक्त भएको जनाइएको छ– **तेषां ज्ञानी नित्ययुक्त एकभक्तिर्विशिष्यते** (श्रीमद्भगवद्गीता ७।१७)। ज्ञानीहरू सर्वरूप परमात्माको रहस्यलाई बुझी उहाँलाई आफ्नै वास्तविक आत्माको रूपमा बुझ्दछन् अनि भगवान्लाई पनि अरू प्राणीहरूलाई सबैभन्दा बढी आत्मा प्रिय भए झैँ ती आफ्ना आत्मा भएका ज्ञानीहरू नै सबैभन्दा बढी प्यारा हुन्छन् भने यी दुई बिचको शाश्वत प्रेमसम्बन्धमा अरू अज्ञानीहरूले तर्क-वितर्क गर्नुको के अर्थ रहन्छ र ? यस्तै श्रेष्ठ भक्तहरूका प्रति आफ्नो विशेष प्रेम रहेको कुरा बताउन भगवान्ले **नैवात्मा च** अर्थात् आफूलाई आफ्ना भक्तहरूले पूर्णतः वशमा पार्ने र ती आफू समान नै प्रिय हुने जनाउनुभएको छ। यसरी भक्तहरूले आफूलाई अलग आत्मरूपमा नभई परमात्माकै रूपमा अनुभव गरी त्यहीँ समर्पित हुने अनि भगवान्ले पनि आफ्नो आत्माको रूपमा यस्ता विशेष भक्तहरूलाई नै अनुभव गर्ने सिद्ध हुन्छ। यसप्रकार यहाँ उत्तम भगवद्भक्तहरूको लक्षण बताइएको छ।

**गृहीत्वापीन्द्रियैरर्थान् यो न द्वेष्टि न हृष्यति।**
**विष्णोर्मायामिदं पश्यन् स वै भागवतोत्तमः॥ ४८॥**

**पदार्थ–**
**यः** = जो
**इदं** = यो विश्वलाई
**विष्णोः** = भगवान् विष्णुको
**मायां** = मायाको रूपमा
**पश्यन्** = विचार गर्दै
**इन्द्रियैः** = इन्द्रियहरूद्वारा
**अर्थान्** = विषयहरूलाई
**गृहीत्वा अपि** = ग्रहण गरेर पनि
**न हृष्यति** = (कसैलाई राम्रो मानेर) न प्रसन्न हुन्छ
**न द्वेष्टि** = (कसैलाई नराम्रो मानेर) न द्वेष गर्दछ
**सः** = त्यस्तो भक्त
**वै** = निश्चय नै
**भागवतोत्तमः** = भगवान्को सर्वश्रेष्ठ भक्त हो

**वाक्यार्थ–** जसले यो सारा विश्वलाई भगवान्को मायाको रूपमा देख्दछ र इन्द्रियहरूले विषयहरूलाई ग्रहण गरेर पनि कसैबाट प्रसन्न हुने र कसैमा द्वेष गर्ने काम गर्दैन, त्यो नै भगवान्को सर्वश्रेष्ठ भक्त हो।

**देहेन्द्रियप्राणमनोधियां यो जन्माप्ययक्षुद्भयतर्षकृच्छ्रैः।**
**संसारधर्मैरविमुह्यमानः स्मृत्या हरेर्भागवतप्रधानः॥ ४९॥**

**पदार्थ–**
**यः** = जो
**हरेः** = भगवान्को
**स्मृत्या** = सम्झनाले गर्दा
**देहेन्द्रियप्राणमनोधियां** = शरीर, इन्द्रिय, प्राण, मन र बुद्धिको
**जन्माप्ययक्षुद्भयतर्षकृच्छ्रैः** = जन्म, मृत्यु, भोक, प्यास, भय, तृष्णा, श्रम आदि
**संसारधर्मैः** = संसारका धर्महरूद्वारा
**अविमुह्यमानः** = मोहित हुँदैन त्यो
**भागवतप्रधानः** = भगवान्को श्रेष्ठ भक्त हो

**वाक्यार्थ–** जो भगवान्को निरन्तरको सम्झनाले गर्दा शरीर, इन्द्रिय, प्राण, मन र बुद्धिका जन्म, मृत्यु, भोक, प्यास, भय, तृष्णा, श्रम आदि सांसारिक धर्महरूद्वारा मोहित हुँदैन, त्यो नै भगवान्को श्रेष्ठ भक्त हो।

**न कामकर्मबीजानां यस्य चेतसि सम्भवः।**
**वासुदेवैकनिलयः स वै भागवतोत्तमः॥ ५०॥**

**पदार्थ–**
**यस्य** = जसको
**चेतसि** = चित्तमा
**कामकर्मबीजानां** = विषयभोगको इच्छा, कर्म र बीजरूप वासनाहरूको
**सम्भवः न** = उत्पत्ति हुँदैन
**वासुदेवैकनिलयः** = जसको चित्त एक मात्र भगवान् वासुदेवमा मात्र लागिरहन्छ
**सः** = त्यस्तो भक्त
**वै** = निश्चय नै
**भागवतोत्तमः** = श्रेष्ठ भक्त हो

**वाक्यार्थ–** जसको चित्तमा विषयभोगको इच्छा, कर्मप्रवृत्ति र वासनाको उदय कहिल्यै पनि हुँदैन र जसको चित्त सधैं भगवान् वासुदेवमा मात्र लागिरहन्छ ऊ नै श्रेष्ठ भक्त हो।

**न यस्य जन्मकर्मभ्यां न वर्णाश्रमजातिभिः।**
**सज्जतेऽस्मिन्नहंभावो देहे वै स हरेः प्रियः॥ ५१॥**

**पदार्थ–**
**यस्य** = जसको
**अस्मिन्** = यो
**देहे** = शरीरमा
**न** = न त
**जन्मकर्मभ्यां** = उत्तम कुलमा जन्म र तपस्या आदि उत्तम कर्मको आधारमा
**न** = न त
**वर्णाश्रमजातिभिः** = वर्ण, आश्रम र जातिको आधारमा
**अहंभावः** = आत्मबुद्धि
**सज्जते** = हुन्छ
**सः वै** = ऊ नै
**हरेः** = भगवान्‌को
**प्रियः** = प्यारो हुन्छ

**वाक्यार्थ–** जुन व्यक्तिको, उत्तमकुलमा जन्मनाको कारणले वा राम्रो तपस्या आदि कर्मको आधारमा र वर्ण, आश्रम तथा जातिको आधारमा पनि यो शरीरमा आत्मबुद्धि हुँदैन, त्यस्तो व्यक्ति भगवान्‌को प्यारो बन्दछ।

**न यस्य स्वः पर इति वित्तेष्वात्मनि वा भिदा।**
**सर्वभूतसमः शान्तः स वै भागवतोत्तमः॥ ५२॥**

**पदार्थ–**
**यस्य** = जुन व्यक्तिको
**वित्तेषु** = धनसम्पत्तिमा
**आत्मनि वा** = अथवा शरीर आदिमा
**स्वः** = यो आफ्नो र
**परः** = यो अर्काको भन्ने
**इति** = यस्तो
**भिदा** = भेद
**न** = छैन
**सर्वभूतसमः** = सम्पूर्ण प्राणीमा समान दृष्टि राख्ने र
**शान्तः** = शान्त स्वभावको
**सः** = त्यो व्यक्ति
**वै** = निश्चय नै
**भागवतोत्तमः** = भक्तहरूमा श्रेष्ठ हो

**वाक्यार्थ–** जुन व्यक्तिले धनसम्पत्तिमा र शरीर आदिमा पनि यो आफ्नो र यो अर्काको भन्ने भेद गर्दैन, जो सम्पूर्ण प्राणीहरूमा समान दृष्टि राख्दछ र जो शान्तस्वभावको छ त्यो नै श्रेष्ठ भक्त हो।

**त्रिभुवनविभवहेतवेऽप्यकुण्ठस्मृतिरजितात्मसुरादिभिर्विमृग्यात्।**
**न चलति भगवत्पदारविन्दाल्लवनिमिषार्धमपि यः स वैष्णवाग्र्यः॥ ५३॥**

**पदार्थ–**
**यः** = जो
**त्रिभुवनविभवहेतवे अपि** = तीनै लोकको राज्यलक्ष्मी पाइन्छ भने पनि
**अजितात्मसुरादिभिः** = भगवान्‌मा समर्पित देवता र महर्षिहरूद्वारा
**विमृग्यात्** = खोजिएको
**भगवत्पदारविन्दात्** = भगवान्‌को चरणारविन्दबाट
**लवनिमिषार्धम् अपि** = लव (एक निमेषको छ भागको एक भाग) र आधा निमेष (आँखा झिम्क्याउँदा लाग्ने समय) पनि
**न चलति** = विचलित हुँदैन
**अकुण्ठस्मृतिः** = भगवान्‌को चरणकमल बाहेक सार वस्तु अरू छैन भनेर स्मृति बनिसकेको
**सः** = त्यस्तो व्यक्ति नै
**वैष्णवाग्र्यः** = भक्तहरूमा श्रेष्ठ हो

**वाक्यार्थ–** तीनै लोकको राज्य लक्ष्मी प्राप्त हुन्छ भन्दा पनि जसको चित्त देवता र ठुला-ठुला महर्षिहरूले पनि खोजिएको दुर्लभ भगवान्‌को चरणारविन्दबाट एक लव वा आधा क्षण मात्र पनि विचलित हुँदैन, त्यस्तो भगवान्‌को चरणारविन्दलाई बाहेक अरूलाई सारवस्तु नसम्झने व्यक्ति नै भगवान्‌को श्रेष्ठ भक्त हो।

**भगवत उरुविक्रमाङ्घ्रिशाखानखमणिचन्द्रिकया निरस्ततापे।**

**हृदि कथमुपसीदतां पुनः स प्रभवति चन्द्र इवोदितेऽर्कतापः॥ ५४॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **चन्द्रिकया** = लामा-लामा | **हृदि** = हृदयमा |
| **चन्द्रे** = चन्द्रमा | फट्का भएका पाउको औँलाका | **कथं** = कसरी |
| **उदिते** = उदाएपछि | नङरूप मणिको शीतल | **पुनः** = फेरि |
| **अर्कतापः इव** = सूर्यको ताप झैँ | कान्तिले | **सः** = त्यो सन्ताप |
| **भगवतः** = भगवान्‌को | **निरस्ततापे** = ताप हटाइसकेको | **प्रभवति** = आउला र |
| **उरुविक्रमाङ्घ्रिशाखानखमणि-** | **उपसीदतां** = भक्तहरूको | |

**वाक्यार्थ–** जसरी चन्द्रमाको उदय भएपछि सूर्यको ताप आउँदैन, हराउँछ त्यसै गरी भगवान्‌को चरणारविन्दको नङरूपी मणिको शीतल कान्तिद्वारा एकपटक सन्ताप हटिसकेपछि भक्तहरूको हृदयमा फेरि सन्ताप कसरी आउन सक्छ र ?

**विसृजति हृदयं न यस्य साक्षाद्धरिरवशाभिहितोऽप्यघौघनाशः।**

**प्रणयरसनया धृताङ्घ्रिपद्मः स भवति भागवतप्रधान उक्तः॥ ५५॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **साक्षात्** = स्वयं | **न विसृजति** = छाड्नुहुन्न |
| **अवशाभिहितोऽपि** = विवश | **यस्य** = जसको | **सः** = त्यस्तो भक्त नै |
| भएर नाम लिँदा मात्र पनि | **हृदयं** = हृदयलाई | **भागवतप्रधानः** = भक्तहरूमा |
| **अघौघनाशः** = पापराशिलाई | **प्रणयरसनया** = प्रेमरूपी डोरीले | श्रेष्ठ |
| नष्ट गरिदिने | **धृताङ्घ्रिपद्मः** = चरणलाई | **भवति** = हुन्छ भनेर |
| **हरिः** = श्रीहरि नै | बाँधेर राखेको हुनाले | **उक्तः** = बताइएको छ |

**वाक्यार्थ–** नजानीकन विवश भएर नाम लिँदा मात्र पनि पापराशिलाई नष्ट गरिदिने स्वयं श्रीहरि नै जसको प्रेमरूपी डोरीले चरणकमलमा बाँधिएर हृदयमा ननिस्कने गरी पस्नुभएको छ, त्यस्ता भक्त नै भक्तहरूमा श्रेष्ठ हुन् भनेर बताइएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां एकादशस्कन्धे द्वितीयोऽध्यायः॥ २॥**

# अथ तृतीयोऽध्यायः

## ज्ञानयोग र कर्मयोग

**राजोवाच** (राजा निमिले भने)

**परस्य विष्णोरीशस्य मायिनामपि मोहिनीम्।**
**मायां वेदितुमिच्छामो भगवन्तो ब्रुवन्तु नः॥ १॥**

**पदार्थ—**
**परस्य** = परम
**ईशस्य** = ईश्वर
**विष्णोः** = भगवान् विष्णुको
**मायिनाम् अपि** = ठुला ठुला मायावीहरूलाई पनि
**मोहिनीम्** = मोहमा पार्ने
**मायां** = मायालाई
**वेदितुम्** = जान्न
**इच्छामः** = चाहन्छौँ
**भगवन्तः** = समर्थ हजुरहरूले
**नः** = हामीहरूलाई
**ब्रुवन्तु** = बताउनुहोस्

**वाक्यार्थ—** परमेश्वर विष्णुको मायावीहरूलाई पनि मोहित पार्ने मायालाई हामी जान्न चाहन्छौँ। हजुरहरूले यो रहस्य बुझ्नुभएको छ, त्यसैले हामीहरूलाई बताउनुहोस्।

**नानुतृप्ये जुषन् युष्मद्वचो हरिकथामृतम्।**
**संसारतापनिस्तप्तो मर्त्यस्तत्तापभेषजम्॥ २॥**

**पदार्थ—**
**संसारतापनिस्तप्तः** = संसारका तापले सन्तप्त भएको
**मर्त्यः** = मरणशील म
**तत्तापभेषजं** = त्यो तापको औषधि भएको
**हरिकथामृतं** = भगवान्को पवित्र कथारूप
**युष्मद्वचः** = जो हजुरहरूको वचन छ, त्यसलाई
**जुषन्** = जति सुने पनि
**न अनुतृप्ये** = तृप्त भएको छैन (त्यसैले भन्नुहोस्)

**वाक्यार्थ—** विभिन्न प्रकारका सांसारिक तापबाट सन्तप्त भएको मरणशील मलाई त्यो तापको औषधिस्वरूप भगवान्को कथामृतले भरिएको हजुरको वचन सुनेर तृप्ति भएको छैन। त्यसैले अझै सुनाउनुहोस्।

**अन्तरिक्ष उवाच** (अन्तरिक्षले भने)

**एभिर्भूतानि भूतात्मा महाभूतैर्महाभुज।**
**ससर्जोच्चावचान्याद्यः स्वमात्रात्मप्रसिद्धये॥ ३॥**

**पदार्थ—**
**महाभुज** = हे महाबाहु
**आद्यः** = आदिपुरुषले (जुन

शक्तिको आधारमा)
**भूतात्मा** = महाभूतको कारण बनेर
**स्वमात्रात्मप्रसिद्धये** = आफ्ना उपासक जीवका सिद्धिका लागि
**एभिः** = यी
**महाभूतैः** = पञ्चमहाभूतद्वारा
**उच्चावचानि** = ठुला-साना
**भूतानि** = प्राणीहरूलाई
**ससर्ज** = सृष्टि गर्दछ (त्यो नै माया हो)

**वाक्यार्थ–** हे निमि ! आदिपुरुषले जुन शक्तिको आधारमा आफू कारण बनेर जीवका सिद्धि वा भोगका लागि आफैँले सृष्टि गरेका पञ्चमहाभूतद्वारा विभिन्न प्रकारका ठुला-साना प्राणीहरूलाई सृष्टि गर्दछ, त्यो शक्ति नै माया हो।

**विवरण–** यहाँ राजाले मायाको विषयमा प्रश्न गरेपछि तेस्रा योगीश्वर अन्तरिक्षले त्यसको उत्तर दिएका छन्। अघिल्लो अध्यायमा उत्तम भक्तहरूको लक्षण बताउने क्रममा सारा संसारलाई परमात्माको माया हो भन्ने जानी त्यसबाट दुःखी-सुखी नहुने व्यक्ति नै श्रेष्ठ हो भनी बताइएको थियो। यो सुनेपछि राजालाई मायाको विषयमा जान्ने इच्छा भयो र उनले प्रश्न गरे। अन्तरिक्षले माया अनिर्वचनीय भएकाले त्यसको स्वरूप नबताई संसाररूप कार्यको वर्णन गरी त्यसैद्वारा मायाको प्रतिपादन गरेका छन्। मायाको स्वरूप एवं कार्यको विषयमा वेदान्त शास्त्रमा धेरै विमर्श भएको छ। आफ्नै अधिष्ठानलाई ढाकी आफ्नो साम्राज्य चलाउने यो अविद्याको विलक्षण स्वभावको लक्षण गर्दै नैष्कर्म्यसिद्धिकार सुरेश्वराचार्यले भन्नुभएको छ– **ऐकात्म्याप्रतिपत्तिर्या स्वात्मानुभवसंश्रया, साविद्या संसृतेर्बीजं तन्नाशो मुक्तिरात्मनः** अर्थात् अविद्या भनेको ऐकात्म्य अर्थात् जीव र परमात्माको एकात्मतालाई अप्रतिपत्ति अर्थात् नबुझ्नु हो। यो ज्ञानस्वरूप आत्मामा आश्रित रहन्छ र यही अविद्या नै संसारको मूल कारण हो भने अज्ञान नाश हुनु नै मुक्ति हो।

अविद्यालाई सत् अनि असत् दुबै रूपले बताउन नसकिने भएकाले यो अनिर्वचनीय हो। त्यसकारण मायाको विषयमा वेदान्तका आचार्यहरूको यो उक्ति प्रसिद्ध छ– **असत् चेन्न प्रतीयेत, सत् चेन्न बाध्येत** अर्थात् यदि अविद्या सत् हुन्थ्यो भने ज्ञानपछि यसको बाध हुनु नपर्ने। नभएको वस्तुको मात्र ज्ञानद्वारा बाध हुन्छ। भएको वस्तुलाई त ज्ञानले झन् सिद्ध गर्दछ, बाधित गर्न सक्दैन। त्यसकारण ज्ञानद्वारा हट्ने भएकाले अविद्या सत् वस्तु होइन। फेरि यसलाई असत् भन्न पनि मिल्दैन, किनभने असत् पदार्थको त प्रतीति नै हुँदैन। अविद्याले त यत्रो संसारको प्रतीति गराएको छ भने यो असत् हुन सक्दैन। असत् वस्तुले कसैलाई दुःख पनि त दिँदैन। यसले त अनादि कालदेखि जीवलाई संसारबन्धनमा पारी दुःख दिइरहेको छ भने त्यो असत्‌रूप पनि हुन सक्दैन। यसरी सत् पनि भन्न नमिल्ने अनि पूरा असत् पनि भन्न नमिल्ने यो अविद्या अनिर्वचनीय हो। सत् झैँ देखिने र असत् झैँ बाधित हुने भएकाले अविद्यालाई अनिर्वचनीय भनिएको हो।

अविद्याको विषयमा विचार गर्दा यसको आश्रय के हो र यसले कसलाई विषय गर्दछ भन्ने जान्नु पनि आवश्यक छ। वेदान्तसिद्धान्तमा मुख्यतया अविद्यालाई ब्रह्ममा नै आश्रित रहेको अनि ब्रह्मलाई नै विषय गर्ने भन्ने मानिन्छ। कुनै आचार्यहरूले ब्रह्ममा अज्ञानको सम्बन्ध देखाउँदा आपत्ति आउला कि भन्ने विचारले अविद्या ब्रह्ममा आश्रित रहन्छ र यसले जीवलाई विषय गर्दछ भनी मान्दछन्, तर अविद्याले जीवलाई विषय गर्नु सम्भव छैन, किनभने जीव अविद्याद्वारा कल्पित भएको रूप हो, यो जीव अनादि अविद्याको आश्रय-विषय केही हुन सक्दैन। त्यसकारण

सर्वज्ञात्म मुनि भन्नुहुन्छ— **आश्रयत्वविषयत्वभागिनी निर्विभागचितिरेव केवला** अर्थात् अखण्ड चित् नै अविद्याको आश्रय अनि यसको विषय पनि हो। जहाँ ब्रह्मभन्दा दोस्रो कुनै वस्तु नै छैन भने ब्रह्ममा कल्पित भएको अविद्याको आश्रय अनि विषय पनि ब्रह्म नै हुनुमा केही आपत्ति नै छैन, किनभने अविद्यासँग सम्बन्धित बनाउन सकिने अर्को कुन चाहिँ दोस्रो वस्तु छ र ? त्यसैले भगवत्पाद शङ्कराचार्य भन्नुहुन्छ— **सर्वाविद्याकृतसंव्यवहाराणां पर एवात्मा आस्पदम्** अर्थात् सबैथरी अविद्याद्वारा कल्पित भएका व्यवहारहरूको एक मात्र आश्रय एवं विषय ब्रह्म मात्र हो।

अविद्याले ब्रह्मलाई नै आश्रय एवं ब्रह्मलाई नै विषय बनाएको छ भनेर बुझाउनका लागि ब्रह्मका स्वरूपभूत गुणहरूको भेद गरिएको छ। अनि ब्रह्ममा अंशांशीभाव नभए पनि जिज्ञासुहरूलाई बुझाउनका लागि अंशको कल्पना गरिएको छ। ती अंश हुन्— सत्, चित्, आनन्द र अद्वितीय। प्राणीहरूलाई प्रतिदिन के अनुभवमा आएको छ भने, म सत् छु र म केही जान्दछु। यसरी आत्माका स्वरूपभूत सत् एवं चित् अंशको प्रतीति प्राणीहरूलाई सधैँ भइरहेको हुन्छ। यसको अर्थ अविद्या अर्थात् मायाबाट आत्माको सत् एवं चित् अंश ढाकिएको छैन भन्ने हो। स्वयं अविद्या सत्तायुक्त हुन र प्रकाशित हुन पनि ब्रह्मको सत् र चित् अंश ढाकिएको हुनु हुँदैन, निरावृत्त रूपमा प्रकट भएकै हुनुपर्दछ। यसरी ब्रह्मको सत् अंश र चित् अंशको आधारमा अविद्या टिकेकाले यसलाई त्यही दुई अंशमा आश्रित भनिएको छ। जो जहाँ आश्रित हुन्छ, त्यसले त्यहाँ केही बिगार्न सक्दैन। अविद्या पनि ब्रह्मको सत् एवं चित् अंशमा आश्रित भएकाले त्यसले ब्रह्मको सत्-चित् अंशलाई ढाक्न सकेको छैन, आनन्द अंश मात्र ढाकिएको हुन्छ। यसैले प्राणीले आत्मालाई सत् एवं चित्रूपमा जानिरहेकै छ। यहाँ के शङ्का हुन्छ भने प्राणीले आत्मालाई जानिरहेकै भए अविद्या कसरी हुन सक्थ्यो ? किनभने अविद्या त ज्ञानद्वारा निवृत्त हुने वस्तु हो। यसको उत्तर के हो भने आत्मालाई सामान्यतः जानेर मात्र त्यसको अज्ञान नष्ट हुँदैन, यसका लागि आत्मालाई विशेष रूपमा जान्नुपर्दछ। आत्मालाई सामान्यतः कर्ता-भोक्ता आदिको रूपमा त सबै प्राणीले जानिरहेकै छन्, तर तिनीहरूको अज्ञान नष्ट भएको छैन। आत्मालाई विशेषतः जान्न यसको आनन्दरूपता र अद्वितीयतालाई पनि अपरोक्ष रूपमा बुझ्नुपर्दछ, तब मात्र उपनिषद्ले बताए अनुसार आत्माको यथार्थज्ञान हुन सक्दछ। जुनसुकै वस्तुमा पनि भ्रमज्ञान हुन सामान्य अंशलाई जानेको र विशेष अंशलाई नजानेको हुनुपर्दछ। सामान्य अंश भनेको आधार भाग हो अनि विशेष अंश भनेको चाहिँ अधिष्ठान भाग हो। सिपीमा चाँदी देख्दा त्यहाँ सिपीको सामान्य अंशको ज्ञान र विशेष अंशको अज्ञान भएको हुन्छ। चमचम चम्किलो हुनु सिपीको सामान्य अंश या आधारभाग हो। त्यही चमककै सादृश्यका कारणले मात्र सिपीमा चाँदीको भ्रम हुन सम्भव हुँदैन। पृष्ठभागमा नील वर्णको हुने अनि त्रिकोणको आकार हुने आदि चाहिँ सिपीका विशेष अंश या अधिष्ठान भाग हुन्। यसलाई नजान्नाले नै सिपीमा चाँदीको भ्रम भएको छ। यसै गरी आत्मामा पनि सत् र चित् अंश आधार हिस्सा हुन् भने आनन्द र अद्वितीय अंश अधिष्ठान हिस्सा हुन्। अधिष्ठान अंशलाई नजानी सामान्यतः आधार अंशलाई मात्र जानेकाले आत्मामा पनि कर्तृत्व, भोक्तृत्व र प्रमातृत्वको भ्रम भएको छ। भ्रम हटाउन अधिष्ठानको ज्ञान आवश्यक हुन्छ। त्यसैले आत्मामा कल्पित भएको यो कर्तृत्व आदिको भ्रम हटाउन आनन्द र अद्वितीय रूपमा

आत्मालाई बुझ्नै पर्दछ। यसरी आत्मतत्त्वको यथार्थ ज्ञानद्वारा अविद्या या माया पूर्णतः निवृत्त हुन्छ भने अविद्या हटिसकेपछि त्यसका कार्य भएका कर्तृत्व आदि पनि स्वतः नै हट्दछन्।

अविद्याका मुख्य दुई कार्यहरू रहेका छन्। एउटा भएको वस्तुलाई ढाकिदिने अनि अर्को चाहिँ नभएको वस्तुलाई प्रतीत गराइदिने। यसैले अविद्याका आवरण एवं विक्षेप दुई शक्ति रहेका छन् भनिएको छ। अविद्याको आवरण शक्तिले ब्रह्मतत्त्वलाई ढाकिदिन्छ अनि विक्षेप शक्तिले चाहिँ त्यसमा अविद्याको स्थूल-सूक्ष्म सम्पूर्ण ब्रह्माण्डलाई उत्पन्न गरिदिन्छ। आवरण शक्तिको काम अग्रहण हो भने विक्षेप शक्तिको काम चाहिँ अन्यथाग्रहण हो। सुषुप्तिकालमा ब्रह्मतत्त्वको अग्रहण अर्थात् अज्ञान मात्र हुन्छ भने जाग्रत् र स्वप्नमा चाहिँ अन्यथाग्रहण अर्थात् अरू बाहिरी स्थूल-सूक्ष्म पदार्थहरूको पनि ग्रहण हुन्छ। तुरीय अवस्थामा चाहिँ अज्ञानका यी दुबै वृत्तिहरू हुँदैनन्। त्यसैले माण्डूक्यकारिकामा भनिएको छ— **विपर्यासे तयोः क्षीणे तुरीयं पदमश्नुते** (१।१५) अर्थात् अविद्याका दुई भ्रम अग्रहण र अन्यथाग्रहण दुबै क्षीण भएपछि मात्र तुरीय स्थिति प्राप्त हुन्छ। यसप्रकार कार्यसहित अविद्याको नाश नगरीकन यथार्थ आत्मस्थिति प्राप्त हुँदैन।

वेदान्तमा अविद्यालाई तीन दृष्टिले हेरिन्छ। एउटा श्रौतदृष्टि, अर्को यौक्तिक दृष्टि अनि अर्को चाहिँ लौकिक दृष्टि। आत्मज्ञ महापुरुष र वेदले बताउने दृष्टिलाई श्रौतदृष्टि भनिएको छ। यस दृष्टिमा अविद्या हुँदै नभएको वस्तु हो। डोरीमा बाधित भइसकेको सर्पलाई सर्पको रूपमा बताउनु र आत्मामा हुँदै नभएको अविद्यालाई नाम मात्रले बताउनु बराबर छन्। त्यसैले ज्ञानीहरूको दृष्टिमा अविद्या तुच्छ अर्थात् असत् नै हो। यौक्तिक दृष्टि भनेको चाहिँ अरू मुमुक्षु एवं विचारकहरूको युक्तिघटित दृष्टि हो। यिनीहरूका लागि अविद्या अनिर्वचनीय हुन्छ। अविद्या प्रतीत हुन्छ त्यसकारण यसलाई पूर्णतः असत् भन्न पनि मिल्दैन र पूर्णतः बाधित हुने हुनाले यसलाई सत् पनि भन्न मिल्दैन। यसरी विचारकहरू अविद्यालाई सत् र असत् दुबै रूपले निर्वचन गर्न नसकिने भएकाले अनिर्वचनीय मान्दछन्। अर्का लौकिक व्यक्तिहरूको दृष्टिमा चाहिँ अविद्या वास्तविक नै हो। यसप्रकार आत्मज्ञानीहरूको दृष्टिले हेर्ने हो भने अविद्या एवं त्यसको कार्य जगत् हुँदै नभएको सिद्ध हुन्छ। अनि विचारकहरूको दृष्टिमा झट्ट हेर्दा सत्य झैँ प्रतीत भए पनि अनिर्वचनीय रूपमा सिद्ध हुन्छ। अविद्यालाई वास्तविक मान्ने व्यक्तिले त अविद्याको स्वरूप अलिकति पनि बुझेको हुँदैन, त्यसैले त्यो शास्त्रीय नभई लौकिक दृष्टिको अनुवाद मात्र हो।

**एवं सृष्टानि भूतानि प्रविष्टः पञ्चधातुभिः।**
**एकधा दशधात्मानं विभजञ्जुषते गुणान्॥ ४॥**

**पदार्थ—**
**एवं** = यसरी
**पञ्चधातुभिः** = पञ्चमहाभूतद्वारा
**सृष्टानि** = सृष्टि गरिएका
**भूतानि** = मनुष्य आदिको शरीरमा
**प्रविष्टः** = प्रवेश गरेको आदिपुरुषले
**एकधा** = एक (मन) रूपमा र
**दशधा** = दश (पाँच ज्ञानेन्द्रिय तथा पाँच कर्मेन्द्रिय) रूपमा
**आत्मानं** = आफूलाई
**विभजन्** = विभाग गरेर
**गुणान्** = विषयहरूलाई
**जुषते** = भोग गर्दछ

**वाक्यार्थ–** यसरी पञ्चमहाभूतको आधारमा रचना गरिएका मनुष्य आदि विविध शरीरमा अन्तर्यामीरूपले प्रवेश गरेर मन र इन्द्रियको रूपमा आफैँलाई विभाग गरी त्यो आदिपुरुषले विविध विषयको भोग गर्दछ।

**गुणैर्गुणान् स भुञ्जान आत्मप्रद्योतितैः प्रभुः।**

**मन्यमान इदं सृष्टमात्मानमिह सज्जते॥ ५॥**

| पदार्थ– | **गुणैः** = इन्द्रियहरूद्वारा | **आत्मानं** = आत्माको रूपमा |
|---|---|---|
| **सः** = त्यो | **गुणान्** = विषयहरूलाई | **मन्यमानः** = मानेर |
| **प्रभुः** = देहमा अभिमान गर्ने जीव नै | **भुञ्जानः** = भोग गर्दै | **इह** = यो शरीरमा नै |
| **आत्मप्रद्योतितैः** = अन्तर्यामी चेतनद्वारा रचना गरिएका | **इदं** = यो | **सज्जते** = आसक्त हुन्छ |
| | **सृष्टं** = रचना गरेको शरीर आदिलाई | |

**वाक्यार्थ–** त्यो देहमा अभिमान गर्ने जीव नै अन्तर्यामीद्वारा रचना गरिएका इन्द्रियहरूद्वारा विषयहरूको भोग गर्दै यो शरीरलाई नै आत्मा मानेर यसमा आसक्त हुन्छ।

**कर्माणि कर्मभिः कुर्वन् सनिमित्तानि देहभृत्।**

**तत्तत् कर्मफलं गृह्णन् भ्रमतीह सुखेतरम्॥ ६॥**

| पदार्थ– | **कुर्वन्** = गर्दै | **देहभृत्** = यो देहधारी जीवात्मा |
|---|---|---|
| **कर्मभिः** = कर्मेन्द्रियहरूद्वारा | **सुखेतरं** = सुख र दुःख रूप | **इह** = यस संसारमा |
| **सनिमित्तानि** = पछि फल प्राप्त हुने | **तत्तत् कर्मफलं** = ती-ती कर्मका फलहरूलाई | **भ्रमति** = घुम्दछ |
| **कर्माणि** = कर्महरू | **गृह्णन्** = भोग गर्दै | |

**वाक्यार्थ–** कर्मेन्द्रियद्वारा पछि फल मिल्ने कर्महरू गर्ने यो देहधारी जीव शुभकर्मको फल सुख र अशुभकर्मको फल दुःखलाई भोग्दै संसारमा घुम्दछ।

**इत्थं कर्मगतीर्गच्छन् बह्वभद्रवहाः पुमान्।**

**आभूतसम्प्लवात् सर्गप्रलयावश्नुतेऽवशः॥ ७॥**

| पदार्थ– | **कर्मगतीः** = कर्मको फलस्वरूप विविध योनिमा | **पुमान्** = जीवात्मा |
|---|---|---|
| **इत्थं** = यसरी | **गच्छन्** = घुम्दै | **आभूतसम्प्लवात्** = प्रलयसम्म |
| **बह्वभद्रवहाः** = अनेक दुःखले युक्त भएको | **अवशः** = कर्मको अधीन भएर | **सर्गप्रलयौ** = जन्म र मृत्युको |
| | | **अश्नुते** = भोग गर्दछ |

**वाक्यार्थ–** यसरी अनेक दुःखले युक्त भएका विविध योनिमा घुम्दै कर्मको अधीन भएर

जीवात्मा प्रलयसम्म जन्म र मृत्युको बारम्बार भोग गर्दछ।

**धातूपप्लव आसन्ने व्यक्तं द्रव्यगुणात्मकम्।**
**अनादिनिधनः कालो ह्यव्यक्तायापकर्षति ॥ ८ ॥**

**पदार्थ–**
**अनादिनिधनः** = आदि र अन्तरहित
**कालः** = कालले
**हि** = निश्चय नै
**धातूपप्लवे** = महाभूत प्रलयको समय
**आसन्ने** = नजिक आएपछि
**द्रव्यगुणात्मकं** = स्थूल र सूक्ष्मरूप
**व्यक्तं** = कार्यलाई
**अव्यक्ताय** = कारणतर्फ
**अपकर्षति** = धकेल्दछ

**वाक्यार्थ–** आदि र अन्तरहित जो काल छ, त्यसले पञ्चमहाभूतको प्रलयको समयमा स्थूल र सूक्ष्मरूप कार्यलाई कारणतर्फ धकेल्दछ।

**शतवर्षा ह्यनावृष्टिर्भविष्यत्युल्बणा भुवि।**
**तत्कालोपचितोष्णार्को लोकांस्त्रीन् प्रतपिष्यति ॥ ९ ॥**

**पदार्थ–**
**भुवि** = पृथिवीमा
**शतवर्षा** = सय वर्षसम्म
**उल्बणा** = अति असह्य
**अनावृष्टिः** = खडेरी
**भविष्यति** = पर्नेछ
**तत्कालोपचितोष्णार्कः** = त्यस समय प्रचण्ड तापयुक्त सूर्यले
**त्रीन्** = तीनै
**लोकान्** = लोकलाई
**हि** = निश्चय नै
**प्रतपिष्यति** = सुकाउनेछ

**वाक्यार्थ–** त्यस बखतमा पृथिवीमा सय वर्षसम्म असह्य खडेरी पर्नेछ र खडेरीको वेला तात्तिएका सूर्यले तीनै लोकलाई सुकाउनेछ।

**पातालतलमारभ्य सङ्कर्षणमुखानलः।**
**दहन्नूर्ध्वशिखो विष्वग् वर्धते वायुनेरितः ॥ १० ॥**

**पदार्थ–**
**ऊर्ध्वशिखः** = माथितिर ज्वाला उठेको
**वायुना** = हावाद्वारा
**ईरितः** = प्रेरित गरिएको
**सङ्कर्षणमुखानलः** = शङ्कर्षण (शेषनाग) को मुखबाट निस्किएको आगो
**पातालतलं** = पातालदेखि
**आरभ्य** = सुरु गरेर
**विष्वक्** = यो सारा ब्रह्माण्ड
**दहन्** = जलाउँदै
**वर्धते** = अगाडि बढ्नेछ

**वाक्यार्थ–** शङ्कर्षण (शेषनाग)को मुखबाट निस्किएको माथितिर ज्वाला फर्किएको र हावाले दन्किएको अग्नि पातालदेखि सुरु गरेर चारैतर्फ सारा ब्रह्माण्डलाई जलाउँदै अगाडि बढ्नेछ।

**सांवर्तको मेघगणो वर्षति स्म शतं समाः।**
**धाराभिर्हस्तिहस्ताभिर्लीयते सलिले विराट्॥ ११॥**

**पदार्थ—**
**सांवर्तकः** = सांवर्तक नामको प्रलयकालीन
**मेघगणः** = बादलको समूहले
**हस्तिहस्ताभिः** = हात्तीको सुँडसमान ठुला-ठुला
**धाराभिः** = धाराहरू बनी
**शतं समाः** = सय वर्षसम्म
**वर्षति स्म** = बर्सनेछ र
**विराट्** = यो सारा ब्रह्माण्ड
**सलिले** = पानीमा
**लीयते** = लीन हुनेछ

**वाक्यार्थ—** सांवर्तक नामको प्रलयकालीन बादलले सय वर्षसम्म हात्तीका सुँड जस्ता जलधाराको वर्षा गर्नेछ र यो सारा ब्रह्माण्ड पानीमा डुबेर लीन हुनेछ।

**ततो विराजमुत्सृज्य वैराजः पुरुषो नृप।**
**अव्यक्तं विशते सूक्ष्मं निरिन्धन इवानलः॥ १२॥**

**पदार्थ—**
**नृप** = हे राजा निमि
**ततः** = त्यसपछि (ब्रह्माण्ड लीन भएपछि)
**वैराजः** = ब्रह्माण्डमा रहने
**पुरुषः** = समष्टि जीव ब्रह्मा
**निरिन्धनः** = दाउरा (इन्धन) नभएको
**अनलः इव** = आगो झैँ
**विराजं** = ब्रह्माण्डलाई
**उत्सृज्य** = छाडेर
**सूक्ष्मं** = सूक्ष्म
**अव्यक्तं** = कारणमा
**विशते** = लीन हुन्छन्

**वाक्यार्थ—** हे राजा निमि ! यसरी ब्रह्माण्ड पानीमा लीन भएपछि ब्रह्माण्डमा रहने समष्टि जीव ब्रह्मा पनि ब्रह्माण्डलाई छाडेर दाउरा नभएको आगो झैँ सूक्ष्म कारणमा प्रवेश गर्नेछन्।

**वायुना हृतगन्धा भूः सलिलत्वाय कल्पते।**
**सलिलं तद्धृतरसं ज्योतिष्ट्वायोपकल्पते॥ १३॥**

**पदार्थ—**
**वायुना** = प्रलयकालीन वायुद्वारा
**हृतगन्धा** = गन्ध गुण हरण गरिएकी
**भूः** = पृथिवी
**सलिलत्वाय** = जलको रूपमा
**कल्पते** = रहन्छिन्
**तद्धृतरसं** = वायुले रस गुणलाई हटाइदिएपछि
**सलिलं** = पानी पनि
**ज्योतिष्ट्वाय** = तेजको रूपमा
**उपकल्पते** = रहन्छ

**वाक्यार्थ—** प्रलयकालीन वायुले गन्धलाई हरण गरिदिएपछि पृथिवी जलमा लीन हुन्छ र त्यही वायुले जलको रसगुणलाई पनि हरण गरिदिएपछि जल फेरि तेजमा लीन हुन्छ।

**हृतरूपं तु तमसा वायौ ज्योतिः प्रलीयते।**
**हृतस्पर्शोऽवकाशेन वायुर्नभसि लीयते॥ १४॥**

**पदार्थ–**
**तमसा** = प्रलयकालीन घोर अन्धकारद्वारा
**हृतरूपं** = रूप हटाइएको
**ज्योतिः तु** = तेज
**वायौ** = वायुमा
**प्रलीयते** = लीन हुन्छ
**अवकाशेन** = आकाशद्वारा
**हृतस्पर्शः** = स्पर्श हटाइएको
**वायुः** = हावा
**नभसि** = आकाशमा
**लीयते** = लीन हुन्छ

**वाक्यार्थ–** प्रलयकालीन घोर अन्धकारद्वारा रूप हटाइएपछि तेज वायुमा लीन हुन्छ। आकाशद्वारा स्पर्श हटाइएपछि त्यो वायु पनि आकाशमा लीन हुन्छ।

**कालात्मना हृतगुणं नभ आत्मनि लीयते।**
**इन्द्रियाणि मनो बुद्धिः सह वैकारिकैर्नृप।**
**प्रविशन्ति ह्यहङ्कारं स्वगुणैरहमात्मनि॥ १५॥**

**पदार्थ–**
**कालात्मना** = कालस्वरूप ईश्वरद्वारा
**हृतगुणं** = शब्दरूप गुणलाई हटाइदिएपछि
**नभः** = आकाश
**आत्मनि** = तामस अहङ्कारमा
**लीयते** = लीन हुन्छ
**नृप** = हे राजा निमि
**इन्द्रियाणि** = इन्द्रियहरू र
**बुद्धिः** = बुद्धि पनि
**अहङ्कारं** = राजस अहङ्कारमा
**प्रविशन्ति** = लीन हुन्छ
**हि** = निश्चय नै
**मनः** = मन
**वैकारिकैः सह** = सात्त्विक अहङ्कारबाट उत्पन्न भएका देवताहरू सहित सात्त्विक अहङ्कारमै लीन हुन्छ र
**स्वगुणैः** = आफ्ना तीन प्रकारका कार्यसहित
**अहं** = अहङ्कार पनि
**आत्मनि** = आत्मामा लीन हुन्छ

**वाक्यार्थ–** कालस्वरूप ईश्वरले शब्दगुणलाई हटाइदिएपछि आकाश पनि तामस अहङ्कारमा लीन हुन्छ। त्यसपछि इन्द्रियहरू र बुद्धि पनि राजस अहङ्कारमा लीन हुन्छन्। सात्त्विकबाट उत्पन्न देवताहरूसहित मन सात्त्विक अहङ्कारमा लीन हुन्छ। अहङ्कार महत्तत्त्वमा लीन हुन्छ, महत्तत्त्व प्रकृतिमा लीन हुन्छ र प्रकृति ब्रह्ममा लीन हुन्छ।

**एषा माया भगवतः सर्गस्थित्यन्तकारिणी।**
**त्रिवर्णा वर्णितास्माभिः किं भूयः श्रोतुमिच्छसि॥ १६॥**

**पदार्थ–**
**एषा** = यो
**सर्गस्थित्यन्तकारिणी** = संसारको सृष्टि, पालन र संहार गर्ने
**त्रिवर्णा** = सत्त्व, रज र तमोगुणले युक्त भएकी
**भगवतः** = भगवान्की
**माया** = मायाशक्ति हो (जो)
**अस्माभिः** = हामीहरूद्वारा
**वर्णिता** = वर्णन गरियो
**भूयः** = फेरि
**किं** = के
**श्रोतुं** = सुन्न
**इच्छसि** = चाहनुहुन्छ

**वाक्यार्थ–** यो संसारको सृष्टि, पालन र संहार गर्ने तीन गुण भएकी भगवान् विष्णुकी माया शक्ति हो। जसको हामीहरूले वर्णन गर्‍यौं। अब तपाईं फेरि के सुन्न चाहनुहुन्छ ?

**विवरण—** यहाँ प्रपञ्चरूप कार्यका आधारमा मायाको निरूपण गरिएको छ। अविद्या भनेकै निरूपण गर्न नसकिने विषय हो र यसो हुनु अविद्याका लागि दूषण नभई भूषण नै हो। तर पनि मायाको विषयमा जिज्ञासा गरिरहेका राजालाई माया बुझाउनका लागि त्यसको कार्य संसारभ्रमको व्याख्या गरिएको छ। माया कुनै त्यस्तो भएको वस्तु होइन, जसको स्वरूपको विषयमा चिन्तन गर्नुपरोस्। कुनै पनि रूपले उपपन्न नहुनु नै मायाको विशेषता हो, त्यसैले यसलाई माया भनिएको हो। उपपन्न हुने वस्तु भएको भए यो माया नभई यथार्थ नै भइहाल्थ्यो नि। पूर्वपक्षीहरूले के सोच्दछन् भने माया कुनै भएको वस्तु हो अनि यसको स्वरूपको निर्णय हुनुपर्दछ, तर शास्त्रले मायाको स्वरूपको होइन, ब्रह्मस्वरूपको निर्णय गर्दछ। अनादि जगत्भ्रमको कारण के हो ? भन्ने प्रश्न उठ्दा माया हो भनेर बताइदिएको मात्र हो। यदि अद्वितीय ब्रह्ममा जगत्को अनेकता प्रतीति गराउने कुनै कारणतत्त्व नमान्ने हो भने यो भेदको सिद्धि हुन सक्दैन। अनि यो भेदको कारण भएको तत्त्वलाई वास्तविक मान्ने हो भने परमतत्त्वको अद्वितीयता र अखण्डनीयतामा हानि आउँछ। त्यसैले ब्रह्ममा जगत्को भेदलाई प्रतीत गराउने कुनै यस्तो वस्तु मान्नुपर्दछ, जो स्वयं कल्पित भए तापनि जगत्भ्रमलाई वास्तविक रूपमा देखाउन सकोस्। यस्तै वस्तुको नाम माया हो। अद्वितीय ब्रह्मतत्त्वमा जगत्का अनेक भेदको कल्पना गरिदिनु र ब्रह्मभन्दा अरु तिनलाई नै यथार्थ रूपमा प्रतीत गराइदिनु मयाको विलक्षण कार्य हो। त्यसैले श्लोकमा मायाद्वारा सहित हुनुभएका भूतात्मा अर्थात् सम्पूर्ण प्राणीहरूका कारण परमात्माले अनेक पदार्थहरूको रचना गर्नुभयो भनी बताइएको छ। मायाद्वारा जगत्सृष्टि गर्नुको प्रयोजन बताउँदै भनिएको छ— **स्वमात्रात्मप्रसिद्धये**। यहाँ **स्व** भनेर जीवात्मालाई लिनुपर्दछ। तिनीहरूको **मात्रा** अर्थात् विषयभोग सिद्ध गराउन अनि **आत्मा** अर्थात् मोक्ष सिद्ध गराउन मायाद्वारा जगत्को रचना भएको हो। अनेक भोगवासनाले युक्त भइरहेका प्राणीका अनादि संस्कारहरू विषयभोगद्वारा मात्र नष्ट हुन सक्छन्। संसारमा जन्मिई विषयभोग गर्दा अनन्त दुःख पाएको अनुभव गर्दै गएपछि बिस्तारै तिनीहरूका भोगवासनाहरू क्षीण हुन्छन् र तिनीहरू मोक्षका अधिकारी बन्दछन्। यसरी पहिला विषयभोग गराई वैराग्य उत्पन्न गराएर पछि मोक्ष दिलाउनका लागि नै जगत्को रचना भएको हो भन्ने थाहा हुन्छ। यस्तो जगत्भ्रमको रचना गर्ने कारण नै माया हो। त्यसैले अन्तरिक्ष नामका योगीश्वरले मायाको उपदेश गर्दै अन्तमा भनेका छन्— **एषा माया भगवतः सर्गस्थित्यन्तकारिणी** अर्थात् संसारको सृष्टि, स्थिति र प्रलय गर्ने यही नै भगवान्को माया हो।

**राजोवाच** (राजा निमिले भने)

**यथैतामैश्वरीं मायां दुस्तरामकृतात्मभिः।**
**तरन्त्यञ्जः स्थूलधियो महर्ष इदमुच्यताम्॥ १७॥**

**पदार्थ—**
**महर्षे** = हे महर्षि
**अकृतात्मभिः** = आफ्नो मनलाई वशमा राख्न नसकेकाहरूद्वारा
**दुस्तरां** = पार पाउन नसकिने
**ऐश्वरीं** = भगवान्की
**एताम् मायां** = यी मायालाई
**स्थूलधियः** = मन्दबुद्धि भएका व्यक्तिहरूले पनि

**यथा** = जसरी
**अञ्जः** = सजिलैसँग
**तरन्ति** = तर्न सक्छन्
**इदं** = यस्तो उपाय
**उच्यताम्** = बताउनुहोस्

**वाक्यार्थ–** हे महर्षि ! आफ्नो मनलाई वशमा राख्न नसकेकाहरूद्वारा तर्न नसकिने भगवान्‌की मायालाई मन्दबुद्धि भएका व्यक्तिहरूले पनि जुन उपायले तर्न सक्छन् त्यो साधन बताउनुहोस्।

**प्रबुद्ध उवाच** (योगीश्वर प्रबुद्धले भने)

**कर्माण्यारभमाणानां दुःखहत्यै सुखाय च।**
**पश्येत् पाकविपर्यासं मिथुनीचारिणां नृणाम्॥ १८॥**

**पदार्थ–**
**दुःखहत्यै** = दुःखनाश गर्न र
**सुखाय च** = सुखप्राप्तिको लागि पनि
**कर्माणि** = कर्महरू
**आरभमाणानां** = गरिरहेका
**मिथुनीचारिणां** = स्त्री र पुरुषका रूपमा जोडी भएर बसेका
**नृणां** = मानिसहरूलाई
**पाकविपर्यासं** = विपरीत फल प्राप्त भएको कुरा
**पश्येत्** = विचार गरोस्

**वाक्यार्थ–** स्त्रीपुरुषको रूपमा जोडी भएर बसेका मानिसहरूले दुःखको नाश र सुखको प्राप्तिका लागि विविध कर्महरू गरिरहेका हुन्छन्, तर त्यसबाट उनीहरूलाई दुःख नै प्राप्त भइरहेको छ। यो कुरा सबैले विचार गर्नुपर्दछ।

**नित्यार्तिदेन वित्तेन दुर्लभेनात्ममृत्युना।**
**गृहापत्याप्तपशुभिः का प्रीतिः साधितैश्चलैः॥ १९॥**

**पदार्थ–**
**नित्यार्तिदेन** = सधैँ कष्ट दिने
**दुर्लभेन** = दुःखले पाइने
**आत्ममृत्युना** = आफ्नो मृत्युको कारण पनि बन्न सक्ने
**वित्तेन** = धनसम्पत्तिद्वारा
**साधितैः** = सिद्ध गरिएका
**चलैः** = विनाशशील
**गृहापत्याप्तपशुभिः** = घर, पुत्र, बन्धुबान्धव र पशुहरूद्वारा
**का** = के
**प्रीतिः** = सुख होला र

**वाक्यार्थ–** सधैँ कष्ट दिने, कमाउन पनि अति श्रम गर्नुपर्ने र आत्माको लागि मृत्युस्वरूप भएको धनसम्पत्तिद्वारा सिद्ध गरिएको विनाशशील घर, पुत्र, बन्धुबान्धव र पशुहरूद्वारा के सुख होला र ?

**एवं लोकं परं विद्यान्नश्वरं कर्मनिर्मितम्।**
**सतुल्यातिशयध्वंसं यथा मण्डलवर्तिनाम्॥ २०॥**

**पदार्थ–**
**यथा** = जसरी
**मण्डलवर्तिनां** = सामन्ती राजाहरूको राज्य आदि ऐश्वर्य
**कर्मनिर्मितं** = कर्मद्वारा आर्जन गरिएको
**नश्वरं** = विनाशी र
**सतुल्यातिशयध्वंसं** = बराबरी हुँदा सङ्घर्षयुक्त, धेरै हुँदा डाहा हुने तथा विनाशी हुँदा शोकयुक्त हुन्छ
**एवं** = यसै गरी

**परं लोकं** = परलोक पनि (कर्मद्वारा अर्जिएको विनाशी, सङ्घर्ष, डाह र शोकयुक्त छ भनी)
**विद्यात्** = जानोस्

**वाक्यार्थ–** जसरी सामन्तीहरूको राज्य आदि ऐश्वर्य कर्मद्वारा आर्जन गरिएको, विनाशी तथा अरूसँग बराबरी हुँदा सङ्घर्ष गर्नुपर्ने, धेरै हुँदा डाहा हुने र विनाश हुँदा शोक गर्नुपर्ने हुन्छ, त्यसै गरी परलोक पनि त्यस्तै कार्यद्वारा आर्जन गरिएको, विनाशशील, सङ्घर्ष, डाहा र शोकयुक्त छ भनेर जान्नू।

**तस्माद् गुरुं प्रपद्येत जिज्ञासुः श्रेय उत्तमम्।**
**शाब्दे परे च निष्णातं ब्रह्मण्युपशमाश्रयम्॥ २१॥**

**पदार्थ–**
**तस्मात्** = त्यसैले
**उत्तमं** = परम
**श्रेयः** = कल्याणलाई
**जिज्ञासुः** = चाहने व्यक्ति
**शाब्दे** = शब्दब्रह्ममा र
**परे ब्रह्मणि च** = परब्रह्ममा पनि
**निष्णातं** = निपुण भएको तत्त्वज्ञानी तथा
**उपशमाश्रयं** = रागद्वेष आदिले रहित
**गुरुं** = गुरुको
**प्रपद्येत** = शरणमा जाओस्

**वाक्यार्थ–** त्यसैले जो परम कल्याण चाहन्छ, त्यस्तो व्यक्ति शब्दब्रह्म र परब्रह्ममा निपुण भएको तत्त्वज्ञानी र रागद्वेष आदिले रहित भएका गुरुको शरणमा जाओस्।

**तत्र भागवतान् धर्मान् शिक्षेद् गुर्वात्मदैवतः।**
**अमाययानुवृत्त्या यैस्तुष्येदात्मात्मदो हरिः॥ २२॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ (गुरुको नजिकमा)
**गुर्वात्मदैवतः** = गुरुलाई आत्मासमान र देवतासमान मानेर
**अमायया** = छलकपटरहित
**अनुवृत्त्या** = सेवाद्वारा
**भागवतान्** = भगवान्लाई प्राप्त गर्ने
**धर्मान्** = उपासना आदि धर्महरू
**शिक्षेत्** = सिकोस्
**यैः** = जुन भागवत धर्मद्वारा
**आत्मा** = सबैको आत्मस्वरूप र
**आत्मदः** = भक्तहरूलाई आत्मस्वरूपको ज्ञान गराइदिने
**हरिः** = भगवान् श्रीहरि
**तुष्येत्** = खुसी हुनुहुन्छ

**वाक्यार्थ–** त्यसरी गुरुको नजिकमा गई गुरुलाई आत्मासमान प्यारो र देवतासमान पूज्य ठानेर छलकपट नगरीकन सेवा गरोस् र भगवान्लाई प्रसन्न पार्ने धर्महरू सिकोस्, जुन धर्मद्वारा सर्वान्तिर्यामी र सबैलाई ज्ञान दिने भगवान् श्रीहरि प्रसन्न हुनुहुनेछ।

**सर्वतो मनसोऽसङ्गमादौ सङ्गं च साधुषु।**
**दयां मैत्रीं प्रश्रयं च भूतेष्वद्धा यथोचितम्॥ २३॥**

**पदार्थ–**
**आदौ** = पहिले (गुरुबाट)
**सर्वतः** = सबै कुराहरूमा
**मनसः** = मनको
**असङ्गं** = अनासक्ति
(त्यसपछि)
**साधुषु** = भगवान्का भक्तहरूमा
**सङ्गं च** = सङ्गत गर्ने कुरा
**भूतेषु** = प्राणीहरूमा
**यथोचितं** = यथायोग्य
**दयां** = दया
**मैत्रीं** = मित्रता र
**प्रश्रयं च** = विनय पनि
**अद्धा** = निष्कपट रूपले
(सिक्नुपर्दछ)

**वाक्यार्थ–** सर्वप्रथम गुरुबाट सबै कुराहरूमा मनको अनासक्ति, साधुहरूको सङ्गत, प्राणीहरूमा यथायोग्य दया, मित्रता र विनयशीलता आदि सिक्नुपर्दछ।

**शौचं तपस्तितिक्षां च मौनं स्वाध्यायमार्जवम्।**
**ब्रह्मचर्यमहिंसां च समत्वं द्वन्द्वसंज्ञयोः॥ २४॥**

**पदार्थ–**
**शौचं** = शुद्धता
**तपः** = नियमनिष्ठता
**तितिक्षां च** = सहनशीलता
**मौनं** = मौनता
**स्वाध्यायं** = स्वाध्याय (अधिकार अनुसार वेद आदिको अध्ययन)
**आर्जवं** = अकुटिलता
**ब्रह्मचर्यम्** = ब्रह्मचर्यमा रहने नियम
**अहिंसां** = हिंसा नगर्नु आदि र
**द्वन्द्वसंज्ञयोः** = सुख-दुःख आदि द्वन्द्वमा
**समत्वं च** = बराबर हुने कुरा
(सिक्नुपर्दछ)

**वाक्यार्थ–** त्यसपछि गुरुबाट शुद्धता, नियमनिष्ठता, सहनशीलता, मौनता, स्वाध्याय, अकुटिलता, ब्रह्मचर्य, अहिंसा र सुख-दुःख आदि द्वन्द्वमा पनि समता आदि सिक्नुपर्दछ।

**सर्वत्रात्मेश्वरान्वीक्षां कैवल्यमनिकेतताम्।**
**विविक्तचीरवसनं सन्तोषं येन केनचित्॥ २५॥**

**पदार्थ–**
**सर्वत्र** = सम्पूर्ण प्राणीहरूमा
**आत्मेश्वरान्वीक्षां** = आत्मरूपले हेर्ने र सबैमा ईश्वरको दर्शन गर्ने
**कैवल्यं** = एकान्तनिवास
**अनिकेततां** = घरपरिवारमा अभिमानशून्यता
**विविक्तचीरवसनं** = पवित्र वस्त्र पहिरिने
**येन केनचित्** = जे मिल्छ, त्यसबाट
**सन्तोषम्** = सन्तोष गर्न सिक्नुपर्दछ

**वाक्यार्थ–** सबै प्राणीहरूलाई आत्मरूपले हेर्ने र सबैमा ईश्वरको दर्शन गर्ने, एकान्त निवास गर्ने, घरपरिवारमा अभिमान नगर्ने, पवित्र वस्त्रहरू धारण गर्ने र प्रारब्ध अनुसार जे मिल्छ, त्यसैमा सन्तोष गर्ने आदि कुरा गुरुबाट सिक्नुपर्दछ।

**श्रद्धां भागवते शास्त्रेऽनिन्दामन्यत्र चापि हि।**
**मनोवाक्कर्मदण्डं च सत्यं शमदमावपि॥ २६॥**

**पदार्थ–**
**भागवते** = भगवद्विषयक
**शास्त्रे** = शास्त्रमा

**श्रद्धां** = श्रद्धा
**अन्यत्र च** = अरू ग्रन्थमा
**अपि** = पनि
**अनिन्दाम्** = निन्दा नगर्ने
**हि** = निश्चय नै
**मनोवाक्कर्मदण्डं** = मन, वचन र कर्मलाई तत् तत् उपायद्वारा नियमन गर्ने
**सत्यं च** = सत्य बोल्ने र
**शमदमौ अपि** = शम (मनको नियन्त्रण) दम (बाह्य इन्द्रियको नियन्त्रण) गर्ने कुराहरू पनि गुरुबाट सिक्नुपर्छ

**वाक्यार्थ–** भगवद्विषयक शास्त्रमा श्रद्धा गर्ने, अरू शास्त्रहरूको निन्दा नगर्ने, मन, वचन र कर्मलाई नियमन गर्ने, मन र इन्द्रिय आदिको निग्रह गर्ने आदि कुराहरू पनि गुरुबाट सिक्नुपर्छ।

**श्रवणं कीर्तनं ध्यानं हरेरद्भुतकर्मणः।**
**जन्मकर्मगुणानां च तदर्थेऽखिलचेष्टितम्॥ २७॥**

**पदार्थ–**
**अद्भुतकर्मणः** = अद्भुत कर्म गर्ने
**हरेः** = भगवान् श्रीहरिको
**जन्मकर्मगुणानां च** = अवतार लीला र गुणहरूको
**श्रवणं** = श्रवण गर्ने
**कीर्तनं** = नामसङ्कीर्तन गर्ने
**ध्यानं** = भगवान्को ध्यान गर्ने
**तदर्थे** = उहाँकै उपासनामा
**अखिलचेष्टितम्** = सारा चेष्टाहरू लगाउने (आदि कुरा पनि गुरुबाट सिक्नुपर्छ)

**वाक्यार्थ–** अद्भुत कर्मवाला भगवान् श्रीहरिको अवतार, लीलाकथा र गुणहरूको श्रवण गर्ने, नाम सङ्कीर्तन गर्ने, भगवान्को ध्यान गर्ने र आफ्ना सारा चेष्टाहरू भगवान्कै उपासनामा लगाइदिने कुरा पनि गुरुबाट सिक्नुपर्छ।

**इष्टं दत्तं तपो जप्तं वृत्तं यच्चात्मनः प्रियम्।**
**दारान् सुतान् गृहान् प्राणान् यत् परस्मै निवेदनम्॥ २८॥**

**पदार्थ–**
**इष्टं** = वैदिक यज्ञलाई
**दत्तं** = दानलाई
**तपः** = तपस्यालाई
**जप्तं** = मन्त्रजपलाई
**वृत्तं च** = सदाचारलाई र
**यत्** = जो
**आत्मनः** = आफूलाई
**प्रियं** = प्यारो लाग्ने कुरा छ त्यसलाई, साथै
**दारान्** = स्त्रीलाई
**सुतान्** = पुत्रहरूलाई
**गृहान्** = घरलाई
**प्राणान्** = प्राणलाई
**यत्** = जो
**परस्मै** = परमात्मामा
**निवेदनम्** = निवेदन गर्ने (कुरा छ, यी कुराहरू पनि गुरुबाट सिक्नुपर्छ)

**वाक्यार्थ–** वैदिक यज्ञलाई, लिएको दानलाई, गरेको तपस्यालाई, जपेको जपलाई, सदाचारलाई र जो आफूलाई मन परेको कुरा छ, त्यसलाई साथै स्त्री, पुत्र, घर र प्राणलाई समेत परमात्मामा निवेदन गर्न गुरुबाट सिक्नुपर्छ।

**एवं कृष्णात्मनाथेषु मनुष्येषु च सौहृदम्।**
**परिचर्यां चोभयत्र महत्सु नृषु साधुषु ॥ २९ ॥**

**पदार्थ–**
**एवं** = यसै गरी
**कृष्णात्मनाथेषु** = श्रीकृष्णलाई नै प्राणनाथ मान्ने
**मनुष्येषु** = मनुष्यहरूमा
**सौहृदं** = अत्यन्त स्नेह
**उभयत्र च** = स्थावर र जङ्गम प्राणीहरूमा पनि
**परिचर्यां** = पूजा
**नृषु** = सामान्य मनुष्यहरूमा
**साधुषु** = सज्जनहरूमा र
**महत्सु च** = पूज्य व्यक्ति (भगवान्का भक्तहरू)मा पनि (सेवा र पूजा गर्न गुरुबाट सिक्नुपर्छ)

**वाक्यार्थ–** यसै गरी श्रीकृष्णलाई नै प्राणनाथ मान्ने भक्तहरूमा स्नेह गर्न, स्थावर र जङ्गम स्वरूप प्राणीहरूलाई पूजा गर्न र अन्य सामान्य मनुष्य, सज्जन र भगवान्का परम भक्तहरूको सेवा तथा सम्मान गर्न पनि गुरुबाट सिक्नुपर्छ।

**परस्परानुकथनं पावनं भगवद्यशः।**
**मिथो रतिर्मिथस्तुष्टिर्निवृत्तिर्मिथ आत्मनः ॥ ३० ॥**

**पदार्थ–**
**पावनं** = अत्यन्त पवित्र
**भगवद्यशः** = भगवान्को कीर्तिलाई
**परस्परानुकथनं** = आपसमा भन्ने सुन्ने गर्ने
**मिथः** = आपसमा
**रतिः** = प्रेम गर्ने
**मिथः** = परस्परमा
**तुष्टिः** = सन्तुष्ट रहने
**मिथः** = आपसमा (भगवान्को गुणकीर्तनले)
**आत्मनः** = मनलाई
**निवृत्तिः** = संसारबाट निवृत्त गराउने कुरा (पनि गुरुबाट सिक्नुपर्छ)

**वाक्यार्थ–** पवित्र भगवान्को कीर्तिलाई भक्तहरूको बिच आपसमा भन्ने-सुन्ने, आपसमा प्रेम गर्ने र सन्तोषले रहने, सबै मिलेर भगवान्को गुणकीर्तनले मनलाई पनि संसारबाट निवृत्त गराउने आदि कुरा पनि गुरुबाट सिक्नुपर्छ।

**स्मरन्तः स्मारयन्तश्च मिथोऽघौघहरं हरिम्।**
**भक्त्या सञ्जातया भक्त्या बिभ्रत्युत्पुलकां तनुम् ॥ ३१ ॥**

**पदार्थ–**
**भक्त्या** = (श्रवण आदि नौ प्रकारका) भक्तिद्वारा
**सञ्जातया** = उत्पन्न भएको
**भक्त्या** = प्रेमरूपा भक्तिद्वारा
**अघौघहरं** = पापको समूहलाई नाश गरिदिने
**हरिम्** = भगवान् श्रीहरिलाई
**स्मरन्तः** = आफूले स्मरण गर्दै र
**मिथः च** = आपसमा अरू अरूलाई पनि
**स्मारयन्तः** = स्मरण गराउँदै
**उत्पुलकां** = रोमाञ्चयुक्त
**तनुं** = शरीरलाई
**बिभ्रति** = धारण गर्नू

**वाक्यार्थ–** यसरी श्रवण आदि नौ प्रकारको भक्तिले उत्पन्न भएको प्रेमरूपा भक्तिद्वारा भक्तहरूको पापसमूहका नाशक भगवान् श्रीहरिलाई सम्झँदै र आपसमा अरूलाई पनि सम्झाउँदै यस्तो भक्ति गर्नू र रोमाञ्चयुक्त शरीरलाई धारण गरिरहनू।

**क्वचिद् रुदन्त्यच्युतचिन्तया क्वचिद्धसन्ति नन्दन्ति वदन्त्यलौकिकाः।**
**नृत्यन्ति गायन्त्यनुशीलयन्त्यजं भवन्ति तूष्णीं परमेत्य निर्वृताः॥ ३२॥**

**पदार्थ–**
**अलौकिकाः** = लौकिक मानिसभन्दा बेग्लै भएका भगवान्का भक्तहरू
**क्वचित्** = कहिले
**अच्युतचिन्तया** = भगवान् कहिले प्राप्त हुनुहुन्छ भनेर भगवान्को चिन्तनले
**रुदन्ति** = रुन्छन्
**क्वचित्** = कहिले
**हसन्ति** = हाँस्छन्
**नन्दन्ति** = प्रशंसा गर्दछन्
**वदन्ति** = कराएर भगवान्को नाम उच्चारण गर्छन्
**नृत्यन्ति** = नाच्छन्
**गायन्ति** = भगवान्को गान गर्दछन्
**अजं** = भगवान्लाई
**अनुशीलयन्ति** = लुकेको ठाउँमा खोजे झैं गर्दछन्
**परं** = परमात्मालाई
**एत्य** = पाएर
**निर्वृताः** = आनन्दमा मग्न भएर
**तूष्णीं** = चुपचाप
**भवन्ति** = बस्दछन्

**वाक्यार्थ–** लौकिक मानिसभन्दा बेग्लै भएका भगवान्का भक्तहरू कहिलेकाहीं भगवान्प्राप्तिको चिन्ताले रुन्छन्, कहिले हाँस्छन्, कहिले भगवान्को प्रशंसा गर्छन्, कहिले कराएर भगवान्को नाम उच्चारण गर्छन्, कहिले नाच्छन्, कहिले भगवान्को गान गर्छन्, कहिले भगवान्लाई खोजे झैं गर्छन् र कहिले भगवान्लाई पाएर आनन्दमा मग्न भई चुपचाप बस्छन्।

**इति भागवतान् धर्मान् शिक्षन् भक्त्या तदुत्थया।**
**नारायणपरो मायामञ्जस्तरति दुस्तराम्॥ ३३॥**

**पदार्थ–**
**इति** = यसरी
**भागवतान्** = भागवत
**धर्मान्** = धर्महरूलाई
**शिक्षन्** = सिक्दै
**नारायणपरः** = भगवान्को शरणमा आश्रित भएको व्यक्तिले
**तदुत्थया** = भागवत धर्मको आचरणबाट उत्पन्न भएको
**भक्त्या** = प्रेमरूपा भक्तिद्वारा
**दुस्तरां** = तर्न नसकिने
**मायां** = मायालाई
**अञ्जः** = सजिलैसँग
**तरति** = पार गर्दछ

**वाक्यार्थ–** यसरी भागवत धर्मलाई सिक्दै भगवत्परायण भएको व्यक्तिले भागवत धर्मको आचरणबाट उत्पन्न प्रेमरूपा भक्तिद्वारा तर्न कठिन मायालाई सजिलैसँग पार गर्दछ।

**विवरण–** माथिको प्रसङ्गमा मायालाई कसरी तर्न सकिन्छ भनी यसका उपायहरू बताइएका छन्। यहाँ सत्त्वगुणी अनेक साधनहरूको विषयमा बताइएको छ, तर सबैको मूल साधन भनेको नारायणपरायण हुनु नै हो। **नारायणपरः** यो शब्दको अर्थ हुन्छ, जो व्यक्ति भगवान्को शरणमा

पूर्णतः आश्रित भएको छ। सम्पूर्ण रूपमा परमात्मामा समर्पित भइसकेको व्यक्तिले सम्पूर्ण शास्त्रीय साधनहरूको अनुसरण स्वतः नै गरिरहेको हुन्छ। त्यसका लागि उसले छुट्टाछुट्टै साधनाको अवलम्बन गर्नुपर्दैन किनभने **यतो हरिर्विजयः श्रीर्गुणास्ततः** अर्थात् जहाँ हरि भगवान् हुनुहुन्छ त्यहीँ नै विजय, ऐश्वर्य र सम्पूर्ण गुणहरू पनि रहन्छन्। यसरी यहाँ बताइएका सम्पूर्ण सद्गुणहरू ईश्वर शरणागतिकै अधीनमा छन् र यही कारणले नै यहाँ सम्पूर्ण साधनहरूको अन्तमा नारायणपरायणतालाई बताइएको छ। जसले आफ्ना मन एवं इन्द्रियलाई पूर्णतः परमात्मामा अर्पण गरिसकेको छ त्यसभित्र पाप, वासना या दुर्भाव जाग्नै सक्दैन। यसैले भगवान्को भक्तको मन उसको नभई भगवान्को अधीनमा भइसकेकाले उसले पाप गर्नै सक्दैन। जब उसबाट दुराचरण हुँदैन तब जीवनभरि उसले अन्तर्यामी परमात्माको प्रेरणाद्वारा सत्कर्म मात्र गरिरहन्छ। तपस्या, स्वाध्याय, ब्रह्मचर्य, अहिंसा, एकान्तवास, सन्तोष आदि सम्पूर्ण सत्साधनहरू स्वतः नै उसको जीवनका अङ्ग बन्छन्। त्यसैले यस्तो व्यक्ति नै मायाबाट पार तर्न समर्थ हुन्छ भनिएको छ।

शास्त्रमा मायालाई परमात्माको शक्तिरूप पनि मानिन्छ। यो परमात्माको शक्ति हो भन्ने विषयमा उपनिषद् प्रमाणले बताएका छ— **परास्य शक्तिर्विविधैव श्रूयते** अर्थात् यो आत्माका अनेक शक्तिहरू छन्। अतः परमात्माको शक्तिरूप मायालाई हटाउन परमात्माको शरणमा नै जानुपर्छ। त्यसैले यहाँ नारायणको शरणमा जानेले मात्र मायालाई तर्न सक्दछ भनिएको छ। परमात्माको आन्तरिक स्वरूपलाई उहाँको बाहिरी तेज एवं शक्तिको चमकले ढाकिदिएको छ। यद्यपि स्वयं परमात्मा मायाशक्तिद्वारा ढाकिएको हुनुहुन्न, तर अल्पशक्ति भएको जीवले त्यो प्रचण्ड शक्तिलाई भेदन गर्न नसक्ने हुनाले उसका लागि परमात्मा मायाशक्तिद्वारा ढाकिनुभएको प्रतीत हुनुहुन्छ। जबसम्म निरावरण रूपमा परमात्माको दर्शन हुँदैन तबसम्म उहाँको यथार्थज्ञान हुनै सक्दैन। त्यसैले प्राणीले मायाद्वारा युक्त हुनुभएका परमात्माको यथार्थरूपलाई जान्न माया हटाउनका लागि परमात्मासँग नै प्रार्थना गर्दछ। उपास्य परमात्मासँग उहाँको प्रचण्ड शक्ति हटाई आफ्नो शान्त स्वरूप प्रकट गर्नका लागि प्रार्थना गरिएको प्रसङ्ग ईशावास्योपनिषद् (१५)मा आउँछ। त्यहाँ उपासक भन्दछन्— **हिरण्मयेन पात्रेण सत्यस्यापिहितं मुखम्, तत् त्वं पूषन्नपावृणु सत्यधर्माय दृष्टये** अर्थात् हे सूर्यमण्डलाभिमानी हिरण्यगर्भ ! ज्योतिर्मय सुनौलो तेजोमण्डलको कारणले हजुरको आन्तरिक सत् स्वरूप ढाकिएको छ, यसलाई हजुरले हटाइदिनुहोस् ता कि म त्यस्तो सत्यदृष्टिलाई पाउन सकूँ। यसबाट के सिद्ध हुन्छ भने परमात्माको कृपाबाट मायाशक्ति हटेपछि मात्र उहाँको यथार्थ स्वरूपको दर्शन सम्भव छ। यही दृष्टिले यहाँ मायालाई तर्नका लागि भगवत्परायण हुनुपर्ने उपदेश गरिएको हो।

नारद भक्तिसूत्र (३।१३)मा पनि **कस्तरति कस्तरति मायां** अर्थात् मायालाई कसले तर्दछ ? भन्ने प्रश्न उठाउँदै जसले सङ्गको त्याग गर्दछ, जसले महापुरुषको सेवा गर्दछ, एकान्तवास गर्दछ र कर्मफलको त्याग गर्दछ भनी अनेक उपायहरू बताइएको छ। त्यसपछि अन्त्यमा त्यहाँ लोक-वेद सबैको बन्धनलाई छाडी पूर्णतः परमात्माको शरणमा गई अविच्छिन्न प्रेमले युक्त हुने शरणागत भक्तले नै मायालाई तर्दछ र उसले संसारैलाई पनि तार्न सक्दछ भन्ने निर्णय गरिएको छ— **वेदानपि संन्यस्यति केवलमविच्छिन्नानुरागं लभते स तरति स तरति लोकाँस्तारयति** (नारदभक्तिसूत्र

३।१६) अर्थात् वेदका विधिनिषेधका वाक्यहरूलाई पनि अतिक्रमण गर्दछ, केवल अखण्ड अनुरागलाई पाउँदछ र यस्तै व्यक्ति आफू पनि मायाबाट तरी संसारैलाई पनि तार्न सक्दछ। यसप्रकार अनेक साधनहरूमध्ये सर्वस्व त्यागी परमात्माको शरणमा प्रेमपूर्वक जानु नै माया तर्ने प्रमुख साधन हो भन्ने पुष्टि हुन्छ।

यस श्लोकमा मायालाई **दुस्तरा** भनिएको छ। यसको अर्थ भगवान्मा समर्पित नभएका व्यक्तिहरूले मायालाई तर्न सक्दैनन् भन्ने हुन्छ। अध्यात्मरामायणमा पनि भगवद्भक्तिले रहित भएका व्यक्तिहरूले पदार्थ तत्त्वको ज्ञान प्राप्त गर्न र मायालाई तर्न सक्दैनन् भनिएको छ। त्यहाँ भक्ति भनेको दियो हो, माया भनेको रात हो अनि ज्ञान भनेको दृष्टिशक्ति हो भन्दै जसले दियोद्वारा रातको अन्धकारलाई नष्ट गरेको छ, त्यसले मात्र देख्न सके जैँ भक्तिद्वारा अन्धकारमय माया हटेपछि विवेक ज्ञानरूपी दृष्टिले यथार्थवस्तुलाई देख्न सक्दछ भनिएको छ। भक्तिविनाको ज्ञान अन्धकारको आँखासमान हो। भनिएको छ– **किन्त्वेतत् दुर्लभं मन्ये मद्भक्तिविमुखात्मनाम्, चक्षुष्मतामपि तथा रात्रौ सम्यङ् न दृश्यते, परं दीपसमेतानां दृश्यते सम्यगेव हि** (अध्यात्मरामायण) अर्थात् यो स्वरूपभूत ज्ञान मेरो भक्तिले रहित भएकाहरूलाई दुर्लभ छ। जसरी रात्रिको अँध्यारोमा आँखा भएकाहरूले पनि राम्रोसँग देख्न सक्दैनन्, तर दीयोको उज्यालोमा चाहिँ सबै स्पष्टतः देखिन्छ। यसरी मायालाई नष्ट गर्न परमात्मशरणागति अनिवार्य छ।

**राजोवाच** (राजा निमिले भने)

**नारायणाभिधानस्य ब्रह्मणः परमात्मनः।**
**निष्ठामर्हथ नो वक्तुं यूयं हि ब्रह्मवित्तमाः॥ ३४॥**

**पदार्थ–**
**ब्रह्मवित्तमाः** = ब्रह्मज्ञानीमा श्रेष्ठ
**यूयं** = हजुरहरूले
**नारायणाभिधानस्य** = नारायणनामक
**परमात्मनः** = परमात्मस्वरूप
**ब्रह्मणः** = ब्रह्मको
**निष्ठां** = स्वरूप
**नः** = हामीहरूलाई
**हि** = निश्चय नै
**वक्तुं** = बताउन
**अर्हथ** = योग्य हुनुहुन्छ

**वाक्यार्थ–** नारायणनामले चिनिने परब्रह्म परमात्माको स्वरूप हामीहरूलाई बताउनुहोस् किनभने त्यस विषयमा बताउन हजुरहरू योग्य हुनुहुन्छ।

**पिप्पलायन उवाच** (पिप्पलायनले भने)

**स्थित्युद्भवप्रलयहेतुरहेतुरस्य**
**यत् स्वप्नजागरसुषुप्तिषु सद् बहिश्च।**
**देहेन्द्रियासुहृदयानि चरन्ति येन**
**सञ्जीवितानि तदवेहि परं नरेन्द्र॥ ३५॥**

**पदार्थ–**
**नरेन्द्र** = हे राजा निमि
**यत्** = जो
**अस्य** = यो जगत्को
**स्थित्युद्भवप्रलयहेतुः** = उत्पत्ति, स्थिति र लयको कारण छ साथै
**अहेतुः** = आफैँ कारणरहित छ
**स्वप्नजागरसुषुप्तिषु** = स्वप्न, जाग्रत् र सुषुप्ति अवस्थामा र
**बहिः च** = समाधि अवस्थामा पनि
**सत्** = सत्‌रूपले विद्यमान छ
**देहेन्द्रियासुहृदयानि** = शरीर, इन्द्रिय, प्राण र अन्तःकरणहरू
**येन** = जुन तत्त्वद्वारा
**सञ्जीवितानि** = चेतन बनेर
**चरन्ति** = आ-आफ्नो व्यापार गरिरहेका छन्
**तत्** = त्यही वस्तुलाई नै
**परं** = परम सत्य वस्तु भनेर
**अवेहि** = जान

**वाक्यार्थ–** हे राजा निमि ! जुन वस्तु आफू स्वयं अकारण भएर पनि यो संसारको उत्पत्ति, स्थिति र प्रलयको कारण छ, जुन वस्तु जाग्रत्, स्वप्न, सुषुप्ति र समाधिमा सत्‌रूपले रहन्छ, जुन तत्त्वले शरीर, इन्द्रिय, प्राण र अन्तःकरणलाई चेतन बनाएर आ-आफ्नो कर्ममा प्रवृत्त गराइरहेको छ, त्यही तत्त्व नै परम सत्य वस्तु हो भनेर जान।

**विवरण–** यस प्रसङ्गमा पिप्पलायनले राजा निमिलाई नारायणतत्त्वको उपदेश गरेका छन्। यो भन्दा अघिल्लो प्रसङ्गमा **नारायणपरः** अर्थात् नारायणको शरणमा गएको व्यक्तिले नै मायालाई तर्न सक्दछ भनी प्रबुद्धले उपदेश गरेका थिए। त्यो सुनिसकेपछि नारायणको स्वरूप के होला भनी निमिलाई जान्ने इच्छा भयो। उनले नारायणको साकार स्वरूपको विषयमा नभई उहाँको वास्तविक स्वरूप जान्न चाहे। राजाले योगीश्वरहरूलाई ब्रह्मज्ञानीहरूमध्ये सर्वश्रेष्ठ भनी आदर गरेका छन्। नारायणको वास्तविक स्वरूप बताउन यस्ता ज्ञानीहरू नै समर्थ हुन्छन् भन्ने उनको दृढभाव अनि योगीश्वरहरूप्रतिको उनको श्रद्धा पनि यसबाट व्यक्त भएको छ। उक्त प्रश्नको उत्तर दिँदै पिप्पलायनले राजा निमिलाई नारायणतत्त्व वास्तवमा ब्रह्मतत्त्व नै भएको बताएका छन्। तैत्तिरीयोपनिषद्मा ब्रह्मको विषयमा बताउँदा यसलाई सम्पूर्ण जगत्को उत्पत्ति, स्थिति र लयको कारण अनि स्वरूपतः सत्, चित् र आनन्दस्वरूप भनी बताइएको छ। जगत्को कारणको रूपमा ब्रह्मलाई बताउनु तटस्थ लक्षण हो भने सत्, चित्, आनन्दरूपमा ब्रह्मलाई बताउनु ब्रह्मको स्वरूप लक्षण हो। जुन विशेषता या धर्म लक्ष्यमा सधैँ बस्दैन, त्यसैद्वारा त्यो वस्तुको लक्षण गर्नु तटस्थ लक्षण हो। ब्रह्ममा प्रलय, मुक्त आदि अवस्थामा जगत्को सृष्टि आदि विशेषता रहँदैन, तापनि जगत्को सृष्टि अरू कसैले गर्न नसक्ने हुनाले यो ब्रह्मको तटस्थ लक्षण हो। त्यसै गरी ब्रह्ममा सत्ता, चित्ता र आनन्दरूपता सधैँ रहने हुनाले यो चाहिँ ब्रह्मको स्वरूप लक्षण हो। उपनिषद्को यही प्रक्रियालाई अपनाई पिप्पलायनले यहाँ राजा निमिलाई नारायणतत्त्वको उपदेश गरेका छन्। यो पहिलो श्लोकमा नारायणतत्त्वको तटस्थ लक्षण बताइएको छ।

जगत्को उत्पत्ति कसले गर्‍यो होला भनेर खोजी गर्दै जाँदा अन्तमा सर्वशक्तिमान् चेतन सत्ताको शरणमा पुग्नुपर्ने हुन्छ। आफ्नै शरीरका अङ्गहरूलाई भनेअनुसार चलाउन नसक्ने अनि यहीँ भएका वस्तुहरूलाई पनि पूरा जान्न नसक्ने अल्पज्ञ एवं अल्पशक्तिमान् जीवले जगत्को सृष्टि गर्न सक्दैन। त्यसैले पुष्पदन्ताचार्यले **अनीशो वा कुर्यात् भुवनजनने कः परिकरः** (शिवमहिम्नस्तोत्र ६) अर्थात् थोरै सामर्थ्यले युक्त भएको कुन चाहिँ जीवले जगत्सृष्टिको प्रयास गर्न सक्दछ र ? भनेका छन्। कुनै पनि वस्तुको रचना गर्न त्यसका कारणको विषयमा अपरोक्ष ज्ञान आवश्यक हुन्छ।

**उपादानगोचरापरोक्षज्ञानचिकीर्षाकृतिमत्त्वं कर्तृत्वम्** अर्थात् उपादान कारणको अपरोक्ष ज्ञान, त्यो कार्य रचना गर्ने इच्छा र तदनुकूल प्रयत्न भएको व्यक्ति मात्र कर्ता हुन सक्दछ। जस्तै कुमालेले घैंटो बनाउँदा उसलाई त्यसको उपादान कारणको विषयमा पूरा ज्ञान भएको हुन्छ। कस्तो माटोबाट घैंटो बन्दछ, अनि कस्तो माटोबाट घैंटो बन्दैन भनी थाहा नै नपाएको व्यक्तिले कसरी घैंटो बनाउन सक्दछ ? त्यसै गरी कुमालेमा घैंटो बनाउने इच्छा पनि छ, अनि त्यसका लागि आवश्यक हुने सार्थक प्रयत्न पनि छ, त्यसैले त्यसले घैंटो बनाउन सक्दछ। जगत्को रचना गर्न पनि यसका उपादान कारणलाई अपरोक्षरूपले जान्नु आवश्यक हुन्छ। यो अल्पशक्तिमान् प्राणीको वशको कुरा होइन, उत्पन्न भइसकेको जगत् त यति अनन्त एवं विविधतापूर्ण छ कि त्यसको पूर्ण ज्ञान गर्न सकिँदैन भने जगत्को उत्पत्ति अघि यो उपादानबाट यो कार्य जन्मिन्छ भनी जान्नु प्राणीहरूका लागि असम्भव छ। त्यसैले जगत्को सृष्टिकर्ता कुनै सर्वशक्तिमान् एवं सर्वज्ञ चेतन छ भनी मान्नुपर्दछ। भगवान्को लक्षण गर्दा पनि सम्पूर्ण संसारको उत्पत्ति-प्रलयलाई जान्ने भनेर उहाँलाई बताइएको छ— **उत्पत्तिं प्रलयं चैव भूतानामगतिं गतिम्, वेत्ति विद्यामविद्यां च स वाच्यो भगवानिति** अर्थात् संसारको उत्पत्ति-प्रलय, प्राणीहरूको जन्म-मृत्यु, अनि विद्या-अविद्यालाई जसले पूरै जान्दछ, त्यही भगवान् हो। यसरी सर्वज्ञ सर्वशक्तिमान् ईश्वर नै जगत्का कर्ता हुनुहुन्छ भन्ने कुरा सिद्ध हुन्छ।

यस श्लोकमा नारायणलाई **स्थित्युद्भवप्रलयहेतु** अर्थात् जगत्को स्थिति, उत्पत्ति र प्रलयका पनि कारण भनिएको छ। यो ब्रह्मको तटस्थ लक्षण हो। **यतो वा इमानि भूतानि जायन्ते, येन जातानि जीवन्ति, यत् प्रयन्त्यभिसंविशन्ति, तद् विजिज्ञासस्व, तद् ब्रह्म** (तैत्तिरीयोपनिषद् ३।१) अर्थात् जहाँबाट सम्पूर्ण प्राणी एवं संसारको उत्पत्ति हुन्छ, जसको कारणले यी सबै वस्तु जीवित रहेका छन् अनि अन्तमा यी सबै जसमा गई लीन हुन्छन्, त्यही ब्रह्म हो भनी वरुणले आफ्नो छोरा भृगुलाई तत्त्वको उपदेश गरेका थिए। केवल परमात्माले मात्र यी सबै काम गर्न सक्ने हुनाले यो परमात्माको लक्षण हो। अरु जगत्को सृष्टि गर्नु, यसको स्थिति गर्नु र अन्तमा संहार गर्नु यी तीन ओटा ब्रह्मका छुट्टाछुट्टै लक्षण हुन् भनिएको पनि पाइन्छ। जगत्को सृष्टि केवल परमात्माबाट मात्र हुन सक्दछ, यति मात्र भनेर परमात्माको लक्षण गर्दा अतिव्याप्ति हुने देखिन्न, त्यसैले यो पृथक् एवं पूर्ण लक्षण हो। त्यसै गरी स्थिति गर्नु अनि प्रलय गर्नु पनि ब्रह्मका पूर्ण लक्षण हुन्। यसरी जगत्को सृष्टि, स्थिति र प्रलयका पनि हेतु भएका परमात्मा स्वयं भने **अहेतुः** अर्थात् हेतुरहित हुनुहुन्छ। उहाँको अर्को कुनै कारण छैन। परमसत्ता भएकाले उहाँको न उत्पत्ति छ, न त नाश नै। यसप्रकार यहाँ नारायण परमात्माको तटस्थ लक्षण गरिएको छ।

परमात्मा संसारका कारण मात्र हुनुहुन्न, अपि तु यसलाई प्रकाशित गर्न प्राणीहरूका इन्द्रियभित्र चेतनरूपले उहाँ नै पस्नुभएको पनि छ। इन्द्रियहरूमा आ-आफ्ना विषयलाई प्रकाशित गर्ने चैतन्य देखिन्छ। कानले शब्दको, चक्षुले रूपको अनि त्वगिन्द्रियले चिसो-तातोको ज्ञान गराइरहेका छन्, तर यिनीहरूमा पृथक् पृथक् चैतन्य भने छैन। यिनले गरेको विषयभोग आत्मामा आइपुगेपछि मात्र सिद्ध हुन्छ। त्यसैले मैले देखेँ, मैले सुनेँ, मैले छोएँ आदि भन्दा सुन्ने, देख्ने, छुने कुरा म अर्थात् आत्मामा पुगेर मात्र प्रकाशित भएको छ। सबै इन्द्रियहरू आत्माकै आधारमा सिद्ध

हुने हुनाले यिनीहरूमा छुट्टै चैतन्य छैन। **येन सञ्जीवितानि** अर्थात् जुन आत्माद्वारा चेतनावान् भएका इन्द्रियहरू **चरन्ति** अर्थात् आ-आफ्ना विषयमा घुम्छन्, त्यही चेतनसत्ता नै आत्मा हो। यसै गरी यहाँ आत्मतत्त्व जाग्रत्, स्वप्न, सुषुप्तिमा अनि ती अवस्थाभन्दा बाहिर पनि रहने बताइएको छ। जाग्रत्, स्वप्न र सुषुप्तिमा रहने अनि ती अवस्थाहरूलाई प्रकाशित गर्ने आत्मतत्त्व हो। यी अवस्थाहरू परस्परमा व्यभिचरित छन्, तर यिनलाई प्रकाशित गर्ने आत्मचैतन्य भने सबैतिर समान छ। जाग्रत् अवस्था भनेको बाहिरी इन्द्रियहरूद्वारा बाहिरी स्थूल पदार्थहरूको भोग भइरहेको अवस्था हो। यी सबै इन्द्रिय अनि तिनका भोगहरूलाई पनि आत्माले नै प्रकाशित गरिरहेको छ। स्वप्न अवस्था भनेको अन्तर इन्द्रियद्वारा वासनामय सूक्ष्म पदार्थहरूको भोग भइरहेको अवस्था हो। यस वेलामा पनि ती सबै भोग आदिलाई आत्माले प्रकाशित गरिरहेको छ। सुषुप्ति अवस्था भनेको चाहिँ स्थूल-सूक्ष्म सबै थरी भोगहरू नभई केवल अज्ञान मात्र रहेको अवस्था हो। यस वेलामा पनि व्यक्ति आफूले केही नजानी ढुक्कसँग सुतिरहेको बोध हुन्छ। त्यसैले सुषुप्ति अवस्थाको प्रकाशकका रूपमा पनि आत्मा सिद्ध छ। मानिस अज्ञानमा परेको हुनाले उसले तीनै अवस्थाहरूमा समान रूपले रहने तुरीय आत्माको अनुभव गर्न सक्दैन, तर विचार गर्दा तीनै अवस्थाहरूलाई एउटै आत्माले निरन्तर प्रकाशित गरिरहेको थाहा पाइन्छ। यसलाई शास्त्रमा **तुरीयं त्रिषु सन्ततम्** अर्थात् तुरीय आत्मतत्त्व तीनै अवस्थाहरूमा अनुस्यूत छ भनी बताइएको छ। मानिस अज्ञानयुक्त भएकाले जाग्रत् अवस्थामा रहँदा उसले यसलाई सत्य ठान्दछ भने स्वप्नमा पुग्ने बित्तिकै त्यही प्रामाणिक हो भनी उसले त्यसैलाई सत्य मान्दछ। तर प्रतिदिनको अनुभवले त परस्परमा व्यभिचरित भइरहेका यी तीनै अवस्थाहरू अनित्य भएको र आत्मा मात्र नित्य भएको सूचना दिइरहेकै छ। अरु आश्चर्यको कुरा के छ भने जाग्रत् अवस्थाको स्थूल शरीर एवं संसारलाई प्रकाशित गरिरहने जुन आत्मा हो, त्यसै आत्माले स्वप्न अवस्थामा स्थूल शरीर रं संसार दुबै नभएको अनि केवल वासनामय सूक्ष्म संसार मात्र भएको व्यवहारलाई प्रकाशित गरिरहेको हुन्छ। अनि त्यही आत्माले सुषुप्ति अवस्थामा स्थूल र सूक्ष्म दुबैथरी संसार नभएको यथार्थलाई प्रकाशित गरिरहेको हुन्छ। यसरी तीन अवस्थाहरूमा स्थूल, सूक्ष्म र कारण संसारको परस्पर अभावलाई आत्माले जानिरहेको देखिन्छ। **बहिः च** अर्थात् तीन अवस्थाभन्दा पर समाधि अवस्थामा एकैपटक तीनै अवस्था र तीनै संसारको अत्यन्त अभाव भएको हुन्छ। यसरी प्रतिक्षण व्यभिचरित भइरहने संसार अनि यसका विभिन्न अवस्थाहरूलाई प्रकाशित गर्ने आत्मा भने नित्य एवं अचल सिद्ध हुन्छ। यसप्रकार यस श्लोकमा परमात्मा नै जगत्को उत्पत्ति, स्थिति आदिको कारण भएको अनि मन, वाणी आदि इन्द्रियभित्र चेतन रूपले प्रवेश गरी संसारका पदार्थहरूलाई प्रकाशित गर्ने र जाग्रत् आदि तीनै अवस्थाहरूलाई प्रकाशित गर्ने पनि आत्मा नै भएको उपदेश गरिएको छ।

**नैतन्मनो विशति वागुत चक्षुरात्मा**
**प्राणेन्द्रियाणि च यथानलमर्चिषः स्वाः।**

**शब्दोऽपि बोधकनिषेधतयात्ममूल-**
**मर्थोक्तमाह यदृते न निषेधसिद्धिः ॥ ३६ ॥**

**पदार्थ–**
**यथा** = जसरी
**अनलं** = आगोलाई
**स्वाः** = आफ्नै
**अर्चिषः** = झिल्काहरूले (प्रकाशित गर्न सक्दैनन्, त्यस्तै)
**एतत्** = यो ब्रह्मतत्त्वलाई
**मनः** = मनले
**न विशति** = ग्रहण गर्न सक्दैन
**वाक्** = वाणीले पनि सक्दैन
**उत** = त्यसै गरी
**चक्षुः** = आँखाले पनि सक्दैन
**आत्मा** = बुद्धि र
**प्राणेन्द्रियाणि च** = प्राण तथा इन्द्रियहरूले पनि सक्दैनन्
**शब्दः अपि** = श्रुतिले पनि
**आत्ममूलं** = आत्माको विषयमा प्रमाण भएर
**बोधकनिषेधतया** = 'नेति नेति' भन्ने निषेध वाक्यले
**अर्थोक्तं** = अर्थद्वारा घुमाएर
**आह** = बताउँछ
**यत्** = जो परम तत्त्व
**ऋते** = विना (निषेधकको अभावमा)
**निषेधसिद्धिः न** = निषेध सिद्ध हुँदैन

**वाक्यार्थ–** जसरी आगोबाटै निस्किएका झिल्काहरूले आगोलाई प्रकाशित गर्न सक्दैनन् त्यसै गरी मन, वाणी, आँखा, बुद्धि, प्राण र अन्य इन्द्रिय आदिले पनि आत्मतत्त्वलाई ग्रहण गर्न सक्दैनन्, आत्माको विषयमा मुख्य प्रमाण भएको श्रुतिले पनि 'नेति नेति' भन्ने निषेध वाक्यद्वारा अर्थ घुमाएर मात्र बताउँछ, वास्तवमा त्यो तत्त्व नहुने भए निषेधकको अभावमा निषेध सिद्ध हुने थिएन।

**विवरण–** यस श्लोकमा परमात्मतत्त्वलाई मन, वाणी आदि कुनै पनि इन्द्रियले प्रकाशित गर्न सक्दैनन् भनी बताइएको छ। अघिल्लो श्लोकमा नारायण परमात्माको स्वरूपलाई **अवेहि** अर्थात् जान भनी पिप्पलायनले राजा निमिलाई उपदेश गरेका थिए। जान भन्नेबित्तिकै परमात्मालाई ज्ञानले विषय गर्ला र परमात्माको स्वयं प्रकाशतामा हानि आउला भन्ने आशङ्का भयो। त्यसको समाधानको रूपमा यहाँ परमात्मतत्त्वलाई कुनै पनि प्रमाणहरूले विषय गर्न नसक्ने बताइएको छ। **अनलं** अर्थात् आगोलाई **अर्चिषः** अर्थात् उसकै झिल्काहरूले प्रकाशित गर्न अनि पोल्न पनि नसके झैं ब्रह्मलाई पनि इन्द्रियहरूले जान्न सक्दैनन् भनी यहाँ आगो र झिल्काको दृष्टान्त दिइएको छ। झिल्का आगोकै एक अंश भएकाले यसले पनि आगोले झैं प्रकाशित गर्ने र उष्णता दिने काम गर्दछ। प्रकाश र उष्णता यी दुई नै आगोको स्वभावगत गुण हुन्। झिल्काले पनि मानिसको शरीरमा पोल्दछ अनि केही न केही रूपमा प्रकाश पनि फिँजाउँछ। यसरी बाहिरका वस्तुहरूलाई पोल्ने र प्रकाशित गर्ने झिल्काले स्वयं आगोलाई भने न पोल्न सक्दछ न त प्रकाशित गर्न नै। आगो झिल्काको मूल हो र आफ्नै मूललाई कसैले पनि प्रकाशित गर्न सक्दैन। ठीक यसै गरी आत्माकै चैतन्यलाई पाएर प्रकाशित भइरहेका इन्द्रिय आदिले पनि आत्मालाई प्रकाशित गर्न या जान्न सक्दैनन्।

आत्मा, मन, वाणी आदि इन्द्रियहरूको विषय होइन भन्ने कुरा केनोपनिषद्मा बताइएको छ। जसद्वारा इन्द्रियहरू आफै प्रकाशित हुन्छन्, त्यसलाई तिनीहरूले प्रकाशित गर्न सम्भव छैन।

**यद् वाचानभ्युदितं येन वागभ्युद्यते** (केनोपनिषद् १।४) अर्थात् जुन तत्त्व वाणीद्वारा वर्णित हुन सक्दैन अनि जसको चैतन्य पाई वाणीले वर्णन गर्न सक्दछ, **यन्मनसा मनुते येनाहुर्मनो मतम्** (केनोपनिषद् १।५) अर्थात् जसलाई मनले मनन गर्न सक्दैन, तर जसको चैतन्य शक्ति पाएर मनले मनन गरिरहेको छ, त्यही परम चेतना नै ब्रह्मतत्त्व हो। कानभित्र श्रवण गर्ने सामर्थ्यको रूपमा, मनभित्र मनन गर्ने सामर्थ्यको रूपमा, वाणीभित्र वर्णन गर्ने सामर्थ्यको रूपमा अनि प्राणभित्र जीवन सामर्थ्यको रूपमा प्रवेश गर्ने परमात्मतत्त्व नै हो, जसका कारण मन, वाणी, कान आदि सबै सिद्ध भएका छन् र आ-आफ्ना काम गर्न सक्दछन्। त्यसैले उपनिषद्मा बताइएको छ– **श्रोत्रस्य श्रोत्रं मनसो मनो यद् वाचो ह वाचं स उ प्राणस्य प्राणः** (केनोपनिषद् १।२) अर्थात् त्यही चेतनतत्त्व कानको पनि कान हो, मनको पनि मन, वाणीको पनि वाणी अनि प्राणको पनि प्राण हो। यसरी सबै इन्द्रियभित्र ती-ती विशेष सामर्थ्यको रूपमा रहने अनि आफ्नो चैतन्यद्वारा ती-ती इन्द्रियहरूलाई प्रेरित गर्ने पनि आत्मतत्त्व नै हो। यसैले इन्द्रियले आत्मालाई प्रकाशित गर्न सक्दैनन्। इन्द्रियहरूले प्रकाशित गर्ने भन्ने बित्तिकै त्यहाँ प्रमाता, प्रमाण र प्रमेयको त्रिपुटी आवश्यक हुन्छ। प्रमाता भनेको अन्तःकरणावच्छिन्न जीवचैतन्य हो, प्रमाण भनेको आत्मप्रतिबिम्बले युक्त अन्तःकरणको वृत्ति हो भने प्रमेय भनेको चाहिँ घट, पट आदि विषयहरू हुन्। कुनै पनि विषयलाई जान्न खोजेपछि जीव प्रमाता भयो, जानिने विषय प्रमेय भयो अनि जेद्वारा जानिने हो, त्यो साधन प्रमाण भयो। यो त्रिपुटीरूपी ज्ञानबाट केवल घट, पट आदि विषयहरूको मात्र प्रकाश हुन सक्छ, किनभने वृत्तिरूप ज्ञानद्वारा न त प्रमाताको नै प्रत्यक्ष हुन सक्दछ न त प्रमाणरूप अन्तःकरण वृत्तिको नै। वास्तवमा वृत्तिरूप ज्ञानको विषय भएको त घैँटो मात्र हो, तर मैले घैँटोलाई जानेँ भन्दा वृत्तिरूप ज्ञानले विषय नगर्ने म अर्थात् प्रमाताको पनि प्रत्यक्ष भइरहेको छ। यो ज्ञान कहाँबाट भयो होला ? भन्ने खोज्दै जाँदा साक्षी आत्माको प्रकाशबाट नै यो बोध भएको थाहा हुन्छ। यसरी जुन आत्माद्वारा स्वयं प्रमाता जीव, प्रमाण, अन्तःकरण र प्रमेय घैँटोको त्रिपुटी नै प्रकाशित छ, त्यसलाई त्यो त्रिपुटीरूप ज्ञानले कसरी प्रकाशित गर्न सक्दछ र ? त्यसैले उपनिषद्मा भनिएको छ– **विज्ञातारमरे केन विजानीयात्** (बृहदारण्यकोपनिषद् २।४।१४) अर्थात् प्रमाता, प्रमाण, प्रमेय आदि सबैलाई सधैँ प्रकाशित गरिरहने अखण्डज्ञानरूप आत्मालाई कुन प्रमाणले जान्न सकिन्छ र ? श्रीधर स्वामी लेख्नुहुन्छ– **तत्तद्वृत्तिप्रकाशकस्य न तत्प्रकाशविषयत्वम्** अर्थात् ती-ती वृत्ति आदिलाई पनि प्रकाशित गर्ने आत्मालाई त्यही वृत्तिरूप ज्ञानकै प्रकाशले विषय गर्न सक्दैनन्, त्यसैले **मनः** अर्थात् मन, **वाक्** अर्थात् वाणी, **चक्षुः** अर्थात् आँखा, **आत्मा** अर्थात् बुद्धि, **प्राणेन्द्रियाणि** अर्थात् प्राण र अन्य अवशिष्ट इन्द्रियहरूले पनि आत्मालाई प्रकाशित गर्न सक्दैनन्। यसरी सबैको प्रकाशक आत्मतत्त्वलाई कुनै पनि प्रमाणले विषय नगर्ने भएकाले यो अप्रमेय हो भन्ने सिद्ध हुन्छ।

यहाँ के शङ्का हुन्छ भने ब्रह्मतत्त्व श्रुतिप्रमाणको विषय त हुनै पर्ने हो। किनभने यदि ब्रह्म श्रुतिप्रमाणको विषय पनि होइन भने त त्यही ब्रह्मकै स्वरूप बताउन प्रवृत्त भएका सारा उपनिषद् आदि शास्त्रहरू अप्रामाणिक हुने भए। अनि ब्रह्मज्ञानका लागि गुरुको शरणमा गई वेदान्तशास्त्रको अध्ययन गर्नु आदि व्यर्थ हुने भए। फेरि ब्रह्मतत्त्वलाई केवल उपनिषद् प्रमाणबाट

मात्र जानिन्छ भन्ने शास्त्रप्रमाण छ। **तं त्वौपनिषदं पुरुषं पृच्छामि** (बृहदारण्यकोपनिषद्, ३।९।२६) यहाँ औपनिषद शब्दको अर्थ **उपनिषदा दृष्टं** अर्थात् उपनिषद् प्रमाणद्वारा जानिने या साक्षात्कार गरिने पुरुष भन्ने हुन्छ। यसरी सम्पूर्ण शास्त्रवचनहरूमा पनि अप्रामाणिकता आउला। त्यसैले प्रत्यक्ष, अनुमान आदि प्रमाणले पत्ता नलगाए पनि ब्रह्मलाई उपनिषद् प्रमाणले त पत्ता लगाउनैपर्दछ भन्ने शङ्का रहेको छ। यसको समाधानको रूपमा यहाँ **शब्दः** अर्थात् वेदवचनले पनि ब्रह्मलाई साक्षात् बताउन सक्दैन भनिएको छ। ब्रह्मलाई शब्दले बताउनु भनेको ब्रह्मको स्वरूप शब्दद्वारा बताउन सकिनु या त्यसद्वारा ब्रह्म प्रकाशित हुनु हो। शब्दबाट प्रकाशित हुनेबित्तिकै त ब्रह्म स्वयंप्रकाश नभई शब्दद्वारा प्रकाश्य भइहाल्यो। अनि त्यस्तो परप्रकाश्य ब्रह्मलाई जान्नु त घैंटो आदिलाई जान्नुसमान भइहाल्यो नि। त्यसैले वेदान्तमा ब्रह्मलाई प्रमाणको अविषय या अवेद्य भनिन्छ। बह्म अवेद्य या शास्त्रप्रमाणको अविषय भएपछि त उपनिषद्हरू पनि अप्रामाणिक हुने भए अनि तिनको अध्ययन आदि गर्नु पनि व्यर्थ हुने भयो नि त भन्ने शङ्का हुँदा ब्रह्मलाई विषय गर्ने या प्रकाशित गर्ने नभई यसको अज्ञानलाई नष्ट गर्न शास्त्रप्रमाणको अनिवार्य आवश्यकता रहने हुनाले त्यो अप्रामाणिक र व्यर्थ नहुने समाधान दिइन्छ। गीताभाष्य (२।१८)मा भगवत्पाद श्रीशङ्कराचार्य लेख्नुहुन्छ— **शास्त्रं तु अन्त्यं प्रमाणं अतद्धर्माध्यारोपणमात्रनिवर्तकत्वेन आत्मनि प्रामाण्यं उपपद्यते न तु अज्ञातार्थज्ञापकत्वेन** अर्थात् परम प्रमाण भएको शास्त्र ब्रह्ममा आरोपित भएका अयथार्थ धर्महरूको निराकरणद्वारा मात्र आत्मा या प्रमाण बन्दछ। अज्ञात अर्थलाई प्रकाशित गर्ने रूपमा होइन। यहाँ बताए अनुसार प्रमाणहरू दुई थरी हुन्छन्— एउटा **अतद्धर्माध्यारोपनिवर्तक** अनि अर्को **अज्ञातार्थज्ञापक**। घैंटो, कपडा आदि विषयहरूलाई प्रकाशित गर्ने प्रमाणलाई अज्ञातार्थज्ञापक प्रमाण भन्दछ। अज्ञात अर्थात् नजानिएका घैंटो आदि अर्थलाई आँखा आदि प्रत्यक्ष प्रमाणले विषय गरी प्रकाशित गर्दछन्। यही नै अज्ञातार्थज्ञापक प्रमाण हो। यसमा प्रमाणले अप्रमेय वस्तुलाई प्रकाशित गरिदिन्छ र यो परप्रकाशक वस्तुहरूको ज्ञान गर्ने प्रक्रिया हो। ब्रह्म त स्वयंप्रकाश ज्ञानस्वरूप भएकाले त्यसलाई अरू कुनै प्रमाणले प्रकाशित गरिरहनु पर्ने आवश्यकता नै छैन। कर्तृत्व, भोक्तृत्व आदि अयथार्थ धर्महरूबाट ढाकिएकाले नजानिए झैं भएको त्यसलाई जान्न ती-ती कल्पित धर्महरूको निषेध गरिदिए मात्र पुग्दछ। उपनिषद्शास्त्रले ब्रह्ममा कल्पित भएका यिनै अयथार्थ धर्महरूलाई निषेध गरिदिन्छ र स्वयंप्रकाश ब्रह्मतत्त्व आफैंमा प्रकाशित हुन्छ। अतद्धर्मको निवृत्ति नगरी आत्माको प्रत्यक्ष नहुने भएकाले आत्मज्ञानमा उपनिषद्शास्त्रको अनिवार्य आवश्यकता हुन्छ र यही अर्थमा यो सर्वश्रेष्ठ प्रमाण भएको हो। प्रत्यक्ष आदि कुनै पनि प्रमाणले आत्मामा आरोपित कर्तृत्व, भोक्तृत्व आदि धर्मको निवृत्ति गराउन सक्दैनन्, तर उपनिषद्प्रमाणले ती सबैलाई निराकरण गरिदिन्छ। त्यसैले यस श्लोकमा **शब्दः** अर्थात् वेदवचनलाई **आत्ममूलम्** अर्थात् आत्माको ज्ञानमा प्रमाण भएको भनी बताइएको छ। ब्रह्मतत्त्व शब्दद्वारा ग्रहण गरेर अपरोक्ष हुने होइन, अपि तु आवरणनिवृत्तिपछि स्वयंमा प्रकाशित हुने हो। यस श्लोकको भाष्यमा वंशीधर लेख्नुहुन्छ— **तज्ज्ञानं तु आवरणनिवृत्तौ स्वप्रकाशतया न तु विषयतया** अर्थात् आवरण निवृत्ति भएपछि स्वयं प्रकाश रूपमा ब्रह्मको ज्ञान हुने हो। शब्दले विषय हुने प्रकाशित गरेर होइन। यसरी स्वयं प्रकाश वस्तुमा आवरणको निवृत्ति

गर्नु नै प्रामाण्य हो र अरू जड विषयहरूमा चाहिँ त्यसलाई प्रकाशित गरिदिनु नै प्रामाण्य हो।

ब्रह्मतत्त्व शब्दको विषय होइन भन्नका लागि श्लोकमा **बोधकविषयतया** भन्ने पद आएको छ। यसको तात्पर्य लेख्दै वंशीधर भन्नुहुन्छ— **ब्रह्मणो वाग्विषयत्वे निषेधकत्वात्** अर्थात् उपनिषद्ले नै ब्रह्मलाई वाणीको विषय होइन भनेको छ। हरेक अर्थलाई शब्दले नै बुझाउँछ, त्यसैले शब्दलाई **बोधक** भनिन्छ। घैँटो भन्ने शब्दले घाँटी सानो भएको अनि पेटतिर ठुलो भई फैलिएको पानी ल्याउने भाँडोलाई बुझाउँछ, त्यसकारणले घैँटो शब्द त्यस वस्तुको बोधक हो। ब्रह्मलाई पनि बुझाउने त्यस्तो कुनै बोधक शब्द छ कि भन्ने शङ्का गर्न सकिँदैन, किनभने ब्रह्म कुनै निश्चित शब्दबाट निश्चित रूपमा परिभाषित गर्न सकिने विषय होइन। वास्तवमा ब्रह्ममा त वाणीको प्रवेश नभई निषेध पो छ। ब्रह्मसम्म वाणीको पहुँच पुग्न सक्दैन भनी उपनिषद्मा बताइएको छ— **यतो वाचो निवर्तन्ते अप्राप्य मनसा सह** (तैत्तिरीयोपनिषद् २।४।१) अर्थात् मनसहितका वाणी ब्रह्मलाई नभेट्टाई फर्किन्छन्। उसो भए उपनिषद्ले कसरी ब्रह्मलाई बुझाउँछ त ? भन्ने प्रश्नको उत्तरमा भनिन्छ— **अर्थोक्तमाह** अर्थात् अर्थतः मात्र वेदले परमात्मालाई बुझाउँछ। अर्थतः बताउनु भन्नुको तात्पर्य निषेध वृत्तिद्वारा बताउनु हो। निषेध वृत्ति भन्नुको तात्पर्य ब्रह्ममा मायाको कार्य कर्तृत्व, भोक्तृत्व, प्रमातृत्व, पञ्चमहाभूत, शरीर आदि सबैको निषेध गर्नु हो। यी ब्रह्ममा कल्पित भएका वस्तुहरू हुन् र यिनीहरूको बाध भए पनि निर्विकल्परूपमा आत्माको सिद्धि हुन्छ। **नेति नेति** अर्थात् त्यहाँ माया र मायाको कार्य दुबै छैन। **अस्थूलमनणु** अर्थात् त्यो दुबै तत्त्व ठुलो-सानो दुबै छैन, **नान्तः प्रज्ञं न बहिः प्रज्ञं** अर्थात् त्यो तत्त्व तैजस पनि होइन र विश्व पनि होइन भनी अनेक वचनले ब्रह्ममा काल्पनिक धर्मको निषेध गरेका छन्। वास्तवमा ब्रह्म शब्दको विषय नहुने भएकाले विधिमुखद्वारा ब्रह्मलाई सत्, चित् र आनन्दरूप भन्नु पनि त्यति उपयुक्त नहुने आचार्यहरूको मत छ। त्यसैले विधिमुख प्रतिपादनले भन्दा निषेधमुख वचनले नै ब्रह्मको प्रतिपादन उपयुक्त ढङ्गले गरेको पाइन्छ। त्यसैले **सत्यं ज्ञानमनन्तं ब्रह्म** (तैत्तिरीयोपनिषद् २।१।१) भन्ने श्रुतिको व्याख्यामा श्रीशङ्कराचार्यले सत्य र ज्ञान शब्दले पनि असत्ताको अत्यन्ताभाव अनि जडत्वको अत्यन्ताभावलाई नै बुझाएको र ब्रह्ममा असत्ता र जडताको निषेध गरेर नै ब्रह्मलाई बुझाएको उल्लेख गर्नुभएको छ। यद्यपि निषेधमुख प्रतिपादनमा सोझै ब्रह्मको वर्णन आउँदैन, केवल माया, अन्तःकरण, शरीर आदिको निषेध मात्र गरिन्छ। यसबाट सामान्यतया ब्रह्मको प्रतिपादन नभए जस्तो लाग्छ, तर वस्तुतः ब्रह्म शब्दद्वारा बताइने विषय कहाँ हो र ? यो त कल्पित उपाधिहरूलाई निवृत्त गरी आफ्नै हृदयभित्र अनुभव गर्नुपर्ने विषय हो। त्यसैले निषेधमुख शैलीले ब्रह्ममा उपाधिहरूको निषेध गर्नु पनि निरुपाधिक आत्मालाई अर्थतः बताउनु नै हो। माया आदिको निषेध गर्न कुनै अधिष्ठान त चाहिँदैन, सबैको निषेध गरिसक्दा पनि त्यो अधिष्ठानको भने निषेध हुन सक्दैन। यसलाई पञ्चदशीकार विद्यारण्य स्वामीले कोठाका सबै वस्तु खाली गर्दाखेरि ती वस्तुहरू रहने अधिष्ठान आकाशको भने कसै गरी पनि निषेध हुन सक्दैन भनी दृष्टान्तको रूपमा बताउनुभएको छ— **अपनीतेषु मूर्तेषु ह्यमूर्तं शिष्यते वियत्** (पञ्चदशी ९।३०)। फेरि आत्मतत्त्व त निषेधको पनि साक्षी हो, निषेधको जो साक्षी हो त्यसलाई निषेधले निषेध गर्न सक्दैन। आत्मतत्त्वले प्रकाशित नगरे ब्रह्ममा माया र मायाको कार्यको निषेध

भएकै कसरी सिद्ध हुन्छ र ? त्यसैले पिप्पलायन भन्नुहुन्छ– **यदृते न निषेधसिद्धिः** अर्थात् जुन साक्षी चैतन्यको अभावमा निषेध आफैँ पनि सिद्ध हुँदैन, ब्रह्मतत्त्व प्रपञ्चनिषेधको अवधि हो। जहाँ प्रपञ्चको निषेध हुन्छ, अनि जसद्वारा त्यो निषेध प्रकाशित हुन्छ, त्यो चैतन्यतत्त्व सबै निषेधपछि पनि अवशिष्ट रहन्छ। त्यसैले ब्रह्मलाई निषेधशेष भनिन्छ। उपनिषद्‌शास्त्रले ब्रह्ममा सम्पूर्ण द्वैतप्रपञ्चको निषेध गरिसकेपछि निषेध गर्न नसकिने तत्त्वको रूपमा त्यो अधिष्ठान साक्षी चैतन्य प्रकाशित हुन्छ। यसरी यस श्लोकमा ब्रह्मतत्त्वलाई मन, वाणी आदि कुनै पनि इन्द्रियहरूले प्रकाशित गर्न नसक्ने अनि वेदले पनि ब्रह्मलाई तोकेर नबताई अनात्म पदार्थको निराकरणद्वारा अवशिष्ट रहने तत्त्वको रूपमा मात्र त्यसलाई सूचित गर्ने बताइएको छ। यसरी ब्रह्म कुनै पनि प्रमाणको विषय नभएकाले यो अप्रमेय हो भन्ने सिद्ध हुन्छ।

**सत्त्वं रजस्तम इति त्रिवृदेकमादौ**
**सूत्रं महानहमिति प्रवदन्ति जीवम्।**
**ज्ञानक्रियार्थफलरूपतयोरुशक्ति**
**ब्रह्मैव भाति सदसच्च तयोः परं यत्॥ ३७॥**

**पदार्थ–**
**आदौ** = सृष्टि हुनुभन्दा पहिले
**यत्** = जो
**एकं** = अद्वितीय
**ब्रह्म** = ब्रह्म थियो (त्यही नै)
**सत्त्वं रजस्तमः इति** = सत्त्वगुण, रजोगुण र तमोगुणरूप
**त्रिवृत्** = त्रिगुणात्मक प्रकृति
**सूत्रं** = क्रियाशक्तियुक्त प्राण
**महान्** = ज्ञानशक्तियुक्त महत्तत्त्व र
**अहम् इति जीवं** = अहङ्कार उपाधि भएको जीव हो भनेर
**प्रवदन्ति** = विज्ञहरू भन्दछन्
**उरुशक्ति** = अचिन्तनीय शक्तिवाला
**ब्रह्म एव** = ब्रह्म नै
**ज्ञानक्रियार्थफलरूपतया** = इन्द्रियको अधिष्ठाता देवता, इन्द्रिय, विषय र सुखदुःखको रूपमा पनि
**भाति** = प्रतीत हुन्छ
**सत्** = स्थूल कार्यरूपले र
**असत् च** = शून्य कारणरूपले (पनि ब्रह्म नै प्रतीत हुन्छ अनि)
**तयोः** = कार्य र कारणभन्दा
**परम्** = पर हुने पनि (ब्रह्म नै हो)

**वाक्यार्थ–** सृष्टि हुनुभन्दा पहिले जो अद्वितीय ब्रह्म थियो, त्यही नै त्रिगुणात्मक प्रकृतिको रूपमा, क्रियाशक्तियुक्त प्राणको रूपमा, ज्ञानशक्तियुक्त महत्तत्त्वको रूपमा र अहङ्कार उपाधि भएको जीवको रूपमा देखापरेको हो भनेर भन्दछन्। अनन्त शक्तिवाला ब्रह्म नै इन्द्रियको अधिष्ठाता देवता, इन्द्रिय, विषय र सुखदुःखको रूपमा प्रतीत हुन्छ, साथै स्थूल कार्यको रूपमा र सूक्ष्म कारणको रूपमा पनि ब्रह्म नै प्रतीत भएको छ र कार्य र कारणभन्दा परको तत्त्वको रूपमा पनि ब्रह्म नै छ।

**विवरण–** यो श्लोकमा सम्पूर्ण संसार ब्रह्मरूप हो भनी बताइएको छ। योभन्दा अघिल्लो श्लोकमा ब्रह्म कुनै पनि प्रमाणको विषय हुन नसक्ने हुनाले यो अप्रमेय हो भनी बताइएको

थियो। त्यसमा के शङ्का भयो भने उसो भए त ब्रह्मतत्त्व स्वयं नै अप्रामाणिक एवं असिद्ध भयो। किनभने जुन वस्तुमा कुनै प्रमाण छैन, त्यसलाई सिद्ध मान्न सकिँदैन। यसको समाधानको रूपमा प्रस्तुत लोकमा ब्रह्म प्रमाणको अविषय होइन, अपि तु सबैथरी प्रमाणद्वारा विषय गरिने संसारका जति पनि पदार्थ छन्, ती सबै वस्तु ब्रह्म नै हुन् भनी बताइएको छ। सत्, असत् अर्थात् कार्य र कारणात्मक सम्पूर्ण पदार्थहरूको रूपमा ब्रह्म नै देखिएको छ। ब्रह्म **तयोः परं** अर्थात् ती कार्यकारणात्मक पदार्थहरूभन्दा पर रहेको छ। यहाँ **पर** शब्दको अर्थ श्रीधरस्वामीले कारण भन्ने गर्नुभएको छ। ब्रह्म कार्यकारणमय सबै प्रपञ्चको परम कारण हो, अनि कार्य आफ्नो उपादान कारणदेखि भिन्न नहुने हुनाले यो कार्यकारणमय प्रपञ्च पनि ब्रह्मदेखि भिन्न होइन। ब्रह्म जगत्को उपादान कारण हो र जगत् ब्रह्मको कार्य हो भन्ने कुरामा छान्दोग्योपनिषद्मा माटो र घैंटोको दृष्टान्त दिई बुझाइएको छ— **वाचारम्भणं विकारो नामधेयं मृत्तिकेत्येव सत्यम्** (६।१।४) अर्थात् घैंटो भन्ने नाम र त्यसको रूप केवल वाणीको विलास हो र विकाररूप हो, तर त्यहाँ माटो नै सत्य छ। यसै गरी जगत्मा अनेक पदार्थ छन् र ती पृथक्-पृथक् पदार्थ हुन् भन्ने प्रतीति पनि केवल बोलीचालीको व्यवहार मात्र हो। वास्तवमा प्रपञ्चमा ब्रह्म बाहेक दोस्रो वस्तु नै छैन। यसै श्रुतिलाई आधार मानी ब्रह्मसूत्र (२।१।१४)को **तदनन्यत्वमारम्भणशब्दादिभ्यः** यस सूत्रमा कार्य आफ्नो उपादान कारणभन्दा अनन्य हुने कुरा बताइएको छ।

अनन्यताको सामान्य अर्थ हुन्छ, अभिन्नता। जगत्का पदार्थ ब्रह्मदेखि अनन्य हुन् भन्नुको तात्पर्य यी सबै ब्रह्मरूप हुन् र नित्य हुन् भन्ने चाहिँ होइन। यसको अर्थ त सम्पूर्ण जगत् ब्रह्ममा कल्पित भएकाले यो ब्रह्मभन्दा पृथक् सत्ताले युक्त छैन भन्ने हो। जसरी घैंटोमा त्यसको नाम र रूप असत्य हो अनि माटो मात्र सत्य हो त्यस्तै जगत्मा पनि जगत्को नाम एवं रूपको अंश असत्य हो अनि यहाँ ब्रह्म मात्र सत्य हो। सम्पूर्ण जगत् ब्रह्मरूप हो भनी बताउनुको तात्पर्य पनि पृथक्-पृथक् रूपमा रहिरहेका अनन्त वस्तुहरू आफ्नो औपाधिक स्वरूपमा नै ब्रह्मरूप हुन् भनी बताउनु होइन। औपाधिक रूप त असत्य हो, तर त्यसलाई पनि सत्य झैं प्रतीत गराउने जुन अधिष्ठान तत्त्व हो, त्यो ब्रह्मतत्त्व मात्र वास्तवमा सत्य हो भन्ने यसको तात्पर्य हो। डोरीमा सर्पको भ्रम हुँदा त्यहाँ सर्प छँदैछैन, तर डोरीको सत्ताका कारणले त्यहाँ अध्यस्त सर्प पनि सत्तावान् भई देखिन्छ। अध्यासमा अध्यस्तको निवृत्ति भइसकेपछि सर्प त डोरी नै रहेछ भन्नु र यहाँ सर्प नभई डोरी मात्र रहेछ भनी बताउनु एउटै कुरा हो। त्यसै गरी ब्रह्मलाई सर्वरूपमा बताउनुको तात्पर्य पनि जगत् वास्तवमा पूर्णतः असत् हो र त्यहाँ केवल ब्रह्म मात्र सत्य हो भनेर बुझाउनु नै हो। जुन वस्तुलाई जुन रूपमा जानिएको हुन्छ, त्यो वस्तु त्यो रूपमा नभई अर्कै रूपको रहेछ भनेर बताउनुको तात्पर्य त्यो देखिएको रूप वास्तवमा रहँदै रहेनछ भन्ने हुन्छ। जगत्लाई जगत्को रूपमा नै जानेर सारा संसारको व्यवहार चलिरहेको छ, तर यो ब्रह्मरूप हो भनी बताएपछि जगत् पूर्णतः असत् रहेछ भन्ने बुझिन्छ। यसै कारणले यहाँ कार्यकारणात्मक पदार्थहरूलाई ब्रह्मरूप भनी बताइएको छ।

घैंटो माटोभन्दा अभिन्न भए तापनि माटो चाहिँ घैंटोदेखि भिन्न नै हो। घैंटोको उत्पत्ति हुनुअघि र नाशपछि पनि माटो जस्ताको तस्तै रहिरहन्छ। त्यसैले माटो घैंटोभन्दा भिन्न एवं

व्यापक हो। यसै गरी जगत् ब्रह्मभन्दा भिन्न नभए पनि ब्रह्म चाहिँ जगत्भन्दा भिन्न नै हो। किनभने जगत्को उत्पत्ति अघि र नाश भएपछि अनि मुक्तावस्थामा समेत केवल ब्रह्म मात्र रहन्छ, जगत् रहँदैन। यसरी सम्पूर्ण प्रपञ्चको कारण ब्रह्मतत्त्व निरपेक्ष सत्ता हो भन्ने सिद्ध हुन्छ। एउटै ब्रह्म अनेक पदार्थहरूको कारण कसरी हुन सक्छ भन्ने बताउन यहाँ ब्रह्मलाई **उरुशक्ति** भनिएको छ। पछि त्रिगुणमयी प्रकृतिको रूपमा पनि ब्रह्म नै देखिएको हो भनी बताइएकाले यहाँ **उरुशक्ति** शब्दको अर्थ त्रिगुणात्मिका मायाले युक्त हुनुभएका परमात्मा भन्ने गर्न मिल्दैन। यहाँ त शक्ति शब्दले ब्रह्मका स्वरूपभूत शक्तिलाई नै बताएको छ। जगत्मा अनेक विचित्रताहरूको उत्पत्ति कहाँबाट भयो होला भन्ने जिज्ञासाको समाधानका लागि ब्रह्ममा अनेक शक्तिहरू रहेको कल्पना गरी ती-ती शक्तिबाट ती-ती पदार्थको उत्पत्ति भयो भनी भाग लगाइएको मात्र हो। यहाँ मायाशक्तिद्वारा जगत्को रचना भयो भन्ने प्रक्रिया बताउनुभन्दा अज्ञात ब्रह्म नै जगत्को विविधतामा प्रतीत भयो भनी बताउनु अभीष्ट रहेको छ। जगत्को कारण भनी मायाशक्तिलाई बताउँदा जगत् उत्पत्तिको क्रम र नियम आदिको अपेक्षा हुन्छ, तर अज्ञात ब्रह्म नै सम्पूर्ण जगत्को रूपमा प्रतीत भएको हो भन्दा आकाशबाट वायु अनि वायुबाट तेजको क्रमले जगत्को उत्पत्ति भयो भनी क्रमिकता अपनाउनुपर्दैन। यहाँ त अद्वितीय ब्रह्मतत्त्व अज्ञानको कारणले एक्कासी जगत्भ्रमको रूपमा देखिएको मानिन्छ। गौडपादाचार्य भन्नुहुन्छ— **अनिश्चिता यथा रज्जुरन्धकारे विकल्पिता, सर्पधारादिभिर्भावैस्तद्वदात्मा विकल्पितः** (माण्डूक्यकारिका २।१७) अर्थात् अन्धकारमा के हो भनेर ठम्याउन नसकिएको डोरी जसरी सर्प, दण्ड, जलधारा आदि अनेक विकल्पको रूपमा खडा हुन्छ, त्यसै गरी नजानिएको आत्मा नै जगत्को रूपमा देखिन्छ। डोरीमा सर्पको भ्रम हुँदा सर्पको शिरदेखि पाउसम्म कुन अङ्ग पहिले देखिँदै गयो भन्ने क्रमको अपेक्षा हुँदैन। त्यसै गरी जगत्को उत्पत्तिमा क्रमिकताको नियम लागु हुँदैन। यद्यपि उपनिषद्मा जगत्को उत्पत्तिका लागि क्रम बताइएको छ र आकाश-वायु-तेज-जल र पृथिवीको क्रमले उत्पन्न भएको जगत्को प्रलय हुँदा पनि विपरीत क्रम अर्थात् पृथिवी, जल आदिको क्रमपूर्वक प्रलय हुने नियम शास्त्रमा उल्लेख गरिएको छ, तर यो नीतिनियमलाई मान्नेबित्तिकै जगत् नियमसम्मत एवं प्रमाणसिद्ध होला भन्ने विचारले प्रस्तुत श्लोकमा कुनै पनि तत्त्वको अपेक्षाविना ब्रह्मतत्त्व आफैँ सम्पूर्ण कल्पनाको रूपमा कल्पित भएको बताइएको छ।

**त्रिवृत्** अर्थात् त्रिगुणमयी प्रकृति, **सूत्रं** अर्थात् सूत्रात्मा, **महान्** अर्थात् महत्तत्त्व, अनि **अहं** अर्थात् अहङ्कारोपाधिक जीव आदि सबैको रूपमा ब्रह्मतत्त्व नै कल्पित भएको हो। यहाँ इन्द्रियहरू, इन्द्रियका अधिष्ठाता देवताहरू अनि इन्द्रियबाट हुने ज्ञानहरूको रूपमा पनि ब्रह्म नै देखिएको बताइएको छ। यहाँ ज्ञान शब्दले इन्द्रियका अधिष्ठाता देवताहरूलाई लिनु पर्दछ, क्रिया शब्दले इन्द्रियहरूलाई लिनुपर्दछ भने फल शब्दले इन्द्रिय-विषयको सम्बन्धद्वारा हुने ज्ञानलाई लिनुपर्दछ। यी सबैको रूपमा **ब्रह्मैव भाति** अर्थात् ब्रह्म नै देखिएको हो। यद्यपि इन्द्रियवृत्तिबाट हुने ज्ञान अनित्य छ, अनि स्वरूपभूत अखण्डज्ञानभन्दा त्यो भिन्न हो, तर वृत्तिरूप ज्ञान भनेको पनि वस्तुतः ब्रह्मरूप ज्ञानकै प्रतिभास हो। जब अन्तःकरणको वृत्ति जीव उत्पन्न हुन्छ, तब त्यसमा ब्रह्मको प्रतिबिम्ब पर्दा त्यो वृत्तिज्ञानको रूपमा बन्दछ। अन्तःकरणको वृत्तिले घैँटोलाई विषय गर्दा त्यसमा

परेको प्रतिबिम्ब भएकाले त्यो ज्ञानलाई घटज्ञान भनिएको मात्र हो। अन्तःकरणको वृत्ति क्षणिक भएकाले वृत्ति नष्ट हुँदा त्यहाँ आत्मप्रतिबिम्ब नभएकाले घटज्ञान नष्ट भयो भन्ने व्यवहार भएको मात्र हो, वास्तवमा एउटै साक्षी चैतन्यले अखण्ड रूपमा सम्पूर्ण संसारलाई प्रकाशित गरिरहेको छ। यसरी वृत्तिरूप ज्ञान पनि ब्रह्मरूप नै भएको सिद्ध हुन्छ। यसप्रकार संसारका सम्पूर्ण पदार्थ, इन्द्रिय, वृत्तिरूप ज्ञान आदि सबै रूपमा एउटै ब्रह्मतत्त्व मात्र प्रतीत भइरहेको र यो स्वयंप्रकाश भएकाले कुनै प्रमाणविना पनि यो सिद्ध भइरहेको हुन्छ।

**नात्मा जजान न मरिष्यति नैधतेऽसौ**
**न क्षीयते सवनविद् व्यभिचारिणां हि।**
**सर्वत्र शश्वदनपाय्युपलब्धिमात्रं**
**प्राणो यथेन्द्रियबलेन विकल्पितं सत्॥ ३८॥**

**पदार्थ–**
**असौ** = यो जो
**आत्मा** = आत्मा
**न जजान** = उत्पन्न भएन
**न मरिष्यति** = मर्दा पनि मर्दैन
**न एधते** = बढ्दा पनि बढ्दैन
**न क्षीयते** = घट्दा पनि घट्दैन
**हि** = किनभने
**व्यभिचारिणां** = मर्ने र मार्ने वस्तुहरूको
**सवनवित्** = साक्षी हो
**सर्वत्र** = सबै ठाउँमा
**शश्वत्** = सधैँ
**अनपायि** = विद्यमान छ र
**उपलब्धिमात्रं** = ज्ञानस्वरूप छ
**सत्** = यही सत् स्वरूप आत्मा
**प्राणः यथा** = प्राणवायु जैँ
**इन्द्रियबलेन** = इन्द्रियको कारणले
**विकल्पितम्** = विविध नाम र रूपमा कल्पित भएको हो

**वाक्यार्थ–** यो आत्मा न कहिल्यै उत्पन्न भयो, न कहिल्यै मर्छ, न बढ्छ, न घट्छ, बरु उत्पन्न हुने र मर्ने पदार्थ वा अवस्थाको यो साक्षी हो, सबैतिर सधैँ रहिरहने ज्ञानस्वरूप यो आत्मा प्राणवायु जस्तो इन्द्रियको आधारमा विविध नाम र रूपमा कल्पित छ।

**विवरण–** यस श्लोकमा आत्मा जन्म–मृत्यु आदिले रहित भएको अनि केवल अखण्ड ज्ञानरूप भएको बताइएको छ। यहाँ अविनाशी ज्ञानरूपताको उपदेश गरी ब्रह्मको स्वरूपलक्षण बताइएको छ अनि आत्मामा कुनै पनि भावविकार छैन भनी सत् रूपमा आत्माको प्रतिपादन गरिएको छ। यहाँ आत्मामा जन्म–मृत्यु, वृद्धि र अपक्षय गरी मुख्यतः चार प्रकारको निषेध गरिएको छ। संसारका पदार्थहरूमा हुने विकार छ थरी छन्– **जायते, अस्ति, वर्धते, विपरिणमते, अपक्षीयते, विनश्यति** अर्थात् जन्मनु, हुनु, बढ्नु, परिवर्तन हुनु, क्षीण हुनु र नष्ट हुनु। ब्रह्मको पनि अस्तित्व छ। पदार्थहरूको अस्तित्व जन्म भएपछि हुने भएकाले त्यो विकाररूप भएको हो, ब्रह्मको अस्तित्व त सर्वदा एकसमान छ। यी विकारहरूमध्ये जन्म र मृत्यु यी पहिला र अन्तका विकार हुन्। यिनको मात्र निषेध गरे पनि बिचका सबै विकारको निषेध हुन्छ। तर पनि ब्रह्मको निर्विकारित्वलाई दृढ गराउनका लागि यहाँ वृद्धि र अपक्षय रूप विकारको पनि निषेध गरिएको छ। आत्माको जन्म नै नभएपछि जन्मबाट हुने अस्तितारूपी विकार पनि निरस्त भयो अनि वृद्धि

नभएपछि त्यसपछिको अवस्थान्तरमा परिणत हुने विपरिणामरूपी विकार पनि निरस्त भयो। अतः आत्मामा कुनै पनि भावविकार हुन सक्दैनन्।

शरीरका अवस्थाहरू व्यभिचारी छन्। बाल्य अवस्था, युवा अवस्था र वृद्ध अवस्था आदि क्रमैसँग परिवर्तित भइरहने अवस्थाहरू हुन्। यी सबै अवस्थाहरू परिवर्तित भए तापनि यिनको प्रकाशक आत्मा भने जस्ताको त्यस्तै रहिरन्छ। सानो बच्चोले आफूलाई जुन म भनेर बोध गरेको हुन्छ, अनि युवावस्था र वृद्धावस्थमा पनि उसले आफूलाई त्यही म भनी जान्दछ। यसलाई वाचस्पति मिश्रले **योऽहं बाल्ये पितरौ अन्वभवम्, स एवाहं स्थाविरे प्रणप्तॄन् अनुभवामि** (ब्रह्मसूत्र, अध्यासभाष्य, भामती टीका) भनी उल्लेख गर्नुभएको छ। जुन मैले सानो अवस्थामा आफ्ना माता-पिताको अनुभव गरेँ, अहिले त्यही म आफ्ना पनातिहरूको अनुभव गरिरहेको छु भन्ने बोध प्राणीहरूलाई हुन्छ। सानो बच्चाको शरीर अनि बुढो हुँदाको शरीरमा अनेकौं परिवर्तनहरू आइसके। त्यस वेलाको ज्ञान, मनको स्थिति अनि सामाजिक परिवेश आदिमा पनि अकल्पनीय परिवर्तनहरू देखिइसके, तर प्राणीको म भन्ने बोधमा कहिल्यै पनि परिवर्तन आएको छैन। किनभने आत्मा शरीरदेखि पर **सवनवित्** अर्थात् ती-ती अवस्थाहरूको साक्षी हो। जो साक्षी हुन्छ, त्यसलाई साक्ष्य अर्थात् प्रकाश्य वस्तुका धर्महरूले छुँदैनन्। आत्मा पनि साक्षी भएकाले त्यसलाई शरीरका धर्महरूले छुँदैनन्। यो व्यक्तिको जीवनभरिको अनुभवको निष्कर्ष हो, त्यसैले प्राणीहरूले आफूलाई शरीरको अवस्थादेखि पर रहेको तत्त्वको रूपमा विचार गर्नुपर्दछ। यहाँ आत्मालाई **अनपाय्युपलब्धिमात्र** भनिएको छ। अपायशब्दको अर्थ नाश भन्ने हुन्छ, त्यसैले अनपायी शब्दको अर्थ हुन्छ, कहिल्यै नाश नहुने। आत्मा कहिल्यै नाश नहुने ज्ञानरूप हो भन्नु यसको तात्पर्य हो। आत्मा ज्ञानरूप हो भन्दाखेरि उत्पन्न हुने र नष्ट हुने वृत्तिरूप ज्ञान आत्मा होला र आत्मा पनि उत्पत्ति र नाशवान् होला भन्ने आपत्ति हटाउन यहाँ आत्मालाई अविनाशी ज्ञानरूप भनी बताइएको छ। यहाँ शङ्का के हुन्छ भने, ज्ञान कसरी अविनाशी हुन सक्दछ ? किनभने घैँटोको ज्ञान भयो, वस्त्रको ज्ञान हरायो आदि प्रतीतिले त ज्ञानलाई उत्पत्ति-नाशवान् सिद्ध गरिरहेकै छ। कुनै पनि ज्ञान अविनाशी नदेखिएको हुनाले यो भनाइ मिलेन इत्यादि। यस शङ्काको समाधानमा भनिन्छ— **इन्द्रियबलेन** अर्थात् ज्ञान उत्पत्ति र नाश भएको अनि ज्ञानहरू अनेक भएको प्रतीति त इन्द्रियरूपी उपाधिको कारणले भएको हो। वास्तवमा सबै ज्ञान ब्रह्मरूप नै हो।

ज्ञानतत्त्वका तीन भेद छन्— विषयको ज्ञान, ब्रह्मको ज्ञान अनि ब्रह्मरूप ज्ञान। विषयको ज्ञान भनेको विषयाकार अन्तःकरणवृत्तिमा परेको ब्रह्मचैतन्य हो। घैँटो आदिलाई विषय गर्ने अन्तःकरणवृत्तिमा ज्ञान प्रतिबिम्बित हुँदा त्यही नै ज्ञान पटज्ञान आदि अनेक रूपमा बन्दछ। संसारका सम्पूर्ण पदार्थहरूको ज्ञान आत्मचैतन्यकै प्रतिभास रूप हो। त्यसै गरी ब्रह्मको ज्ञान भनेको वेदान्तचिन्तनद्वारा ब्रह्माकार भएको अन्तःकरणमा परेको ब्रह्मचैतन्य हो। यसलाई अखण्डाकार वृत्ति भनिन्छ र यही ब्रह्मसाक्षात्कार नै परमपुरुषार्थको मूल हो। स्वरूपभूत ज्ञान भनेको चाहिँ स्वयं ब्रह्म नै हो। वास्तवमा विचार गर्दा चाहिँ स्वरूपभूत ज्ञान नै यथार्थतः ज्ञान हो र अरू दुई त्यसका प्रतिभास मात्र हुन्। जब स्वरूपभूत ज्ञान विषयाकार अन्तःकरणमा प्रतिबिम्बित हुन्छ तब त्यसलाई विषयको ज्ञान भन्दछन् अनि ब्रह्माकार अन्तःकरणमा प्रबिम्बित

हुँदा त्यसैलाई ब्रह्मज्ञान भन्दछन्। यी दुबै ज्ञान स्वरूपभूत ज्ञानकै प्रतिबिम्ब हुन्। त्यसैले निरपेक्षरूपमा ज्ञानतत्त्व एउटै छ भन्ने सिद्ध हुन्छ। सामान्य मानिसहरूको अनुभवमा घटज्ञान, पटज्ञान आदि उत्पन्न भए, नष्ट भए भन्ने बोध भए तापनि यो अविवेकीहरूको अनुभव हो। विचारको दृष्टिले हेर्ने हो भने त एउटै अखण्ड चेतनाले घैँटो, कपडा आदि सबै पदार्थहरूलाई प्रकाशित गरिरहेको हुन्छ। प्राणीमा चेतनाको लोप कहिल्यै हुँदैन। जाग्रत्, स्वप्न र सुषुप्ति यी तीनै अवस्थामा हरेक पदार्थहरूलाई प्रतिक्षण यो आत्मचैतन्यले प्रकाशित गरिरहेको हुन्छ। अन्तःकरणवृत्तिका विषयहरू फेरिँदा यो चैतन्यले ती–ती विषयहरूलाई प्रकाशित गरिदिएको हुन्छ। त्यसकारण ज्ञानतत्त्व स्वयंमा अखण्ड र पूर्ण छ। वृत्तिहरू उत्पन्न हुँदा र नष्ट हुँदा ज्ञानको विषय पनि फेरिएकाले घटज्ञान उत्पन्न भयो र पटज्ञान नष्ट भयो भन्ने भान भएको हो। श्रीधरस्वामी लेख्नुहुन्छ— **वृत्तय एव जायन्ते नश्यन्ति च न ज्ञानमिति भावः** अर्थात् अन्तःकरणका वृत्तिहरू नै उत्पन्न हुन्छन् र नष्ट हुन्छन्, ज्ञान होइन। यसैले आत्मा अविनाशी ज्ञानस्वरूप हो भनिएको हो।

**अण्डेषु पेशिषु तरुष्वविनिश्चितेषु**
**प्राणो हि जीवमुपधावति तत्र तत्र।**
**सन्ने यदिन्द्रियगणेऽहमि च प्रसुप्ते**
**कूटस्थ आशयमृते तदनुस्मृतिर्नः॥ ३९॥**

**पदार्थ—**
**हि** = जसरी
**प्राणः** = प्राण
**अण्डेषु** = अण्डज प्राणीहरूमा
**पेशिषु** = जरायुज प्राणीहरूमा
**तरुषु** = उद्भिज्ज प्राणीहरूमा र
**अविनिश्चितेषु** = स्वेदज प्राणीहरूमा
**तत्र तत्र** = जतातत्तै
**निर्विकारः एव** = निर्विकार भएर
**जीवं** = जीवलाई
**उपधावति** = अनुसरण गर्दछ (त्यसै गरी)
**यत्** = जो आत्मा पनि
**इन्द्रियगणे** = इन्द्रियको समूह
**सन्ने** = लीन भएपछि
**अहमि** = अहङ्कार
**प्रसुप्ते** = सुप्त अवस्थामा लीन भएपछि र
**आशयं** = लिङ्ग शरीरलाई
**ऋते च** = छाडेर पनि
**कूटस्थः** = निर्विकार भएर रहन्छ र
**नः** = हामीहरूलाई
**तदनुस्मृतिः** = सुषुप्तिबाट उठेपछि त्यो सुखरूप आत्माको स्मृति हुन्छ

**वाक्यार्थ—** जसरी अण्डज, जरायुज, स्वेदज र उद्भिज्ज आदि सबै प्रकारका जीवहरूमा प्राण रहिरहेकै हुन्छ, त्यसै गरी यो आत्मा पनि जाग्रत्, स्वप्न हुँदै सुषुप्ति अवस्थामा पुगेपछि जहाँ इन्द्रियको समूह पनि लीन हुन्छ, अहङ्कार पनि लुप्त भएको हुन्छ र लिङ्ग शरीरलाई पनि छाडेर आत्मा निर्विकार भएर बसेको हुन्छ ती अवस्थाहरूमा पनि आत्मा रहिरहेकै हुन्छ, जुन कुरा हामीहरूलाई सुषुप्तिबाट उठेपछि सुखरूप आत्माको स्मृति हुन्छ।

**विवरण—** यस श्लोकमा इन्द्रिय, अन्तःकरण आदि उपाधिहरूको अभावमा कूटस्थ चैतन्य आफ्नो रूपमा प्रकट हुन्छ भनी उपदेश गरिएको छ। इन्द्रिय आदिको लय भएपछि निर्विकार आत्माको

उपलब्धि हुन्छ भन्ने कुरालाई यस श्लोकमा प्राणको दृष्टान्त दिएर बुझाइएको छ। प्राणीहरू चार प्रकारका छन्– स्वेदज, अण्डज, उद्भिज्ज र जरायुज। परमात्माले स्वेदज, अण्डज, जरायुज र उद्भिज्ज गरी चार प्रकारका प्राणीहरूको सृष्टि गर्नुभयो भनी ऐतरेयोपनिषद् (३।३)मा बताइएको छ। स्वेदज भनेका पसिनाबाट उत्पन्न हुने जुम्रा, लिखा आदि प्राणीहरू हुन्, अण्डज भनेका अण्डाबाट जन्मने प्राणीहरू हुन्, यसमा कोइली, हाँस आदि अनेक पक्षीहरू र सर्प, कछुवा आदि पनि पर्दछन्। उद्भिज्ज भनेका भुइँ फोरेर उत्पन्न हुने रुख, लहरा, घाँस आदि हुन्। जरायुज भनेका चाहिँ गर्भाशयबाट सालनाल सहित जन्मिने मनुष्य, गाई आदि प्राणीहरू हुन्। यसरी प्राणीहरू चार प्रकारका छन्। वास्तवमा यहाँ प्राणीहरूको भेद गराउने मूल तत्त्व भनेको उनीहरूको भिन्न-भिन्न शरीर नै हो। किनभने ती सबैभित्र प्राण अनि आत्मतत्त्व त समानरूपले नै रहिरहेको छ। आत्मा निरुपाधिक र अखण्ड छ, त्यसैले सबैका भिन्नभिन्न अन्तःकरणपिच्छे प्रतिबिम्बित हुँदा पनि यसमा भेद आएको छैन। मनुष्य, पशु र रुख आदि शरीरको अनुरूप यसमा प्रकट हुन सक्ने अन्तःकरणको स्तर भिन्न-भिन्न भएकाले प्राणीहरूको चेतनामा घटीबढी देखिन्छ, तर यसको अर्थ तिनको आत्मामा एवं प्राणमा भेद छ भन्ने होइन। त्यसैले प्राणशक्ति सबै प्राणीहरूमा समानरूपले रहिरहेको छ। यसरी अनेक शरीरभित्र पनि प्राणशक्तिको निर्विकारता देखाइयो। ठिक यसै गरी आत्मा पनि स्वरूपतः निर्विकार छ र इन्द्रिय आदि उपाधिका कारणले मात्र यसमा विकारको प्रतीति भएको हो। आत्माको निर्विकारतालाई देखाउन यहाँ सुषुप्ति अवस्थामा आत्माको स्थितिलाई बताइएको छ। यहाँ सुषुप्ति अवस्थामा आत्मा कूटस्थ चैतन्यको रूपमा प्रतीत हुन्छ भनिएको छ।

सुषुप्ति अवस्थाको विषयमा शास्त्रहरूमा धेरै विवेचना भएको पाइन्छ। वेदान्तमा ब्रह्मविचारका दुई प्रक्रिया **अवस्थात्रय चिन्तन** र **पञ्चकोशविवेक**मध्ये सुषुप्तिको विवेक गर्नु एउटा सशक्त साधना हो। अरु अवस्थात्रयको चिन्तनको क्रममा सुषुप्ति अवस्थाको विवेक गर्नु त पञ्चकोशविवेकभन्दा पनि सशक्त र अनुभवगम्य साधन हो। जाग्रत्, स्वप्न र सुषुप्ति यी तीन अवस्थामध्ये जाग्रत्मा स्थूल शरीर स्थूल भोग आदि उपाधिले आत्मा ढाकिएको छ, स्वप्न अवस्थामा पनि सूक्ष्म वासनामय पदार्थहरूको भोगले आत्मा आवृत्त भएको छ, तर सुषुप्ति अवस्थामा त स्थूल-सूक्ष्म दुबैथरी पदार्थहरू छैनन्। आत्मालाई जीवभावमा ल्याउने उपाधि भनेको अन्तःकरण हो, त्यो पनि सुषुप्ति अवस्थामा छैन। शरीर, इन्द्रिय र अन्तःकरणको अभावमा पनि आत्मा निरपेक्षरूपमा रहन सक्दछ र यसबाट उसको ज्ञानस्वरूपतामा केही हानि आउँदैन भन्ने कुराको दृष्टान्त सुषुप्तिमा गएर मिल्दछ। सामान्यतया जाग्रत् र स्वप्नमा इन्द्रिय, अन्तःकरण आदिद्वारा ती-ती विषयको ग्रहण गरेर नै चैतन्यको प्रतीति भएको हो र यो चैतन्य यिनैको अधीनमा मात्र सिद्ध हुन्छ भन्ने भान हुन्छ। तर विचार गर्दा सुषुप्ति अवस्थामा कुनै उपाधिको अभावमा पनि आत्मा स्वयंमा प्रकाशित हुन सक्दछ र यसले अरू कुनै ज्ञानका साधनको अभावमा पनि त्यो सुषुप्ति अवस्थालाई त्यहाँ सुतिरहेको व्यक्तिलाई अनि उसको अज्ञान आदिलाई प्रकाशित गरिरहेको हुन्छ भन्ने सिद्ध हुन्छ। यसरी आत्माको निरपेक्ष ज्ञानरूपताको प्रतीति सुषुप्तिमा नै हुने गर्दछ।

सुषुप्ति के हो भनी विचार गर्न थाल्दा यसका दुईथरी स्वरूप देखिन्छन्। एउटा दृष्टिमा सुषुप्ति तमोमय अवस्था हो र यसमा जीवात्माले आफैँलाई, अरूलाई अनि सत्य-असत्यलाई समेत जान्दैन। सुषुप्ति अवस्थाको अभिमानी जीवलाई प्राज्ञ भन्दछन्। **प्रकर्षेण अज्ञः** अर्थात् पूराका पूरा अज्ञानी भन्ने अर्थमा यसलाई प्राज्ञ भनिएको हो। यस वेलामा जीव यति गहिरो अज्ञानमा डुबेको हुन्छ कि उसलाई आफू सुतिरहेको बोधसमेत हुँदैन, अरू बाहिरी संसारको के कुरा ? त्यसैले गौडपादाचार्यले बताउनुभएको छ– **नात्मानं न पराँश्चैव न सत्यं नापि चानृतम्, प्राज्ञः किञ्चन संवेत्ति** (माण्डूक्यकारिका १।१२) अर्थात् सुषुप्तिको अभिमानी प्राज्ञले आफूलाई, अरूलाई अनि सत्य र असत्यलाई पनि जान्दैन। यस्तो अविवेकमय अवस्था नै सुषुप्ति हो भन्ने एकथरी दृष्टि छ। अर्को दृष्टिमा भने सुषुप्ति अवस्थामा जीवले आफ्ना उपाधिहरू अन्तःकरण, इन्द्रिय, शरीर आदिलाई परित्याग गरी ब्रह्मभावमा पुगेको हुन्छ। सुषुप्तिमा आत्माले हृदयका सम्पूर्ण शोकलाई तर्दछ भनी बताइएको छ– **तीर्णो हि तदा सर्वाञ्छोकान् हृदयस्य भवति** (बृहदारण्यकोपनिषद् ४।३।२२) त्यसै गरी सुषुप्तिमा जीव सत्स्वरूप परमात्मासँग मिलेको हुन्छ भनी बताइएको छ– **सता सोम्य तदा सम्पन्नो भवति, स्वमपीतो भवति** (छान्दोग्योपनिषद् ६।८।१) अर्थात् हे बाबु ! त्यो वेलामा जीव सत् परमात्माद्वारा सम्पन्न भएको हुन्छ र उसले आफ्नै वास्तविक स्वरूपलाई प्राप्त गरेको हुन्छ। सत् परमात्मरूप भएको भए त्यो वेलामा जीवले किन भित्री-बाहिरी कुनै पदार्थलाई पनि नजानेको त ? भन्ने शङ्काको उत्तर यसरी दिइएको छ। जसरी प्रिय पत्नीद्वारा आलिङ्गित भएको पुरुष त्यसको आनन्दमा भित्री-बाहिरी सबै संसारलाई बिर्सिन्छ, त्यसै गरी सर्वज्ञ परमात्माद्वारा अँगालिएको जीवले पनि अनन्त आनन्दमा डुबेकाले अरू पदार्थलाई बिर्सिएको हो, वास्तवमा त्यो अज्ञानमा डुबेको होइन– **प्राज्ञेनात्मना सम्परिष्वक्तो न बाह्यं किञ्चन वेद नान्तरम्** (बृहदारण्यकोपनिषद् ४।३।२१)। यहाँ प्राज्ञ शब्दले सर्वज्ञ परमात्मालाई लिनुपर्दछ। **प्रकर्षेण ज्ञः प्रज्ञः प्रज्ञ एव प्राज्ञः** अर्थात् सम्पूर्ण कुरालाई पूर्ण रूपमा जान्ने परमात्मा प्राज्ञ हुनुहुन्छ। सुषुप्तिमा जीव त्यही परमात्मभावमा पुगेको हुन्छ। यसरी दुई दृष्टिमध्ये पहिलोमा सुषुप्तिलाई अज्ञानमय अवस्था मानी त्यसको निन्दा गरिएको छ भने दोस्रोमा सुषुप्तिमा जीव परमात्मभावमा रहेको हुन्छ भनी त्यसको प्रशंसा गरिएको छ। सुषुप्तिलाई हेय भनी बताउनु त्यसको अतिक्रमण गर्नका लागि हो भने सुषुप्तिको प्रशंसा गर्नु चाहिँ जाग्रत् अवस्थामा नै सुषुप्तिको जस्तो अविचल स्थिति ल्याई जीवन्मुक्त बन्नका लागि हो। यी दुईमध्ये उपनिषद्का सबैजसो वचनहरूले सुषुप्तिको प्रशंसा नै गरिरहेका छन्। यसको तात्पर्य जीवलाई सुषुप्तिमा अनायास अनि नजानीकन नै प्राप्त हुने जुन आनन्दरूपता छ, त्यसलाई जाग्रत् अवस्थामा नै विचारपूर्वक प्राप्त गर्न प्ररित गर्नु हो। सुषुप्तिमा प्राणीहरू ब्रह्मरूपमा नै पुगिरहेकै छन्, तर अज्ञानद्वारा ढाकिएकाले उनीहरूले ब्रह्मरूपतालाई बुझ्न सकेका छैनन्। यही कुरा छान्दोग्योपनिषद् (८।३।२)मा बताइएको छ– **अहरहर्गच्छन्त्य एतं ब्रह्मलोकं न विन्दन्त्यनृतेन हि प्रत्यूढाः** दिनदिनै यो ब्रह्मलोक र ब्रह्मस्थितिलाई प्राप्त गरेर पनि प्राणीहरू **अनृत** अर्थात् अज्ञानद्वारा ढाकिएकाले यसलाई जान्दैनन्। यो ब्रह्मस्थितिलाई जाग्रत् कालमा विचारपूर्वक प्राप्त गर्नु नै मूल पुरुषार्थ हो र यसै चिन्तनका लागि सुषुप्तिको महत्त्व बताइएको हो।

वस्तुतः सुषुप्तिलाई अज्ञानरूप भनी निन्दा गर्नु उपयुक्त ठहर्दैन। किनभने सुषुप्तिलाई अज्ञानरूप मान्दा जाग्रत् र स्वप्नमा केही पदार्थहरूको ज्ञान भएको तर सुषुप्तिमा केही पनि नजानिएको भाव प्रकट हुन्छ। यसो गर्दा जाग्रत् र स्वप्नको ज्ञान यथार्थ भएको भ्रम पर्न सक्दछ। जाग्रत् र स्वप्नको अपेक्षामा सुषुप्तिलाई हीन सिद्ध गर्न सकिँदैन। किनभने सुषुप्तिभन्दा पनि बढी भ्रमात्मक अज्ञान त जाग्रत् आदिमा नै छ। सुषुप्तिमा तत्त्वको अग्रहण अर्थात् अज्ञान मात्र छ, तर जाग्रत्, स्वप्नमा त त्यसैसँग **अन्यथाग्रहण** अर्थात् नभएका भ्रमात्मक पदार्थहरूको ज्ञान पनि रहेको छ। कुनै पनि वस्तुलाई नजानी चुप लागेर बस्नुभन्दा त्यसलाई उल्टो रूपमा जानी बडबडाउँदै हिँड्नु झन् खतरनाक हुन्छ। माण्डूक्यकारिकाकार गौडपादाचार्यले सुषुप्ति अवस्थामा ब्रह्मतत्त्व नजान्नुलाई निद्रा अनि जाग्रत् र स्वप्नमा अरू भ्रमात्मक पदार्थ देख्नुलाई स्वप्न भन्नुभएको छ। यी दुईमध्ये सुषुप्तिमा तत्त्वको अज्ञानरूप निद्रा मात्र छ, तर अरू दुई अवस्थामा चाहिँ भ्रमज्ञानरूप स्वप्न पनि छ। जाग्रत् र स्वप्नका अभिमानीहरू निद्रा र स्वप्न दुबैले युक्त छन् तर प्राज्ञ चाहिँ स्वप्नरहित निद्राले मात्र सहित छ। यसरी सुषुप्तिलाई अज्ञानात्मक नै मान्दा पनि त्यो भ्रमज्ञानले समेत युक्त अरू दुई अवस्थाभन्दा महत्त्वपूर्ण रहेको सिद्ध हुन्छ।

अर्वाचीन केही विद्वान्हरूले भने सुषुप्तिलाई कहीँ अज्ञानात्मक बताइएको अनि कहीँ ज्ञानस्वरूप परमात्मामा मिल्ने बताइएकोबाट संशय होला भन्ने ठानी यसलाई सुषुप्ति अवस्था वा सुषुप्ति स्थिति भनी व्याख्या गरेका छन्। सुषुप्ति अवस्थामा प्राज्ञ नामको जीवले अज्ञानमा डुबेकाले केही पनि जान्दैन, तर त्यसलाई पनि प्रकाशित गरिरहने जुन साक्षी आत्मा हो, त्यसले सबै प्रकाशित गरिरहेको छ। साक्षीको स्थिति सुषुप्ति स्थिति हो। यसमा अज्ञानको सम्बन्ध कहिल्यै हुँदैन। वास्तवमा जीव भनेको पनि त्यो आत्माभन्दा अलग कहाँ हो र ? अन्तःकरण आदि उपाधिलाई स्वीकार गरेपछि त्यही आत्मा जीवभावमा पुगेको त हो। त्यसैले जब उपाधिहरूको विनाश हुन्छ, तब त्यो जीव आफ्नै कूटस्थ साक्षी चैतन्य स्वरूपमा पुग्दछ। त्यसैले श्लोकमा सुषुप्ति अवस्थामा प्रसुप्त भएपछि इन्द्रियहरू र अहङ्कार पनि लीन हुन्छन् र उपाधिको अभावमा कूटस्थ आत्मा आफ्नो स्थितिमा प्रकाशित हुन्छ भनिएको छ। **आशयं ऋते** यस पदावलीको अर्थ हुन्छ— लिङ्ग शरीररूप उपाधिको अभावमा। आत्मालाई जीवभावमा झार्ने मुख्य कारण भनेको लिङ्ग शरीर अर्थात् अन्तःकरण इन्द्रिय आदि नै हुन्। सर्वव्यापक आत्मा अन्तःकरणद्वारा अविच्छिन्न भएर नै जीव बनेको हो। जसरी घैंटोरूप उपाधि फुटिसकेपछि त्यहाँभित्रको घटाकाश फेरि महाकाश नै बन्दछ, त्यसै गरी अन्तःकरण उपाधि नष्ट भइसकेपछि त्यही उपाधिको कारणले कल्पित भएको जीव फेरि परब्रह्म नै बन्दछ।

यहाँ के शङ्का हुन्छ भने सुषुप्ति अवस्थामा शरीर इन्द्रियदेखि अहङ्कारपर्यन्त सबै वस्तु लीन भएका हुन् भने त केवल शून्य मात्र बाँकी रह्यो त ? किनभने जगत्मा कुनै न कुनै उपाधिद्वारा युक्त भएर नै आत्माको प्रतीति हुन्छ, निरुपाधिक आत्मरूप अहिलेसम्म थाहा नै नभएकाले अनि आत्माको सधैँ प्रतीति गराउने **अहं** अर्थात् म हुँ भन्ने अहङ्कार उपाधि पनि नष्ट भएपछि त आत्माको बोध नै कसरी सम्भव छ र ? त्यसैले सुषुप्तिमा त शून्य मात्र रहने भयो। आत्मा कूटस्थ साक्षीको रूपमा पनि प्रकाशित हुन सक्ने भएन भन्ने समस्या हो। यसको समाधानमा भनिन्छ— **न**

**तदनुस्मृतिः** अर्थात् हामी प्राणीहरूलाई सुषुप्तिबाट जागिसकेपछि प्रतिदिन यो कूटस्थ साक्षीको स्मृति हुने गर्दछ। सुषुप्ति अवस्थामा इन्द्रियवृत्तिको माध्यमले हुने विशेष ज्ञान छैन, तर साक्षी स्वरूप ज्ञानको भने त्यस वेलामा पनि लोप भएको हुँदैन। जीवात्माको ज्ञान अन्तःकरण र इन्द्रियका आधारमा सिद्ध हुन्छ, त्यसैले अन्तःकरण आदि नभएको सुषुप्ति अवस्थामा त्यसलाई दर्शन, श्रवण आदि विशेष ज्ञानहरू हुन सम्भव छैन। तर साक्षीको ज्ञान नित्य छ, उसले त आफ्नो स्वरूपभूत ज्ञानद्वारा संसारभर जानिएका नजानिएका सबै विषयलाई प्रकाशित गरिरहेको हुन्छ। वास्तवमा जसलाई जीवात्मालाई हुने अन्तःकरणको वृत्तिरूप ज्ञान भन्दछन्, त्यो पनि साक्षी चैतन्यकै प्रतिभास मात्र हो। अन्तःकरणको वृत्तिमा अभिव्यक्त यही नित्य साक्षी चैतन्यले घट, पट आदिलाई प्रकाशित गरी घटज्ञान, पटज्ञान आदिको रूप लिने हो। यसरी संसारमा जानिने जति पनि विषयहरू छन्, ती सबैलाई साक्षी चैतन्यले नै प्रकाशित गरेको हो। अन्तःकरणको वृत्तिद्वारा स्पष्टतः विषय गर्न नसकिएका पदार्थहरूलाई व्यवहारमा नजानिएको भनिन्छ, तर साक्षीचैतन्यले त त्यसलाई पनि प्रकाशित गरिरहेको छ। मैले गणित जानेको छैन भनिरहँदा गणितको अज्ञान जानिएको छ कि छैन ? यदि जानिएको छैन भने त्यो व्यक्तिले आफूलाई गणित नआउने कुरा कहाँबाट थाहा पाई भन्दैछ त ? त्यसैले मैले जानिनँ भनेका विषयहरूलाई पनि साक्षीले प्रकाशित गरिरहेको हुन्छ। त्यसैले भनिन्छ– **सर्वं वस्तु ज्ञाततया अज्ञाततया वा साक्षिचैतन्यस्य विषयः** अर्थात् संसारका सम्पूर्ण पदार्थ जानिएर या नजानिएर साक्षी चैतन्यका नै विषय हुन्छन्। यसको तात्पर्य के हो भने अन्तःकरण वृत्तिद्वारा विषय गरिएका पदार्थलाई साक्षीले **ज्ञाततया** अर्थात् मैले जानेँ भनेर अनुभव गर्दछ भने अन्तःकरणवृत्तिद्वारा नजानिएका विषयलाई **अज्ञाततया** अर्थात् मैले जानिनँ भनेर अनुभव गर्दछ। यसरी साक्षीको ज्ञानस्वरूपतामा विषयहरूको भाव–अभावले अनि अन्तःकरणवृत्तिको हुनु–नहुनुले पनि केही प्रभाव पार्दैन। सुषुप्तिमा जब अन्तःकरणका वृत्ति अनि त्यसले प्रकाशित गर्ने स्थूल, सूक्ष्म संसार केही पनि नभएको त्यस वेलामा यो कूटस्थ साक्षीले कुनै पनि ज्ञान नभएको र ढुक्कसँग सुतिएको कुरालाई मात्र प्रकाशित गरिदिन्छ। जब व्यक्ति सुषुप्तिबाट उठी जाग्रत्मा आउँछ, तब उसका अन्तःकरणका विचारहरूलाई साक्षीले प्रकाशित गर्न थाल्दछ। बल्ल सुषुप्तिबाट जागी जाग्रत्मा आइरहेको अन्तःकरण यही अन्तराल अवस्थामा नै के थाहा पाउँछ भने म अहिलेसम्म सुखपूर्वक सुतेको थिएँ, ममा केही ज्ञान पनि थिएन। यो अन्तःकरणको अवस्था त्यही साक्षीद्वारा प्रकाशित हुन्छ। यसैलाई सुषुप्तिको स्मृति भनिन्छ। **सुखं अहमस्वप्सम्, न किञ्चिदवेदिषम्** अर्थात् म अहिलेसम्म सुखपूर्वक सुतेँ र केही पनि जानिनँ भन्ने जुन स्मृति छ, त्यसले के सिद्ध गर्दछ भने सुषुप्तिमा त्यो व्यक्तिले आफूले केही नजानेको र सुखपूर्वक सुतिरहेको कुरालाई जानिरहेको थियो। अनुभव नगरिएको कुराको स्मरण हुँदैन। सुषुप्तिमा यदि अज्ञान, आत्मा अनि सुखको अनुभव नभएको भए जाग्रत्मा आएपछि त्यसको स्मरण कसरी हुन सक्दथ्यो र ? त्यसैले आचार्यहरूले सुषुप्तिमा अज्ञान, सुख र आत्मालाई प्रकाशित गर्ने अविद्यावृत्ति छ भनी बताउनुभएको छ। अविद्यावृत्ति भन्नेबित्तिकै यो साक्षीको वृत्ति हो भन्ने बुझ्नुपर्दछ। त्यसैले सुषुप्तिमा केही नजानेको अनि सुतिरहेकोलाई जान्ने जीव होइन, साक्षी नै हो। जीवभाव त अन्तःकरण उपाधिको अभावमा लीन भइसकेको छ। त्यही जीव लीन

भई सुतेको कुरालाई साक्षीले प्रकाशित गरिरहेको छ। त्यसैले श्रीधरस्वामी भन्नुहुन्छ– **दर्शनस्पर्शनादिविशेषज्ञानशून्यस्य सुखात्मनः सुषुप्तिसाक्षिणः स्मृतिर्नोऽस्माकं भवति** अर्थात् हामीलाई जागिसकेपछि दर्शन, स्पर्श आदि विशेष वृत्तिरूप ज्ञानहरूले रहित अखण्डज्ञानरूप र सुखस्वरूप साक्षीको स्मृति हुने गर्दछ। यदि सुषुप्तिमा साक्षीको नित्यज्ञानरूपता प्रकट नभएको भए हरेक व्यक्तिले सुतेर उठिसकेपछि यस वेलाभरि आफू हराएको या मरेको बोध गर्नुपर्ने हो, अनि आफ्नो अस्तित्व नै समाप्त हुने गरी सुषुप्तिमा जान नचाहनुपर्ने हो, तर सुषुप्तिबाट जागेको व्यक्तिलाई न त अहिलेसम्म आफू हराएको भन्ने लाग्छ, न त ऊ त्यसबाट डराउँछ। बरु खान, खेल्न अनि परिवारसँग कुराकानी पनि गर्न छाडी हरेक व्यक्तिले सुषुप्ति अर्थात् ढुक्कको निद्रालाई रुचाएको देखिन्छ। यो वेलामा व्यक्तिले आफ्नो यथार्थ साक्षीरूपताको बोध गर्दछ र त्यसबाट उसलाई परम आनन्द आउने हुनाले सबै संसारलाई छाडी ऊ सुत्न खोज्दछ। उसो भए सुषुप्तिबाट जागिसकेको व्यक्तिले आफ्नो स्वरूपलाई अनि त्यो परम आनन्दलाई पनि किन स्पष्टतः नजानेको त ? भन्ने शङ्काको उत्तरमा श्रीधर स्वामी भन्नुहुन्छ– **विषयसम्बन्धाभावान्न तु स्पष्टः** अर्थात् सुषुप्तिको ज्ञान स्पष्ट नहुने भएकाले यसो भएको हो। यसको कारण हो, **विषयसम्बन्धाभाव** अर्थात् विषयसँग सम्बन्ध नहुनु। जीवलाई कुनै पनि विषयको स्पष्टतः ज्ञान हुनका लागि त्यो विषयसँग अन्तःकरणवृत्तिको स्पष्ट सम्बन्ध हुनुपर्दछ। यसरी अन्तःकरणवृत्तिले त्यो विषयलाई प्रकाशित गर्नु नै जीवलाई विषयको ज्ञान हुनु हो। सुषुप्तिमा अन्तःकरण पनि छैन, अनि त्यसले साक्षी आत्मा एवं नित्य सुखलाई विषय गर्न पनि सकेको छैन। अविद्यावृत्तिद्वारा हुने साक्षीको ज्ञानको स्पष्ट संस्कार अन्तःकरणमा बस्दैन। त्यसैले प्राणीहरूले प्रतिदिन अनुभव गरिरहेको नित्यसुखरूप आत्मालाई पनि बिर्सिरहेका छन्। यदि सुषुप्तिको चिन्तनद्वारा जाग्रत्कालमा नै अन्तःकरणद्वारा नित्यसुखरूप साक्षी आत्मालाई जान्न सकियो भने त्यो बोध सधैँ स्पष्ट रहिरहन्छ। यसरी सुषुप्ति अवस्थामा निर्विकार साक्षी आत्माको उपलब्धि हुन्छ र त्यहीद्वारा नै सुषुप्तिमा इन्द्रिय, अन्तःकरण, अहङ्कार आदिको अभाव प्रकाशित हुन्छ भनी यो श्लोकमा सुषुप्तिसाक्षीको रूपमा नारायणतत्त्वको उपदेश गरिएको छ।

**यर्ह्यब्जनाभचरणैषणयोरुभक्त्या**
**चेतोमलानि विधमेद् गुणकर्मजानि।**
**तस्मिन् विशुद्ध उपलभ्यत आत्मतत्त्वं**
**साक्षाद् यथामलदृशोः सवितृप्रकाशः॥ ४०॥**

**पदार्थ–**
**यर्हि** = जब (मानिसले)
**अब्जनाभचरणैषणया** = भगवान्‌को चरणकमल प्राप्तिको इच्छाले
**उरुभक्त्या** = तीव्र भक्तिद्वारा
**गुणकर्मजानि** = गुण र कर्मबाट उत्पन्न भएको
**चेतोमलानि** = चित्तको मललाई
**विधमेत्** = नष्ट गर्दछ
**तस्मिन्** = त्यो चित्त
**विशुद्धे** = शुद्ध भएपछि
**साक्षात्** = साक्षात्
**आत्मतत्त्वं** = आत्मस्वरूप
**उपलभ्यते** = प्राप्त हुन्छ

**यथा** = जसरी
**अमलदृशोः** = निर्मल आँखाद्वारा
**सवितृप्रकाशः** = सूर्यको प्रकाश प्राप्त हुन्छ

**वाक्यार्थ–** जब मानिसले भगवान्‌को चरणकमल प्राप्तिको इच्छाले तीव्र भक्ति गर्दछ, त्यसपछि उसको चित्तका गुण र कर्मबाट उत्पन्न सारा मलहरू नष्ट हुन्छन्। अनि त्यो शुद्ध चित्तद्वारा आत्मतत्त्व प्राप्त हुन्छ, जसरी निर्मल नेत्रद्वारा निर्बाधरूपमा सूर्यको प्रकाश प्राप्त हुन्छ।

**राजोवाच** (राजा निमिले भने)

**कर्मयोगं वदत नः पुरुषो येन संस्कृतः।**

**विधूयेहाशु कर्माणि नैष्कर्म्यं विन्दते परम्॥ ४१॥**

**पदार्थ–**
**पुरुषः** = जीवले
**येन** = जुन कर्मद्वारा
**इह** = यो जन्ममा नै
**आशु** = चाँडै
**कर्माणि** = कर्महरूलाई
**विधूय** = त्यागेर
**संस्कृतः** = शुद्ध भएर
**परं** = उत्कृष्ट
**नैष्कर्म्यं** = कर्मनिवृत्तिबाट हुने ज्ञानलाई
**विन्दते** = प्राप्त गर्दछ
**कर्मयोगं** = त्यस्तो कर्मयोग
**नः** = हामीहरूलाई
**वदत** = बताउनुहोस्

**वाक्यार्थ–** जीवले जुन कर्मद्वारा यही जन्ममा नै कर्मबाट मुक्त भएर शुद्ध भई परम नैष्कम्यरूप ज्ञानलाई प्राप्त गर्दछ, त्यस्तो कर्मयोग हामीहरूलाई बताउनुहोस्।

**एवं प्रश्नमृषीन् पूर्वमपृच्छं पितुरन्तिके।**

**नाब्रुवन् ब्रह्मणः पुत्रास्तत्र कारणमुच्यताम्॥ ४२॥**

**पदार्थ–**
**एवं** = यसै गरी
**पितुः** = पिताजीको
**अन्तिके** = नजिकमा
**पूर्वम्** = पहिले
**ऋषीन्** = सनत्कुमार आदि ऋषिहरूलाई (मैले)
**प्रश्नं** = प्रश्न
**अपृच्छं** = सोधेको थिएँ
**ब्रह्मणः** = ब्रह्माजीका
**पुत्राः** = छोरा सनत्कुमारहरूले
**न अब्रुवन्** = उत्तर दिएनन्
**तत्र** = त्यसमा
**कारणं** = कारण के होला
**उच्यताम्** = बताउनुहोस्

**वाक्यार्थ–** यसै गरी पहिले मैले यही प्रश्न पिताजीको नजिकमा सनत्कुमार आदि ऋषिहरूलाई सोधेको थिएँ, तर ती ब्रह्माजीका छोरा सनत्कुमार आदिले उत्तर दिएनन्। यसमा के कारण होला ? बताउनुहोस्।

**आविर्होत्र उवाच** (आविर्होत्रले भने)

**कर्माकर्म विकर्मेति वेदवादो न लौकिकः।**

**वेदस्य चेश्वरात्मत्वात् तत्र मुह्यन्ति सूरयः॥ ४३॥**

**पदार्थ—**
**वेदस्य** = वेद
**ईश्वरात्मत्वात्** = ईश्वरस्वरूप भएको हुनाले
**कर्म** = विहित कर्म
**अकर्म** = निषिद्ध कर्म र
**विकर्म** = विहित कर्मको उल्लङ्घन
**इति** = यी तीनै कुरा
**वेदवादः** = वेदबाट मात्र जान्न सकिन्छ
**लौकिकः न** = लौकिक परम्पराबाट जान्न सकिँदैन
**तत्र** = कर्म, अकर्म र विकर्मको त्यस विषयमा
**सूरयः** = विद्वान्हरू पनि
**मुह्यन्ति** = मोहमा पर्दछन्

**वाक्यार्थ—** वेद ईश्वरस्वरूप भएको हुनाले विहितकर्म, निषिद्धकर्म र विहित कर्मको उल्लङ्घन यी तीनै कुरा वेदबाट मात्र जानिन्छ र लौकिक परम्पराबाट जान्न सकिँदैन। कर्म, अकर्म र विकर्मको विषयमा विद्वान्हरू पनि मोहमा पर्दछन्।

**परोक्षवादो वेदोऽयं बालानामनुशासनम्।**
**कर्ममोक्षाय कर्माणि विधत्ते ह्यगदं यथा॥ ४४॥**

**पदार्थ—**
**परोक्षवादः** = परोक्षवादात्मक
**अयं** = यो
**वेदः** = वेदले
**कर्ममोक्षाय** = कर्मनिवृत्तिको लागि
**बालानां** = बालकहरूलाई (प्रलोभन देखाएर)
**अगदं यथा** = जसरी औषधि खुवाइन्छ (त्यस्तै अज्ञानीहरूलाई)
**हि** = निश्चय नै
**अनुशासनं** = स्वर्ग आदिको प्रलोभन देखाएर
**कर्माणि** = उत्तम कर्महरू
**विधत्ते** = विधान गर्दछ

**वाक्यार्थ—** यो वेद परोक्षवादात्मक छ, यसले अज्ञानीहरूलाई कर्मबाट निवृत्त गराउनको लागि स्वर्ग आदिको प्रलोभन देखाएर उत्तम कर्मको विधान गर्दछ, जसरी बालकलाई प्रलोभन देखाएर औषधि खुवाइन्छ।

**नाचरेद् यस्तु वेदोक्तं स्वयमज्ञोऽजितेन्द्रियः।**
**विकर्मणा ह्यधर्मेण मृत्योर्मृत्युमुपैति सः॥ ४५॥**

**पदार्थ—**
**यः तु** = जो
**अजितेन्द्रियः** = इन्द्रियको वशीभूत
**अज्ञः** = अज्ञानीले
**वेदोक्तं** = वेदले बताएको कर्मलाई
**स्वयं** = आफूले
**न आचरेत्** = गर्दैन भने
**सः** = त्यो व्यक्ति
**विकर्मणा** = कर्मको अनाचरणरूप
**अधर्मेण** = अधर्मले
**हि** = निश्चय नै
**मृत्योः** = मृत्युबाट
**मृत्युं** = मृत्युमा
**उपैति** = प्राप्त हुन्छ

**वाक्यार्थ—** जो इन्द्रियको वशमा भएको अज्ञानी मानिस वेदले बताएको कर्मलाई गर्दैन, ऊ विहित कर्म नगरेको पापका कारण मृत्युपछि फेरि मृत्युमा प्राप्त भइरहन्छ।

**वेदोक्तमेव कुर्वाणो निःसङ्गोऽर्पितमीश्वरे ।**
**नैष्कर्म्यां लभते सिद्धिं रोचनार्था फलश्रुतिः ॥ ४६ ॥**

**पदार्थ–**
**निःसङ्गः** = फलको अभिलाषा नलिएर
**ईश्वरे** = ईश्वरमा
**अर्पितम्** = अर्पण गरिएको
**वेदोक्तं** = वेदले बताएको कर्मलाई
**कुर्वाणः** = गरिरहेको मानिसले
**नैष्कर्म्यां** = कर्मनिवृत्तियुक्त ज्ञानरूप
**सिद्धिं एव** = सिद्धिलाई
**लभते** = प्राप्त गर्दछ
**फलश्रुतिः** = वेदले जुन स्वर्ग आदि फल बताएको छ त्यो
**रोचनार्था** = कर्ममा रुचि गराउनका लागि हो

**वाक्यार्थ–** फलको इच्छा नलिएर ईश्वरमा अर्पण गर्दै वेदले बताएको कर्म गर्ने मानिसले ज्ञानरूप सिद्धि प्राप्त गर्दछ, वेदले जो स्वर्ग आदि फल बताएको छ, त्यो मानिसलाई कर्ममा रुचि गराउनका लागि हो।

**विवरण–** यस प्रसङ्गमा कर्मबाट नैष्कर्म्यमा पुग्नुपर्ने उपदेश गरिएको छ। वेदको परम तात्पर्य आत्माको वास्तविक स्वरूपमा अवस्थित गराउनु नै हो। आत्मा अकर्ता अभोक्ता भएकाले अकर्ता आत्मा भएर रहनु नै परम पुरुषार्थ हो। वेदका कर्मकाण्ड, उपासनाकाण्ड र ज्ञानकाण्ड मध्ये वेदको परम तात्पर्यलाई बताउने ज्ञानकाण्डले यही नैष्कर्म्य भावलाई नै प्रतिपादित गरेको छ। कर्मकाण्डभागद्वारा कर्महरूको विधान गरिनु पनि नैष्कर्म्यभावको विरोधी कुरा होइन भनी यहाँ आविर्होत्रले बताएका छन्। उनी भन्छन्– **कर्ममोक्षाय** अर्थात् कर्मबाट छुटाउनकै लागि कर्मको विधान भएको हो। गीताभाष्यको सुरुमा भगवत्पाद श्रीशङ्कराचार्यले कर्मबाट नभई कर्मत्यागबाट नै मोक्ष मिल्ने कुरा बताउनुभएको छ। सम्पूर्ण कर्म अनि त्यसका फलहरूलाई पनि त्यागी निरन्तरको आत्मनिष्ठाबाट मात्र मोक्ष मिल्ने उहाँको भनाइ छ– **तच्च सर्वकर्मसंन्यासपूर्वकाद् आत्मज्ञाननिष्ठारूपाद् धर्माद् भवति**। कामनाविना कुनै पनि कर्म हुँदैन अनि आफ्नो आनन्दरूपतालाई नजान्नाले नै मनुष्यको मनमा विषयसुखको कामना हुन्छ। यसरी अज्ञानबाट कामना अनि कामनाबाट कर्म हुने देखिन्छ। अविद्या अनि कामनाको बन्धनबाट मात्र कर्म हुने हुनाले त्यो ज्ञान र मोक्षसँग कसरी सम्बन्धित हुन सक्छ ? त्यसैले कर्म नभई कर्म र कामनाको त्याग नै ज्ञानमा पुऱ्याउने साधन हुन सक्छन् भन्ने शङ्कराचार्यको आशय हो। उसो भए वैदिक कर्मयोगको के प्रयोजन त ? भन्ने शङ्कामा उहाँ भन्नुहुन्छ– निष्कामभावले ईश्वरार्पणबुद्धिले कर्म गरियो भने त्यसले चित्त शुद्ध हुन्छ र कर्म गर्ने व्यक्ति ज्ञानको अधिकारी हुन्छ। यही नै कर्मको सार्थकता हो। बृहदारण्यकोपनिषद् (४।४।२२)मा पनि कर्म आदि गर्नुको मुख्य फल **विविदिषा** अर्थात् आत्मा जान्ने इच्छा उत्पन्न गर्नु हो भनी बताइएको छ– **तमेतं वेदानुवचनेन ब्राह्मणाः विविदिषन्ति यज्ञेन दानेन तपसानाशकेन,** अर्थात् यो आत्मालाई ब्रह्मजिज्ञासु ब्राह्मणहरूले वेदको अध्ययन, यज्ञ, दान र तपस्याद्वारा जान्न खोज्दछन्। जब आत्मज्ञानको तीव्र इच्छा उत्पन्न हुन्छ तब पूर्णरूपले विरक्त भएको त्यो अधिकारीको लागि कर्महरूको विधिनिषेधमय बन्धन झन्झटिलो हुन्छ। त्यसैले विरक्त व्यक्तिका लागि उपनिषद्मा पुत्रैषणा, वित्तैषणा र लोकैषणाको त्यागपूर्वक

आत्मचिन्तन गर्ने र कुनै पनि वस्तुको सङ्ग्रह नगरी भिक्षान्नले पनि जीवन चलाउने उपदेश दिइएको छ– **पुत्रैषणायाश्च वित्तैषणायाश्च लोकैषणायाश्च व्युत्थायाथ भिक्षाचर्यां चरन्ति** (बृहदारण्यकोपनिषद् ३।५।१)। अतः तीनै एषणा अर्थात् कामना र सबै कर्मबाट नछुटुञ्जेलसम्म नै कर्महरूको विधान गरिएको हो। यहाँ आविर्होत्रले **अगद** अर्थात् औषधि खुवाउनुलाई यसको दृष्टान्त बनाएका छन्। जसरी बच्चालाई औषधि खुवाउनु पर्‍यो भने त्यसलाई मिठाइको लोभले खुवाइन्छ, किनभने बच्चोले मिठाइ नदिएसम्म औषधिलाई खाँदै खाँदैन। **खण्डलड्डुकादिभिः प्रलोभयन्** अर्थात् लड्डुका टुक्रा आदिबाट लोभ्याउँदै बच्चालाई औषधि खुवाए झैँ कर्मकाण्डभागले पनि स्वर्ग आदि फलको लोभ देखाउँदै अज्ञानी प्राणीहरूलाई सुकर्ममा प्रवृत्त गराएको छ। श्रीधर स्वामी लेख्नुहुन्छ– **अगदपानस्य तल्लाभः न प्रयोजनं अपि तु आरोग्यम्** अर्थात् औषधि खानुको फल मिठाइ खान पाउनु होइन, अपि तु स्वस्थ हुनु हो, तर बच्चोले लड्डुको चाहनामा नै औषधि खाएको हुन्छ। त्यसै गरी वेदोक्त कर्मद्वारा चित्तशुद्धि गराई नैष्कर्म्यभावमा पुग्न सघाउनु नै कर्मको प्रयोजन हो, तर अज्ञानी व्यक्तिले स्वर्ग आदिको लोभमा फसी त्यसैलाई कर्मको परम फल भन्ने ठान्दछ। यसरी कर्मको फल नैष्कर्म्य नै हो भन्ने सिद्ध हुन्छ।

यहाँ के शङ्का हुन सक्छ भने यदि कर्मको फल नैष्कर्म्य नै हो भने पहिल्यै कर्मलाई त्यागिदिए भइहाल्यो, कर्म गरेर फेरि त्यसलाई छोड्ने झन्झट किन गर्ने ? यसको उत्तरमा आविर्होत्र भन्दछन्– अज्ञानी जीवले यदि वेदोक्त सत्कर्म गरेन भने त्यो विकर्म अर्थात् असत् कर्ममा फस्दछ। अज्ञानी जीव एकछिन पनि केही काम नगरी बस्न सक्दैन। भगवान् श्रीकृष्णले बताउनुभएको छ– **न हि कश्चित् क्षणमपि जातु तिष्ठत्यकर्मकृत्** (भगवद्गीता ३।५) अर्थात् अज्ञानी व्यक्तिको चित्त अकर्ता आत्मामा स्थित नभएकाले उसले केही न केही गरिरहन्छ। अझ भगवान्ले त अज्ञानीहरूले कर्म गर्दिनँ भनी ढिपी गर्नुमा पनि धर्मत्यागरूपी असत् कर्म भइरहेकै बुझ्नुपर्दछ भनी उपदेश गर्नुभएको छ– **अकर्मणि च कर्म यः**। त्यसैले अज्ञानीले म कर्म गर्दिनँ भनी आग्रह गर्नु हुँदैन। उसले यदि सत् कर्म गरेन भने व्यर्थका असत् कर्महरू गर्दछ अनि स्वधर्मत्यागरूपी असत् कर्महरू त उसबाट क्षण-क्षण भइरहेकै हुन्छन्। यसबाट उसको अधःपतन मात्र हुन्छ। त्यसैले पहिले कर्म नगरी यत्तिकै नैष्कर्म्य प्राप्त गर्न सकिँदैन। यसैलाई **न कर्मणामनारम्भान्नैष्कर्म्यं पुरुषोऽश्नुते** (भगवद्गीता ३।४) अर्थात् कुनै पुरुषले पनि कर्म नगरी नैष्कर्म्य स्थिति प्राप्त गर्न सक्दैन भनिएको छ। यसकारण नैष्कर्म्यलाई प्राप्त गर्न चाहिँ कर्म गर्नु नै पर्ने हुन्छ। ईश्वरार्पण बुद्धिले कर्म गर्‍यो र स्वर्ग आदि फल बताउने श्रुतिहरूलाई चाहिँ **रोचनार्था** अर्थात् रुचि उत्पन्न गर्नका लागि बताइएको ठानी त्यसमा आसक्ति गरेन भने त्यो व्यक्तिले चित्तशुद्धिद्वारा नैष्कर्म्य सिद्धिलाई प्राप्त गर्दछ। कर्म र नैष्कर्म्यको यही सम्बन्ध यहाँ प्रतिपादन गरिएको छ।

**य आशु हृदयग्रन्थिं निर्जिहीर्षुः परात्मनः।**
**विधिनोपचरेद् देवं तन्त्रोक्तेन च केशवम्॥ ४७॥**

**पदार्थ–**
**यः** = जो
**परात्मनः** = परात्मारूप जीवको
**हृदयग्रन्थिं** = हृदयको (अध्यासरूप) ग्रन्थिलाई
**आशु** = चाँडै नै
**निर्जिहीर्षुः** = निवारण गर्न चाहन्छ, त्यसले
**तन्त्रोक्तेन** = तन्त्रशास्त्रले बताएको
**विधिना च** = विधिद्वारा
**देवं** = देवश्रेष्ठ
**केशवं** = भगवान् श्रीहरिलाई
**उपचरेत्** = पूजा गरोस्

**वाक्यार्थ–** जसले जीवको अध्यासरूप हृदयग्रन्थिलाई निवारण गर्न चाहन्छ उसले तन्त्रशास्त्रको विधिद्वारा भगवान् श्रीहरिको पूजा गरोस्।

**लब्धानुग्रह आचार्यात् तेन सन्दर्शितागमः।**
**महापुरुषमभ्यर्चेन्मूर्त्याभिमतयात्मनः॥ ४८॥**

**पदार्थ–**
**आचार्यात्** = आचार्य (गुरु)बाट
**लब्धानुग्रहः** = मन्त्र, दीक्षा आदि पाइसकेको र
**तेन** = ती आचार्यद्वारा
**सन्दर्शितागमः** = तन्त्रमा बताइएको पूजाविधि सिकेको व्यक्तिले
**आत्मनः** = आफूलाई
**अभिमतया** = मन पर्ने
**मूर्त्या** = मूर्तिको स्थापनाद्वारा
**महापुरुषं** = भगवान् हरिको
**अभ्यर्चेत्** = पूजा गरोस्

**वाक्यार्थ–** गुरुबाट मन्त्रदीक्षा आदि लिइसकेपछि आचार्यबाट तन्त्रोक्त पूजाविधि सिकी आफूलाई मन पर्ने मूर्तिको स्थापना गरेर त्यसमा भगवान् हरिको पूजा गरोस्।

**शुचिः सम्मुखमासीनः प्राणसंयमनादिभिः।**
**पिण्डं विशोध्य सन्न्यासकृतरक्षोऽर्चयेद्धरिम्॥ ४९॥**

**पदार्थ–**
**शुचिः** = पवित्र भएर
**सम्मुखं** = मूर्तिको नजिक
**आसीनः** = बसेर
**प्राणसंयमनादिभिः** = प्राणायाम आदिद्वारा
**पिण्डं** = शरीरलाई
**विशोध्य** = शुद्ध गरेर
**संन्यासकृतरक्षः** = न्यासद्वारा अङ्गरक्षा पनि गरी
**हरिम्** = भगवान् श्रीहरिलाई
**अर्चयेत्** = पूजा गरोस्

**वाक्यार्थ–** स्नान, आचमन आदिद्वारा पवित्र भएर मूर्तिको नजिक बसी नाडीशोधक प्राणायामद्वारा शरीरलाई पनि शुद्ध गरी न्यासद्वारा अङ्गरक्षा गरोस् र भगवान् श्रीहरिलाई पूजा गरोस्।

**अर्चादौ हृदये चापि यथालब्धोपचारकैः।**
**द्रव्यक्षित्यात्मलिङ्गानि निष्पाद्य प्रोक्ष्य चासनम्॥ ५०॥**
**पाद्यादीनुपकल्प्याथ सन्निधाप्य समाहितः।**
**हृदादिभिः कृतन्यासो मूलमन्त्रेण चार्चयेत्॥ ५१॥**

**पदार्थ—**
**द्रव्यक्षित्यात्मलिङ्गानि** = पूजासामग्री, पृथिवी, आफू र मूर्तिलाई पनि
**निष्पाद्य** = पूजनयोग्य बनाएर
**आसनं च** = आसनलाई पनि
**प्रोक्ष्य** = सेचन गरी
**पाद्यादीन् च** = अर्घ्य, पाद्य आदि सामग्रीहरू
**उपकल्प्य** = तयार गरेर
**अथ** = त्यसपछि
**समाहितः** = एकाग्रचित्त भई
**सन्निधाप्य** = मूर्तिमा भगवान्को आवाहन गरी
**हृदादिभिः** = हृदय आदि मन्त्रद्वारा
**कृतन्यासः** = अङ्गन्यास गर्नु र
**मूलमन्त्रेण** = मूलमन्त्रले
**यथालब्धोपचारकैः** = देश, काल अनुसार प्राप्त पूजा सामग्रीद्वारा
**अर्चादौ** = प्रतिमामा
**हृदये च अपि** = हृदयमा पनि
**अर्चयेत्** = पूजा गरोस्

**वाक्यार्थ—** पूजासामग्री, भूमि, आफू र मूर्तिलाई समेत पूजनयोग्य बनाएर आसनलाई पनि सेचन गरोस् त्यसपछि अर्घ्य, पाद्य आदि पूजासामग्री तयार गरी एकाग्रचित्त भएर मूर्तिमा भगवान्को आवाहन गरोस् फेरि अङ्गन्यास गरेर मूलमन्त्र (ॐ नमो भगवते वासुदेवाय)ले देश, काल अनुसार प्राप्त पूजासामग्रीले प्रतिमामा र हृदयमा पनि पूजा गरोस्।

**साङ्गोपाङ्गां सपार्षदां तां तां मूर्तिं स्वमन्त्रतः।**
**पाद्यार्घ्याचमनीयाद्यैः स्नानवासोविभूषणैः॥ ५२॥**
**गन्धमाल्याक्षतस्रग्भिर्धूपदीपोपहारकैः।**
**साङ्गं सम्पूज्य विधिवत् स्तवैः स्तुत्वा नमेद्धरिम्॥ ५३॥**

**पदार्थ—**
**साङ्गोपाङ्गां** = अङ्ग र आयुध आदि उपाङ्गले युक्त
**सपार्षदां** = पार्षदसहित
**तां तां** = ती-ती आफ्ना अभीष्ट
**मूर्तिं** = भगवान्को प्रतिमालाई
**स्वमन्त्रतः** = तत्-तत् मूलमन्त्रले
**पाद्यार्घ्याचमनीयाद्यैः** = पाद्य, अर्घ्य, आचमनीय आदि
**स्नानवासोविभूषणैः** = स्नान, वस्त्र र आभूषण
**गन्धमाल्याक्षतस्रग्भिः** = चन्दन, फूल, अक्षता, माला तथा
**धूपदीपोपहारकैः** = धूप, दीप र नैवेद्यहरूद्वारा पनि पूजा गरोस् अनि
**साङ्गं** = परिवारसहित
**हरिम्** = भगवान् श्रीहरिलाई
**विधिवत्** = विधिपूर्वक
**सम्पूज्य** = पूजा गरेर
**स्तवैः** = स्तोत्रहरूद्वारा
**स्तुत्वा** = स्तुति गरेर
**नमेत्** = नमस्कार गरोस्

**वाक्यार्थ—** अङ्ग, आयुध आदि उपाङ्ग र पार्षद आदिले सहित आ-आफ्ना अभीष्ट मूर्तिलाई तत्-तत् मूल मन्त्रले, पाद्य, अर्घ्य, आचमनीय, स्नान, वस्त्र, आभूषण, चन्दन, फूल, अक्षता, माला, धूप, दीप र नैवेद्य आदि पूजा सामग्रीद्वारा पूजा गरोस् अनि परिवारसहित भगवान् श्रीहरिलाई विविध स्तोत्रहरूद्वारा स्तुति गरी नमस्कार गरोस्।

**आत्मानं तन्मयं ध्यायन् मूर्तिं सम्पूजयेद्धरेः।**
**शेषामाधाय शिरसा स्वधाम्न्युद्वास्य सत्कृतम्॥ ५४॥**

**पदार्थ–**
**आत्मानं** = आफूलाई
**तन्मयं** = उहाँमा तन्मय हुने गरी
**ध्यायन्** = चिन्तन गर्दै
**हरेः** = भगवान् श्रीहरिको
**मूर्तिं** = मूर्तिलाई
**सम्पूजयेत्** = पूजा गरोस् र
**शेषां** = अवशिष्ट निर्माल्यलाई
**शिरसा** = शिरले
**आधाय** = ग्रहण गरेर (राखेर)
**सत्कृतं** = पूजा गरिएको
**स्वधाम्नि** = आफ्नै धाममा वा सिंहासनमा
**उद्वास्य** = स्थापित गरेर (पूजा समाप्त गर्नू)

**वाक्यार्थ–** आफैँलाई भगवान्मय सम्झँदै भगवान्को पूजा गर्नू र अवशिष्ट निर्माल्यलाई शिरमा राखेर पूजा गरिएको भगवान्लाई यथास्थानमा स्थापित गरी पूजा समाप्त गर्नू।

**एवमग्न्यर्कतोयादावतिथौ हृदये च यः।**
**यजतीश्वरमात्मानमचिरान्मुच्यते हि सः॥ ५५॥**

**पदार्थ–**
**यः** = जो
**एवं** = यसरी
**अग्न्यर्कतोयादौ** = अग्नि, सूर्य, जल आदिमा
**अतिथौ** = अथितिमा र
**हृदये च** = हृदयमा पनि
**आत्मानं** = सबैको आत्मारूप
**ईश्वरं** = ईश्वर श्रीहरिलाई
**यजति** = पूजा गर्दछ
**सः** = त्यो व्यक्ति
**हि** = निश्चय नै
**अचिरात्** = चाँडै नै
**मुच्यते** = मुक्त हुन्छ

**वाक्यार्थ–** जो व्यक्ति एवं रीतले अग्नि, सूर्य, जल आदिमा तथा अतिथि र हृदयमा पनि अन्तर्यामी श्रीहरिको पूजा गर्दछ, त्यो व्यक्ति तुरुन्त मुक्त हुन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां एकादशस्कन्धे तृतीयोऽध्यायः॥ ३॥**

# अथ चतुर्थोऽध्यायः

## भगवान्‌का अवतारहरू

**राजोवाच** (राजा निमिले भने)

**यानि यानीह कर्माणि यैर्यैः स्वच्छन्दजन्मभिः।**

**चक्रे करोति कर्ता वा हरिस्तानि ब्रुवन्तु नः॥ १॥**

**पदार्थ—**
**हरिः** = भगवान् श्रीहरिले
**यैः यैः** = जो-जो
**स्वच्छन्दजन्मभिः** = इच्छा अनुसार लिइएका
अवतारहरूद्वारा
**इह** = यो लोकमा
**यानि यानि** = जुन-जुन
**कर्माणि** = कर्महरू
**चक्रे** = गर्नुभयो
**करोति** = गर्नुहुन्छ र
**कर्ता वा** = गर्नुहुनेछ
**तानि** = ती सबै
**नः** = हामीहरूलाई
**ब्रुवन्तु** = बताउनुहोस्

**वाक्यार्थ—** भगवान् श्रीहरिले इच्छा अनुसार जुन-जुन अवतारहरू लिएर यो लोकमा जे-जे काम गर्नुभयो, जे गर्नुहुन्छ र जे गर्नुहुनेछ, ती सबै कुरा हामीहरूलाई बताउनुहोस्।

**द्रुमिल उवाच** (योगीश्वर द्रुमिलले भने)

**यो वा अनन्तस्य गुणाननन्ताननुक्रमिष्यन् स तु बालबुद्धिः।**

**रजांसि भूमेर्गणयेत् कथञ्चित् कालेन नैवाखिलशक्तिधाम्नः॥ २॥**

**पदार्थ—**
**यः** = जो
**अनन्तस्य** = अनन्त भगवान्‌को
**अनन्तान्** = अनन्त
**गुणान्** = गुणहरूलाई
**अनुक्रमिष्यन्** = एक-एक गरेर गन्न चाहन्छ
**सः तु** = त्यो व्यक्ति त
**वै** = निश्चय नै
**बालबुद्धिः** = मूर्ख हो
**कालेन** = धेरै समय लगाएर
**कथञ्चित्** = केही गरी कसैले
**भूमेः** = पृथिवीको
**रजांसि** = धुलाका कणहरूलाई
**गणयेत्** = गणना गर्न सक्ला
**अखिलशक्तिधाम्नः** = अचिन्त्य शक्तिको खानी भगवान्‌का गुणहरूलाई
**न एव** = गणना गर्न सक्दैन

**वाक्यार्थ—** जसले अनन्त भगवान्‌का अनन्त गुणहरूलाई एक-एक गरेर गन्न चाहन्छ त्यो व्यक्ति मूर्ख हो, बरु धेरै समय लगाएर केही गरी पृथिवीका धुलाका कणहरू गन्न सकिएला, तर भगवान्‌का गुणहरू गनेर सकिँदैन।

**भूतैर्यदा पञ्चभिरात्मसृष्टैः पुरं विराजं विरचय्य तस्मिन्।**

**स्वांशेन विष्टः पुरुषाभिधानमवाप नारायण आदिदेवः॥ ३॥**

**पदार्थ—**
**आदिदेवः** = सबैका कारण देवता
**नारायणः** = भगवान् नारायण नै
**यदा** = जब
**आत्मसृष्टैः** = आफैँले सृष्टि गरेका
**पञ्चभिः भूतैः** = पञ्चमहाभूतबाट
**विराजं पुरं** = ब्रह्माण्डनामक शरीरलाई
**विरचय्य** = रचना गरेर
**तस्मिन्** = त्यसमा
**स्वांशेन** = अन्तर्यामी रूपले
**विष्टः** = प्रवेश गर्नुभयो, त्यसपछि
**पुरुषाभिधानं** = पुरुष भन्ने नाम
**अवाप** = प्राप्त गर्नुभयो

**वाक्यार्थ—** सबैका कारण भएका देवता भगवान् नारायणले नै जब आफैँले रचना गरेका पञ्चमहाभूतद्वारा ब्रह्माण्डनामक शरीरको रचना गर्नुभयो र त्यसमा अन्तर्यामीरूपले प्रवेश गर्नुभयो, त्यसपछि उहाँको नाम पुरुष भयो।

**यत्काय एष भुवनत्रयसन्निवेशो**
**यस्येन्द्रियैस्तनुभृतामुभयेन्द्रियाणि ।**
**ज्ञानं स्वतः श्वसनतो बलमोज ईहा**
**सत्त्वादिभिः स्थितिलयोद्भव आदिकर्ता ॥ ४ ॥**

**पदार्थ—**
**यत्काये** = जसको शरीरमा
**एषः** = यो
**भुवनत्रयसन्निवेशः** = तीनै लोक अडिएको छ
**यस्य** = जसका
**इन्द्रियैः** = इन्द्रियहरूद्वारा
**तनुभृतां** = शरीरधारी जीवका
**उभयेन्द्रियाणि** = ज्ञानेन्द्रिय र कर्मेन्द्रिय दुबै चलेका छन्,
**स्वतः** = (जसको) स्वरूपभूतज्ञानद्वारा
**ज्ञानं** = ज्ञानको सञ्चार भएको छ
**श्वसनतः** = प्राणवायुद्वारा
**बलं** = (सबैमा) देहशक्ति
**ओजः** = इन्द्रियशक्ति र
**ईहा** = चेष्टा प्राप्त भइरहेको छ
**सत्त्वादिभिः** = सत्त्व आदि गुणहरूद्वारा
**स्थितिलयोद्भवे** = संसारको स्थिति, लय र उत्पत्तिमा
**आदिकर्ता** = सबैका आदिकारण नारायण नै हुनुहुन्छ

**वाक्यार्थ—** जसको शरीरमा नै यो तीनै लोक अडिएको छ, जसका इन्द्रियद्वारा सम्पूर्ण देहधारीहरूका ज्ञानेन्द्रिय र कर्मेन्द्रिय चलेका छन्, जसको स्वप्रकाश ज्ञानद्वारा जताततै ज्ञानको सञ्चार भएको छ, जसको प्राणद्वारा प्राणीहरूलाई देहशक्ति, इन्द्रियशक्ति र चेष्टा प्राप्त भइरहेको छ, साथै जसको सत्त्व, रज र तमोगुणबाट संसारको पालन, उत्पत्ति र संहार हुन्छ, त्यस्ता सबैका आदिकारण नारायण नै हुनुहुन्छ।

**आदावभूच्छतधृती रजसास्य सर्गे**
**विष्णुः स्थितौ क्रतुपतिर्द्विजधर्मसेतुः ।**
**रुद्रोऽप्ययाय तमसा पुरुषः स आद्य**
**इत्युद्भवस्थितिलयाः सततं प्रजासु ॥ ५ ॥**

**पदार्थ–**
**आदौ** = पहिले (जसको)
**रजसा** = रजोगुणद्वारा
**अस्य** = यो जगत्‌को
**सर्गे** = सृष्टिको लागि
**शतधृतीः** = ब्रह्माजी
**अभूत्** = उत्पन्न हुनुभयो
**स्थितौ** = (फेरि सत्त्वगुणद्वारा) संसारको स्थितिका लागि
**क्रतुपतिः** = यज्ञका रक्षक
**द्विजधर्मसेतुः** = ब्राह्मण र ब्राह्मणधर्मका रक्षक
**विष्णुः** = विष्णु हुनुभयो
**तमसा** = फेरि तमोगुणद्वारा
**अप्ययाय** = संसारको संहारका लागि
**रुद्रः** = रुद्र उत्पन्न हुनुभयो
**इति** = यसरी (ब्रह्मा, विष्णु र रुद्रलाई निमित्त बनाएर)
**प्रजासु** = लोकमा
**उद्भवस्थितिलयाः** = उत्पत्ति, पालन र संहार (जसबाट)
**सततं** = सधैँ हुन्छन्
**सः** = उहाँ
**आद्यः पुरुषः** = आदिपुरुष नारायण हुनुहुन्छ

**वाक्यार्थ–** पहिला जसको रजोगुणद्वारा जगत्‌को सृष्टिको लागि ब्रह्माजी उत्पन्न हुनुभयो, फेरि स्थितिका लागि सत्त्वगुणद्वारा यज्ञका रक्षक अनि ब्राह्मण एवं ब्राह्मणधर्मका रक्षक विष्णु उत्पन्न हुनुभयो र तमोगुणद्वारा संहारका लागि रुद्र उत्पन्न हुनुभयो। जसले यसरी ब्रह्मा, विष्णु र रुद्रलाई निमित्त बनाएर लोकको उत्पत्ति, स्थिति र संहार बारम्बार गर्छ, त्यस्ता आदि पुरुष नारायण हुनुहुन्छ।

**धर्मस्य दक्षदुहितर्यजनिष्ट मूर्त्यां**
**नारायणो नर ऋषिप्रवरः प्रशान्तः।**
**नैष्कर्म्यलक्षणमुवाच चचार कर्म**
**योऽद्यापि चास्त ऋषिवर्यनिषेविताङ्घ्रिः॥ ६॥**

**पदार्थ–**
**दक्षदुहितरि** = दक्षकी कन्या
**धर्मस्य** = धर्मकी पत्नी
**मूर्त्यां** = मूर्तिमा
**ऋषिप्रवरः** = ऋषिश्रेष्ठ
**प्रशान्तः** = शान्त स्वभावका
**नारायणः** = नारायण र
**नरः** = नर नामका (दुई रूपमा)
**अजनिष्ट** = स्वयं भगवान् अवतीर्ण हुनुभयो
**सः** = उनै नरनारायण भगवान्‌ले
**नैष्कर्म्यलक्षणं** = आत्मस्वरूपको ज्ञान गराउने
**कर्म** = कर्मको
**उवाच** = उपदेश दिनुभयो र
**चचार च** = स्वयं पनि आचरण गर्नुभयो
**ऋषिवर्यनिषेविताङ्घ्रिः** = श्रेष्ठ ऋषिहरूद्वारा पनि चरणको सेवा गरिएका
**यः** = जो नरनारायण
**अद्य अपि** = आज पनि (कर्महरू गर्दै)
**आस्ते** = (बदरिकाश्रममा) बसिरहनुभएकोछ

**वाक्यार्थ–** दक्षप्रजापतिकी कन्या मूर्ति जो धर्मकी पत्नी थिइन् तिनबाट ऋषिश्रेष्ठ शान्तस्वरूप नरनारायण दुई मूर्तिको रूपमा भगवान्‌ले अवतार लिनुभयो र कर्मनिवृत्ति सिकाउने कर्मको उपदेश दिनुभयो अनि स्वयं आफूले पनि कर्मको आचरण गर्नुभयो। ठुला-ठुला ऋषिमहर्षिहरूले पनि जसको चरणको सेवा गर्दछन् त्यस्ता भगवान् नरनारायण आज पनि कर्मको आचरण गर्दै

बदरिकाश्रममा बसिरहनुभएको छ।

**इन्द्रो विशङ्क्य मम धाम जिघृक्षतीति**
**कामं न्ययुङ्क्त सगणं स बदर्युपाख्यम्।**
**गत्वाप्सरोगणवसन्तसुमन्दवातैः**
**स्त्रीप्रेक्षणेषुभिरविध्यदतन्महिज्ञः॥ ७॥**

**पदार्थ–**
**मम** = मेरो
**धाम** = धाम स्वर्गलाई
**जिघृक्षति** = तपस्याद्वारा लिन चाहेको छ
**इति** = यस्तो
**विशङ्क्य** = शङ्का गरेर
**इन्द्रः** = देवराज इन्द्रले
**सगणं** = स्त्री, वसन्त ऋतु आदि गणसहित
**कामं** = कामदेवलाई
**न्ययुङ्क्त** = पठाए
**अतन्महिज्ञः** = नरनारायणको महिमालाई नबुझेका
**सः** = ती कामदेवले
**अप्सरोगणवसन्तसुमन्दवातैः** = अप्सराका गण, वसन्त ऋतु र मन्दवायुको साथ
**बदर्युपाख्यं** = बदरिकाश्रममा
**गत्वा** = गएर
**स्त्रीप्रेक्षणेषुभिः** = स्त्रीहरूका कटाक्षरूपी बाणले
**अविध्यत्** = (नरनारायणलाई क्षोभित पार्न) प्रहार गरे

**वाक्यार्थ–** यसले तपस्याद्वारा मेरो लोक स्वर्गलाई खोस्नेछ भन्ने शङ्का गरेर इन्द्रले तपस्यामा विघ्न गर्नको लागि स्त्री, वसन्त ऋतु आदि गणसहित कामदेवलाई पठाए। भगवान् नरनारायणको महिमालाई नबुझेका कामदेव पनि अप्सराका गण, वसन्त ऋतु र मन्द वायुका साथ बदरिकाश्रम गए र उहाँलाई विक्षिप्त पार्नका लागि स्त्रीका कटाक्षरूपी बाणहरूले प्रहार गरे।

**विज्ञाय शक्रकृतमक्रममादिदेवः**
**प्राह प्रहस्य गतविस्मय एजमानान्।**
**मा भैष्ट भो मदन मारुत देववध्वो**
**गृह्णीत नो बलिमशून्यमिमं कुरुध्वम्॥ ८॥**

**पदार्थ–**
**आदिदेवः** = आदिदेव नारायणले
**शक्रकृतं** = इन्द्रले गरेको
**अक्रमं** = अपराधलाई
**विज्ञाय** = जानेर
**प्रहस्य** = हाँसेर
**गतविस्मयः** = आश्चर्यमा नपरी
**एजमानान्** = डरले काँपिरहेका तिनीहरूलाई
**प्राह** = भन्नुभयो
**भो मदन** = हे कामदेव
**मारुत** = वायुदेव
**देववध्वः** = देवाङ्गनाहरू
**मा भैष्ट** = नडराओ
**नः** = हामीहरूको
**बलिं** = आतिथ्यलाई
**गृह्णीत** = स्वीकार गर
**इमं** = यो आश्रमलाई
**अशून्यं** = सुनसानरहित
**कुरुध्वम्** = गर

**वाक्यार्थ–** भगवान् नरनारायणले पनि इन्द्रको यो कर्तुतलाई बुझेर आश्चर्यमा नपरी हाँस्दै डराएर काँपिरहेका तिनीहरूलाई भन्नुभयो– हे सर्वसमर्थ कामदेव ! वायुदेव र देवाङ्गनाहरू ! नडराओ, हामीहरूको आतिथ्यलाई स्वीकार गर र यहीं निवास गर।

**इत्थं ब्रुवत्यभयदे नरदेव देवाः**
**सव्रीडनम्रशिरसः सघृणं तमूचुः ।**
**नैतद् विभो त्वयि परेऽविकृते विचित्रं**
**स्वारामधीरनिकरानतपादपद्मे ॥ ९ ॥**

**पदार्थ–**
**नरदेव** = हे राजा निमि
**अभयदे** = अभय दिने भगवान् नारायणले
**इत्थं** = यसरी
**ब्रुवति** = भनिसकेपछि
**देवाः** = काम आदि देवताहरूले
**सव्रीडनम्रशिरसः** = लाजले शिर निहुराई
**सघृणं** = कृपालु
**तं** = उहाँ नरनारायणलाई
**ऊचुः** = भने
**विभो** = हे व्यापक प्रभु
**परे** = मायादेखि पर रहेको
**अविकृते** = विकाररहित
**स्वारामधीरनिकरानतपादपद्मे** = आत्माराम र जितेन्द्रिय मुनिगणहरूद्वारा सेवित चरणकमलवाला
**त्वयि** = हजुरमा
**एतत्** = यो हामीहरूको क्रियाकलापद्वारा प्रभावित नहुने कुरा
**विचित्रं** = आश्चर्यजनक
**न** = होइन

**वाक्यार्थ–** हे राजा निमि ! जब अभय दिने भगवान्ले यति भन्नुभयो त्यसपछि ती कामदेव आदि देवताहरूले लाजले शिर निहुराएर दयालु भगवान्लाई भने– मायादेखि पर रहेका, सर्वविकारशून्य हे प्रभु ! आत्माराम तथा जितेन्द्रिय मुनिहरू हजुरको चरणमा वन्दना गर्दछन्। त्यस्ता हजुरमा हाम्रो प्रभाव नपर्ने कुरा आश्चर्यजनक होइन।

**त्वां सेवतां सुरकृता बहवोऽन्तरायाः**
**स्वौको विलङ्घ्य परमं व्रजतां पदं ते ।**
**नान्यस्य बर्हिषि बलीन् ददतः स्वभागान्**
**धत्ते पदं त्वमविता यदि विघ्नमूर्ध्नि ॥ १० ॥**

**पदार्थ–**
**त्वां** = हजुरलाई
**सेवतां** = सेवा गर्ने र
**स्वौकः** = आफ्नो स्थान स्वर्ग आदिलाई
**विलङ्घ्य** = नाघेर
**ते** = हजुरको
**परमं** = परम
**पदं** = धाममा
**व्रजतां** = जाने भएका मानिसहरूलाई
**सुरकृताः** = देवताहरूबाट आउने

**बहवः** = धेरै
**अन्तरायाः** = विघ्नहरू हुन्छन्, तर
**बर्हिषि** = यज्ञमा
**स्वभागान्** = आ-आफ्ना भाग पुरोडाश आदि
**बलीन्** = कर (उपहार)
**ददतः** = दिने
**अन्यस्य** = अरूहरूलाई
**न** = ती विघ्नहरू हुँदैनन्
**यदि** = निश्चय नै
**त्वं** = हजुर
**अविता** = रक्षक हुनहुन्छ (यसैले हजुरका सेवकहरू)
**विघ्नमूर्ध्नि** = विघ्नका शिरमा
**पदं** = पाउ
**धत्ते** = राख्दछन्

**वाक्यार्थ—** हजुरको सेवा गरेर स्वर्ग आदि लोकलाई नाघेर परम धाममा पुग्ने हजुरका भक्तहरूलाई देवताहरूले विघ्न गर्दछन्। तर यज्ञ गरेर यज्ञको भाग देवताहरूलाई दिने सामान्य मानिसहरूलाई उनीहरू विघ्न गर्दैनन्। निश्चय नै जुन भक्तहरूको रक्षक हजुर हुनुहुन्छ, हजुरका भक्तहरू त ती विघ्नहरूको शिरमा आफ्नो पाउ राख्दछन्। (विघ्नहरूलाई कुल्चिएर अधि बढ्दछन्)।

**क्षुत्तृट्त्रिकालगुणमारुतजैह्वशैश्न्या-**
**नस्मानपारजलधीनतितीर्य केचित्।**
**क्रोधस्य यान्ति विफलस्य वशं पदे गो-**
**र्मज्जन्ति दुश्चरतपश्च वृथोत्सृजन्ति ॥११॥**

**पदार्थ—**
**केचित्** = केही तपस्वीहरू
**क्षुत्तृट्त्रिकालगुणमारुतजैह्व-शैश्न्यान्** = भोक, प्यास, तीन कालका गुण (जाडो, गर्मी, वर्षा) वायु, जिब्रो र जननेन्द्रियको भोगरूप
**अस्मान्** = हामीहरूलाई (कामदेव आदि)
**अपारजलधीन्** = दुस्तर सागरलाई
**अतितीर्य** = तरेर पनि
**विफलस्य** = निष्फल
**क्रोधस्य** = क्रोधको
**वशं** = वशमा
**यान्ति** = जान्छन् (त्यसैले)
**गोः पदे** = गाईको खुरबराबरको खोपिल्टोमा
**मज्जन्ति** = डुब्छन् र
**दुश्चरतपः** = कठिन तपस्यालाई
**वृथा** = बेकारमा
**उत्सृजन्ति च** = खेर फाल्दछन्

**वाक्यार्थ—** कोही-कोही तपस्वीहरू भोक, प्यास, जाडो, गर्मी, वर्षा, वायु, जिब्रो र जननेन्द्रियलाई जितेर हामी कामदेव, स्त्री आदिको वास्तै नगरी दुस्तर संसाररूप सागरलाई तर्दछन्, तर सानो एउटा रिसको वशमा पर्दा गाईको खुरबराबरको संसाररूप खोपिल्टोमा डुब्दछन् अनि कठिन तपस्यालाई पनि खेर फाल्दछन्।

**इति प्रगृणतां तेषां स्त्रियोऽत्यद्भुतदर्शनाः।**
**दर्शयामास शुश्रूषां स्वर्चिताः कुर्वतीर्विभुः॥ १२॥**

**पदार्थ–**
**तेषां** = तिनीहरूले
**इति** = यसरी
**प्रगृणतां** = स्तुति गर्दा गर्दै
**विभुः** = सर्वसमर्थ भगवान्ले
(उनीहरूको घमन्ड शान्त पार्नको लागि)
**शुश्रूषां** = आफ्नो सेवा
**कुर्वतीः** = गरिरहेका
**स्वर्चिताः** = अत्यन्त अलङ्कृत
**अत्यद्भुतदर्शनाः** = हेर्दै आश्चर्यलाग्दा
**स्त्रियः** = सुन्दरी स्त्रीहरू
**दर्शयामास** = देखाइदिनुभयो

**वाक्यार्थ–** ती कामदेव आदिले यसरी आफ्नो स्तुति गर्दागर्दै भगवान्ले पनि उनीहरूको सुन्दरताको घमन्डलाई नाश गर्न आफ्नो सेवा गरिरहेका, विभिन्नखाले गहनाले सुशोभित र हेर्दै आश्चर्यलाग्दा सुन्दरी स्त्रीहरू देखाइदिनुभयो।

**ते देवानुचरा दृष्ट्वा स्त्रियः श्रीरिव रूपिणीः।**
**गन्धेन मुमुहुस्तासां रूपौदार्यहतश्रियः॥ १३॥**

**पदार्थ–**
**श्रीः इव** = लक्ष्मी जस्ता
**रूपिणीः** = अत्यन्त रूपवती
**स्त्रियः** = ती स्त्रीहरूलाई
**दृष्ट्वा** = देखेर
**रूपौदार्यहतश्रियः** = उनीहरूको सुन्दरता र रूपले गर्दा कान्तिरहित भएका
**ते** = ती कामदेव आदि
**देवानुचराः** = इन्द्रका अनुचरहरू
**तासां** = ती सुन्दरी स्त्रीहरूको
**गन्धेन** = सुगन्धले
**मुमुहुः** = मोहित भए

**वाक्यार्थ–** ती लक्ष्मी जस्ता अत्यन्त रूपवती स्त्रीहरूलाई देखेपछि यी इन्द्रका अनुचर कामदेव आदि सेवकहरू सौन्दर्यरहित एवं फिक्का देखिए र उनीहरूको सुगन्धले मोहित भए।

**तानाह देवदेवेशः प्रणतान् प्रहसन्निव।**
**आसामेकतमां वृङ्ध्वं सवर्णां स्वर्गभूषणाम्॥ १४॥**

**पदार्थ–**
**देवदेवेशः** = देवश्रेष्ठ नारायणले
**प्रहसन् इव** = केही हाँसे झैं गरी
**प्रणतान्** = विनम्र भएका
**तान्** = ती कामदेव आदिलाई
**आह** = भन्नुभयो
**आसां** = यिनीहरूमध्येका
**सवर्णां** = समानरूप भएकी
**स्वर्गभूषणां** = स्वर्गकी शोभारूप
**एकतमां** = एउटी सुन्दरीलाई
**वृङ्ध्वं** = वरण गर

**वाक्यार्थ–** देवश्रेष्ठ नारायणले विनम्र भएका कामदेव आदिसँग मुस्कुराउँदै भन्नुभयो– हे देवसेवकहरू ! यी स्त्रीहरूमध्ये कुनै आफू सुहाउँदी एउटी स्त्रीलाई स्वर्गको शोभाको लागि वरण गर।

**ओमित्यादेशमादाय नत्वा तं सुरवन्दिनः।**
**उर्वशीमप्सरःश्रेष्ठां पुरस्कृत्य दिवं ययुः॥ १५॥**

पदार्थ–
**सुरवन्दिनः** = देवसेवकहरूले
**ओम् इति** = हवस् भनेर
**आदेशं** = भगवान्को आदेशलाई
**आदाय** = स्वीकार गरेर
**तं** = उहाँलाई
**नत्वा** = नमस्कार गरेर
**अप्सरःश्रेष्ठां** = अप्सराहरूमा श्रेष्ठ
**उर्वशीम्** = उर्वशीलाई
**पुरस्कृत्य** = अगाडि लगाई
**दिवं** = स्वर्गतिर
**ययुः** = गए

**वाक्यार्थ–** ती कामदेव आदि देवसेवकहरूले पनि भगवान्को आदेश मान्दै भगवान्लाई प्रणाम गरेर अप्सराहरूमा श्रेष्ठ उर्वशीलाई अगाडि लगाई स्वर्गतिर गए।

**इन्द्रायानम्य सदसि शृण्वतां त्रिदिवौकसाम्।**
**ऊचुर्नारायणबलं शक्रस्तत्रास विस्मितः॥ १६॥**

पदार्थ–
**सदसि** = देवसभामा
**इन्द्राय** = इन्द्रलाई
**आनम्य** = नमस्कार गरेर
**त्रिदिवौकसां** = देवताहरूले
**शृण्वतां** = सुन्दा सुन्दा
**नारायणबलं** = भगवान् नरनारायणको प्रभावलाई
**ऊचुः** = (ती कामदेव आदिले) भने
**विस्मितः** = चकित भएका
**शक्रः** = (सबै कुरा सुनेर) इन्द्र
**तत्रास** = डराए

**वाक्यार्थ–** त्यसपछि स्वर्गको देवसभामा इन्द्रलाई नमस्कार गरेर अरू देवताहरूले सुन्ने गरी कामदेव आदिले नारायणको प्रभावलाई बताए, त्यो सुनेर चकित भएका इन्द्र डराए।

**हंसस्वरूप्यवदद‌च्युत आत्मयोगं**
**दत्तः कुमार ऋषभो भगवान् पिता नः।**
**विष्णुः शिवाय जगतां कलयावतीर्ण-**
**स्तेनाहृता मधुभिदा श्रुतयो हयास्ये॥ १७॥**

पदार्थ–
**अच्युत** = च्युतिरहित
**भगवान् विष्णुः** = भगवान् नारायणले
**जगतां** = लोकको
**शिवाय** = कल्याणका लागि
**हंसस्वरूपी** = हाँसको जस्तो स्वरूप भएको
**दत्तः** = दत्तात्रेय
**कुमारः** = सनत्कुमार
**नः** = हामीहरूको
**पिता** = बुबा
**ऋषभः** = ऋषभदेव आदि
**कलया** = कलाद्वारा
**अवतीर्णः** = अवतार लिएर
**आत्मयोगं** = आत्मज्ञानको
**अवदत्** = उपदेश दिनुभयो
**मधुभिदा** = मधुनामक दैत्यको विनाश गर्नेवाला
**तेन** = उहाँद्वारा
**हयास्ये** = हयग्रीव अवतारमा
**ततः** = त्यो मधुनामक दैत्यबाट
**श्रुतयः** = वेदहरू
**आहृताः** = खोसेर ल्याइए

**वाक्यार्थ–** अच्युत भगवान्ले लोककल्याणका लागि हंसावतार, दत्तात्रेय, सनत्कुमार, ऋषभदेव

आदि विविध कलावतार लिनुभयो र आत्मज्ञानको उपदेश गर्नुभयो अनि हयग्रीव अवतारमा उहाँले मधुनामक दैत्यलाई मारेर उसले लगेका वेदहरूलाई ल्याउनुभयो।

**गुप्तोऽप्यये मनुरिलौषधयश्च मात्स्ये**
**क्रौडे हतो दितिज उद्धरताम्भसः क्ष्माम्।**
**कौर्मे धृतोऽद्रिरमृतोन्मथने स्वपृष्ठे**
**ग्राहात् प्रपन्नमिभराजममुञ्चदार्तम्॥ १८॥**

**पदार्थ–**
**मात्स्ये** = मत्स्य अवतारको समयमा (भगवान्द्वारा)
**अप्यये** = प्रलयकालमा
**मनुः** = मनु
**गुप्तः** = रक्षा गरिनुभयो र
**इला** = पृथिवी तथा
**ओषधयश्च** = जौ, धान आदि बीजहरू रक्षा गरिए
**क्रौडे** = वराह अवतारमा
**अम्भसः** = पानीबाट
**क्ष्मां** = पृथिवीलाई
**उद्धरता** = उद्धार गर्दै भगवान्द्वारा
**दितिजः** = हिरण्याक्ष
**हतः** = मारियो
**कौर्मे** = कूर्म अवतारमा
**अमृतोन्मथने** = अमृतका लागि समुद्रमन्थन गर्दा
**अद्रिः** = मन्दराचल
**स्वपृष्ठे** = आफ्नो पिठ्युँमा
**धृतः** = धारण गरियो
**प्रपन्नं** = शरणमा आएको
**आर्तम्** = दुःखी
**इभराजं** = गजेन्द्रलाई
**ग्राहात्** = गोहीको मुखबाट
**अमुञ्चत्** = मुक्त गर्नुभयो

**वाक्यार्थ–** भगवान्ले मत्स्य अवतारमा मनुलाई प्रलयबाट रक्षा गर्नुभयो र पृथिवी तथा जौ, धान आदि विविध वनस्पतिका बीजहरूको रक्षा गर्नुभयो, वराह अवतारमा पानीबाट पृथिवीलाई उद्धार गर्दै हिरण्याक्षलाई मार्नुभयो। कूर्म अवतारमा समुद्रमन्थन गर्दा मन्दराचललाई आफ्नो पिठ्युँमा धारण गर्नुभयो र भगवान् नारायणले आफ्नो शरणमा आएको दुःखी गजेन्द्रलाई गोहीको मुखबाट पनि मुक्त गर्नुभयो।

**संस्तुन्वतोऽब्धिपतिताञ्छ्रमणानृषींश्च**
**शक्रं च वृत्रवधतस्तमसि प्रविष्टम्।**
**देवस्त्रियोऽसुरगृहे पिहिता अनाथा**
**जघ्नेऽसुरेन्द्रमभयाय सतां नृसिंहे॥ १९॥**

**पदार्थ–**
**अब्धिपतितान्** = समुद्रमा परेका
**संस्तुन्वतः** = स्तुति गरिरहेका
**श्रमणान्** = विरक्त
**ऋषीन्** = बालखिल्य आदि ऋषिहरूलाई तथा
**वृत्रवधतः** = वृत्रासुरको हत्याले
**तमसि** = ब्रह्महत्यामा
**प्रविष्टं** = परेका
**शक्रं च** = इन्द्रलाई र
**असुरगृहे** = शत्रुको घरमा
**पिहिताः** = थुनिएका

**अनाथाः** = अनाथ
**देवस्त्रियः च** = देवस्त्रीहरूलाई पनि (भगवान्ले उद्धार गर्नुभयो र
**नृसिंहे** = नृसिंह अवतारमा
**सतां** = सज्जन भक्तहरूको
**अभयाय** = भयनिवारणका लागि
**असुरेन्द्रं** = हिरण्यकशिपुलाई
**जघ्ने** = मार्नुभयो

**वाक्यार्थ–** भगवान् नारायणले समुद्रमा खसेका आफ्नो स्तुति गर्ने विरक्त बालखिल्य आदि ऋषिहरूलाई, वृत्रासुरको हत्याले ब्रह्महत्यामा डुबेका इन्द्रलाई र शत्रुको घरमा थुनिएका अनाथ देवाङ्गनाहरूलाई पनि मुक्त गरिदिनुभयो। नृसिंह अवतारमा भगवान्ले सज्जन भक्तहरूको भय निवारणका लागि हिरण्यकशिपुलाई मारिदिनुभयो।

**देवासुरे युधि च दैत्यपतीन् सुरार्थे**
**हत्वान्तरेषु भुवनान्यदधात् कलाभिः।**
**भूत्वाथ वामन इमामहरद् बलेः क्ष्मां**
**याच्ञाच्छलेन समदाददितेः सुतेभ्यः॥ २०॥**

**पदार्थ–**
**देवासुरे** = देवता र असुरहरूको
**युधि** = युद्धमा
**सुरार्थे** = देवताहरूको लागि
**दैत्यपतीन् च** = दैत्यपतिहरूलाई
**हत्वा** = मारेर
**अन्तरेषु** = मन्वन्तरहरूमा
**कलाभिः** = अंशावतारहरूद्वारा
**भुवनानि** = लोकहरूलाई
**अदधात्** = पालन गर्नुभयो
**अथ** = फेरि
**वामनः** = वामन
**भूत्वा** = भएर
**याच्ञाच्छलेन** = भिख माग्ने बहानाले
**इमां** = यो
**क्ष्मां** = पृथिवीलाई
**बलेः** = बलिबाट
**अहरत्** = लिनुभयो र
**अदितेः** = अदितिका
**सुतेभ्यः** = छोराहरूलाई
**समदात्** = दिनुभयो

**वाक्यार्थ–** देवासुर युद्धमा भगवान्ले देवताहरूको तर्फबाट धेरै दैत्यपतिहरूलाई मार्नुभयो र हरेक मन्वन्तरमा अंशावतार ग्रहण गरी लोकको पालन गर्नुभयो। फेरि कुनै समयमा वामन भएर भिख माग्ने बहानाले बलिबाट यो पृथिवीलाई लिएर अदितिका छोरा इन्द्र आदि देवतालाई दिनुभयो।

**निःक्षत्रियामकृत गां च त्रिःसप्तकृत्वो**
**रामस्तु हैहयकुलाप्ययभार्गवाग्निः।**
**सोऽब्धिं बबन्ध दशवक्त्रमहन् सलङ्कं**
**सीतापतिर्जयति लोकमलघ्नकीर्तिः॥ २१॥**

**पदार्थ–**
**हैहयकुलाप्ययभार्गवाग्निः** = हैहयकुललाई नाश गर्न भृगुको कुलमा उत्पन्न अग्निसमान अति तेजस्वी
**रामः तु** = परशुराम अवतारमा त

भगवान्ले
**त्रिःसप्तकृत्वः** = एक्काईस पटक
**गां च** = पृथिवीलाई
**निःक्षत्रियां** = क्षत्रियरहित
**अकृत** = बनाउनुभयो
**लोकमलघ्नकीर्तिः** = लोकको
पाप नाश गर्ने कीर्ति भएका
**सः** = उनै
**सीतापतिः** = श्रीरामको
अवतारमा भगवान्ले
**अब्धिं** = समुद्रलाई
**बबन्ध** = बाँध्नुभयो र
**सलङ्कं** = लङ्कावासी
दानववीरहरूसहित
**दशवक्त्रं** = दशमुखे रावणलाई
**अहन्** = मार्नुभयो (त्यस्ता
भगवान् राम)
**जयति** = सधैँ विजयी हुनुहुन्छ

**वाक्यार्थ–** भगवान्ले नै हैहयकुल विनाशको लागि अग्निसमान भएर भृगुवंशमा परशुराम अवतार लिई पृथिवीलाई एक्काईस पटक क्षत्रियरहित बनाउनुभयो। फेरि लोकको सारा पापलाई नाश गर्ने कीर्तिवाला सीतापति श्रीरामले समुद्रलाई बाँध्नुभयो र दैत्य वीरहरूसहित रावणलाई मार्नुभयो, त्यस्ता राम सधैँ विजयी हुनुहुन्छ।

**भूमेर्भरावतरणाय यदुष्वजन्मा**
**जातः करिष्यति सुरैरपि दुष्कराणि।**
**वादैर्विमोहयति यज्ञकृतोऽतदर्हान्**
**शूद्रान् कलौ क्षितिभुजो न्यहनिष्यदन्ते॥ २२॥**

**पदार्थ–**
**अजन्मा** = जन्मरहित भएर पनि
भगवान्ले
**भूमेः** = पृथिवीको
**भरावतरणाय** = भारहरण गर्नका
लागि
**यदुषु** = यदुकुलमा
**जातः** = जन्मिएर
**सुरैः अपि** = देवताहरूका लागि
पनि
**दुष्कराणि** = गर्न असम्भव
कर्महरू
**करिष्यति** = गर्नुहुनेछ (फेरि
बुद्धको अवतार लिएर
**अतदर्हान्** = यज्ञका अनधिकारी
भएर पनि
**यज्ञकृतः** = यज्ञ गरिरहेका
व्यक्तिहरूलाई
**वादैः** = तर्कहरूद्वारा
**विमोहयति** = (त्यस कर्मबाट
विमुख गराएर) मोहित पार्नुहुनेछ
र
**कलौ** = कलियुगको
**अन्ते** = अन्तिम समयमा
(कल्कि अवतार लिएर)
**शूद्रान्** = शूद्र
**क्षितिभुजः** = राजाहरूलाई
**न्यहनिष्यत्** = मार्नुहुनेछ

**वाक्यार्थ–** भगवान् अजन्मा भएर पनि पृथिवीको भारहरणका लागि यदुकुलमा जन्मनुहुनेछ र देवताहरूले पनि गर्न नसक्ने कर्महरू गर्नुहुनेछ। फेरि बुद्धको अवतार लिएर यज्ञका अनधिकारी भएर पनि यज्ञ गरिरहेका व्यक्तिहरूलाई तर्कद्वारा त्यसबाट विमुख पार्नुहुनेछ अनि कलियुगको अन्त्यमा कल्कि अवतार लिई शूद्र राजाहरूको विनाश गर्नुहुनेछ।

**एवंविधानि जन्मानि कर्माणि च जगत्पतेः।**
**भूरीणि भूरियशसो वर्णितानि महाभुज॥ २३॥**

**पदार्थ–**
**महाभुज** = हे महावाहु निमि
**जगत्पतेः** = जगत्का पालक
**भूरियशसः** = अनन्त कीर्ति
भएका भगवान्का
**एवंविधानि** = यस्ता
**भूरीणि** = धेरै
**जन्मानि** = जन्महरू र
**कर्माणि च** = कर्महरू पनि
**वर्णितानि** = वर्णन गरिएका छन्

**वाक्यार्थ–** हे राजा निमि ! यसरी जगत्का पालक अनन्तकीर्तिवाला भगवान् नारायणका यस्ता धेरै जन्म र कर्महरूको विषयमा वर्णन गरिएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां एकादशस्कन्धे चतुर्थोऽध्यायः ॥ ४ ॥**

# अथ पञ्चमोऽध्यायः

## भक्तिहीन व्यक्तिहरूको गति र भगवान्‌को पूजा गर्ने विधि

**राजोवाच** (राजा निमिले भने)

**भगवन्तं हरिं प्रायो न भजन्त्यात्मवित्तमाः।**
**तेषामशान्तकामानां का निष्ठाविजितात्मनाम्॥ १॥**

**पदार्थ–**
**आत्मवित्तमाः** = आत्मज्ञानीमा सर्वश्रेष्ठ हे योगीश्वरहरू (जो)
**भगवन्तं** = भगवान्
**हरिं** = श्रीहरिलाई
**प्रायः** = प्रायः गरेर
**न भजन्ति** = भजन गर्दैनन्
**तेषां** = त्यस्ता
**अविजितात्मनां** = अजितेन्द्रिय र
**अशान्तकामानां** = कामना शान्त नभएका व्यक्तिहरूको
**का निष्ठा** = कुन गति हुन्छ

**वाक्यार्थ–** हे सर्वश्रेष्ठ आत्मज्ञानी योगीश्वरहरू ! जो प्रायः जसो भगवान्‌को भजन गर्दैनन् त्यस्ता अजितेन्द्रिय र कामनाबाट अतृप्त व्यक्तिहरूको कस्तो गति हुन्छ ?

**चमस उवाच** (चमसले भने)

**मुखबाहूरुपादेभ्यः पुरुषस्याश्रमैः सह।**
**चत्वारो जज्ञिरे वर्णा गुणैर्विप्रादयः पृथक्॥ २॥**

**पदार्थ–**
**पुरुषस्य** = भगवान्‌को
**मुखबाहूरुपादेभ्यः** = मुख, हात, जाँघ र गोडाबाट
**आश्रमैः सह** = चार आश्रम सहित
**गुणैः** = गुणको आधारले
**पृथक्** = अलग-अलग
**विप्रादयः** = ब्राह्मण आदि
**चत्वारः** = चार
**वर्णाः** = वर्णहरू
**जज्ञिरे** = जन्मिए

**वाक्यार्थ–** भगवान्‌का मुख, हात, जाँघ र गोडाबाट अलग-अलग गुणको आधारमा क्रमशः ब्राह्मण आदि चार वर्ण उत्पन्न भए।

**य एषां पुरुषं साक्षादात्मप्रभवमीश्वरम्।**
**न भजन्त्यवजानन्ति स्थानाद् भ्रष्टाः पतन्त्यधः॥ ३॥**

**पदार्थ–**
**एषां** = यी वर्णाश्रमीहरूमध्ये
**ये** = जो
**साक्षात्** = प्रत्यक्ष
**आत्मप्रभवं** = आफ्ना पिता
**पुरुषं** = परम पुरुष
**ईश्वरं** = ईश्वरलाई
**न भजन्ति** = भजन गर्दैनन्
**अवजानन्ति** = तिरस्कार गर्दछन् (तिनीहरू)
**स्थानात्** = वर्ण (र आश्रम) धर्मबाट

**भ्रष्टाः** = भ्रष्ट भएर **अधः** = नरकमा **पतन्ति** = खस्दछन्

**वाक्यार्थ–** ती वर्णाश्रमीमध्ये जसले साक्षात् आफ्ना पिता भगवान्को भजन गर्दैनन्, भगवान्को तिरस्कार गर्छन्, तिनीहरू वर्ण र आश्रम धर्मबाट भ्रष्ट भएर नरकमा खस्दछन्।

**दूरेहरिकथाः केचिद् दूरे चाच्युतकीर्तनाः।**

**स्त्रियः शूद्रादयश्चैव तेऽनुकम्प्या भवादृशाम्॥ ४॥**

**पदार्थ–**
**दूरेहरिकथाः** = भगवान्को कथाबाट टाढा रहेका र **दूरे अच्युतकीर्तनाः च** = भगवान्को गुणकीर्तनबाट पनि टाढा रहेका **केचित्** = जो-कोही **स्त्रियः** = स्त्रीहरू र **शूद्रादयः च** = शूद्र आदिहरू छन् **ते एव** = तिनीहरू **भवादृशां** = हजुरहरू जस्ता भक्तका **अनुकम्प्याः** = कृपापात्र छन्

**वाक्यार्थ–** जो भगवान्को कथाबाट र कीर्तन आदिबाट टाढा रहेका स्त्री र शूद्र आदि छन् उनीहरूलाई पनि हजुरहरू जस्ता भक्तले दया गर्नुपर्दछ (र यो भक्तिमार्गमा लगाउनुपर्दछ)।

**विप्रो राजन्यवैश्यौ च हरेः प्राप्ताः पदान्तिकम्।**

**श्रौतेन जन्मनाथापि मुह्यन्त्याम्नायवादिनः॥ ५॥**

**पदार्थ–**
**विप्रः** = ब्राह्मण र **राजन्यवैश्यौ च** = क्षत्रिय र वैश्य पनि **श्रौतेन** = (उपनयन, वेदको अध्ययन, यजन आदि) श्रौतकर्मले **अथ** = त्यसपछि **जन्मना अपि** = जन्मले पनि **हरेः** = भगवान् श्रीहरिको **पदान्तिकं** = चरणकमलको अधिकारी **प्राप्ताः** = भएका छन् (तैपनि) **आम्नायवादिनः** = वेदको अर्थवाद वाक्यमा लागेर **मुह्यन्ति** = (भगवान्को आराधनालाई छाडेर कर्मफलमा) मोहित हुन्छन्

**वाक्यार्थ–** ब्राह्मण, क्षत्रिय र वैश्य उपनयन, वेदको अध्ययन आदि श्रौतकर्मका आधारमा भगवान्को चरणकमलको अधिकारी भएर पनि वेदको अर्थवाद वाक्यमा लागेर कर्मफल स्वर्ग आदिमा मोहित हुन्छन्।

**कर्मण्यकोविदाः स्तब्धा मूर्खाः पण्डितमानिनः।**

**वदन्ति चाटुकान् मूढा यया माध्व्या गिरोत्सुकाः॥ ६॥**

**पदार्थ–**
**कर्मणि** = कर्ममा **अकोविदाः** = अकुशल **स्तब्धाः** = अविनीत र **मूर्खाः** = मूर्ख भएर पनि **पण्डितमानिनः** = आफूलाई पण्डित मान्ने ती व्यक्तिहरू **यया** = जुन **माध्व्या** = सुन्दा मिठो लाग्ने

**गिरा** = वाणीद्वारा
**उत्सुकाः** = उत्कण्ठित भएर
**मूढाः** = मोहित हुन्छन् (तिनै वाक्यको आधारमा)
**चाटुकान्** = चिप्ला कुराहरू
**वदन्ति** = भन्छन्

**वाक्यार्थ–** कर्म गर्न नजान्ने विनयरहित ती मूर्खहरू आफूलाई पण्डित मान्दछन् र सुन्दा मिठो लाग्ने वेदका वाक्यहरूद्वारा मोहित हुन्छन् अनि त्यस्तै चिप्ला कुराहरू गर्दछन्।

**रजसा घोरसङ्कल्पाः कामुका अहिमन्यवः।**
**दाम्भिका मानिनः पापा विहसन्त्यच्युतप्रियान्॥ ७॥**

**पदार्थ–**
**रजसा** = रजोगुणको कारणले
**घोरसङ्कल्पाः** = डरलाग्दा कुरा सोच्ने
**कामुकाः** = विषयभोगमा लिप्त
**अहिमन्यवः** = सर्पजस्ता रिसाहा
**दाम्भिकाः** = देखाओटी धर्म गर्ने
**मानिनः** = अभिमानी र
**पापाः** = पाप गर्ने ती व्यक्तिहरू
**अच्युतप्रियान्** = भगवान् अच्युतका भक्तहरूलाई
**विहसन्ति** = उपहास गर्दछन्

**वाक्यार्थ–** कर्ममा लम्पट ती व्यक्तिहरू रजोगुणको कारणले घोर सङ्कल्पवाला, विषयभोगमा लिप्त, सर्पजस्ता रिसाहा र अत्यन्त अहङ्कारी हुन्छन्, देखावटी धर्म गर्ने तिनीहरू जस्तोसुकै पाप गर्न पनि पछि हट्दैनन्। त्यस्ता व्यक्तिहरूले भगवान्का भक्तहरूलाई उपहास गर्दछन्।

**वदन्ति तेऽन्योन्यमुपासितस्त्रियो गृहेषु मैथुन्यपरेषु चाशिषः।**
**यजन्त्यसृष्टान्नविधानदक्षिणं वृत्त्यै परं घ्नन्ति पशूनतद्विदः॥ ८॥**

**पदार्थ–**
**उपासितस्त्रियः** = स्त्रीहरूकै उपासना गर्ने
**ते** = ती मूर्ख व्यक्तिहरू
**मैथुन्यपरेषु** = मैथुनसुख प्रधान भएको
**गृहेषु** = घरमा
**अन्योन्यं च** = आपसमा
**आशिषः** = (स्त्रीपुत्र आदि प्राप्तिको) आशीर्वाद
**वदन्ति** = दिन्छन्
**अतद्विदः** = कर्मको रहस्यलाई नबुझेका ती मूर्खहरू
**असृष्टान्नविधानदक्षिणं** = विधान अनुसार अन्नदान र दक्षिणारहित
**यजन्ति** = यज्ञ गर्दछन् र
**परं** = केवल
**वृत्त्यै** = जीविकाको लागि वा आफ्नो जिब्राको स्वादको लागि
**पशून्** = पशुहरूलाई
**घ्नन्ति** = मार्दछन्

**वाक्यार्थ–** स्त्रीकै उपासनामा व्यस्त भएका र मैथुनसुखप्रधान घरमा रमेका मूर्ख व्यक्तिहरू आपसमा स्त्री, पुत्र आदि प्राप्तिको नै आशीर्वाद दिन्छन् र कर्मरहस्यलाई नबुझी आवश्यक अन्नदान नगरी र उपयुक्त दक्षिणा नदिई यज्ञ गर्दछन् अनि केवल आफ्नै जिब्रोको स्वादका लागि यज्ञको बहानाले पशुहिंसा गर्दछन्।

**श्रिया विभूत्याभिजनेन विद्यया**
**त्यागेन रूपेण बलेन कर्मणा।**

**जातस्मयेनान्धधियः सहेश्वरान्**

**सतोऽवमन्यन्ति हरिप्रियान् खलाः ॥ ९ ॥**

**पदार्थ–**
**श्रिया** = सम्पत्तिले
**विभूत्या** = प्रभुत्वले
**अभिजनेन** = कुलीनताले
**विद्यया** = विद्याले
**त्यागेन** = दानले
**रूपेण** = सौन्दर्यले
**बलेन** = शारीरिक बलले र
**कर्मणा** = श्रौत र स्मार्त कर्मले
**जातस्मयेन** = उत्पन्न भएको घमन्डबाट
**अन्धधियः** = विवेकशून्य भएका
**खलाः** = मूर्खहरू
**सहेश्वरान्** = ईश्वरसहित
**सतः** = सज्जन
**हरिप्रियान्** = भगवान्का भक्तहरूलाई
**अवमन्यन्ति** = अपमान गर्दछन्

**वाक्यार्थ–** सम्पत्ति, प्रभुत्व, कुलीनता, विद्या, दान, सौन्दर्य, शक्ति र श्रौत-स्मार्त कर्मबाट उत्पन्न घमन्डले गर्दा उनीहरू विवेकशून्य बन्दछन् र भगवान् सहित भगवान्का भक्तहरूलाई पनि अनादर गर्दछन्।

**सर्वेषु शश्वत् तनुभृत्स्ववस्थितं यथा खमात्मानमभीष्टमीश्वरम्।**

**वेदोपगीतं च न शृण्वतेऽबुधा मनोरथानां प्रवदन्ति वार्तया ॥ १० ॥**

**पदार्थ–**
**अबुधाः** = मूर्खहरू
**शश्वत्** = सधैँ
**खं यथा** = आकाश झैँ
**सर्वेषु** = सबै
**तनुभृत्सु** = प्राणीहरूमा
**आत्मानं** = आत्मरूपले
**अवस्थितं** = रहेको
**अभीष्टं** = परमपुरुषार्थस्वरूप
**वेदोपगीतं** = वेदद्वारा वर्णन गरिएको
**ईश्वरं च** = व्यापक ईश्वरलाई
**न शृण्वते** = सुन्दैनन्
**मनोरथानां** = विषय अभिलाषाको
**वार्तया** = गफगाफले
**प्रवदन्ति** = आपसमा बातचित गरेर समय बिताउँदछन्

**वाक्यार्थ–** मूर्ख मानिसहरू सम्पूर्ण प्राणीहरूमा आकाश झैँ अन्तर्यामी रूपले रहेको परमपुरुषार्थ स्वरूप वेद आदिमा वर्णन गरिएको आत्मरूप ईश्वरलाई जान्न-सुन्न चाहँदैनन्। केवल विषयप्राप्ति सम्बन्धी गफगाफले नै समय बिताउँछन्।

**लोके व्यवायामिषमद्यसेवा नित्यास्तु जन्तोर्न हि तत्र चोदना।**

**व्यवस्थितिस्तेषु विवाहयज्ञसुराग्रहैरासु निवृत्तिरिष्टा ॥ ११ ॥**

**पदार्थ–**
**लोके** = लोकमा
**व्यवायामिषमद्यसेवाः तु** = स्त्रीप्रसङ्ग, मांसभक्षण र मदिरापानहरू त
**जन्तोः** = प्राणीहरूलाई
**नित्याः** = नित्य प्राप्त छन्
**तत्र** = त्यसमा
**चोदना** = विधि
**न हि** = छैन (त्यसैले)
**तेषु** = तिनीहरूमा
**विवाहयज्ञसुराग्रहैः** = विवाह, यज्ञ, सौत्रामणि यागबाट
**व्यवस्थितिः** = नियन्त्रण गर्नका लागि हो भनेर बुझ्नु तर

**आसु** = यिनीहरूमा
**निवृत्तिः** = निवृत्ति हुनु नै
**इष्टा** = शास्त्रको तात्पर्य हो

**वाक्यार्थ–** लोकमा प्राणीहरूले स्त्रीप्रसङ्ग, मांसभक्षण र मदिरापान स्वतः गर्ने गर्दछन्। त्यसैले यसमा विधि हुँदैन। यसर्थ विवाह, यज्ञ र सौत्रामणि यागको विधान तिनीहरूलाई नियन्त्रण गर्नका लागि हो, त्यसैले यिनीहरूबाट निवृत्त गराउनु नै शास्त्रको तात्पर्य हो।

**धनं च धर्मैकफलं यतो वै ज्ञानं सविज्ञानमनुप्रशान्ति।**
**गृहेषु युञ्जन्ति कलेवरस्य मृत्युं न पश्यन्ति दुरन्तवीर्यम्॥ १२॥**

**पदार्थ–**
**धनं** = धन
**धर्मैकफलं** = धर्मरूप एउटै फल दिनेवाला हो
**यतः** = जुन धर्मबाट
**वै** = निश्चय नै
**सविज्ञानं ज्ञानं च** = अनुभव सहित अपरोक्ष ज्ञान पनि हुन्छ
**अनुप्रशान्ति** = पछि मोक्षरूप शान्ति प्राप्त हुन्छ (तर त्यस्तो धनलाई मूर्खहरू)
**गृहेषु** = घर, शरीर आदिमा
**युञ्जन्ति** = प्रयोग गर्दछन् र
**कलेवरस्य** = शरीरको
**दुरन्तवीर्यम्** = अत्यन्त बलशाली
**मृत्युं** = मृत्युलाई पनि
**न पश्यन्ति** = देख्दैनन्

**वाक्यार्थ–** वास्तवमा धनको फल धर्म हो। धनले क्रमशः धर्म त्यसपछि परोक्षज्ञान, अपरोक्षज्ञान र अन्तिममा परमशान्तिरूप मोक्ष पनि दिन्छ। तर मूर्खहरू यो कुरा बुझ्दैनन् र मोक्षको साधन त्यो धनलाई घर र शरीर आदिमा प्रयोग गर्दछन् अनि आफ्नो अत्यन्त बलशाली अकाट्य मृत्युलाई कहिल्यै पनि विचार गर्दैनन्।

**यद् घ्राणभक्षो विहितः सुरायास्तथा पशोरालभनं न हिंसा।**
**एवं व्यवायः प्रजया न रत्या इमं विशुद्धं न विदुः स्वधर्मम्॥ १३॥**

**पदार्थ–**
**यत्** = किनभने
**सुरायाः** = मदिरा
**घ्राणभक्षः** = सुँघ्नु भन्ने
**विहितः** = विधान छ
**तथा** = त्यस्तै
**पशोः** = यज्ञमा पशुको
**आलभनं** = आलभन गर्ने विधान छ
**हिंसा न** = हिंसा गर्ने होइन
**एवं** = यसै गरी
**व्यवायः** = स्त्रीगमन
**प्रजया** = सन्ततिको लागि विधान छ
**रत्यै न** = रतिका लागि होइन
**इमं** = यस्तो
**विशुद्धं** = शुद्ध
**स्वधर्मम्** = आफ्नो धर्मलाई
**न विदुः** = उनीहरू बुझ्दैनन्

**वाक्यार्थ–** वास्तवमा सौत्रामणि यागमा मदिरा सुँघ्ने विधान छ, पिउने होइन। यज्ञमा पशुलाई आलभन गर्ने विधान छ, हिंसा गर्ने होइन र स्त्रीगमन सन्तानका लागि गर्ने विधान छ, रतिका लागि होइन। यी सबै शुद्ध आफ्ना धर्मलाई यी मूर्खहरूले बुझ्नेन्। (यसैले अन्यथा अर्थ गर्दछन्)।

**विवरण–** यस प्रसङ्गमा आफ्नो कामना पूरा गर्न वेदविधिको आड लिई मदिरापान, मांसभक्षण, स्त्रीसुखभोग आदि गर्नेहरूको निन्दा गरिएको छ। वेदको कर्ममार्गलाई मात्र विचार गर्ने र त्यसकै

फल आदिमा आसक्ति गर्ने व्यक्तिहरू भगवान्‌को मायाद्वारा मुग्ध हुन्छन् र तिनीहरू नचाहिँदा झन्झटमा फस्न पुग्दछन्। शास्त्रहरूमा भक्ति या ज्ञाननिष्ठाले रहित भएका कर्मीहरूको निन्दा गरिएको छ। कर्मकाण्डले बताएका अनेक कर्महरूमा नै फसिरहने अनि आत्मज्ञानरूपी परम कल्याणको भने विचार नै नगर्ने व्यक्तिहरू महामूर्ख हुन् भनी मुण्डकोपनिषद् (१।२।१०)मा यिनीहरूको निन्दा गरिएको छ— **इष्टापूर्तं मन्यमाना वरिष्ठं नात्यच्छ्रेयो वेदयन्ते प्रमूढाः** अर्थात् कर्मकाण्डले बताए अनुसार इष्ट र पूर्त कर्महरूलाई नै सर्वश्रेष्ठ ठानी मुग्ध भएका व्यक्तिहरू अरू कुनै कल्याणको साधनामा लाग्न सक्दैनन्। गीता (२।४२)मा पनि भगवान्‌ले सधैँ वेदको नाम लिई त्यसको कर्मभागमा नै फस्ने व्यक्तिहरूलाई वेदवादरता भनी निन्दा गर्नुभएको छ। यहाँ के बुझ्नु आवश्यक छ भने उपनिषद् अनि गीतामा पनि वैदिक कर्मयोगको निन्दा गरिएको हुँदै होइन, यहाँ त वेदको परम तात्पर्यलाई नबुझी केवल कर्ममा मात्र आसक्त हुने व्यक्तिहरूले आफूलाई वैदिक धर्ममा निष्ठा भएको भन्नु उपयुक्त छैन भनी ती अज्ञानीहरूको मात्र निन्दा गरिएको हो। यी अज्ञानीहरू यद्यपि वैदिक कर्ममा नै लागेका छन्, तर तिनीहरूले त्यसको परम प्रयोजनलाई बङ्ग्याई आफ्नो वासनापूर्तिको अनुकूल बनाउँदै कर्महरूको व्याख्या गर्दछन्। भोगमा आसक्त भएका तिनीहरूले वेदको आज्ञा अनुसार वैदिक धर्मको पालना गरेको नभई आफ्नो वासनापूर्तिका लागि स्वर्ग आदि फल पाउन नै त्यसको प्रयोग गरेका हुन्छन्। गीता (२।४४)मा भगवान् भन्नुहुन्छ— **भोगैश्वर्यप्रसक्तानां तयापहृतचेतसाम्** अर्थात् भोग र दिव्य ऐश्वर्यमा आसक्त भएका र त्यही वासनाले विवेकशक्ति अपहृत भएका व्यक्तिहरूको चित्त समाधिमा लाग्दैन। वासनाको कारण विवेक नष्ट भएका यिनीहरू भगवान्‌को मायाद्वारा मोहित हुन्छन् र वेदमा स्त्रीसंसर्ग, मांसभक्षण, सुरापान आदिको विधितः व्यवस्था भएको छ र ती-ती ठाउँमा ती-ती कर्म गर्नैपर्दछ र नगरे अवैदिक भइन्छ भन्ने प्रचार गर्दै हिँड्दछन्। यस्तै वासनाग्रस्त अज्ञानीहरूको भ्रान्त धारणालाई नष्ट गर्दै यहाँ मांसभक्षण, हिंसा आदिको प्रसङ्गलाई विशेष व्याख्या गरिएको छ।

चमस भन्नुहुन्छ— **व्यवायामिषमद्यसेवा** अर्थात् स्त्रीपुरुषको रति, मांसभक्षण अनि मदिरापान आदिमा संसारी मानिसहरूको स्वतः नै प्रवृत्ति भइरहेकै छ, त्यसमा वेदवचनले पुनः प्रवृत्त गराउनुपर्ने आवश्यकता छैन। यहाँ के शङ्का हुन्छ भने वेदवचनले त **ऋतौ भार्याम् उपेयात्** अर्थात् ऋतुकालमा स्त्रीसंसर्ग गरोस्, **हुतशेषं भक्षयेत्** अर्थात् देवतालाई हवन गरेर बाँकी रहेको हवि खाओस् अनि **सौत्रामण्यां सुराग्रहान् गृह्णाति** अर्थात् सौत्रामणी यज्ञमा सुरा पिओस् भनी विधान गरिएकै छ। यसको उत्तर के हो भने वेदवाक्यले बताएका विधिहरू अनेक प्रकारका हुन्छन्। तीमध्ये यी वाक्यहरू अपूर्व विधि नभई नियमविधिरूप हुन्। अपूर्व विधि भनेको वेदले अरू प्रमाणको अपेक्षा नगरी स्वतन्त्र रूपमा बताउने आज्ञावचन हो, यस्तो आज्ञालाई अनिवार्य पालना गर्नुपर्दछ। श्लोकमा आएको **व्यवस्थितिः** भन्ने शब्दले पशुहिंसा, सुरापान आदि बताउने वाक्यहरूले यसलाई निश्चित ठाउँमा व्यवस्थित या नियमित बनाएका हुन् भन्ने बुझाएको छ। नियमविधि भनेकै सबैतिर प्राप्त भएको कुरालाई निश्चित ठाउँमा सीमित गराउने विधि हो। वेदले स्त्रीसंसर्ग गर्नुछ भने सन्तानप्राप्तिका लागि मात्र गर, मांसभक्षण गर्नुछ भने यज्ञमा आहुति दिएर मात्र गर अनि सुराग्रहण गर्नुछ भने सौत्रामणी यज्ञमा मात्र गर भनी त्यसको सीमा तोकेको हो।

यस विषयमा अरु स्पष्ट पार्दै चमस भन्नुहुन्छ— **आसु निवृत्तिः इष्टा** अर्थात् यी ठाउँमा व्यवस्था गर्नु पनि निवृत्तिकै उद्देश्यले हो। त्यसैले यज्ञमा मांसभक्षणको पनि शास्त्रले विधान गरेको होइन। कामनावशात् मांसभक्षण आदि नित्य प्राप्त भएकाले वेदले त्यसको विधान गर्नुपर्ने आवश्यकता नै छैन। यदि वेदमा कहीँ त्यस्तो व्यवस्था देखिन्छ भने त्यसको तात्पर्य के हुन्छ भने वेदले सकेसम्म यी कुराहरूबाट निवृत्तिको उपदेश गर्न आदेश दिएको हो। यसरी मांसभक्षण, सुराग्रहण आदिका ती विधिहरू पनि निवृत्तिपरक नै हुन् भन्ने सिद्ध हुन्छ।

योगीश्वर चमस **सौत्रामण्यां सुराग्रहान् गृह्णाति** आदि वाक्यहरूको विशेष अर्थ बताउँदै भन्नुहुन्छ— यहाँ यज्ञमा पनि सुरापानको विधान नभई केवल **घ्राणभक्षः** अर्थात् सुँघ्नुरूपी भक्षणको मात्र विधान हो। यसको अर्थ यज्ञमा पनि मदिरा पिउने नभई केवल सुँघ्नुपर्ने मात्र हो। यसै गरी यज्ञमा **पशोः आलभनं** अर्थात् पशुको आलभन वा स्पर्श गर्नुपर्छ भन्ने मात्र बताइएको हो, हिंसा गर्नु भनिएको होइन। यसै गरी **व्यवायः प्रजया** अर्थात् स्त्रीसंसर्ग केवल सन्तानप्राप्तिका लागि हो, रतिक्रीडाका लागि होइन। यसरी अरू वेलामा पनि शास्त्रविधिको आड लिई स्वार्थवश वासनापूर्तिका लागि यिनको प्रयोग गर्नु अधर्म नै हुन्छ। अतः यिनबाट निवृत्त गराउनु नै शास्त्रको उद्देश्य हो।

**ये त्वनेवंविदोऽसन्तः स्तब्धाः सदभिमानिनः।**
**पशून् द्रुह्यन्ति विश्रब्धाः प्रेत्य खादन्ति ते च तान्॥ १४॥**

**पदार्थ—**
**ये तु** = जो
**अनेवंविदः** = यो धर्मको रहस्य नबुझेका
**असन्तः** = असज्जन
**स्तब्धाः** = अविनीत र
**सदभिमानिनः** = सज्जन हौँ भनेर अभिमान गर्ने व्यक्तिहरू
**विश्रब्धाः** = निःशङ्क भएर
**पशून्** = पशुहरूलाई
**द्रुह्यन्ति** = हिंसा गर्दछन् (यसैले)
**तान्** = ती व्यक्तिहरूलाई
**ते च** = ती पशुहरूले
**प्रेत्य** = परलोकमा
**खादन्ति** = खान्छन्

**वाक्यार्थ—** धर्मको रहस्यलाई नबुझ्ने दुष्ट स्वभावका अविनीत, आफूलाई सज्जन र ज्ञाता मान्ने व्यक्तिहरू निःशङ्क भएर पशुहिंसा गर्दछन् तर पछि तिनीहरूलाई परलोकमा तिनै पशुहरूले खान्छन्।

**द्विषन्तः परकायेषु स्वात्मानं हरिमीश्वरम्।**
**मृतके सानुबन्धेऽस्मिन् बद्धस्नेहाः पतन्त्यधः॥ १५॥**

**पदार्थ—**
**परकायेषु** = अरूको शरीरमा (जीवरूपले रहेको)
**स्वात्मानं** = आफ्नो आत्मारूप
**ईश्वरं** = अन्तर्यामी भगवान्
**हरिम्** = श्रीहरिलाई
**द्विषन्तः** = द्वेष गर्ने र
**सानुबन्धे** = स्त्रीपुत्र आदिमा लिप्त
**अस्मिन्** = यो
**मृतके** = मुर्दातुल्य शरीरमा
**बद्धस्नेहाः** = अतिस्नेह गर्ने

| व्यक्तिहरू | **अधः** = नरकमा | **पतन्ति** = पर्दछन् |
|---|---|---|

**वाक्यार्थ–** अर्काको शरीरमा अन्तर्यामीरूपले रहने आत्मारूप श्रीहरिलाई द्वेष गर्ने र स्त्रीपुत्र आदिमा लिप्त यो मुर्दा तुल्य शरीरमा स्नेह गर्ने व्यक्तिहरू नरकमा पर्दछन्।

**ये कैवल्यमसम्प्राप्ता ये चातीताश्च मूढताम्।**

**त्रैवर्गिका ह्यक्षणिका आत्मानं घातयन्ति ते ॥ १६ ॥**

| **पदार्थ–** | **अतीताः च** = पार गरेका छन्, | **ते** = ती व्यक्तिहरूले |
|---|---|---|
| **ये** = जो | त्यस्ता | **हि** = निश्चय नै |
| **कैवल्यं** = तत्त्वज्ञानमा | **त्रैवर्गिकाः** = धर्म, अर्थ र | **आत्मानं** = आफूलाई |
| **असम्प्राप्ताः** = प्राप्त नभएका | काममा लागेका तथा | **घातयन्ति** = विनाश गर्दछन् |
| **ये च** = जसले | **अक्षणिकाः** = एक क्षण पनि | |
| **मूढतां** = जडतालाई | श्रवण, मननमा लाग्न नसक्ने | |

**वाक्यार्थ–** जसले तत्त्वज्ञान प्राप्त गरेका छैनन् र अत्यन्त जड पनि छैनन्; धर्म, अर्थ र काममा लागेका तर श्रवण, मननमा एक क्षण पनि दिन नसकेका त्यस्ता व्यक्तिहरूले आफूलाई नाश गर्दछन्।

**एत आत्महनोऽशान्ता अज्ञाने ज्ञानमानिनः।**

**सीदन्त्यकृतकृत्या वै कालध्वस्तमनोरथाः ॥ १७ ॥**

| **पदार्थ–** | **अज्ञाने** = अज्ञानजन्य कर्मलाई | मनका इच्छाहरूलाई नष्ट |
|---|---|---|
| **एते** = यी | **ज्ञानमानिनः** = ज्ञान मानेर | पारेका व्यक्तिहरू |
| **आत्महनः** = आत्मघाती | **अकृतकृत्याः** = गर्नुपर्ने काम | **वै** = निश्चय नै |
| **अशान्ताः** = अशान्त | नगरेका | **सीदन्ति** = दुःखी हुन्छन् |
| (छट्पटाएका) | **कालध्वस्तमनोरथाः** = समयले | |

**वाक्यार्थ–** यी आत्मघाती, अशान्त र अज्ञानजन्य कर्मलाई नै ज्ञान मानेर भ्रमित भएका व्यक्तिहरूले गर्नुपर्ने काम गरेका छैनन्, उनीहरूका मनको इच्छा पनि समयले नष्ट गरिदिन्छ, त्यस्ता व्यक्तिहरू अत्यन्त दुःखी हुन्छन्।

**हित्वात्यायासरचिता गृहापत्यसुहृच्छ्रियः।**

**तमो विशन्त्यनिच्छन्तो वासुदेवपराङ्मुखाः ॥ १८ ॥**

| **पदार्थ–** | भगवान्बाट विमुख व्यक्तिहरू | पनि |
|---|---|---|
| **वासुदेवपराङ्मुखाः** = | **अनिच्छन्तः** = नचाहँदा नचाहँदै | **अत्यायासरचिताः** = बडा कष्टले |

कमाएको
**गृहापत्यसुहृच्छ्रियः** = घर,
सन्तान, मित्र र धनसम्पत्तिलाई
**हित्वा** = छाडेर
**तमः** = नरकमा
**विशन्ति** = पर्दछन्

**वाक्यार्थ–** भगवान्‌बाट विमुख भएका व्यक्तिहरू नचाहँदा नचाहँदै पनि कष्टले कमाएको घर, सन्तान, मित्र र धनसम्पत्तिलाई छाडेर नरकमा पर्दछन्।

**राजोवाच** (राजा निमिले भने)

**कस्मिन् काले स भगवान् किं वर्णः कीदृशो नृभिः।**
**नाम्ना वा केन विधिना पूज्यते तदिहोच्यताम्॥ १९॥**

**पदार्थ–**
**सः** = ती
**भगवान्** = भगवान् नारायण
**कस्मिन्** = कुन
**काले** = युगमा
**किं वर्णः** = कस्तो वर्णवाला
**कीदृशः** = कस्तो आकृतिवाला
**केन** = कुन
**नाम्ना** = नामले प्रसिद्ध र
**विधिना वा** = कुन विधिले
**नृभिः** = मानिसहरूद्वारा
**पूज्यते** = पूजा गरिनुहुन्छ
**तत्** = ती सबै कुरा
**इह** = यहाँ
**उच्यताम्** = बताउनुहोस्

**वाक्यार्थ–** ती भगवान् कुन युगमा कस्तो वर्णको हुनुहुन्छ ? कस्तो आकृतिवाला हुनुहुन्छ ? र कुन नामले प्रसिद्ध हुनुहुन्छ ? अनि मानिसहरूले कुन विधिले उहाँको पूजा गर्दछन् ? ती सबै कुरा हामीहरूलाई बताउनुहोस्।

**करभाजन उवाच** (करभाजनले भने)

**कृतं त्रेता द्वापरं च कलिरित्येषु केशवः।**
**नानावर्णाभिधाकारो नानैव विधिनेज्यते॥ २०॥**

**पदार्थ–**
**कृतं** = सत्ययुग
**त्रेता** = त्रेतायुग
**द्वापरं** = द्वापरयुग र
**कलिः च** = कलिनामको
**इत्येषु** = यी चार युगमा
**नानावर्णाभिधाकारः** = विभिन्न वर्ण, नाम र आकृतिवाला
**केशवः** = भगवान् नारायण
**नाना एव विधिना** = युग अनुरूप विभिन्न विधिले
**इज्यते** = पूजित हुनुहुन्छ

**वाक्यार्थ–** सत्य, त्रेता, द्वापर र कलि यी चारै युगमा भगवान् विभिन्न वर्ण, नाम र आकृतिका हुनुहुन्छ अनि भिन्न-भिन्न विधिद्वारा पूजित हुनुहुन्छ।

**कृते शुक्लश्चतुर्बाहुर्जटिलो वल्कलाम्बरः।**
**कृष्णाजिनोपवीताक्षान् बिभ्रद् दण्डकमण्डलू॥ २१॥**

**पदार्थ–**
**कृते** = सत्ययुगमा (भगवान्)
**शुक्लः** = सेतो रङ्गका
**चतुर्बाहुः** = चार हात भएका
**जटिलः** = जटा पालेका
**वल्कलाम्बरः** = वल्कल वस्त्र

पहिरिएका यज्ञोपवीत र अक्षमाला तथा कमण्डलु
**कृष्णाजिनोपवीताक्षान्** = मृगचर्म, **दण्डकमण्डलू** = दण्ड र **बिभ्रत्** = धारण गरेका हुनुहुन्छ

**वाक्यार्थ–** भगवान् सत्ययुगमा सेतो रङ्गका हुनुहुन्छ। चार हात भएका, जटा पालेका, वल्कल वस्त्र लगाएका र मृगचर्म, यज्ञोपवीत तथा अक्षमाला धारण गरेका हुनुहुन्छ, अनि हातमा दण्ड र कमण्डलु लिनुहुन्छ।

**मनुष्यास्तु तदा शान्ता निर्वैराः सुहृदः समाः।**
**यजन्ति तपसा देवं शमेन च दमेन च॥ २२॥**

**पदार्थ–**
**तदा तु** = त्यो सत्ययुगमा चाहिँ
**शान्ताः** = शान्त स्वभावका
**निर्वैराः** = वैरभावरहित
**सुहृदः** = सबैका हितैषी
**समाः** = समदर्शी
**मनुष्याः** = मानिसहरूले
**तपसा** = तपस्याद्वारा
**शमेन** = अन्तः इन्द्रिय निग्रहद्वारा
**दमेन च** = बाह्य इन्द्रिय निग्रह गरेर पनि
**देवं** = भगवान्लाई
**यजन्ति** = आराधना गर्दछन्

**वाक्यार्थ–** सत्ययुगमा मानिसहरू शान्त स्वभावका, वैरभावरहित, सबैका हितैषी र समदर्शी हुन्छन्। त्यसबखत उनीहरूले तपस्याद्वारा र इन्द्रिय आदिको निग्रह गरेर भगवान्को आराधना गर्दछन्।

**हंसः सुपर्णो वैकुण्ठो धर्मो योगेश्वरोऽमलः।**
**ईश्वरः पुरुषोऽव्यक्तः परमात्मेति गीयते॥ २३॥**

**पदार्थ–**
**हंसः** = हंस
**सुपर्णः** = सुपर्ण
**वैकुण्ठः** = वैकुण्ठ
**धर्मः** = धर्म
**योगेश्वरः** = योगेश्वर
**अमलः** = अमल
**ईश्वरः** = ईश्वर
**पुरुषः** = पुरुष
**अव्यक्तः** = अव्यक्त र
**परमात्म इति** = परमात्मा इत्यादि नामले पनि सत्ययुगमा
**गीयते** = पुकारिनुहुन्छ

**वाक्यार्थ–** सत्ययुगमा भगवान् हंस, सुपर्ण, वैकुण्ठ, धर्म, योगेश्वर, अमल, ईश्वर, पुरुष, अव्यक्त र परमात्मा आदि नामले पुकारिनुहुन्छ।

**त्रेतायां रक्तवर्णोऽसौ चतुर्बाहुस्त्रिमेखलः।**
**हिरण्यकेशस्त्रय्यात्मा स्रुक्स्रुवाद्युपलक्षणः॥ २४॥**

**पदार्थ–**
**त्रेतायां** = त्रेतायुगमा
**असौ** = उहाँ
**रक्तवर्णः** = रातो वर्णका
**चतुर्बाहुः** = चार हात भएका
**त्रिमेखलः** = तीनसरो मेखला

| | | |
|---|---|---|
| धारण गरेका | **त्रय्यात्मा** = वेदले बताएको | आदि यज्ञपात्र धारण गरेका |
| **हिरण्यकेशः** = सुनजस्तो पहेँलो | यज्ञस्वरूप र | हुनुहुन्छ |
| कपाल भएका | **स्रुक्स्रुवाद्युपलक्षणः** = स्रुक्, स्रुवा | |

**वाक्यार्थ–** त्रेतायुगमा भगवान् रातो वर्णका हुनुहुन्छ। उहाँका चार हात हुन्छन्। उहाँले तीनसरो मेखला धारण गर्नुहुन्छ, उहाँको कपाल सुन जस्तो पहेँलो हुन्छ, वेदले बताएको यज्ञस्वरूप भगवान्‌ले स्रुक्, स्रुवा आदि यज्ञपात्रलाई धारण गर्नुहुन्छ।

**तं तदा मनुजा देवं सर्वदेवमयं हरिम्।**
**यजन्ति विद्यया त्रय्या धर्मिष्ठा ब्रह्मवादिनः॥ २५॥**

| पदार्थ– | | |
|---|---|---|
| | **मनुजाः** = मनुष्यहरूले | **हरिम्** = श्रीहरि नारायणलाई |
| **तदा** = त्यो त्रेतायुगमा | **तं** = ती | **त्रय्या** = वेदद्वारा प्रतिपादित |
| **धर्मिष्ठाः** = धर्मात्मा | **सर्वदेवमयं** = सर्वदेवस्वरूप | **विद्यया** = यज्ञ आदि कर्मद्वारा |
| **ब्रह्मवादिनः** = ब्रह्मवादी | **देवं** = भगवान् | **यजन्ति** = आराधना गर्दछन् |

**वाक्यार्थ–** त्रेतायुगमा धर्मात्मा र ब्रह्मवादी मनुष्यहरूले सर्वदेवरूप भगवान् श्रीहरि नारायणलाई वेदप्रतिपादित यज्ञ आदि कर्मद्वारा आराधना गर्दछन्।

**विष्णुर्यज्ञः पृश्निगर्भः सर्वदेव उरुक्रमः।**
**वृषाकपिर्जयन्तश्च उरुगाय इतीर्यते॥ २६॥**

| पदार्थ– | | |
|---|---|---|
| | **सर्वदेवः** = सर्वदेव | **उरुगायः च** = उरुगाय |
| **विष्णुः** = विष्णु | **उरुक्रमः** = उरुक्रम | **इति** = यस्ता नामले पनि |
| **यज्ञः** = यज्ञ | **वृषाकपिः** = वृषाकपि | **ईर्यते** = पुकारिनुहुन्छ |
| **पृश्निगर्भः** = पृश्निगर्भ | **जयन्तः** = जयन्त र | |

**वाक्यार्थ–** त्रेतायुगमा भगवान्‌लाई मानिसहरूले विष्णु, यज्ञ, पृश्निगर्भ, सर्वदेव, उरुक्रम, वृषाकपि, जयन्त र उरुगाय आदि नामहरूले पुकार्दछन्।

**द्वापरे भगवाञ्छ्यामः पीतवासा निजायुधः।**
**श्रीवत्सादिभिरङ्कैश्च लक्षणैरुपलक्षितः॥ २७॥**

| पदार्थ– | | |
|---|---|---|
| | **निजायुधः** = शङ्ख, चक्र, गदा, | **लक्षणैः च** = कौस्तुभ आदि |
| **द्वापरे** = द्वापरयुगमा | पद्म आदि आफ्ना आयुध | लक्षणहरूद्वारा पनि |
| **भगवान्** = भगवान् नारायण | धारण गर्ने | **उपलक्षितः** = चिनिने हुनुहुन्छ |
| **श्यामः** = कालो वर्णको हुनुहुन्छ | **श्रीवत्सादिभिः** = श्रीवत्स आदि | |
| **पीतवासा** = पीताम्बर धारण गर्ने | **अङ्कैः** = चिह्नहरूद्वारा र | |

**वाक्यार्थ–** द्वापरयुगमा भगवान् कालो वर्णको हुनुहुन्छ, उहाँले पीताम्बर धारण गर्नुहुन्छ, अनि चार हातमा उहाँले शङ्ख, चक्र, गदा, पद्म धारण गर्नुहुन्छ अनि उहाँ श्रीवत्स आदि चिह्न र कौस्तुभ आदि लक्षणद्वारा चिनिने हुनुहुन्छ।

**तं तदा पुरुषं मर्त्या महाराजोपलक्षणम्।**
**यजन्ति वेदतन्त्राभ्यां परं जिज्ञासवो नृप ॥ २८ ॥**

**पदार्थ–**
**नृप** = हे राजा निमि
**तदा** = त्यस बखतमा
**जिज्ञासवः** = तत्त्वजिज्ञासु
**मर्त्याः** = मानिसहरू
**महाराजोपलक्षणं** = महाराज जस्तो छत्र, चामर आदि चिह्नले युक्त
**तं** = ती
**परं पुरुषं** = परम पुरुष नारायणलाई
**वेदतन्त्राभ्यां** = वैदिक र तान्त्रिक विधिले
**यजन्ति** = पूजा गर्दछन्

**वाक्यार्थ–** हे राजा निमि ! द्वापरयुगमा तत्त्वजिज्ञासु भक्तहरूले महाराज जस्तो छत्र, चामर आदि चिह्नले युक्त भगवान् नारायणलाई वैदिक र तान्त्रिक विधिले पूजा गर्दछन्।

**नमस्ते वासुदेवाय नमः सङ्कर्षणाय च।**
**प्रद्युम्नायानिरुद्धाय तुभ्यं भगवते नमः ॥ २९ ॥**
**नारायणाय ऋषये पुरुषाय महात्मने।**
**विश्वेश्वराय विश्वाय सर्वभूतात्मने नमः ॥ ३० ॥**
**इति द्वापर उर्वीश स्तुवन्ति जगदीश्वरम्।**
**नानातन्त्रविधानेन कलावपि यथा शृणु ॥ ३१ ॥**

**पदार्थ–**
**वासुदेवाय** = वासुदेव भगवान्
**ते** = हजुरलाई
**नमः** = नमस्कार छ
**सङ्कर्षणाय च** = सङ्कर्षण भगवान्लाई पनि
**नमः** = नमस्कार छ
**प्रद्युम्नाय** = प्रद्युम्नलाई
**अनिरुद्धाय** = अनिरुद्धलाई
**भगवते** = भगवान्
**तुभ्यं** = हजुरलाई
**नमः** = नमस्कार छ
**ऋषये** = ऋषि
**नारायणाय** = नारायण
**महात्मने** = महात्मास्वरूप
**पुरुषाय** = पुरुष
**विश्वाय** = सर्वस्वरूप
**सर्वभूतात्मने** = सर्वान्तर्यामी
**विश्वेश्वराय** = सबैका मालिक हजुरलाई
**नमः** = नमस्कार छ
**इति** = यसरी
**द्वापरे** = द्वापर युगमा
**जगदीश्वरं** = भगवान्लाई
**स्तुवन्ति** = स्तुति गर्दछन् र
**उर्वीश** = हे राजा निमि
**कलौ अपि** = कलियुगमा पनि
**नानातन्त्रविधानेन** = विविध तान्त्रिक विधिले
**यथा** = जसरी पूजा आराधना गर्दछन् (त्यो पनि)
**शृणु** = सुन्नुहोस्

**वाक्यार्थ–** द्वापरयुगमा भक्तहरूले वासुदेव भगवान्लाई नमस्कार छ, सङ्कर्षणलाई नमस्कार छ र प्रद्युम्न, अनिरुद्ध, ऋषि, नारायण, महात्मा पुरुष, सर्वस्वरूप, सर्वान्तर्यामी, विश्वेश्वर भगवान्लाई नमस्कार छ भनेर स्तुति गर्दछन्। हे राजा निमि ! कलियुगमा पनि भगवान्लाई जसरी तान्त्रिक विधिले आराधना गर्दछन्, त्यो सुन्नुहोस्।

**कृष्णवर्णं त्विषाकृष्णं साङ्गोपाङ्गास्त्रपार्षदम्।**
**यज्ञैः सङ्कीर्तनप्रायैर्यजन्ति हि सुमेधसः॥ ३२॥**

**पदार्थ–**
**सुमेधसः** = विवेकीहरू
**कृष्णवर्णं** = कालो वर्णको
**त्विषा** = कान्तिले नै
**अकृष्णं** = इन्द्रनीलमणि जस्तो उज्ज्वल
**साङ्गोपाङ्गास्त्रपार्षदं** = अङ्ग, उपाङ्ग, आयुध र पार्षद आदिले सहित भगवान्लाई
**हि** = निश्चय नै
**सङ्कीर्तनप्रायैः** = नामसङ्कीर्तन आदिले र
**यज्ञैः** = यज्ञ आदिले
**यजन्ति** = आराधना गर्दछन्

**वाक्यार्थ–** कलियुगमा विवेकीहरूले इन्द्रनीलमणि जैँ चम्किला कालो वर्णका अङ्ग, उपाङ्ग, आयुध र पार्षद आदिले सहित भगवान्लाई नामसङ्कीर्तन, यज्ञ र पूजन आदिद्वारा आराधना गर्दछन्।

**ध्येयं सदा परिभवघ्नमभीष्टदोहं**
**तीर्थास्पदं शिवविरिञ्चिनुतं शरण्यम्।**
**भृत्यार्तिहं प्रणतपाल भवाब्धिपोतं वन्दे**
**महापुरुष ते चरणारविन्दम्॥ ३३॥**

**पदार्थ–**
**प्रणतपाल** = हे भक्तका संरक्षक
**महापुरुष** = हे पुरुषोत्तम
**सदा** = सधैँ
**ध्येयं** = ध्यान गर्न योग्य
**परिभवघ्नं** = अपमानलाई नाश गर्ने
**अभीष्टदोहं** = मनोरथ पूर्ण गर्ने
**तीर्थास्पदं** = तीर्थहरूको आश्रय
**शिवविरिञ्चिनुतं** = शिव र ब्रह्माजीद्वारा वन्दना गरिएका
**शरण्यं** = शरणमा आएकालाई आश्रय दिने
**भृत्यार्तिहं** = भक्तको क्लेशलाई नाश गर्ने र
**भवाब्धिपोतं** = संसारसागर तार्ने डुङ्गा जस्ता
**ते** = हजुरका
**चरणारविन्दं** = चरणकमललाई
**वन्दे** = नमस्कार गर्दछु

**वाक्यार्थ–** हे भक्तरक्षक महापुरुष ! हजुरको चरणकमल सधैँ ध्यान गर्न योग्य छ। जसले अर्काको अपमानलाई नाश गरिदिन्छ, भक्तको मनोरथलाई पूर्ण गरिदिन्छ र सारा तीर्थहरूको आश्रयरूप शिव र ब्रह्माजीद्वारा पनि वन्दना गरिएको, शरणागतवत्सल, भक्तहरूको क्लेशलाई नाश गरिदिने तथा संसारसागर तार्ने डुङ्गाबराबरको हजुरको जो चरणकमल छ, त्यसलाई म नमस्कार गर्दछु।

**त्यक्त्वा सुदुस्त्यजसुरेप्सितराज्यलक्ष्मीं**
**धर्मिष्ठ आर्यवचसा यदगादरण्यम्।**
**मायामृगं दयितयेप्सितमन्वधावद्**
**वन्दे महापुरुष ते चरणारविन्दम्॥ ३४॥**

**पदार्थ–**
**महापुरुष** = हे पुरुषोत्तम
**धर्मिष्ठः** = हजुर धर्मात्मा हुनुहुन्छ
**यत्** = किनभने
**आर्यवचसा** = पिताजीको आज्ञाले
**सुदुस्त्यजसुरेप्सितराज्यलक्ष्मीं** = सजिलै त्याग्न नसकिने देवताहरूले पनि चाहने राज्यवैभवलाई
**त्यक्त्वा** = त्यागेर
**अरण्यं** = वनमा
**अगात्** = जानुभयो
**दयितया** = पत्नी सीताजीद्वारा
**इप्सितं** = चाहना गरिएको
**मायामृगं** = नक्कली मृगको
**अन्वधावत्** = पछि लाग्नुभयो, त्यस्ता
**ते** = हजुरको
**चरणारविन्दं** = चरणकमललाई
**वन्दे** = नमस्कार गर्दछु

**वाक्यार्थ–** हे पुरुषोत्तम प्रभु ! हजुर परम धर्मात्मा हुनुहुन्छ किनभने हजुरले पिताजीको आज्ञा पालन गर्न त्याग्नै नसकिने अनि देवताहरूद्वारा पनि चाहना गरिएको राज्यवैभवलाई त्यागेर वनमा जानुभयो। पछि वनमा सीताजीद्वारा चाहना गरिएकाले कपटले मृगरूप धारण गरेको मारिचको पछाडि लाग्नुभयो, यस्ता हजुरको चरणकमललाई म वन्दना गर्दछु।

**एवं युगानुरूपाभ्यां भगवान् युगवर्तिभिः।**
**मनुजैरिज्यते राजन् श्रेयसामीश्वरो हरिः॥ ३५॥**

**पदार्थ–**
**राजन्** = हे राजा निमि
**एवं** = यसरी
**श्रेयसां** = कल्याणको
**ईश्वरः** = दाता
**भगवान्** = भगवान्
**हरिः** = श्रीहरि
**युगानुरूपाभ्यां** = युग अनुसार चलेका नाम र रूपको आधारमा
**युगवर्तिभिः** = ती-ती युगमा रहेका
**मनुजैः** = मनुष्यहरूद्वारा
**इज्यते** = पूजित हुनुहुन्छ

**वाक्यार्थ–** हे राजा निमि ! यसरी सबैलाई कल्याण प्रदान गर्ने भगवान् युग अनुसारको नाम र रूपको आधारमा तत्-तत् गुणका मनुष्यहरूद्वारा पूजित हुनुहुन्छ।

**कलिं सभाजयन्त्यार्या गुणज्ञाः सारभागिनः।**
**यत्र सङ्कीर्तनेनैव सर्वः स्वार्थोऽभिलभ्यते॥ ३६॥**

**पदार्थ–**
**सारभागिनः** = सारभूत वस्तुलाई बुझ्ेका र

**गुणज्ञाः** = कलिको गुणलाई जान्ने
**आर्याः** = विवेकीहरू
**कलिं** = कलियुगलाई
**सभाजयन्ति** = प्रशंसा गर्दछन्
**यत्र** = जुन कलियुगमा
**सङ्कीर्तनेन एव** = भगवान्को नामसङ्कीर्तनले मात्र
**सर्वः** = सम्पूर्ण
**स्वार्थः** = मनोवाञ्छित वस्तु
**अभिलभ्यते** = प्राप्त हुन्छ

**वाक्यार्थ–** सारवस्तुलाई बुझेका विवेकीहरू कलियुगको प्रशंसा गर्दछन् किनभने कलियुगमा भगवान्को सङ्कीर्तन मात्रले सारा मनोवाञ्छित कुराहरू पूरा हुन्छन्।

**न ह्यतः परमो लाभो देहिनां भ्राम्यतामिह।**
**यतो विन्देत परमां शान्तिं नश्यति संसृतिः॥ ३७॥**

**पदार्थ–**
**इह** = यो संसारमा
**भ्राम्यतां** = घुमिरहेका
**देहिनां** = प्राणीहरूको
**अतः** = यो नामसङ्कीर्तन भन्दा
**परमः** = अर्को
**लाभः** = लाभ
**न हि** = छैन
**यतः** = जुन नामसङ्कीर्तनबाट
**परमां** = उत्कृष्ट
**शान्तिं** = शान्तिलाई
**विन्देत** = प्राप्त गर्दछ र
**संसृतिः** = जन्म मृत्युरूप दुःख पनि
**नश्यति** = नाश हुन्छ

**वाक्यार्थ–** संसारमा घुमिरहेका प्राणीहरूको लागि भगवान्को नामसङ्कीर्तन भन्दा अर्को लाभ कुनै छैन। किनभने जुन नाम सङ्कीर्तनबाट प्राणीलाई परम शान्ति प्राप्त हुन्छ र यसैबाट जन्म-मृत्युरूप भवदुःख पनि नाश हुन्छ।

**कृतादिषु प्रजा राजन् कलाविच्छन्ति सम्भवम्।**
**कलौ खलु भविष्यन्ति नारायणपरायणाः॥ ३८॥**
**क्वचित् क्वचिन्महाराज द्रविडेषु च भूरिशः।**
**ताम्रपर्णी नदी यत्र कृतमाला पयस्विनी॥ ३९॥**
**कावेरी च महापुण्या प्रतीची च महानदी।**
**ये पिबन्ति जलं तासां मनुजा मनुजेश्वर॥**
**प्रायो भक्ता भगवति वासुदेवेऽमलाशयाः॥ ४०॥**

**पदार्थ–**
**राजन्** = हे राजा निमि (त्यसैले)
**कृतादिषु** = सत्य, त्रेता आदि युगमा रहेका
**प्रजाः** = मनुष्यहरूले
**कलौ** = कलियुगमा
**सम्भवं** = आफ्नो जन्म
**इच्छन्ति** = चाहन्छन्
**महाराज** = हे महाराज निमि
**कलौ** = कलियुगमा
**खलु** = निश्चय नै
**क्वचित् क्वचित्** = कतै-कतै
**नारायणपरायणाः** = भगवान्का भक्तहरू हुनेछन् र
**द्रविडेषु च** = द्रविड आदि देशमा

भने
**भूरिशः** = धेरैको सङ्ख्यामा भक्तहरू हुनेछन्
**यत्र** = जुन द्रविड देशमा
**ताम्रपर्णी** = ताम्रपर्णी नामकी
**नदी** = नदी छिन् र
**कृतमाला** = कृतमाला नामकी
**पयस्विनी** = पयस्विनी (पयोष्णी) र
**महापुण्या** = अत्यन्त पुण्य
**कावेरी च** = कावेरी तथा
**महानदी** = ठुला-ठुला नदी
**प्रतीची च** = प्रतीची पनि बग्दछन्
**मनुजेश्वर** = हे राजा
**ये** = जो
**मनुजाः** = मनुष्यहरू
**तासां** = ती नदीहरूको
**जलं** = जल
**पिबन्ति** = पिउँछन् (तिनीहरू)
**अमलाशयाः** = अन्तःकरण शुद्ध भएका
**प्रायः** = प्रायः गरेर
**भगवति** = भगवान्
**वासुदेवे** = वासुदेवको
**भक्ताः** = भक्त
**भविष्यन्ति** = हुनेछन्

**वाक्यार्थ–** हे महाराज ! सत्य, त्रेता आदि युगका मनुष्यहरूले कलियुगमा आफ्नो जन्म चाहन्छन्। हे महाराज निमि ! कलियुगमा पनि कतै-कतै भगवान्का भक्तहरू हुनेछन् र द्रविड आदि देशमा त धेरै भक्तहरू रहनेछन्। जुन द्रविड देशमा ताम्रपर्णी, कृतमाला, पयोष्णी, अत्यन्त पवित्र कावेरी र प्रतीची आदि ठुला-ठुला नदीहरू बग्दछन्। हे राजा ! जो मनुष्यहरू ती नदीका जल पिउँछन्, तिनीहरूको अन्तःकरण शुद्ध हुन्छ र उनीहरू भगवान्को भक्त बन्दछन्।

**देवर्षिभूताप्तनृणां पितॄणां न किङ्करो नायमृणी च राजन्।**
**सर्वात्मना यः शरणं शरण्यं गतो मुकुन्दं परिहृत्य कर्तम्॥ ४१॥**

**पदार्थ–**
**राजन्** = हे राजा
**यः** = जो मनुष्य
**कर्तम्** = कर्मवासना (भेदबुद्धि) लाई
**परिहृत्य** = त्यागेर
**सर्वात्मना** = सर्वात्मभावले
**शरण्यं** = शरणमा जान योग्य
**मुकुन्दं** = भगवान् मुकुन्दको
**शरणं** = शरणमा
**गतः** = गएको छ
**अयं** = यो मनुष्य
**देवर्षिभूताप्तनृणां** = देवता, ऋषि, भूत, कुटुम्ब, अतिथि र
**पितॄणां** = पितृहरूको
**किङ्करः न** = नोकर बन्दैन
**ऋणी च न** = ऋणी पनि बन्दैन

**वाक्यार्थ–** हे राजा निमि ! जो मनुष्य भेदबुद्धिलाई त्यागेर सर्वात्मभावले शरणमा जान योग्य भगवान् मुकुन्दको शरणमा जान्छ भने त्यो देवता, ऋषि, कुटुम्ब वा अतिथिको ऋणी बन्दैन न त पितृहरूको नोकर नै बन्दछ (उसका ऋण सबै चुक्ता भइसकेका हुन्छन्)।

**स्वपादमूलं भजतः प्रियस्य त्यक्तान्यभावस्य हरिः परेशः।**
**विकर्म यच्चोत्पतितं कथञ्चिद्धुनोति सर्वं हृदि सन्निविष्टः॥ ४२॥**

**पदार्थ–**
**त्यक्तान्यभावस्य** = मनमा अरू भावना नलिने
**स्वपादमूलं** = आफ्नै चरणकमललाई
**भजतः** = भजन गर्ने
**प्रियस्य** = प्रिय भक्तको
**यत् कथञ्चित्** = कुनै प्रकारले
**विकर्म** = निषिद्ध कर्म

**उत्पतितं** = उत्पन्न भयो भने
**सर्वं** = त्यो सबै दुष्कर्मलाई
**हृदि च** = हृदयमा
**सन्निविष्टः** = बसेका
**परेशः** = सबैका मालिक
**हरिः** = भगवान् श्रीहरिले
**धुनोति** = नाश गरिदिनुहुन्छ

**वाक्यार्थ–** मनमा अरू चिन्तन नगर्ने, सधैँ भगवान्‌को चरणकमलको भजन गर्ने जो प्रिय भक्त छ, त्यस्ताबाट कथञ्चित् निषिद्ध कर्म भइहाल्यो भने पनि उसका हृदयमा विराजमान भगवान्‌ले ती सबै दुष्कर्महरूलाई नाश गरिदिनुहुन्छ।

**नारद उवाच** (नारदले भन्नुभयो)

**धर्मान् भागवतानित्थं श्रुत्वाथ मिथिलेश्वरः।**
**जायन्तेयान् मुनीन् प्रीतः सोपाध्यायो ह्यपूजयत्॥ ४३॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**इत्थं** = यसरी
**भागवतान्** = भगवान्‌लाई रिझाउने
**धर्मान्** = धर्महरूलाई
**श्रुत्वा** = सुनेर
**हि** = निश्चय नै
**प्रीतः** = प्रसन्न भएका
**मिथिलेश्वरः** = मिथिलाका अधिपति निमिले
**सोपाध्यायः** = आफ्नो पुरोहित सहित
**जायन्तेयान्** = जयन्तीका पुत्र
**मुनीन्** = मुनिहरूलाई
**अपूजयत्** = पूजा गरे

**वाक्यार्थ–** यसप्रकार भागवत धर्महरू सुनिसकेपछि अत्यन्त प्रसन्न भएका मिथिलाका अधिपति निमिले गुरु-पुरोहित सहित जयन्तीका पुत्र यी नव योगीश्वरहरूलाई पूजा गरे।

**ततोऽन्तर्दधिरे सिद्धाः सर्वलोकस्य पश्यतः।**
**राजा धर्मानुपातिष्ठन्नवाप परमां गतिम्॥ ४४॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**सिद्धाः** = सिद्ध योगीश्वरहरू
**सर्वलोकस्य** = सबैले
**पश्यतः** = हेर्दाहेर्दै
**अन्तर्दधिरे** = अन्तर्धान भए
**राजा** = राजा निमिले पनि
**धर्मान्** = भागवत धर्मलाई
**उपातिष्ठन्** = अनुष्ठान गर्दै
**परमां गतिं** = परम गतिलाई
**अवाप** = प्राप्त गरे

**वाक्यार्थ–** यसरी पूजा गरिसकेपछि ती योगीश्वरहरू सबैले हेर्दाहेर्दै अन्तर्धान भए र राजा निमिले पनि भागवत धर्महरूको अनुष्ठान गर्दै अन्तिममा परम गति प्राप्त गरे।

**त्वमप्येतान् महाभाग धर्मान् भागवताञ्छ्रुतान्।**
**आस्थितः श्रद्धया युक्तो निःसङ्गो यास्यसे परम्॥ ४५॥**

**पदार्थ–**
**महाभाग** = हे भाग्यशाली वसुदेव

**श्रुतान्** = सुनेका
**एतान्** = यी
**भागवतान्** = भागवत
**धर्मान्** = धर्महरूलाई
**निःसङ्गः** = अनासक्त भई
**श्रद्धया** = श्रद्धाले
**युक्तः** = युक्त भएर
**आस्थितः** = आचरण गर्दागर्दै
**त्वम् अपि** = हजुर पनि
**परं** = परमपदमा
**यास्यसे** = पुग्नुहुनेछ

**वाक्यार्थ–** हे भाग्यशाली वसुदेव ! सुनेका यी भागवत धर्महरूलाई अनासक्त भई श्रद्धापूर्वक आचरण गर्दागर्दै हजुर पनि परम पदमा प्राप्त हुनुहुनेछ।

**युवयोः खलु दम्पत्योर्यशसा पूरितं जगत्।**
**पुत्रतामगमद् यद् वां भगवानीश्वरो हरिः॥ ४६॥**

पदार्थ–
**युवयोः** = हजुरहरू दुई
**दम्पत्योः** = दम्पतीको
**यशसा** = कीर्तिले
**खलु** = निश्चय नै
**जगत्** = सारा संसार
**पूरितं** = पूर्ण भयो
**यत्** = किनभने
**भगवान्** = सर्वैश्वर्यसम्पन्न
**ईश्वरः** = सर्वसमर्थ
**हरिः** = श्रीहरि
**वां** = हजुरहरूको
**पुत्रतां** = पुत्र
**अगमत्** = बन्नुभयो

**वाक्यार्थ–** हजुर दुई दम्पतीको कीर्तिले सारा संसार पूर्ण भयो, किनभने सर्वैश्वर्यसम्पन्न सर्वसमर्थ श्रीहरि नै हजुरहरूको पुत्र बन्नुभयो।

**दर्शनालिङ्गनालापैः शयनासनभोजनैः।**
**आत्मा वां पावितः कृष्णे पुत्रस्नेहं प्रकुर्वतोः॥ ४७॥**

पदार्थ–
**कृष्णे** = श्रीकृष्णमा
**पुत्रस्नेहं** = छोराको स्नेह
**प्रकुर्वतोः** = गर्ने
**वां** = हजुरहरूको
**आत्मा** = अन्तःकरण
**दर्शनालिङ्गनालापैः** = दर्शन, आलिङ्गन, बातचित तथा
**शयनासनभोजनैः** = सँगै सुत्ने, बस्ने, खाने आदि कर्मले
**पावितः** = शुद्ध भइसकेको छ

**वाक्यार्थ–** श्रीकृष्णमा छोरोको स्नेहले दर्शन, आलिङ्गन, बातचित तथा सँगै सुत्ने, बस्ने, खाने आदि कर्मले हजुरहरूको अन्तःकरण अत्यन्त शुद्ध भइसकेको छ।

**वैरेण यं नृपतयः शिशुपालपौण्ड्र-**
**शाल्वादयो गतिविलासविलोकनाद्यैः।**
**ध्यायन्त आकृतधियः शयनासनादौ**
**तत्साम्यमापुरनुरक्तधियां पुनः किम्॥ ४८॥**

**पदार्थ—**
**गतिविलासविलोकनाद्यैः** = गमन, हाउभाउ, दर्शन, आदिले
**आकृतधियः** = बुद्धि नै त्यही आकारको भएका
**शिशुपालपौण्ड्रशाल्वादयः** = शिशुपाल, पौण्ड्रक, शाल्व आदि
**नृपतयः** = राजाहरूले
**यं** = जुन भगवान्‌को
**शयनासनादौ** = सुत्दा, बस्दा र खाँदा आदिमा पनि
**वैरेण** = वैरभावले
**ध्यायन्तः** = चिन्तन गर्दै
**तत्साम्यं** = भगवान्‌को समान स्वरूपलाई
**आपुः** = प्राप्त गरे भने
**अनुरक्तधियां** = भगवान्‌सँग प्रेमबुद्धि भएका हजुरहरूको विषयमा त
**किं पुनः** = के कुरा गर्नु र

**वाक्यार्थ—** भगवान्‌को गमन, हाउभाउ, दर्शन आदिले त्यही-त्यही आकारको बुद्धि भएका शिशुपाल, पौण्ड्र, शाल्व आदि राजाहरूले सुत्दा, बस्दा, खाँदा अत्यन्त वैरभावले चिन्तन गर्दा त उनीहरूले भगवान्‌को स्वरूपतालाई प्राप्त गरे भने अत्यन्त प्रेमपूर्वक भगवान्‌को चिन्तन गर्ने हजुरको विषयमा त झन् शङ्कै भएन।

**मापत्यबुद्धिमकृथाः कृष्णे सर्वात्मनीश्वरे।**
**मायामनुष्यभावेन गूढैश्वर्ये परेऽव्यये॥ ४९॥**

**पदार्थ—**
**सर्वात्मनि** = सबैका आत्मस्वरूप
**ईश्वरे** = सर्वसमर्थ
**मायामनुष्यभावेन** = लीलाका लागि मनुष्यरूप धारण गरी
**गूढैश्वर्ये** = आफ्नो विभूतिलाई लुकाएका
**परे** = मायाभन्दा पर रहेका
**अव्यये** = अविनाशी
**कृष्णे** = श्रीकृष्णमा
**अपत्यबुद्धिम्** = मेरो छोरो भन्ने भाव
**मा अकृथाः** = नगर्नुहोस्

**वाक्यार्थ—** जसले मायाद्वारा मनुष्यरूप लिएर आफ्नो ऐश्वर्यलाई लुकाएको छ, त्यस्ता मायाभन्दा पर रहेका अविनाशी सबैका आत्मस्वरूप सर्वसमर्थ श्रीकृष्णलाई छोरो भन्ने भावना नगर्नुहोस्।

**भूभारासुरराजन्यहन्तवे गुप्तये सताम्।**
**अवतीर्णस्य निर्वृत्यै यशो लोके वितन्यते॥ ५०॥**

**पदार्थ—**
**लोके** = लोकमा
**भूभारासुरराजन्यहन्तवे** = भूभारहरण र असुर राजाहरूको विनाश तथा
**सतां** = सज्जनहरूको
**गुप्तये** = रक्षाका लागि
**अवतीर्णस्य** = अवतार ग्रहण गर्नुभएका श्रीकृष्णको
**यशः** = कीर्ति (सबैलाई)
**निर्वृत्यै** = मुक्ति दिलाउनको लागि
**वितन्यते** = व्याप्त छ

**वाक्यार्थ—** भूभार हरण गर्न, असुर राजाहरूलाई विनाश गर्न र सज्जनहरूको रक्षा गर्न भगवान्‌ले श्रीकृष्णको अवतार लिनुभयो, तैपनि उहाँको कीर्ति सबैलाई मुक्ति दिलाउनका लागि लोकमा व्याप्त छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एतच्छ्रुत्वा महाभागो वसुदेवोऽतिविस्मितः।**
**देवकी च महाभागा जहतुर्मोहमात्मनः॥ ५१॥**

| **पदार्थ–** | परेका | **देवकी च** = देवकीले पनि |
|---|---|---|
| **एतत्** = यी सबै कुरा | **महाभागः** = परम भाग्यशाली | **आत्मनः** = आफ्नो |
| **श्रुत्वा** = सुनेर | **वसुदेवः** = वसुदेव र | **मोहं** = मोहलाई |
| **अतिविस्मितः** = आश्चर्यमा | **महाभागा** = भाग्यवती | **जहतुः** = त्यागिदिनुभयो |

**वाक्यार्थ–** यी सबै कुरा सुनिसकेपछि अत्यन्त चकित भएका परम भाग्यशाली वसुदेव र देवकीले आफ्नो मोह त्यागिदिनुभयो।

**इतिहासमिमं पुण्यं धारयेद् यः समाहितः।**
**स विधूयेह शमलं ब्रह्मभूयाय कल्पते॥ ५२॥**

| **पदार्थ–** | **इतिहासं** = इतिहासलाई | **विधूय** = नष्ट गरेर |
|---|---|---|
| **यः** = जसले | **धारयेत्** = सुनेर ग्रहण गर्दछ | **ब्रह्मभूयाय** = मोक्षप्राप्तिको |
| **समाहितः** = एकाग्रचित्त भएर | **सः** = त्यो | लागि |
| **पुण्यं** = पवित्र | **इह** = यो जन्ममा | **कल्पते** = समर्थ हुन्छ |
| **इमं** = यो | **शमलं** = मोहलाई | |

**वाक्यार्थ–** जसले एकाग्रचित्त भई यो पवित्र इतिहासलाई सुनेर ग्रहण गर्दछ, त्यो व्यक्ति यस जन्ममा नै मोहलाई त्यागी मोक्षप्राप्तिको लागि समर्थ बन्दछ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां एकादशस्कन्धे पञ्चमोऽध्यायः॥ ५॥**

# अथ षष्ठोऽध्यायः

## देवताहरूद्वारा भगवान्‌को स्तुति र आफ्नो धाममा जान अनुरोध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथ ब्रह्मात्मजैर्देवैः प्रजेशैरावृतोऽभ्यगात्।**

**भवश्च भूतभव्येशो ययौ भूतगणैर्वृतः॥ १॥**

**पदार्थ—**
**अथ** = भूभारहरण गरेपछि
**आत्मजैः** = पुत्र सनक आदि र
**देवैः** = देदीप्यमान
**प्रजेशैः** = प्रजापतिहरूद्वारा
**आवृतः** = घेरिएका
**ब्रह्मा** = ब्रह्माजी
**अभ्यगात्** = द्वारकामा जानुभयो र
**भूतगणैः** = भूतको समूहले
**वृतः** = घेरिएका
**भूतभव्येशः** = प्राणीहरूलाई सुख दिने
**भवः च** = शङ्करजी पनि
**ययौ** = द्वारका जानुभयो

**वाक्यार्थ—** भगवान्‌ले पृथिवीको भार हरिसकेपछि सनक आदि पुत्रहरू र देदीप्यमान प्रजापतिहरूद्वारा घेरिएका ब्रह्माजी श्रीकृष्णको दर्शनका लागि द्वारका जानुभयो र सबैका सुखदाता शङ्करजी पनि भूतगणले घेरिएर द्वारका जानुभयो।

**इन्द्रो मरुद्भिर्भगवानादित्या वसवोऽश्विनौ।**

**ऋभवोऽङ्गिरसो रुद्रा विश्वे साध्याश्च देवताः॥ २॥**

**गन्धर्वाप्सरसो नागाः सिद्धचारणगुह्यकाः।**

**ऋषयः पितरश्चैव सविद्याधरकिन्नराः॥ ३॥**

**द्वारकामुपसञ्जग्मुः सर्वे कृष्णदिदृक्षवः।**

**वपुषा येन भगवान् नरलोकमनोरमः॥**

**यशो वितेने लोकेषु सर्वलोकमलापहम्॥ ४॥**

**पदार्थ—**
**मरुद्भिः** = मरुद्गणसहित
**भगवान् इन्द्रः** = ऐश्वर्यशाली इन्द्रदेव
**आदित्याः** = आदित्यगण (बाह्र सूर्य)
**वसवः** = आठ वसुहरू
**अश्विनौ** = अश्विनीकुमारहरू
**ऋभवः** = ऋभु
**अङ्गिरसः** = अङ्गिरस
**रुद्रा** = रुद्रगण
**विश्वे** = विश्वेदेव
**देवताः** = देवताहरू
**साध्याः च** = साध्यगण
**गन्धर्वाप्सरसः** = गन्धर्व तथा अप्सराहरू
**नागाः** = नागहरू
**सिद्धचारणगुह्यकाः** = सिद्ध,

चारण र गुह्यकहरू
**ऋषयः** = ऋषिहरू
**पितरः** = पितृहरू र
**सविद्याधरकिन्नराः च** = विद्याधरहरूसहित किन्नरहरू पनि
**सर्वे एव** = सबै
**कृष्णदिदृक्षवः** = श्रीकृष्ण भगवान्‌को दर्शनको चाहनाले
**द्वारकां** = द्वारकामा
**उपसञ्जग्मुः** = गए
**भगवान्** = भगवान् श्रीकृष्णले
**येन** = जुन
**वपुषा** = शरीरद्वारा
**नरलोकमनोरमः** = मनुष्यलोकमा सुन्दर भएर
**सर्वलोकमलापहं** = सबैको पापलाई हरण गर्ने
**यशः** = कीर्तिलाई
**लोकेषु** = लोकमा
**वितेने** = फैलाउनुभएको थियो

**वाक्यार्थ–** मरुद्‌गणसहित देवराज इन्द्र, सबै आदित्यगण, अष्टवसु, अश्विनीकुमार, ऋभु, अङ्गिरस, रुद्रगण, विश्वेदेव, साध्यगण, गन्धर्व तथा अप्सराहरू, नागहरू, सिद्ध, चारण, गुह्यक, ऋषिहरू, पितृहरू तथा विद्याधरसहित किन्नरहरू पनि भगवान् श्रीकृष्णको दर्शनका लागि द्वारका गए। भगवान् श्रीकृष्णले जुन मनोहर शरीरलाई धारण गरेर मनुष्यलोकमा सबैको पाप हरण गर्ने लोकोत्तर कीर्ति फिँजाउनुभयो त्यही शरीरको दर्शनका लागि सबै देवताहरू द्वारकामा आएका थिए।

**तस्यां विभ्राजमानायां समृद्धायां महर्द्धिभिः।**
**व्यचक्षताऽवितृप्ताक्षाः कृष्णमद्भुतदर्शनम्॥ ५॥**

**पदार्थ–**
**महर्द्धिभिः** = अतिशय ऐश्वर्यको कारणले
**समृद्धायां** = समृद्ध भएको र
**विभ्राजमानायां** = चम्किरहेको
**तस्यां** = त्यो द्वारकामा (ती देवताहरूले)
**अवितृप्ताक्षाः** = अतृप्त नेत्रवाला भएर
**अद्भुतदर्शनं** = विचित्रदर्शवाला
**कृष्णं** = भगवान् श्रीकृष्णलाई
**व्यचक्षत** = दर्शन गरिरहे

**वाक्यार्थ–** अतिशय ऐश्वर्यले सम्पन्न हुनाले चम्किरहेको द्वारका नगरीमा ती देवताहरूले अद्भुत दर्शन भएका भगवान् श्रीकृष्णलाई अतृप्त नेत्रद्वारा दर्शन गरिरहे।

**स्वर्गोद्यानोपगैर्माल्यैश्छादयन्तो युदूत्तमम्।**
**गीर्भिश्चित्रपदार्थाभिस्तुष्टुवुर्जगदीश्वरम्॥ ६॥**

**पदार्थ–**
**स्वर्गोद्यानोपगैः** = स्वर्गको बगैंचामा फुलेका
**माल्यैः** = फूलहरूद्वारा
**छादयन्तः** = भगवान्‌लाई ढाकेका उनीहरूले
**चित्रपदार्थाभिः** = चित्र-विचित्र अर्थले युक्त भएका
**गीर्भिः** = वाणीहरूद्वारा
**जगदीश्वरं** = जगत्‌का मालिक
**युदूत्तमं** = भगवान् श्रीकृष्णलाई
**तुष्टुवुः** = स्तुति गरे

**वाक्यार्थ–** स्वर्गको बगैंचामा फुलेका फूलहरू चढाएर भगवान्‌लाई ढाक्दै, चित्र-विचित्र पद र अर्थले युक्त भएका वाणीद्वारा, देवताहरूले जगत्‌का अधिपति यदुश्रेष्ठ भगवान् श्रीकृष्णको स्तुति गरे।

**देवा ऊचुः** (देवताहरूले भने)

**नताः स्म ते नाथ पदारविन्दं बुद्धीन्द्रियप्राणमनोवचोभिः ।**
**यच्चिन्त्यतेऽन्तर्हृदि भावयुक्तैर्मुमुक्षुभिः कर्ममयोरुपाशात् ॥ ७ ॥**

**पदार्थ–**
**नाथ** = हे रक्षक भगवान्
**कर्ममयोरुपाशात्** = कर्मरूप बलियो बन्धनबाट
**मुमुक्षुभिः** = मुक्त हुन चाहने
**भावयुक्तैः** = भक्तिनिष्ठ
व्यक्तिहरूद्वारा
**यत्** = जो
**अन्तर्हृदि** = भित्र हृदयमा
**चिन्त्यते** = चिन्तन गरिन्छ, त्यो
**ते** = त्यस्ता हजुरको
**पदारविन्दं** = चरणकमललाई,
हामीहरू
**बुद्धीन्द्रियप्राणमनोवचोभिः** = बुद्धि, इन्द्रिय, प्राण, मन र वचनले
**नताः स्म** = नमस्कार गर्दछौँ

**वाक्यार्थ–** हे रक्षक भगवान् ! कर्मरूप बलियो बन्धनबाट मुक्त हुन चाहने भक्तिनिष्ठ व्यक्तिहरूले आफ्नो भित्र हृदयमा जसको चिन्तन गर्दछन्, त्यही हजुरको चरणारविन्दलाई हामी बुद्धि, इन्द्रिय, प्राण, मन र वचनले एकसाथ नमस्कार गर्दछौँ।

**त्वं मायया त्रिगुणयात्मनि दुर्विभाव्यं**
**व्यक्तं सृजस्यवसि लुम्पसि तद्गुणस्थः ।**
**नैतैर्भवानजित कर्मभिरज्यते वै**
**यत् स्वे सुखेऽव्यवहितेऽभिरतोऽनवद्यः ॥ ८ ॥**

**पदार्थ–**
**अजित** = हे अजेय प्रभु
**त्वं** = हजुर
**तद्गुणस्थः** = त्यो मायाको गुणमा रहेर
**दुर्विभाव्यं** = अकल्पनीय
**व्यक्तं** = महत् आदि प्रपञ्चलाई
**त्रिगुणया** = त्रिगुणयुक्त
**मायया** = मायाको सहाराले
**आत्मनि** = आफैँमा
**सृजसि** = सृष्टि गर्नुहुन्छ
**अवसि** = पालन गर्नुहुन्छ र
**लुम्पसि** = संहार पनि गर्नुहुन्छ
**एतैः** = यी
**कर्मभिः** = कर्महरूद्वारा
**भवान्** = हजुर आफू चाहिँ
**वै** = निश्चय नै
**न अज्यते** = लिप्त हुनुहुन्न
**यत्** = किनभने
**अनवद्यः** = रागद्वेष आदि रहित हजुर
**अव्यवहिते** = आवरणरहित
**स्वे** = आत्मस्वरूप
**सुखे** = सुखमा
**अभिरतः** = रत हुनुहुन्छ

**वाक्यार्थ–** हे अजेय प्रभु ! हजुर मायाको गुणमा रहेर अकल्पनीय प्रपञ्चलाई मायाको गुणको सहाराले आफैँमा सृष्टि गर्नुहुन्छ, पालन गर्नुहुन्छ र संहार गर्नुहुन्छ, तर ती सृष्टि आदि कर्मद्वारा आफू लिप्त हुनुहुन्न किनभने हजुर रागद्वेष आदिले रहित हुनुहुन्छ र आवरणरहित स्वप्रकाश परमानन्दरूप आफ्नै सुखमा रत हुनुहुन्छ।

**शुद्धिर्नृणां न तु तथेड्य दुराशयानां**
**विद्याश्रुताध्ययनदानतपःक्रियाभिः ।**
**सत्त्वात्मनामृषभ ते यशसि प्रवृद्ध-**
**सच्छ्रद्धया श्रवणसम्भृतया यथा स्यात् ॥ ९ ॥**

**पदार्थ–**
**ईड्य** = हे परमपूज्य
**ऋषभ** = हे श्रेष्ठतम प्रभु
**दुराशयानां** = कलुषित चित्त भएका
**नृणां** = मनुष्यहरूको
**विद्याश्रुताध्ययनदानतपः-क्रियाभिः** = उपासना, वेदको अध्ययन, दान, तपस्या र यज्ञ आदि कर्मद्वारा
**तथा** = त्यस्तो
**शुद्धिः तु** = शुद्धता
**न** = हुँदैन
**यथा** = जुन शुद्धता
**सत्त्वात्मनां** = सज्जनहरूको सङ्गतले
**श्रवणसम्भृतया** = सुनेको भगवत्गुणकथाले पुष्ट भई
**ते** = हजुरको
**यशसि** = कीर्तिको विषयमा
**प्रवृद्धसच्छ्रद्धया** = बढेको राम्रो श्रद्धाले
**स्यात्** = हुन्छ

**वाक्यार्थ–** हे परमपूज्य श्रेष्ठतम प्रभु ! राग आदिले कलुषित चित्त भएका मानिसहरूमा उपासना, वेदाध्ययन, दान, तपस्या र यज्ञ आदि कर्मद्वारा जुन शुद्धता आउँदैन, त्यो शुद्धता सज्जन पुरुषहरूबाट हजुरको गुणकथा सुनेर बढेको श्रद्धाबाट आउँछ ।

**स्यान्नस्तवाङ्घ्रिरशुभाशयधूमकेतुः**
**क्षेमाय यो मुनिभिरार्द्रहृदोह्यमानः ।**
**यः सात्वतैः समविभूतय आत्मवद्भि-**
**र्व्यूहेऽर्चितः सवनशः स्वरतिक्रमाय ॥ १० ॥**
**यश्चिन्त्यते प्रयतपाणिभिरध्वराग्नौ**
**त्रय्या निरुक्तविधिनेश हविर्गृहीत्वा ।**
**अध्यात्मयोग उत योगिभिरात्ममायां**
**जिज्ञासुभिः परमभागवतैः परीष्टः ॥ ११ ॥**

**पदार्थ–**
**यः** = जो
**क्षेमाय** = मोक्षको लागि
**मुनिभिः** = मुमुक्षु ऋषिहरूद्वारा
**आर्द्रहृदा** = द्रवीभूत हृदयले
**उह्यमानः** = ध्यान गरिएको छ
**यः** = जो
**सात्वतैः** = भक्तहरूद्वारा
**समविभूतये** = समान ऐश्वर्यको प्राप्तिको लागि
**व्यूहे** = वासुदेव आदि व्यूहमा
**अर्चितः** = पूजित छ

**आत्मवद्भिः** = जितेन्द्रिय ज्ञानीहरूद्वारा
**स्वरतिक्रमाय** = स्वर्गको अतिक्रमण गरेर मोक्षको लागि
**सवनशः** = तीनै काल चिन्तन गरिएको छ
**ईश** = हे भगवान्
**प्रयतपाणिभिः** = पवित्र हातले
**हविः** = चरुलाई
**गृहीत्वा** = लिएर
**त्रय्या** = वेदद्वारा
**निरुक्तविधिना** = बताइएको विधिअनुसार
**यः** = जो
**अध्वराग्नौ** = आहवनीय अग्निमा याज्ञिकहरूद्वारा
**चिन्त्यते** = ध्यान गरिन्छ
**उत** = र
**अध्यात्मयोगे** = ज्ञानोपयोगी योगमार्गमा
**आत्ममायां** = हजुरको मायाशक्तिलाई
**जिज्ञासुभिः** = जान्न तथा पाउन चाहने
**योगिभिः** = योगीहरूद्वारा ( जसको चिन्तन गरिन्छ र)
**परमभागवतैः** = निरपेक्ष भक्तहरूद्वारा पनि जो
**परीष्टः** = पूजित हुन्छ, त्यस्तो
**तव** = हजुरको
**अङ्घ्रिः** = चरणकमल
**नः** = हामीहरूको
**अशुभाशयधूमकेतुः** = विषय-वासनालाई भस्म पार्ने
**स्यात्** = होस्

**वाक्यार्थ—** हजुरको जुन चरणकमललाई, मुमुक्षुहरू मोक्षका लागि प्रेमले पग्लिएको हृदयमा ध्यान गर्दछन्, भक्तहरू समान ऐश्वर्यका लागि वासुदेव आदि व्यूहमा पूजा गर्दछन्, जितेन्द्रिय ज्ञानीहरू स्वर्ग आदि लोक अतिक्रमण गरेर मुक्त हुनको लागि तीनै काल जसको चिन्तन गर्दछन् र हे भगवान् ! सात्त्विकहरूले पवित्र हातले चरु लिएर वेदले बताएको विधि अनुसार, आहवनीय अग्निमा जसको ध्यान गर्दछन्, अध्यात्मयोग मार्गमा मायाशक्तिलाई जान्न र पाउन चाहने योगीहरूले जसको चिन्तन गर्दछन् र केही अभिलाषा नभएका भक्तहरूले पनि जसको पूजा गर्दछन्, त्यस्तो हजुरको चरणकमल हामीहरूको विषयवासनालाई डढाउने होस् ।

**पर्युष्टया तव विभो वनमालयेयं**
**संस्पर्धिनी भगवती प्रतिपत्नीवच्छ्रीः ।**
**यः सुप्रणीतममुयार्हणमाददन्नो**
**भूयात् सदाङ्घ्रिरशुभाशयधूमकेतुः ॥ १२ ॥**

**पदार्थ—**
**विभो** = हे व्यापक प्रभु
**पर्युष्टया** = बासी
**तव** = हजुरको छातीको
**वनमालया** = वनमालासँग
**इयं** = यी
**भगवती श्रीः** = भगवती लक्ष्मीजी
**प्रतिपत्नीवत्** = सौता झैं
**संस्पर्धिनी** = प्रतिस्पर्धा वा डाहा गर्दछिन्
**यः** = जो हजुरले
**अमुया** = यस्तो मालाले
**सुप्रणीतं** = गरेको
**अर्हणं** = पूजालाई भक्तको प्रसन्नताको लागि
**आददत्** = स्वीकार गर्नुहुन्छ (त्यस्ता हजुरको)
**अङ्घ्रिः** = चरणकमल
**सदा** = सधैं
**नः** = हामीहरूको
**अशुभाशयधूमकेतुः** = विषय-वासनालाई भस्म पार्नेवाला
**भूयात्** = होस्

**वाक्यार्थ–** हे प्रभु ! हजुरको छातीको बासी वनमालासँग लक्ष्मीजी सौतेनी झैँ सधैँ प्रतिस्पर्धा गर्छिन्, तैपनि हजुर त्यसको वास्ता नगरी भक्तको प्रसन्नताका लागि यो माला चढाएर गरेको पूजा स्वीकार गर्नुहुन्छ त्यस्ता हजुरको चरणकमल हामीहरूको सधैँ अशुभ विषयवासनालाई भस्म पार्ने होस्।

**केतुस्त्रिविक्रमयुतस्त्रिपतत्पताको**
**यस्ते भयाभयकरोऽसुरदेवचम्वोः।**
**स्वर्गाय साधुषु खलेष्वितराय भूमन्**
**पादः पुनातु भगवन् भजतामघं नः॥ १३॥**

**पदार्थ–**
**भगवन्** = हे ऐश्वर्यसम्पन्न
**भूमन्** = व्यापक प्रभु
**त्रिविक्रमयुतः** = त्रिविक्रम (वामन) अवतारमा माथितिर लगेको जुन गोडाको ठक्करले
**त्रिपतत्पताकः** = गङ्गा ध्वजा झैँ तीन धारा भएर झरेकी थिइन्, त्यस्तो
**असुरदेवचम्वोः** = असुर र देवताका सेनाका लागि
**भयाभयकरः** = भय र अभय दिने अनि
**साधुषु** = देव आदि सज्जनमा
**स्वर्गाय** = स्वर्गसुखको लागि
**खलेषु** = दुष्ट असुरहरूमा
**इतराय** = अधोगतिको लागि
**यः** = जो
**केतुः** = कारणरूप छ (त्यस्तो)
**ते** = हजुरको
**पादः** = चरणले
**भजतां** = भजन गर्ने
**नः** = हामीहरूको
**अघं** = पापलाई हटाएर
**पुनातु** = पवित्र गरोस्

**वाक्यार्थ–** हे ऐश्वर्यसम्पन्न सर्वव्यापक प्रभु ! वामन अवतारमा हजुरको जुन माथितिरको गोडाले ठक्कर लागेर गङ्गा निस्केकी थिइन् र ध्वजा झैँ तीनतिर भएर झरेकी थिइन्, हजुरको जुन चरणकमल असुरहरूका लागि भयदायक र देवसेनाका लागि अभय प्रदान गर्नेवाला छ, देवताहरूलाई स्वर्गप्रदान गर्ने र असुरहरूलाई अधोगति दिने हजुरको त्यस्तो चरणकमलले भजन गर्ने हामीहरूको पाप नाश गरेर हामीहरूलाई पवित्र बनाओस्।

**नस्योतगाव इव यस्य वशे भवन्ति**
**ब्रह्मादयस्तनुभृतो मिथुरर्द्यमानाः।**
**कालस्य ते प्रकृतिपूरुषयोः परस्य**
**शं नस्तनोतु चरणः पुरुषोत्तमस्य॥ १४॥**

**पदार्थ–**
**मिथुः** = आपसमा
**अर्द्यमानाः** = पीडित भएका
**ब्रह्मादयः** = ब्रह्मा आदि
**तनुभृतः** = शरीरधारीहरू
**नसि** = नाकमा
**ओतगावः इव** = नत्थी लगाएका गोरु झैँ
**प्रकृतिपूरुषयोः** = प्रकृति र पुरुषभन्दा
**परस्य** = पर रहेको
**कालस्य** = कालरूप

**यस्य** = जो
**ते** = हजुरको
**वशे** = वशमा
**भवन्ति** = छन्
**पुरुषोत्तमस्य** = त्यस्ता पुरुषश्रेष्ठ हजुरको
**चरणः** = चरणकमलले
**नः** = हामीहरूको
**शं** = कल्याण
**तनोतु** = विस्तार गरोस्

**वाक्यार्थ–** आपसी प्रतिस्पर्धाले पीडित भएका जो ब्रह्मा आदि शरीरधारीहरू छन्, उनीहरू नाकमा नत्थी लगाएका गोरु झैँ भएर प्रकृति र पुरुषभन्दा पर रहेको कालस्वरूप हजुरको अधीनमा छन्, त्यस्ता पुरुषोत्तम हजुरको चरणकमलले हामीहरूको कल्याण गरोस्।

**अस्यासि हेतुरुदयस्थितिसंयमाना-**
**मव्यक्तजीवमहतामपि कालमाहुः।**
**सोऽयं त्रिणाभिरखिलापचये प्रवृत्तः**
**कालो गभीररय उत्तमपूरुषस्त्वम्॥ १५॥**

**पदार्थ–**
**अस्य** = यो सारा जगत्को
**उदयस्थितिसंयमानां** = उत्पत्ति, स्थिति र लयको
**हेतुः** = कारण (हजुर नै)
**असि** = हुनुहुन्छ (हजुरलाई)
**अव्यक्तजीवमहताम् अपि** = प्रकृति, पुरुष र महत्तत्त्वको पनि
**कालम्** = काल (शासक)
**आहुः** = भन्दछन्
**अयं** = यो (संवत्सररूप)
**त्रिणाभिः** = तीन (उष्ण, वर्षा शीत) चातुर्मास्य मध्यभाग भएको
**गभीररयः** = तीव्र वेगवाला
**अखिलापचये** = सारा जगत्को विनाशको लागि
**प्रवृत्तः** = लागेको
**कालः** = जो काल छ
**सः** = त्यस्तो
**उत्तमपूरुषः** = पुरुषोत्तम
**त्वं** = हजुर नै हुनुहुन्छ

**वाक्यार्थ–** यस जगत्को उत्पत्ति, स्थिति र लयको मूल कारण हजुर नै हुनुहुन्छ र प्रकृति, पुरुष तथा महत्तत्त्वको शासक पनि हजुर नै हुनुहुन्छ, त्यस्तै चार-चार महिनाका उष्ण, वर्षा र शीत यी तीन नाभिवाला जो सबको नाशक र अतितीव्र वेगवाला, सबलाई विनाश गर्न प्रवृत्त भएको काल छ, त्यो पनि हजुर नै हुनुहुन्छ, त्यस्ता पुरुषोत्तम हजुर नै हुनुहुन्छ।

**त्वत्तः पुमान् समधिगम्य यया स्ववीर्यं**
**धत्ते महान्तमिव गर्भममोघवीर्यः।**
**सोऽयं तयानुगत आत्मन आण्डकोशं**
**हैमं ससर्ज बहिरावरणैरुपेतम्॥ १६॥**

**पदार्थ–**
**त्वत्तः** = हजुरबाट
**स्ववीर्यं** = आफ्नो शक्ति
**समधिगम्य** = पाएर
**अमोघवीर्यः** = अति बलशाली
**पुमान्** = पुरुषले

**गर्भम् इव** = (संसारको) बीजजस्तो
**महान्तं** = महत्तत्त्वलाई
**यया** = जुन मायाको साथ
**धत्ते** = उत्पन्न गऱ्यो फेरि
**सः अयं** = त्यो महत्तत्त्वले
**तया** = त्यही मायासँग
**अनुगतः** = व्याप्त भई
**आत्मनः** = आफूबाट
**बहिः** = बाहिर
**आवरणैः** = सात आवरणहरूले
**उपेतं** = युक्त
**हैमं** = सुनौलो
**आण्डकोशं** = ब्रह्माण्डलाई
**ससर्ज** = सृष्टि गऱ्यो

**वाक्यार्थ–** हजुरबाट शक्ति पाई शक्तिशाली भएको पुरुषले, जगत्को बीजरूप महत्तत्त्वलाई मायासहित उत्पन्न गऱ्यो। त्यसपछि महत्तत्त्वले मायासँग अनुगत भई आफूबाट बाहिर सात आवरण (पृथ्वी, जल, तेज, वायु, आकाश, अहङ्कार र मन)ले युक्त सुनौलो ब्रह्माण्डको सृष्टि गऱ्यो।

**तत् तस्थूषश्च जगतश्च भवानधीशो**
**यन्माययोत्थगुणविक्रिययोपनीतान्।**
**अर्थाञ्जुषन्नपि हृषीकपते न लिप्तो**
**येऽन्ये स्वतः परिहृतादपि बिभ्यति स्म ॥ १७ ॥**

**पदार्थ–**
**हृषीकपते** = हे इन्द्रियका प्रेरक प्रभु
**यत्** = जो कि
**माययोत्थगुणविक्रियया** = मायाबाट उत्पन्न भएका इन्द्रियवृत्तिहरूले
**उपनीतान्** = प्राप्त गराएका
**अर्थान्** = विषयहरूलाई
**जुषन् अपि** = सेवन गरेर पनि (हजुर)
**न लिप्तः** = लिप्त हुनुहुन्न
**तत्** = त्यसैले
**भवान्** = हजुर
**तस्थूषः** = स्थावर र
**जगतः च** = जङ्गमको पनि
**अधीशः** = अधिपति हुनुहुन्छ
**ये** = जो
**अन्ये** = अरू जीव छन् (उनीहरू)
**स्वतः** = आफैँले
**परिहृतात् अपि** = छाडेका विषयभोगबाट पनि
**बिभ्यति स्म** = डराउँछन्

**वाक्यार्थ–** हे इन्द्रियका प्रेरक प्रभु ! हजुर मायाद्वारा उत्पन्न भएका इन्द्रियका वृत्तिहरूले ल्याएका विषयहरूलाई भोग गरेर पनि त्यसमा लिप्त हुनुहुन्न, त्यसैले हजुर स्थावर र जङ्गम दुबैको अधिपति हुनुहुन्छ, तर हजुर बाहेक जो अरू जीवहरू छन्, उनीहरू आफैँले छाडेका विषयभोगबाट डराउँछन् (विषयवासना मात्रबाट पनि बन्धनमा पर्दछन्)।

**स्मायावलोकलवदर्शितभावहारि-**
**भ्रूमण्डलप्रहितसौरतमन्त्रशौण्डैः।**
**पत्न्यस्तु षोडशसहस्रमनङ्गबाणै-**
**र्यस्येन्द्रियं विमथितुं करणैर्न विभ्व्यः ॥ १८ ॥**

**पदार्थ–**
**स्मायावलोकलवदर्शितभावहारि-भ्रूमण्डलप्रहितसौरतमन्त्रशौण्डैः** = मन्द मुस्कानले सुशोभित, कटाक्षयुक्त हेराइले र अभिप्राययुक्त मनोहर आँखीभौँद्वारा
**अनङ्गबाणैः** = सम्मोहनकारी कामदेवको बाणजस्तो
**करणैः** = कामकला आदिले
**षोडशसहस्रं** = सोह्र हजार
**पत्न्यः तु** = पत्नीहरूले त
**यस्य** = जुन हजुरको
**इन्द्रियं** = मन आदि इन्द्रियलाई
**विमथितुं** = क्षोभित पार्न
**न विभ्व्यः** = समर्थ भएनन् (भने हजुर कसरी लिप्त हुनुहुन्छ र ?)

**वाक्यार्थ–** सोह्र हजार पत्नीहरूले मुस्कानपूर्वक मनोहर आँखीभौँको कटाक्षद्वारा मोहमा पार्ने कामदेवको बाण जस्तैं कामकला आदिको प्रयोग गरेर त हजुरको मनलाई क्षोभित पार्न सकेनन् भने हजुर कहाँ विषयमा लिप्त हुनुहुन्छ र ?

**विभ्व्यस्तवामृतकथोदवहास्त्रिलोक्याः**
**पादावनेजसरितः शमलानि हन्तुम् ।**
**आनुश्रवं श्रुतिभिरङ्घ्रिजमङ्गसङ्गै-**
**स्तीर्थद्वयं शुचिषदस्त उपस्पृशन्ति ॥ १९ ॥**

**पदार्थ–**
**तव** = हजुरको (एक)
**अमृतकथोदवहाः** = कथामृतरूपी जल बगाउने (अर्को)
**पादावनेजसरितः** = चरणोदक बगाउने गङ्गा
**त्रिलोक्याः** = तीन लोकमा
**शमलानि** = पापलाई
**हन्तुं** = नाश गर्न
**विभ्व्यः** = समर्थ छन् (त्यसैले)
**आनुश्रवं** = वेदमा स्थित कथामृतरूपी नदीको
**श्रुतिभिः** = कानद्वारा र
**अङ्घ्रिजं** = चरणोदकरूपी तीर्थको
**अङ्गसङ्गैः** = स्नान आदिले
**ते** = हजुरको
**तीर्थद्वयं** = दुबै तीर्थलाई (नदीलाई)
**शुचिषदः** = विवेकी स्वधर्मनिष्ठ मानिसहरूले
**उपस्पृशन्ति** = सेवन गर्दछन्

**वाक्यार्थ–** हे प्रभु ! हजुरले त तीनै लोकको पाप पखाल्नको लागि दुई प्रकारका नदी बगाउनुभएको छ। एक कथामृत वा कीर्तिरूपी जल बग्ने र अर्को पादोदकरूपी जल बग्ने गङ्गा। स्वधर्मनिष्ठ विवेकी मानिसहरू कथामृतरूपी तीर्थलाई कानद्वारा सुनेर र चरणोदक बगाउने गङ्गामा नुहाएर हजुरको दुबै तीर्थको सेवन गर्दछन्।

**बादरायणिरुवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्यभिष्टूय विबुधैः सेशः शतधृतिर्हरिम् ।**
**अभ्यभाषत गोविन्दं प्रणम्याम्बरमाश्रितः ॥ २० ॥**

**पदार्थ–**
**सेशः** = शङ्करजी सहित
**शतधृतिः** = ब्रह्माजीले

**विबुधैः** = देवताहरू सहित भएर
**इति** = यसरी
**अभिष्टूय** = स्तुति गरेर
**हरिम्** = सबैको पापहरण गर्ने
**गोविन्दं** = भगवान् श्रीकृष्णलाई
**प्रणम्य** = नमस्कार गरी
**अम्बरमाश्रितः** = आकाशमा स्थित भई
**अभ्यभाषत** = भन्नुभयो

**वाक्यार्थ–** शङ्करजी सहित ब्रह्माजीले अरू देवताहरूको साथमा यसरी स्तुति गरी भगवान् श्रीकृष्णलाई नमस्कार गरेर आकाशबाटै भन्नुभयो।

**ब्रह्मोवाच** (ब्रह्माजीले भन्नुभयो)

**भूमेर्भारावताराय पुरा विज्ञापितः प्रभो।**
**त्वमस्माभिरशेषात्मंस्तत् तथैवोपपादितम्॥ २१॥**

**पदार्थ–**
**प्रभो** = हे प्रभु
**पुरा** = पहिले
**भूमेः** = पृथिवीको
**भारावताराय** = भारहरणको लागि
**अस्माभिः** = हामीहरूद्वारा
**त्वं** = हजुर
**विज्ञापितः** = निवेदन गरिनुभयो
**अशेषात्मन्** = हे सर्वात्मक प्रभु
**तत्** = त्यो सबै कुरा
**तथा एव** = भनेबमोजिम
**उपपादितम्** = पूरा गर्नुभयो

**वाक्यार्थ–** हे भगवान्! पहिले हामीहरूले पृथिवीको भारहरण गर्नका लागि हजुरलाई निवेदन गऱ्यौँ। हजुरले पनि भने अनुसार सबै काम पूरा गरिसक्नुभयो।

**धर्मश्च स्थापितः सत्सु सत्यसन्धेषु वै त्वया।**
**कीर्तिश्च दिक्षु विक्षिप्ता सर्वलोकमलापहा॥ २२॥**

**पदार्थ–**
**त्वया** = हजुरद्वारा
**सत्यसन्धेषु** = सत्यप्रतिज्ञा भएका
**सत्सु** = सज्जनहरूमा
**वै** = निश्चय नै
**धर्मः च** = धर्म
**स्थापितः** = स्थापना गरियो
**दिक्षु** = दिशा-दिशामा
**सर्वलोकमलापहा** = सबैको पापलाई नाश गर्ने
**कीर्तिः च** = कीर्ति पनि
**विक्षिप्ता** = विस्तार गरिसकियो

**वाक्यार्थ–** हजुरले सत्यप्रतिज्ञावाला सज्जनहरूमा धर्मको स्थापना गर्नुभयो र दिशा-दिशामा सारा लोकको पापलाई नाश गर्ने कीर्ति पनि फिँजाइसक्नुभयो।

**अवतीर्य यदोर्वंशे बिभ्रद् रूपमनुत्तमम्।**
**कर्माण्युद्दामवृत्तानि हिताय जगतोऽकृथाः॥ २३॥**

**पदार्थ–**
**अनुत्तमं** = सर्वश्रेष्ठ
**रूपं** = रूपलाई
**बिभ्रत्** = धारण गरेर
**यदोः** = यदुहरूको
**वंशे** = कुलमा

**अवतीर्य** = अवतार लिएर
**जगतः** = संसारको
**हिताय** = हितका लागि
**उद्दामवृत्तानि** = अतिशय पराक्रमयुक्त
**कर्माणि** = कर्महरू
**अकृथाः** = गर्नुभयो

**वाक्यार्थ–** हजुरले अतिशय सुन्दर रूप धारण गरेर यदुकुलमा उत्पन्न भई संसारको हितका लागि अति पराक्रमयुक्त कामहरू पनि गरिसक्नुभयो।

**यानि ते चरितानीश मनुष्याः साधवः कलौ।**
**शृण्वन्तः कीर्तयन्तश्च तरिष्यन्त्यञ्जसा तमः॥ २४॥**

**पदार्थ–**
**ईश** = हे प्रभु
**ते** = हजुरका
**यानि** = जो
**चरितानि** = चरित्रहरू (छन् तिनलाई)
**शृण्वन्तः** = सुन्दै र
**कीर्तयन्तः च** = गाउँदै पनि
**साधवः** = सज्जन
**मनुष्याः** = मानिसहरू
**कलौ** = कलियुगमा
**अञ्जसा** = सजिलैसँग
**तमः** = अज्ञानलाई
**तरिष्यन्ति** = तर्नेछन्

**वाक्यार्थ–** हे प्रभु ! हजुरका जो सुन्दर चरित्रहरू छन्, तिनलाई सुन्दै र गाउँदै सज्जन मनुष्यहरूले यो कलियुगमा सजिलै अज्ञानलाई पार गर्नेछन्।

**यदुवंशेऽवतीर्णस्य भवतः पुरुषोत्तम।**
**शरच्छतं व्यतीयाय पञ्चविंशाधिकं प्रभो॥ २५॥**

**पदार्थ–**
**पुरुषोत्तम** = हे पुरुषश्रेष्ठ
**प्रभो** = प्रभु
**यदुवंशे** = यदुकुलमा
**अवतीर्णस्य** = अवतीर्ण भएको
**भवतः** = हजुरको
**पञ्चविंशाधिकं** = पच्चीस बढी
**शरच्छतं** = शय वर्ष
**व्यतीयाय** = बितिसक्यो

**वाक्यार्थ–** हे पुरुषश्रेष्ठ प्रभु ! हजुर यदुकुलमा अवतीर्ण हुनुभएको पनि एक सय पच्चीस वर्ष बितिसक्यो।

**नाधुना तेऽखिलाधार देवकार्यावशेषितम्।**
**कुलं च विप्रशापेन नष्टप्रायमभूदिदम्॥ २६॥**

**पदार्थ–**
**अखिलाधार** = हे सर्वाधार प्रभु
**अधुना** = अहिले
**ते** = हजुरले गर्नुपर्ने
**देवकार्यावशेषितं** = केही बाँकी देवकार्य पनि
**न** = छैन
**इदं** = यो
**कुलं च** = यदुकुल पनि
**विप्रशापेन** = ब्राह्मणहरूको श्रापले
**नष्टप्रायं** = प्रायः नष्ट
**अभूत्** = भएको छ

**वाक्यार्थ–** हे सर्वाधार प्रभु ! अब हजुरले यहाँ बसेर गर्नुपर्ने देवकार्य पनि केही बाँकी छैन र यो यदुकुल पनि ब्राह्मणहरूको श्रापले प्रायः नष्ट भइसकेको छ।

**ततः स्वधाम परमं विशस्व यदि मन्यसे।**
**सलोकाँल्लोकपालान् नः पाहि वैकुण्ठकिङ्करान्॥ २७॥**

**पदार्थ–**
**ततः** = त्यसैले
**यदि** = यदि
**मन्यसे** = हजुर चाहनुहुन्छ भने
**परमं** = उत्कृष्ट
**स्वधाम** = आफ्नो धाम वैकुण्ठमा
**विशस्व** = प्रवेश गर्नुहोस् र
**सलोकान्** = लोकहरू सहित
**लोकपालान्** = लोकपालको रूपमा रहेका
**नः** = हामी
**वैकुण्ठकिङ्करान्** = वैकुण्ठका सेवकहरूलाई पनि
**पाहि** = रक्षा गर्नुहोस्

**वाक्यार्थ–** त्यसैले हजुर चाहनुहुन्छ भने आफ्नो उत्कृष्ट धाम वैकुण्ठमा जानुहोस् र सारा लोकसहित लोकपालको रूपमा रहेका वैकुण्ठका सेवक हामीहरूलाई पनि रक्षा गर्नुहोस्।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**अवधारितमेतन्मे यदात्थ विबुधेश्वर।**
**कृतं वः कार्यमखिलं भूमेर्भारोऽवतारितः॥ २८॥**

**पदार्थ–**
**विबुधेश्वर** = हे ब्रह्माजी (हजुरले)
**यत्** = जे
**आत्थ** = भन्नुभयो
**एतत्** = यो सबै कुरा
**मे** = मैले
**अवधारितम्** = विचार गरिसकेको छु
**वः** = हजुरहरूका
**अखिलं** = सबै
**कार्यम्** = कार्यहरू
**कृतं** = मैले गरिसकेँ र
**भूमेः** = पृथिवीको
**भारः** = भार पनि
**अवतारितः** = हरण गरिसकेँ

**वाक्यार्थ–** हे ब्रह्माजी ! हजुरले भनेका कुरा मैले विचार गरिसकेको छु। हजुरहरूको सारा काम पनि मैले गरिसकेको छु र पृथिवीको भार पनि हरण गरिसकेको छु।

**तदिदं यादवकुलं वीर्यशौर्यश्रियोद्धतम्।**
**लोकं जिघृक्षद् रुद्धं मे वेलयेव महार्णवः॥ २९॥**

**पदार्थ–**
**वीर्यशौर्यश्रिया** = पराक्रम, बल र ऐश्वर्यले
**उद्धतं** = मत्त भएको
**लोकं** = लोकलाई
**जिघृक्षत्** = नष्ट गर्न लागेको
**यत्** = जुन
**इदं** = यो
**यादवकुलं** = यदुकुल छ, त्यसलाई
**मे** = मद्वारा
**वेलया** = किनाराद्वारा

**महार्णवः इव** = सागर झैं
**रुद्धम्** = रोकिसकिएको छ

**वाक्यार्थ–** पराक्रम, बल र ऐश्वर्यको मदले लोकलाई नै नष्ट गर्न तम्सिएको यो यदुकुललाई मैले किनाराले महासागरलाई रोके झैं रोकिसकेको छु।

**यद्यसंहृत्य दृप्तानां यदूनां विपुलं कुलम्।**
**गन्तास्म्यनेनलोकोऽयमुद्वेलेन विनङ्क्ष्यति॥ ३०॥**

पदार्थ–
**यदि** = यदि
**दृप्तानां** = घमन्डी भएका
**यदूनां** = यदुहरूको
**विपुलं** = विशाल
**कुलं** = कुललाई
**असंहृत्य** = संहार नगरीकन
**गन्तास्मि** = गएँ भने
**उद्वेलेन** = मर्यादा नाघिसकेको
**अनेन** = यो कुलद्वारा
**अयं** = यो
**लोकः** = लोक
**विनङ्क्ष्यति** = नष्ट हुनेछ

**वाक्यार्थ–** यदि मैले यो घमन्डी भएका यदुहरूको कुललाई संहार नगरीकन आफ्नो धाम गएँ भने मर्यादालाई उल्लङ्घन गरिसकेको यो कुलको कारण सारा लोक नै नष्ट हुनेछ।

**इदानीं नाश आरब्धः कुलस्य द्विजशापतः।**
**यास्यामि भवनं ब्रह्मन्नेतदन्ते तवानघ॥ ३१॥**

पदार्थ–
**अनघ** = हे पापरहित ब्रह्माजी
**इदानीं** = अहिले
**द्विजशापतः** = ब्राह्मणको श्रापबाट
**कुलस्य** = यदुकुलको
**नाशः** = नाश
**आरब्धः** = आरम्भ भइसकेको छ
**ब्रह्मन्** = हे ब्रह्माजी
**एतदन्ते** = यो कुलको नाश भइसकेपछि (वैकुण्ठमा आएर)
**तव** = हजुरको
**भवनं** = लोकमा पनि
**यास्यामि** = जानेछु

**वाक्यार्थ–** हे पापरहित ब्रह्माजी ! अहिले ब्राह्मणको श्रापबाट यदुकुलको विनाश सुरु भइसकेको छ, अतः यो कुलको विनाश भइसकेपछि म वैकुण्ठ हुँदै हजुरको लोकमा पनि जानेछु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युक्तो लोकनाथेन स्वयम्भूः प्रणिपत्य तम्।**
**सह देवगणैर्देवः स्वधाम समपद्यत॥ ३२॥**

पदार्थ–
**लोकनाथेन** = सबै लोकका मालिक श्रीकृष्णद्वारा
**इति** = यसरी
**उक्तः** = बताइनुभएका
**देवः** = देव
**स्वयम्भूः** = ब्रह्माजी
**तं** = उहाँलाई
**प्रणिपत्य** = नमस्कार गरेर
**देवगणैः सह** = देवगण सहित
**स्वधाम** = आफ्नो लोकमा
**समपद्यत** = जानुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले यसरी बताएपछि ब्रह्माजीले भगवान् श्रीकृष्णलाई नमस्कार गर्नुभयो र अन्य देवगणसहित उहाँ आफ्नै लोकमा जानुभयो।

**अथ तस्यां महोत्पातान् द्वारवत्यां समुत्थितान्।**

**विलोक्य भगवानाह यदुवृद्धान् समागतान्॥ ३३॥**

| पदार्थ– | **समुत्थितान्** = आएका | **समागतान्** = नजिकमा आएका |
|---|---|---|
| **अथ** = त्यसपछि | **महोत्पातान्** = ठुला-ठुला | **यदुवृद्धान्** = यादव वृद्धहरूलाई |
| **तस्यां** = त्यो | उत्पातहरूलाई | **भगवान्** = भगवान् श्रीकृष्णले |
| **द्वारवत्यां** = द्वारकामा | **विलोक्य** = देखेर | **आह** = भन्नुभयो |

**वाक्यार्थ–** त्यसपछि द्वारकापुरीमा भएका ठुला-ठुला उत्पातहरू देखेर भगवान्को नजिकमा आएका वृद्ध यादवहरूसँग भगवान्ले भन्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**एते वै सुमहोत्पाता व्युत्तिष्ठन्तीह सर्वतः।**

**शापश्च नः कुलस्यासीद् ब्राह्मणेभ्यो दुरत्ययः॥ ३४॥**

| पदार्थ– | **शापः** = श्राप | उत्पातहरू |
|---|---|---|
| **नः** = हाम्रो | **आसीत्** = परेको थियो (त्यसैले) | **इह** = यो द्वारकामा |
| **कुलस्य** = यदुकुललाई | **वै** = निश्चय नै | **सर्वतः च** = चारै तर्फबाट |
| **ब्राह्मणेभ्यः** = ब्राह्मणहरूबाट | **एते** = यी | **व्युत्तिष्ठन्ति** = आइरहेका छन् |
| **दुरत्ययः** = टार्न नसकिने | **सुमहोत्पाताः** = ठुला-ठुला | |

**वाक्यार्थ–** हाम्रो कुलमा ब्राह्मणहरूबाट टार्नै नसकिने श्राप परेको छ, त्यसैले चारैतर्फबाट यी उत्पातहरू आइरहेका छन्।

**न वस्तव्यमिहास्माभिर्जिजीविषुभिरार्यकाः।**

**प्रभासं सुमहत्पुण्यं यास्यामोऽद्यैव मा चिरम्॥ ३५॥**

| पदार्थ– | **इह** = यो द्वारकामा | **सुमहत्पुण्यं** = अत्यन्त पवित्र |
|---|---|---|
| **आर्यकाः** = हे पूज्यजनहरू | **न वस्तव्यम्** = बस्नु हुँदैन | **प्रभासं** = प्रभास क्षेत्रमा |
| **जिजीविषुभिः** = बाँच्न चाहने | **अद्य एव** = आज नै | **यास्यामः** = गइहालौँ |
| **अस्माभिः** = हामीहरूद्वारा | **मा चिरम्** = ढिलो नगरी | |

**वाक्यार्थ–** हे पूज्यजनहरू ! बाँच्न चाहने हामीहरूले अब यहाँ द्वारकामा बस्नु हुँदैन, आज नै अत्यन्त पवित्र प्रभास क्षेत्रमा गइहालौँ, ढिलो नगरौँ।

**यत्र स्नात्वा दक्षशापाद् गृहीतो यक्ष्मणोडुराट् ।**
**विमुक्तः किल्बिषात् सद्यो भेजे भूयः कलोदयम् ॥ ३६ ॥**

**पदार्थ—**
**दक्षशापाद्** = दक्षप्रजापतिको श्रापले
**यक्ष्मणा** = क्षयरोगद्वारा
**गृहीतः** = आक्रान्त भएका
**उडुराट्** = चन्द्रमा
**यत्र** = जहाँ
**स्नात्वा** = स्नान गरेर
**किल्बिषात्** = रोगबाट
**विमुक्तः** = मुक्त भए र
**भूयः** = फेरि
**सद्यः** = तुरुन्तै
**कलोदयं** = कलाहरूको वृद्धिलाई
**भेजे** = प्राप्त गरे

**वाक्यार्थ—** दक्षप्रजापतिको श्रापले क्षयरोगद्वारा ग्रस्त भएका चन्द्रमा जुन प्रभास क्षेत्रमा स्नान गर्नाले रोगबाट मुक्त भएका थिए र उनले तुरुन्तै आफ्ना कलाहरूलाई प्राप्त गरेका थिए।

**विवरण—** दक्ष प्रजापतिले चन्द्रमालाई दिनदिनै कलाक्षय हुने श्राप दिएका थिए। यसको कारण के थियो भने, चन्द्रमाले दक्षका छोरी सत्ताईस नक्षत्रहरूसँग विवाह गरेका थिए। अश्विनी, भरणी आदि दक्षपुत्रीमध्ये चन्द्रले रोहिणीलाई मात्र बढी माया गर्ने र अरूको वास्ता नगर्ने गर्न थाले। यसबाट अरू पुत्रीहरूले रिसाई आफ्नो दुःख पितालाई भने र उनले भेदव्यवहार गर्ने भन्दै चन्द्रमालाई कलाक्षयको श्राप दिए। यसबाट बच्न उनले प्रभास क्षेत्रमा गई भगवान् शङ्करको आराधना गरे। उनको तपस्याबाट आशुतोष भगवान् प्रसन्न हुनुभयो र सोमलाई वर माग्न भन्नुभयो। उनले पनि आफू कलाविहीन बन्नु नपरोस् भनी वर मागे। भगवान् शङ्करले दक्षको श्रापलाई पनि निष्फल हुन नदिने गरी भन्नुभयो— कृष्णपक्षमा प्रतिपदादेखि औँसी यी पन्ध्र तिथिसम्म चन्द्रका पन्ध्र कलाहरू लुप्त हुनेछन् र एउटा कलाद्वारा मात्र चन्द्रको अस्तित्व रहनेछ। अनि शुक्लपक्षका प्रतिपदादेखि पूर्णिमासम्म चाहिँ क्रमशः एक-एक कला बढ्दै उनमा सोह्रै कला हुनेछ। यही व्यवस्थाद्वारा चन्द्रमाको कलाक्षय अनि कलावृद्धि पनि हुने गरेको हो।

**वयं च तस्मिन्नाप्लुत्य तर्पयित्वा पितॄन् सुरान् ।**
**भोजयित्वोशिजो विप्रान् नानागुणवतान्धसा ॥ ३७ ॥**
**तेषु दानानि पात्रेषु श्रद्धयोप्त्वा महान्ति वै ।**
**वृजिनानि तरिष्यामो दानैर्नौभिरिवार्णवम् ॥ ३८ ॥**

**पदार्थ—**
**वयं च** = हामीहरू पनि
**तस्मिन्** = त्यो प्रभास तीर्थमा
**आप्लुत्य** = नुहाएर
**पितॄन्** = पितृहरूलाई र
**सुरान्** = देवताहरूलाई पनि
**तर्पयित्वा** = तर्पण गरेर
**नानागुणवता** = विभिन्न गुणले युक्त
**अन्धसा** = भोजनहरूले
**उशिजः** = उत्तम
**विप्रान्** = ब्राह्मणहरूलाई
**भोजयित्वा** = भोजन गराएर
**तेषु** = ती
**पात्रेषु** = उत्तम पात्रहरूमा
**महान्ति** = बहुमूल्य
**दानानि** = दानस्वरूप पुण्यबीज
**श्रद्धया** = श्रद्धापूर्वक

**उप्त्वा** = रोपेर अनि
**दानैः** = ती दानहरूद्वारा
**वै** = निश्चय नै
**नौभिः** = डुङ्गाहरूद्वारा
**अर्णवम् इव** = सागर तरे झैं
**वृजिनानि** = सारा दुःख र
पापलाई
**तरिष्यामः** = तर्नेछौं

**वाक्यार्थ–** हामीहरूले पनि त्यो प्रभास क्षेत्रमा नुहाएर पितृहरूलाई र देवताहरूलाई तर्पण गर्नुपर्दछ अनि नाना रसले युक्त भोजन तयार गरी उत्तम ब्राह्मणहरूलाई खुवाउनुपर्दछ र ती सत्पात्रहरूलाई श्रद्धापूर्वक धेरै कुरा दान गरेर पुण्यको बिउ रोप्नुपर्दछ, पछि त्यही दानको माध्यमले डुङ्गाद्वारा सागर तरे झैं हामीहरूले पनि सारा पाप र दुःखहरूलाई पार गर्नेछौं।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं भगवतादिष्टा यादवाः कुरुनन्दन।**
**गन्तुं कृतधियस्तीर्थं स्यन्दनान् समयूयुजन्॥ ३९॥**

**पदार्थ–**
**कुरुनन्दन** = हे कुरुवंशीका प्रिय परीक्षित्
**एवं** = यसरी
**भगवता** = भगवान्‌बाट
**आदिष्टाः** = आज्ञा पाएका
**यादवाः** = यादवहरूले
**तीर्थं** = प्रभास तीर्थमा
**गन्तुं** = जान
**कृतधियः** = मनले निश्चय गरेर
**स्यन्दनान्** = रथहरू
**समयूयुजन्** = तयार गरे

**वाक्यार्थ–** हे राजा परीक्षित्! यसरी भगवान्‌बाट आज्ञा पाएका यादवहरूले प्रभास तीर्थमा जाने निश्चय गरेर रथहरू तयार गरे।

**तन्निरीक्ष्योद्धवो राजन् श्रुत्वा भगवतोदितम्।**
**दृष्ट्वारिष्टानि घोराणि नित्यं कृष्णमनुव्रतः॥ ४०॥**
**विविक्त उपसङ्गम्य जगतामीश्वरेश्वरम्।**
**प्रणम्य शिरसा पादौ प्राञ्जलिस्तमभाषत॥ ४१॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**घोराणि** = भयानक
**अरिष्टानि** = उत्पातहरू
**दृष्ट्वा** = देखेर
**भगवता** = भगवान्‌द्वारा
**उदितम्** = बताइएको
**श्रुत्वा** = सुनेर (सबैको)
**तत्** = प्रभास क्षेत्रमा जाने त्यो तयारीलाई
**निरीक्ष्य** = देखेर
**नित्यं** = सधैं
**कृष्णं** = श्रीकृष्णको
**अनुव्रतः** = सेवा गर्ने
**उद्धवः** = उद्धवले
**जगतां** = सारा जगत्‌को
**ईश्वरेश्वरं** = मालिकका पनि मालिक
**तं** = ती श्रीकृष्णलाई
**विविक्ते** = एकान्तमा
**उपसङ्गम्य** = नजिक गएर
**शिरसा** = शिरले
**पादौ** = पाउमा
**प्रणम्य** = प्रणाम गरी
**प्राञ्जलिः** = हात जोडेर
**अभाषत** = भन्न थाले

**वाक्यार्थ–** हे राजा परीक्षित् ! द्वारकामा भयानक उत्पातहरू हुन थालेको देखेर अनि भगवान्को आज्ञा अनुसार सबै प्रभासतिर जान लागेको देखेर सधैँ भगवान् श्रीकृष्णको सेवामा लाग्ने भएका उद्धवले एकान्तमा नजिक गई शिरले पाउमा प्रणाम गरी भगवान्सँग हात जोडेर भन्न लागे।

**उद्धव उवाच** (उद्धवले भने)

**देवदेवेश योगेश पुण्यश्रवणकीर्तन।**

**संहृत्यैतत् कुलं नूनं लोकं सन्त्यक्ष्यते भवान्॥**

**विप्रशापं समर्थोऽपि प्रत्यहन् न यदीश्वरः॥ ४२॥**

**पदार्थ–**
**देवदेवेश** = हे देवाधिदेव
**योगेश** = हे योगीश्वर
**पुण्यश्रवणकीर्तन** = हे पुण्यश्रवण र कीर्तन भएका प्रभु
**ईश्वरः** = मालिक हजुर
**समर्थः अपि** = समर्थ भए पनि
**भवान्** = हजुरले
**यत्** = जो
**विप्रशापं** = ब्राह्मणहरूको श्रापलाई
**न प्रत्यहन्** = निवारण गर्नुभएन (त्यसैले)
**नूनं** = निश्चय नै
**एतत्** = यो
**कुलं** = यदुकुललाई
**संहृत्य** = संहार गरेर
**लोकं** = यो लोकलाई
**सन्त्यक्ष्यते** = त्याग्न खोज्दै हुनुहुन्छ

**वाक्यार्थ–** हे देवाधिदेव ! योगीश्वर ! हजुरको लीलाकथाहरू सुन्दा र कीर्तन गर्दा पुण्य प्राप्त हुन्छ। प्रभु ! हजुर सबैको ईश्वर हुनुहुन्छ र सबै काम गर्न समर्थ पनि हुनुहुन्छ, तथापि हजुरले ब्राह्मणको श्रापलाई निवारण गर्नुभएन, त्यसैले पक्कै पनि हजुर यो कुललाई संहार गरेर यो लोक छोडी जान खोज्दै हुनुहुन्छ।

**नाहं तवाङ्घ्रिकमलं क्षणार्धमपि केशव।**

**त्यक्तुं समुत्सहे नाथ स्वधाम नय मामपि॥ ४३॥**

**पदार्थ–**
**केशव** = हे भगवान्
**अहं** = म
**तव** = हजुरको
**अङ्घ्रिकमलं** = चरणकमललाई
**क्षणार्धम् अपि** = आधा क्षण पनि
**त्यक्तुं** = छाड्न
**न समुत्सहे** = सक्दिनँ (त्यसैले)
**नाथ** = हे प्रभु
**माम् अपि** = मलाई पनि
**स्वधाम** = आफ्नो धाममा
**नय** = लैजानुहोस्

**वाक्यार्थ–** हे भगवान् ! म हजुरको चरणकमललाई छाडेर आधा क्षण पनि रहन सक्दिनँ। त्यसैले हे नाथ ! मलाई पनि आफ्नो धाममा लैजानुहोस्।

**तव विक्रीडितं कृष्ण नृणां परममङ्गलम्।**

**कर्णपीयूषमास्वाद्य त्यजत्यन्यस्पृहां जनः॥ ४४॥**

**शय्यासनाटनस्थानस्नानक्रीडाशनादिषु ।**
**कथं त्वां प्रियमात्मानं वयं भक्तास्त्यजेम हि ॥ ४५ ॥**

**पदार्थ—**
**कृष्ण** = हे भगवान्
**नृणां** = मनुष्यहरूलाई
**कर्णपीयूषं** = कानको लागि अमृततुल्य र
**परममङ्गलं** = अत्यन्त मङ्गल
**तव** = हजुरको
**विक्रीडितं** = लीला कथाहरूलाई
**आस्वाद्य** = सुनेर त
**जनः** = मानिसले
**अन्यस्पृहां** = अन्य वस्तुको (धन, पुत्र, कलत्र आदिको) आसक्तिलाई
**हि** = निश्चय नै
**त्यजति** = त्याग्दछ भने
**शय्यासनाटनस्थानस्नानक्रीडाशनादिषु** = सुत्दा, बस्दा, घुम्दा, रहँदा, नुहाउँदा, खेल्दा, खाँदा आदि कार्यमा (हजुरको)
**भक्ताः** = सेवा गरेका
**वयं** = हामीहरूले
**प्रियं** = प्यारो
**आत्मानं** = आत्मारूप
**त्वां** = हजुरलाई
**कथं** = कसरी
**त्यजेम** = त्याग्न सक्छौँ

**वाक्यार्थ—** हे श्रीकृष्ण ! मनुष्यहरूलाई सुन्दा अमृत जस्तो लाग्ने र परम मङ्गल हजुरका केवल लीलाकथालाई आस्वादन गरेर त मानिसले अरू धन, सम्पत्ति, स्त्री आदिको आसक्तिलाई त्याग्दछ भने सुन्दा, बस्दा, घुम्दा, रहँदा, नुहाउँदा, खेल्दा र खाँदा पनि हजुरलाई सेवा गर्ने भक्त हामीहरू आफ्नो आत्मारूप हजुरलाई त्यागेर कसरी रहन सक्छौँ ?

**त्वयोपभुक्तस्रग्गन्धवासोऽलङ्कारचर्चिताः ।**
**उच्छिष्टभोजिनो दासास्तव मायां जयेम हि ॥ ४६ ॥**

**पदार्थ—**
**त्वया** = हजुरद्वारा
**उपभुक्तस्रग्गन्धवासोऽलङ्कारचर्चिताः** = उपभोग गरेका माला, चन्दन, वस्त्र र आभूषण आदिले विभूषित हुने
**उच्छिष्टभोजिनः** = हजुरको जुठो खाने
**दासाः** = हामी सेवकहरूले
**हि** = निश्चय नै
**तव** = हजुरको
**मायां** = मायालाई
**जयेम** = जित्छौँ

**वाक्यार्थ—** हजुरले पहिला उपभोग गरेका माला, चन्दन, वस्त्र, आभूषण आदि लगाएर सजिने, अनि हजुरले खाएको जुठो खाने हामी सेवकहरूले हजुरको मायालाई जित्छौँ।

**विवरण—** यहाँ उद्धवले भगवान्ले लीलासंवरण गर्न लागेको थाहा पाएपछि भगवान्सँग छुट्टिनुपर्दा आफूलाई अत्यन्त पीडा हुने बताएका छन्। संसारको दुःखबाट व्यथित भएका प्राणीहरूलाई लीलारसको अमृत चखाई आनन्दित तुल्याउन भगवान्को आविर्भाव भएको हो। एकपटक परमानन्दको आस्वाद लिइसकेका यी व्यक्तिहरू त्यसलाई छोड्न कसरी सक्दछन् र ? संसारको आनन्द अत्यन्त क्षणिक एवं सीमित छ। ती पदार्थहरूको भोग गरिरहेका व्यक्तिहरू त आफ्नो भोगलाई छोड्न चाहँदैनन् भने सम्पूर्ण इन्द्रियहरूबाट परमानन्दलाई चाखिरहेको एउटा भक्त

त्यो आनन्दको मुहान परमात्मालाई कसरी छाड्न सक्दछ र? भगवान् अन्तर्हित हुने वेलामा भक्तहरूमा हुने यही पीडा यहाँ व्यक्त भएको छ।

नीतिशास्त्रमा भनिन्छ— सज्जन एवं दुर्जन दुबैले प्राणलाई हरण गर्दछन्, तर तिनमा फरक के छ भने दुर्जनको संयोग प्राणहारक हुन्छ अनि सत्पुरुषको चाहिँ वियोग प्राणहारक हुन्छ। जीवनभरि अनेक लीलाद्वारा भक्तहरूलाई आनन्द दिनुभएका भगवान्को वियोग उनीहरूका लागि अत्यन्त पीडाकारक हुने निश्चित नै छ। उद्धव भगवान्का अत्यन्त नजिक रहने अन्तरङ्ग भक्त हुन्। संसारको कुनै पनि विषयभोग नचाहने यिनी भगवान्ले लगाएका पीताम्बर, भगवान्ले भोजन गरेर बाँकी रहेको प्रसाद आदिबाट आफ्नो जीवननिर्वाह गर्थे। उनले सबै भक्तहरूको घनीभूत पीडालाई आफ्नो शब्दमा अभिव्यक्त गरेका छन्। उद्धव भन्छन्— हे प्रभु ! हजुरले ब्राह्मणहरूको श्रापलाई रोक्ने सामर्थ्य हुँदाहुँदै पनि त्यसलाई रोक्नुभएन, यसको तात्पर्य हजुरले पनि यदुकुलको विनाश चाहनुभएको छ। यसबाट के सिद्ध हुन्छ भने अब छिट्टै हजुर यदुकुललाई समेटी आफ्नो लोकमा जान चाहनुहुन्छ। हे केशव ! म हजुरको चरणलाई एक क्षण पनि छाड्न सक्दिनँ, त्यसैले मलाई पनि आफूसँगै आफ्नो धाममा लिएर जानुहोस्। जसले जीवनको हरेक क्षण भगवान्कै लागि सुम्पेको हुन्छ, त्यो व्यक्ति भगवान्को विरहमा कसरी संसारमा रहिरहन सक्दछ र? यद्यपि भगवान्को विरह भनेको उहाँको चिन्तन छुट्नु र संसारतिर मन जानु हो। संसारका सबै महापुरुषहरू आन्तरिक भावद्वारा सधैँ भगवान्सँगै भइरहन्छन् र यस्ता भक्तलाई शास्त्रहरूमा नित्ययुक्त भनिएको छ। तर उद्धव आदि भक्तहरू चाहिँ यस्ता सौभाग्यशाली भक्तहरू हुन्, जसले बाहिरी आँखाद्वारा पनि भगवान्लाई देख्न पाएका छन्। यति मात्र नभई उनीहरू भगवान्सँगै खाने, खेल्ने, हिँड्ने आदि सारा व्यवहार गर्दथे। यो विशेष सौभाग्य पाएकाले उनीहरूका लागि भगवान्लाई देख्न नपाउनुको विरह असह्य हुन्छ, उनीहरू भगवान्लाई केवल मनमनै सम्झेको भरमा मात्र सन्तुष्ट हुँदैनन्। उद्धवको विषयमा त झन् के प्रसिद्धि छ भने उनी सानो बच्चा हुँदादेखि नै खान-खेल्न समेत छाडी भगवान्को चिन्तनमा लीन हुन्थे। आज पनि उद्धवले भगवान्लाई आफूसँगै धाममा लिएर जानुहोस् भनी प्रार्थना गरेका छन्।

उद्धव भन्दछन्— हजुरको लीलाश्रवणको स्वाद चाखेपछि व्यक्तिले अरू बाहिरी संसारको कामनालाई तत्काल त्यागिदिन्छ। केवल लीलाश्रवणमा त यस्तो विशेषता छ भने हामी हजुरसँगै सुत्ने, उठ्ने, खाने, खेल्ने र रमाउने भक्तहरू हजुरविना संसारमा कसरी रहन सक्दछौँ ? के पानीको अभावमा माछो एकछिन पनि बाँच्न सक्दछ र? भगवान् भक्तहरूका लागि अत्यन्त प्रिय हुनुहुन्छ र स्वयं आत्मस्वरूप नै हुनुहुन्छ। आफ्नो आत्मालाई पनि कसैले छोड्न सक्दछ र? यसैले भक्तहरू भगवान्विना एक क्षण पनि रहन सक्दैनन्। देवर्षि नारदले भक्तिको लक्षण गर्ने क्रममा पनि भन्नुभएको छ— **नारदस्तु तदर्पिताखिलाचरिता तद्विस्मरणे परमव्याकुलता चेति** (नारदभक्तिसूत्र १।१९) अर्थात् भक्ति भनेको सम्पूर्ण दैनिक व्यवहार पनि भगवान्मा अर्पण गरिदिनु र भगवान्लाई एक छिन बिर्सदा या उहाँसँग वियोग हुँदा अत्यन्त व्याकुल हुनु नै हो। भक्तिशास्त्रमा भगवान्प्रतिको यही व्याकुलतालाई नै माया जित्ने प्रधान साधन भनी बताइएको छ। त्यसैले उद्धवले आफूहरूले भगवान्को निरन्तर सङ्गत अनि उहाँको प्रसाद रूपमा प्राप्त वस्तुहरूको

| पदार्थ– | **कपोतः** = परेवाले | **अरण्ये** = वनमा |
|---|---|---|
| **वनस्पतौ** = कुनै रुखमा | **भार्यया** = श्रीमती | **कतिचित्** = केही |
| **कृतनीडः** = गुँड बनाएको | **कपोत्या** = परेवी | **समाः** = वर्षसम्म |
| **कश्चन** = कुनै | **सार्धम्** = सँग | **उवास** = बस्यो |

**वाक्यार्थ–** कुनै परेवाले रुखमा गुँड बनाएर श्रीमती परेवीसँग वनमा केही वर्षसम्म सँगै बस्यो।

**कपोतौ स्नेहगुणितहृदयौ गृहधर्मिणौ।**

**दृष्टिं दृष्ट्याङ्गमङ्गेन बुद्धिं बुद्ध्या बबन्धतुः॥ ५४॥**

| पदार्थ– | **कपोतौ** = परेवा र परेवी | **बुद्ध्या** = बुद्धिले |
|---|---|---|
| **गृहधर्मिणौ** = गृहस्थको सुखमा मग्न भएका | **दृष्ट्या** = हेराइले | **बुद्धिं** = बुद्धिलाई |
| | **दृष्टिं** = हेराइलाई | **बबन्धतुः** = परस्पर बाँधे |
| **स्नेहगुणितहृदयौ** = प्रेमले हृदय एउटै भएका | **अङ्गेन** = शरीरले | |
| | **अङ्गं** = शरीरलाई र | |

**वाक्यार्थ–** गृहस्थ सुखमा मग्न भएका ती परेवा र परेवी प्रेमले आबद्ध थिए र उनीहरूले दृष्टिले दृष्टिलाई, शरीरले शरीरलाई अनि बुद्धिले बुद्धिलाई गरी एक-अर्कालाई बाँधेका थिए।

**शय्यासनाटनस्थानवार्ताक्रीडाशनादिकम्।**

**मिथुनीभूय विश्रब्धौ चेरतुर्वनराजिषु॥ ५५॥**

| पदार्थ– | **वनराजिषु** = वनश्रेणीहरूमा | घुम्ने, बोल्ने, खेल्ने र खाने |
|---|---|---|
| **विश्रब्धौ** = निःशङ्क भएर | **शय्यासनाटनस्थानवार्ताक्रीडा-** | आदि कामहरू पनि |
| **मिथुनीभूय** = दम्पती बनी | **शनादिकं** = सँगै सुत्ने, बस्ने, | **चेरतुः** = गर्न थाले |

**वाक्यार्थ–** ती दुई दम्पती निःशङ्क भएर वनश्रेणीहरूमा सँगै सुत्ने, बस्ने, घुम्ने, बोल्ने, खेल्ने, खाने आदि कामहरू गर्न थाले।

**यं यं वाञ्छति सा राजँस्तर्पयन्त्यनुकम्पिता।**

**तं तं समनयत् कामं कृच्छ्रेणाप्यजितेन्द्रियः॥ ५६॥**

| पदार्थ– | **यं यं** = जुन-जुन सुखलाई | **कामं** = इच्छाहरूलाई |
|---|---|---|
| **राजन्** = हे राजा यदु | **वाञ्छति** = चाहन्थी | **कृच्छ्रेण अपि** = कष्टले पनि |
| **सा** = त्यो परेवी | **अजितेन्द्रियः** = इन्द्रियको वशमा रहेको परेवाले पनि | **समनयत्** = पूरा गरिदिन्थ्यो |
| **तर्पयन्ती** = पतिलाई खुसी पार्दै | | |
| **अनुकम्पिता** = कृपापात्र बनेर | **तं तं** = ती-ती | |

**वाक्यार्थ–** हे महाराज यदु ! पतिलाई खुसी पारेकी र पतिकी कृपापात्र बनेकी त्यो परेवीले जे-जे कुराको चाहना गर्थी ती सबै इच्छाहरूलाई इन्द्रियको वशमा परेको परेवाले जति दुःख भए पनि पूरा गरिदिन्थ्यो।

**कपोती प्रथमं गर्भं गृह्णती काल आगते।**
**अण्डानि सुषुवे नीडे स्वपत्युः सन्निधौ सती॥ ५७॥**

**पदार्थ–**
**प्रथमं** = पहिलो
**गर्भं** = गर्भलाई
**गृह्णती** = धारण गरेकी
**सती** = पतिव्रता
**कपोती** = परेवीले
**काले** = प्रसवकाल
**आगते** = आएपछि
**स्वपत्युः** = आफ्नो पतिदेवको
**सन्निधौ** = नजिक
**नीडे** = गुँडमा
**अण्डानि** = फुलहरू
**सुषुवे** = पारी

**वाक्यार्थ–** पहिलो गर्भधारण गरेकी पतिव्रता परेवीले प्रसवको समय आएपछि आफ्नो पति परेवाको नजिकै गुँडमा फुलहरू पारी।

**तेषु काले व्यजायन्त रचितावयवा हरेः।**
**शक्तिभिर्दुर्विभाव्याभिः कोमलाङ्गतनूरुहाः॥ ५८॥**

**पदार्थ–**
**तेषु** = ती फुलहरूमा
**हरेः** = भगवान्‌को
**दुर्विभाव्याभिः** = तर्कद्वारा नजानिने अनिर्वचनीय
**शक्तिभिः** = (काल, कर्म, स्वभाव आदि) शक्तिहरूद्वारा
**रचितावयवाः** = भित्रै अङ्ग अवयवहरू बनिसकेका
**कोमलाङ्गतनूरुहाः** = कोमल अङ्ग र रौँ भएका बच्चाहरू
**काले** = समय आएपछि
**व्यजायन्त** = उत्पन्न भए

**वाक्यार्थ–** ती अण्डाहरूबाट भगवान्‌को दुस्तर्क्य अनिर्वचनीय काल, कर्म, स्वभाव आदिरूप शक्तिद्वारा, भित्रै अङ्गहरू बनेका, कोमल अङ्ग र रौँहरूले युक्त बच्चाहरू समय आएपछि उत्पन्न भए।

**प्रजाः पुपुषतुः प्रीतौ दम्पती पुत्रवत्सलौ।**
**शृण्वन्तौ कूजितं तासां निर्वृतौ कलभाषितैः॥ ५९॥**

**पदार्थ–**
**तासां** = ती बच्चाहरूको
**कूजितं** = मिठो स्वर
**शृण्वन्तौ** = सुन्दै र
**कलभाषितैः** = तोते बोलीबाट
**निर्वृतौ** = सुखी तथा
**प्रीतौ** = प्रसन्न भएका
**पुत्रवत्सलौ** = बच्चामाथि प्रेम गर्ने
**दम्पती** = परेवा र परेवीको जोडीले
**प्रजाः** = बच्चाहरूलाई
**पुपुषतुः** = पालन-पोषण गरे

**वाक्यार्थ–** ती साना बच्चाहरूको मिठो स्वरलाई सुन्दै र तोतेबोलीबाट सुखी तथा प्रसन्न हुँदै आफ्ना बच्चालाई अत्यन्त प्रेम गर्ने ती दम्पतीले बच्चाहरूको पालन-पोषण गर्न थाले।

**तासां पतत्रैः सुस्पर्शैः कूजितैर्मुग्धचेष्टितैः।**

**प्रत्युद्गमैरदीनानां पितरौ मुदमापतुः॥ ६०॥**

**पदार्थ–**
**तासां** = ती
**अदीनानां** = प्रसन्न भएका बच्चाहरूको
**पतत्रैः** = पखेटाद्वारा भएको
**सुस्पर्शैः** = सुखदायक स्पर्शले
**कूजितैः** = मिठो स्वरले
**मुग्धचेष्टितैः** = मुग्ध पार्ने चेष्टाले
**प्रत्युद्गमैः** = यता-उता तन्किनाले
**पितरौ** = ती माता पिताले
**मुदं** = आनन्द
**आपतुः** = प्राप्त गर्दथे

**वाक्यार्थ–** ती अतिप्रसन्न बच्चाहरूको पखेटाको कोमल स्पर्शले, मिठो स्वरले, मुग्ध पार्ने चेष्टाले र यता उताको घुमाइले ती माता-पिता परम आनन्द प्राप्त गर्दथे।

**स्नेहानुबद्धहृदयावन्योन्यं विष्णुमायया।**

**विमोहितौ दीनधियौ शिशून् पुपुषतुः प्रजाः॥ ६१॥**

**पदार्थ–**
**विष्णुमायया** = भगवान्को मायाद्वारा
**विमोहितौ** = मोहित भएका र
**अन्योन्यं** = आपसमा
**स्नेहानुबद्धहृदयौ** = स्नेहले हृदय बाँधिएका
**दीनधियौ** = (लालनपालन कर्मले) व्याकुल भएका ती दम्पतीले
**शिशून्** = साना
**प्रजाः** = आफ्ना बच्चाहरूलाई
**पुपुषतुः** = पाल्दथे

**वाक्यार्थ–** भगवान्को मायाले मोहित भएका, त्यसैले आपसमा प्रेमको डोरीले बाँधिएका ती दुई दम्पती लालन-पालन कर्मले व्याकुल भए पनि आफ्ना साना बच्चाहरूलाई पाल्दथे।

**एकदा जग्मतुस्तासामन्नार्थं तौ कुटुम्बिनौ।**

**परितः कानने तस्मिन्नर्थिनौ चेरतुश्चिरम्॥ ६२॥**

**पदार्थ–**
**एकदा** = एक दिन
**कुटुम्बिनौ** = परिवार भएका
**तौ** = ती दुई दम्पती
**तासां** = ती बच्चाहरूको
**अन्नार्थं** = चाराको लागि
**जग्मतुः** = गए
**अर्थिनौ** = चारा चाहने ती दुई
**तस्मिन्** = त्यो
**कानने** = वनमा
**परितः** = चारैतिर
**चिरं** = धेरै समयसम्म
**चेरतुः** = घुमे

**वाक्यार्थ–** एकदिन परिवारवाला ती दम्पती बच्चाको लागि चारा खोज्न वनमा गए र चारा खोज्दै त्यो वनमा धेरै समयसम्म चारैतर्फ घुम्दै रहे।

**दृष्ट्वा ताँल्लुब्धकः कश्चिद् यदृच्छातो वनेचरः।**
**जगृहे जालमातत्य चरतः स्वालयान्तिके॥ ६३॥**

**पदार्थ—**
**यदृच्छातः** = अकस्मात्
**वनेचरः** = वनमा घुम्दै आएको
**कश्चित्** = कुनै
**लुब्धकः** = व्याधाले
**स्वालयान्तिके** = आफ्नो गुँडको नजिक वरिपरि
**चरतः** = घुमिरहेका
**तान्** = ती बच्चाहरूलाई
**दृष्ट्वा** = देखेर
**जालं** = जाल
**आतत्य** = फिजाएर
**जगृहे** = समात्यो

**वाक्यार्थ—** त्यसै बखतमा अकस्मात् वनमा घुम्दै आएको कुनै व्याधाले आफ्नो गुँडको वरिपरि घुमिरहेका ती बच्चाहरूलाई देख्यो र आफ्नो जाल फिँजाई ती बच्चाहरूलाई जालमा पार्‍यो।

**कपोतश्च कपोती च प्रजापोषे सदोत्सुकौ।**
**गतौ पोषणमादाय स्वनीडमुपजग्मतुः॥ ६४॥**

**पदार्थ—**
**प्रजापोषे** = बच्चाको पालनपोषणमा
**सदा** = सधैँ
**उत्सुकौ** = उत्साही भएर
**गतौ** = चारा खोज्न गएका
**कपोतः च** = परेवा र
**कपोती च** = परेवी पनि
**पोषणं** = चारा
**आदाय** = लिएर
**स्वनीडं** = आफ्नो गुँडमा
**उपजग्मतुः** = फर्किए

**वाक्यार्थ—** बच्चाको लालनपालनमा सधैँ उत्सुक भएर चारा लिन गएका परेवा र परेवी पनि चारा लिई आफ्नो गुँडतिर फर्किए।

**कपोती स्वात्मजान् वीक्ष्य बालकान् जालसंवृतान्।**
**तानभ्यधावत् क्रोशन्ती क्रोशतो भृशदुःखिता॥ ६५॥**

**पदार्थ—**
**बालकान्** = साना
**स्वात्मजान्** = आफ्ना बच्चाहरूलाई
**जालसंवृतान्** = जालमा परेका
**वीक्ष्य** = देखेर
**भृशदुःखिता** = अत्यन्त दुःखी भएर
**क्रोशन्ती** = रोइरहेकी
**कपोती** = परेवी
**क्रोशतः** = रोइरहेका
**तान्** = ती बच्चाहरूको
**अभ्यधावत्** = नजिकमा गई

**वाक्यार्थ—** जब परेवीले आफ्ना साना बच्चाहरू जालमा परेको देखी, त्यसपछि ऊ अत्यन्त दुःखी हुँदै र रुँदै ती रोइरहेका आफ्ना बच्चाहरूको नजिकमा गई।

**सासकृत्स्नेहगुणिता दीनचित्ताजमायया।**
**स्वयं चाबध्यत शिचा बद्धान् पश्यन्त्यपस्मृतिः॥ ६६॥**

**पदार्थ—**

**अजमायया** = भगवान्को मायाद्वारा
**असकृत्स्नेहगुणिता** = आफ्ना बच्चामा धेरै स्नेहले बाँधिएकी
**दीनचित्ता** = दुःखी भएकी
**अपस्मृतिः** = (जालमा गएँ भने म पनि मर्छु भन्ने) होस नभएकी
**सा** = त्यो परेवी
**बद्धान्** = ती बाँधिएका बालकहरूलाई
**पश्यन्ती** = देख्दा–देख्दै पनि
**स्वयं च** = आफू पनि
**शिचा** = जालले
**अबध्यत** = बाँधिई

**वाक्यार्थ—** भगवान्को मायाले गर्दा बच्चामा झनै धेरै माया बढेकी दीन, दुःखी परेवीले म गएँ भने म पनि बाँधिन्छु भन्ने कुरा भुलेर ती बच्चा बाँधिएका देख्दा–देख्दै पनि त्यहीं जानाले आफू पनि जालले बाँधिई।

**कपोतः स्वात्मजान् बद्धानात्मनोऽप्यधिकान् प्रियान्।**
**भार्यां चात्मसमां दीनो विललापातिदुःखितः॥ ६७॥**

**पदार्थ—**

**कपोतः च** = परेवाले पनि
**आत्मनः अपि** = आफ्नो शरीरभन्दा पनि
**अधिकान्** = धेरै
**प्रियान्** = प्यारा
**स्वात्मजान्** = आफ्ना बच्चाहरू
**बद्धान्** = बाँधिएका र
**आत्मसमां** = आफूसमानकी
**भार्यां च** = पत्नीलाई पनि बाँधिएकी देखेर
**अतिदुःखितः** = अति दुःखी र
**दीनः** = दीनहीन हुँदै
**विललाप** = विलाप गर्‍यो

**वाक्यार्थ—** परेवाले पनि आफ्नो शरीरभन्दा प्यारा बच्चाहरू र आफूसमानकी श्रीमती जालमा बाँधिएको देखेर अत्यन्त दुःखी र दीन हीन भई खुब विलाप गर्‍यो।

**अहो मे पश्यतापायमल्पपुण्यस्य दुर्मतेः।**
**अतृप्तस्याकृतार्थस्य गृहस्त्रैवर्गिको हतः॥ ६८॥**

**पदार्थ—**

**अहो** = अहो
**अल्पपुण्यस्य** = थोरै पुण्य गरेको
**दुर्मतेः** = बुद्धि बिग्रिएको
**मे** = मेरो
**अपायं** = विनाशलाई
**पश्यत** = हेर
**अतृप्तस्य** = दृष्ट सुखबाट तृप्त नभएको र
**अकृतार्थस्य** = अदृष्ट सुखसम्पादन नगरेको मेरो
**त्रैवर्गिकः** = धर्म, अर्थ र कामको साधनभूत
**गृहः** = गृहस्थ आश्रम
**हतः** = नष्ट भयो

**वाक्यार्थ—** अहो ! थोरै पुण्य भएको, बुद्धि बिग्रिएको मेरो विनाश भएको सबैले हेर। लौकिक सुखबाट म तृप्त भएको छैन, परलोकको सुख कमाउन सकेको छैन। यस्तो वेला मेरो धर्म, अर्थ र कामको साधनभूत गृहस्थ आश्रम नष्ट भयो।

**अनुरूपानुकूला च यस्य मे पतिदेवता।**
**शून्ये गृहे मां सन्त्यज्य पुत्रैः स्वर्याति साधुभिः॥ ६९॥**

**पदार्थ–**
**पतिदेवता** = पतिलाई देवता मान्ने
**अनुकूला** = अनुकूल र
**अनुरूपा** = आफ्नो अनुरूपकी
**यस्य** = जो
**मे** = मेरी स्त्री
**शून्ये** = सुनसान
**गृहे** = घरमा
**मां** = मलाई
**सन्त्यज्य** = एक्लै छाडेर
**साधुभिः** = सुन्दर
**पुत्रैः च** = बच्चाहरूसँग
**स्वः** = स्वर्ग
**याति** = जाँदैछिन्

**वाक्यार्थ–** म पतिलाई नै देवता मान्ने, अत्यन्त अनुकूल र आफू सुहाउँदी मेरी स्त्री सुनसान घरमा मलाई एक्लै छाडेर आफ्ना सुन्दर बच्चाहरूसँग स्वर्गतिर जाँदैछिन्।

**सोऽहं शून्ये गृहे दीनो मृतदारो मृतप्रजः।**
**जिजीविषे किमर्थं वा विधुरो दुःखजीवितः॥ ७०॥**

**पदार्थ–**
**मृतदारः** = पत्नी मरेको
**मृतप्रजः** = सन्तान मरेको
**दुःखजीवितः** = दुःखले जिउने
**विधुरः** = श्रीमतीरहित
**दीनः** = दुःखी
**सः अहं** = त्यही म
**शून्ये** = सुनसान
**गृहे** = घरमा
**किमर्थं** = केका लागि
**जिजीविषे वा** = बाँच्न चाहूँ

**वाक्यार्थ–** मेरी श्रीमती मरिसकी, सन्तानहरू पनि मरिसके, जीवन दुःखमय छ, म अब विधुर भएको छु, त्यस्तो म शून्य घरमा फेरि केका लागि बाँच्न चाहूँ ?

**तांस्तथैवावृताञ्छिग्भिर्मृत्युग्रस्तान् विचेष्टतः।**
**स्वयं च कृपणः शिक्षु पश्यन्नप्यबुधोऽपतत्॥ ७१॥**

**पदार्थ–**
**कृपणः** = दीनहीन
**अबुधः** = मूर्ख परेवा
**शिग्भिः** = जालले
**आवृतान्** = बाँधिएका
**मृत्युग्रस्तान्** = मृत्युले ग्रस्त
**विचेष्टतः** = तड्पिरहेका
**तान्** = ती बच्चाहरूलाई
**पश्यन् अपि** = देख्दा-देख्दै पनि
**तथा एव** = त्यसरी नै
**स्वयं च** = आफू पनि
**शिक्षु** = जालमा
**अपतत्** = पऱ्यो

**वाक्यार्थ–** अत्यन्त दीन-हीन मूर्ख परेवा जालले बाँधिएर मृत्युले ग्रसित हुँदै तड्पिरहेका बच्चाहरूलाई देखी-देखी पनि आफ्नी स्त्री झैं आफू पनि जालमा पऱ्यो।

**तं लब्ध्वा लुब्धकः क्रूरः कपोतं गृहमेधिनम्।**
**कपोतकान् कपोतीं च सिद्धार्थः प्रययौ गृहम्॥ ७२॥**

**पदार्थ–**
**क्रूरः** = निर्दयी
**लुब्धकः** = ब्याधा
**तं** = त्यो
**गृहमेधिनं** = गृहस्थ आश्रममा रहेको

**कपोतं** = परेवालाई
**कपोतकान्** = उसको बच्चाहरूलाई र
**कपोतीं च** = परेवीलाई पनि
**लब्ध्वा** = पाएर
**सिद्धार्थः** = प्रयोजन सिद्ध गरी
**गृहं** = घरतिर
**प्रययौ** = गयो

**वाक्यार्थ–** त्यो अत्यन्त निर्दयी ब्याधा गृहस्थ आश्रममा रहेको परेवालाई उसका बच्चाहरूलाई र परेवीलाई पनि पाएर प्रयोजन सिद्ध गरी आफ्नो घरतिर गयो।

**एवं कुटुम्ब्यशान्तात्मा द्वन्द्वारामः पतत्रिवत्।**
**पुष्णन् कुटुम्बं कृपणः सानुबन्धोऽवसीदति॥ ७३॥**

**पदार्थ–**
**एवं** = यसरी
**पतत्रिवत्** = पक्षी परेवा जस्तै
**अशान्तात्मा** = अशान्त चित्त भएको
**द्वन्द्वारामः** = सुख दुःख आदि द्वन्द्वमा रमाएको
**कृपणः** = विषयमा आसक्त
**कुटुम्बी** = परिवारवाला व्यक्तिले
**कुटुम्बं** = परिवारलाई
**पुष्णन्** = पालन गर्दै
**सानुबन्धः** = स्त्री, पुत्र आदिसहित
**अवसीदति** = दुःखी हुन्छ

**वाक्यार्थ–** यसरी त्यही परेवा जस्तै रागद्वेषले चित्त शान्त नभएको, सुख-दुःख आदि द्वन्द्वमा रमाउने एवं विषयमा आसक्त र कुटुम्बी व्यक्ति परिवारको पालन-पोषण गर्दै अन्तिममा स्त्री, पुत्र आदि सहित दुःखी हुन्छ।

**यः प्राप्य मानुषं लोकं मुक्तिद्वारमपावृतम्।**
**गृहेषु खगवत् सक्तस्तमारूढच्युतं विदुः॥ ७४॥**

**पदार्थ–**
**यः** = जो मानिस
**अपावृतं** = खुलेको
**मुक्तिद्वारं** = मुक्तिको ढोका जस्तो
**मानुषं** = मनुष्यको
**लोकं** = शरीरलाई
**प्राप्य** = पाएर
**गृहेषु** = घरगृहस्थीमा
**खगवत्** = परेवा जस्तै
**सक्तः** = आसक्त बन्दछ
**तं** = त्यसलाई
**आरूढच्युतं** = मुक्तिमार्गबाट खसेको भनेर
**विदुः** = भन्दछन्

**वाक्यार्थ–** जो मानिस खुला मुक्तिको द्वारसमान मनुष्य शरीरलाई पाएर पनि परेवा जस्तै घरगृहस्थीमा आसक्त भई बस्दछ त्यस्तालाई मुक्तिको मार्गबाट खसेको भन्दछन्।

**विवरण–** यहाँ परेवाको चरित्रबाट कतै पनि धेरै आसक्ति गर्नुहुँदैन भन्ने शिक्षा दिइएको छ। वनको कुनै रुखमा रहेको गुँडमा परेवाको स-साना बचेरा हुन्छन् र उसका आमाबाबु उनीहरूका लागि चारा खोज्न गएका हुन्छन्। यसै वेलामा सिकारीले आई जाल थाप्छ र ती अज्ञानी बचेराहरू जालमा पर्दछन्। आफ्ना सन्तान जालमा परेको देखी परेवी पनि जालमा हाम फाल्छे। यो सबै देखिरहेको परेवाले पनि आफ्ना सन्तान अनि पत्नीसमेत मरिसकेपछि म एक्लै बाँचेर के हुन्छ र भन्ने सम्झी विलाप गर्दै त्यही जालमा हाम फाल्दछ। प्राणीहरूले संसारका पदार्थहरूमा

गर्ने आसक्ति कति भयानक हुन्छ भने त्यसले उनीहरूको जीवनलाई नै सङ्कटमा पारिदिन्छ। यद्यपि प्राणीले आफ्ना लागि भनेर नै सारा संसारका विषयहरूमा प्रेम गरेको हुन्छ। तर घोर मोहको अन्धकारमा फसेको व्यक्ति चाहिँ संसारमा मैले मेरै लागि प्रेम गरेको हुँ भन्ने पनि बिर्सिएर त्यसमा अति आसक्ति गर्दछ। यस्तो अन्धआसक्तिले व्यक्तिलाई आत्मविनाशको द्वारमा पुऱ्याइदिन्छ भन्नका लागि दृष्टान्त यहाँ प्रस्तुत गरिएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां एकादशस्कन्धे सप्तमोऽध्यायः ॥ ७ ॥**

# अथ अष्टमोऽध्यायः

## अवधूतका चौबीस गुरुहरूको प्रसङ्ग

**ब्राह्मण उवाच** (अवधूत ब्राह्मणले भने)

**सुखमैन्द्रियकं राजन् स्वर्गे नरक एव च।**

**देहिनां यद्यथा दुःखं तस्मान्नेच्छेत तद् बुधः॥ १॥**

**पदार्थ–**
**राजन्** = हे राजा यदु
**देहिनां** = प्राणीहरूलाई
**ऐन्द्रियकं** = इन्द्रियबाट हुने
**यत्** = जो
**सुखं** = सुख छ (त्यो)
**स्वर्गे** = स्वर्गमा र
**नरके च** = नरकमा पनि हुन्छ
**यथा** = जसरी
**दुःखं** = दुःख प्राप्त हुन्छ
**तस्मात्** = त्यसैले
**बुधः** = विवेकीले
**तत्** = त्यो इन्द्रियबाट प्राप्त हुने सुखको
**न इच्छेत** = इच्छा नगरोस्

**वाक्यार्थ–** हे राजा यदु ! प्राणीलाई जसरी नचाहँदा नचाहँदै पनि दुःख प्राप्त हुन्छ त्यसै गरी स्वर्ग या नरक जहाँ गए पनि इन्द्रियबाट हुने सुख पनि अनायासमैं प्राप्त हुन्छ त्यसैले विवेकीले त्यो सुख पाउने इच्छा नगरोस्।

**ग्रासं सुमृष्टं विरसं महान्तं स्तोकमेव वा।**

**यदृच्छयैवापतितं ग्रसेदाजगरोऽक्रियः॥ २॥**

**पदार्थ–**
**अजगरः** = अजिङ्गरको जस्तो वृत्तिवाला
**अक्रियः** = उदासीन व्यक्तिले
**सुमृष्टं** = मिठो
**विरसं** = नमिठो
**महान्तं वा** = धेरै वा
**स्तोकं एव** = थोरै नै भए पनि
**यदृच्छया एव** = प्रयत्नविना नै
**आपतितं** = प्राप्त भएको
**ग्रासं** = आहारलाई
**ग्रसेत** = खाओस्

**वाक्यार्थ–** अजिङ्गरको जस्तो वृत्तिवाला उदासीन व्यक्तिले मिठो-नमिठो, धेरै-थोरै केहीको पनि वास्ता नगरी विनाप्रयत्न प्राप्त भएको आहारलाई ग्रहण गरोस्।

**शयीताहानि भूरीणि निराहारोऽनुपक्रमः।**

**यदि नोपनमेद् ग्रासो महाहिरिव दिष्टभुक्॥ ३॥**

**पदार्थ–**
**यदि** = यदि
**ग्रासः** = खाने आहार
**न उपनमेत्** = मिलेन भने
**महाहिः इव** = अजिङ्गर झैं
**दिष्टभुक्** = प्रारब्धमा नै विश्वास गरेर
**निराहारः** = केही नखाई
**अनुपक्रमः** = उद्यमरहित भई
**भूरीणि** = धेरै
**अहानि** = दिनसम्म
**शयीत** = सुतिरहोस्

**वाक्यार्थ–** यदि खाने आहार मिलेन भने पनि प्रारब्धमा विश्वास गरी धैर्य गरेर विनाप्रयास धेरै दिनसम्म पनि सुतिरहोस्।

**ओजःसहोबलयुतं बिभ्रद् देहमकर्मकम्।**
**शयानो वीतनिद्रश्च नेहेतेन्द्रियवानपि ॥ ४ ॥**

**पदार्थ–**
**ओजःसहोबलयुतं** = इन्द्रियशक्ति, मनोबल र शारीरिक बल युक्त भएर पनि
**अकर्मकं** = चेष्टारहित
**देहं** = शरीरलाई
**बिभ्रत्** = धारण गरेर
**इन्द्रियवान् अपि** = इन्द्रियको शक्तिसम्पन्न भएर पनि
**शयानः** = सुतिरहँदा वा
**वीतनिद्रः च** = जाग्दा पनि
**न ईहेत** = कुनै चेष्टा नगर्नू

**वाक्यार्थ–** शरीरमा इन्द्रियशक्ति, मनोबल र शारीरिक शक्ति भएर पनि चेष्टा नगरी सुतिरहनू अनि निद्रारहित र चक्षु आदि इन्द्रियशक्ति सम्पन्न भएर पनि दर्शन आदि क्रिया नगर्नू।

**विवरण–** यहाँ साधकले जीविकाको चिन्ता गर्नु हुँदैन भन्ने कुरामा अजिङ्गरबाट शिक्षा लिनुपर्ने बताइएको छ। अजिङ्गर धेरैजसो एउटै ठाउँमा बसिरहन्छ र आहारा खोज्न दौडधुप गर्दैन। ईश्वरीय विधान अनुसार चुपचाप बसिरहेको यसको अघि जो-जो प्राणी आउँछन्, तिनैलाई उसले आफ्नो आहारा बनाउँछ। कहिलेकाहीँ अलि दिनसम्म भोजन प्राप्त भएन भने पनि ऊ आफ्नो ठाउँबाट विचलित हुँदैन। संसारका अरू प्राणीहरू आफ्नो लागि आहारा खोज्न खुब परिश्रम गर्दछन्। झन् मानिस त यस्तो प्राणी हो, जसलाई पेटभरि खाने अन्नको सञ्चय गरेर मात्र नपुगी परिवार र इष्टमित्रको लागि पनि पुग्ने गरी सञ्चय गर्न मन लाग्छ अनि असीमित सञ्चयको भुमरीमा परी ऊ आफ्नो सम्पूर्ण जीवनलाई बिताइदिन्छ। यी प्राणीहरूले अजिङ्गरको सन्तोषी वृत्तिबाट शिक्षा लिनु आवश्यक छ। विरक्त व्यक्तिले अजिङ्गर समान भई शान्त भावले रहनु उसको आलस्य एवं अकर्मण्यता होइन। यो त उसले इन्द्रिय, मन आदिको चञ्चलतालाई जितेको लक्षण हो। मनका अनन्त भोग-कामनाको वशमा परी व्यर्थका वस्तुको सङ्ग्रह अनि चिन्तनमा समय बिताउनु भन्दा यो राम्रो कुरा हो। श्लोकमा भनिएको छ– **शयानो वीतनिद्रश्च** अर्थात् निद्रा नहुँदा पनि साधकले सुतिरहनुपर्दछ। आफ्नो ज्ञानको प्रकाशमा पूर्णरूपले जागिरहेको साधक ढुक्कसँग सुत्छ। जब कि आफ्नो स्वरूपलाई नै थाहा नपाएका अज्ञानी प्राणीहरू चाहिँ अयथार्थ संसारमा रँगमगिनुलाई नै जागेको ठान्दछन्। जुन संसारको व्यवहारमा संसारी जागेका हुन्छन्, साधकका लागि त्यो रातबराबर हुन्छ। त्यसैले भनिन्छ– **यस्यां जाग्रति भूतानि सा निशा पश्यतो मुनेः** (श्रीमद्भगवद्गीता २।६९)। साधकले यही आदर्शलाई ग्रहण गर्नु पर्ने कुरा यहाँ अजिङ्गरको दृष्टान्तद्वारा देखाइएको छ।

**मुनिः प्रसन्नगम्भीरो दुर्विगाह्यो दुरत्ययः।**
**अनन्तपारो ह्यक्षोभ्यः स्तिमितोद इवार्णवः ॥ ५ ॥**

**पदार्थ—**
**हि** = निश्चय नै
**मुनिः** = साधकले
**स्तिमितोदः** = निश्चल जल भएको
**अर्णवः इव** = समुद्र झैं
**प्रसन्नगम्भीरः** = बाहिर प्रसन्न र भित्र गम्भीर हुनु
**दुर्विगाह्यः** = अरूले यस्तो भनेर निश्चय गर्न नसक्ने बन्नु र
**दुरत्ययः** = अरूद्वारा अलङ्घनीय तथा
**अनन्तपारः** = देश र कालको वशमा नपर्ने भई
**अक्षोभ्यः** = रागद्वेष आदि विकारले रहित बन्नू

**वाक्यार्थ—** साधक समुद्र जस्तो निश्चल एवं बाहिर प्रसन्न र भित्र गम्भीर बन्नुपर्दछ, अरूले यस्तो भनेर निश्चय गर्न नसक्ने बन्नुपर्छ, अलङ्घनीय हुनुपर्छ, देश र कालको वशमा पर्नु हुँदैन अनि रागद्वेष आदि विकारले रहित बन्नुपर्दछ।

**समृद्धकामो हीनो वा नारायणपरो मुनिः।**
**नोत्सर्पेत न शुष्येत सरिद्भिरिव सागरः॥ ६॥**

**पदार्थ—**
**सरिद्भिः** = नदीहरूद्वारा
**सागरः इव** = समुद्र झैं
**नारायणपरः** = भगवान्को चिन्तनमा लागेको
**मुनिः** = साधकले
**समृद्धकामः** = भोग प्राप्त हुँदा
**न उत्सर्पेत** = अतिशय सन्तुष्ट पनि नहोस् र
**हीनः वा** = भोग प्राप्त नहुँदा
**न शुष्येत** = शोक पनि नगरोस्

**वाक्यार्थ—** जसरी समुद्र नदीहरू बढेर आउँदा बढ्दा पनि बढ्दैन र नदीहरू घटेर आउँदा घट्दा पनि घट्दैन, त्यस्तै साधकले पनि सधैं भगवान्को चिन्तनमा लागी भोगप्राप्ति हुँदा अतिशय प्रसन्न पनि नहोस् र प्राप्त नहुँदा शोक पनि नगरोस्।

**विवरण—** यहाँ साधकले सागरबाट लिनुपर्ने शिक्षाको उपदेश गरिएको छ। यहाँ बताइए अनुसार साधकले **स्तिमितोद अर्णव इव** अर्थात् पानीका लहर शान्त भएको समुद्रसमान रहनुपर्दछ। समुद्रबाट साधकहरूले सिक्नुपर्ने धेरै गुणहरू छन्। समुद्र गम्भीर हुन्छ, यो अनन्त विस्तारमा फैलिएको अनि गहिरो हुन्छ। अनेकौं नदीको पानी निरन्तर मिसिँदा पनि यो बढ्दैन। यस्ता सबै स्वभावहरू साधकका लागि काम लाग्छन्। मुनिले समुद्र झैं गम्भीर स्वभावको हुनुपर्दछ, चुलबुले हुनुहुँदैन। अत्यन्त आवश्यक काममा मात्र बोल्ने गर्नुपर्दछ। जसरी समुद्रको गहिराइ नाप्न कठिन हुन्छ, त्यसै गरी साधक कति ज्ञानको गहिराइमा पुगेको छ भनेर पनि नाप्न नसकिने हुनुपर्दछ। समुद्रलाई सजिलै नाप्न नसके झैं साधक पनि कसैले अतिक्रमण, तिरस्कार आदि गर्न नसक्ने हुनुपर्दछ। सागरमा हुने सबैभन्दा राम्रो गुण हो, कहिल्यै घटीबढी नहुने। वर्षायाममा नदीमा पानीको वेग दसौं गुणा बढेको हुन्छ, तर ती सारा नदीहरूको पानी मिसिँदा पनि सागरको किनाराको तह उही हुन्छ। हिउँदमा सबै खहरे खोलाहरू सुक्छन्, अनि ठुला नदीहरू पनि अत्यन्त साना भएका हुन्छन्, तर समुद्र भने अलिकति पनि घट्दैन। साधकले पनि समुद्रसँग सुखदुःखमा समान रहने शिक्षा ग्रहण गर्नुपर्दछ।

**दृष्ट्वा स्त्रियं देवमायां तद्भावैरजितेन्द्रियः।**
**प्रलोभितः पतत्यन्धे तमस्यग्नौ पतङ्गवत्॥ ७॥**

**पदार्थ–**
**अजितेन्द्रियः** = इन्द्रियलाई जित्न नसकेको मानिस
**देवमायां** = भगवान्को मायासमान
**स्त्रियं** = स्त्रीलाई
**दृष्ट्वा** = देखेर
**तद्भावैः** = उसका हाउभाउ आदि विलासद्वारा
**प्रलोभितः** = मुग्ध भएर
**अग्नौ** = आगोमा
**पतङ्गवत्** = पुतली हामफाले झैँ
**अन्धे तमसि** = अन्धकारमय नरकमा
**पतति** = खस्दछ

**वाक्यार्थ–** अजितेन्द्रिय मानिस भगवान्को मायासमानका स्त्रीहरूलाई देखेर उसका हाउभाउ र विलासमा मुग्ध भई बत्तीमा पुतली होमिए झैँ होमिन्छ र अन्धकारमय नरकमा पर्दछ।

**योषिद्धिरण्याभरणाम्बरादिद्रव्येषु मायारचितेषु मूढः।**
**प्रलोभितात्मा ह्युपभोगबुद्ध्या पतङ्गवन्नश्यति नष्टदृष्टिः॥ ८॥**

**पदार्थ–**
**मायारचितेषु** = भगवान्को मायाद्वारा रचना गरिएका
**योषिद्धिरण्याभरणाम्बरादिद्रव्येषु** = स्त्री, सुनका गहना, वस्त्र आदि पदार्थहरूमा
**उपभोगबुद्ध्या** = यो मेरो भोगको साधन हो भन्ने बुद्धिले
**प्रलोभितात्मा** = आसक्त भएको
**नष्टदृष्टिः** = विवेकशून्य
**मूढः** = मूर्ख
**हि** = निश्चय नै
**पतङ्गवत्** = पुतली झैँ
**नश्यति** = नष्ट हुन्छ

**वाक्यार्थ–** जो मानिस भगवान्को मायाले बनेका स्त्री, सुनका गहना र वस्त्र आदि पदार्थमा उपभोगबुद्धिले आसक्त हुन्छ, त्यो विवेकशून्य मूर्ख हो, त्यो व्यक्ति पुतली झैँ नष्ट हुन्छ।

**विवरण–** यहाँ साधकले पुतलीबाट लिनुपर्ने शिक्षा बताइएको छ। पुतली रूपमा आसक्त भई मृत्युको मुखमा पुग्दछ भन्ने कुरा प्रसिद्ध नै छ। पुतली बलिरहेको आगोलाई टाढाबाट देखी त्यसको नजिक जान्छ र आगोले पोलेपछि ऊ मरिहाल्दछ। मनुष्यमा पनि सुन्दर रूपप्रतिको आकर्षण तीव्र हुन्छ। स्त्री-पुरुषबिचको रूपको आसक्तिले ती दुबैलाई वासनाको अँध्यारो मार्गमा पुऱ्याउँछ, जहाँ उनीहरूको जीवन दुर्घटित हुन सक्दछ। आफ्नो इन्द्रियलाई वशमा राख्न नसक्ने पुरुष राम्री स्त्रीलाई देखी त्यतातिर आसक्त हुन्छ, अनि उसलाई पाउन खोज्दछ। यो आसक्ति यति तीव्र हुन्छ कि व्यक्तिले आफ्नो परिवार, कर्तव्य, उद्देश्य आदि सबैलाई लात मारिदिन्छ। मान्यजनहरूप्रतिको आदर, सामाजिक सम्मान आदिलाई लत्याई एउटी स्त्रीको पछि लाग्नु जीवन नष्ट हुनु नै त हो। अवधूत भन्छन्– स्त्री, सम्पत्ति, गहना आदि यस्तै यस्तै मायिक पदार्थहरूको उपभोग गर्न खोज्दा तिनमा फसी व्यक्तिको विवेकबुद्धि नष्ट हुन्छ। विवेकी प्राणीको लागि यही नै सबैभन्दा ठुलो विनाश हो। त्यसैले भनिएको छ– **बुद्धिनाशात् प्रणश्यति** (भगवद्गीता २।६३) अर्थात् बुद्धि नष्ट भएपछि मानिस समाप्त हुन्छ। सामान्य व्यवहार गर्ने मानिसले त आफ्नो

विवेकलाई बचाउन स्त्री आदिमा आसक्ति गर्नुहुँदैन भने परमार्थपथको यात्री मुमुक्षुका लागि त यो सबैभन्दा बच्नुपर्ने चिज नै हो। त्यसैले यहाँ पुतलीको दृष्टान्त दिई मुमुक्षुलाई स्त्रीप्रतिको आकर्षणबाट टाढा रहन उपदेश गरिएको छ।

**स्तोकं स्तोकं ग्रसेद् ग्रासं देहो वर्तेत यावता।**
**गृहानहिंसन्नातिष्ठेद् वृत्तिं माधुकरीं मुनिः॥ ९॥**

**पदार्थ–**
**मुनिः** = साधकले
**यावता** = जति आहारले
**देहः** = शरीरलाई
**वर्तेत** = निर्वाह हुन्छ (त्यति)
**स्तोकं स्तोकं** = थोरै-थोरै
**ग्रासं** = आहार
**ग्रसेत्** = ग्रहण गरोस्
**गृहान्** = गृहस्थहरूलाई
**अहिंसन्** = पीडा नदिईकन
**माधुकरीं** = माहुरीको जस्तो
**वृत्तिं** = वृत्तिलाई
**आतिष्ठेत्** = अवलम्बन गरोस्

**वाक्यार्थ–** साधक मुनिले जति आहारले शरीरनिर्वाह हुन्छ, त्यति थोरै-थोरै आहार गरोस् र गृहस्थहरूलाई मर्का नपर्ने गरी माहुरीको जस्तो वृत्ति अवलम्बन गरोस्।

**विवरण–** यस श्लोकमा साधकले माहुरीबाट लिनुपर्ने शिक्षा बताइएको छ। विरक्त व्यक्तिले थोरै-थोरै खानुपर्दछ र हरेक छाक यसै गरी भिक्षान्नबाट निर्वाह गर्नुपर्दछ। माहुरीले अनेक फूलहरूबाट रस चुसे झैँ साधकले पनि घर-घरबाट भिक्षा लिनुपर्दछ। यद्यपि नीतिशास्त्रहरूमा माग्ने कामलाई राम्रो मानिएको छैन तर यो व्यवहार अवस्थाको कुरा हो। जसले वैराग्यपूर्वक सारा व्यवहारलाई त्यागिदिएका छन्, उनीहरूका लागि त भिक्षा माग्नु नै शोभा हो, सङ्ग्रह गर्नु शोभा होइन। त्यसैले उपनिषद्मा भनिएको छ– **पुत्रैषणायाश्च वित्तैषणायाश्च लोकैषणायाश्च व्युत्थायाथ भिक्षाचर्यां चरन्ति** (बृहदारण्यकोपनिषद् ३।५।१) अर्थात् पुत्र, सम्पत्ति र कीर्ति आदि तीनै विषयको इच्छालाई त्यागिदिएका व्यक्तिहरू संसारको मोहबाट जागी भिक्षा माग्दै जीवन बिताउँछन्। यहाँ भनिएको छ– **गृहान् अहिंसन्** अर्थात् गृहस्थहरूलाई पीडा नदिईकन वा भार नपर्ने गरी भिक्षायाचन गर्नुपर्दछ। शास्त्रहरूमा गृहस्थहरूकहाँ पाकेको भोजनमा संन्यासी र ब्रह्मचारीको स्वतः अधिकार हुन्छ भनिएको छ– **यतिश्च ब्रह्मचारी च पक्वान्नस्वामिनौ उभौ** अर्थात् संन्यासी र ब्रह्मचारी घरमा आफूलाई भनेर पकाएको अन्नका अधिकारी हुन्। त्यसैले उनीहरूलाई पाकेकै भोजन दिनुपर्दछ। यस्तो अवस्थामा कुनै संन्यासी एउटै मात्र घरमा गइरह्यो भने त्यसलाई भार पर्न जान्छ, त्यसैले छाकपिच्छे घर फेरी-फेरी भिक्षा लिनुपर्दछ। एकै ठाउँमा आसक्ति गरिरहँदा ऊ भँवरा नष्ट भए झैँ नष्ट हुन्छ। भँवरा कमलको सौन्दर्यलाई देखी त्यहाँभित्र पस्छ र त्यसलाई प्वाल पार्न सक्ने हुँदाहुँदै पनि उज्यालो भई फूल फुलेपछि म बाहिर निस्कुँला भन्ने सोच्दछ तर प्रातःकालमा नै हात्तीले आई उसलाई खाइदिन्छ। यो आसक्तिको परिणाम हो। संन्यासीले पनि भँवराले कमलको फूलमा आसक्ति गर्नाले उसको दुरवस्था भएको बुझी एउटै घरमा आसक्तिवश भिक्षायाचन गर्नु हुँदैन।

**अणुभ्यश्च महद्भ्यश्च शास्त्रेभ्यः कुशलो नरः।**
**सर्वतः सारमादद्यात् पुष्पेभ्य इव षट्पदः॥ १०॥**

**पदार्थ—**
**कुशलः** = विवेकी
**नरः** = मानिसले
**पुष्पेभ्यः** = फूलहरूबाट
**षट्पदः इव** = भँवराले झैँ
**अणुभ्यः च** = साना-साना र
**महद्भ्यः च** = ठुला-ठुला
**सर्वतः** = सबै
**शास्त्रेभ्यः** = शास्त्रहरूबाट
**सारं** = सार वस्तुलाई
**आदद्यात्** = ग्रहण गरोस्

**वाक्यार्थ—** विवेकी मानिसले फूलहरूबाट भँवराले रस ग्रहण गरे झैँ ठुला र साना सबैखाले शास्त्रहरूबाट सारभूत वस्तुलाई ग्रहण गरोस्।

**सायन्तनं श्वस्तनं वा न सङ्गृह्णीत भिक्षितम्।**
**पाणिपात्रोदरामत्रो मक्षिकेव न सङ्ग्रही॥ ११॥**

**पदार्थ—**
**सायन्तनं** = बेलुकाको लागि र
**श्वस्तनं वा** = भोलिको लागि भनेर
**भिक्षितं** = भिक्षान्नलाई
**न सङ्गृह्णीत** = सङ्ग्रह नगरोस्
**पाणिपात्रोदरामत्रः** = हातलाई भोजन गर्ने भाँडो र पेटलाई अन्न राख्ने भाँडो बनाओस् अनि
**मक्षिका इव** = माहुरी झैँ
**सङ्ग्रही** = सङ्ग्रह गर्ने
**न** = नहोस्

**वाक्यार्थ—** बेलुका र भोलिका लागि भनेर भिक्षा अन्नलाई सङ्ग्रह नगरोस्। हातलाई भोजन गर्ने भाँडो र पेटलाई अन्न राख्ने भाँडो बनाओस् तर माहुरी जस्तो सङ्ग्रह गर्ने नबनोस्।

**सायन्तनं श्वस्तनं वा न सङ्गृह्णीत भिक्षुकः।**
**मक्षिका इव सङ्गृह्णन् सह तेन विनश्यति॥ १२॥**

**पदार्थ—**
**भिक्षुकः** = भिक्षुले
**सायन्तनं** = बेलुकाको लागि
**श्वस्तनं वा** = अथवा भोलिको लागि भनेर
**न सङ्गृह्णीत** = सङ्ग्रह नगरोस्
**मक्षिका इव** = माहुरी झैँ
**सङ्गृह्णन्** = सङ्ग्रह गर्दागर्दै (त्यो भिक्षु)
**तेन सह** = त्यही भिक्षान्न सँगसँगै
**विनश्यति** = नष्ट हुन्छ

**वाक्यार्थ—** भिक्षुले बेलुकाको लागि वा भोलिको लागि भनेर सङ्ग्रह नगरोस्। माहुरी झैँ सङ्ग्रह गर्दा गर्दै त्यो भिक्षु भिक्षासँगसँगै नष्ट हुन्छ।

**पदापि युवतीं भिक्षुर्न स्पृशेद् दारवीमपि।**
**स्पृशन् करीव बध्येत करिण्या अङ्गसङ्गतः॥ १३॥**

**पदार्थ—**
**भिक्षुः** = संन्यासीले
**पदा अपि** = खुट्टाले पनि

**दारवीम् अपि** = काठको पनि
**युवतीं** = युवतीलाई
**न स्पृशेत्** = नछोओस्
**स्पृशन्** = यदि छोयो भने
**करिण्याः** = हत्तीनीको
**अङ्गसङ्गतः** = अङ्गको स्पर्शले
**करी इव** = हात्ती झैं
**बध्येत** = बाँधिन्छ

**वाक्यार्थ–** संन्यासीले कहिल्यै खुट्टाले पनि मानिसको त के कुरा, काठको युवतीलाई समेत स्पर्शसम्म पनि नगरोस्। यदि स्पर्श गर्दछ भने हत्तिनीको स्पर्शले हात्ती बन्धनमा परे झैं ऊ बन्धनमा पर्दछ।

**नाधिगच्छेत् स्त्रियं प्राज्ञः कर्हिचिन्मृत्युमात्मनः।**
**बलाधिकैः स हन्येत गजैरन्यैर्गजो यथा ॥ १४ ॥**

**पदार्थ–**
**प्राज्ञः** = विवेकीले
**आत्मनः** = आफ्नो
**मृत्युं** = मृत्युसमानकी
**स्त्रियं** = स्त्रीलाई
**कर्हिचित्** = कहिल्यै पनि
**न अधिगच्छेत्** = भोग्यरूपले स्वीकार नगरोस् (यदि गर्‍यो भने)
**सः** = त्यो व्यक्ति
**बलाधिकैः** = धेरै बलिया
**अन्यैः** = अरू
**गजैः** = हात्तीहरूद्वारा
**गजः यथा** = हात्ती मारिए झैं
**हन्येत** = (बलशाली अरूद्वारा) मारिनेछ

**वाक्यार्थ–** विवेकी व्यक्तिले आफ्नो मृत्युसमानकी स्त्रीलाई कहिल्यै पनि भोग्यरूपले स्वीकार नगरोस्। यदि स्वीकार गर्‍यो भने बलशाली अरू हात्तीद्वारा कुनै हात्ती मारिए झैं त्यो व्यक्ति पनि बलशाली अरूद्वारा मारिनेछ।

**न देयं नोपभोग्यं च लुब्धैर्यद् दुःखसञ्चितम्।**
**भुङ्क्ते तदपि तच्चान्यो मधुहेवार्थविन्मधु ॥ १५ ॥**

**पदार्थ–**
**लुब्धैः** = लोभी मानिसद्वारा
**दुःखसञ्चितं** = दुःखपूर्वक सञ्चय गरिएको धन
**न देयं** = न दानको योग्य
**न च उपभोग्यं** = न त उपभोगयोग्य
**यत्** = जो धन छ
**तत्** = त्यो
**अर्थवित्** = मह काढ्न जान्ने
**मधुहा** = मह झिक्ने व्यक्तिले
**मधु इव** = मह उपभोग गरे झैं
**तत् अपि** = त्यो धनलाई पनि
**अन्यः** = अर्कैले
**भुङ्क्ते** = भोग गर्दछ

**वाक्यार्थ–** लोभी व्यक्तिहरू खुब दुःख गरेर धन कमाउँछन् र दान एवं भोग नगरी राख्दछन्, तर त्यो धनलाई मह काढ्ने तरिका जानेकाले मह हरण गरे झैं अर्को कुनै व्यक्तिले उपभोग गर्दछ।

**सुदुःखोपार्जितैर्वित्तैराशासानां गृहाशिषः।**
**मधुहेवाग्रतो भुङ्क्ते यतिर्वै गृहमेधिनाम् ॥ १६ ॥**

**पदार्थ—**

**सुदुःखोपार्जितैः** = बेसरी दुःख गरेर कमाएका
**वित्तैः** = सम्पत्तिहरूद्वारा
**गृहाशिषः** = गृहस्थमा विषयभोगको
**आशासानां** = कामना गरिरहेका
**गृहमेधिनां** = गृहस्थहरूको भोगलाई
**अग्रतः** = पहिले नै
**वै** = निश्चय नै
**मधुहा इव** = मह काढ्नेले झैँ
**यतिः** = संन्यासीहरूले
**भुङ्क्ते** = भोग गर्दछ

**वाक्यार्थ—** जसरी मह काढ्ने व्यक्तिले माहुरीहरूले भन्दा पहिले नै उनीहरूले दुःखले आर्जन गरेको महलाई उपभोग गर्दछ त्यस्तै संन्यासीले पनि गृहस्थहरूले दुःखपूर्वक कमाएर भोग गर्न ठिक पारेका भोगहरूलाई पहिले नै भोग गर्दछ।

**ग्राम्यगीतं न शृणुयाद् यतिर्वनचरः क्वचित्।**
**शिक्षेत हरिणाद् बद्धान्मृगयोर्गीतमोहितात्॥ १७ ॥**

**पदार्थ—**

**वनचरः** = वनमा बस्ने
**यतिः** = संन्यासीले
**क्वचित्** = कहिल्यै पनि
**ग्राम्यगीतं** = विषयीहरूले गाउने गीत
**न शृणुयात्** = नसुनोस् (यस्तो कुरा)
**मृगयोः** = व्याधाको
**गीतमोहितात्** = गीतबाट मुग्ध भएर
**बद्धात्** = बन्धनमा परेको
**हरिणात्** = मृगबाट
**शिक्षेत** = सिकोस्

**वाक्यार्थ—** वनमा बस्ने संन्यासीले विषयीहरूले गाउने प्रणयगीत कहिल्यै नसुनोस्, यो शिक्षा व्याधाको गीतमा मुग्ध भएर बन्धनमा परेको मृगबाट सिकोस्।

**नृत्यवादित्रगीतानि जुषन् ग्राम्याणि योषिताम्।**
**आसां क्रीडनको वश्य ऋष्यशृङ्गो मृगीसुतः॥ १८ ॥**

**पदार्थ—**

**योषितां** = स्त्रीहरूको
**ग्राम्याणि** = कामोद्दीपक
**नृत्यवादित्रगीतानि** = नाच्ने, बजाउने, गाउने आदि क्रियाकलापहरूलाई
**जुषन्** = उपभोग गरेर
**मृगीसुतः** = हरिणीपुत्र
**ऋष्यशृङ्गः** = ऋषि ऋष्यशृङ्ग
**आसां** = यी स्त्रीहरूको
**वश्यः** = वशीभूत
**क्रीडनकः** = खेलौना भए

**वाक्यार्थ—** स्त्रीहरूको कामना बढाउने गान, बजान आदिलाई उपभोग गरेर हरिणीका पुत्र ऋष्यशृङ्ग स्त्रीहरूका वशीभूत खेलौना भएका थिए।

**जिह्वयातिप्रमाथिन्या जनो रसविमोहितः।**
**मृत्युमृच्छत्यसद्बुद्धिर्मीनस्तु बडिशैर्यथा॥ १९ ॥**

**पदार्थ—**

**अतिप्रमाथिन्या** = अति दुःख दिने

**जिह्वया** = जिब्रोबाट
**रसविमोहितः** = रसमा मोहित भएको
**असद्बुद्धिः** = मूर्ख
**जनः तु** = व्यक्ति त
**बडिशैः** = बल्छीद्वारा
**मीनः यथा** = माछोले झैं
**मृत्युं** = मृत्युलाई
**ऋच्छति** = प्राप्त गर्दछ

**वाक्यार्थ–** जसरी अति दुःख दिने जिब्रोको कारणले रसमा मोहित भएर माछोले बल्छीद्वारा मृत्युलाई प्राप्त गर्दछ त्यस्तै जिब्रोको वशमा रहेको व्यक्तिले पनि मृत्युलाई प्राप्त गर्दछ।

**इन्द्रियाणि जयन्त्याशु निराहारा मनीषिणः।**
**वर्जयित्वा तु रसनं तन्निरन्नस्य वर्धते॥ २०॥**

**पदार्थ–**
**रसनं** = जिब्रोलाई
**वर्जयित्वा** = छाडेर
**निराहाराः** = आहाररहित
**मनीषिणः तु** = धीर साधकहरूले त
**इन्द्रियाणि** = अरू इन्द्रियहरूलाई
**आशु** = चाँडै नै
**जयन्ति** = वशमा राख्दछन् (तर जिब्रोलाई सक्दैनन् किनभने)
**तत्** = त्यो रसनेन्द्रिय
**निरन्नस्य** = आहाररहित व्यक्तिको
**वर्धते** = रुन् प्रबल हुन्छ

**वाक्यार्थ–** आहाररहित धीर साधकहरूले अरू सबै इन्द्रियहरूलाई त सजिलै चाँडै नै आफ्नो वशमा राख्दछन्, तर जिब्रोलाई वशमा राख्न सक्दैनन् किनभने आहाररहित व्यक्तिको पनि रसनेन्द्रिय रुन् प्रबल हुन्छ।

**तावज्जितेन्द्रियो न स्याद् विजितान्येन्द्रियः पुमान्।**
**न जयेद् रसनं यावज्जितं सर्वं जिते रसे॥ २१॥**

**पदार्थ–**
**विजितान्येन्द्रियः** = अरू इन्द्रियलाई जितिसकेको
**पुमान्** = मानिसले
**यावत्** = जहिलेसम्म
**रसनं** = रसनेन्द्रियलाई
**न जयेत्** = जित्दैन
**तावत्** = तबसम्म
**जितेन्द्रियः** = जितेन्द्रिय
**न स्यात्** = बन्न सक्दैन
**रसे** = रसनेन्द्रियलाई
**जिते** = जितिसकेपछि
**सर्वं** = सबै इन्द्रियहरू
**जितम्** = जितिएका हुन्छन्

**वाक्यार्थ–** मानिसले अरू इन्द्रियहरूलाई वशमा राखे पनि जबसम्म रसनेन्द्रियलाई जित्दैन, तबसम्म ऊ जितेन्द्रिय बन्दैन। तर जब उसले रसनेन्द्रियलाई जित्छ, त्यसपछि उसले सबै इन्द्रियलाई जितेको ठहर्छ।

**विवरण–** यहाँ साधकले रसनेन्द्रिय जित्नुपर्ने शिक्षा माछाहरूबाट लिनुपर्ने बताइएको छ। माछाले खाने कुरामा आसक्ति गर्नाले उसको मृत्यु हुन्छ। जिब्रोका रसासक्तिका कारण उसले अङ्कुश उनिएको गँड्यौला आदिलाई खाँदा त्यहाँ अड्किन्छ र उसको मृत्यु हुन्छ। रसास्वादको मोहमा फसेको व्यक्ति पनि यसै गरी नष्ट हुन्छ। जिब्रो अत्यन्त प्रबल इन्द्रिय हो, अध्यात्ममार्गमा लागेका व्यक्तिलाई त्यहाँबाट पतन गराउन सक्ने इन्द्रियको नाम लिँदा शास्त्रहरूमा बारम्बार जिब्रो र

उपस्थको नाम आएको छ। सबै मानिसहरू रसासक्तिबाट पिरोलिएका हुन्छन्। विरक्त व्यक्तिहरूलाई पनि यसको नियन्त्रण गर्न कठिन छ। त्यसैले श्लोकमा भनिएको छ— अरू इन्द्रियहरूको नियन्त्रण गर्नलाई ती-ती विषयको भोग नगरिदिए हुन्छ, तर जिब्रोको चाहिँ विषयभोग नगरी जति यसको नियन्त्रण गर्न खोज्यो त्यति-त्यति भोगवासना बढ्दै जान्छ। यसैकारणले अरू सारा इन्द्रियहरूलाई जिते पनि यदि जिब्रोलाई नियन्त्रण गर्न सकेको छैन भने त्यो व्यक्ति इन्द्रियजयी हुँदैन भनिएको छ र जिब्रोलाई जित्यो भने सबै इन्द्रिय जितेको हुन्छ भनिएको छ। यही रसास्वादकै चक्करमा परी मानिसहरू जीवनको धेरै समय खर्च गर्दछन्। भोकलाई मेट्नेभन्दा पनि आज कुन चाहिँ नयाँ वस्तु खाने भन्नेमा मानिसहरूको चिन्तन अनि प्रतिस्पर्धा हुन्छ। साधकले यो व्यर्थको मोहमा फस्नै हुँदैन। शास्त्रमा त यहाँसम्म भनिएको छ कि ब्रह्मचर्य व्रतलाई त्याग्ने ब्रह्मचारी, कर्मविधिलाई त्याग्ने गृहस्थ, एकान्तसेवन आदि तपस्या छाड्ने वानप्रस्थ अनि **इन्द्रियलौल्य** अर्थात् रसासक्ति गर्ने संन्यासी यी सबै ती-ती आश्रमका कलङ्क हुन्— **आश्रमापसदाः ह्येते खल्वाश्रमविदूषकाः** अर्थात् यी अधम आश्रमीहरूले आ-आफ्नो आश्रमको मर्यादालाई नै दूषित बनाइदिन्छन्। यसरी संन्यासीले कुनै हालतमा रसासक्ति गर्न नहुनेमा शास्त्रमा बारम्बार जोड दिइएको छ र यहाँ पनि अरू इन्द्रियको जयभन्दा रसनेन्द्रियको विजयलाई महत्त्व दिई यही कुरा बताइएको छ।

**पिङ्गला नाम वेश्यासीद् विदेहनगरे पुरा।**
**तस्या मे शिक्षितं किञ्चिन्निबोध नृपनन्दन॥ २२॥**

**पदार्थ—**

**पुरा** = पहिले
**विदेहनगरे** = मिथिला सहरमा
**पिङ्गला नाम** = पिङ्गला नामकी
**वेश्या** = वेश्या
**आसीत्** = थिई
**नृपनन्दन** = हे राजपुत्र यदु
**तस्याः** = उसबाट
**मे** = मैले
**किञ्चित्** = केही
**शिक्षितं** = सिकेँ (त्यो)
**निबोध** = सुन्नुहोस्

**वाक्यार्थ—** हे राजपुत्र यदु ! पहिला मिथिला सहरमा पिङ्गला नामकी एउटी वेश्या थिई। उसबाट मैले जे सिकेँ त्यो सुन्नुहोस्।

**सा स्वैरिण्येकदा कान्तं सङ्केत उपनेष्यती।**
**अभूत् काले बहिर्द्वारि बिभ्रती रूपमुत्तमम्॥ २३॥**

**पदार्थ—**

**एकदा** = एक दिन
**कान्तं** = धन दिने सुन्दर पुरुषलाई
**सङ्केते** = एकान्त स्थानमा
**उपनेष्यती** = लैजान लागेकी
**सा** = त्यो
**स्वैरिणी** = वेश्या
**उत्तमं** = अतिसुन्दर
**रूपं** = रूपलाई
**बिभ्रती** = धारण गरेर
**काले** = रातको समयमा
**बहिः** = बाहिर
**द्वारि** = ढोकामा
**अभूत्** = बसी

**वाक्यार्थ–** एकदिन त्यो पिङ्गला नामकी वेश्या धन दिने सुन्दर पुरुषलाई एकान्त स्थानमा लैजानको लागि सुन्दर रूप धारण गरेर रातको समयमा घरको ढोकाबाहिर कुरेर बसी।

**मार्ग आगच्छतो वीक्ष्य पुरुषान् पुरुषर्षभ।**
**ताञ्छुल्कदान् वित्तवतः कान्तान् मेनेऽर्थकामुका॥ २४॥**

**पदार्थ–**
**पुरुषर्षभ** = हे श्रेष्ठ पुरुष
**अर्थकामुका** = पैसा चाहने त्यो वेश्या
**मार्गे** = बाटोमा
**आगच्छतः** = आउने
**पुरुषान्** = पुरुषहरूलाई
**वीक्ष्य** = देखेर
**तान्** = तिनीहरूलाई
**वित्तवतः** = धनवान् र
**शुल्कदान्** = धन दिएर रतिक्रीडा गर्ने
**कान्तान्** = प्रिय ग्राहकको रूपमा
**मेने** = मान्थी

**वाक्यार्थ–** हे पुरुषश्रेष्ठ ! पैसा चाहने त्यो पिङ्गला वेश्याले बाटोमा आउने पुरुषहरूलाई देखेर यो धनवाला र धन दिएर रति गर्ने प्रिय पुरुष हो भन्ठान्थी।

**आगतेष्वपयातेषु सा सङ्केतोपजीविनी।**
**अप्यन्यो वित्तवान् कोऽपि मामुपैष्यति भूरिदः॥ २५॥**

**पदार्थ–**
**सङ्केतोपजीविनी** = पुरुषलाई एकान्तमा लगेर उसको धनबाट जीवन चलाउने
**सा** = त्यो वेश्या
**आगतेषु** = आएका पुरुषहरू
**अपयातेषु** = गएपछि (फेरि)
**अन्यः अपि** = अर्को पनि
**कः अपि** = कुनै
**वित्तवान्** = धनवान् र
**भूरिदः** = धेरै धन दिने व्यक्ति
**मां** = मेरै
**उपैष्यति** = नजिक आउला (भनेर चिन्तन गर्दथी)

**वाक्यार्थ–** पुरुषलाई एकान्तमा लगी उसबाट धन लिएर जीविका गर्ने वेश्या पिङ्गलाले आएका पुरुषहरू गएपछि फेरि अरू-अरू धनी र धन दिने पुरुषको अपेक्षा गर्दै चिन्तन गर्न लाग्थी।

**एवं दुराशया ध्वस्तनिद्रा द्वार्यवलम्बती।**
**निर्गच्छन्ती प्रविशती निशीथं समपद्यत॥ २६॥**

**पदार्थ–**
**एवं** = यसरी
**दुराशया** = खराब आशाले
**ध्वस्तनिद्रा** = निद्रा बिग्रिएकी
**द्वारि** = ढोकामा
**अवलम्बती** = बसिरहेकी वेश्या
**निर्गच्छन्ती** = बाहिर निस्कँदै र
**प्रविशती** = भित्र पस्दै
**निशीथं** = आधारातको समय
**समपद्यत** = भयो

**वाक्यार्थ–** यसै गरी आशै आशाले कुर्दा निद्रा बिग्रिएकी, ढोकामा बस्दै कहिले बाहिर आउँदै र कहिले भित्र जाँदै गर्दा आधा रात भयो।

**तस्या वित्ताशया शुष्यद्वक्त्राया दीनचेतसः।**

**निर्वेदः परमो जज्ञे चिन्ताहेतुः सुखावहः॥ २७॥**

| पदार्थ– | **तस्याः** = त्यो वेश्याको मनमा | **परमः** = उत्तम |
|---|---|---|
| **वित्ताशया** = पैसाको आशाले | **चिन्ताहेतुः** = विचारको कारण | **निर्वेदः** = वैराग्य |
| **शुष्यद्वक्त्रायाः** = मुख सुकेकी | **सुखावहः** = परिणाममा सुख | **जज्ञे** = उत्पन्न भयो |
| **दीनचेतसः** = दीनचित्त भएकी | दिने | |

**वाक्यार्थ–** पैसाको आशाले ओठमुख सुकेकी र दीनहीन चित्त भएकी त्यो वेश्यालाई विचारको मूल कारण, परिणाममा सुख दिने उत्तम प्रकारको वैराग्य उत्पन्न भयो।

**तस्या निर्विण्णचित्ताया गीतं शृणु यथा मम।**

**निर्वेद आशापाशानां पुरुषस्य यथा ह्यसिः॥ २८॥**

| पदार्थ– | **यथा** = जस्ताको तस्तै | **असिः यथा** = तरबार जस्तै |
|---|---|---|
| **तस्याः** = त्यो | **मम** = मबाट | **पुरुषस्य** = मानिसको |
| **निर्विण्णचित्तायाः** = विरक्त चित्त | **शृणु** = सुन्नुहोस् | **आशापाशानाम्** = आशारूपी |
| भएकी पिङ्गलाको | **हि** = निश्चय नै | बन्धनलाई काट्नेवाला बन्दछ |
| **गीतं** = गीत | **निर्वेदः** = वैराग्य | |

**वाक्यार्थ–** विरक्त चित्त भएकी त्यो पिङ्गलाको गीत मबाट सुन्नुहोस् किनभने वैराग्यले तरबारले झैँ मानिसको आशारूपी बन्धनलाई काट्दछ।

**न ह्यङ्गाजातनिर्वेदो देहबन्धं जिहासति।**

**यथा विज्ञानरहितो मनुजो ममतां नृप॥ २९॥**

| पदार्थ– | **मनुजः** = मानिसले | **देहबन्धं** = शरीरको बन्धनरूपी |
|---|---|---|
| **अङ्ग** = हे प्रिय | **ममतां यथा** = ममतालाई झैँ | आशापाशलाई |
| **नृप** = राजा | **अजातनिर्वेदः** = वैराग्यरहित | **हि** = निश्चय नै |
| **विज्ञानरहितः** = अज्ञानी | मानिसले | **न जिहासति** = छाड्न सक्दैन |

**वाक्यार्थ–** हे प्रिय राजा ! जसरी अज्ञानी मानिसले ममतालाई छाड्न सक्दैन, त्यस्तै वैराग्यरहित मानिसले पनि आशारूपी पाशलाई छाड्न सक्दैन।

**पिङ्गलोवाच** (पिङ्गलाले भनी)

**अहो मे मोहविततिं पश्यताविजितात्मनः।**

**या कान्तादसतः कामं कामये येन बालिशा॥ ३०॥**

**पदार्थ—**
**अहो** = अहो !
**अविजितात्मनः** = आफ्नो चित्तलाई वशमा राख्न नसकेका
**मे** = मेरा
**मोहविततिं** = मोहको विस्तारलाई
**पश्यत** = हेर
**येन** = जुन मोहले
**बालिशा** = मूर्ख भएकी
**या** = जो म छु
**असतः** = तुच्छ
**कान्तात्** = पुरुषहरूबाट
**कामं** = विषयसुखको
**कामये** = अभिलाषा गर्दछु

**वाक्यार्थ—** अहो ! आफ्नो चित्तलाई वशमा राख्न नसकेकी मेरो अज्ञानको विस्तारलाई हेर, जुन अज्ञानको कारणले गर्दा मूर्ख मैले यी तुच्छ पुरुषहरूबाट विषयसुखको अभिलाषा गरें।

**सन्तं समीपे रमणं रतिप्रदं वित्तप्रदं नित्यमिमं विहाय ।**
**अकामदं दुःखभयाधिशोकमोहप्रदं तुच्छमहं भजेऽज्ञा ॥ ३१ ॥**

**पदार्थ—**
**रतिप्रदं** = सुख दिने
**वित्तप्रदं** = धन पनि दिने
**नित्यं** = कहिल्यै नाश नहुने
**इमं** = यो
**समीपे** = हृदयमा
**सन्तं** = रहेको
**रमणं** = आनन्दरूप पति भगवान्लाई
**विहाय** = छाडेर
**अज्ञा** = मूर्ख
**अहं** = मैले
**अकामदं** = भोग दिन नसक्ने
**दुःखभयाधिशोकमोहप्रदं** = दुःख, डर, मानसिक कष्ट, शोक र मोह दिने
**तुच्छं** = विनाशी पुरुषलाई
**भजे** = सेवन गरें

**वाक्यार्थ—** म मूर्ख हुँ किनभने मैले सुख दिने, धन पनि दिने, कहिल्यै नाश नहुने र आफ्नै हृदयमा वास गर्ने परमात्मारूप वास्तविक पतिलाई छाडेर यथेष्ट भोग दिन नसक्ने केवल दुःख, डर, मानसिक कष्ट, शोक र मोह दिने विनाशी मानिसहरूको सेवा गरें।

**अहो मयात्मा परितापितो वृथा साङ्केत्यवृत्त्यातिविगर्ह्यवार्तया ।**
**स्त्रैणान्नराद् यार्थतृषोऽनुशोच्यात् क्रीतेन वित्तं रतिमात्मनेच्छती ॥ ३२ ॥**

**पदार्थ—**
**अहो** = अहो
**या** = जो म
**स्त्रैणात्** = स्त्रीलम्पट मूर्ख
**अर्थतृषः** = धन आदिको लोभी
**अनुशोच्यात्** = रोग आदिले व्याकुल हुने भएकाले नष्ट हुने
**नरात्** = मनुष्यबाट
**क्रीतेन** = धन आदिद्वारा किनिएको
**आत्मना** = शरीरबाट
**वित्तं** = धन र
**रतिं च** = सुख पनि
**इच्छती** = चाहँदै
**साङ्केत्यवृत्त्या** = परपुरुषको संसर्गबाट नै जीवन चलाउने
**मया** = मद्वारा
**अतिविगर्ह्यवार्तया** = अति निन्दनीय कर्मले
**आत्मा** = मनलाई
**वृथा** = बेकारमा
**परितापितः** = दुःख दिइयो

**वाक्यार्थ—** अहो ज्यादै दुःखको कुरो हो ! मैले स्त्रीलम्पट मूर्ख, धन आदिको लोभी र विनाशी मनुष्यबाट किनिएको शरीरबाट धन र सुखलाई चाहँदै परपुरुषको संसर्गबाटै जीविका चलाई अति

निन्दनीय काम गरेर मनलाई बेकारमा सन्तप्त पारेँ।

**यदस्थिभिर्निर्मितवंशवंस्यस्थूणं त्वचा रोमनखैः पिनद्धम्।**
**क्षरन्नवद्वारमगारमेतद् विण्मूत्रपूर्णं मदुपैति कान्या ॥ ३३ ॥**

**पदार्थ–**
**यत्** = जो
**अस्थिभिः** = हड्डीहरूद्वारा
**निर्मितवंशवंस्यस्थूणं** = डाँडा, भाटा, खम्बा आदि तयार पारिएको
**त्वचा** = छाला र
**रोमनखैः** = रौँ तथा नङहरूद्वारा
**पिनद्धं** = ढाकिएको
**क्षरन्नवद्वारं** = नौ ओटा ढोकाबाट मल निस्किरहेको
**अगारं** = यो शरीररूपी घर
**विण्मूत्रपूर्णं** = मल र मूत्रले भरिएको छ
**एतत्** = यस्तो, यो शरीरलाई
**मत्** = मदेखि
**अन्या** = अर्की
**का** = को मूर्खले (पतिको रूपमा)
**उपैति** = सेवन गर्ली

**वाक्यार्थ–** यो शरीर एउटा घर हो, जहाँ हड्डीबाट बनेका डाँडा, भाटा, खम्बा आदि छन्, छाला र रौँ, नङ आदिको छानो छ, निरन्तर नौ ओटा ढोकाबाट मलहरू निस्किरहेका छन्, यस्तो मल र मूत्रले भरिएको शरीरलाई बाहेक को अर्की मूर्खले पतिको रूपमा सेवन गर्ली ?

**विदेहानां पुरे ह्यस्मिन्नहमेकैव मूढधीः।**
**यान्यमिच्छन्त्यसत्यस्मादात्मदात् काममच्युतात्॥ ३४ ॥**

**पदार्थ–**
**विदेहानां** = ज्ञानी मिथिला-वासीहरूको
**अस्मिन्** = यो
**पुरे** = नगरीमा
**अहं** = म
**एका एव** = एक्लै
**मूढधीः** = मूर्ख रहेछु
**हिं** = किनभने
**या** = जो म
**असती** = दुष्टाले
**अस्मात्** = यो हृदयमा रहेको
**आत्मदात्** = आफैँलाई पनि दिने
**अच्युतात्** = भगवान् अच्युतभन्दा
**अन्यं** = अर्को
**कामं** = विषयलाई
**इच्छन्ती** = चाहँदैछु

**वाक्यार्थ–** यो मिथिला नगरीमा म एक्लै मूर्ख रहेछु, जो मैले आफूभित्रै रहेको आत्मस्वरूपको ज्ञान पनि दिने भगवान्लाई छाडेर अरू विषयलाई चाहेँ।

**सुहृत् प्रेष्ठतमो नाथ आत्मा चायं शरीरिणाम्।**
**तं विक्रीयात्मनैवाहं रमेऽनेन यथा रमा ॥ ३५ ॥**

**पदार्थ–**
**अयं** = यी भगवान्
**शरीरिणां** = प्राणीहरूका
**सुहृत्** = हितकारी
**प्रेष्ठतमः** = अत्यन्त प्रिय
**नाथः** = स्वामी र
**आत्मा च** = नियन्ता पनि हुनुहुन्छ त्यसैले
**तं** = उहाँलाई
**आत्मना एव** = आफ्नो समर्पणद्वारा नै
**विक्रीय** = आफ्नो वशमा राखी

**अनेन** = ऊहाँसँग
**रमा यथा** = लक्ष्मी झैँ
**अहं** = म पनि
**रमे** = रमण गर्दछु

**वाक्यार्थ–** भगवान् सम्पूर्ण प्राणीहरूको हितकारी अत्यन्त प्रिय, स्वामी र नियामक पनि हुनुहुन्छ, यसैले उहाँलाई आफूलाई नै समर्पण गरिदिएर आफ्नो वशमा ल्याउँछु र लक्ष्मीले झैँ मैले पनि उहाँसँग रमण गर्दछु।

**कियत् प्रियं ते व्यभजन् कामा ये कामदा नराः।**
**आद्यन्तवन्तो भार्याया देवा वा कालविद्रुताः॥ ३६॥**

**पदार्थ–**
**ये** = जो
**आद्यन्तवन्तः** = उत्पत्ति-विनाशशील
**कालविद्रुताः** = कालद्वारा हरिने
**ते** = ती
**कामाः** = विषयहरू र
**कामदाः** = ती विषयहरूलाई पूरा गरिदिने
**नराः** = मनुष्यहरू र
**देवाः वा** = अथवा देवताहरूले पनि
**भार्यायाः** = आफ्नी पत्नीको
**कियत्** = कति
**प्रियं** = उपकार
**व्यभजन्** = गरे

**वाक्यार्थ–** जो आफैँमा उत्पत्ति र नाशवान् छन्, कालद्वारा हरिने छन्, त्यस्ता विषयहरू, ती विषयहरूलाई पूरा गरिदिने मनुष्यहरू र देवताहरूले पनि आफ्नी पत्नीलाई कति उपकार गरे र ?

**नूनं मे भगवान् प्रीतो विष्णुः केनापि कर्मणा।**
**निर्वेदोऽयं दुराशाया यन्मे जातः सुखावहः॥ ३७॥**

**पदार्थ–**
**दुराशायाः** = निराश भएकी
**मे** = मेरो
**अयं** = यो
**सुखावहः** = सुख दिने
**यत्** = जो
**निर्वेदः** = वैराग्य
**जातः** = उत्पन्न भयो (त्यसैले)
**नूनं** = निश्चय नै
**मे** = ममाथि
**केन अपि** = कुनै न कुनै
**कर्मणा** = कर्मले
**भगवान् विष्णुः** = भगवान् नारायण
**प्रीतः** = प्रसन्न हुनुभयो

**वाक्यार्थ–** निराश भएकी ममा यो सुख दिने जो वैराग्य उत्पन्न भएको छ। त्यसैले मसँग मेरा कुनै न कुनै कर्मद्वारा भगवान् नारायण प्रसन्न हुनुभएको छ।

**मैवं स्युर्मन्दभाग्यायाः क्लेशा निर्वेदहेतवः।**
**येनानुबन्धं निर्हृत्य पुरुषः शममृच्छति॥ ३८॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**मन्दभाग्यायाः** = मन्दभाग्यवाली मेरो
**निर्वेदहेतवः** = वैराग्यका कारण
**क्लेशाः** = कष्टहरू

| | | |
|---|---|---|
| **मा स्युः** = हुने थिएनन् | **अनुबन्धं** = देह, घर आदिलाई | **ऋच्छति** = प्राप्त गर्दछ |
| **येन** = जुन वैराग्यद्वारा | **निर्हृत्य** = त्यागेर | |
| **पुरुषः** = मानिस | **शमं** = शान्तिलाई | |

**वाक्यार्थ–** यदि भगवान् प्रसन्न नभएको भए मन्दभागिनी मलाई वैराग्यको कारण भएका कष्टहरू आउने थिएनन्, जुन वैराग्यद्वारा मानिसले शरीर, घर आदिमा ममता त्यागेर शान्ति प्राप्त गर्दछ।

**तेनोपकृतमादाय शिरसा ग्राम्यसङ्गताः।**

**त्यक्त्वा दुराशाः शरणं व्रजामि तमधीश्वरम्॥ ३९॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **ग्राम्यसङ्गताः** = विषयसँग सम्बन्धित | **अधीश्वरं** = परमेश्वरको |
| **तेन** = ती भगवान्द्वारा | **दुराशाः** = खराब आशाहरूलाई | **शरणं** = शरणमा |
| **उपकृतं** = गरिएको उपकारलाई | **त्यक्त्वा** = त्यागी | **व्रजामि** = जान्छु |
| **शिरसा** = शिरले | **तं** = उही | |
| **आदाय** = धारण गरेर | | |

**वाक्यार्थ–** भगवान्ले गरेको उपकारलाई शिरैले स्वीकार गरी म विषयसँग सम्बन्धित खराब आशालाई त्यागी उनै परमेश्वर नारायणको शरणमा जान्छु।

**सन्तुष्टा श्रद्दधत्येतद् यथालाभेन जीवती।**

**विहराम्यमुनैवाहमात्मना रमणेन वै॥ ४०॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **एतत्** = परमात्मतत्त्वमा | **रमणेन** = पतिसँग |
| **यथालाभेन** = प्राप्त भएको कुराबाट | **श्रद्दधती** = श्रद्धा गर्दै | **वै** = निश्चय नै |
| **सन्तुष्टा** = सन्तुष्ट भई | **अहं** = म | **विहरामि** = विहार गर्दछु |
| **जीवती** = बाँचिरहेकी | **अमुना एव** = यही | |
| | **आत्मना** = आत्मस्वरूप भगवान् | |

**वाक्यार्थ–** म अब स्वतः प्राप्त भएको कुराबाट सन्तुष्ट भई जीवन निर्वाह गर्दछु र परमात्मतत्त्वमा श्रद्धा गर्दै उनै परमात्मारूप पतिसँग विहार गर्दछु।

**संसारकूपे पतितं विषयैर्मुषितेक्षणम्।**

**ग्रस्तं कालाहिनात्मानं कोऽन्यस्त्रातुमधीश्वरः॥ ४१॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **पतितं** = खसेको | **मुषितेक्षणं** = इन्द्रियमा शक्ति नष्ट भएको र |
| **संसारकूपे** = संसाररूपी कुवामा | **विषयैः** = विषयहरूद्वारा | |

**कालाहिना** = कालरूपी सर्पले
**ग्रस्तं** = ग्रसित भएको
**आत्मानं** = आफूलाई
**अन्यः** = (भगवान् बाहेक) अर्को
**कः** = को
**त्रातुं** = रक्षा गर्न
**अधीश्वरः** = समर्थ छ

**वाक्यार्थ–** संसाररूपी कुवामा खसेको, विषयहरूद्वारा इन्द्रियशक्ति नष्ट भई विवेकहीन भएको र कालरूपी सर्पले ग्रसित भएको मलाई भगवान्देखि बाहेक अर्को कसले रक्षा गर्न सक्दछ र ?

**आत्मैव ह्यात्मनो गोप्ता निर्विद्येत यदाखिलात्।**
**अप्रमत्त इदं पश्येद् ग्रस्तं कालाहिना जगत्॥ ४२॥**

**पदार्थ–**
**हि** = निश्चय पनि
**यदा** = जब
**अप्रमत्तः** = सावधान भएर
**इदं** = यो
**जगत्** = जगत्लाई
**कालाहिना** = कालरूपी सर्पद्वारा
**ग्रस्तं** = निलिँदै गरेको
**पश्येत्** = देख्दछ र
**अखिलात्** = सारा प्रपञ्चबाट
**निर्विद्येत** = विरक्त हुन्छ (त्यसपछि)
**आत्मनः** = आफ्नो
**गोप्ता** = रक्षक
**आत्मा एव** = आफू नै भइन्छ

**वाक्यार्थ–** जब मानिसले सावधान भएर यो जगत्लाई कालरूपी सर्पले निल्दै गरेको देख्दछ र सारा प्रपञ्चबाट विरक्त बन्दछ, त्यसपछि ऊ आफ्नो रक्षक आफैँ बन्दछ।

**ब्राह्मण उवाच** (अवधूत ब्राह्मणले भने)

**एवं व्यवसितमतिर्दुराशां कान्ततर्षजाम्।**
**छित्त्वोपशममास्थाय शय्यामुपविवेश सा॥ ४३॥**

**पदार्थ–**
**एवं** = यसरी
**व्यवसितमतिः** = निश्चयात्मिका बुद्धि भएकी
**सा** = त्यो पिङ्गला
**कान्ततर्षजां** = प्रेमी पुरुषको अभिलाषाबाट उत्पन्न
**दुराशां** = धन आदिको खराब आशालाई
**छित्त्वा** = त्यागेर
**उपशमं** = शान्तिको
**आस्थाय** = अवलम्बन गरी
**शय्यां** = बिस्तरामा
**उपविवेश** = सुती

**वाक्यार्थ–** यसरी निश्चयात्मिका बुद्धि भएकी पिङ्गलाले प्रेमी पुरुषको अभिलाषाबाट उत्पन्न भएको धन आदिको खराब आशालाई त्यागी शान्त भएर बिस्तरामा सुती।

**आशा हि परमं दुःखं नैराश्यं परमं सुखम्।**
**यथा सञ्छिद्य कान्ताशां सुखं सुष्वाप पिङ्गला॥ ४४॥**

**पदार्थ–**
**हि** = निश्चय पनि
**आशा** = कामना
**परमं** = परम
**दुःखं** = दुःख हो र
**नैराश्यं** = आशारहित हुनु

**परमं** = ज्यादै ठुलो
**सुखं** = सुख हो
**यथा** = जसरी
**कान्ताशां** = प्रेमी पुरुषप्राप्तिको आशालाई
**सञ्छिद्य** = त्यागेर
**पिङ्गला** = पिङ्गला
**सुखं** = आनन्दपूर्वक
**सुष्वाप** = सुती

**वाक्यार्थ–** आशा नै परम दुःख हो र आशारहित हुनु नै परम सुख हो। त्यसैले पिङ्गला प्रेमी पुरुषप्राप्तिको आशालाई त्यागेर आनन्दसँग सुती।

**विवरण–** संसारका पदार्थहरूको आशा गर्नु नै दुःखको मूल कारण हो र ती सांसारिक पदार्थहरूबाट सुख प्राप्त हुन सक्दैन भन्ने अनुभव गरी ती पदार्थहरूको त्याग गर्नु नै सुख हो भन्ने कुरा दत्तात्रेयले पिङ्गलाबाट सिके। आशाले मानिसलाई व्यर्थमा चिन्तित बनाइदिन्छ। कुनै पनि वस्तुको आशाले मानिसलाई त्यसको अनुचर बनाइदिन्छ। सन्तहरू आशाको दुष्परिणामको वर्णन गर्ने क्रममा कुकुरको दृष्टान्त दिन्छन्। जसरी केही खान पाइन्छ कि भन्ने आशामा कुकुर दिनभर मासुपसलको अघि बसिरहन्छ र आसलाग्दो दृष्टिले त्यता हेरिरहन्छ। उसले दिनभरमा केही पनि खान पाउँदैन, उल्टै बिच-बिचमा तिरस्कार, कुटाइ आदि पाउँछ, तर पनि हरेक दिन ऊ यसै गरी आशा गरिरहन्छ कि आज त केही न केही पाउँला। संसारका व्यक्ति एवं पदार्थहरूबाट मानिसले सुखको अभिलाषा गर्नु पनि कुकुरले मासु कुर्नु जस्तै हो। बिच-बिचमा अनेकौं दुःख अनि तिरस्कार आदि पाइरहे तापनि मानिसले पूरा जीवन कसैले मलाई सुख देला कि भन्ने आशामा नै गुजारेको हुन्छ। विषयमा सुख छैन, झन् बढी दुःख नै छ। तर आत्मसुखको मूललाई छाडी संसारको दुःखमा नै सुखको आशा गर्ने प्राणीहरूले आफूभित्रैको सुखलाई कहिले हेर्लान् ? भनी शास्त्रहरूले बारम्बार यसको उपदेश गरेका छन्। पिङ्गलाबाट अवधूतले लिएको यही प्रेरणा यहाँ बताइएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां एकादशस्कन्धेऽष्टमोऽध्यायः ॥ ८ ॥**

# अथ नवमोऽध्यायः

## अवधूतका बाँकी गुरुहरू

**ब्राह्मण उवाच** (अवधूत ब्राह्मणले भने)

**परिग्रहो हि दुःखाय यद् यत् प्रियतमं नृणाम्।**
**अनन्तं सुखमाप्नोति तद् विद्वान् यस्त्वकिञ्चनः॥ १॥**

**पदार्थ—**
**नृणां** = मनुष्यहरूको
**यत् यत्** = जे-जे
**प्रियतमं** = अत्यन्त प्रिय वस्तु छन् (तिनको)
**परिग्रहः** = सङ्ग्रह
**हि** = निश्चय नै
**दुःखाय** = दुःखको लागि हुन्छ
**यः तु** = जो
**तद् विद्वान्** = परिग्रह दुःखको लागि हो भन्ने बुझ्ने
**अकिञ्चनः** = परिग्रहशून्य व्यक्ति छ (त्यसले)
**अनन्तं** = असीम
**सुखं** = सुखलाई
**आप्नोति** = प्राप्त गर्दछ

**वाक्यार्थ—** मनुष्यहरूलाई जे-जे वस्तु प्यारो लाग्छ त्यसको सङ्ग्रह अवश्य पनि दुःखको लागि हुन्छ। जसले परिग्रह दुःखको लागि हुन्छ भनेर बुझेको छ त्यस्तो परिग्रहशून्य व्यक्तिले परम सुखलाई प्राप्त गर्दछ।

**सामिषं कुररं जघ्नुर्बलिनो ये निरामिषाः।**
**तदामिषं परित्यज्य स सुखं समविन्दत॥ २॥**

**पदार्थ—**
**सामिषं** = मासुको टुक्रा लिएको
**कुररं** = कऱ्याङ्कुरुङ चरालाई
**ये** = जो
**निरामिषाः** = मासुको टुक्रा नपाएका
**बलिनः** = ऊ भन्दा बलवान्
पक्षीहरू थिए (तिनीहरूले)
**जघ्नुः** = आक्रमण गरे
**तदा** = त्यस बखतमा
**आमिषं** = त्यो मासुको टुक्रोलाई
**परित्यज्य** = त्यागेर
**सः** = त्यो चराले
**सुखं** = सुख
**समविन्दत** = प्राप्त गऱ्यो

**वाक्यार्थ—** मासुको टुक्रा बोकेको कुनै एउटा कऱ्याङ्कुरुङ चरा थियो। उसलाई देखेर मासु नपाएका अरू पक्षीहरूले उसलाई आक्रमण गरे, त्यसपछि उसले मासुको टुक्रा त्यागिदियो अनि उसले सुख प्राप्त गऱ्यो।

**न मे मानापमानौ स्तो न चिन्ता गेहपुत्रिणाम्।**
**आत्मक्रीड आत्मरतिर्विचरामीह बालवत्॥ ३॥**

**पदार्थ–**
**मे** = मलाई
**मानापमानौ** = मान र अपमानको मतलब
**न स्तः** = छैन
**गेहपुत्रिणां** = घर तथा पुत्रवान्‌हरूलाई झैँ
**चिन्ता न** = चिन्ता छैन
**आत्मक्रीडः** = आफैँमा क्रीडा गर्ने
**आत्मरतिः** = आफैँलाई प्रेम गर्ने म
**बालवत्** = सानो बालक झैँ
**इह** = यस लोकमा
**विचरामि** = घुम्दछु

**वाक्यार्थ–** मलाई न मान र अपमानको मतलब छ, न त घरवारवालालाई झैँ चिन्ता नै छ, म त आफैँमा क्रीडा गर्दै र आफैँलाई नै प्रेम गर्दै सानो बालक झैँ यस लोकमा घुम्दछु।

**द्वावेव चिन्तया मुक्तौ परमानन्द आप्लुतौ।**
**यो विमुग्धो जडो बालो यो गुणेभ्यः परं गतः॥ ४॥**

**पदार्थ–**
**द्वौ एव** = दुईथरी मानिस नै
**चिन्तया** = चिन्ताबाट
**मुक्तौ** = मुक्त छन् र
**परमानन्दे** = परमानन्दमा
**आप्लुतौ** = डुबेका छन्
**यः** = जो
**विमुग्धः** = अज्ञानी
**जडः** = उद्यमरहित
**बालः** = बालक र अर्को
**यः च** = जो
**गुणेभ्यः** = मायाको गुणभन्दा
**परं** = पर (भगवत्पद)
**गतः** = पुगेको व्यक्ति छ

**वाक्यार्थ–** संसारमा दुईथरी व्यक्ति मात्र चिन्ताबाट मुक्त छन् र परमानन्दमा डुबेका छन्, पहिलो अज्ञानी जो उद्यमरहित छ र बालक जस्तो छ, अर्को जो मायाका गुणहरूबाट पर पुगिसकेको छ।

**क्वचित् कुमारी त्वात्मानं वृणानान् गृहमागतान्।**
**स्वयं तानर्हयामास क्वापि यातेषु बन्धुषु॥ ५॥**

**पदार्थ–**
**क्वचित्** = कुनै ठाउँमा
**बन्धुषु** = माता, पिता आदि बन्धु
**क्व अपि** = कतै
**यातेषु** = गएको बखतमा
**कुमारी** = कुनै कन्याले
**आत्मानं** = आफूलाई
**वृणानान्** = वरण गर्न
**गृहं** = घरमा
**आगतान्** = आएका मानिसहरूलाई देखेर
**तान्** = तिनीहरूलाई
**स्वयं** = आफैँले
**अर्हयामास** = सत्कार गरिन्

**वाक्यार्थ–** कुनै ठाउँमा माता, पिता आदि बन्धु कतै गएको बखतमा आफूलाई वरण गर्न घरमा मानिसहरू आएको देखेर कुनै कुमारीले आफैँले उनीहरूको आदर-सत्कार गरिन्।

**तेषामभ्यवहारार्थं शालीन् रहसि पार्थिव।**
**अवघ्नन्त्याः प्रकोष्ठस्थाश्चक्रुः शङ्खाः स्वनं महत्॥ ६॥**

**पदार्थ–**
**पार्थिव** = हे राजा यदु
**तेषां** = ती अतिथिहरूको

**अभ्यवहारार्थं** = भोजनको लागि
**रहसि** = एकान्तमा
**शालीन्** = धान
**अवघ्नन्त्याः** = कुटिरहेकी कुमारीको
**प्रकोष्ठस्थाः** = नाडीमा रहेका
**शङ्खाः** = शङ्खका चुराले
**महत्** = ठुलो
**स्वनं** = शब्द
**चक्रुः** = गरे

**वाक्यार्थ–** हे राजा यदु ! ती अतिथिहरूको भोजनका लागि एकान्तका धान कुटिरहेकी ती कन्याको हातमा लगाएका शङ्खका चुराहरूबाट ठुलो आवाज आयो।

**सा तज्जुगुप्सितं मत्वा महती वृडिता ततः।**
**बभञ्जैकैकशः शङ्खान् द्वौ द्वौ पाण्योरशेषयत्॥ ७॥**

**पदार्थ–**
**महती** = बुद्धि भएकी
**सा** = ती कन्याले
**तत्** = त्यो आवाज निकालेर धान कुट्ने कर्मलाई
**जुगुप्सितं** = निन्दित भएको
**मत्वा** = मानेर
**वृडिता** = लज्जित हुँदै
**ततः** = त्यसपछि
**एकैकशः** = एक-एक गरेर
**शङ्खान्** = ती शङ्खका चुराहरूलाई
**बभञ्ज** = फुटाइन् र
**पाण्योः** = हातमा
**द्वौ द्वौ** = दुई-दुई ओटा मात्र
**अशेषयत्** = बाँकी राखिन्

**वाक्यार्थ–** बढी समझदार ती कन्याले त्यस्तो आवाज निकालेर धान कुट्नुलाई नराम्रो मानी लज्जित भइन्, अनि हातका ती शङ्खका चुराहरूलाई एक-एक गरेर फुटाइन् र हातमा दुई-दुई ओटा मात्र बाँकी राखिन्।

**उभयोरप्यभूद् घोषो ह्यवघ्नन्त्याः स्म शङ्खयोः।**
**तत्राप्येकं निरभिददेकस्मान्नाभवद् ध्वनिः॥ ८॥**

**पदार्थ–**
**अवघ्नन्त्याः** = फेरि धान कुट्न लागेकी कन्याको
**उभयोः** = दुई दुई
**शङ्खयोः अपि** = शङ्खका चुराबाट पनि
**हि** = निश्चय नै
**घोषः** = ध्वनि
**अभूत् स्म** = भयो
**तत्र अपि** = त्यसमा पनि
**एकं** = एक-एक ओटालाई
**निरभिदत्** = फेरि फुटाइन्
**एकस्मात्** = एउटाबाट
**ध्वनिः** = आवाज
**न अभवत्** = आएन

**वाक्यार्थ–** फेरि धान कुट्न लागेकी कन्याको दुई-दुई ओटा शङ्खका चुराबाट पनि आवाज आयो। त्यसैले उनले एक-एक ओटा फुटाइन्। त्यसपछि भने एउटा चुराबाट आवाज आएन।

**अन्वशिक्षमिमं तस्या उपदेशमरिन्दम।**
**लोकाननुचरन्नेतान् लोकतत्त्वविवित्सया॥ ९॥**

**पदार्थ–**
**अरिन्दम** = हे शत्रुदमनकर्ता
**लोकतत्त्वविवित्सया** = संसारको रीतिरिवाज बुझ्नको लागि
**एतान्** = यी
**लोकान्** = लोकमा
**अनुचरन्** = भ्रमण गर्दा मैले
**तस्याः** = ती कुमारीबाट
**इमं** = यस्तो
**उपदेशम्** = उपदेश
**अन्वशिक्षम्** = सिकेँ

**वाक्यार्थ–** हे शत्रुदमनकर्ता यदु ! लोकको रीतिरिवाज जान्न यो लोकमा घुमिरहँदा मैले ती कुमारीको व्यवहारबाट यो उपदेश सिकेँ।

**वासे बहूनां कलहो भवेद् वार्ता द्वयोरपि।**
**एक एव चरेत् तस्मात् कुमार्या इव कङ्कणः॥ १०॥**

**पदार्थ–**
**बहूनां** = धेरै जनाको
**वासे** = एकै ठाउँमा बसाइ
**कलहः** = झगडा हुन्छ
**द्वयोः अपि** = दुई जना बसे पनि
**वार्ता** = कुराकानी
**भवेत्** = हुन्छ
**तस्मात्** = त्यसैले
**कुमार्याः** = कुमारीको
**कङ्कणः इव** = चुरा झैँ
**एकः एव** = एक्लै
**चरेत्** = घुमोस्

**वाक्यार्थ–** धेरै जना एकै ठाउँमा बस्यो भने झगडा हुन्छ। दुई जना बस्यो भने पनि कुराकानी हुन्छ, त्यसैले कुमारीको चुरा झैं एक्लै घुम्नुपर्दछ।

**विवरण–** यहाँ साधकले एक्लै रहनुपर्छ भन्ने विषयमा एउटी कुमारीले हातमा लगाएको चुराबाट अवधूतले शिक्षाग्रहण गरेको प्रसङ्ग बताइएको छ। एउटी कुमारीलाई वरण गर्न भनी उनको घरमा मानिसहरू आएका थिए। त्यस समय घरका ठुला मान्छे बाहिर गएको हुँदा ती कुमारी स्वयंले अतिथिहरूको स्वागत गरिन् र उनीहरूलाई भोजन बनाउन तयार भइन्। त्यही वेलामा चामल सकिएकाले उनले भकारीबाट धान निकाली त्यो धान कुट्न थालिन्। तर उनको हातका चुराहरू छन्द्र्याङ्-छन्द्र्याङ् गर्दै बेस्सरी बज्न थाले। धान कुट्दा चुरा बज्नाले यो घरमा चामलको सञ्चय रहेनछ, यो घर अत्यन्त गरिबको घर रहेछ भन्ने जानकारी दिन्थ्यो, त्यसैले तिनले अत्यन्त लजाई आफ्ना हातका एक-एक ओटा चुराहरू फोर्न थालिन्। हातमा दुई-दुई ओटा चुरा बाँकी रहुन्जेलसम्म पनि त्यसबाट आवाज निस्किरह्यो। जब उनले त्यसलाई पनि फोरी एक एक ओटा हातमा एउटा एउटा मात्र चुरा बाँकी राखिन्, त्यसपछि त्यसबाट कुनै आवाज आएन। यसबाट व्यक्ति एक्लै हुँदा त्यहाँ शान्ति रहने अनि धेरै हुँदा चाहिँ केही न केही अशान्ति भइहाल्ने देखियो। यसैले शान्त रहन चाहने साधकले एक्लै बस्नुपर्दछ। यसबाट ऊ अरूको सुख-दुःख आदिको व्यवहारबाट निर्लिप्त अनि चिन्तामुक्त हुन्छ। साथमा अरू कोही हुनेबित्तिकै उसको पीडाले आफूलाई पनि छुन्छ र शान्तिमा विघ्न गरिदिन्छ। त्यसैले साधकले एक्लै रहने अभ्यास गर्नुपर्दछ।

**मन एकत्र संयुञ्ज्याज्जितश्वासो जितासनः।**
**वैराग्याभ्यासयोगेन ध्रियमाणमतन्द्रितः॥ ११॥**

**पदार्थ—**
**जितासनः** = आसनलाई जितेको
**जितश्वासः** = प्राणलाई जितेको
**अतन्द्रितः** = आलस्यरहित
भएको साधकले
**वैराग्याभ्यासयोगेन** = वैराग्य र अभ्यासले
**ध्रियमाणं** = वशमा लिई रहेको
**मनः** = मनलाई
**एकत्र** = एउटै ठाउँमा
**संयुञ्ज्यात्** = स्थिर गराउनू

**वाक्यार्थ—** साधकले आसनलाई र प्राणलाई जितेर आलस्यरहित भएर वैराग्य र अभ्यासद्वारा बिस्तारै मनलाई वशमा लिई एकै ठाउँमा स्थिर गराउनू।

**यस्मिन् मनो लब्धपदं यदेतच्छनैः शनैर्मुञ्चति कर्मरेणून्।**
**सत्त्वेन वृद्धेन रजस्तमश्च विधूय निर्वाणमुपैत्यनिन्धनम्॥ १२॥**

**पदार्थ—**
**यस्मिन्** = जुन परमात्मामा
**लब्धपदं** = स्थिर भएको
**यत् एतत्** = जो यो
**मनः** = मन
**शनैः शनैः** = बिस्तारै-बिस्तारै
**कर्मरेणून्** = कर्मवासनालाई
**मुञ्चति** = त्यागदछ र
**वृद्धेन** = बढेको
**सत्त्वेन** = सत्त्वगुणले
**रजः** = रजोगुणलाई
**तमः च** = तमोगुणलाई पनि
**विधूय** = हटाएर
**अनिन्धनं** = गुणका कार्य
रागद्वेष आदि इन्धनले रहित भएर
**निर्वाणं** = परम शान्तिको स्थितिमा
**उपैति** = प्राप्त हुन्छ

**वाक्यार्थ—** जब यो मन परमात्मामा स्थिर हुन्छ अनि बिस्तारै-बिस्तारै कर्मको वासनालाई पखाल्दै जान्छ र बढेको सत्त्वगुणको प्रभावले रजोगुण र तमोगुण हट्दछ अनि दाउरा सकिएपछि आगो निभे झैँ रागद्वेष आदि इन्धनले रहित भएर यो मन पनि परम शान्तिको स्थितिमा प्राप्त हुन्छ।

**तदैवमात्मन्यवरुद्धचित्तो न वेद किञ्चिद् बहिरन्तरं वा।**
**यथेषुकारो नृपतिं व्रजन्तमिषौ गतात्मा न ददर्श पार्श्वे॥ १३॥**

**पदार्थ—**
**एवं** = यसरी
**आत्मनि** = परमात्मामा
**अवरुद्धचित्तः** = चित्त लागि-सकेपछि
**तदा** = त्यस बखतमा
**बहिः** = बाहिर दर्शन आदिले र
**अन्तरं वा** = भित्र स्मरण आदिले
**किञ्चित्** = केही पनि
**न वेद** = जान्दैन
**यथा** = जसरी
**इषौ** = बाणमा
**गतात्मा** = दत्तचित्त
**इषुकारः** = बाण बनाउनेले
**पार्श्वे** = नजिकैबाट
**व्रजन्तं** = गइरहेका
**नृपतिं** = राजालाई
**न ददर्श** = देखेन

**वाक्यार्थ—** यसरी जब परमात्मामा चित्त स्थिर हुन्छ, त्यसपछि बाहिर कुनै कुरा देखेर र भित्र मनले सम्झेर पनि केही जान्दैन। जसरी बाणमा दत्तचित्त भएको बाण बनाउनेले नजिकैबाट गइरहेका राजालाई पनि देखेन।

**एकचार्यनिकेतः स्यादप्रमत्तो गुहाशयः।**
**अलक्ष्यमाण आचारैर्मुनिरेकोऽल्पभाषणः॥ १४॥**

**पदार्थ–**
**मुनिः** = साधक
**एकचारी** = एक्लै हिँड्ने
**अनिकेतः** = निश्चित घर नभएको
**अप्रमत्तः** = सावधान
**गुहाशयः** = गुफा आदिमा रहने
**आचारैः** = आफ्नो आचरणले
**अलक्ष्यमाणः** = परिचित नहुने
**एकः** = असहाय र
**अल्पभाषणः** = थोरै बोल्ने
**स्यात्** = होस्

**वाक्यार्थ–** वास्तवमा साधकले सधैँ एक्लै हिँड्नुपर्दछ, उसको निश्चित आश्रम हुनुहुँदैन। सधैँ सावधानी अपनाई गुफा आदिमा रहनुपर्दछ, आचरण आदिबाट परिचित हुनुहुँदैन र असहाय भई रहने तथा थोरै बोल्ने गर्नुपर्दछ।

**गृहारम्भोऽतिदुःखाय विफलश्चाध्रुवात्मनः।**
**सर्पः परकृतं वेश्म प्रविश्य सुखमेधते॥ १५॥**

**पदार्थ–**
**अध्रुवात्मनः** = शरीरै अस्थायी भएको प्राणीहरूको लागि
**गृहारम्भः** = घर बनाउने काम
**अतिदुःखाय** = अति दुःखदायक छ र
**विफलः च** = निष्फल पनि छ
**सर्पः** = साँप
**परकृतं** = अर्काले बनाएको
**वेश्म** = घरमा (प्वालमा)
**प्रविश्य** = बसेर
**सुखं** = सुखलाई
**एधते** = प्राप्त गर्दछ

**वाक्यार्थ–** अनित्य शरीरवालाहरूको लागि घर बनाउनु अति दुःखको कुरा हो र विशेषफलरहित कुरो हो, सर्प अर्काले बनाएको घरमा सुखपूर्वक बस्दछ।

**एको नारायणो देवः पूर्वसृष्टं स्वमायया।**
**संहृत्य कालकलया कल्पान्त इदमीश्वरः॥**
**एक एवाद्वितीयोऽभूदात्माधारोऽखिलाश्रयः॥ १६॥**

**पदार्थ–**
**आत्माधारः** = आफ्नो आधार आफैँ भई
**अखिलाश्रयः** = सबैको आधार भएका
**ईश्वरः** = सर्वसमर्थ
**एकः** = एक
**नारायणः** = नारायण
**देवः** = भगवान्ले
**स्वमायया** = आफ्नो मायाशक्तिले
**पूर्वसृष्टं** = पहिला सृष्टि गरेको
**इदं** = यो जगत्लाई
**कालकलया** = कालनामको शक्तिद्वारा
**संहृत्य** = संहार गरेर
**कल्पान्ते** = प्रलय कालमा
**एकः एव** = एक मात्र
**अद्वितीयः** = भेदरहित
**अभूत्** = हुनुहुन्छ

**वाक्यार्थ–** आफ्नो आधार अर्को नभएका र सबैको आधार आफू भएका सर्वसमर्थ एक मात्र भगवान् नारायणले आफ्नो मायाद्वारा पहिला सृष्टि गरेको यो जगत्लाई फेरि कालरूप शक्तिद्वारा संहार गर्नुहुन्छ र प्रलयमा एक्लै अद्वितीय भई बस्नुहुन्छ।

**कालेनात्मानुभावेन साम्यं नीतासु शक्तिषु।**
**सत्त्वादिष्वादिपुरुषः प्रधानपुरुषेश्वरः॥ १७॥**
**परावराणां परम आस्ते कैवल्यसंज्ञितः।**
**केवलानुभवानन्दसन्दोहो निरुपाधिकः॥ १८॥**

**पदार्थ–**
**आत्मानुभावेन** = आत्माको शक्तिस्वरूप
**कालेन** = कालले
**सत्त्वादिषु** = सत्त्व आदि
**शक्तिषु** = शक्तिहरूलाई
**साम्यं** = साम्य अवस्थामा
**नीतासु** = लगेपछि
**प्रधानपुरुषेश्वरः** = प्रकृति र पुरुषका पनि मालिक
**परावराणां** = ब्रह्मा आदि देव र मुक्तिमा उन्मुख भएका जीवहरूको
**परमः** = परम फलरूप
**निरुपाधिकः** = उपाधिशून्य
**केवलानुभवानन्दसन्दोहः** = स्वप्रकाश एवं आनन्दको समूह
**आदिपुरुषः** = आदिपुरुष
**कैवल्यसंज्ञितः** = मोक्ष नामक बनेर
**आस्ते** = रहनुहुन्छ

**वाक्यार्थ–** आत्माको शक्तिस्वरूप कालले सत्त्व आदि शक्तिहरूलाई साम्य अवस्थामा पुऱ्याएपछि प्रकृति र पुरुषका पनि मालिक ब्रह्मा आदि देव र मुक्त जीवको पनि फलस्वरूप निरुपाधिक केवल अनुभव (स्वप्रकाश) र आनन्दस्वरूप आदिपुरुष नै मोक्षको रूपमा रहनुहुन्छ।

**केवलात्मानुभावेन स्वमायां त्रिगुणात्मिकाम्।**
**सङ्क्षोभयन् सृजत्यादौ तया सूत्रमरिन्दम॥ १९॥**

**पदार्थ–**
**अरिन्दम** = हे शत्रुनाशक (परमात्माले)
**केवलात्मानुभावेन** = केवल आत्माको शक्तिरूप कालद्वारा
**त्रिगुणात्मिकां** = त्रिगुणमयी
**स्वमायां** = आफ्नो मायालाई
**सङ्क्षोभयन्** = क्षोभित गराएर
**तया** = त्यही मायाशक्तिद्वारा
**आदौ** = पहिले
**सूत्रं** = क्रियाशक्तिप्रधान महत् तत्त्वको
**सृजति** = सृष्टि गर्नुहुन्छ

**वाक्यार्थ–** हे शत्रुनाशक राजा! परमात्माले केवल आत्माको शक्तिरूप कालद्वारा त्रिगुणमयी आफ्नो मायालाई क्षोभित गराई त्यही मायाशक्तिद्वारा पहिला क्रियाशक्तिप्रधान महत्तत्त्वलाई सृजना गर्नुहुन्छ।

**तामाहुस्त्रिगुणव्यक्तिं सृजन्तीं विश्वतोमुखम्।**
**यस्मिन् प्रोतमिदं विश्वं येन संसरते पुमान्॥ २०॥**

**पदार्थ—**
**विश्वतोमुखं** = त्रिगुणात्मक विश्वलाई
**सृजन्तीं** = सृष्टि गर्ने
**तां** = ती सूत्ररूप व्यक्तिलाई
**त्रिगुणव्यक्तिं** = त्रिगुणको कार्य भनेर
**आहुः** = भन्दछन्
**यस्मिन्** = जुन समष्टिरूप सूत्रमा
**इदं विश्वं** = यो सारा विश्व
**प्रोतम्** = ओतप्रोत भएको छ र
**येन** = जुन प्राणरूप सूत्रद्वारा
**पुमान्** = मानिसले
**संसरते** = संसारलाई प्राप्त गर्दछ

**वाक्यार्थ—** त्रिगुणात्मक विश्वलाई सृष्टि गर्ने सूत्ररूप व्यक्तिलाई त्रिगुणको कार्य भनिन्छ। जुन प्राणरूप सूत्रमा यो सारा विश्व ओतप्रोत भएर रहेको छ र जसको कारणले मानिस संसारमा पर्दछ।

**यथोर्णनाभिर्हृदयादूर्णां सन्तत्य वक्त्रतः।**
**तया विहृत्य भूयस्तां ग्रसत्येवं महेश्वरः॥ २१॥**

**पदार्थ—**
**यथा** = जसरी
**ऊर्णनाभिः** = माकुरोले
**हृदयात्** = नाभिबाट
**वक्त्रतः** = मुखद्वारा
**ऊर्णां** = जाललाई
**सन्तत्य** = विस्तार गरेर
**तया** = त्यो जालसँग
**विहृत्य** = खेली
**भूयः** = फेरि
**तां** = त्यो जाललाई
**ग्रसति** = आफैँमा संहार गर्दछ
**एवं** = यसै गरी
**महेश्वरः** = परमेश्वरले (पनि जगत्को उत्पत्ति, स्थिति र प्रलय गर्नुहुन्छ)

**वाक्यार्थ—** जसरी माकुराले आफ्नो नाभिबाटै मुखद्वारा जाल फिँजाएर त्यही जालमा विहार गरेर फेरि त्यसलाई आफैँमा लीन गराउँछ, त्यसै गरी परमात्माले पनि आफैँले जगत्को सृष्टि गरी त्यसमा खेली फेरि पछि आफैँमा जगत्को संहार गर्नुहुन्छ।

**यत्र यत्र मनो देही धारयेत् सकलं धिया।**
**स्नेहाद् द्वेषाद् भयाद् वापि याति तत्तत्स्वरूपताम्॥ २२॥**

**पदार्थ—**
**देही** = जो प्राणी
**धिया** = निश्चयात्मक बुद्धिले
**यत्र यत्र** = जुन-जुन विषयमा
**सकलं** = एकाग्र भई
**मनः** = मनलाई
**स्नेहात्** = स्नेहले
**द्वेषात्** = द्वेषले
**भयात् वा अपि** = अथवा डरले पनि
**धारयेत्** = लगाउँछ भने (त्यो)
**तत्तत्स्वरूपतां** = त्यही-त्यही स्वरूपमा
**याति** = प्राप्त हुन्छ

**वाक्यार्थ—** जो प्राणी निश्चयात्मिका बुद्धिले स्नेह, द्वेष वा डरका कारण जहाँ-जहाँ मन लगाउँछ, त्यो प्राणी त्यही रूपमा प्राप्त हुन्छ।

**कीटः पेशस्कृतं ध्यायन् कुड्यां तेन प्रवेशितः।**
**याति तत्सात्मतां राजन् पूर्वरूपमसन्त्यजन्॥ २३॥**

**पदार्थ–**
**राजन्** = हे राजा यदु
**कुड्यां** = भित्तामा बनाएको प्वालमा
**तेन** = त्यो कुमलकोटीद्वारा
**प्रवेशितः** = भित्र राखेर बन्द गरिएको
**कीटः** = अर्कै खालको किराले
**पेशस्कृतं** = कुमलकोटीलाई
**ध्यायन्** = चिन्तन गर्दागर्दै
**पूर्वरूपं** = पहिलेको रूपलाई
**असन्त्यजन्** = नत्यागीकन
**तत्सात्मतां** = त्यही कुमालकोटीको रूपमा
**याति** = प्राप्त हुन्छ

**वाक्यार्थ–** हे राजा यदु ! कुमलकोटीले भित्तामा माटोको प्वाल बनाएर त्यसमा बन्द गरिएको अर्को खालको किराले निरन्तर कुमलकोटीको चिन्तन गरेर अन्तिममा आफ्नो पहिलेको रूपलाई नत्यागी कुमलकोटीकै समान रूपलाई धारण गर्दछ।

**एवं गुरुभ्य एतेभ्य एषा मे शिक्षिता मतिः।**
**स्वात्मोपशिक्षितां बुद्धिं शृणु मे वदतः प्रभो ॥ २४ ॥**

**पदार्थ–**
**प्रभो** = हे समर्थ राजा यदु
**एवं** = यसरी
**एतेभ्यः** = यी
**गुरुभ्यः** = गुरुहरूबाट
**एषा** = यस्तो
**मतिः** = ज्ञान
**मे** = मैले
**शिक्षिता** = सिकेँ (अब)
**स्वात्मोपशिक्षितां** = आफ्नै शरीरबाट सिकेको
**बुद्धिं** = ज्ञान
**वदतः** = भन्न लागेको
**मे** = मबाट
**शृणु** = सुन्नुहोस्

**वाक्यार्थ–** हे राजा यदु ! यसरी यी सबै गुरुहरूबाट यति कुरा मैले सिकेँ। अब आफ्नै शरीरबाट सिकेको कुरा भन्दछु, सुन्नुहोस्।

**देहो गुरुर्मम विरक्तिविवेकहेतु-**
**र्बिभ्रत् स्म सत्त्वनिधनं सततार्त्युदर्कम्।**
**तत्त्वान्यनेन विमृशामि यथा तथापि**
**पारक्यमित्यवसितो विचराम्यसङ्गः ॥ २५ ॥**

**पदार्थ–**
**विरक्तिविवेकहेतुः** = वैराग्य र विवेकको कारण भएको
**सततार्त्युदर्कम्** = सधैँ परिणाममा दुःखदायी भएको
**सत्त्वनिधनं** = जन्म र मृत्युलाई
**बिभ्रत् स्म** = धारण गर्ने
**देहः** = शरीर
**मम** = मेरो
**गुरुः** = गुरु हो
**अनेन** = यही शरीरको माध्यमले
**तत्त्वानि** = तत्त्वको विषयमा
**यथा** = यथार्थरूपले
**विमृशामि** = विचार गर्दछु
**तथा अपि** = तैपनि
**पारक्यं** = यो शरीर स्याल, कुकुर आदिको भक्ष्य हो भनी
**इति** = यसरी
**अवसितः** = विचार गर्दै म
**असङ्गः** = आसक्ति नगरी
**विचरामि** = घुम्दछु

**वाक्यार्थ–** मेरो शरीर वैराग्य र विवेकको कारण हो, जसको परिणाम निरन्तर दुःखदायी छ र

जन्म-मृत्युलाई पनि यसैले धारण गरेको छ तैपनि यो शरीर मेरो गुरु हो। यही शरीरलाई माध्यम बनाएर मैले तत्त्वको यथार्थ विचार गरैं, फेरि पनि यो शरीर कुकुर र श्याल आदिको भक्ष्य हो भन्ने विचार गरी म यसमा आसक्ति नगरी घुम्दछु।

**जायात्मजार्थपशुभृत्यगृहाप्तवर्गान्**
**पुष्णाति यत्प्रियचिकीर्षुतया वितन्वन्।**
**स्वान्ते सकृच्छ्रमवरुद्धधनः स देहः**
**सृष्ट्वास्य बीजमवसीदति वृक्षधर्मा ॥ २६ ॥**

**पदार्थ–**
**सकृच्छ्रं** = दुःखले
**अवरुद्धधनः** = धनको सङ्ग्रह गरेको मानिस
**यत्प्रियचिकीर्षया** = जुन शरीरलाई भोगको सम्पादन गर्ने इच्छाले
**जायात्मजार्थपशुभृत्यगृहाप्त-वर्गान्** = स्त्री, पुत्र, धन, पशु, नोकरचाकर, घरबार र इष्टमित्र
**वितन्वन्** = विस्तार गरेर (ती सबैलाई)
**पुष्णाति** = पालनपोषण गर्दछ
**वृक्षधर्मा** = रुख झैं मर्ने स्वभावको
**सः** = त्यो
**देहः** = शरीरले
**अस्य** = यो पुरुषको
**बीजं** = अर्को शरीरलाई
**सृष्ट्वा** = सृष्टि गरेर
**स्वान्ते** = आफ्नो आयुको अन्त्यमा
**अवसीदति** = नष्ट हुन्छ

**वाक्यार्थ–** अति दुःखले धनसङ्ग्रह गरेर मानिस यस शरीरलाई भोग सम्पादन गर्न स्त्री, धन, पशु, नोकरचाकर, घरवार र इष्टमित्र जोड्दछ अनि तिनीहरूलाई पालनपोषण गर्दछ। मर्ने स्वभावको यो शरीर भने मानिसलाई अर्को शरीर उत्पत्तिको लागि चाहिने बीज तयार गरी आयु समाप्त भएपछि नष्ट भएर जान्छ।

**जिह्वैकतोऽमुमपकर्षति कर्हि तर्षा**
**शिश्नोऽन्यतस्त्वगुदरं श्रवणं कुतश्चित्।**
**घ्राणोऽन्यतश्चपलदृक् क्व च कर्मशक्ति-**
**र्बह्व्यः सपत्न्य इव गेहपतिं लुनन्ति ॥ २७ ॥**

**पदार्थ–**
**अमुं** = यो शरीरमा अभिमान गर्ने मानिसलाई
**कर्हि** = कहिले
**जिह्वा** = जिब्राले
**एकतः** = एकातिर
**अपकर्षति** = तान्दछ
**तर्षा** = प्यास र
**शिश्नः** = जननेन्द्रियले
**अन्यतः** = फेरि अर्कोतिर तान्दछ
**त्वक्** = छाला
**उदरं** = पेट
**श्रवणं** = कानले
**कुतश्चित्** = फेरि कतै तान्दछ
**घ्राणः** = नाकले

**अन्यतः** = अर्कोतिर तान्दछ भने
**चपलदृक्** = चञ्चल आँखाले र
**कर्मशक्तिः च** = कर्मेन्द्रियहरूले पनि
**क्व** = कतै तान्दछन् (यसरी)
**बह्व्यः** = धेरै
**सपत्न्यः** = सौतेनीहरूले
**गेहपतिं इव** = एउटा गृहस्वामीलाई झैँ
**लुनन्ति** = विषयतिर तान्दछन्

**वाक्यार्थ–** यस शरीरमा अभिमान गर्ने मानिसलाई जिब्राले एकातिर तान्छ, प्यासले अर्कातिर तान्छ, फेरि जननेन्द्रियले अर्कातिर, कतै छालाले, कतै पेटले, कतै कानले, फेरि कतै नाकले त कतै चञ्चल आँखाले अनि कतै कर्मेन्द्रियहरूले तान्छन्। यसरी धेरै सौतेनीहरूको बिचको गृहस्वामीलाई झैँ यिनीहरूले आ-आफ्नो विषयमा तान्दछन्।

**सृष्ट्वा पुराणि विविधान्यजयात्मशक्त्या**
**वृक्षान् सरीसृपपशून् खगदंशमत्स्यान्।**
**तैस्तैरतुष्टहृदयः पुरुषं विधाय**
**ब्रह्मावलोकधिषणं मुदमाप देवः॥ २८॥**

**पदार्थ–**
**देवः** = भगवान्ले
**आत्मशक्त्या** = आफ्नो शक्तिस्वरूप
**अजया** = मायाद्वारा
**विविधानि** = विभिन्न प्रकारका
**पुराणि** = जीवका शरीरहरू
**वृक्षान्** = रुखहरू
**सरीसृपपशून्** = सर्प र अन्य पशुहरू
**खगदंशमत्स्यान्** = चरा, डाँस र माछाहरूलाई
**सृष्ट्वा** = रचना गरेर
**तैः तैः** = ती-ती शरीरहरूद्वारा
**अतुष्टहृदयः** = सन्तोष नभएर
**ब्रह्मावलोकधिषणं** = ब्रह्मको अपरोक्ष साक्षात्कार गर्ने बुद्धि भएको
**पुरुषं** = मानिसको शरीरलाई
**विधाय** = रचना गरेर
**मुदं आप** = हर्षित हुनुभयो

**वाक्यार्थ–** भगवान्ले आफ्नो शक्तिरूप मायाद्वारा विभिन्न प्रकारका जीवका शरीरहरू, रुखहरू, सर्प र अन्य पशुहरू, अनि चरा, डाँस, माछा आदिलाई सृष्टि गरेर तिनीहरूबाट सन्तुष्ट हुनुभएन त्यसपछि ब्रह्मको अपरोक्ष साक्षात्कार गर्न सक्ने बुद्धि भएको मनुष्य शरीरको सृष्टि गर्नुभयो र उहाँ अति हर्षित हुनुभयो।

**लब्ध्वा सुदुर्लभमिदं बहुसम्भवान्ते**
**मानुष्यमर्थदमनित्यमपीह धीरः।**
**तूर्णं यतेत न पतेदनुमृत्यु याव-**
**न्निःश्रेयसाय विषयः खलु सर्वतः स्यात्॥ २९॥**

**पदार्थ–**
**इह** = यो लोकमा
**अनित्यम् अपि** = अनित्य भए

पनि
**अर्थदम्** = पुरुषार्थ दिने
**सुदुर्लभं** = अत्यन्त दुर्लभ
**मानुष्यम्** = मनुष्यजन्मलाई
**बहुसम्भवान्ते** = धेरै जन्मपछि
**लब्ध्वा** = पाएर
**धीरः** = विवेकी मानिसले
**अनुमृत्यु** = निरन्तर मृत्युद्वारा पछ्याइएको
**इदं** = यो शरीर
**यावत्** = जहिलेसम्म
**न पतेत्** = ढल्दैन (तहिलेसम्म)
**तूर्णं** = चाँडो
**निःश्रेयसाय** = मोक्षको लागि
**यतेत** = प्रयास गरोस्
**विषयः** = विषयभोग त
**सर्वतः** = जुनसुकै जन्ममा पनि
**खलु** = निश्चय पनि
**स्यात्** = छ

**वाक्यार्थ–** यो लोकमा अनित्य भएर पनि पुरुषार्थ दिने, अत्यन्त दुर्लभ मनुष्य शरीर धेरै जन्मपछि पाएर विवेकी मानिसले निरन्तर मृत्युद्वारा पछ्याइएको यो शरीर जबसम्म ढल्दैन तबसम्म चाँडै नै मोक्षको लागि प्रयास गरिहालोस्, किनभने विषयभोग त जुनसुकै जुनीमा पनि प्राप्त छ।

**विवरण–** यहाँ अवधूतले आफ्नै शरीरबाट शिक्षाहरू लिएको बताइएको छ। शरीरका अवस्था एवं क्रियाकलापलाई हेर्ने हो भने त्यसबाट विवेक र वैराग्यको शिक्षा मिल्दछ। शरीर सधैं दुःखै दुःखले भरिएको छ। जन्म हुँदाको दुःख, रोग लाग्दा र बुढ्याइँ लाग्दा अनि बिच-बिचमा प्रियवियोग आदि हुँदा र भोकप्यास आदिले सताउँदा हुने दिनदिनैका दुःखहरू त छँदैछन्। जब मानिसलाई दुःखले धेरै सताउँछ तब ऊ यस विषयमा विचार गर्न बाध्य हुन्छ। थोरै विचारको उदय हुनेबित्तिकै उसले के थाहा पाउँछ भने यस्तो विनाशशील शरीरको सम्बन्धको कारणले मैले धेरै दुःख पाउनुपरेको छ। यसपछि ऊ शरीरप्रति स्वतः विरक्त हुन्छ।

अवधूत भन्छन्– शरीरलाई प्रसन्न पार्ने उद्देश्यले नै मानिसका सारा व्यवहारहरू हुन्छन्। घर बनाउने, द्रव्यसञ्चय गर्ने, आफन्त, इष्टमित्र बनाउने आदि सबै व्यवहार शरीरकै उद्देश्यले त हुन्छन्। यसकै रक्षा एवं भरणपोषणका लागि भनेर प्राणीहरू पृथिवीको कुनाकाप्चासम्म चक्कर लगाउँछन्। यसकै पोषणका लागि प्रतिस्पर्धा गर्दा प्राणीहरू एक-आपसमा डाह, ईर्ष्या, द्वेष आदि अनेकौं दुःखदायी भावसमेत अँगाल्न पुग्दछन्। एउटा शरीरको पोषणका लागि यति धेरै कष्ट व्यहोर्नु अवश्य पनि राम्रो होइन, तर प्राणीहरूले यसैलाई आफू भन्ने सोचेकाले यो सब भइरहेको छ। यसरी शरीरमा आसक्ति गर्नेबित्तिकै अनेकौं दुःखको भुमरीमा पर्नुपर्ने निश्चित नै छ। छान्दोग्योपनिषद् (८।१२।१) मा पनि भनिएको छ– **न ह वै सशरीरस्य सतः प्रियाप्रिययोरपहति-रस्त्यशरीरं वाव सन्तं न प्रियाप्रिये स्पृशतः** अर्थात् शरीरमा म भन्ने आत्मभाव हुँदासम्म त्यस व्यक्तिलाई सुख र दुःखले कहिल्यै छोड्दैन अनि शरीरको सम्बन्धले रहित भएको व्यक्तिलाई चाहिँ सांसारिक प्रिय, अप्रियले छुँदैनन्। यहाँ सुख भनेर विषयभोगबाट हुने क्षणिक सुखलाई लिनुपर्दछ, जो स्वयं अन्तमा दुःखरूप हुन पुग्दछ। जीवनभर यसरी शरीरमा आसक्ति गरी दुःख पाउनुको फल चाहिँ के हुन्छ भने यो शरीरले व्यक्तिका लागि अर्को शरीरको पनि तयारी गरी अर्को जन्ममा पनि दुःखै दुःख पाउने व्यवस्था मिलाइदिन्छ।

वासनाप्रभावित व्यक्ति धेरै अशान्त हुन्छ। उसले स्थिर भावले कुनै सुखलाई पनि भोग्न सक्दैन। इन्द्रियका माध्यमले विषयभोग गर्दा आउने क्षणिक सुखहरू यहाँ अवश्य छन्, तर व्यक्तिका अशान्त इन्द्रियहरूले जीवनभरको दौडधुपले गर्दा हुने दुःख झन् बढी हुन्छ। आ-आफ्ना

विषयतिर तान्ने इन्द्रियहरूको पछि लागेको व्यक्ति कहिल्यै सन्तोष र शान्तिको सास फेर्न सक्दैन। आँखाले राम्रो रूप हेर्न आदेश दिन्छ, कानले मिठा प्रशंसावचन सुन्न, जिब्रोले नयाँ नयाँ रस चाख्न भन्छ त नाकले मिठो सुगन्ध सुँघ्न भन्छ। यी सबैको भिन्नाभिन्नै माग पूरा गर्दै मानिसले मनुष्यजीवनको महत्त्वपूर्ण कार्यलाई बिर्सन्छ। अवधूत भन्छन्— मनुष्य शरीरलाई बनाएपछि विधाता परमात्मा पनि प्रसन्न हुनुभएको थियो, किनभने यसको बुद्धि ब्रह्मतत्त्व साक्षात्कार गर्न सक्षम छ। यसरी दुःखदायी शरीरमा आसक्ति गर्न नहुने र मनुष्य शरीरको महत्त्व सर्वाधिक भएकाले यसलाई परम पुरुषार्थकै प्राप्तिमा लगाउनुपर्ने शिक्षा आफ्नै शरीरबाट लिएको कुरा अवधूतले यहाँ बताएका छन्।

**एवं सञ्जातवैराग्यो विज्ञानालोक आत्मनि।**
**विचरामि महीमेतां मुक्तसङ्गोऽनहङ्कृतिः॥ ३०॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **एवं** = यसरी | **मुक्तसङ्गः** = आसक्तिले रहित | प्रकाशले युक्त म |
| **सञ्जातवैराग्यः** = वैराग्य उत्पन्न भएको | **अनहङ्कृतिः** = अहङ्कारशून्य | **एतां** = यो |
| | **आत्मनि** = आफ्नै स्वरूपमा | **महीं** = पृथिवीमा |
| | **विज्ञानालोकः** = ज्ञानको | **विचरामि** = घुम्दछु |

**वाक्यार्थ—** यसरी वैराग्य उत्पन्न भएको आसक्तिरहित अहङ्कारशून्य, ज्ञानको प्रकाशयुक्त म आफ्नै स्वरूपमा स्थित रही यो पृथिवीमा घुम्दछु।

**न ह्येकस्माद् गुरोर्ज्ञानं सुस्थिरं स्यात् सुपुष्कलम्।**
**ब्रह्मैतदद्वितीयं वै गीयते बहुधर्षिभिः॥ ३१॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **हि** = निश्चय नै | **सुपुष्कलं** = पूरा | **अद्वितीयं** = अद्वितीय |
| **एकस्मात्** = एक | **ज्ञानं** = ज्ञान | **ब्रह्म** = ब्रह्मलाई |
| **गुरोः** = गुरुबाट | **न स्यात्** = हुँदैन | **ऋषिभिः** = ऋषिहरूले |
| **सुस्थिरं** = स्थिर | **वै** = निश्चय पनि | **बहुधा** = धेरै प्रकारले |
| | **एतत्** = यो | **गीयते** = बताएका छन् |

**वाक्यार्थ—** एउटै गुरुबाट सुदृढ र पूरा ज्ञान हुँदैन, त्यसैले ऋषिहरूले पनि एउटै अद्वितीय ब्रह्मलाई धेरै प्रकारले बताएका छन्।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**इत्युक्त्वा स यदुं विप्रस्तमामन्त्र्य गभीरधीः।**
**वन्दितोऽभ्यर्थितो राज्ञा ययौ प्रीतो यथागतम्॥ ३२॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| | **यदुं** = राजा यदुलाई | **इति उक्त्वा** = यति भनेर |

**तं** = ती राजाबाट
**आमन्त्र्य** = अनुमति लिई
**राज्ञा** = राजाद्वारा
**वन्दितः** = वन्दना गरिएका र
**अभ्यर्थितः** = पूजा आदि गरिएका
**गभीरधीः** = गहिरो बुद्धि भएका
**सः विप्रः** = ती अवधूत ब्राह्मण
**प्रीतः** = प्रसन्न भएर
**यथागतं** = जसरी आएका थिए त्यसै गरी
**ययौ** = गए

**वाक्यार्थ–** अगाध बुद्धिवाला ती अवधूत ब्राह्मणले राजा यदुलाई यति भनिसकेपछि राजाले उनलाई वन्दनापूर्वक पूजा गरे। त्यसपछि उनी राजाबाट आज्ञा लिएर जसरी आएका थिए उसै गरी आफ्नो बाटो लागे।

**अवधूतवचः श्रुत्वा पूर्वेषां नः स पूर्वजः।**
**सर्वसङ्गविनिर्मुक्तः समचित्तो बभूव ह ॥ ३३ ॥**

**पदार्थ–**
**अवधूतवचः** = अवधूत ब्राह्मणको कुरा
**श्रुत्वा** = सुनेर
**नः** = हाम्रा
**पूर्वेषां** = पूर्जहरूका पनि
**पूर्वजः** = पूर्वज
**सर्वसङ्गविनिर्मुक्तः** = सारा विषयको आसक्तिले रहित भएका
**सः** = ती राजा यदु
**ह** = निश्चय नै
**समचित्तः** = ब्रह्ममा निष्ठा राख्ने
**बभूव** = भए

**वाक्यार्थ–** यसरी अवधूत ब्राह्मणको कुरा सुनेर हाम्रा पूर्वजहरूका पनि पूर्वज राजा यदु सम्पूर्ण विषयको आसक्तिले रहित भई ब्रह्मनिष्ठ बने।

**विवरण–** दत्तात्रेयलाई अवधूत भन्दछन्। अवधूत शब्द कहीँ-कहीँ निन्दामा पनि प्रयुक्त भएको पाइन्छ। नाङ्गै-बुङ्गै रहने, जे मिल्यो त्यही खाने, जहिले मन लाग्यो त्यही वेलामा सुत्ने र उठ्ने, कुनै आचार-विचार नभएको अर्थमा पनि यो शब्दको प्रयोग भएको पाइन्छ। तर उच्च आत्मस्थितिलाई प्राप्त गरिसकेका महापुरुषहरूमा शरीर र संसारको बोध नहुने भएकाले उनीहरूमा पनि यस्तै विचित्र स्थिति देखापर्दछ। आखिर लोकमा र शास्त्रमा पनि यो गर्न हुने, त्यो गर्न नहुने भन्ने अनेक नियमहरू संसारका अज्ञानमय व्यवहारलाई व्यवस्थित पार्न नै बनाइएका हुन्। मानिसले आफ्नो स्वार्थ अनुकूल हुने गरी केही नियम बनाएका छन्। जसलाई पालन नगर्नेलाई उनीहरू पागलको संज्ञा दिन्छन्। आत्मज्ञानी पनि विषयासक्त व्यक्तिका दृष्टिमा पागलसमान हुन्, तर उनको पागलपन विचित्र किसिमको हुन्छ। त्यसैले अवधूत शब्दको अर्थ गर्दै भनिएको छ– **अक्षरत्वाद् वरेण्यत्वाद् धूतसंसारबन्धनात्, तत्त्वमस्यर्थनिष्ठत्वादवधूत इतीर्यते** अक्षर ब्रह्मलाई जानेर स्वयं ब्रह्मरूप भएकाले वरेण्य अर्थात् सर्वश्रेष्ठ एवं सर्वपूज्य भएकाले, त्यसै गरी संसारको बन्धनलाई नष्ट गरिदिएको हुनाले र तत्त्वमसि महावाक्यको अर्थमा स्थित भएको हुनाले यिनलाई अवधूत भनिएको हो।

अवधूत दत्तात्रेयले चौबीस ओटा गुरुहरू बनाएका छन्। यी चौबीस गुरुमध्ये कुनै हावा, समुद्र, आकाश जस्ता जड वस्तुहरू छन् भने कुनै चाहिँ माछा, पुतली जस्ता सामान्य प्राणी। यहाँसम्म कि वेश्याबाट पनि उनले शिक्षा लिएको बताएका छन्। वास्तवमा यीमध्ये कुनैले पनि

दत्तात्रेयलाई आत्माको विषयमा अनि आत्मस्थितिमा रही कसरी जीवन गुजार्ने भन्ने सम्बन्धमा स्पष्ट उपदेश गरेका होइनन्। तर दत्तात्रेयले तिनीहरूले मोहयुक्त जीवन बिताउँदा दुःख पाएको आदि देखी त्यसबाट स्वयं उपयुक्त शिक्षा ग्रहण गरेका मात्र हुन्। त्यसैले यहाँ आन्तरिक प्रेरणा नै उनको गुरु हो, जसले उनलाई हरेक वस्तु एवं व्यवहार हेर्दा त्यसबाट असल शिक्षा दिन्थ्यो। जसको मन पूर्णतः शुद्ध भएको हुन्छ, अथवा जो आत्मज्ञ महापुरुषहरू हुन्छन्, उनीहरू संसारलाई हेर्दा पनि यसबाट असल प्रेरणा लिइरहेका हुन्छन्। साधकले पनि मोहयुक्त संसारमा बसेर पनि त्यसका अनुभवहरूबाट आत्मज्ञानका लागि चाहिने शिक्षा लिनुपर्दछ भन्ने जनाउन दत्तात्रेयको यो विचित्र जीवन स्वयं एउटा दृष्टान्त या शिक्षा हो। दत्तात्रेयको चरित्रबाट सिक्नुपर्ने अरू पनि धेरै शिक्षाहरू छन्।

सामान्य मानिसहरू कुनै महान् उपदेष्टा मात्र आफ्नो गुरु हुन सक्छ र उसले मात्र आफूलाई सत्यको बाटो देखाउन सक्दछ भन्ने ठान्दछन्, तर उनीहरू संसारका हरेक व्यवहारबाट यस सम्बन्धी कुनै पनि प्रेरणा लिँदैनन्। व्यक्तिमा असल दृष्टि भयो भने सारा संसार उसको मार्गदर्शक हुन सक्छ र उसले असल शिक्षा लिनका लागि सानो–ठुलो व्यक्तिको भेद हेर्न हुँदैन। जहाँ जहिले त्यो प्रेरणा मिल्दछ, त्यसलाई सँगालिहाल्नुपर्दछ भन्ने शिक्षा पनि यहाँबाट पाइन्छ। यो प्रसङ्गबाट प्राप्त हुने अर्को शिक्षा के हो भने व्यक्तिले एउटै गुरुबाट एकैखाले शिक्षा लिएर मात्र सन्तुष्ट बन्नुहुन्न। आत्मतत्त्व अन्वेषण गर्न अनेक महापुरुषहरूले अनेक रूपमा आफ्नो अनुभवको व्याख्या गरेका हुन्छन्, ती सबैको समीक्षा गरी उसले आफ्ना लागि चाहिने उपयुक्त मार्गको अवलम्बन गर्नुपर्दछ। यो कुरा मूलमा नै भनिएको छ— **न ह्येकस्मात् गुरोर्ज्ञानं सुस्थिरं स्यात्** अर्थात् एउटै गुरुबाट एकै प्रकारले सुनिएको कुरा मनभित्र त्यति सुस्थिर हुँदैन। अनेक प्रकारले त्यसलाई स्थिर गर्न अनेक अनुभवहरू सुन्नु आवश्यक छ। यसको के हो भने एउटा गुरुबाट प्रेरित भइसकेको व्यक्तिले अरू महापुरुषहरूको अनादर गर्नुहुँदैन अनि उनीहरूबाट मिल्ने असल शिक्षालाई स्वीकार गर्न हिच्किचाउनुहुँदैन। आफ्नो क्षमता अनुसार आन्तरिक ज्ञान एवं अनुभवको क्षेत्रलाई विशाल बनाउँदै गर्नुपर्दछ। यसरी यस प्रसङ्गबाट अनेक तात्पर्यहरू निस्कन्छन्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां एकादशस्कन्धे नवमोऽध्यायः॥ ९॥**

# अथ दशमोऽध्यायः

## विषयभोगको निरर्थकता

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**मयोदितेष्ववहितः स्वधर्मेषु मदाश्रयः।**
**वर्णाश्रमकुलाचारमकामात्मा समाचरेत्॥ १॥**

**पदार्थ–**
**मया** = मद्वारा
**उदितेषु** = बताइएका
**स्वधर्मेषु** = आफ्ना धर्महरूमा
**अवहितः** = सावधान भएर
**मदाश्रयः** = मेरो शरणमा आई
**अकामात्मा** = कामना रहित बनोस् र
**वर्णाश्रमकुलाचारं** = वर्ण, आश्रम र कुलाचारलाई
**समाचरेत्** = आचरण गरोस्

**वाक्यार्थ–** मानिस मैले बताएको आ-आफ्नो धर्ममा सावधान भई मेरो शरणमा आओस् अनि कामनारहित बनोस् र उसले वर्ण, आश्रम र कुलाचारलाई आचरण गरोस्।

**अन्वीक्षेत विशुद्धात्मा देहिनां विषयात्मनाम्।**
**गुणेषु तत्त्वध्यानेन सर्वारम्भविपर्ययम्॥ २॥**

**पदार्थ–**
**विशुद्धात्मा** = चित्त शुद्ध भएको मुमुक्षुले
**विषयात्मनां** = विषयमा आसक्त
**देहिनां** = प्राणीहरूको
**गुणेषु** = विषयहरूमा
**तत्त्वध्यानेन** = सत्यत्व बुद्धिले गर्दा हुने
**सर्वारम्भविपर्ययं** = सारा कार्यको विपरीत दुःखरूप फल प्राप्त हुने कुरालाई
**अन्वीक्षेत** = खुब विचार गरोस्

**वाक्यार्थ–** स्वधर्मको आचरणबाट चित्त शुद्ध भएको मुमुक्षुले विषयमा आसक्त व्यक्तिहरूले विषयलाई सत्य ठानेर जे-जे गर्दछन्, त्यसको विपरीत दुःखरूप फल प्राप्त गर्दछन् भन्ने कुरा विचार गरोस्।

**विवरण–** यहाँ भगवान्ले उद्धवलाई संसारव्यवहारको निष्फलता हेर्नुपर्दछ भनी सम्झाउनुभएको छ। आत्मजिज्ञासु निष्काम चित्त भएको हुन्छ, अरू सारा प्राणीहरू चाहिँ संसारको उन्नतिलाई सर्वस्व सम्झी त्यसको पछि ज्यान तोडेर लागिरहेका हुन्छन्। आत्मजिज्ञासु पनि समाजको यही भिडमा हुन्छ, त्यसैले उसले भिड जतातिर लागेको छ, त्यहाँबाट आफूलाई जोगाउनुपर्दछ। विवेक नै मुमुक्षुलाई संसारमार्गबाट जोगाउने असल साथी हो। संसारका प्राणीहरू प्राणैको बाजी थापी जतातिर लागेका छन्, त्यताबाट उनीहरूलाई पूर्ण तृप्तिको अनुभूति कहिल्यै हुँदैन। अरु उनीहरू जे उद्देश्यले यहाँ प्रवृत्त भएका हुन्छन्, ती उद्देश्य सफल नभई उल्टो फल मिलिरहेको हुन्छ। संसारमा सुखका लागि कर्म गर्दा दुःख मिलिरहेको छ भनी विचार गऱ्यो भने मुमुक्षु बल्ल यो अज्ञानमय

अवस्थाबाट जाग्न सक्दछ। यसैले यहाँ भगवान्ले मुमुक्षुलाई **अन्वीक्षेत** अर्थात् संसारको व्यवस्थालाई हेरोस् भन्नुभएको छ। अव्यवस्थित भिडलाई हेर्न त्यो भन्दा माथिल्लो कुनै अग्लो ठाउँमा पुगेको हुनुपर्दछ र यस्तो व्यक्तिलाई मात्र भिडको प्रवाहले बगाउन सक्दैन। यसैले संसारमा स्वाभाविक मानिने सबैजसो अज्ञानमय व्यवहारबाट बच्न त्यसको परिणाम विचार गर्नुपर्ने निर्देशन यहाँ दिइएको छ।

संसारी प्राणीका व्यवहारहरू किन निष्फल हुन्छन् भन्ने कुरा बताउँदै भगवान् भन्नुहुन्छ– **गुणेषु तत्त्वध्यानेन** अर्थात् क्षणिक विषयहरूमा सत्यत्वको बुद्धि गर्नाले नै यस्तो हुन्छ। जुन वस्तु स्वयं काल्पनिक छ, त्यसबाट कुनै पनि प्रयोजन पूरा हुन सक्दैन। संसारका पदार्थ पनि अज्ञानद्वारा कल्पना गरिएका हुन्। त्यसैले यी अयथार्थ पदार्थहरूबाट प्राणीहरूले चाहेको यथार्थ सुख कदापि मिल्दैन। कुनै व्यक्तिले मरुभूमिको टल्काइमा पानी देखी त्यसलाई पिउनका लागि प्राणान्त कष्ट गऱ्यो भने के त्यहाँ पानी मिल्न सक्छ ? उसले दौडिँदा-दौडिँदै आफ्नो प्राण नै त्यहीँ त्यागे पनि अथवा धेरै पटक जन्मिएर त्यहाँ फेरि दौड सुरु गरे पनि त्यहाँ उसले पानीको एउटा थोपा पनि पाउन सक्नेछैन किनभने ऊ त्यहाँ पानी खोज्दैछ, जहाँ पानी नभई पानीको टल्काइ मात्र छ। समस्त संसारका विषयहरू पनि यस्तै अनादिकालीन अज्ञानद्वारा देखिएका कल्पित पदार्थ हुन्, जसलाई वास्तविक सम्झी यसबाट सुख पाएरै छोड्ने आशामा अनादि कालदेखि प्राणीहरू यहाँ आफ्नो जीवन गुजारिरहेका छन् र आफूले खोजेको वास्तविक सुख नपाई तड्पिँदै मरिरहेका छन्। उनीहरूका हरेक जीवनका नयाँ-नयाँ कामका आरम्भहरू यसै गरी व्यर्थ भएका छन्। यो अज्ञानको विचित्र लीलालाई हेऱ्यो भने व्यक्ति स्वतः अन्तर्मुख बन्दछ र आफ्नै वास्तविक स्वरूपबाट सुख पाउन थाल्दछ। त्यसैले मुमुक्षुले अज्ञानमय संसारको स्वाभाविक दौडबाट बच्न र आफ्नो अन्तर्मुखतालाई दृढ गर्न पनि संसारी प्राणीहरूको व्यर्थ प्रवृत्तिलाई धीर भावले नियाल्नुपर्दछ भन्ने शिक्षा यहाँ दिइएको छ।

**सुप्तस्य विषयालोको ध्यायतो वा मनोरथः।**
**नानात्मकत्वाद् विफलस्तथा भेदात्मधीर्गुणैः॥ ३॥**

**पदार्थ–**
**सुप्तस्य** = सुतेको व्यक्तिको
**विषयालोकः** = स्वप्नमा देखिएका पदार्थहरू र
**ध्यायतः** = चिन्तन वा कल्पना गरिरहेको व्यक्तिको
**मनोरथः वा** = मनको कल्पना पनि
**नानात्मकत्वात्** = विचित्र खालको हुने हुनाले
**विफलः** = अर्थशून्य छ
**तथा** = त्यसै गरी
**गुणैः** = इन्द्रियहरूको आधारमा हुने
**भेदात्मधीः** = भेदबुद्धि पनि अर्थशून्य नै छ

**वाक्यार्थ–** जसरी सुतेको व्यक्तिले स्वप्नमा देखेका पदार्थहरू र मनले गरेका कल्पनाहरू विचित्र खालका भएकाले व्यर्थ छन्, त्यस्तै इन्द्रियको कारणले जन्मिएको भेदबुद्धि पनि विचित्र खालको भएकाले व्यर्थ नै छ।

**निवृत्तं कर्म सेवेत प्रवृत्तं मत्परस्त्यजेत्।**
**जिज्ञासायां सम्प्रवृत्तो नाद्रियेत् कर्मचोदनाम्॥ ४॥**

**पदार्थ–**
**मत्परः** = ममा निष्ठा राख्ने मोक्षार्थीले
**निवृत्तं** = निष्काम भावले नित्य र नैमित्तिक
**कर्म** = कर्म
**सेवेत** = गरोस्
**प्रवृत्तं** = काम्यकर्म चाहिँ
**त्यजेत्** = त्यागोस् (यदि)
**जिज्ञासायां** = आत्मविचारमा
**सम्प्रवृत्तः** = प्रवृत्त भएपछि भने
**कर्मचोदनां** = नित्य र नैमित्तिक कर्मलाई पनि
**न आद्रियेत्** = आदर नगरोस्

**वाक्यार्थ–** ममा निष्ठा राख्ने मोक्षार्थीले निष्काम भावले नित्य र नैमित्तिक कर्म गरोस्, तर काम्य कर्मलाई त्यागोस्। यदि मुमुक्षु आत्मविचारमा प्रवृत्त भइसकेको छ भने उसले नित्य र नैमित्तिक कर्मलाई पनि आदर नगरोस्।

**यमानभीक्ष्णं सेवेत नियमान् मत्परः क्वचित्।**
**मदभिज्ञं गुरुं शान्तमुपासीत मदात्मकम्॥ ५॥**

**पदार्थ–**
**मत्परः** = ममा निष्ठा राख्ने व्यक्तिले
**यमान्** = यम (अहिंसा, सत्य, अस्तेय, ब्रह्मचर्य र अपरिग्रह) व्रतलाई
**नियमान्** = नियम (शौच, सन्तोष, तप, स्वाध्याय र ईश्वरप्रणिधान) व्रतलाई पनि
**अभीक्ष्णं** = नित्य
**सेवेत** = सेवन गरोस्
**क्वचित्** = कहीँ
**मदभिज्ञं** = मलाई यथार्थरूपले जान्ने
**शान्तं** = शान्त स्वभावको
**मदात्मकं** = मेरै स्वरूप भएका
**गुरुं** = गुरुलाई
**उपासीत** = उपासना गरोस्

**वाक्यार्थ–** ममा निष्ठा राख्ने व्यक्तिले यम र नियमलाई आदरपूर्वक पालन गरोस् अनि मलाई यथार्थ रूपले बुझेका शान्त स्वभावका मेरै स्वरूप भएका गुरुलाई उपासना गरोस्।

**अमान्यमत्सरो दक्षो निर्ममो दृढसौहृदः।**
**असत्वरोऽर्थजिज्ञासुरनसूयुरमोघवाक्॥ ६॥**

**पदार्थ–**
**अमानी** = अभिमान रहित
**अमत्सरः** = कुटिलता रहित
**दक्षः** = आलस्यशून्य
**निर्ममः** = ममतारहित
**दृढसौहृदः** = गुरुमा दृढ प्रेम गर्ने
**असत्वरः** = चञ्चलतारहित तथा
**अर्थजिज्ञासुः** = तत्त्वको विषयमा जिज्ञासा गर्ने
**अनसूयुः** = ईर्ष्या नगर्ने र
**अमोघवाक्** = व्यर्थ नबोल्ने बन्नुपर्दछ

**वाक्यार्थ–** शिष्यले अभिमानरहित हुनुपर्दछ, कुटिलता गर्नुहुँदैन, आलस्य र ममतालाई छाड्नुपर्दछ, गुरुमा दृढप्रेम गर्नुपर्दछ, चञ्चलता गर्नुहुँदैन र तत्त्वको विषयमा गुरुसँग जिज्ञासा गर्नुपर्दछ, ईर्ष्यारहित हुनुपर्छ र व्यर्थमा नबोल्ने बन्नुपर्दछ।

**जायापत्यगृहक्षेत्रस्वजनद्रविणादिषु ।**
**उदासीनः समं पश्यन् सर्वेष्वर्थमिवात्मनः ॥ ७ ॥**

**पदार्थ—**
**जायापत्यगृहक्षेत्रस्वजनद्रविणादिषु** = स्त्री, पुत्र, घर, जग्गा, बन्धुबान्धव र धन आदि
**सर्वेषु** = सबैमा
**आत्मनः** = आफ्नो
**अर्थम्** = प्रयोजन
**समं इव** = समान झैँ
**पश्यन्** = देख्दै वा विचार गर्दै
**उदासीनः** = यिनीहरूमा उदासीन बन्नुपर्दछ

**वाक्यार्थ—** स्त्री, पुत्र, घर, जग्गा, बन्धुबान्धव र धन आदि सबै वस्तुमा आफ्नो सुख आदि प्रयोजनको दृष्टिले समान जस्तो व्यवहार गर्दै सबैमा उदासीन रहनुपर्दछ।

**विलक्षणः स्थूलसूक्ष्माद् देहादात्मेक्षिता स्वदृक् ।**
**यथाग्निर्दारुणो दाह्याद् दाहकोऽन्यः प्रकाशकः ॥ ८ ॥**

**पदार्थ—**
**यथा** = जसरी
**दाह्यात्** = जल्ने वा प्रकाशित हुने
**दारुणः** = दाउराभन्दा
**दाहकः** = जलाउने र
**प्रकाशकः** = प्रकाशित गर्ने
**अग्निः** = आगो
**अन्यः** = अलग हो (त्यसै गरी)
**स्थूलसूक्ष्मात्** = स्थूल र सूक्ष्म
**देहात्** = शरीरभन्दा
**ईक्षिता** = द्रष्टारूपमा रहेको
**स्वदृक्** = स्वप्रकाश
**आत्मा** = आत्मा
**विलक्षणः** = अलग हो

**वाक्यार्थ—** जसरी जल्ने र प्रकाशित हुने दाउराभन्दा त्यसलाई जलाउने र प्रकाशित गर्ने आगो फरक हो, त्यस्तै स्थूल शरीर र सूक्ष्म शरीरको द्रष्टा स्वप्रकाश आत्मा स्थूल र सूक्ष्म शरीरदेखि भिन्न हो।

**निरोधोत्पत्त्यणुबृहन्नानात्वं तत्कृतान् गुणान् ।**
**अन्तः प्रविष्ट आधत्त एवं देहगुणान् परः ॥ ९ ॥**

**पदार्थ—**
**अन्तः** = दाउराको भित्र
**प्रविष्टः** = प्रवेश गरेको
**अग्निः** = आगोले
**तत्कृतान्** = दाउराद्वारा
**निरोधोत्पत्त्यणुबृहन्नानात्वं** = विनाश, उत्पत्ति, अणुत्व, महत्त्व एवं अनेकत्व आदि
**गुणान्** = गुणहरूलाई
**आधत्ते** = धारण गर्दछ
**एवं** = यसै गरी शरीरभित्र प्रविष्ट
**परः** = आत्माले पनि
**देहगुणान्** = शरीरका गुणहरूलाई (धारण गर्दछ)

**वाक्यार्थ—** जसरी दाउराभित्र रहेको आगोमा दाउराको उत्पत्ति, विनाश, ठुलो, सानो र अनेकत्व आदि गुणहरू देखिन्छन् त्यस्तै शरीरभित्र रहेको आत्मामा पनि शरीरका गुणहरू देखिन्छन्।

**विवरण–** यहाँ दाउरा र अग्निको दृष्टान्तले आत्मा स्थूल र सूक्ष्म शरीरभन्दा भिन्न हो भन्ने कुरा बुझाइएको छ। बलिरहेको अगुल्टोलाई हेर्दा त्यहाँ दाउरा र आगोको भेदलाई छुट्याउन सकिँदैन। तर पनि त्यहाँ दाउरालाई आगोले जलाइरहेको र दाउरा चाहिँ जलिरहेको छ भन्ने थाहा हुन्छ। आगो दाहक हो भने दाउरा दाह्य। यसै गरी शरीर र आत्मा एकै ठाउँमा मिसिएकाले यिनीहरूलाई सामान्य बुद्धिले छुट्याउन नसकिए तापनि शरीर आत्माद्वारा प्रकाश्य हो अनि आत्मा चाहिँ यसको प्रकाशक हो भन्ने कुरा स्पष्टतः थाहा पाउन सकिन्छ। सबै प्राणीहरूलाई शरीर एवं मनको व्यवहार थाहा हुन्छ। शरीर हिँडिरहेको, शरीरको कुनै भागमा चोटपटक लागेको या किरा आदिले टोकेको अनि मनमा दुःख, सुख, रिस, दया आदि भावहरू उठेको पनि सबैले थाहा पाइरहेका हुन्छन्। इन्द्रिय, मन आदि मिलेर बनेको सूक्ष्म शरीर अनि बाहिरको स्थूल शरीर दुबैलाई एउटै चेतन तत्त्वले प्रकाशित गरिरहेको हुन्छ। जसलाई मानिसहरू म हुँ भनी बोध गर्दछन् त्यो आत्मतत्त्वले शरीरका सारा अवस्थाहरूलाई अनि बाहिरका विषयहरूलाई पनि प्रकाशित गरिदिएको हुन्छ। मानिसहरू भन्छन्, जुन म बच्चामा आमा र बुबाको काखमा खेल्थेँ, त्यही म आज पनातिहरूको अनुभव गरिरहेको छु। यसप्रकार शरीरका अवस्था पूर्णरूपले परिवर्तित भइसक्दा पनि आत्माको अस्तित्वमा भने केही फेरबदल भएको छैन। यसैले शरीरका अवस्था आदिको प्रकाशक आत्मा यी प्रकाश्य वस्तुहरूभन्दा भिन्न हो भन्ने सिद्ध हुन्छ।

यहाँ के शङ्का हुन्छ भने आत्मा शरीर आदिभन्दा भिन्न हो भने शरीरका धर्महरूद्वारा आत्मा किन प्रभावित बन्दछ त ? प्रकाशक कहिल्यै प्रकाश्यको गुणदोषद्वारा छोइँदैन, जस्तै सूर्य प्राणीहरूका असल, खराब कुनै कर्मद्वारा छोइएका हुँदैनन्, तर आत्मा शरीरबाट प्रभावित भएकाले यसलाई शरीरभन्दा भिन्न कसरी मान्न सकिन्छ र ? यसको उत्तरको रूपमा पनि यहाँ आगोकै दृष्टान्त दिइएको छ। अग्नितत्त्व सर्वव्यापक छ, तर यसलाई बाहिर दृश्यरूपमा प्रकट हुन दाउरारूपी उपाधिको आवश्यकता पर्दछ। दाउराको माध्यमले प्रकट भएको हुँदा दाउराकै अणु–बृहत् अर्थात् घटीबढी अनुसार ठुलो आगो या सानो आगो भन्ने भेदको कल्पना हुन्छ। यसै गरी दाउराकै आधारमा आगो बल्यो या निभ्यो पनि भनिन्छ। आगो दाउरामा प्रकट हुनु आगो बल्नु हो भने दाउरा सकिएका कारण उपाधिको अभाव हुनु आगो निभ्नु हो। यसरी दाउराको गुणधर्मद्वारा आगो प्रभावित झैँ देखिन्छ, तर वास्तवमा त आगो दाउराभन्दा पृथक् वस्तु हो। ठिक यसै गरी आत्मा पनि शरीरभित्र पसेकाले यसका गुणधर्मद्वारा छोइए झैँ देखिन्छ। म बुढो भएँ, म अन्धो भएँ, म बेहोस भएँ आदि भनाइहरूमा आत्माले शरीर, इन्द्रिय र मनका धर्मलाई लिएको जस्तो हुनु पनि केवल प्रतीति मात्र हो। सर्वव्यापक आत्मतत्त्व शरीर, मनरूप उपाधिभित्र जीवरूपले प्रकट भएकाले शरीर, मन आदि हल्लिँदा यसमा पनि हलचल झैँ देखिन्छ, तर आत्मा यी औपाधिक परिवर्तनले रहित छ र यी सबैको प्रकाशक हो। शरीर एवं मनको हुनु–नहुनुलाई आत्माले प्रकाशित गरेको देखिन्छ। स्वप्नावस्थामा स्थूल शरीर नहुनु अनि सुषुप्तिमा मन आदि केही नहुनु पनि आत्माबाटै प्रकाशित भइरहेको छ। यसैले शरीर एवं मनका अनेक अवस्था, अनि भाव–अभावको पनि प्रकाशक भएकाले आत्मतत्त्व यी सबै परिवर्तनहरूभन्दा भिन्न र असङ्ग हो भन्ने कुरा स्वतः स्पष्ट छ।

**योऽसौ गुणैर्विरचितो देहोऽयं पुरुषस्य हि ।**

**संसारस्तन्निबन्धोऽयं पुंसो विद्याच्छिदात्मनः ॥ १० ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**पुरुषस्य** = परमेश्वरको
**गुणैः** = मायागुणद्वारा
**यः** = जो
**असौ** = यो सूक्ष्म शरीर र
**अयं** = यो
**देहः** = स्थूल शरीर
**विरचितः** = रचित छ तथा
**पुंसः** = जीवको
**अयं** = यो
**संसारः** = जन्ममरणरूप संसार पनि
**तन्निबन्धः** = स्थूल र सूक्ष्म शरीरमा आत्मबुद्धिको कारणले नै भएको छ (त्यसैले)
**आत्मनः** = आत्माको
**विद्या** = यथार्थ ज्ञान नै
**छित्** = (जन्ममरणरूप संसारको) छेदन गर्न समर्थ छ

**वाक्यार्थ–** परमेश्वरको मायाको गुणद्वारा नै यो सूक्ष्म शरीर र स्थूल शरीर बनेको छ अनि जीवको जन्म-मरणरूप संसार पनि स्थूल, सूक्ष्म शरीरमा आत्मबुद्धि भएका कारणले नै भएको हो, त्यसैले आत्माको यथार्थ ज्ञान गर्नुपर्दछ, आत्माको ज्ञानले नै संसारलाई निवृत्त गर्दछ।

**तस्माज्जिज्ञासयात्मानमात्मस्थं केवलं परम् ।**

**सङ्गम्य निरसेदेतद्वस्तुबुद्धिं यथाक्रमम् ॥ ११ ॥**

**पदार्थ–**
**तस्मात्** = त्यसैले
**जिज्ञासया** = तत्त्वजिज्ञासा गरेर
**आत्मस्थं** = शरीरमा रहेको
**केवलं** = शुद्ध साक्षीरूप
**परं** = देहभिन्न
**आत्मानं** = आत्मालाई
**सङ्गम्य** = राम्रोसँग बुझेर
**एतद्वस्तुबुद्धिं** = यो देह आदिमा गरेको आत्मबुद्धिलाई
**यथाक्रमं** = क्रमैसँग
**निरसेत्** = त्याग गरोस्

**वाक्यार्थ–** त्यसैले तत्त्वको जिज्ञासा गरेर शरीरमा रहेको शुद्ध साक्षीस्वरूप शरीरदेखि भिन्न आत्मालाई राम्रोसँग बुझी देह आदिमा क्रमैसँग आत्मबुद्धि त्यागोस्।

**आचार्योऽरणिराद्यः स्यादन्तेवास्युत्तरारणिः ।**

**तत्सन्धानं प्रवचनं विद्यासन्धिः सुखावहः ॥ १२ ॥**

**पदार्थ–**
**आचार्यः** = गुरु
**आद्यः** = पहिलो तलको
**अरणिः** = अग्निमन्थनको काठ
**स्यात्** = हो
**अन्तेवासी** = शिष्य
**उत्तरारणिः** = माथिको अग्निमन्थनको काठ हो र
**प्रवचनं** = उपदेश
**तत्सन्धानं** = बिचको मन्थनकाठ हो अनि
**विद्या** = आत्मज्ञान चाहिँ
**सुखावहः** = सुख दिने
**सन्धिः** = सन्धिमा हुने अग्नि हो

**वाक्यार्थ–** गुरु अग्निमन्थनको तलको अरणि जस्तो हो, शिष्य माथिको अरणि जस्तो हो भने

उपदेश बिचको मन्थनकाष्ठ जस्तो हो अनि सुख दिने आत्मज्ञान चाहिँ सन्धिस्थलमा उत्पन्न हुने अग्नि जस्तो हो।

**वैशारदी सातिविशुद्धबुद्धिर्धुनोति मायां गुणसम्प्रसूताम्।**
**गुणांश्च सन्दह्य यदात्ममेतत् स्वयं च शाम्यत्यसमिद् यथाग्निः॥ १३॥**

**पदार्थ—**
**वैशारदी** = अति निपुण गुरुबाट प्राप्त गरेको
**सा** = त्यो
**अतिविशुद्धबुद्धिः** = अत्यन्त शुद्ध ज्ञानले
**गुणसम्प्रसूतां** = गुणको कार्यरूप
**मायां** = मायारूप संसारलाई
**धुनोति** = नाश गरिदिन्छ र
**एतत्** = यो संसार
**यदात्मं** = जुन गुणस्वरूप छ, ती
**गुणान् च** = गुणहरूलाई पनि
**सन्दह्य** = जलाएर
**असमित्** = दाउरारहित
**अग्निः यथा** = आगो झैँ
**स्वयं च** = आफू पनि
**शाम्यति** = शान्त हुन्छ

**वाक्यार्थ—** अति निपुण गुरुबाट प्राप्त गरेको अत्यन्त विशुद्ध ज्ञानले गुणको कार्यरूप संसारलाई निवृत्त गरिदिन्छ र यो संसार जुन गुणस्वरूप छ, ती गुणहरूलाई पनि डढाएर दाउरारहित आगो झैँ आफैँ पनि शान्त हुन्छ।

**विवरण—** यहाँ गुरुको उपदेशबाट उत्पन्न हुने ज्ञान र त्यसको कार्यको विषयमा आगोको दृष्टान्त दिई सम्झाइएको छ। यज्ञका लागि अग्नि उत्पन्न गर्दा अरणिमन्थन गरिन्छ। अरणिमा तीन ओटा काठ हुन्छन्, तल र माथि दुई तिरबाट चेप्ने दुई ओटा काठ र एउटा बिचको मन्थन गरिने काठ। तलको काठलाई अधरारणि अनि माथिल्लो काठलाई उत्तरारणि भनिन्छ। मन्थन गरिने काठलाई सन्धान भनिन्छ। उपनिषद्मा अरणिमन्थनबाट जन्मेको अग्निकै रूपमा विद्या, लोक, प्रजा आदिको व्याख्या गरिएको छ र त्यसलाई त्यहाँ अधिविद्य, अधिलोक, अधिप्रज उपासना भनिएको छ। तैत्तिरीयोपनिषद् (१।३)मा विद्या उत्पन्न हुने प्रक्रियालाई अरणिमन्थनबाट उत्पन्न हुने अग्निकै रूपमा व्याख्या गरिएको छ— **आचार्यः पूर्वरूपम्, अन्तेवास्युत्तररूपम्, विद्या सन्धिः, प्रवचनं सन्धानम्** अर्थात् आचार्य अरणिको तल्लो काठसमान हो, शिष्य माथिल्लो काठ हो, प्रवचन अर्थात् पढाइ चाहिँ बिचको मन्थन काठ हो अनि त्यसबाट निस्कने विद्या चाहिँ आगो हो। यहाँ पनि विद्यालाई सन्धि अर्थात् सन्धिस्थानमा हुने अग्निसमान भनी उपनिषद्कै कुरा बताइएको छ।

यहाँ विद्या भनेर अरू सामान्य विद्या नभई आत्मज्ञानी गुरुबाट जिज्ञासु शिष्यले पाउने ब्रह्मविद्याको चर्चा गरिएको छ। शिष्य र गुरुको परस्पर अध्ययन-अध्यापनरूपी मन्थनबाट उत्पन्न हुने विद्यालाई यहाँ वैशारदी बुद्धि भनिएको छ। विशारद शब्दको अर्थ अत्यन्त निपुण भन्ने हुन्छ। **विशारदेन प्राप्ता विशारदेन उपदिष्टा वा वैशारदी** अर्थात् अत्यन्त निपुण जिज्ञासु शिष्यले प्राप्त गरेको या त्यस्तै दुर्लभ अनुभवसम्पन्न गुरुले उपदेश गरेको भन्ने अर्थमा यहाँ विद्यालाई वैशारदी भनिएको हो। आत्मज्ञान अत्यन्त दुर्लभ छ र यसका अनुभवसम्पन्न वक्ता अनि पूर्ण विरक्त जिज्ञासु श्रोता यी दुई पनि अत्यन्त दुर्लभ छन्। उपनिषद्मा भनिएको छ— **आश्चर्यो वक्ता कुशलोऽस्य श्रोताश्चर्यो लब्धा कुशलानुशिष्टः** (कठोपनिषद् १।२।७) अर्थात् ब्रह्मविद्याको सही

उपदेष्टा पाउनु आश्चर्य लाग्दो एवं अत्यन्त दुर्लभ छ अनि यसलाई योग्यतापूर्वक सुन्ने निपुण व्यक्ति पनि दुर्लभ छ। अनुभवसम्पन्न कुशल गुरुद्वारा अनुशासित शिष्यले यसलाई साक्षात्कार गर्‍यो भने त्यो कुरा पनि आश्चर्य लाग्दो र अत्यन्त दुर्लभ हुन्छ। यसरी उपनिषद्‌मा ब्रह्मविद्याका आचार्यलाई जति दुर्लभ बताइएको छ, त्यति नै यसमा दृढतापूर्वक लाग्ने शिष्यलाई पनि अत्यन्त निपुण भनी प्रशंसा गरिएको छ। स्वर्गीय सुखभोग अनि अनन्त आयुलाई पनि तिरस्कार गरी ब्रह्मविद्या पाउन कटिबद्ध रहने नचिकेतालाई उनका गुरु यमराजले सही विद्यार्थी भनी प्रशंसा गरेका छन्— **विद्याभीप्सिनं नचिकेतसं मन्ये न त्वा कामा बहवोऽलोलुपन्त** (कठोपनिषद् १।२।४) अर्थात् हे नचिकेता ! तिमीलाई मैले ब्रह्मविद्याका असली विद्यार्थी मानेँ किनभने तिमी अनेकौँ कामनाहरूको प्रलोभनबाट पनि लोभिएनौ। यो लोकदेखि ब्रह्मलोकसम्मका सारा विषयभोगलाई लात मारेपछि मात्र यो आत्मज्ञानको मार्गमा यात्रा प्रारम्भ हुन्छ। यसरी दुःखपूर्वक प्राप्त गर्ने यो विद्या अति विशुद्ध हुन्छ, किनभने यसमा नाशवान् अपवित्र विषयहरूको स्पर्श छैन, यो त नित्य आत्मालाई चिनाउने ज्ञान हो। यसले मायालाई कार्यसहित नै नष्ट गरिदिन्छ। जसरी आगोले सबै दाउरा जलाइसकेपछि नयाँ जलाउने दाउराको अभावमा ऊ आफैँ शान्त हुन्छ, त्यसै गरी तीन गुणमय बन्धनलाई जलाइदिइसकेपछि यो ब्रह्मज्ञानरूपी आगोले पनि अरू जलाउने विषय नपाई आफ्नो नित्य ब्रह्मरूपतामा शान्त हुन्छ। साथै ब्रह्माकार अन्तःकरणवृत्तिरूप ज्ञानले स्वयं अन्तःकरणलाई पनि नष्ट गरिदिन्छ र आफू पनि यसकै चरम अर्थात् अन्तिम वृत्ति भएकाले अन्तःकरण सँगसँगै स्वयं नष्ट हुन्छ। यसरी आगोले सारा दाउरा जलाइसकेपछि आफू पनि शान्त भई अव्यक्त तेजतत्त्वमा मिलेजस्तो आत्मज्ञानले पनि सारा दृश्यप्रपञ्च, अन्तःकरण आदिलाई समाप्त पारी आफू पनि शान्त भई अव्यक्त ब्रह्मतत्त्वको रूपमा रहन्छ।

**अथैषां कर्मकर्तॄणां भोक्तॄणां सुखदुःखयोः।**
**नानात्वमथ नित्यत्वं लोककालागमात्मनाम्॥ १४॥**
**मन्यसे सर्वभावानां संस्था ह्यौत्पत्तिकी यथा।**
**तत्तदाकृतिभेदेन जायते भिद्यते च धीः॥ १५॥**
**एवमप्यङ्ग सर्वेषां देहिनां देहयोगतः।**
**कालावयवतः सन्ति भावा जन्मादयोऽसकृत्॥ १६॥**

**पदार्थ—**
**अथ** = अब तिमीले
**कर्मकर्तॄणां** = कर्मका कर्ता र
**सुखदुःखयोः** = सुख र दुःखका
**भोक्तॄणां** = भोक्ता
**एषां** = यी जीवहरूको
**नानात्वं** = अनेकतालाई
**अथ** = त्यसपछि
**लोककालागमात्मनां** = लोक, काल, आगम र आत्माको
**नित्यत्वं** = नित्यतालाई स्वीकार गर्दछौ र
**हि** = निश्चय पनि
**सर्वभावानां** = सम्पूर्ण पदार्थको
**संस्था** = स्थिति

**औत्पत्तिकी** = प्रवाहरूपले नित्य र
**यथा** = यथार्थरूपले मान्दछौ अनि
**तत्तदाकृतिभेदेन** = घट, पट आदि आकृतिको भेदले
**धीः** = बुद्धि (ज्ञान)
**जायते** = उत्पन्न हुन्छ र
**भिद्यते च** = बदलिन्छ पनि भनेर
**मन्यसे** = मान्दछौ भने
**अङ्ग** = हे प्रिय उद्धव
**एवं अपि** = यस्तो मान्दा पनि
**सर्वेषां** = सम्पूर्ण
**देहिनां** = जीवहरूको
**देहयोगतः** = शरीरको सम्बन्धले
**कालावयवतः** = क्षण, दिन, मास आदि समयभेदका कारण
**असकृत्** = बारम्बार
**जन्मादयः** = जन्म, मृत्यु आदि
**भावाः** = विकारहरू
**सन्ति** = हुन्छन्

**वाक्यार्थ–** हे उद्धव ! यदि तिमीले कर्मका कर्ता र सुख-दुःखका भोक्ता जीवात्मा अनेक छन्, तिनको भोगस्थान विविध लोकहरू, काल, आगम र आत्मा पनि नित्य छन् भन्दछौ र भोग्य पदार्थहरूलाई पनि प्रवाहरूपले नित्य मानी आकृतिमा भेदले ज्ञान उत्पन्न हुन्छ र बदलिन्छ भन्छौ भने पनि सम्पूर्ण जीवात्माहरूको शरीर सम्बन्धको कारणले क्षण, दिन, मास आदि कालवश बारम्बार जन्म, मृत्यु आदि विकारहरू भइ नै रहन्छन्।

**तत्रापि कर्मणां कर्तुरस्वातन्त्र्यं च लक्ष्यते।**
**भोक्तुश्च दुःखसुखयोः को न्वर्थो विवशं भजेत्॥ १७॥**

**पदार्थ–**
**तत्र अपि** = त्यो मतमा पनि
**कर्मणां** = कर्मको
**कर्तुः** = कर्ता र
**दुःखसुखयोः** = सुख र दुःखको
**भोक्तुः च** = भोक्ता जीवात्माको पनि
**अस्वातन्त्र्यं** = अस्वतन्त्रता
**लक्ष्यते च** = निश्चित हुन्छ
**विवशं** = पराधीनलाई
**को नु** = कुन चाहिँ
**अर्थः** = विषयले
**भजेत्** = सुख देला

**वाक्यार्थ–** हे उद्धव ! अनेक जीव मानेको पक्षमा पनि कर्मको कर्ता र सुखदुःखका भोक्ता जीवात्माहरू स्वतन्त्र छैनन्, पराधीन भएका तिनीहरूलाई कुन चाहिँ विषयले सुख देला र ?

**न देहिनां सुखं किञ्चिद् विद्यते विदुषामपि।**
**तथा च दुःखं मूढानां वृथाहङ्करणं परम्॥ १८॥**

**पदार्थ–**
**विदुषां** = विविध उपाय जान्ने विद्वान्
**देहिनां** = प्राणीहरूलाई
**किञ्चित्** = केही
**सुखं** = सुख
**न विद्यते** = छैन र
**तथा** = त्यस्तै
**मूढानां च** = मूर्ख मानिसहरूलाई पनि
**दुःखं** = दुःख मात्र पनि छैन
**अहङ्करणं** = अहङ्कार गर्नु
**परं** = केवल
**वृथा** = बेकारको कुरा हो

**वाक्यार्थ–** शास्त्रीय कर्ममा कुशल भएका विद्वान्हरूलाई सुखै सुख हुँदैन र मूर्खहरूलाई दुःखै दुःख पनि हुँदैन, किनभने सुख र दुःख त प्रारब्ध कर्म अनुसार मिल्ने हुन्। त्यसैले विद्वान्हरूले

हामी कर्मनिष्ठ हौँ, त्यसैले सुखी छौँ भनी अहङ्कार गर्नु बेकार हो।

**यदि प्राप्तिं विघातं च जानन्ति सुखदुःखयोः।**

**तेऽप्यद्धा न विदुर्योगं मृत्युर्न प्रभवेद् यथा॥ १९॥**

**पदार्थ—**
**यदि** = यदि कथञ्चित्
**सुखदुःखयोः** = सुख र दुःखको
**प्राप्तिं** = प्राप्तिलाई
**विघातं च** = विनाशलाई पनि
**जानन्ति** = जान्दछन् भने पनि
**ते अपि** = तिनीहरूले पनि
**यथा** = जसरी जे उपाय गर्दा
**मृत्युः** = मृत्युले
**न प्रभवेत्** = आक्रमण गर्दैन
(त्यस्तो)
**योगं** = उपायलाई
**अद्धा** = अवश्य
**न विदुः** = जान्दैनन्

**वाक्यार्थ—** यदि कसैले सुख र दुःखको प्राप्ति र विनाशलाई जान्दछन् भने पनि जुन उपाय गर्दा मृत्युले आफूलाई आक्रमण गर्दैन, त्यस्तो उपाय तिनीहरूले पनि जानेका हुँदैनन्।

**कोऽन्वर्थः सुखयत्येनं कामो वा मृत्युरन्तिके।**

**आघातं नीयमानस्य वध्यस्येव न तुष्टिदः॥ २०॥**

**पदार्थ—**
**नु** = निश्चय नै
**कः** = कुन
**अर्थः** = धन आदि पदार्थले
**कामः वा** = अथवा
शब्द आदि विषयले
**एनं** = यो प्राणीलाई
**सुखयति** = सुख दिन सक्दछ
**अन्तिके** = नजिकै रहेको
**मृत्युः** = मृत्युले
**आघातं** = मार्ने ठाउँमा
**नीयमानस्य** = लैजान लागिएको
**वध्यस्य इव** = मारिने प्राणीलाई
(माला चन्दन आदि सुख
सामग्रीले) झैँ
**तुष्टिदः न** = (मानिसलाई) सुख
दिनेवाला
**न** = हुँदैन

**वाक्यार्थ—** हरबखत मृत्यु जसको नजिकमा छ, त्यस्तो यो प्राणीलाई कुन धन आदि पदार्थले र शब्द आदि विषयले सुख देलान् र? जसरी वधशालामा मार्न लैजान लागेको प्राणीलाई माला, चन्दन, स्त्री आदि सुख साधनले पनि सुख दिन सक्दैनन्।

**श्रुतं च दृष्टवद् दुष्टं स्पर्धासूयात्ययव्ययैः।**

**बह्वन्तरायकामत्वात् कृषिवच्चापि निष्फलम्॥ २१॥**

**पदार्थ—**
**श्रुतं च** = पारलौकिक स्वर्ग
आदि सुख पनि
**दृष्टवत्** = लौकिक सुख झैँ
**स्पर्धासूयात्ययव्ययैः** = स्पर्धा,
ईर्ष्या, नाश र अपक्षय आदि
दोषले
**दुष्टं** = दूषित छ र
**बह्वन्तरायकामत्वात्** = त्यो सुख
धेरै विघ्नले आक्रान्त भएकाले
**कृषिवत् च** = कृषिकर्म झैँ
**निष्फलमपि** = निष्फल पनि छ

**वाक्यार्थ—** पारलौकिक स्वर्ग आदि सुख पनि लौकिक सुख झैँ प्रतिस्पर्धा, ईर्ष्या, नाश, अपक्षय

आदि दोषले दूषित छ र धेरै विघ्नले आक्रान्त भएकाले कृषिकर्म झैं निष्फल पनि छ।

**अन्तरायैरविहतो यदि धर्मः स्वनुष्ठितः।**
**तेनापि निर्जितं स्थानं यथा गच्छति तच्छृणु॥ २२॥**

**पदार्थ—**
**यदि** = यदि कथञ्चित्
**अन्तरायैः** = विघ्नहरूद्वारा
**अविहतः** = नष्ट नभएको
**धर्मः** = धर्म
**स्वनुष्ठितः** = आचरण गरियो भने
**तेन** = त्यो कर्मद्वारा
**निर्जितं** = प्राप्त हुने
**स्थानं** = स्थानमा
**यथा** = जसरी
**गच्छति** = मानिस जान्छ
**तत् अपि** = त्यो कुरो पनि
**श्रृणु** = सुन

**वाक्यार्थ—** यदि विघ्नद्वारा नष्ट नहुने याग आदि धर्मको अनुष्ठान भयो भने त्यसद्वारा प्राप्त हुने स्थानमा मानिस कसरी जान्छ, त्यो पनि म बताउँछु, सुन।

**इष्ट्वेह देवता यज्ञैः स्वर्लोकं याति याज्ञिकः।**
**भुञ्जीत देववत् तत्र भोगान् दिव्यान् निजार्जितान्॥ २३॥**

**पदार्थ—**
**याज्ञिकः** = यज्ञ गर्ने व्यक्ति
**इह** = यहाँ
**यज्ञैः** = यज्ञहरूद्वारा
**देवताः** = देवताहरूलाई
**इष्ट्वा** = आराधना गरेर
**स्वर्लोकं** = स्वर्गलोकमा
**याति** = जान्छ
**तत्र** = त्यहाँ
**निजार्जितान्** = आफ्नो कर्मद्वारा कमाइएका
**दिव्यान्** = स्वर्गीय
**भोगान्** = भोगहरूलाई
**देववत्** = देवताहरूले झैं
**भुञ्जीत** = भोग गर्दछ

**वाक्यार्थ—** यज्ञ गर्ने व्यक्तिले यो लोकमा यज्ञद्वारा इन्द्र आदि देवताहरूलाई आराधना गर्दछ र स्वर्ग लोकमा जान्छ, मरेपछि त्यहाँ आफ्नो कर्मद्वारा कमाएका स्वर्गीय भोगहरूलाई देवताहरूले झैं भोग्दछ।

**स्वपुण्योपचिते शुभ्रे विमान उपगीयते।**
**गन्धर्वैर्विहरन् मध्ये देवीनां हृद्यवेषधृक्॥ २४॥**

**पदार्थ—**
**स्वपुण्योपचिते** = आफ्नो पुण्यले प्राप्त गरेको
**शुभ्रे** = श्रेष्ठ
**विमाने** = विमानमा
**देवीनां मध्ये** = अप्सराहरूको साथमा
**हृद्यवेषधृक्** = सुन्दर शरीर धारण गरेर
**विहरन्** = विहार गर्दै
**गन्धर्वैः** = गन्धर्वहरूद्वारा
**उपगीयते** = कीर्ति गाइन्छ

**वाक्यार्थ—** आफ्नो पुण्यको प्रभावले प्राप्त भएको श्रेष्ठ विमानमा अप्सराहरूसहित अत्यन्त सुन्दर शरीर धारण गरेर ऊ विहार गर्दछ र गन्धर्वहरूले उसको स्तुतिगान गर्दछन्।

**स्त्रीभिः कामगयानेन किङ्किणीजालमालिना ।**

**क्रीडन् न वेदात्मपातं सुराक्रीडेषु निर्वृतः ॥ २५ ॥**

**पदार्थ–**
**किङ्किणीजालमालिना** = साना घन्टीहरूको पङ्क्तिले सुशोभित
**कामगयानेन** = इच्छा अनुसार चल्ने विमानद्वारा
**सुराक्रीडेषु** = देवताहरूका नन्दन आदि उद्यानमा
**निर्वृतः** = अत्यन्त प्रसन्न भई
**स्त्रीभिः** = अप्सराहरूसँग
**क्रीडन्** = क्रीडा गर्दै
**आत्मपातं** = आफ्नो पतनलाई
**न वेद** = जान्दैन

**वाक्यार्थ–** साना घन्टीका मालाले सुशोभित, इच्छा अनुसार चल्ने विमानद्वारा नन्दन आदि उद्यानहरूमा अति प्रसन्न भई अप्सराहरूसँग घुम्दै र खेल्दै गर्दा उसले आफ्नो पतन भएको थाहा पाउँदैन।

**तावत् प्रमोदते स्वर्गे यावत् पुण्यं समाप्यते ।**

**क्षीणपुण्यः पतत्यर्वागनिच्छन् कालचालितः ॥ २६ ॥**

**पदार्थ–**
**यावत्** = जबसम्म
**पुण्यं** = पुण्य (भोगद्वारा)
**समाप्यते** = समाप्त हुन्छ
**तावत्** = तबसम्म
**स्वर्गे** = स्वर्गमा
**प्रमोदते** = आनन्दित हुन्छ
**क्षीणपुण्यः** = पुण्य समाप्त भएपछि
**अनिच्छन्** = नचाहँदा नचाहँदै पनि
**कालचालितः** = कालद्वारा विचलित भएर
**अर्वाक्** = तलतिर
**पतति** = खस्छ

**वाक्यार्थ–** जबसम्म भोगद्वारा उसको पुण्य समाप्त हुँदैन तबसम्म ऊ स्वर्गमा आनन्दित हुन्छ, जब पुण्य समाप्त हुन्छ तब नचाहँदा नचाहँदै पनि कालको प्रभावले तलतिर खस्दछ।

**यद्यधर्मरतः सङ्गादसतां वाजितेन्द्रियः ।**

**कामात्मा कृपणो लुब्धः स्त्रैणो भूतविहिंसकः ॥ २७ ॥**

**पशूनविधिनालभ्य प्रेतभूतगणान् यजन् ।**

**नरकानवशो जन्तुर्गत्वा यात्युल्बणं तमः ॥ २८ ॥**

**पदार्थ–**
**यदि** = यदि
**असतां** = दुर्जनको
**सङ्गात्** = सङ्गतले
**अधर्मरतः** = अधर्ममा लागेर
**अजितेन्द्रियः** = इन्द्रियलाई जित्न नसकको
**कामात्मा वा** = अथवा विषयासक्त
**कृपणः** = दुःखी
**लुब्धः** = लोभी
**स्त्रैणः** = स्त्रीलम्पट र
**भूतविहिंसकः** = प्राणीहिंसा गर्ने भएर
**अविधिना** = शास्त्र आदि विधान विना नै
**पशून्** = पशुहरूलाई
**आलभ्य** = मारी

**प्रेतभूतगणान्** = प्रेत र भूतगणहरूलाई
**यजन्** = आराधना गरी
**जन्तुः** = यो जीवात्मा
**अवशः** = परवश भएर
**नरकान्** = नरकमा
**गत्वा** = गई
**उल्बणं** = भयानक
**तमः** = अज्ञानबहुल स्थावर आदि जन्म
**याति** = प्राप्त गर्दछ

**वाक्यार्थ–** यदि विषयी व्यक्तिको सङ्गतले अधर्मपरायण भई अजितेन्द्रिय बनेर वा विषयमा आसक्त बनी भोग प्राप्त गर्न नसकेर दुःखी, लोभी, स्त्रीलम्पट र प्राणीको हत्या गर्ने भई दुष्ट व्यक्तिहरूको भनाइले प्रलोभित बन्दै शास्त्रविधिविना नै धन आदि प्राप्तिको लागि पशुहरूलाई मारेर प्रेत, भूत गणको आराधना गरेको छ भने त्यो जीवात्मा परवश भई नरक पुग्दछ अनि त्यहाँ यातना भोगी अत्यन्त अज्ञानयुक्त स्थावर आदि जन्म लिन पुग्दछ।

**कर्माणि दुःखोदर्काणि कुर्वन् देहेन तैः पुनः।**
**देहमाभजते तत्र किं सुखं मर्त्यधर्मिणः॥ २९॥**

**पदार्थ–**
**देहेन** = शरीरद्वारा
**दुःखोदर्काणि** = परिणाममा दुःखरूपी फल दिने
**कर्माणि** = कर्महरू
**कुर्वन्** = गर्दै
**तैः** = ती कर्महरूद्वारा
**पुनः** = फेरि
**देहं** = शरीर
**आभजते** = प्राप्त हुन्छ (त्यसैले)
**तत्र** = यो संसारमा
**मर्त्यधर्मिणः** = मरणशील मनुष्यहरूलाई
**किं सुखम्** = के सुख छ र

**वाक्यार्थ–** शरीरद्वारा परिणाममा दुःख हुने कर्महरू गर्ने यो जीवले ती कर्महरूका कारण फेरि शरीर प्राप्त गर्दछ। अतः यो संसारमा मरणशील मनुष्यहरूलाई के सुख छ र ?

**लोकानां लोकपालानां मद्भयं कल्पजीविनाम्।**
**ब्रह्मणोऽपि भयं मत्तो द्विपरार्धपरायुषः॥ ३०॥**

**पदार्थ–**
**लोकानां** = लोकका अधिपति
**कल्पजीविनां** = कल्पभरि बाँच्ने
**लोकपालानां** = लोकपालहरूलाई पनि
**मत्** = मबाट
**भयं** = भय हुन्छ र
**द्विपरार्धपरायुषः** = दुई परार्द्ध आयु भएका
**ब्रह्मणः अपि** = ब्रह्माजीलाई पनि
**मत्तः** = मबाट
**भयम्** = भय हुन्छ

**वाक्यार्थ–** कल्पसम्म बाँच्ने स्वर्ग आदि लोकका अधिपति लोकपालहरूलाई र दुई परार्ध आयु भएका ब्रह्माजीलाई पनि मबाट भय हुन्छ।

**गुणाः सृजन्ति कर्माणि गुणोऽनुसृजते गुणान्।**
**जीवस्तु गुणसंयुक्तो भुङ्क्ते कर्मफलान्यसौ॥ ३१॥**

**पदार्थ—**
**गुणाः** = इन्द्रियहरूले
**कर्माणि** = कर्महरू
**सृजन्ति** = उत्पन्न गर्दछन्
**गुणः** = सत्त्व आदि गुणले
**गुणान्** = इन्द्रियहरूलाई
**अनुसृजते** = कर्ममा प्रवृत्त गराउँछन्
**असौ** = तिनीहरूमा अहङ्कार गर्ने
**जीवः तु** = जीवात्माले चाहिँ
**गुणसंयुक्तः** = देह, इन्द्रिय आदिमा तादात्म्याध्यास गरेर
**कर्मफलानि** = सुख र दुःख आदि कर्मको फल
**भुङ्क्ते** = भोग गर्दछ

**वाक्यार्थ—** इन्द्रियहरूले कर्महरू गर्दछन् र सत्त्व आदि गुणले इन्द्रियहरूलाई आ-आफ्नो कर्ममा प्रवृत्त गराउँछन् तर यो जीवात्मा चाहिँ उनीहरूमा अहङ्कार गर्दछ र देह, इन्द्रिय आदिमा तादात्म्याध्यास गरेर कर्मको फल सुख र दुःखको भोग गर्दछ।

**यावत् स्याद् गुणवैषम्यं तावन्नानात्वमात्मनः।**
**नानात्वमात्मनो यावत् पारतन्त्र्यं तदैव हि॥ ३२॥**

**पदार्थ—**
**हि** = निश्चय नै
**यावत्** = जहिलेसम्म
**गुणवैषम्यं** = गुणको विषमता
**स्यात्** = हुन्छ
**तावत्** = तबसम्म
**आत्मनः** = आत्माको
**नानात्वं** = अनेकता हुन्छ
**यावत्** = जहिलेसम्म
**आत्मनः** = आत्माको
**नानात्वं** = अनेकता हुन्छ
**तदा एव** = त्यहाँसम्म
**पारतन्त्र्यम्** = पराधीनता हुन्छ

**वाक्यार्थ—** जबसम्म गुणमा विषमता हुन्छ तबसम्म आत्मामा अनेकता हुन्छ, जबसम्म आत्मामा अनेकता हुन्छ तबसम्म पराधीनता भइरहन्छ।

**यावदस्यास्वतन्त्रत्वं तावदीश्वरतो भयम्।**
**य एतत् समुपासीरंस्ते मुह्यन्ति शुचार्पिताः॥ ३३॥**

**पदार्थ—**
**यावत्** = जहिलेसम्म
**अस्य** = यो आत्माको
**अस्वतन्त्रत्वं** = परतन्त्रता छ
**तावत्** = त्यस बखतसम्म
**ईश्वरतः** = ईश्वरबाट
**भयं** = भय हुन्छ (त्यसैले)
**ये** = जो मनुष्यहरू
**एतत्** = यो गुणवैषम्यलाई
**समुपासीरन्** = उपासना गर्दछन् (देह आदिमा अभिमान गर्दछन्)
**ते** = तिनीहरू
**शुचार्पिताः** = शोकले व्याप्त भएर
**मुह्यन्ति** = मोहित हुन्छन्

**वाक्यार्थ—** जहिलेसम्म यो जीव परतन्त्र छ तबसम्म यसलाई ईश्वरबाट भय छ, त्यसैले जो गुणवैषम्यलाई उपासना गर्दछन् तिनीहरू शोकले व्याप्त भई मोहित हुन्छन्।

**काल आत्मागमो लोकः स्वभावो धर्म एव च।**
**इति मां बहुधा प्राहुर्गुणव्यतिकरे सति॥ ३४॥**

**पदार्थ—**
**गुणव्यतिकरे सति** = मायारूप गुणमा क्षोभ उत्पन्न भएपछि
**कालः** = काल
**आत्मा** = जीव वा ईश्वर
**आगमः** = शास्त्र
**लोकः** = लोक
**स्वभावः** = स्वभाव र
**धर्मः इति च** = धर्म शब्दले पनि
**माम् एव** = मलाई नै
**बहुधा** = धेरै प्रकारले
**प्राहुः** = भन्दछन्

**वाक्यार्थ—** मायारूप गुणमा क्षोभ उत्पन्न भएपछि मानिसहरू मलाई नै काल, आत्मा, शास्त्र, लोक, स्वभाव र धर्म इत्यादि शब्दले निरूपण गर्दछन्।

**उद्धव उवाच** (उद्धवले भने)

**गुणेषु वर्तमानोऽपि देहजेष्वनपावृतः।**
**गुणैर्न बध्यते देही बध्यते वा कथं विभो॥ ३५॥**

**पदार्थ—**
**विभो** = हे व्यापक प्रभु
**गुणेषु** = शरीर आदिमा
**वर्तमानः अपि** = रहेको भए पनि
**देही** = यो जीवात्मा
**देहजेषु** = देहबाट उत्पन्न हुने कर्ममा वा सुखदुःखरूप फलमा
**कथं** = कसरी
**न बध्यते** = बाँधिँदैन
**गुणैः** = गुण आदिद्वारा निर्लिप्त र
**अनपावृतः** = देह आदिसँग सम्पर्क नभएको आत्मा
**कथं वा** = कसरी
**बध्यते** = बाँधिन्छ

**वाक्यार्थ—** हे व्यापक प्रभु ! यो जीवात्मा शरीरभित्र रहेर पनि शरीरबाट हुने कर्महरूबाट र सुखदुःख आदिरूप फलबाट किन बाँधिँदैन ? अथवा गुण आदिद्वारा निर्लिप्त र शरीर आदिसँग सम्पर्करहित भएर पनि आत्मा कसरी बन्धनमा पर्दछ ?

**कथं वर्तेत विहरेत् कैर्वा ज्ञायेत लक्षणैः।**
**किं भुञ्जीतोत विसृजेच्छयीतासीत याति वा॥ ३६॥**

**पदार्थ—**
(बद्ध र मुक्त व्यक्ति)
**कथं** = कसरी
**वर्तेत** = रहन्छ
**विहरेत्** = विहार गर्दछ
**कैः** = के-के
**लक्षणैः** = लक्षणहरूद्वारा
**ज्ञायेत वा** = चिनिन्छ
**किं वा** = के
**भुञ्जीत** = भोजन गर्दछ
**उत** = अथवा
**विसृजेत्** = त्याग गर्दछ
**शयीत** = सुत्दछ
**आसीत** = बस्दछ र
**याति** = हिँड्दछ

**वाक्यार्थ—** बद्ध अथवा मुक्त जीवात्मा कसरी रहन्छ ? यसले कसरी विहार गर्दछ ? यो के-के लक्षणद्वारा चिनिन्छ ? यसले के खान्छ, के त्याग गर्दछ, र यो कसरी सुत्छ, बस्दछ र हिँड्छ ?

**एतदच्युत मे ब्रूहि प्रश्नं प्रश्नविदां वर।**
**नित्यमुक्तो नित्यबद्ध एक एवेति मे भ्रमः॥ ३७॥**

**पदार्थ–**
**अच्युत** = हे अच्युत
**प्रश्नविदां वर** = हे प्रश्न जान्नेमा श्रेष्ठ प्रभु
**एतत्** = यो बद्ध र मुक्त विषयक
**मे** = मेरो
**प्रश्नं** = प्रश्नको
**ब्रूहि** = उत्तर दिनुहोस्
**एकः एव** = एउटै आत्मा
**नित्यबद्धः** = (अनादि गुणको संसर्गले) नित्यबद्ध र
**नित्यमुक्तः इति** = (असङ्ग हुनाले) नित्यमुक्त पनि छ भन्ने
**मे** = मलाई
**भ्रमः** = भ्रम भइरहेको छ

**वाक्यार्थ–** हे अच्युत ! हे प्रश्नको मर्म बुझ्ने प्रभु ! एउटै आत्मा अनादि कालदेखिको गुणको संसर्गले गर्दा नित्यबद्ध जस्तो पनि लागिरहेको छ र असङ्ग हुनुको कारणले नित्यमुक्त जस्तो पनि लागिरहेको छ, यस विषयमा मलाई भ्रम भइरहेको छ, मेरो प्रश्नको उत्तर दिनुहोस्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां एकादशस्कन्धे भगवदुद्धवसंवादे दशमोऽध्यायः॥ १० ॥**

# अथ एकादशोऽध्यायः

## बद्ध, मुक्त र भक्तजनको लक्षण

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**बद्धो मुक्त इति व्याख्या गुणतो मे न वस्तुतः।**

**गुणस्य मायामूलत्वान्न मे मोक्षो न बन्धनम्॥ १॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **गुणतः** = सत्त्व आदि गुणको कारणले हुन्छ | **मायामूलत्वात्** = मायामूलक हुनाको कारणले |
| **बद्धः** = यो बद्ध छ र | **वस्तुतः न** = वास्तविक रूपले हुँदैन | **मे** = मेरो |
| **मुक्तः इति** = यो मुक्त छ भन्ने | **गुणस्य** = गुणको | **मोक्षः न** = मोक्ष हुँदैन |
| **व्याख्या** = व्यवहार | | **बन्धनम् न** = बन्धन पनि हुँदैन |
| **मे** = मेरो अधीनमा रहेको | | |

**वाक्यार्थ–** आत्मामा बद्ध र मुक्तको जो व्यवहार छ, त्यो मेरो अधीनमा रहेको सत्त्व आदि गुणको कारणले भएको हो, वास्तवमा आत्मा बद्ध र मुक्त हुँदैन किनभने गुण मायामूलक छ। त्यसैले मेरो बन्धन पनि छैन र मोक्ष पनि हुँदैन।

**शोकमोहौ सुखं दुःखं देहापत्तिश्च मायया।**

**स्वप्नो यथात्मनः ख्यातिः संसृतिर्न तु वास्तवी॥ २॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | (त्यस्तै) | **संसृतिः च** = संसारमा आवागमन |
| **यथा** = जसरी | **शोकमोहौ** = शोक र मोह | **मायया** = मायाद्वारा भएको हो |
| **आत्मनः** = बुद्धिको | **सुखं** = सुख | **वास्तवी तु न** = वास्तविक होइन |
| **ख्यातिः** = अतात्त्विक परिणामरूप | **दुःखं** = दुःख र | |
| **स्वप्नः** = स्वप्न मिथ्या छ | **देहापत्तिः** = दोस्रो शरीरको प्राप्ति वा मृत्यु अनि | |

**वाक्यार्थ–** जसरी बुद्धिको अतात्त्विक परिणामरूप स्वप्न मिथ्या छ त्यस्तै शोकमोह, सुखदुःख, शरीरको प्राप्ति, मृत्यु तथा संसारको यात्रा पनि मायाद्वारा प्रतीत भएको हो, वास्तविक होइन।

**विद्याविद्ये मम तनू विद्ध्युद्धव शरीरिणाम्।**

**मोक्षबन्धकरी आद्ये मायया मे विनिर्मिते॥ ३॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **उद्धव** = हे उद्धव | **शरीरिणां** = प्राणीहरूको |

**मोक्षबन्धकरी** = बन्धन र मोक्ष गराउने
**आद्ये** = अनादि
**विद्याविद्ये** = विद्या र अविद्या
**मम** = मेरा
**तनू** = शरीर (शक्ति)हरू हुन् (तिनीहरू)
**मे** = मैरै
**मायया** = मायाद्वारा
**विनिर्मिते** = रचिएका छन् (यस्तो कुरा तिमीले)
**विद्धि** = बुझ

**वाक्यार्थ–** हे उद्धव ! प्राणीहरूलाई बद्ध र मुक्त गराउने अनादि विद्या र अविद्या मेरै शक्तिहरू हुन्। तिनीहरू मेरै मायाद्वारा रचित हुन् भन्ने कुरा तिमी बुझ।

**एकस्यैव ममांशस्य जीवस्यैव महामते।**
**बन्धोऽस्याविद्ययानादिर्विद्यया च तथेतरः॥ ४॥**

**पदार्थ–**
**महामते** = हे बुद्धिशाली उद्धव
**एकस्य** = एउटै
**मम एव** = मेरो नै
**अंशस्य** = अंशस्वरूप
**अस्य** = यो
**जीवस्य** = जीवात्माको
**अविद्यया एव** = अविद्याद्वारा नै
**अनादिः** = अनादि कालदेखि
**बन्धः** = बन्धन हुन्छ र
**तथा** = त्यस्तै
**विद्यया** = विद्याद्वारा
**इतरः च** = मोक्ष पनि हुन्छ

**वाक्यार्थ–** हे बुद्धिशाली उद्धव ! मेरै अंशस्वरूप यो जीवात्माको अविद्याद्वारा अनादि कालदेखि बन्धन हुन्छ भने विद्याद्वारा मोक्ष पनि हुन्छ।

**अथ बद्धस्य मुक्तस्य वैलक्षण्यं वदामि ते।**
**विरुद्धधर्मिणोस्तात स्थितयोरेकधर्मिणि॥ ५॥**

**पदार्थ–**
**अथ** = यसपछि
**तात** = हे प्रिय उद्धव
**विरुद्धधर्मिणोः** = विरुद्ध स्वभावका (तर)
**एकधर्मिणि** = एउटै शरीरमा
**स्थितयोः** = रहेका जीव र ईश्वरको
**बद्धस्य** = बद्ध हुनु र
**मुक्तस्य** = मुक्त हुनुको
**वैलक्षण्यं** = विलक्षणताको विषयमा
**ते** = तिमीलाई
**वदामि** = भन्छु

**वाक्यार्थ–** अब यसपछि हे उद्धव ! विरुद्ध स्वभाववाला भएर पनि एकै शरीरमा रहेका जीव र ईश्वरको बद्ध र मुक्तको विलक्षणताको विषयमा म तिमीलाई बताउँछु।

**सुपर्णावेतौ सदृशौ सखायौ यदृच्छयैतौ कृतनीडौ च वृक्षे।**
**एकस्तयोः खादति पिप्पलान्नमन्यो निरन्नोऽपि बलेन भूयान्॥ ६॥**

**पदार्थ–**
**एतौ** = यी जीव र ईश्वररूप
**सुपर्णौ** = दुई चरा
**सदृशौ** = दुबै चेतन भएकाले उस्तै छन् र
**सखायौ** = दुबै साथी–साथी हुन्

**एतौ** = यी दुबै
**यदृच्छया** = इच्छा अनुसार
**वृक्षे च** = यो शरीररूपी रुखमा
**कृतनीडौ** = हृदयरूपी गुँड लगाएका छन्
**तयोः** = ती दुईमध्ये
**एकः** = एउटा (जीवले)
**पिप्पलान्नं** = कर्मको फलरूप सुखदुःख आदिलाई
**खादति** = भोग गर्दछ भने
**अन्यः** = अर्को ईश्वर चाहिँ
**निरन्नः अपि** = कर्मफल भोग नगरीकन पनि
**बलेन** = ज्ञान शक्तिले गर्दा
**भूयान्** = धेरै बलियो छ

**वाक्यार्थ–** यी जीव र ईश्वररूप दुई चरा उस्तै छन् र साथीजस्ता छन्। यिनीहरूले इच्छा अनुसार यो शरीररूपी रुखमा हृदयरूपी गुँड लगाएका छन्। ती दुईमध्ये एउटा चरो जस्तो जीवात्माले कर्मको फलरूप सुखदुःख आदिको भोग गर्दछ भने ईश्वररूप चराले अभोक्ता भई कर्मको फल भोग नगरे तापनि ऊ ज्ञान आदि शक्तिको कारणले जीवभन्दा धेरै बलियो छ।

**टिप्पणी–** यहाँका छैटौँ र सातौँ श्लोक श्वेताश्वतरोपनिषद्को चारौँ अध्यायका छैटौँ सातौँ मन्त्रसँग भावगत एवं संरचनात्मक दृष्टिले मिल्दाजुल्दा छन्।

**आत्मानमन्यं च स वेद विद्वानपिप्पलादो न तु पिप्पलादः।**
**योऽविद्यया युक् स तु नित्यबद्धो विद्यामयो यः स तु नित्यमुक्तः॥ ७॥**

**पदार्थ–**
(ती दुईमा)
**अपिप्पलादः** = कर्मफलको भोग नगर्ने
**विद्वान्** = सर्वसाक्षी
**सः** = त्यो ईश्वरले
**आत्मानं** = आफूलाई र
**अन्यं च** = अरू जीवलाई पनि
**वेद** = जान्दछ
**पिप्पलादः तु न** = कर्मफलको भोक्ता जीवले त जान्दैन
**यः** = जो
**अविद्यया** = अज्ञानले
**युक्** = युक्त छ
**सः तु** = त्यो त
**नित्यबद्धः** = नित्यबद्ध हो भने
**यः** = यो
**विद्यामयः** = विद्याले (ज्ञानले) युक्त छ
**सः तु** = त्यो
**नित्यमुक्तः** = नित्यमुक्त हो

**वाक्यार्थ–** ती दुईमध्ये कर्मफलको भोग नगर्ने सर्वसाक्षी जो ईश्वर छ उसले आफूलाई र आफूदेखि अतिरिक्त जीव आदिलाई पनि जान्दछ। परन्तु जो कर्मफलको भोग गर्ने जीव छ, उसले आफ्नो स्वरूप र परमात्माको स्वरूपलाई पनि जान्दैन। त्यसैले जो अज्ञानले युक्त छ त्यो नित्यबद्ध हो भने जो ज्ञानले युक्त छ ऊ नित्यमुक्त हो।

**देहस्थोऽपि न देहस्थो विद्वान् स्वप्नाद् यथोत्थितः।**
**अदेहस्थोऽपि देहस्थः कुमतिः स्वप्नदृग् यथा॥ ८॥**

**पदार्थ–**
**विद्वान्** = ज्ञानी पुरुष
**देहस्थः अपि** = शरीरमै रहेर पनि
**देहस्थः न** = वस्तुतः शरीरमा छैन
**स्वप्नात्** = जसरी स्वप्नबाट
**उत्थितः** = उठेको पुरुष (स्वप्न शरीर रहे पनि त्यसमा हुँदैन)
**तथा** = त्यसै गरी
**कुमतिः** = अज्ञानी जीव
**अदेहस्थः अपि** = वास्तवमा

शरीरमा नरहे पनि
**देहस्थः** = शरीरमै छ
**यथा** = जसरी
**स्वप्नदृक्** = स्वप्न देख्ने मानिस
(स्वाप्निक शरीरमा बाँधिएको हुन्छ)

**वाक्यार्थ–** जसरी स्वप्नबाट जागेको पुरुष स्वप्नदेहमा भएर पनि वस्तुतः त्यसमा स्थित हुँदैन, त्यस्तै ज्ञानी पुरुष शरीरमा रहेर पनि वस्तुतः शरीरमा रहेको हुँदैन। तर जो अज्ञानी छ ऊ वास्तवमा शरीरमा नरहेर पनि शरीरमा स्थित हुन्छ। जसरी स्वप्नद्रष्टा पुरुष स्वाप्निक शरीरमा नरहे पनि स्वप्न देख्ने समयमा त्यसमा रहेको हुन्छ।

**इन्द्रियैरिन्द्रियार्थेषु गुणैरपि गुणेषु च ।**

**गृह्यमाणेष्वहं कुर्यान्न विद्वान् यस्त्वविक्रियः ॥ ९ ॥**

**पदार्थ–**
**गुणैः** = गुणको कार्य भएका
**इन्द्रियैः** = इन्द्रियहरूद्वारा
**इन्द्रियार्थेषु** = इन्द्रियहरूका विषय भएका
**गुणेषु** = शब्द आदिलाई
**गृह्यमाणेषु अपि** = ग्रहण गर्दा पनि
**यः** = जो
**विद्वान् तु** = ज्ञानी त
**अविक्रियः च** = राग आदिले रहित भएको छ भने उसले
**अहं** = अहङ्कार
**न कुर्यात्** = गरेको छैन

**वाक्यार्थ–** जो ज्ञानी गुणका कार्य भएका इन्द्रियहरूले शब्द आदि विषयहरूलाई ग्रहण गर्दा पनि राग आदिले रहित भएर बस्दछ भने वास्तवमा उसले अहङ्कार गरेको हुँदैन।

**दैवाधीने शरीरेऽस्मिन् गुणभाव्येन कर्मणा ।**

**वर्तमानोऽबुधस्तत्र कर्तास्मीति निबध्यते ॥ १० ॥**

**पदार्थ–**
**अबुधः** = अज्ञानी
**दैवाधीने** = प्रारब्धको अधीनमा रहेको
**अस्मिन्** = यो
**शरीरे** = शरीरमा
**वर्तमानः** = रहेर
**गुणभाव्येन** = इन्द्रियबाट हुने
**कर्मणा** = कर्मद्वारा
**कर्ता अस्मि** = म कर्ता हुँ भनेर
**इति** = यसरी
**तत्र** = त्यहाँ देह आदिमा
**निबध्यते** = बाँधिन्छ

**वाक्यार्थ–** तर अज्ञानी चाहिँ प्रारब्धको अधीनमा रहेको यो शरीरमा ममता गरी इन्द्रियहरूद्वारा हुने कर्मद्वारा 'म कर्ता हुँ' भन्ने अभिमान गर्दछ भने ऊ शरीर आदिमा बाँधिन्छ।

**एवं विरक्तः शयन आसनाटनमज्जने ।**

**दर्शनस्पर्शनघ्राणभोजनश्रवणादिषु ॥ ११ ॥**

**न तथा बध्यते विद्वाँस्तत्र तत्रादयन् गुणान् ।**

**प्रकृतिस्थोऽप्यसंसक्तो यथा खं सवितानिलः ॥ १२ ॥**

पदार्थ–
**एवं** = यसप्रकार
**शयने** = सुत्दा
**आसनाटनमज्जने** = बसाइ, घुमफिर तथा स्नान गर्दा अनि
**दर्शनस्पर्शनघ्राणभोजनश्रवणादिषु** = दर्शन, स्पर्श, सुँघ्ने, भोजन गर्ने आदि विषयमा रहेर पनि
**विरक्तः** = विरक्त र
**विद्वान्** = वास्तविक कुरो बुझेको विवेकी मानिस
**तत्र तत्र** = ती-ती विषयमा
**गुणान्** = इन्द्रियहरूलाई
**आदयन्** = भोग गराउँदै (साक्षी भावले)
**प्रकृतिस्थः अपि** = प्रकृतिको कार्यभूत शरीर आदिमा रहेर पनि
**असंसक्तः** = आसक्त नभईकन
**यथा** = जसरी
**खं** = आकाश झैँ
**सविता** = सूर्य झैँ र
**अनिलः** = वायु झैँ
**तथा** = त्यसप्रकार
**न बध्यते** = बन्धनमा पर्दैन

**वाक्यार्थ–** यसरी सुत्दा, बस्दा, घुम्दा, स्नान गर्दा, देख्दा, छुँदा, सुँघ्दा र भोजन आदि गर्दा विषयसँग व्यवहार गरेर पनि विरक्त र वास्तविकतालाई बुझेको विवेकी मानिस इन्द्रियहरूलाई तत्-तत् विषयको भोग गराउँदै साक्षीभावले रहन्छ र प्रकृतिको कार्यभूत शरीर आदिमा रहेर पनि त्यसमा आसक्त हुँदैन। जसरी आकाश, सूर्य र हावा जहाँ-जहाँ जसरी रहे पनि असङ्ग नै रहन्छन्।

**वैशारद्येक्षयासङ्गशितया छिन्नसंशयः।**
**प्रतिबुद्ध इव स्वप्नान्नानात्वाद् विनिवर्तते॥ १३॥**

पदार्थ–
**असङ्गशितया** = वैराग्यले तिखो पारिएको
**वैशारद्येक्षया** = निपुण बुद्धिद्वारा
**छिन्नसंशयः** = संशय हटिसकेको व्यक्ति
**स्वप्नात्** = स्वप्नबाट
**प्रतिबुद्धः इव** = जागेको व्यक्ति झैँ
**नानात्वात्** = देह आदि भेदमूलक प्रपञ्चबाट
**विनिवर्तते** = निवृत्त हुन्छ

**वाक्यार्थ–** वैराग्यले तिखो भएको अति निपुण बुद्धिद्वारा सारा संशय हटिसकेको व्यक्ति स्वप्नबाट उठेको व्यक्ति झैँ देह आदि भेदमूलक प्रपञ्चबाट निवृत्त हुन्छ।

**यस्य स्युर्वीतसङ्कल्पाः प्राणेन्द्रियमनोधियाम्।**
**वृत्तयः स विनिर्मुक्तो देहस्थोऽपि हि तद्गुणैः॥ १४॥**

पदार्थ–
**यस्य** = जसको
**प्राणेन्द्रियमनोधियां** = प्राण, इन्द्रिय, मन र बुद्धिका
**वृत्तयः** = वृत्तिहरू
**वीतसङ्कल्पाः** = सङ्कल्परहित
**स्युः** = हुन्छन्
**हि** = निश्चय नै
**सः** = त्यो व्यक्ति
**देहस्थः अपि** = शरीर आदिमा स्थित भएर पनि
**तद्गुणैः** = त्यो शरीरका गुणहरूबाट
**विनिर्मुक्तः** = मुक्त हुन्छ

**वाक्यार्थ–** जसको प्राण, इन्द्रिय, मन र बुद्धिका वृत्तिहरू सङ्कल्परहित भइसकेका छन्, वस्तुतः त्यो व्यक्ति शरीरमा रहेर पनि शरीरका गुणहरूबाट मुक्त हुन्छ।

**यस्यात्मा हिंस्यते हिंस्रैर्येन किञ्चिद् यदृच्छया ।**
**अर्च्यते वा क्वचित् तत्र न व्यतिक्रियते बुधः ॥ १५ ॥**

**पदार्थ–**
**हिंस्रैः** = हिंसा गर्नेहरूद्वारा
**यस्य** = जसको
**आत्मा** = शरीर
**हिंस्यते** = पीडित गराइन्छ
**येन** = जो कोहीद्वारा
**यदृच्छया** = स्वेच्छापूर्वक
**क्वचित्** = कहीँ
**किञ्चित्** = केही
**अर्च्यते वा** = पूजा गरिन्छ भने पनि
**बुधः** = विवेकी मानिस
**तत्र** = त्यो मान र अपमानमा
**न व्यतिक्रियते** = विकृत हुँदैन

**वाक्यार्थ–** ज्ञानी मानिसलाई कोही दुष्टले शरीरमा पीडा दिँदा वा इच्छा अनुसार पूजा गर्दा पनि मान र अपमान दुबैमा उसमा कुनै विकार देखिँदैन।

**न स्तुवीत न निन्देत कुर्वतः साध्वसाधु वा ।**
**वदतो गुणदोषाभ्यां वर्जितः समदृङ्मुनिः ॥ १६ ॥**

**पदार्थ–**
**साध्वसाधु** = प्रिय वा अप्रिय
**कुर्वतः** = गरिरहेको
**वदतः वा** = अथवा बोलिरहेको व्यक्तिलाई
**न स्तुवीत** = प्रशंसा नगरोस्
**न निन्देत** = निन्दा नगरोस्
**गुणदोषाभ्यां** = गुण र दोषबाट
**वर्जितः** = मुक्त
**मुनिः** = मननशील व्यक्ति
**समदृक्** = समदर्शी हुन्छ (ऊ नै मुक्त हो)

**वाक्यार्थ–** आफूलाई राम्रो वा नराम्रो गरिरहेको वा बोलिरहेको व्यक्तिलाई देखेर पनि प्रशंसा र निन्दा नगरोस्, त्यस्तो गुण र दोषबाट मुक्त मननशील व्यक्ति नै समदर्शी हो र त्यही नै मुक्त व्यक्ति हो।

**न कुर्यान्न वदेत् किञ्चिन्न ध्यायेत् साध्वसाधु वा ।**
**आत्मारामोऽनया वृत्त्या विचरेज्जडवन्मुनिः ॥ १७ ॥**

**पदार्थ–**
**आत्मारामः** = आत्मामा रमण गर्ने
**मुनिः** = मननशील साधकले
**साध्वसाधु** = राम्रो वा नराम्रो
**किञ्चित्** = केही पनि
**न कुर्यात्** = नगरोस्
**न वदेत्** = नबोलोस् पनि
**न वा ध्यायेत्** = अथवा उचित अनुचित चिन्तन नगरोस्
**अनया** = यो बताइएको
**वृत्त्या** = व्यवहारले युक्त भएर
**जडवत्** = लाटो जस्तो भएर
**विचरेत्** = घुमिरहोस्

**वाक्यार्थ–** आफैँमा रमाउने मननशील साधकले राम्रो वा नराम्रो केही पनि नगरोस् र नबोलोस् अनि उचित र अनुचित केहीको पनि चिन्तन नगरोस्। लाटो जस्तो भएर ऊ संसारमा घुमफिर गरिरहोस्।

**शब्दब्रह्मणि निष्णातो न निष्णायात् परे यदि ।**
**श्रमस्तस्य श्रमफलो ह्यधेनुमिव रक्षतः ॥ १८ ॥**

**पदार्थ–**
**शब्दब्रह्मणि** = शब्दब्रह्ममा
**निष्णातः** = ज्यादै जान्ने भएर पनि
**यदि** = यदि
**परे** = परब्रह्ममा
**न निष्णायात्** = जान्ने हुँदैन भने
**हि** = निश्चय नै
**तस्य** = उसको
**श्रमः** = अध्ययन आदिको परिश्रम
**अधेनुं** = दुध नदिने गाईलाई
**रक्षतः इव** = पाल्ने व्यक्तिलाई झैँ
**श्रमफलः** = श्रमरूप फल मात्र दिनेवाला हुन्छ

**वाक्यार्थ–** जो शब्दब्रह्म(वेदको अर्थ)मा निष्णात भएर पनि यदि परब्रह्ममा निष्णात भएन भने वा ब्रह्मसाक्षात्कार गर्न सकेन भने उसको अध्ययन आदिको परिश्रम दुध नदिने गाईलाई पाल्ने व्यक्तिको श्रम झैँ निष्फल हुन्छ।

**गां दुग्धदोहामसतीं च भार्यां देहं पराधीनमसत्प्रजां च ।**
**वित्तं त्वतीर्थीकृतमङ्ग वाचं हीनां मया रक्षति दुःखदुःखी ॥ १९ ॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय उद्धव
**दुग्धदोहां** = दुध दुहिसकिएका (अब दुध नदिने)
**गां** = गाईलाई
**असतीं** = असत् चरित्र भएकी
**भार्यां च** = स्त्रीलाई
**पराधीनं** = पराधीन भएको
**देहं** = शरीरलाई र
**असत्प्रजां च** = दुष्ट सन्तानलाई
**अतीर्थीकृतं** = सत्पात्रमा नदिएको
**वित्तं** = धनलाई र
**मया** = मेरो गुणानुवादद्वारा
**हीनां** = रहित
**वाचं तु** = वाणीलाई त
**रक्षति** = रक्षा गर्दछ भने (त्यो)
**दुःखदुःखी** = एउटा दुःखपछि अर्को दुःख प्राप्त गर्नेवाला हुन्छ

**वाक्यार्थ–** हे प्रिय उद्धव ! जसले दुध नदिने गाईलाई, दुष्ट चरित्र भएकी स्त्रीलाई, पराधीन शरीरलाई, असत् पुत्रलाई, सत्पात्रमा दान नगरिएको धनलाई र मेरो गुणकीर्तनले रहित वाणीलाई रक्षा गर्दछ, त्यो व्यक्तिले एकपछि अर्को दुःख प्राप्त गर्दछ।

**यस्यां न मे पावनमङ्ग कर्म स्थित्युद्भवप्राणनिरोधमस्य ।**
**लीलावतारेप्सितजन्म वा स्याद् वन्ध्यां गिरं तां बिभृयान्न धीरः ॥ २० ॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय उद्धव
**अस्य** = यो संसारको
**पावनं** = शोधक (पवित्र पार्ने)
**स्थित्युद्भवप्राणनिरोधं** = विश्वको स्थिति, उत्पत्ति र प्रलयको वर्णनरूप
**मे** = मेरो
**कर्म** = चरित्र
**लीलावतारेप्सितजन्म वा** = मेरो लीलावतारमा लोकप्रिय श्रीराम, श्रीकृष्ण आदिको जन्म
**यस्यां** = जुन वाणीमा
**न स्यात्** = छैन
**तां** = त्यो

**वन्ध्यां** = निष्फल
**गिरं** = वाणीलाई
**धीरः** = विवेकी मानिसले
**न बिभृयात्** = धारण नगरोस्
(उच्चारण नगरोस्)

**वाक्यार्थ–** हे उद्धव ! जुन वाणीमा संसारलाई पवित्र पार्ने, जगत्को उत्पत्ति, स्थिति र प्रलय सम्बन्धी मेरो सुन्दर चरित्र छैन र मेरा लोकप्रिय लीलावतारमा पनि सबैभन्दा लोकप्रिय राम, कृष्ण आदि अवतारको वर्णन छैन, त्यस्तो निष्फल र व्यर्थ वाणीलाई बुद्धिमान् मानिसले कहिल्यै उच्चारण नगरोस्।

**एवं जिज्ञासयापोह्य नानात्वभ्रममात्मनि।**
**उपारमेत विरजं मनो मय्यर्प्य सर्वगे॥ २१॥**

पदार्थ–
**एवं** = यसरी
**जिज्ञासया** = विचारद्वारा
**आत्मनि** = आत्मामा प्रतीत भएको
**नानात्वभ्रमं** = नानात्वको भ्रमलाई
**अपोह्य** = हटाएर
**विरजं** = निर्मल भएको
**मनः** = मनलाई
**सर्वगे** = सर्वव्यापक
**मयि** = ममा
**अर्प्य** = अर्पण गरेर
**उपारमेत** = व्यवहारबाट निवृत्त होस्

**वाक्यार्थ–** यसरी बुद्धिमान् व्यक्तिले विचारद्वारा आत्मामा प्रतीत भएको नानात्वको भ्रमलाई हटाएर निर्मल मनलाई ममा अर्पण गरी व्यवहारबाट निवृत्त हुनुपर्दछ।

**यद्यनीशो धारयितुं मनो ब्रह्मणि निश्चलम्।**
**मयि सर्वाणि कर्माणि निरपेक्षः समाचर॥ २२॥**

पदार्थ–
**यदि** = यदि
**मयि** = म
**ब्रह्मणि** = परब्रह्ममा
**निश्चलं** = निश्चलतापूर्वक
**मनः** = मनलाई
**धारयितुं** = अड्याउन (राख्न)
**अनीशः** = समर्थ छैनौ भने
**निरपेक्षः** = फलको कामना नगरीकन
**सर्वाणि** = नित्य, नैमित्तिक आदि सबै
**कर्माणि** = कर्महरू
**समाचर** = गर

**वाक्यार्थ–** यदि आफ्नो मनलाई निश्चलतापूर्वक म परब्रह्ममा अड्याउन सक्दैनौ भने फलको कामना नगरीकन नित्य, नैमित्तिक आदि सबै कर्महरूको अनुष्ठान गर।

**श्रद्धालुर्मे कथाः शृण्वन् सुभद्रा लोकपावनीः।**
**गायन्ननुस्मरन् कर्म जन्म चाभिनयन् मुहुः॥ २३॥**
**मदर्थे धर्मकामार्थानाचरन् मदपाश्रयः।**
**लभते निश्चलां भक्तिं मय्युद्धव सनातने॥ २४॥**

**पदार्थ–**
**उद्धव** = हे उद्धव
**श्रद्धालुः** = श्रद्धालु भएर
**सुभद्राः** = सुन्दा पनि मङ्गल हुने
**लोकपावनीः** = लोकलाई पवित्र बनाउने
**मे** = मेरा
**कथाः** = कथाहरूलाई
**शृण्वन्** = सुन्दै
**गायन्** = भन्दै र
**अनुस्मरन्** = निरन्तर स्मरण गर्दै
**कर्म** = कर्मलाई र
**जन्म च** = जन्मलाई पनि
**मुहुः** = बारम्बार
**अभिनयन्** = अभिनय वा अनुकरण गर्दै
**मदर्थे** = मेरै प्रीतिका लागि
**धर्मकामार्थान्** = धर्म, काम र अर्थको
**आचरन्** = सेवन गर्दै
**मदपाश्रयः** = मेरो शरणमा आएको व्यक्तिले
**सनातने** = सनातनस्वरूप
**मयि** = ममा
**निश्चलां** = निश्चल
**भक्तिं** = भक्तिलाई
**लभते** = प्राप्त गर्दछ

**वाक्यार्थ–** हे उद्धव ! जो श्रद्धावान् भएर मङ्गलकारी र लोकलाई पवित्र पार्ने मेरा कथाहरू सुन्दै, भन्दै र स्मरण गर्दै अनि मेरा जन्म र कर्मका पवित्र लीलाहरूलाई पनि बारम्बार अभिनय र अनुकरण गर्दै मेरै प्रसन्नताका लागि धर्म, काम र अर्थको सेवन गर्दछ भने त्यस्तो मेरो शरणागत व्यक्तिले सनातनस्वरूप ममा निश्चल भक्ति प्राप्त गर्दछ।

**सत्सङ्गलब्धया भक्त्या मयि मां स उपासिता।**
**स वै मे दर्शितं सद्भिरञ्जसा विन्दते पदम्॥ २५॥**

**पदार्थ–**
**सः** = त्यस्तो व्यक्तिले
**सत्सङ्गलब्धया** = सत्पुरुषको सङ्गतबाट प्राप्त भएको र
**मयि** = ममा भएको
**भक्त्या** = भक्तिद्वारा
**मां** = मलाई
**उपासिता** = उपासना गर्दछ भने
**सः** = त्यो उपासक
**सद्भिः** = सत्पुरुषहरूद्वारा
**दर्शितं** = देखाइएको
**मे** = मेरो
**पदं** = स्वरूपमा
**वै** = निश्चय नै
**अञ्जसा** = सजिलै
**विन्दते** = प्राप्त हुन्छ

**वाक्यार्थ–** जो सत्पुरुषको सङ्गतबाट प्राप्त भएको मेरो भक्तिद्वारा मलाई उपासना गर्दछ त्यस्तो उपासकले सत्पुरुषहरूले देखाएको मेरो स्वरूपलाई सजिलै प्राप्त गर्दछ।

**उद्धव उवाच** (उद्धवले भने)

**साधुस्तवोत्तमश्लोक मतः कीदृग्विधः प्रभो।**
**भक्तिस्त्वय्युपयुज्येत कीदृशी सद्भिरादृता॥ २६॥**

**पदार्थ–**
**उत्तमश्लोकः** = हे उत्तमकीर्ति भएका
**प्रभो** = हे प्रभु
**तव** = हजुरको दृष्टिमा
**कीदृग्विधः** = कस्तो व्यक्तिलाई
**साधुः** = सत्पुरुष भनेर
**मतः** = भनिन्छ र
**सद्भिः** = सत्पुरुषहरूद्वारा
**आदृता** = आदर गरिएको
**कीदृशी** = कस्तो
**भक्तिः** = भक्ति
**त्वयि** = हजुरमा
**उपयुज्येत** = उपयुक्त हुन्छ

**वाक्यार्थ–** हे उत्तमकीर्ति भएका प्रभु ! हजुरको मतमा कस्तालाई सत्पुरुष भनिन्छ र सत्पुरुषहरूद्वारा पनि आदर गरिएको कस्तो भक्ति हजुरमा उपयुक्त हुन्छ ?

**एतन्मे पुरुषाध्यक्ष लोकाध्यक्ष जगत्प्रभो ।**

**प्रणतायानुरक्ताय प्रपन्नाय च कथ्यताम् ॥ २७ ॥**

**पदार्थ–**
**पुरुषाध्यक्ष** = हे ब्रह्मा आदिका पनि नियन्ता
**लोकाध्यक्ष** = हे लोकनाथ
**जगत्प्रभो** = हे जगत्का स्वामी
**एतत्** = यो कुरा
**प्रणताय** = विनीत
**अनुरक्ताय** = अनुरक्त
**प्रपन्नाय च** = शरणमा आएको
**मे** = मलाई
**कथ्यताम्** = बताउनुहोस्

**वाक्यार्थ–** हे ब्रह्मा आदि देवताका पनि नियन्ता ! लोकनाथ र जगत्का एक मात्र स्वामी प्रभु ! नम्रतापूर्वक हजुरमा समर्पित भई हजुरको शरणमा परेको मलाई यी सबै कुरा बताउनुहोस् ।

**त्वं ब्रह्म परमं व्योम पुरुषः प्रकृतेः परः ।**

**अवतीर्णोऽसि भगवन् स्वेच्छोपात्तपृथग्वपुः ॥ २८ ॥**

**पदार्थ–**
**भगवन्** = हे प्रभु
**त्वं** = हजुर
**परमं** = परम
**ब्रह्म** = ब्रह्मस्वरूप हुनुहुन्छ
**व्योम** = आकाश झैं (असङ्ग र)
**प्रकृतेः** = प्रकृतिभन्दा
**परः** = पर रहेको
**पुरुषः** = पुरुष हुनुहुन्छ
**स्वेच्छोपात्तपृथग्वपुः** = आफ्नो इच्छाले अलग शरीर धारण गरेर
**अवतीर्णः असि** = यो लोकमा अवतीर्ण हुनुभएको छ

**वाक्यार्थ–** हे प्रभु ! हजुर परम ब्रह्म हुनुहुन्छ र आकाश झैं असङ्ग रहेर प्रकृतिभन्दा पर रहेको पुरुष हुनुहुन्छ। हजुर आफ्नै इच्छाले अलग शरीर धारण गरेर लोककल्याणका लागि अवतीर्ण हुनुभएको छ।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**कृपालुरकृतद्रोहस्तितिक्षुः सर्वदेहिनाम् ।**

**सत्यसारोऽनवद्यात्मा समः सर्वोपकारकः ॥ २९ ॥**

**कामैरहतधीर्दान्तो मृदुः शुचिरकिञ्चनः ।**

**अनीहो मितभुक् शान्तः स्थिरो मच्छरणो मुनिः ॥ ३० ॥**

**अप्रमत्तो गभीरात्मा धृतिमाञ्जितषड्गुणः ।**

**अमानी मानदः कल्पो मैत्रः कारुणिकः कविः ॥ ३१ ॥**

**पदार्थ—**
**कृपालुः** = (जो) दयालु हुन्छ
**सर्वदेहिनां** = सम्पूर्ण प्राणीहरूमा
**अकृतद्रोहः** = द्रोह नगर्ने
**तितिक्षुः** = सहनशील
**सत्यसारः** = सत्यलाई नै सारवस्तु सम्झने
**अनवद्यात्मा** = ईर्ष्या आदि दोषले रहित
**समः** = समदर्शी र
**सर्वोपकारकः** = सबैको उपकार गर्ने
**कामैः** = विषयहरूद्वारा
**अहतधीः** = बुद्धि नबिग्रिएको
**दान्तः** = इन्द्रियलाई वशमा राखेको
**मृदुः** = कोमल चित्त भएको
**शुचिः** = पवित्र
**अकिञ्चनः** = सञ्चय नगर्ने
**अनीहः** = फलको इच्छा नलिई कर्म गर्ने
**मितभुक्** = ठिक्क आहार गर्ने
**शान्तः** = शान्त स्वभावको
**अप्रमत्तः** = नमात्तिएको
**स्थिरः** = आफ्नो धर्ममा स्थिर
**मच्छरणः** = मेरो शरणमा आएको
**मुनिः** = मननशील
**गभीरात्मा** = निर्विकार
**धृतिमान्** = धैर्यशाली
**जितषड्गुणः** = भोक, प्यास, शोक, मोह, बुढ्याइँ र मृत्यु यी छ गुणलाई जितेको
**अमानी** = सम्मान नचाहने
**मानदः** = अरूलाई सम्मान दिने
**कल्पः** = अरूलाई बुझाउन सक्ने
**मैत्रः** = छलकपट नगर्ने
**कारुणिकः** = करुणापरायण र
**कविः** = तत्त्वज्ञ जो छ (ऊ नै सत्पुरुष हो)

**वाक्यार्थ—** जो व्यक्ति दयालु हुन्छ, कुनै प्राणीलाई पनि द्रोह नगर्ने, सहनशील र सत्य वस्तुलाई नै सार मान्ने हुन्छ अनि ईर्ष्या गर्दैन, सबैलाई समान देख्छ र सबैको उपकार गर्दछ, विषयको आकर्षणले बुद्धि नबिग्रिएको, इन्द्रियहरूलाई वशमा राखेको, कोमल चित्त भएको, सदाचारनिष्ठ, वस्तुको सञ्चय नगर्ने, फलाशाविना नै कार्य गर्ने, ठिक्क भोजन गर्ने, शान्त स्वभावको, नमात्तिएको, आफ्नो धर्ममा स्थिर, मेरो शरणमा आएको, मननशील र निर्विकार, धैर्यशाली, भोक, प्यास, शोक, मोह, बुढ्याइँ र मृत्यु यी छ गुणलाई जितेको, आफू सम्मान नचाहने र अरूलाई सम्मान दिने, कुरो बुझाउन समर्थ र छल-कपट नजानेको, करुणायुक्त, तत्त्वज्ञानी जो व्यक्ति छ, त्यो नै सत्पुरुष हो।

**आज्ञायैवं गुणान् दोषान् मयादिष्टानपि स्वकान्।**
**धर्मान् सन्त्यज्य यः सर्वान् मां भजेत स सत्तमः॥ ३२॥**

**पदार्थ—**
**यः** = जसले
**गुणान्** = गुणहरूलाई र
**दोषान्** = दोषहरूलाई
**आज्ञाय** = राम्रोसँग बुझेर
**मया** = वेदको रूपमा मैले
**आदिष्टान् अपि** = बताएको पनि
**स्वकान्** = आफ्ना
**सर्वान्** = सबै
**धर्मान्** = धर्महरूलाई
**सन्त्यज्य** = त्यागेर
**मां** = मलाई
**भजेत** = भजन गर्दछ भने
**सः** = त्यो
**एवं** = यसप्रकार
**सत्तमः** = सत्पुरुषमा श्रेष्ठ हो

**वाक्यार्थ—** जो व्यक्तिले गुण-दोषलाई जानेर पनि वेदको रूपमा मैले बताएको भएपनि आफ्नो

सबै धर्म त्यागी मेरो भजन गर्दछ त्यो व्यक्ति पनि सत्पुरुषहरूमा श्रेष्ठ हो।

**ज्ञात्वाज्ञात्वाथ ये वै मां यावान् यश्चास्मि यादृशः।**

**भजन्त्यनन्यभावेन ते मे भक्ततमा मताः॥ ३३॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**ये** = जो व्यक्तिहरू
**अनन्यभावेन** = एकाग्रचित्तले मलाई
**यः** = जो म
**यावान्** = जत्रो र
**यादृशः च** = जस्तो
**अस्मि** = छु (त्यस्तो)
**मां** = मलाई
**ज्ञात्वा** = जानेर वा
**अज्ञात्वा** = नजानीकन पनि
**भजन्ति** = भजन गर्दछन्
**ते** = तिनीहरू
**वै** = निश्चय नै
**मे** = मेरा
**भक्ततमाः** = श्रेष्ठ भक्तहरू
**मताः** = मानिन्छन्

**वाक्यार्थ–** म जत्रो र जस्तो छु, त्यसलाई जानेर वा नजानीकन पनि जो व्यक्तिहरू एकाग्रचित्तले मेरो भजन गर्दछन् तिनीहरू मेरा श्रेष्ठ भक्तहरू हुन्।

**मल्लिङ्गमद्भक्तजनदर्शनस्पर्शनार्चनम्।**

**परिचर्या स्तुतिः प्रह्वगुणकर्मानुकीर्तनम्॥ ३४॥**

**पदार्थ–**
**मल्लिङ्गमद्भक्तजनदर्शनस्पर्शनार्चनं** = मेरो मूर्ति र मेरा भक्तजनहरूको दर्शन, स्पर्शन र पूजन आदि
**परिचर्या** = सेवा
**स्तुतिः** = स्तुति
**प्रह्वगुणकर्मानुकीर्तनम्** = प्रणाम र गुण, कर्म आदिको सङ्कीर्तन गर्नुपर्दछ

**वाक्यार्थ–** कल्याण चाहने व्यक्तिले मेरो मूर्तिको र भक्तहरूको दर्शन, स्पर्शन, पूजन आदि सेवा, स्तुति र प्रणाम तथा मेरा गुण, कर्म आदिको सङ्कीर्तन गर्नुपर्दछ।

**मत्कथाश्रवणे श्रद्धा मदनुध्यानमुद्धव।**

**सर्वलाभोपहरणं दास्येनात्मनिवेदनम्॥ ३५॥**

**मज्जन्मकर्मकथनं मम पर्वानुमोदनम्।**

**गीतताण्डववादित्रगोष्ठीभिर्मद्गृहोत्सवः॥ ३६॥**

**पदार्थ–**
**उद्धव** = हे प्रिय उद्धव
**मत्कथाश्रवणे** = मेरो कथा सुन्न
**श्रद्धा** = श्रद्धा गर्नु
**मदनुध्यानं** = मेरो निरन्तर ध्यान गर्नु
**सर्वलाभोपहरणं** = प्राप्त भएका सबै कुरा ममा अर्पण गर्नु
**दास्येन** = दास्यभावले
**आत्मनिवेदनं** = आफूलाई ममा निवेदन गरिदिनु
**मज्जन्मकर्मकथनं** = मेरो जन्म र कर्मको वर्णन गर्नु
**मम** = मेरो
**पर्वानुमोदनं** = जन्माष्टमी आदि

पर्व मान्नु
**गीतताण्डववादित्रगोष्ठीभिः** = गीत, ताण्डव, वाद्यवादन र गोष्ठीहरूद्वारा
**मद्गृहोत्सवः** = मेरो मन्दिरमा उत्सव मनाउनु (यी सबै भक्तिका लक्षणहरू हुन्)

**वाक्यार्थ–** हे उद्धव ! मेरो कथामा श्रद्धा गर्नु, निरन्तर मेरो ध्यान गर्नु, आफूलाई प्राप्त भएको कुरा मलाई अर्पण गर्नु, दास्यभावले आफूलाई ममा निवेदन गरिदिनु, मेरो जन्म-कर्मको वर्णन गर्नु, कृष्णजन्माष्टमी, रामनवमी आदि पर्वहरूलाई मान्नु र वाद्यवादन बजाएर नाचगानद्वारा मेरो मन्दिरमा उत्सव मनाउनु आदि सबै भक्तिका लक्षण हुन्।

**यात्रा बलिविधानं च सर्ववार्षिकपर्वसु ।**
**वैदिकी तान्त्रिकी दीक्षा मदीयव्रतधारणम् ॥ ३७ ॥**
**ममार्चास्थापने श्रद्धा स्वतः संहत्य चोद्यमः ।**
**उद्यानोपवनाक्रीडपुरमन्दिरकर्मणि ॥ ३८ ॥**

**पदार्थ–**
**यात्रा** = तीर्थयात्रा गर्नु
**सर्ववार्षिकपर्वसु** = प्रत्येक वार्षिक पर्वहरूमा
**बलिविधानं** = विधिवत् पूजा गर्नु
**वैदिकी च** = वैदिक र
**तान्त्रिकी दीक्षा** = तान्त्रिक दीक्षा लिएर
**मदीयव्रतधारणं** = मेरो व्रतको अनुष्ठान गर्नु
**मम** = मेरो
**अर्चास्थापने** = मूर्ति थापेको ठाउँमा
**श्रद्धा** = श्रद्धा गर्नु
**उद्यानोपवनाक्रीडपुरमन्दिर-कर्मणि** = बगैँचा, उपवन, क्रीडाक्षेत्र, नगर र मन्दिर आदि बनाउने काममा
**स्वतः** = आफैँले र
**संहत्य च** = अरूसँग मिलेर
**उद्यमः** = प्रयत्न गर्नु (आदि भक्तिका लक्षणहरू हुन्)

**वाक्यार्थ–** मेरो दर्शनको लागि तीर्थयात्रा गर्नु, प्रत्येक पर्वमा भगवान्को पूजा गर्नु, वैदिक वा तान्त्रिक दीक्षा लिई मेरो अनुष्ठान गर्नु, मेरो मूर्ति स्थापना गरेको ठाउँमा श्रद्धा गर्नु र बगैँचा, उपवन, क्रीडाक्षेत्र, नगर र मन्दिर आदि निर्माण गर्ने क्रममा सके एक्लै नभए मिलेर प्रयत्न गर्नु भक्तिको लक्षण हो।

**सम्मार्जनोपलेपाभ्यां सेकमण्डलवर्तनैः ।**
**गृहशुश्रूषणं मह्यं दासवद् यदमायया ॥ ३९ ॥**
**अमानित्वमदम्भित्वं कृतस्यापरिकीर्तनम् ।**
**अपि दीपावलोकं मे नोपयुञ्ज्यान्निवेदितम् ॥ ४० ॥**

**पदार्थ–**
**अमायया** = निष्कपट भावले
**दासवत्** = सेवक जैँ

**सम्मार्जनोपलेपाभ्यां** = बढार्ने तथा लिप्ने र
**सेकमण्डलवर्तनैः** = जल आदिले सेचन, सर्वतोभद्र आदिको निर्माणद्वारा पनि
**यत्** = जो
**मह्यं** = मेरो
**गृहशुश्रूषणं** = मन्दिरको सेवा हुन्छ (त्यो गर्नु)
**अमानित्वं** = अभिमान नगर्नु
**अदम्भित्वं** = दम्भ नगर्नु
**कृतस्य** = गरेको दान धर्म आदिको
**अपरिकीर्तनं** = वर्णन नगर्नु र
**मे** = मलाई
**निवेदितं** = अर्पण गरेको
**दीपावलोकं अपि** = दीपको उज्यालो आदिको समेत
**न उपयुञ्ज्यात्** = अरू काममा उपयोग नगर्नु (यी पनि भक्तिका लक्षण हुन्)

**वाक्यार्थ–** निष्कपट भावले सेवक जस्तो भएर मेरो मन्दिरलाई बढार्नु, लिप्नु, जल आदिले सेचन गर्नु, सर्वतोभद्र मण्डल आदि निर्माण गर्ने आदि कर्मद्वारा सेवा गर्नु, अभिमान नगर्नु, आडम्बर नदेखाउनु, गरेका दानधर्म आदि कसैलाई नसुनाउनु र मलाई अर्पण गरेका कुराहरू जस्तै दीपको उज्यालो समेतको आफ्नो वा अरू प्रयोजनको लागि उपयोग नगर्नु यी पनि भक्तिका लक्षण हुन्।

**यद् यदिष्टतमं लोके यच्चातिप्रियमात्मनः।**
**तत्तन्निवेदयेन्मह्यं तदानन्त्याय कल्पते॥ ४१॥**

**पदार्थ–**
**यत् यत्** = जे-जे वस्तु
**लोके** = लोकमा
**इष्टतमं** = राम्रो मानिन्छ र
**यत् च** = जे
**आत्मनः** = आफूलाई पनि
**अतिप्रियं** = अति राम्रो लाग्दछ
**तत् तत्** = त्यो-त्यो वस्तु
**मह्यं** = मलाई
**निवेदयेत्** = अर्पण गर्नू
**तत्** = त्यो अर्पण गरेको वस्तु
**आनन्त्याय** = अनन्त सुख दिनेवाला
**कल्पते** = हुन्छ

**वाक्यार्थ–** जे-जे वस्तुलाई लोकमा राम्रो मानिन्छ र आफूलाई पनि राम्रो लाग्छ, त्यो-त्यो वस्तु मलाई अर्पण गर्नू, त्यो मलाई अर्पण गरेको वस्तु अनन्त सुख दिनेवाला हुन्छ।

**सूर्योऽग्निर्ब्राह्मणा गावो वैष्णवः खं मरुज्जलम्।**
**भूरात्मा सर्वभूतानि भद्र पूजापदानि मे॥ ४२॥**

**पदार्थ–**
**भद्र** = हे प्रिय उद्धव
**सूर्यः** = सूर्य
**अग्निः** = आगो
**ब्राह्मणाः** = ब्राह्मण
**गावः** = गाई
**वैष्णवः** = भगवान् विष्णुको भक्त
**खं** = आकाश
**मरुत्** = वायु
**जलम्** = जल
**भूः** = पृथिवी
**आत्मा** = आत्मा र
**सर्वभूतानि** = सम्पूर्ण प्राणीहरू
**मे** = मेरा
**पूजापदानि** = पूजा गर्ने स्थान हुन्

**वाक्यार्थ–** हे प्रिय उद्धव ! सूर्य, आगो, ब्राह्मण, गाई, भगवद्भक्त, आकाश, वायु, जल, पृथिवी, आत्मा र सम्पूर्ण प्राणीहरू मेरा पूजास्थान हुन्।

**सूर्ये तु विद्यया त्रय्या हविषाग्नौ यजेत माम्।**
**आतिथ्येन तु विप्राग्र्ये गोष्वङ्ग यवसादिना॥ ४३॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय उद्धव
**सूर्ये तु** = सूर्यमा
**त्रय्या** = तीन वेदका
**विद्यया** = विद्या (मन्त्र)ले
**अग्नौ** = अग्निमा
**हविषा** = चरुले
**विप्राग्र्ये तु** = श्रेष्ठ ब्राह्मणमा
**आतिथ्येन** = अतिथिसत्कारद्वारा
**गोषु** = गाईहरूमा
**यवसादिना** = घाँसद्वारा
**मां** = मलाई
**यजेत** = पूजा गरोस्

**वाक्यार्थ–** हे उद्धव ! सूर्यमा तीन वेदका मन्त्रहरूद्वारा, अग्निमा चरुद्वारा, उत्तम ब्राह्मणमा अतिथिसत्कारद्वारा र गाईमा राम्रो घाँसद्वारा मलाई पूजा गरोस्।

**वैष्णवे बन्धुसत्कृत्या हृदि खे ध्याननिष्ठया।**
**वायौ मुख्यधिया तोये द्रव्यैस्तोयपुरस्कृतैः॥ ४४॥**
**स्थण्डिले मन्त्रहृदयैर्भोगैरात्मानमात्मनि।**
**क्षेत्रज्ञं सर्वभूतेषु समत्वेन यजेत माम्॥ ४५॥**

**पदार्थ–**
**वैष्णवे** = भगवद्भक्तमा
**बन्धुसत्कृत्या** = बन्धुको समान सत्कार गरेर
**हृदि** = हृदयरूप
**खे** = आकाशमा
**ध्याननिष्ठया** = ध्यानद्वारा
**वायौ** = वायुमा
**मुख्यधिया** = मुख्य प्राणको दृष्टिले
**तोये** = जलमा
**तोयपुरस्कृतैः** = जल आदि
**द्रव्यैः** = सामग्रीहरूद्वारा
**स्थण्डिले** = पृथिवीमा
**मन्त्रहृदयैः** = गुप्तमन्त्रको न्यासद्वारा
**आत्मनि** = शरीरमा
**भोगैः** = अनिषिद्ध विषयको सेवनद्वारा र
**सर्वभूतेषु** = सम्पूर्ण प्राणीहरूमा
**समत्वेन** = समताको दृष्टिले
**क्षेत्रज्ञं** = साक्षीरूप र
**आत्मानं** = आत्मस्वरूप
**मां** = मलाई
**यजेत** = पूजन गरोस्

**वाक्यार्थ–** भगवद्भक्तमा आफ्ना बन्धुहरूलाई झैं सत्कार गरेर, हृदयरूप आकाशमा ध्यानद्वारा, वायुमा मुख्यप्राण दृष्टिले, पानीमा जल, चन्दन, पुष्प आदि सामग्री चढाएर, पृथिवीमा गुप्तमन्त्रले न्यास गरेर, शरीरमा अनिषिद्ध विषयको भोग गरेर र सम्पूर्ण प्राणीमा समदृष्टि गरेर साक्षी र आत्मस्वरूप मेरो पूजा गरोस्।

**धिष्ण्येष्वेष्विति मद्रूपं शङ्खचक्रगदाम्बुजैः।**
**युक्तं चतुर्भुजं शान्तं ध्यायन्नर्चेत् समाहितः॥ ४६॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**एषु** = यी
**धिष्ण्येषु** = स्थानहरूमा
**शङ्खचक्रगदाम्बुजैः** = शङ्ख, चक्र, गदा र पद्मले
**युक्तं** = युक्त भएको
**शान्तं** = शान्त अवस्थाको
**चतुर्भुजं** = चार हात भएको
**मद्रूपं** = मेरो स्वरूपलाई
**समाहितः** = एकाग्रचित्त भएर
**ध्यायन्** = ध्यान गर्दै
**अर्चेत्** = पूजा गरोस्

**वाक्यार्थ–** यसरी यी-यी स्थानहरूमा, शङ्ख, चक्र, गदा, पद्म लिएको शान्त अवस्थाको, चार हात भएको मेरो स्वरूपलाई एकाग्ररूपले ध्यान गर्दै मलाई पूजा गरोस्।

**इष्टापूर्तेन मामेवं यो यजेत समाहितः।**
**लभते मयि सद्भक्तिं मत्स्मृतिः साधुसेवया॥ ४७॥**

**पदार्थ–**
**यः** = जसले
**समाहितः** = सावधान भएर
**इष्टापूर्तेन** = इष्ट कर्म र पूर्त कर्मद्वारा
**एवं** = बताएअनुसार
**मां** = मलाई
**यजेत** = पूजा गर्दछ (त्यो व्यक्तिले)
**मयि** = ममा
**सद्भक्तिं** = सद्भक्तिलाई
**लभते** = प्राप्त गर्दछ र
**साधुसेवया** = सत्पुरुषको सङ्गतले
**मत्स्मृतिः** = उसलाई मेरो स्वरूपको ज्ञान हुन्छ

**वाक्यार्थ–** जसले यज्ञ आदि इष्ट कर्म र मन्दिरनिर्माण आदि पूर्त कर्मद्वारा एकाग्रचित्तले मलाई पूजा गर्दछ, त्यसले सत्पुरुषको सङ्गतबाट ममा दृढ भक्तिलाई प्राप्त गर्दछ र उसलाई मेरो स्वरूपको ज्ञान हुन्छ।

**टिप्पणी–** इष्ट कर्म र पूर्त कर्मको विषयमा भागवतको ७।१५।४८-४९ मा बताइएको छ।

**प्रायेण भक्तियोगेन सत्सङ्गेन विनोद्धव।**
**नोपायो विद्यते सध्र्यङ् प्रायणं हि सतामहम्॥ ४८॥**

**पदार्थ–**
**उद्धव** = हे उद्धव
**प्रायेण** = प्रायः गरेर
**सत्सङ्गेन** = सत्सङ्गबाट प्राप्त हुने
**भक्तियोगेन विना** = भक्तियोगले रहित भएर
**सध्र्यङ्** = राम्रो
**उपायः** = मलाई प्राप्त गर्ने उपाय
**न विद्यते** = छैन
**हि** = किनभने
**सतां** = सज्जनहरूको
**अहम्** = म
**प्रायणम्** = उत्तम आश्रय हुँ

**वाक्यार्थ–** हे उद्धव ! प्रायः सत्सङ्गबाट प्राप्त हुने भक्तियोगलाई छाडेर मलाई प्राप्त गर्ने अरू सजिलो उपाय केही पनि छैन, किनभने सत्पुरुषको सर्वोत्तम आश्रय म हुँ (त्यसैले सत्सङ्ग मेरो भक्ति प्राप्तिको अन्तरङ्ग साधन हो)।

**अथैतत् परमं गुह्यं शृण्वतो यदुनन्दन।**
**सुगोप्यमपि वक्ष्यामि त्वं मे भृत्यः सुहृत् सखा॥ ४९॥**

**पदार्थ–**
**यदुनन्दन** = हे यदुनन्दन उद्धव
**अथ** = यसैले
**एतत्** = यो
**परमं** = अत्यन्त
**गुह्यं** = गोप्य कुरा
**शृणु** = सुन
**त्वं** = तिमी
**मे** = मेरो
**भृत्यः** = सेवक र
**सुहृत्** = शुद्ध हृदय भएको
**सखा** = साथी पनि हौ
**अतः** = त्यसैले
**सुगोप्यम् अपि** = अत्यन्त रहस्यको कुरा पनि (तिमीलाई)
**वक्ष्यामि** = भन्नेछु

**वाक्यार्थ–** हे यदुनन्दन उद्धव ! अब यो अत्यन्त गोप्य कुरा सुन। किनभने तिमी मेरा सेवक हौ र शुद्ध हृदय भएका साथी पनि हौ। त्यसैले म तिमीलाई अत्यन्त गोप्य र रहस्यमय कुरा बताउनेछु।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां एकादशस्कन्धे एकादशोऽध्यायः॥ ११ ॥**

# अथ द्वादशोऽध्यायः

## सत्सङ्गको महत्त्व र कर्मत्यागको विधि

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**न रोधयति मां योगो न साङ्ख्यं धर्म एव च।**

**न स्वाध्यायस्तपस्त्यागो नेष्टापूर्तं न दक्षिणा॥ १॥**

**व्रतानि यज्ञश्छन्दांसि तीर्थानि नियमा यमाः।**

**यथावरुन्धे सत्सङ्गः सर्वसङ्गापहो हि माम्॥ २॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**सर्वसङ्गापहः** = सम्पूर्ण आसक्तिलाई नाश गरिदिने
**सत्सङ्गः एव** = सत्पुरुषहरूको सङ्गतले नै
**मां** = मलाई
**यथा** = जसरी
**अवरुन्धे** = वशमा पार्न सक्छ ( त्यसरी)
**योगः न** = योगले सक्दैन
**साङ्ख्यं न** = साङ्ख्यले सक्दैन
**धर्मः न** = धर्मले सक्दैन
**स्वाध्यायः न** = वेदपाठले सक्दैन
**तपः** = तपस्याले र
**त्यागः** = त्यागले
**मां** = मलाई
**न रोधयति** = वशमा गर्न सक्दैन
**इष्टापूर्तं** = वैदिक यज्ञ आदि कर्म र लोककल्याणकारी सामाजिक कर्मले
**दक्षिणा** = दानले
**व्रतानि** = एकादशी आदि व्रतले
**यज्ञः** = यज्ञले
**छन्दांसि** = मन्त्रहरूले
**तीर्थानि** = तीर्थले
**नियमाः** = नियमहरूले र
**यमाः च** = यमले पनि (मलाई वशमा पार्न सक्दैनन्)

**वाक्यार्थ–** जसरी सम्पूर्ण आसक्तिलाई नाश गरिदिने सत्सङ्गले मलाई वशमा पार्न सक्छ त्यसरी योग, साङ्ख्य, धर्म, स्वाध्याय, तपस्या, त्याग, वैदिक यज्ञ आदि कर्म र लोककल्याणकारी सामाजिक कर्म, दान, व्रत, यज्ञ, मन्त्रपाठ, तीर्थ, शौच आदि नियम र अहिंसा आदि यमबाट पनि मलाई वशमा पार्न सकिँदैन।

**सत्सङ्गेन हि दैतेया यातुधाना मृगाः खगाः।**

**गन्धर्वाप्सरसो नागाः सिद्धाश्चारणगुह्यकाः॥ ३॥**

**विद्याधरा मनुष्येषु वैश्याः शूद्राः स्त्रियोऽन्त्यजाः।**

**रजस्तमःप्रकृतयस्तस्मिंस्तस्मिन् युगेऽनघ॥ ४॥**

**बहवो मत्पदं प्राप्तास्त्वाष्ट्रकायाधवादयः।**

**वृषपर्वा बलिर्बाणो मयश्चाथ विभीषणः ॥ ५ ॥**

**सुग्रीवो हनुमानृक्षो गजो गृध्रो वणिक्पथः ।**

**व्याधः कुब्जा व्रजे गोप्यो यज्ञपत्न्यस्तथापरे ॥ ६ ॥**

**पदार्थ–**
**अनघ**= हे निष्पाप उद्धव
**हि** = निश्चय नै
**सत्सङ्गेन** = सत्सङ्गद्वारा
**तस्मिन् तस्मिन् युगे** = तत्-तत् युगमा
**रजस्तमःप्रकृतयः** = राजस र तामस स्वभावका
**दैतेयाः** = दैत्यहरू
**यातुधानाः** = राक्षसहरू
**मृगाः** = मृगहरू
**खगाः** = पक्षीहरू
**गन्धर्वाप्सरसः** = गन्धर्व र अप्सराहरू
**नागाः** = नागहरू
**सिद्धाः** = सिद्धहरू
**चारणगुह्यकाः** = चारण र गुह्यकहरू
**विद्याधराः** = विद्याधरहरू र
**मनुष्येषु** = मनुष्यहरूमा
**वैश्याः** = वैश्यहरू
**शूद्राः** = शूद्रहरू
**स्त्रियः** = स्त्रीहरू र
**अन्त्यजाः** = अन्त्यज जातिहरू
**अथ** = त्यसपछि
**त्वाष्ट्रकायाधवादयः** = वृत्रासुर र प्रह्लाद आदि
**वृषपर्वा** = वृषपर्वा
**बलिः** = महाराज बलि
**बाणः** = बाणासुर
**मयः च** = मय
**विभीषणः** = विभीषण
**सुग्रीवः** = सुग्रीव
**हनुमान्** = हनुमान्
**ऋक्षः** = जाम्बवान्
**गजः** = गजेन्द्र
**गृध्रः** = जटायु
**वणिक्पथः** = तुलाधर वैश्य
**व्याधः** = धर्मव्याधा
**कुब्जा** = कुब्जा
**व्रजे** = व्रजमा रहेका
**गोप्यः** = गोपिनीहरू
**यज्ञपत्न्यः** = यज्ञपत्नीहरू
**तथा** = त्यस्तै
**अपरे** = अरू पनि
**बहवः** = धेरै व्यक्तिहरू
**मत्पदं** = मेरो पदमा
**प्राप्ताः** = पुगे

**वाक्यार्थ–** हे उद्धव ! सत्सङ्गकै कारण तत्-तत् युगमा राजस र तामस स्वभाव भएका दैत्यहरू तथा राक्षसहरू र मृगहरू, पक्षीहरू, गन्धर्व तथा अप्सराहरू, नाग, सिद्ध, चारण, गुह्यक, विद्याधर, मनुष्यहरूमा वैश्य, शूद्र, स्त्रीजाति, अन्त्यज जाति, वृत्रासुर, प्रह्लाद, वृषपर्वा, बलि, बाणासुर, मयासुर, विभीषण, सुग्रीव, हनुमान्, जाम्बवान्, गजेन्द्र, जटायु, तुलाधर वैश्य, धर्मव्याधा, कुब्जा, व्रजका गोपिनीहरू, यज्ञपत्नीहरू र यस्तै अरू धेरै व्यक्तिहरू पनि मेरो पदमा पुगे।

**ते नाधीतश्रुतिगणा नोपासितमहत्तमाः ।**

**अव्रतातप्ततपसः सत्सङ्गान्मामुपागताः ॥ ७ ॥**

**पदार्थ–**
**नाधीतश्रुतिगणाः** = वेदको अध्ययन नगरेका
**नोपासितमहत्तमाः** = महापुरुषको सेवा पनि नगरेका
**अव्रतातप्ततपसः** = व्रत र तपस्या पनि नगरेका
**ते** = ती व्यक्तिहरूले
**सत्सङ्गात्** = सत्सङ्गबाट
**मां** = मलाई
**उपागताः** = प्राप्त गरे

**वाक्यार्थ–** वेद पनि नपढेका, महापुरुषको सेवा पनि नगरेका, व्रत, तपस्या आदि पनि नगरेका यिनीहरूले केवल सत्सङ्गको कारणले मलाई प्राप्त गरे।

**केवलेन हि भावेन गोप्यो गावो नगा मृगाः।**
**येऽन्ये मूढधियो नागाः सिद्धा मामीयुरञ्जसा ॥ ८ ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**केवलेन** = केवल
**भावेन** = भक्तिद्वारा
**गोप्यः** = गोपिनीहरू
**गावः** = गाईहरू
**नगाः** = यमलार्जुन आदि वृक्षहरू
**मृगाः** = मृगहरू र
**अन्ये** = अरू
**ये** = जो
**मूढधियः** = मन्दबुद्धि भएका
**नागाः** = कालिय आदि नागहरू थिए, तिनीहरू पनि
**सिद्धाः** = कृतार्थ भए र
**अञ्जसा** = सजिलैसँग
**मां** = मलाई
**ईयुः** = प्राप्त गरे

**वाक्यार्थ–** केवल भक्तिद्वारा गोपिनीहरूले, गाईहरूले, यमलार्जुन आदि वृक्षहरूले, मृगहरूले र अरू मन्दबुद्धि भएका कालिय आदि नागहरूले पनि कृतार्थ भएर सजिलैसँग मलाई प्राप्त गरे।

**विवरण–** यस प्रसङ्गमा सत्सङ्गको महिमा बताइएको छ। सत्सङ्ग भनेको भगवद्भक्त एवं ज्ञानी महापुरुषहरूको निकटमा रही उनीहरूको सेवा गर्नु र उपदेश सुन्नु हो। परमात्मतत्त्व इन्द्रिय मन, आदिको विषय नभएकाले यसलाई अनुभवी गुरुहरूबाट सुनेको र बताएको आधारमा मात्र जान्न सकिन्छ। व्यक्तिले आफ्नै क्षमताले आत्मतत्त्वलाई पत्ता लगाउन सक्दैन किनभने उसका इन्द्रिय आदि सबै ज्ञानका साधन बहिर्मुख छन् अनि आत्मा चाहिँ हृदयभित्र साक्षी रूपले रहेको हुन्छ। यो साक्षीलाई चिनाइदिने काम अनुभवी महापुरुषबाट मात्र हुन सक्दछ, त्यसैले आत्मजिज्ञासु या भक्तका लागि सत्सङ्गको अनिवार्यता छ।

उपनिषद्मा भनिन्छ– **असङ्गो न हि सज्यते** (बृहदारण्यकोपनिषद् ४।२।४) अर्थात् असङ्ग आत्मा कसैको पनि सङ्गमा पर्दैन। यो निःसङ्गताको स्थितिमा पुग्नु नै सबैभन्दा ठुलो पुरुषार्थ हो। यसका लागि सबैथरी सङ्गहरू छोड्नुपर्दछ। किनभने कुनै पनि सङ्ग राम्रो होइन भन्ने शास्त्रीय मान्यता छ। तर यो असङ्ग आत्मस्थितिमा अडिन नसक्ने व्यक्तिहरूले चाहिँ सत्पुरुषहरूको सङ्ग अनिवार्यरूपमा गर्नै पर्दछ भन्ने पनि शास्त्रको आज्ञा छ। सत्सङ्ग सङ्गदोषको औषधि हो, अरू पदार्थको सङ्ग गर्नेबित्तिकै त्यसको वासना मनमा बसिरहन्छ। अनि त्यसले बन्धनमा पारिदिन्छ, तर सत्सङ्गद्वारा त्यो वासना क्षीण हुन्छ अनि स्वयं यसबाट चाहिँ कुनै पनि सांसारिक संस्कार बस्दैन। यी महापुरुषहरूकै छाप मनमा बस्दा त्यसले अहित गर्दैन। किनभने यसले भगवत्स्मरण नै दिलाउँछ। अरु योगसूत्रकारले त वीतराग महापुरुषहरूको चिन्तनले चित्तशुद्धि हुन्छ भन्नुभएको छ– **वीतरागविषयं वा चित्तम्** (योगसूत्र १।३७)। त्यसैले असङ्ग नभई बस्न नसक्ने जिज्ञासुहरूले सत्सङ्ग गर्नै पर्दछ। त्यसैले भनिन्छ– **सङ्गः सर्वात्मना हेयः यदि हातुं न शक्यते, स सद्भिरेव कर्तव्यः सतां सङ्गो हि भेषजम्** अर्थात् सबैथरी सङ्गलाई पूर्णतः छाड्नुपर्दछ। यदि सङ्ग छाड्न नसकेदेखि केवल सत्पुरुषहरूको मात्र सङ्ग गर्नुपर्दछ, किनभने सत्सङ्ग नै सङ्गदोषको औषधि हो।

व्यक्ति जबसम्म आफूलाई शरीर र मनभन्दा भिन्न अकर्ता, अभोक्ता आत्माको रूपमा चिन्न सक्दैन, तबसम्म उसले शरीरमा आत्मबुद्धि गरी यिनको दुःसङ्गत गरिरहेकै हुन्छ। यसको निवारणका लागि सत्सङ्ग अनिवार्य गर्नुपर्दछ, नत्र जीवनभरि केवल दुःसङ्गमात्र हुन जान्छ। भगवत्पाद श्रीशङ्कराचार्य पनि भन्नुहुन्छ– **सत्सङ्गत्वे निःसङ्गत्वम्** अर्थात् सत्सङ्ग गर्नाले निःसङ्ग भइन्छ।

सत्सङ्गका तीन स्वरूप हुन्छन्। सत्सङ्ग भनेर सबैतिर प्रसिद्ध भएको मुख्य अर्थ **सतां सत्पुरुषाणां सङ्गः** अर्थात् भगवद्भक्त ज्ञानी पुरुषहरूको सेवा, उपदेशश्रवण आदि गर्नु हो। यसै गरी **सतः शास्त्रस्य सङ्गः** अर्थात् उपनिषद्, गीता आदि सत्शास्त्रहरूको अध्ययन, चिन्तन पनि सत्सङ्ग हो। अर्को सत्सङ्ग चाहिँ **सतः परमात्मनः सङ्गः** अर्थात् मनद्वारा सत् वस्तु परमात्मतत्त्वको निरन्तर चिन्तन, ध्यान आदि गरिरहनु हो। यी तीनमध्ये सत्सङ्गको अन्तिम फल भनेको निरन्तर आत्मचिन्तन या परमात्मस्मरण नै हो। यसका लागि भगवद्भक्त महापुरुषहरूको सङ्ग नै प्रधान साधन हो। परा भक्तिको सोपानक्रम बताउने क्रममा सबैभन्दा पहिले महत्सेवालाई साधनको रूपमा बताइएको छ। राजा रहूगणलाई आत्मज्ञानको उपदेश गर्ने क्रममा जडभरतले **विना महत्पादरजोऽभिषेकम्** (भागवत ५।१२।१२) अर्थात् यो आत्मतत्त्वलाई महापुरुषहरूको चरणधूलिलाई शिरमा धारण गरेविना पाउन सकिँदैन भनी सत्पुरुषको सेवालाई नै प्रमुख साधन बताउनुभएको छ। महापुरुषहरूको सेवाद्वारा व्यक्ति अभिमानरहित एवं नम्र बन्न सक्दछ। जब कि शास्त्रचिन्तन आदिबाट मात्र व्यक्तिको अभिमान नष्ट हुँदैन। त्यसैले साधनाको तहमा महापुरुषहरूको सेवारूपी सत्सङ्ग नै मुख्य छ, अनि साध्यावस्थामा चाहिँ निरन्तर आत्मस्थितिमा चित्त अडिनु यही नै सत्सङ्ग हो।

यहाँ भगवान्ले आफूलाई योग, साङ्ख्य, त्याग, कर्म आदि कुनै पनि साधनले वशमा पार्न नसक्ने तर सत्सङ्गले वशमा पार्न सक्ने भनी बताउनुभएको छ। महापुरुषहरूले परमात्मालाई आत्मरूपमा नै साक्षात्कार गरेका हुन्छन्। सबैको हृदयमा परमात्मा हुनुहुन्छ, तर महापुरुषहरू त आत्मानुभवद्वारा परमात्माभन्दा अभिन्न भइसकेका हुन्छन्। ती सत्पुरुष सहज रूपमै दयालु पनि हुन्छन्। जसले आफ्नो शरणमा आउने सबैलाई अभयदान दिन्छन्। जब महापुरुषहरू कसैमाथि कृपा गर्छन् तब ती जीवमाथि ईश्वरको कृपा पनि स्वतः नै बर्सिन्छ। शास्त्रहरूमा त ईश्वरभन्दा पनि ईश्वरको चिनारी गराउने गुरुहरूलाई श्रेष्ठ मानिएको छ, त्यसैले भनिन्छ– **शिवे रुष्टे गुरुस्त्राता** अर्थात् भगवान् शिव नै रिसाए भने पनि आफ्ना शिष्यलाई गुरुले जोगाउनुहुन्छ। संसारबन्धनबाट पार हुनका लागि योग, त्याग, तपस्या आदि साधना गर्दा त्यसमा जीवको मात्र प्रयास एकल हुन्थ्यो भने महापुरुषहरूको सेवा गर्दा त परमात्मस्वरूप भइसकेका उनीहरूको कृपारूपी विशेष सम्पत्ति पनि त्यसमा थपिन्छ।

सत्सङ्गबाट सबै कुरा प्राप्त गर्नेहरूमा नारद, प्रह्लाद आदिको नाम उल्लेखनीय छ। दासीपुत्र भई जन्मिएका अनि कुनै पनि साधना गर्न नसक्ने नारद चतुर्मासभर सन्तमहापुरुषहरूको सेवा गरेकाले तिनकै कृपाबाट उनले श्रेष्ठ भगवद्भक्त देवर्षि नारद बन्ने अवसर पाए। महापुरुषहरू यद्यपि सुखदुःख आदि सबै अवस्थामा समदर्शी हुन्छन् अनि कसैले आफ्नो सेवा सम्मान गरोस्

भन्ने पनि चाहँदैनन्। तर कुनै व्यक्ति उनीहरूको शरणमा आउँछ र उसले चुपचाप उनीहरूको सेवा गरिरहन्छ भने त्यस्तो विशिष्ट अधिकारीमाथि उनीहरूले समदर्शितालाई पन्छाई अनन्त कृपा बर्साउँछन्। नारद आफ्नो अनुभव बताउँदै भन्नुहुन्छ— **चक्रुः कृपां यद्यपि तुल्यदर्शनाः शुश्रूषमाणे मुनयोऽल्पभाषिणि** (भागवत १।५।२४) अर्थात् ती महापुरुषहरू सबैलाई समान रूपमा देखिने स्वभावका भएर पनि चुपचाप सेवा गरिरहेको म बालकमाथि उनीहरूले कृपा बर्साए। यिनै नारदको कृपाले कयाधुपुत्र बालक प्रह्लाद गर्भभित्रैदेखि ज्ञानी एवं भगवद्भक्त भएर जन्मिएका थिए। यसरी सत्सङ्कै प्रभावले उच्च स्थितिलाई प्राप्त गर्ने भक्तका उदाहरणहरू धेरै पाइन्छन्।

महापुरुषहरूको सङ्ग भएपछि त्यसले ईश्वरको सङ्गमा अवश्य पुऱ्याउँछ। यहाँ पूर्व-पूर्व जीवनमै महापुरुषहरूको सङ्ग गरिसकेका र अहिले स्वतः ईश्वरको चिन्तनको अवस्थामा पुगेका गोपिनी, गजेन्द्र, सुग्रीव, हनुमान् आदि भक्तको दृष्टान्त दिई यिनीहरूले ईश्वरसङ्गरूपी सत्सङ्ग गर्ने र यसैद्वारा यिनीहरूले ईश्वरलाई प्राप्त गरेको भनिएको छ। अरू केही साधना आदि नगरेकाहरूले केवल सत् परमात्माको भावनाद्वारा नै परमफल पाएका थिए। यसरी भगवत्प्राप्तिमा महापुरुषको सङ्ग अत्यन्त आवश्यक भएको अनि निरन्तर भगवच्चिन्तनरूपी सत्सङ्ग यसको प्रमुख साधन भएको कुरा भगवान्ले उद्धवलाई बताउनुभएको छ।

**यं न योगेन साङ्ख्येन दानव्रततपोऽध्वरैः।**
**व्याख्यास्वाध्यायसंन्यासैः प्राप्नुयाद् यत्नवानपि॥ ९॥**

**पदार्थ—**
**यं** = जुन भगवान्लाई (मलाई)
**योगेन** = योगद्वारा
**साङ्ख्येन** = साङ्ख्यद्वारा
**दानव्रततपोऽध्वरैः** = दान, व्रत, तपस्या र यज्ञद्वारा
**व्याख्यास्वाध्यायसंन्यासैः** = वेदको व्याख्यान, स्वाध्याय र संन्यासद्वारा
**यत्नवान् अपि** = प्रयत्नशील व्यक्तिले पनि
**न प्राप्नुयात्** = प्राप्त गर्न सक्दैन

**वाक्यार्थ—** जुन भगवान्लाई योगद्वारा, साङ्ख्यद्वारा, दान, व्रत, तपस्या र यज्ञद्वारा अनि वेदको व्याख्या, स्वाध्याय र संन्यासद्वारा प्रयत्नशील व्यक्तिले पनि प्राप्त गर्न सक्दैन।

**रामेण सार्धं मथुरां प्रणीते श्वाफल्किना मय्यनुरक्तचित्ताः।**
**विगाढभावेन न मे वियोगतीव्राधयोऽन्यं ददृशुः सुखाय॥ १०॥**

**पदार्थ—**
**श्वाफल्किना** = अक्रूरद्वारा
**रामेण सार्धं** = बलरामजीसहित
**मथुरां** = मथुरामा
**मयि** = म
**प्रणीते** = लगिएपछि
**विगाढभावेन** = गाढ भक्तिले
**अनुरक्तचित्ताः** = आसक्त चित्त भएका र
**मे** = मेरो
**वियोगतीव्राधयः** = वियोगले अत्यन्त दुःखित भएका गोपिनीहरूले
**अन्यं** = (मबाहेक) अरू वस्तुलाई
**सुखाय** = सुखको साधनको रूपमा
**न ददृशुः** = देखेनन्

फेरि स्वप्न अवस्थामा तिनै जाग्रत्का वासनामय पदार्थहरूलाई भोग गर्दछ र फेरि सुषुप्तिमा सबैलाई लीन गर्दछ। त्यस्तो आत्मा सबै अवस्थामा अनुगत भएकाले एक वा अद्वितीय छ।

**एवं विमृश्य गुणतो मनसस्त्र्यवस्था**
**मन्मायया मयि कृता इति निश्चितार्थाः।**
**सञ्छिद्य हार्दमनुमानसदुक्तितीक्ष्ण-**
**ज्ञानासिना भजत माखिलसंशयाधिम्॥ ३३॥**

**पदार्थ–**
**एवं** = यसरी
**विमृश्य** = विचार गरेर
**गुणतः** = गुणद्वारा
**मनसः** = मनको
**त्र्यवस्थाः** = तीन अवस्थाहरू
**मन्मायया** = मेरो मायाद्वारा
**मयि** = मेरो अंश जीवमा
**कृताः इति** = कल्पना गरिएका हुन् भनेर
**निश्चितार्थाः** = निश्चय गरेका
**अनुमानसदुक्तितीक्ष्णज्ञानासिना** = अनुमान एवं सत्पुरुषको उपदेशबाट प्राप्त ज्ञानरूप तीक्ष्ण खड्गले
**अखिलसंशयाधिं** = सम्पूर्ण संशयको आधार अहङ्कारलाई
**सञ्छिद्य** = छेदन गरेर
**हार्दम्** = हृदयमा रहेको
**मा** = मलाई
**भजत** = भजन गर

**वाक्यार्थ–** यसरी विचार गरेर गुणद्वारा मनका यी तीन अवस्था मायाले मेरो अंशरूप जीवमा कल्पना गरिएका हुन् र निश्चित वस्तु चाहिँ आत्मा हो भन्ने बुझी तिमीहरूले अनुमानद्वारा वा सत्पुरुषका उपदेशद्वारा तीक्ष्ण ज्ञानरूप खड्गले सम्पूर्ण संशयको आधार अहङ्कारलाई काटी हृदयमा रहने मेरो भजन गर।

**विवरण–** यहाँ शरीरका अवस्थाहरू परिवर्तित भइरहे तापनि आफूलाई अपरिवर्तनीय साक्षीको रूपमा अनुभव गर्नुपर्दछ भनी भगवान्ले उपदेश गर्नुभएको छ। शरीरका बाल्य, युवा, वृद्ध आदि अनेक अवस्थाहरू छन् अनि दिनदिनै प्राणीहरूका जाग्रत्, स्वप्न र सुषुप्ति गरी तीन अवस्था हुने गर्दछन्। जाग्रत् अवस्थामा बाहिरी संसारको र स्वप्न अवस्थामा भित्री वासनामय संसारको बोध हुन्छ भने सुषुप्ति अवस्थामा कुनै पनि वस्तुको बोध हुँदैन। जाग्रत् कालमा अनुभव गरिने जति पनि पदार्थहरू छन्, ती सबै बाल्य, युवा आदि अवस्थामा पुग्दै क्षण-क्षणमा बदलिइरहने खालका छन्। व्यक्तिले यी बाह्य पदार्थको भोग सम्पूर्ण इन्द्रियहरूद्वारा गरेको हुन्छ। स्वप्न अवस्थामा चाहिँ भोक्ताले त्यही समानका वासनामय भित्री पदार्थहरूलाई भोग गर्दछ। सुषुप्तिमा यी सारा व्यवहारको उपसंहार अर्थात् लय हुन्छ। यसरी तीनै अवस्थाहरूलाई प्रकाशित गर्ने आत्मा एउटै छ। यहाँ के शङ्का हुन्छ भने जाग्रत् अवस्थाको अनुभव गर्ने जीव विश्व हो। स्वप्न अवस्थाको अनुभव गर्ने जीव तैजस हो अनि सुषुप्ति अवस्थाको अनुभव गर्ने जीव चाहिँ प्राज्ञ हो। यी तीन ओटा छुट्टाछुट्टै भएकाले एउटै आत्मामा तीनै अवस्थाको अनुभव कसरी हुन सक्छ ? यसको उत्तरमा भनिन्छ– **स्मृत्यन्वयात्** अर्थात् तीनै अवस्थाको स्मृति एउटै चेतनलाई हुने भएकाले। यदि विश्व, तैजस र प्राज्ञ छुट्टाछुट्टै जीव भएका भए तिनले अनुभव गरेका कुरा एउटै आत्मामा नआउनुपर्ने तर

जुन म सुषुप्तिमा भुसुक्क निदाएको थिएँ, त्यही मैले बिचमा अलि-अलि सपना देखेँ र अहिले जागा भएको छु भन्दछ। यसरी तीनै अवस्थालाई प्रकाशित गर्ने एउटै आत्मा भएको र शरीर अनि संसारको अवस्थामा अनेक परिवर्तन आउँदा पनि यसमा चाहिँ अलिकति पनि परिवर्तन आएको हुँदैन। विषयहरूको भिन्नताको कारणले मनका यी अवस्थाहरूको भेद हुँदा पनि यी तीन ओटै अवस्था आत्मामा मायाद्वारा नै कल्पित भएका हुन्। यी कल्पित अवस्थाहरूमा आत्मालाई फसाई सुखी-दुःखी बनाउने काम अहङ्कारको हो। त्यसलाई यहाँ **अखिलसंशयाधि** भनी खड्गद्वारा त्यसको नाश गर्नुपर्दछ भनिएको छ। **अखिलाः संशयाः आधीयन्ते अस्मिन् इति** भन्ने व्युत्पत्तिद्वारा यो शब्द बन्दछ, यसको तात्पर्य आत्मविषयक सबैथरी संशयहरू मूल अनि तिनीहरू रहने ठाउँ पनि अहङ्कार नै हो भन्ने हुन्छ। अहङ्कारमा आत्मभाव गर्नाले नै प्राणीहरूले आफ्नो वास्तविक आत्मस्वरूपलाई भुलेका छन् र त्यस विषयमा सन्देह गर्दछन्। आफ्नै अस्तित्वको विषयमा सन्देह गर्नुपर्ने त होइन, तर पनि प्राणीहरू यसमा सन्देह गर्दछन्। सबै अवस्थाहरू परिवर्तित या व्यभिचरित भए तापनि अव्यभिचरित रूपले रहिरहने आत्माको यथार्थतालाई जान्नु यही नै ज्ञानरूपी खड्ग हो र यसैद्वारा सन्देहको निवारण हुन सक्छ।

**ईक्षेत विभ्रममिदं मनसो विलासं**
**दृष्टं विनष्टमतिलोलमलातचक्रम्।**
**विज्ञानमेकमुरुधेव विभाति माया**
**स्वप्नस्त्रिधा गुणविसर्गकृतो विकल्पः ॥ ३४ ॥**

**पदार्थ–**
**इदं** = यो जगत्
**मनसः** = मनको
**विलासं** = विलासरूप हो र
**दृष्टं** = दृश्यमान
**विनष्टं** = नश्वर
**अलातचक्रं** = अगुल्टो घुमाउँदा बनेको चक्रजस्तो
**अतिलोलं** = अतिचञ्चल
**विभ्रमं** = भ्रमरूप
**ईक्षेत** = सम्झिओस्
**एकं** = एक
**विज्ञानं** = विज्ञानरूप आत्मा नै
**उरुधा इव** = अनेक जस्तो भएर
**विभाति** = प्रतीत भएको छ
**त्रिधा** = तीन प्रकारका शरीर इन्द्रिय र अन्तःकरण
**गुणविसर्गकृतः** = गुणको परिणामले बनेको
**विकल्पः** = भेद हो र
**स्वप्नः** = स्वप्न जस्तो
**माया** = मायाकल्पित हो

**वाक्यार्थ–** यो जगत् केवल मनको विलास हो। दृश्य, नश्वर र अगुल्टो घुमाउँदा बनेको चक्र जस्तो अतिचञ्चल यो जगत्लाई भ्रमरूप सम्झनुपर्दछ। एक विज्ञानस्वरूप आत्मा नै अनेक जस्तो भएर प्रतीत भएको छ। गुणको परिणामले शरीर, इन्द्रिय र अन्तःकरण आदि भेदरूपले रहेका जो पदार्थहरू छन् ती स्वप्न जस्तै मायाद्वारा कल्पित हुन्।

**दृष्टिं ततः प्रतिनिवर्त्य निवृत्ततृष्ण-**

स्तूष्णीं भवेन्निजसुखानुभवो निरीहः।
सन्दृश्यते क्व च यदीदमवस्तुबुद्ध्या
त्यक्तं भ्रमाय न भवेत् स्मृतिरानिपातात्॥ ३५॥

**पदार्थ–**
**ततः** = ती शरीर आदि दृश्य पदार्थबाट
**दृष्टिं** = दृष्टिलाई
**प्रतिनिवर्त्य** = हटाएर
**निवृत्ततृष्णः** = तृष्णाविहीन भई
**तूष्णीं** = इन्द्रियव्यापारशून्य रही
**निरीहः** = निश्चेष्ट बनी
**निजसुखानुभवः** = आत्माको आनन्दमा निमग्न
**भवेत्** = होस्
**यदि** = यद्यपि
**क्व च** = कहिलेकाहीँ
**इदं** = यो शरीर आदि
**सन्दृश्यते** = प्रतीतिमा आउँछ
**अवस्तुबुद्ध्या** = वास्तविक होइन भनेर
**त्यक्तं** = त्यागिएको हुनाले
**भ्रमाय** = भ्रमका लागि (मोहका लागि)
**न भवेत्** = हुँदैन (तर)
**आनिपातात्** = देह नष्ट नहुन्जेलसम्म शरीरको
**स्मृतिः** = संस्कारमात्रले प्रतीति हुन्छ

**वाक्यार्थ–** दृश्य पदार्थ शरीर आदिबाट दृष्टि फर्काएर तृष्णारहित भई इन्द्रियव्यापारलाई रोकी निश्चेष्ट बनेर आत्मसुखलाई अनुभव गरोस्। यद्यपि व्यवहार अवस्थामा यो शरीर आदिको प्रतीति हुन्छ, तैपनि यो वास्तविक होइन भनेर त्यागिसकेको हुनाले यसमा मोह हुँदैन, देह नष्ट नहुन्जेलसम्म संस्कार मात्रले प्रतीति हुन्छ।

देहं च नश्वरमवस्थितमुत्थितं वा
सिद्धो न पश्यति यतोऽध्यगमत् स्वरूपम्।
दैवादपेतमुत दैववशादुपेतं
वासो यथा परिकृतं मदिरामदान्धः॥ ३६॥

**पदार्थ–**
**सिद्धः** = आत्मनिष्ठ सिद्धले
**यतः** = जुन शरीरबाट
**स्वरूपं** = आफ्नो स्वरूपलाई
**अध्यगमत्** = साक्षात्कार गर्‍यो
**दैवात्** = प्रारब्धवश (यो शरीर)
**उत्थितं** = उठेको होस्
**अवस्थितं वा** = बसेको होस्
**उत** = अथवा
**दैववशात्** = भाग्यवश
**अपेतं** = कहीँ गएको होस्
**उत** = अथवा
**उपेतं** = आएको होस्
**नश्वरं** = नाशवान्
**देहं च** = यो शरीरलाई
**न पश्यति** = देख्दैन
**यथा** = जसरी
**मदिरामदान्धः** = मदिराले उन्मत्त भएको मनुष्यले
**परिकृतं** = लगाएको
**वासः** = कपडालाई (देख्दैन)

**वाक्यार्थ–** आत्मनिष्ठ सिद्धले जुन शरीरको माध्मबाट आफ्नो स्वरूपको साक्षात्कार गर्‍यो, चाहे त्यो शरीर प्रारब्धवश उठेको होस् या बसेको होस्, कहीँ गएको होस् वा आएको होस्, त्यो नश्वर

शरीरलाई उसले देख्दैन। जसरी मदिराले मत्त भएको व्यक्तिले आफूले लगाएको कपडालाई देख्दैन (फुस्कियो वा लगाइएकै छ उसलाई थाहा हुँदैन)।

**विवरण–** यस प्रसङ्गमा आत्मज्ञ व्यक्तिलाई सारा संसार र शरीर पनि केवल सपनासमान हुन्छ भनिएको छ। यो सम्पूर्ण द्वैतप्रपञ्च मनको भ्रम हो। जसरी अगुल्टो घुमाउँदा चक्र झैँ बनेको अनि अनेक रङ्ग–बिरङ्ग भएको पनि देखिन्छ, त्यसै गरी यो संसार देखिएको हो। संसारमा एउटै मात्र ज्ञानतत्त्व यथार्थ हो, तर मायाको कारणले मनले यो विज्ञानतत्त्व पनि घुमे झैँ भएको छ र अलातचक्रमा झैँ यसमा पनि अनेक भेदको प्रतीति भएको छ। आत्मजिज्ञासु साधकले पनि यो संसारलाई भ्रममय अनि केवल मनको सञ्चलनद्वारा देखिएको भन्ने ठान्नुपर्दछ र यसबाट आफ्नो मनलाई हटाउनुपर्दछ। जब उसले यहाँबाट आफ्नो ध्यान हटाई आत्मातिरै अभिमुख बन्दछ तब ऊ त्यही आत्मसुखको अनुभव गर्दै रमाइरहन्छ। आत्मज्ञानीको यो आत्मानुभवमा सारा संसार विलाएको हुन्छ, उसले यहाँ रहँदारहँदै पनि यसको अनुभूति गर्दैन, आफ्नो स्वरूपकै अनुभूति गरिरहन्छ।

यहाँ के शङ्का हुन्छ भने शरीर रहुन्जेल प्रारब्धकर्मवश भोजन, शयन आदि अनेक व्यवहारहरू त भइ नै हाल्दछन्। त्यसका लागि भोग्य–भोक्ता आदि द्वैतदृष्टि चाहिएला। त्यसैले शरीर रहुञ्जेल द्वैतप्रपञ्चको अस्तित्व रहिरहनुपर्ने ? यसको उत्तर के हो भने यो संसार पूर्णतः अवास्तविक हो भन्ने जानेर यसमा अहंता अनि ममताको पनि त्याग गरिएकाले यसपछि पुनः यसमा भ्रम हुन सक्दैन। कुनै पनि असत्य वस्तु केवल देखिनु र त्यो सत्य हो भनी भ्रम हुनुमा धेरै अन्तर छ। सत्य हो भन्ने भ्रममा भएको पदार्थमा व्यक्ति व्यवहार गर्न प्रवृत्त हुन्छ अनि यो केवल देखिएको मात्र हो वास्तविक होइन भनी जानिएको पदार्थमा चाहिँ व्यक्ति प्रवृत्त हुँदैन। मरुभूमिमा टल्केको पानीलाई साँचो ठानी तिर्खाएको मृग त्यतातिर दौडँदा जति दौडे पनि त्यसलाई प्राप्त गर्न नसकी त्यो मृग मुटु फुटेर मर्दछ तर त्यहीँ रहेको एउटा विवेकी मान्छेले चाहिँ यो मरुभूमिको चमक मात्र हो भनी जानेकाले ऊ त्यसमा प्रवृत्त पनि हुँदैन र दुःख पनि पाउँदैन। त्यसैले ज्ञानीले पनि संसारलाई देख्दछ, तर त्यसले उसलाई भ्रममा पार्दैन। **आनिपातात् स्मृतिः** अर्थात् ज्ञानीलाई शरीरपात नहुन्जेलसम्म पुराना भ्रमव्यवहारले स्मृति पनि हुन सक्छ, तर त्यसले उसलाई भ्रममा भने पार्दैन। यस विषयमा स्वप्नको दृष्टान्त दिँदै भनिएको छ– **स्वाप्नं पुनर्न भजते प्रतिबुद्धवस्तुः** अर्थात् जसले पारमार्थिक वस्तु आत्मालाई बुझिसकेको छ, त्यो व्यक्तिलाई संसार स्वप्नसमान हुन्छ र उसले शरीरसँग सम्बन्धित आहार, विहार, शयन आदि व्यवहारलाई केवल स्वप्न भन्ने ठान्दछ। जसरी सपनामा डरलाग्दो बाघलाई देखी ब्युँझिएको व्यक्ति त्यो बाघलाई सम्झिए तापनि विपनामा त्यो सपनाको बाघबाट डराउँदैन, त्यसै गरी संसाररूपी सपनाबाट जागिसकेको व्यक्ति पनि यसका व्यवहार र शरीर आदिको हलचलबाट प्रभावित बन्दैन।

ज्ञान नहुन्जेलसम्म साधकले शरीरलाई नै आत्मा ठानेको थियो, तर जब उसले आफ्नो वास्तविक स्वरूपलाई फेला पार्छ तब ऊ त्यो अयथार्थ शरीरलाई फेरि हेर्दैन। जसरी बेसरी नशा लागेको व्यक्तिले कपडा लगाए–नलगाएको याद गर्दैन, त्यसै गरी यो आत्मानन्दको माधुरीलाई पिइरहेको व्यक्तिले पनि शरीरको अवस्थालाई याद गर्दैन। छान्दोग्योपनिषद् (८।१२।३)मा पनि

ब्रह्मज्ञानीलाई संसारचक्रमा पार्ने यो दुःखदायी शरीरको बोध नै हुँदैन र ऊ आत्ममस्तीमा घुम्छ भनी बताइएको छ– **नोपजनं स्मरन्निदं शरीरम्**। यसप्रकार ब्रह्मज्ञानीले प्रारब्धकर्मका कारण शरीरले युक्त भई संसारमा रहे तापनि उसलाई यसको याद हुँदैन र अयथार्थ रूपमा प्रतीत भइरहेको यो मिथ्या जगत्ले उसलाई बन्धन या भ्रममा पार्न सक्दैन।

**देहोऽपि दैववशगः खलु कर्म यावत्**
**स्वारम्भकं प्रतिसमीक्षत एव सासुः।**
**तं सप्रपञ्चमधिरूढसमाधियोगः**
**स्वाप्नं पुनर्न भजते प्रतिबुद्धवस्तुः॥ ३७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यावत्** = जबसम्म | **देहः अपि** = शरीर पनि | **सप्रपञ्चम्** = प्रपञ्चले सहित भएको |
| **स्वारम्भकं** = आफ्नो शरीरलाई उत्पन्न गराउने | **सासुः एव** = जीवित भएर नै | **स्वाप्नं** = स्वप्न जस्तै अयथार्थ |
| **कर्म** = प्रारब्ध कर्म (रहन्छ) | **प्रतिसमीक्षते** = रहिरहन्छ | **तं** = त्यस शरीरलाई |
| **खलु** = तबसम्म नै | **अधिरूढसमाधियोगः** = योगद्वारा समाधिमा स्थित भएको | **पुनः** = फेरि |
| **दैववशगः** = प्रारब्ध संस्कारको वशमा परेको | **प्रतिबुद्धवस्तुः** = आत्मतत्त्वको साक्षात्कार गरेको योगीले | **न भजते** = स्वीकार गर्दैन |

**वाक्यार्थ–** जबसम्म शरीरलाई उत्पन्न गराउने प्रारब्ध कर्म रहन्छ तबसम्म प्रारब्ध संस्कारको वशमा परेको शरीर चाहिँ जीवित भएर नै रहिरहन्छ। योगद्वारा समाधिमा स्थित भएको हुनाले आत्मतत्त्वको साक्षात्कार गरेको योगीले प्रपञ्चले सहित भएको स्वप्न जस्तै अयथार्थ त्यस शरीरलाई फेरि स्वीकार गर्दैन।

**मयैतदुक्तं वो विप्रा गुह्यं यत् साङ्ख्ययोगयोः।**
**जानीत मागतं यज्ञं युष्मद्धर्मविवक्षया॥ ३८॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **विप्राः** = हे ऋषिहरू | **एतत्** = यो सबै | **आगतं** = आएको |
| **साङ्ख्ययोगयोः** = साङ्ख्य र योग दर्शनमा | **मया** = मद्वारा | **मा** = मलाई |
| **यत्** = जो | **वः** = तिमीहरूलाई | **यज्ञं** = यज्ञरूप विष्णु भनेर |
| **गुह्यं** = रहस्यको कुरा छ | **उक्तं** = भनियो | **जानीत** = जान |
| | **युष्मद्धर्मविवक्षया** = तिमीहरूलाई मोक्ष धर्म बताउने इच्छाले | |

**वाक्यार्थ–** हे ऋषिहरू! साङ्ख्य र योगदर्शनमा भएको रहस्य मैले तिमीहरूलाई बताएँ।

तिमीहरूलाई मोक्षधर्म बताउने इच्छाले आएको मलाई यज्ञरूप विष्णु भनेर जान।

**अहं योगस्य साङ्ख्यस्य सत्यस्यर्तस्य तेजसः।**

**परायणं द्विजश्रेष्ठाः श्रियः कीर्तेर्दमस्य च॥ ३९॥**

**पदार्थ—**
**द्विजश्रेष्ठाः** = हे श्रेष्ठ ब्राह्मणहरू
**अहं** = म
**योगस्य** = योगको
**साङ्ख्यस्य** = साङ्ख्यको
**सत्यस्य** = सत्य धर्मको
**ऋतस्य** = वाणीगत सत्यको
**तेजसः** = तेजको
**श्रियः** = लक्ष्मीको र
**कीर्तेः च** = कीर्तिको पनि अनि
**दमस्य** = बाह्य इन्द्रिय निग्रहको पनि
**परायणम्** = परम आश्रय हुँ

**वाक्यार्थ—** हे श्रेष्ठ ब्राह्मणहरू ! म योगको, साङ्ख्यको, साँचो धर्मको, साँचो बोलीको, तेजको, ऐश्वर्यको, कीर्तिको र बाह्य इन्द्रिय निग्रहको पनि परम आश्रय हुँ।

**मां भजन्ति गुणाः सर्वे निर्गुणं निरपेक्षकम्।**

**सुहृदं प्रियमात्मानं साम्यासङ्गादयोऽगुणाः॥ ४०॥**

**पदार्थ—**
**अगुणाः** = गुणका अपरिणामरूप
**साम्यासङ्गादयः** = समता, असङ्ग आदि
**सर्वे** = सबै
**गुणाः** = गुणहरूले
**निर्गुणं** = गुणरहित
**निरपेक्षकं** = निरपेक्ष
**सुहृदं** = सबैका हितैषी
**प्रियं** = सबैका प्रिय
**आत्मानं** = आत्मस्वरूप
**मां** = मलाई
**भजन्ति** = सेवा गर्दछन्

**वाक्यार्थ—** गुणको परिणाम भन्न नमिल्ने समता, असङ्ग आदि सबै गुणहरूले, गुणरहित, निरपेक्ष, सबैका हितैषी, प्यारो, आत्मरूप मलाई सेवा गर्दछन्।

**इति मे छिन्नसन्देहा मुनयः सनकादयः।**

**सभाजयित्वा परया भक्त्यागृणत संस्तवैः॥ ४१॥**

**पदार्थ—**
**इति** = यसरी
**मे** = हंसरूपी मबाट
**छिन्नसन्देहाः** = सन्देह निवृत्त भएका
**सनकादयः** = सनक आदि
**मुनयः** = मुनिहरूले
**परया** = परम
**भक्त्या** = भक्तिले
**सभाजयित्वा** = पूजा गरेर
**संस्तवैः** = राम्रो स्तुतिद्वारा
**अगृणत** = महिमा वर्णन गरे

**वाक्यार्थ—** यसरी हंसरूपी मबाट सन्देह हटेका मुनिहरूले परम भक्तिभावले मेरो पूजा गरी मेरो महिमाको वर्णन गर्दै स्तुति गरे।

**तैरहं पूजितः सम्यक् संस्तुतः परमर्षिभिः।**

**प्रत्येयाय स्वकं धाम पश्यतः परमेष्ठिनः ॥ ४२ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तैः** = ती | **पूजितः** = पूजित भएको र | **पश्यतः** = हेर्दाहेर्दै |
| **परमर्षिभिः** = महर्षिहरूद्वारा | **संस्तुतः** = स्तुति गरिएको | **स्वकं** = आफ्नो |
| **सम्यक्** = राम्रोसँग | **अहं** = म | **धाम** = धाममा |
| | **परमेष्ठिनः** = ब्रह्माजीले | **प्रत्येयाय** = फर्किएँ |

**वाक्यार्थ–** ती महर्षिहरूले मेरो पूजा र स्तुति गरिसकेपछि ब्रह्माजीले हेर्दाहेर्दै म आफ्नो धाममा फर्किएँ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायामेकादशस्कन्धे त्रयोदशोऽध्यायः ॥ १३ ॥**